## डा. द्रोणकुमार उपाध्यायको पाँच पुस्ता



डा. द्रोणकुमार उपाध्यायका हजुरबुवा गंगाधर पौडेल



डा. द्रोणकुमार उपाध्यायका आमा बुवा भेजमाया तथा टीकाराम शास्त्री



डा. द्रोणकुमार उपाध्याय श्रीमती मीरादेवी पौडेलका साथ



डा. द्रोणकुमार उपाध्यायका सुपुत्र यशवन्त तथा पुत्रवधु परिना



डा. द्रोणकुमार उपाध्यायको
नाति प्रियांशु

# डा. द्रोणकुमार उपाध्याय पौडेल
## [स्मृतिग्रन्थ]

संरक्षक
**मीरादेवी पौडेल**

सल्लाहकार
**चूडामणि रेग्मी**
**होम सुवेदी**
**प्रा.डा.कपिल लामिछाने**
**डा.इन्दु प्रभादेवी**
**डा.रत्नमणि नेपाल**
**तारापति उपाध्याय**
**पुण्यप्रसाद खरेल**
**प्रेमप्रकाश फलाहारी**
**नवराज घिमिरे**
**राजेन्द्र चापागाईं**
**सन्तोष पोखरेल**
**डिल्लीराम खतिवडा**
**नवकुमारी खनाल**

सम्पादक समिति
प्रधान सम्पादक
**खगिन्द्रा खुसी**

सम्पादक
**तारा विविध**
**चूडामणि वशिष्ठ**
**कृष्ण सुवेदी 'निराकार'**
**देवीचरण भण्डारी**
**मुक्तिप्रसाद उपाध्याय बराल (सिलगढी प्रतिनिधि)**
**पुष्पधर शर्मा (असम प्रतिनिधि)**

विशेष भूमिका :
**पंकज भूर्तेल, थानेश्वर खनाल 'राजा', हिमसागर उपाध्याय**
**किशोर पौडेल, यशवन्त पौडेल, योगिता भूर्तेल, यवनिका पाण्डे**

प्रकाशक
डा. द्रोणकुमार उपाध्याय पौडेल स्मृतिग्रन्थ प्रकाशन समिति
भद्रपुर–१०, झापा



# डा.द्रोणकुमार उपाध्याय पौडेल
## (स्मृतिग्रन्थ)


| | |
|---|---|
| प्रकाशक | : डा.द्रोणकुमार उपाध्याय पौडेल स्मृतिग्रन्थ प्रकाशन समिति भद्रपुर–१०, झापा |
| प्रकाशन मिति | : २०७७ फाल्गुण – ५ गते |
| सर्वाधिकार | : प्रकाशकमा |
| कम्प्युटर टाइप | : खेमराज दाहाल (द सफ्ट कम्प्युटर, चन्द्रगढी) |
| ले–आउट | : सन्तोष शर्मा (सुसन मिडिया प्रा.लि.) |
| मुद्रण | : बुद्ध अफसेट प्रेस, बिर्तामोड, झापा |
| प्रकाशन संख्या | : १००० प्रति |
| मूल्य | : व्यक्तिगत रु.५००।– |
| संस्थागत | : १०००।– |

ISBN No. :

# समर्पण



हाम्रा प्रातः स्मरणीय पति/पिता

डा.द्रोणकुमार उपाध्याय पौडेल २०७६ माघ १५ गतेका दिन ७१ वर्षको उमेरमा दिवंगत हुनुभएकोले उहाँको आत्माप्रति चिर शान्तिको कामना

*एवम्*

हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दै
यो स्मृतिग्रन्थ समर्पण गर्दछौं ।

श्रीमती/छोरा-बुहारी/छोरीहरु

*तथा*

**सम्पूर्ण पौडेल परिवार !**

# सम्पादन मण्डलको संक्षिप्त परिचय



प्रधान सम्पादक
**खगिन्द्रा खुसी**
भद्रपुर–७ (९८४२६३७९४९)



सम्पादक
**तारा विविध**
भद्रपुर–१० (९८४२७३१६००)



सम्पादक
**चूडामणि वशिष्ठ**
भद्रपुर–८ (९८४२६५६०६०)



सम्पादक
**कृष्ण सुवेदी 'निराकार'**
भद्रपुर–७ (९८५२६५६०२२)



सम्पादक
**देवीचरण भण्डारी**
भद्रपुर–१० (९८५२७८७२४)



सम्पादक
**मुक्तिप्रसाद उपाध्याय बराल**
सिलगढी (९१–९४३४१२१३२४)



सम्पादक
**पुष्पधर शर्मा**
असम (९१–९४३५५१७१३५)

# डा.द्रोणकुमार उपाध्यायको सुकीर्ति

मृत्यु शाश्वत सत्य छ। ढिलो-चाँडो समयको खेल हो भन्ने सिद्धान्त मान्नु हामी सबैको बाध्यता हो। यस्तै बाध्यता स्वीकार्न लगायो विधिको विधानले हामी सबैका श्रद्धेय व्यक्तित्व डा.द्रोणकुमार उपाध्याय पौडेललाई पनि।

डा.द्रोणकुमार उपाध्याय हामीबीच भौतिक रूपमा नरहनु भए पनि उहाँले शिक्षा, भाषा-साहित्य, संस्कृति लगायत समाजका विभिन्न क्षेत्रमा पुऱ्याउनु भएका योगदान हामीबीच सदा अटल र अमर रहनेछन्। आज उहाँकै सुकीर्तिका माध्यमबाट उहाँलाई सदैव जीवित राख्न यो पहिलो कार्य शुभारम्भ गरेका छौं- 'डा.द्रोणकुमार उपाध्याय पौडेल' नामक स्मृति ग्रन्थ प्रकाशन गरेर।

यो स्मृति ग्रन्थ प्रकाशनको मूल ध्येय- डा.द्रोणकुमार उपाध्यायका बारेमा विचार-संस्मरण लेखेर उहाँका परिवारजनलाई सान्त्वना दिनुमात्र नभएर उहाँले समाज र यस राष्ट्रमा पुऱ्याउनु भएका योगदानलाई देश-विदेशका कुना-काप्चासम्म उजागर गर्दै भावी पिंढीलाई मार्गनिर्देश पनि हुनेछ भन्ने अपेक्षा गरेका छौं। यस स्मृति ग्रन्थ प्रकाशन समितिको मूल उद्देश्य पनि यही हो। हामीले जाने-बुझ्नेसम्म डा. द्रोणकुमार उपाध्यायले 'कर्म गर, फलको आश नगर !' भन्ने गीताको श्लोकलाई आत्मसात गर्दै जीवन जिउने क्रममा कैयौं उतार-चढाव र साँघुरा-अप्ठेराहरूमा कहिल्यै फलको आश गर्नु भएन, परिणामतः उहाँका शिष्यदेखि आफन्तजन, इष्टमित्र, साथीसंगी सबैले भावविह्वल हुँदै संस्मरणात्मक लेख-रचना मार्फत तथा भेटघाटका क्रममा पोख्नुभएका विचारहरू नै डा.द्रोणकुमार उपाध्यायप्रति सच्चा श्रद्धाञ्जलि बन्न पुगेको हामीलाई अनुभूत भएको छ।

असमको शोणितपुर जिल्ला बटियामारी जन्मनुभएका डा.उपाध्यायले वि.सं.२०३७-३८ देखि झापा (नेपाल)लाई कर्मथलो बनाउँदै भारतको असम र नेपालको शिक्षा एवम् साहित्य क्षेत्रमा विशेषतः सेतुको भूमिका निर्वाह गर्नुभएको कुरा उहाँको जन्मभूमि, बाल्यकालको प्रारम्भिक शिक्षा आर्जन क्षेत्र र बाललीला गर्नुभएको कर्मभूमि- असमको बटियामारी, ओदालगुडी, तेजपुर, ढेकियाजुली, सोलङ लगायतका स्थानहरूमा सम्पादकमण्डलका सदस्यहरूले गरेका 'स्थलगत अध्ययन र अनुसन्धान' भ्रमणबाट प्राप्त स्रोतहरूबाट पर्याप्त पुष्टि हुन पुगेका

छन् । अर्थात् डा.द्रोणकुमार उपाध्यायले नेपाली भाषा, साहित्य र भारतेली नेपाली भाषा-साहित्य लगायत असमेली साहित्य जगतमा समेत योगदान पुऱ्याउनु भएका प्रमाणहरू भारतका विभिन्न साहित्यकारहरूका उद्गारहरूमा फेला परेका छन् ।

'कीर्तियस्य स जीवति' भने झैं डा.द्रोणकुमार उपाध्याय पौडेलका कृतिहरू जीवित त छँदैछन्, तथापि थप जीवन्तता दिन परिवार स्रोतको भूमिका अझ स्तुत्य छ । आफ्ना अमूल्य विचार र सम्झना सहितका लेख-रचनाहरू उपलब्ध गराएर, विभिन्न भाषामा रहेका रचनाहरुलाई अनुवादका साथै यस ग्रन्थको बौद्धिक गहनता, आयतन र उचाई थप्न सहयोग पुऱ्याउनु हुने महानुभावहरू समेतमा हामी आभार प्रकट गर्दछौं । यसरी नै डा.द्रोणकुमार उपाध्यायलाई जीवन्त राख्न असमका विभिन्न प्रान्तमा रहेर सेवा गर्दै आउनुभएका साहित्यकार तथा उहाँका निकटतम परिवारका सदस्यहरूले पुऱ्याउनुभएको योगदान पनि अविस्मरणीय रहेको छ, उहाँहरू सबैप्रति पनि हार्दिक कृतज्ञता व्यक्त गर्दछौं ।

भन्नै पर्ने अर्को कुरा- यो स्मृति ग्रन्थ प्रकाशन गर्ने निर्णय पश्चात् समयावधिको पूर्वार्द्धमा केही कम रचनाहरू प्राप्त भए पनि उत्तरार्द्धमा भने थुप्रै लेख-रचनाहरू प्राप्त हुन आए । यहाँ समाविष्ट रचनाहरु वर्णानुक्रमका आधारमा राखेका छौं । सम्पादनको क्रममा हामीकहाँ प्राप्त हुनआएका प्रायः सबै लेख-रचनाहरू समावेश गर्ने प्रयास गर्दागर्दै पनि ढिलोगरी प्राप्त रचनाहरू विभिन्न प्राविधिक कारणले सम्पादन, प्रकाशन गर्न असमर्थ रह्यौं, यसप्रति क्षमायाचना गर्दै यहाँहरू सबैको यस्तो सदाशयताप्रति हार्दिक आभार व्यक्त गर्दछौं ।

अन्तमा, डा.द्रोणकुमार उपाध्यायको योगदानलाई जीवन्त राख्न भावी दिनहरूमा थप योजना बनाउनुपर्ने खाँचो महसूस गर्दै उनै वरेण्य साधक डा.द्रोणकुमार उपाध्यायप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछौं ।

***- सम्पादक मण्डल***
***स्मृति ग्रन्थ प्रकाशन समिति***
***भद्रपुर- १०, झापा (नेपाल)***

# प्रकाशकीय

डा.द्रोणकुमार उपाध्याय पौडेलको देहावसानपछि कसैगरी उहाँका सम्बन्धमा स्मृति ग्रन्थ निकाल्नु पर्छ भन्ने धेरैतिरबाट कुराहरू आउन थाले । हामी परिवारजन तत्कालीन अवस्थामा करीब-करीब विचलित हालतमा थियौं । हामीप्रति शुभेच्छाको भाव राख्ने जो कोही पनि स्व.द्रोणकुमार उपाध्याय पौडेलको स्मृतिमा केही न केही त गर्नु नै पर्छ भनेर हामीलाई उत्प्रेरित गर्न लागिरहनु भएको अनुभव हुन्थ्यो । घरभरि उहाँका कतिपय लेख्य सामग्रीहरू अलपत्र असरल्ल परिरहेका थिए । उहाँका बहुमूल्य चिठ्ठीहरू, विभिन्न विश्वविद्यालयका गोष्ठीहरूमा प्रस्तुत गरिएका कार्यपत्रहरू अब छपाउन भनी ठिक्क पारिराखेका पाण्डुलिपिहरू लगायतका कुराहरूलाई एकत्रित अवस्थामा व्यवस्थापन गर्नु पर्ने आवश्यकता खट्किरहेको थियो । यसै घडीमा आएको स्मृति ग्रन्थ प्रकाशन गर्ने प्रसंग परिवारजनलाई साह्रै उपयुक्त रहेको अनुभव हुन गयो र त्यसतर्फ अघि बढ्ने काम पनि भयो ।

स्मृति ग्रन्थ प्रकाशनका लागि हाम्रै भद्रपुर नगर क्षेत्रका जागरुक व्यक्तिहरू भनौं अथवा स्व.द्रोणका ज्यादै निकटका छात्र श्री देवीचरण भण्डारी, श्री कृष्ण सुवेदी 'निराकार' तथा अहिलेका सन्दर्भमा भाषा, साहित्य, कला इत्यादिका क्षेत्रमा ज्यादै सक्रिय एवम् नवोदित नारी प्रतिभा खगेन्द्रा खुशीको तत्परतामा सम्पादकमण्डलको निर्माण हुन पुग्यो । त्यस सम्पादकमण्डलमा श्री तारा विविध, श्री चूडामणि वशिष्ठको पनि सहभागिता रह्यो एकातिर भने अर्कोतिर भाषा सम्पादनका लागि श्री गंगाराम ढुंगेल रहनुहुने भयो । यस्तो टिम निर्माण भई स्मृति ग्रन्थ निर्माण हुन लागेपछि प्रकाशन समिति शुरुदेखि नै खुशी रह्यो । नभन्दै वार्षिकीको पुण्य तिथिमा स्मृति ग्रन्थ निस्कन पनि सफल रह्यो ।

स्मृति ग्रन्थ तयार गर्ने सन्दर्भमा सम्पादकमण्डलले निक्कै मेहनत गऱ्यो । स्मृति ग्रन्थका लागि सामग्री संकलन गर्न कहिले स्थानीय क्षेत्रका विभिन्न टोल

र बस्तीहरू चाहार्ने, कहिले भारतको सिलिगुडीदेखि उता असमसम्म पुग्नेसम्मका कामहरू भए । सबै काम यथासमयमा पूरा गर्दै सम्पादकमण्डलले कहिल्यै झिँजो र असजिलो मानेको पाइएन, जसका लागि यो स्मृति प्रकाशन समिति आभार प्रकट गर्दछ ।

स्मृति ग्रन्थका लागि स्वदेश तथा विदेशबाट लेख्य सामग्रीहरू उपलब्ध गराइदिनु हुने लेखक महोदयहरूप्रति यो प्रकाशन समिति हार्दिक कृतज्ञता अर्पण गर्दछ । साथै, स्मृति ग्रन्थको आवरण चित्र निर्माण गर्न युवराज रिजालज्यूले जुन अथक मेहनत र परिश्रम गर्नुभयो; त्यस कार्यको जति नै प्रशंसा गरे पनि थोरै हुन जान्छ । अन्त्यमा, जे जस्तो रूपाकृतिमा यो स्मृति ग्रन्थ आयो; कृपया स्वीकार गरिदिनु होला ।

*स्मृतिग्रन्थ प्रकाशन परिवारको तर्फबाट*

**मीरादेवी पौडेल**

# विषय सूची

**समीक्षा/समालोचना खण्ड**

## परिवार खण्ड

**कविता खण्ड**



**अन्तर्वार्ता खण्ड**



**स्थलगत अध्ययन खण्ड**



**डा.द्रोणकुमार उपाध्यायका प्रतिनिधि फुटकर रचनाहरू**



**तस्वीर खण्ड**

# प्रज्ञाका साधक डा. द्रोणकुमार उपाध्याय पौडेल




**कमलचन्द्र उपाध्याय**
तेजपुर, असम

**होम सुवेदी**
भद्रपुर, झापा

**१. असमदेखि नेपालसम्म :**

**क) जन्म, बाल्यकाल तथा पठनपाठन**

देशभित्रमा गरिष्ठ संख्यक नेपालीहरूको बसोबासो भएकोले गर्दा, भारतको उत्तरपूर्वी क्षेत्र अन्तर्गत असम प्रान्तको नाम नसुन्ने नेपाली विरलै होलान् । यसै प्रदेशको शोणितपुर जिल्लाको बटियामारी गाउँको पं. गङ्गाधर पौडेलको परिवारमा जन्मने डा. द्रोणकुमार पौडेल पछि गएर नेपाल राष्ट्रको त्रिभुवन विश्वविद्यालय अन्तर्गत भद्रपुरको मेची बहुमुखी क्याम्पसबाट नेपाली शिक्षण विभागको अध्यक्ष र अनुसन्धान प्रमुखको पदबाट सेवानिवृत्त हुनुभयो । आफ्नो एकहत्तर वर्षे जीवनकालमा असमको बटियामारीदेखि नेपालको भद्रपुरसम्मको बसोबासो गर्ने क्रममा डा. उपाध्यायले जीवनका अनेकौं घटना परिघटनाहरूको साक्षी बन्नु परेको थियो । डा. उपाध्यायका हजुरबुवा पं. गङ्गाधर पौडेलले दुर्गम बटियामारी जस्तो अशिक्षा र आर्थिक रूपले एकदमै पछौटे गाउँमा रहेर पनि त्यहाँ 'साङ्गवेद विद्यालय' जस्तो संस्कृत शिक्षाको केन्द्र प्रतिष्ठापन गरेर टाढा-टाढाबाट आउने सैकडौं विद्यार्थीलाई संस्कृत शिक्षालाभको व्यवस्था गरिदिनु भएको थियो । त्यतिमात्र होइन, पं. गङ्गाधरले त्यस अञ्चलको पहिलो प्राथमिक विद्यालय (पछि माध्यमिक) र पहिलो मन्दिर 'सर्वेश्वर देवालय'को पनि स्थापना गर्नुभएको हो । उहाँले प्रतिष्ठापन गरेको मन्दिर अहिले एक सय अठार वर्षे उमेरको भएछ । १९०३ सन्मै स्थापना भएको साङ्गवेद संस्कृत विद्यालयको गत

१४, १५ र १६ जुन २०२० मा प्लेटिनम जयन्ती पनि धुमधामसित मनाइएको थियो। यस अवसरमा हजारौं कृतज्ञ जनताले विद्यालयका संस्थापक पण्डित गङ्गाधरको आवक्ष प्रतिमा विद्यालय प्राङ्गणमा अनावरण भएको भव्य अनुष्ठान गद्‌गद् भएर प्रत्यक्ष गरेका थिए। यस कार्यक्रमको सफलतामा डा. द्रोणकुमार पौडेलको ठूलो भूमिका थियो।

द्रोणकुमार पौडेलका पिता स्वर्गीय पं. टीकाराम शास्त्री संस्कृत भाषा-साहित्यका प्रगाढ विद्वान् व्यक्ति हुनुहुन्थ्यो। 'त्यसै बसे लेउ लाग्छ, हिंडे छेउ लाग्छ' भनेरै होला, विद्वान् पण्डित स्व. टीकाराम शास्त्री पनि आफ्नो मनले रुचाउने इलम खोज्दै काखमा शिशु द्रोणलाई लिएर बटियामारीबाट गोरुडुबा र त्यसपछि सिङ्गी बसाइँ सर्नुभयो। केही वर्ष सिङ्गीमा बसे पश्चात् फेरि फर्किएर बटियामारी नै सर्नुभयो। अन्तिममा उहाँले त्यतिखेरको दरङ जिल्लाको उदालगुडीमा स्थायी रूपले बसोबासो गर्न थाल्नुभयो। त्यहाँ शास्त्रीज्यूले उदालगुडी हाइस्कूलमा (हाल हायर सेकण्डरी) शिक्षण गर्न थाल्नुभयो। स्व. शास्त्रीज्यू उदालगुडी भेगका एक जना वरिष्ठ समाजसेवक हुनुहुन्थ्यो। यहाँका विभिन्न सामाजिक अनुष्ठानहरूमा उहाँको भूमिका अग्रणी थियो। उदालगुडीमा विश्वशान्ति विद्यामन्दिर नाउले संस्कृत विद्यालय र मन्दिरको स्थापनामा स्व. शास्त्रीज्यूको प्रमुख भूमिका थियो। अखिल भारतीय नेपाली भाषा समितिको पनि उहाँ सक्रिय कर्मी हुनुहुन्थ्यो। सन् १९७४ मा उदालगुडीमा भएको यसको पहिलो अधिवेशनमा उहाँले गुरुत्वपूर्ण दायित्वको निर्वहन गर्नुभएको थियो। उहाँ राष्ट्रभाषा प्रचार समिति, वर्धाको उदालगुडी केन्द्रको व्यवस्थापक पनि हुनुहुन्थ्यो।

द्रोणकुमार पौडेलको प्राथमिक तहको शिक्षा बटियामारीमै भयो, त्यसपछि माध्यमिक तहसम्मको पढाइ उदालगुडी हायर सेकण्डरी स्कूलमा भयो। म्याट्रिक परीक्षा उत्तीर्ण भएपछि ब्रह्मपुत्रको उत्तरी तटमा अवस्थित असमको सुन्दर शहर तेजपुरमा रहेको राज्यकै उत्कृष्ट शिक्षानुष्ठानहरूमध्ये अग्रणी दरङ कलेजबाट स्नातक तहको शिक्षा समाप्त गरेर छात्रवृत्ति लिई नेपालको त्रिभुवन विश्वविद्यालयबाट नेपाली विषयमा एम.ए. गर्नुभएको थियो।

ख) **नोकरीका रूपमा शैक्षिक क्षेत्रमा प्रवेश तथा लेखन** :

डा. पौडेलले उदालगुडी हायर सेकण्डरी स्कूलबाट सहकारी शिक्षकका रूपमा आफ्नो कर्मजीवनको प्रारम्भ गर्नुभएको हो। उहाँले यसैभित्रमा संस्कृतमा शास्त्री

र हिन्दीमा कोविद उपाधि पनि लाभ गर्नु हुन्छ। समाजसेवा आफ्नो रगतमै प्रवाहित हुने द्रोणकुमार पौडेल पनि कर्मजीवन आरम्भ हुनेबित्तिकै उदालगुडी भेगका विभिन्न सामाजिक अनुष्ठानहरूमा सक्रिय हुनुभयो। असमको साहित्यिक गतिविधि र चर्चा हुने माउ संगठन असम साहित्य सभाको सक्रिय सदस्य भएर उदालगुडी शाखाको सचिव पनि हुनुभयो। नेपाली सरह असमिया साहित्य लेखनमा पनि उहाँ सिद्धहस्त हुनुहुन्थ्यो। त्यसताक उहाँका फुट्कर असमिया रचनाहरू पत्रपत्रिकामा प्रकाशित भएका थिए। अखिल भारतीय नेपाली भाषा समितिको भारतीय संविधानको आठौं अनुसूचीमा नेपाली भाषालाई अन्तर्भुक्त गर्ने आन्दोलनमा पनि उहाँको सक्रिय भूमिका रहेको थियो।

असमिया, नेपाली, बोडो, आदिवासी, हिन्दीभाषी, बङ्गलाभाषी आदिको बसोबासो भएको यस भेगमा डा. उपाध्याय अति नै जनप्रिय हुनुहुन्थ्यो। आफूले जागिर थाल्दा नथाल्दा नै उहाँका पिता सिकिस्त बिरामी हुनुभयो। एक मात्र छोरा भएकाले पिताको उपचारको दायित्व पनि उहाँमा नै आइपर्ने नै भयो। उपचारको क्रममा पिता तमिलनाडुको भेल्लोरमा छँदै दुई बहिनीमा जेठी बहिनी कनकलताको (कोका) विवाह गरिदिने अभिभारा पनि उहाँमाथि नै आइपर्छ। त्यसको केही दिनपछि नै उहाँका पिता टीकाराम शास्त्रीको उदालगुडीमा देहान्त भएको थियो।

**ग) विवाह तथा विवाहोत्तर जीवन** :

डा. पौडेलको विवाह नवगाउँ जिल्लाको सोलङ निवासी प्रतिष्ठित ज्ञानी पुरुष तथा शिक्षक गणेशचन्द्र उपाध्याय खनालकी ज्येष्ठ सुपुत्री मीरादेवीसँग सुसम्पन्न भएको हो। उदालगुडीमै उहाँकी ममतामयी माता भेजमायादेवीको पनि केही दिनपछि नै हठात् छोटो अवधिको बिमारीले गर्दा चोला उठेको थियो। यसरी उहाँको शिरबाट आमा-बाबुको छत्रछायाँ हटेर पारिवारिक समग्र दायित्व आफ्ना जिम्मामा आएको थियो। उहाँका जम्मा तीन सन्तति छन्। एक छोरा यशवन्त, दुई छोरी योगिता र यवनिकाको जन्म भएको हो।

**घ) भाषाज्ञान तथा साहित्यमा रुचि** :

असमिया, हिन्दी, बङ्ला, संस्कृत आदिमा रुचि भए पनि नेपाली भाषा (साहित्य अध्ययन गरेका डा. पौडेल नेपाली भाषामा पठन-पाठन, अध्ययन र शोधकार्य)

मा निकै अनुरागी हुनुहुन्थ्यो । आफैं पढेको, आफ्ना पिताले पनि जागिर गरेको विद्यालयमा आफू पनि नियोजित हुनु उहाँका लागि एकातिरबाट उत्साहजनक भए पनि अर्कातिरबाट आफ्नो रुचिको विषय पढाइ नहुने भएकोले बेलाबखतमा उहाँको मन पिरोलिने पनि गर्दथ्यो । उहाँले पढाउने स्कूलमा दशौं कक्षासम्म मात्र पढाइ हुन्थ्यो र नेपाली विषय पनि थिएन । नेपाली भाषा-साहित्यमा अध्यापन अध्ययन गर्ने, शोधकार्य गर्ने उहाँको एकान्त इच्छा यो नियुक्तिले पूर्ण हुन नदिने भयो भन्ने भान भएर डा. उपाध्यायको मन छट्पटाउन लाग्यो । यही छट्पटाहटले होला; आफ्नो जन्मिएको र हुर्किएको ठाउँ, आफ्ना अनगन्ती इष्टमित्र र कुटुम्ब, आफ्ना आमा-बाबाले जोडेको घरघडेरी छोडेर व्याकुल मन लिई नेपालको चन्द्रगढी बसाइँ सर्नुभयो र नेपालमा मेची बहुमुखी क्याम्पस, भद्रपुरमा अध्यापन गर्दै आफ्नो अध्ययनलाई पनि अघि बढाउने प्रयत्नमा जुट्नुभयो ।

डा. द्रोणकुमार पौडेलले नेपालमा जागिर गर्नुका साथै आफ्नो अध्ययनको तिर्सना मेट्ने परिवेश पाए पनि त्यहाँको बसोबासोको शुरुमा निकै सङ्घर्ष गर्नु पऱ्यो । बसाइँ सरेर नयाँ जग्गामा सीमित पूँजीले आफ्नो परिवारलाई प्रतिष्ठित गराउने क्रमले गर्दा उहाँको सृष्टिशीलतालाई असर पारेको थियो । चन्द्रगढीबाटै कान्छी बहिनी उषा, छोरा यशवन्त, दुई छोरी योगिता र यवनिकाको शिक्षादीक्षा र विवाहादि पनि सम्पन्न गर्नुभएको थियो ।

ङ) **संक्षिप्तमा साधना र कृतिहरू** :

असममा छँदै डा. पौडेलले सृष्टिशील कदम चालिसक्नु भएको थियो । यहाँका पत्रपत्रिकामा असमियाँ र नेपाली भाषामा बराबर उहाँका फुट्कर लेखहरू प्रकाशित हुने गरेका थिए । सन् १९७७ ई.मा असमियाँ भाषामा सहलेखन गरेको 'नवमी' (नेपाली लोककथाको सँगालो) उहाँको पहिलो प्रकाशित कृति हो । उहाँले आफ्नो तेस्रो सहलेखन कृति 'आदर्श नेपाली व्याकरण' पनि यता पूर्वाञ्चल भारतका नेपाली अध्ययन गर्ने विद्यार्थीहरूको मागलाई ध्यानमा राखेर असमबाटै प्रकाशित गर्नुभयो । आफ्नो दोस्रो पुस्तक नेपालबाट प्रकाशित 'राजवंशी परिचय : जाति, भाषा र साहित्य' ले उहाँलाई लोकवार्ताको अध्ययनमा प्रेरित गरेजस्तो लाग्छ । त्यसैले होला, डा. द्रोणकुमार पौडेलले शोधकार्यमा 'नेपाली लोकसाहित्यमा सवाई काव्यको योगदान' शीर्षक विषयमा भारतको उत्तरबङ्ग विश्वविद्यालयबाट 'विद्यावारिधि'को उपाधि प्राप्त गर्नुभयो । यस उपरान्त

लोकसाहित्य र लोकवार्ता जस्ता विषयमा उहाँको रुचि झन् बढेकोले होला, नेपाली साहित्यको जगत्मा 'लोक वार्ता : लोककै चर्चा' (२०६५), 'नेपाली सवाई काव्यको सैद्धान्तिक चिनारी' (२०६७) जस्ता मूल्यवान् कृतिहरू प्रकाशित गर्नुभयो । आजको विश्वमा सामान्य जनजीवनलाई प्रतिनिधित्व गर्ने लोकवार्ता अथवा लोकसंस्कृतिको अध्ययनको महत्वलाई उपलब्धि गर्दै उच्च शिक्षण संस्थानहरूले यसलाई एउटा पृथक विषयको रूपमा प्रतिष्ठित गरिसकेका छन् । साहित्यको पनि यो एउटा महत्वपूर्ण अङ्ग भनेर मानिएको छ । नेपाली साहित्यमा पनि यसको गवेषणा र अध्ययनको अवकाश र प्रयोजनीयता यथेष्ट रहेको छ । डा. उपाध्यायको अन्तिम कृति नेपाल प्रज्ञा प्रतिष्ठानद्वारा प्रकाशित 'लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ' (२०७४) हो, जो यस क्षेत्रमा उहाँको अमूल्य अवदान ठहरिन्छ । यसबाहेकै 'भाषिक चिन्तन' (२०६५), 'केही साधक : केही साधना' (२०६५), 'भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा' (२०६८) नेपाली साहित्यको फूलबारीमा उहाँले थप्नुभएका फूलका अनमोल थुँगाहरू हुन् । यसरी उहाँले भविष्यका अनुसन्धाताहरूका लागि नेपाली लोकसंस्कृतिको गवेषणाका सामल उपलब्ध गराउनुभएको छ । नेपालमा मात्र होइन, भारतका उच्च शिक्षा संस्थानहरूमा पनि र अन्तर्राष्ट्रिय सम्मेलनहरूमा पनि निम्त्याइने अनुसन्धाता डा. पौडेलका अनेकौं लेखहरू अङ्ग्रेजी, हिन्दी, नेपाली र असमियाँ भाषामा प्रकाशित भएका छन् ।

आज विज्ञान र प्रयुक्तिको विकासले विश्वलाई वैश्विक गाउँमा परिवर्तित गरेको छ । पाश्चात्य शिष्ट संस्कृतिले हाम्रो पनि आफ्नो परम्परा, रीति, नीति, भेषभूषा, लोकगीत-नृत्य, लोककला, लोकसाहित्य आदिलाई प्रभावित पारेको छ । आज उत्तरआधुनिकताले गाँजेका हाम्रा नयाँ पिँढीले विस्तारै आफ्नो ऐतिह्यलाई बिर्सन थालेका छन् । त्यसैले नेपालको क्षेत्रीय स्तरमा होस् अथवा नेपाली विश्वमा होस्, लोकवार्ताको अध्ययन र यसलाई भावी पिँढी समक्ष प्रस्तुत गर्न अति नै जरुरी भएको बखतमा डा. द्रोणकुमार पौडेल जस्ता लोकवार्ताका अन्वेषकलाई गुमाउनु नेपाल तथा सम्पूर्ण नेपाली जगतका लागि अपूरणीय क्षति हो भन्ने लाग्छ । नेपालमा स्थायी बसोबासो गरेपछिका उहाँबाट भएका गतविधिबारे यसपछि चर्चा गरिने छ । साथै, उहाँका सम्पूर्ण शैक्षिक कार्य र अनुभव योगदान एवम् कृतिहरूको विस्तृत विवरण यहाँ संक्षिप्तमा दिएको भए पनि यसै लेखको अन्तमा विस्तृत रूपमा दिइएको छ ।

**२ नेपालमा पुनः आगमन** :

द्रोणकुमार उपाध्याय अध्ययन गरी असमतिर गएको केही वर्षपछि विक्रम सम्बत् २०३८ को शुरुतिर फेरि नेपाल फिर्नुभएको हो । असमको तत्कालीन परिस्थिति बोध गरेर त्यहाँ नेपालीहरू सुरक्षित हुने स्थिति नेदेखेपछि उहाँ नेपाल फिर्नुभएको हो । आफ्ना काकाहरू र आफन्तहरू सबै नेपालमै भएकोले उहाँको मन असममा नलागेर र अवस्था पनि ठीक नभएकोले शुरुमा परिवारलाई असम ससुराली घरमै राखेर आफू मात्र नेपाल आउनुभयो । नेपालमा आएपछि उहाँको कान्छो काका मोतीप्रसाद पौडेलको घर चन्द्रगढीमा केही समय बस्ताबस्तै उहाँका अलिक परका आफन्त तत्कालीन मेची बहुमुखी क्याम्पस-भद्रपुरका क्याम्पसप्रमुख घनश्याम खनालसँग सम्पर्क भएर क्याम्पसमै नेपाली विषय पढाउने अस्थायी सहायक प्राध्यापकका रूपमा २०३८ साल असार १ गते नेपाली विभागमा नियुक्त हुनुभयो ।

कार्यमा लगनशीलता, विद्यार्थीमैत्री र अध्ययन-अध्यापनमा रुचि भएकोले उहाँ चाँडै लोकप्रिय हुनुभएको कुरा देखिन्छ । त्यो बेलाका कार्यरत चूडामणि रेग्मी, रामनाथ शर्माहरूबाट सहयोग मिलेर उहाँले काममा सहज भएको बोध गर्नुभएको थियो । यो कुरा उहाँभन्दा ठीक एक महिनापछि २०३८ श्रावण १ गते यसै क्याम्पसमा नियुक्ति पाएका यिनै हरफका लेखकलाई निजसँगको सामीप्यताको कारणले यथार्थ ज्ञान छ र यसपछि द्रोणकुमार उपाध्याय आफूले अध्यापन गर्न नियुक्त भएका यस क्याम्पसमा एक लोकप्रिय प्राध्यापक स्थापित हुनुभएको थियो ।

**क) शैक्षिक उन्नति** :

त्रिभुवन विश्वविद्यालमा लोकप्रियता कायम गर्दै अघि बढेको उहाँको शैक्षिक जीवनमा २०३९ पुस ८ मा स्थायी नियुक्ति भयो । स्थायी भएपछि नै उहाँको जीवनमा र व्यवहारमा पनि स्थायित्व आएको देखिन्छ । स्थायी भएपछि उहाँले आफ्नो परिवारलाई नेपाल ल्याउनुभयो । तत्काल आवासको समस्या थियो । यसका लागि चन्द्रगढीको मैत्री टोलमा तीन कठ्ठा जग्गा लिएर घर बनाएर थान्कोमुन्को गर्नुभएको हो र शेष जीवन यसै आवासमा बिताउनुभयो । अध्ययन मनन चिन्तन नै खास ध्यान भएको कारणले उहाँले यसै क्षेत्रमा चाँडै प्रगति गरेको देखिन्छ । अध्ययन अनुसन्धानमा रुचि भएको कारणले पनि उहाँले प्रगति गरेको देखिन्छ ।

**ख) पदोन्नति :**

त्रिविको प्राध्यापन कार्यमा लागेको व्यक्तिको पदोन्नति पनि आफ्नै योग्यता र हैसियत देखाउने एक विशेष आधार हो । यस अनुसार द्रोणकुमार पनि सो कुराबाट चुक्नु भएन । फलतः २०४३ साल असार १८ गतेका दिन उहाँको त्रिविको उपप्राध्यापक पदमा पदोन्नति भएको हो । त्यसपछिको उहाँको शैक्षिक जीवन अझ गतिमय भएको देखिन्छ । अध्ययन-अध्यापन र अनुसन्धानमा उहाँ निरन्तर लागिरहनु भएको देखिन्छ ।

**ग) अध्ययन–अध्यापनका साथ सामाजिक कार्यमा सम्लग्नता :**

त्रिविको अध्यापनमा कोरा कक्षाका तोकिएका कुराहरूको मात्र कोरा अध्ययन गरी जीवन बिताउनु एक योग्य प्राध्यापकका लागि उचित हैन । यो कुरा अनुभव गरेर उहाँ अध्ययन बाहेक अनुसन्धान र सामाजिक कार्यमा पनि लाग्नुभएको हो । जिल्लाका शैक्षिक संस्थाहरूमध्ये कतिका सल्लाहकार, कतिमा अभिभावकका रूपमा र कति शैक्षिक संस्थाका संस्थापक समेत रहनुभएको देखिन्छ । खासगरी चन्द्रगढीको प्रज्ञा एकेडेमीको स्थापना अनि चन्द्रगढीकै आदर्श उच्च माविको स्थापना र सञ्चालनमा उहाँको सक्रियता देखिएको छ । यसबाहेक चन्द्रगढीको वैदिक समाज र कृष्णद्वैपायन गुरुकुल आदिमा पनि उहाँ सम्लग्न हुनुभएको देखिन्छ । यसरी संस्थागत सम्लग्नताले उहाँको सामाजिक व्यक्तित्व अझ उच्च भएको थियो ।

**घ) स्थानान्तर तथा पुनः यथावत् पुनरागमन :**

२०४७ सालको माघ २४ गतेदेखि २०४८ साल माघ १७ गतेसम्म उहाँको काठमाडौंको पद्मकन्या क्याम्पसमा बेतलबी काज सरुवा भएको थियो । यस अवधिमा छोरा यशवन्तलाई साथै लिएर जानुभएको थियो र मूल क्याम्पस बाहेक अन्य क्याम्पसमा समेत केही काल काम गरेको अनुभव थियो । तर, डेराको बसाइबाट वाक्क लागेर अनि परिवार दुईतिर रहनु पर्दाको समस्याका कारण उहाँ फेरि मेची क्याम्पसमा नै फर्कनुभएको थियो ।

**ङ) विद्यावारिधि अध्ययन बिदा :**

नेपाली भाषामा सवाई विषयमा उहाँ त्रिविबाट तलबी बिदा लिएर पाँच वर्षमा सक्नेगरी विद्यावारिधि गर्न २०६१ सालदेखि बिदामा बसेको देखिन्छ ।

त्रिविबाट तोकिएको उक्त विषयको शोध निर्देशक उत्तरबङ्ग विश्वविद्यालयका प्राध्यापक डा. भीमकान्त उपाध्याय रहनुभएको थियो । उहाँको कुशल निर्देशनमा तोकिएको अवधिभित्र नै द्रोणकुमारले पीएच डी अर्थात् विद्यावारिधि गर्नु भई पुनः क्याम्पसको नियमित सेवामा फर्कनुभएको थियो । २०६३ साल बैशाखमा उहाँको सहप्राध्यापक पदमा पदोन्नति समेत भएको हो । जीवनकालमा उहाँको यही सर्वोच्च पद थियो । यसै पदमा कार्य गर्दागर्दै उहाँको २०६९ साल असोज ५ गतेका दिन उमेर हदका कारण अनिवार्य अवकाश भएको थियो । यसरी उहाँको शैक्षिक जीवनको यात्रा सकिएको थियो । तापनि उत्तर जीवनमा उहाँ यसै क्षेत्रमा अझ सक्रिय रहनुभएको थियो ।

**च) विभिन्न गोष्ठी तथा सेमिनारमा सम्लग्नता :**

नेपाली, अंग्रेजी, हिन्दी, बाङ्ला, असमिया, संस्कृत, राजबंशी जस्ता भाषाको अनुभव भएका डा. द्रोणकुमार उपाध्यायका शैक्षिक अनुभव निम्नअनुसार भएका देखिन्छन् –

१. उच्चतर माध्यमिक विद्यालयहरूमा १० वर्ष अध्यापन ।
२. मेची बहुमुखी क्याम्पसमा २०३८ सालदेखि २०४७ सालसम्म तथा पुनः २०५० सालदेखि २०६९ सालसम्म प्रवीणता प्रमाणपत्र, स्नातक तह र स्नातकोत्तर तहसम्मको अध्यापन सेवा ।
३. पद्मकन्या क्याम्पस, काठमाडौंमा २०४८ सालदेखि २०४९ सालसम्म अध्यापन ।
४. मेची वहुमुखी क्याम्पसमा सहायक क्याम्पस-प्रमुखको पदमा वि.सं. २०४३/११/१ देखि २ वर्ष ।
५. मेची बहुमुखी क्याम्पस, नेपाली विभागको विभागीय प्रमुख पदमा- (तीन कार्यकाल) २०५०/४/१ देखि २०५३/९/१ सम्म, २०६१/९/१ देखि २०६२/८/४ सम्म तथा पुनः २०६२/८/५ देखि सेवानिवृत्तको अवधिसम्म ।

**छ) दिवङ्गत डा. द्रोणकुमार उपाध्यायका कृतिहरू निम्नानुसार छन्–**

१. नवमी (सहलेखन/ असमियाँ भाषामा नेपाली लोककथा संग्रह) असम साहित्यसभा, गुवाहाटीबाट प्रकाशित, १९९७ ई.)
२. राजवंशी परिचय : जाति, भाषा र साहित्य (राजवंशी भाषा प्रचार समिति,

नेपालद्वारा प्रकाशित, १९९४ ई.)
३. आदर्श नेपाली व्याकरण (सहलेखन/ किरणवाला भट्टराई, उदालगुडी, असमद्वारा प्रकाशित, २००५ ई.)
४. भाषिक चिन्तन (भाषिक विश्लेषणात्मक रचना संग्रह/ यशवन्त पौडेल, काठमाडौंद्वारा प्रकाशित, वि.सं. २०६५)
५. केही साधक : केही साधना (समालोचना संग्रह, वि.सं. २०६५)
६ लोकवार्ता : लोककै चर्चा (लोकसाहित्यसँग सम्बन्धित समीक्षात्मक प्रबन्धहरूको सँगालो/ वि.सं. २०६५)
७. लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ (नेपाल प्रज्ञा प्रतिष्ठान, काठमाडौंद्वारा प्रकाशित, वि.सं. २०७४)
८. भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा (प्रकाशक- श्रीमती मीरा पौडेल, सन् २०११)
९. सवाई काव्यको सैद्धान्तिक परिचय (प्रकाशक- श्रीमती मीरा पौडेल, २०६७)

यी पुस्तकाकार कृतिहरू बाहेक तल लेखिएका विभिन्न राष्ट्रिय अन्तर्राष्ट्रिय पत्रपत्रिकाहरूमा अंग्रेजी, हिन्दी, नेपाली र असमियाँ भाषामा विश्लेषणात्मक लेख-निबन्धहरू तथा अन्य सामग्रीहरू पनि प्रकाशित भएका छन् । यसका साथै उहाँबाट नेपाली तथा अन्य भाषाका पत्रपत्रिका सम्पादन तथा प्रकाशन पनि भएका छन् ।

**ज) पदक तथा सम्मान, पुरस्कार एवम् अभिनन्दन :**

१) घनश्याम स्मृति प्रतिष्ठान, चन्द्रगढी (झापा)द्वारा नेपाली सवाई काव्यको विश्लेषणात्मक मूल्याङ्कन विषयमा विद्यावारिधि गर्नुभएकोमा सम्मान-पत्र : २०६१/११/२४, सोमबार ।
२) शब्दब्रम्ह दिव्यानुभव कृति प्रकाशनको समालोचकका रूपमा कृतज्ञता-पत्र : ब्रम्हकुमारी राजयोग समिति, चन्द्रगढी ।
३) देवकोटा स्मारक संरक्षण समिति, चन्द्रगढी (झापा)द्वारा सार्वजनिक अभिनन्दन सहित सम्मान-पत्र २०६७/७/२० ।
४) मेची बहुमुखी क्याम्पस, भद्रपुर (झापा)द्वारा २०३८ सालदेखि २०६९ सालसम्म प्राध्यापन पेशामा रही सेवानिवृत्त हुँदा सम्मान-पत्र प्राप्त २०७१/०६/४ ।
५) लेखनाथ पुस्तकालयद्वारा विशेष योगदान सम्मान-पत्र २०७०/१२/२८ ।

६) स्व.श्री ५ निराजन स्मृति सेवा समितिद्वारा श्री ५ ज्ञानेन्द्र वीरविक्रम शाहदेवको ५९ औं जन्मोत्सवको उपलक्ष्यमा सार्वजनिक अभिनन्दन सहित सम्मानपत्र २०६२/३/२३ ।
७) राष्ट्रिय हिन्दू एकता मञ्च नेपालद्वारा 'मानार्थ सदस्य' प्रदान २०७५/१२/२३ ।
८) असम नेपाली नाट्य सम्मेलन (समन्वय सांस्कृतिक संगठित भारतीय परिवार) दोस्रो महाधिवेशन, राज्यिक नाट्य महोत्सव एवं सम्मान समारोह, विहाली, असम २९, ३०, ३१ दिसम्बर २०१३ ।
९) लोकवार्ता परिषद् नेपाल, नेपाली लोकवार्ता आठौं राष्ट्रिय सम्मेलन २०७५ कार्तिक १३, १४ ।
१०) जुही (साहित्यिक त्रैमासिक पत्रिकाको पूर्णाङ्क, ८, ३४, ३६, ४६, ५० मा आफ्ना बहुमूल्य रचनाका लागि) झर्रो नेपाली घरमा प्रशंसा-पत्र प्रदान २०५९ चैत्र १ गते ।
११) लेखनाथ पुस्तकालयबाट एकै वर्ष ३ कृतिहरू प्रकाशन गरी साहित्य भण्डार भर्ने 'स्रष्टा कदर-पत्र' २०६५ पौष २६ ।
१२) चेतना नेपालद्वारा लागू औषध दुर्व्यसन विरुद्धको अभियानमा सक्रिय सहभागिता एवम् सहयोगका लागि सम्मान-पत्र २०७२/८/२५ ।
१३) साहित्य चौतारी (स्व.भीमबहादुर श्रेष्ठ, स्व.पञ्चकुमारी बिमलीको स्मृतिमा स्थापित) बिर्तामोड, झापाद्वारा सम्मान-पत्र २०६७/३/३१ ।
१४) भट्टराई कुलवंश प्रतिष्ठान समिति, डाँगीबारी, चन्द्रगढी- ४ बाट सम्मान ।

**झ) सामाजिक सम्लग्नता** :

१) मातृभूमि स्वयंसेवक संघ नेपालको संस्थापक-सदस्य ।
२) हिन्दू स्वयंसेवक संघ नेपालको प्रथम पूर्वाञ्चल (संघ) चालक र निवर्तमान पूर्वाञ्चल क्षेत्र बौद्धिक शिक्षण प्रमुख ।
३) वैदिक समाज नेपाल, झापाको संस्थापक-सदस्य तथा दुई कार्यकाल अध्यक्ष ।
४) पौडेल वंश प्रकाशन समितिका पूर्वक्षेत्र सल्लाहकार र झापा जिल्ला समितिको पहिलो अध्यक्ष ।
५) राजवंशी भाषाको नेपालमा (प्रथम) उद्धारक, साहित्यका अध्येता ।
६) लोकवार्ता परिषद् नेपालको राष्ट्रिय/अन्तर्राष्ट्रिय प्रतिनिधि ।
७) घनश्याम स्मृति प्रतिष्ठानका संस्थापक/निवर्तमान उपाध्यक्ष ।

८) प्राज्ञिक विद्यार्थी परिषद् नेपालको पूर्वाञ्चल क्षेत्र सल्लाहकार ।
९) 'प्रज्ञा एकेडेमी' चन्द्रगढीको संस्थापक-सदस्य ।
१०) 'पूर्वाञ्चल उच्च मा.वि.' चन्द्रगढीको (हाल : बिर्तामोड) संस्थापक-सदस्य ।
११) काली मन्दिर (चन्द्रगढी बजार) को सदस्य ।
१२) दुर्गा माता उपासना समिति (केन्द्रमोड) को सल्लाहकार (पूर्व)
१३) साना किसान कृषि सहकारी सं. लि. भद्रपुर-१० को सल्लाहकार ।
१४) राष्ट्रिय हिन्दू एकता मञ्च नेपालका केन्द्रीय सल्लाहकार समिति सदस्य ।
१५) हिन्दू स्वयंसेवक संघको प्रथम झापा जिल्ला अध्यक्ष ।

ञ) **राष्ट्रिय तथा अन्तर्राष्ट्रिय–सम्मेलनहरूमा सहभागिता (कार्यपत्र प्रस्तुति)**

वि.सं. २०५५ मा डिनको कार्यालय, त्रि.वि.मा लघु शोध परियोजना अन्तर्गत 'राजवंशी जाति : एक परिचय' शीर्षक शोधपत्र प्रस्तुत ।

International Folklore Conference को काठमाडौं अधिवेशनमा 'सवाईको नालीबेली केलाउँदै' शीर्षकमा कार्यपत्र प्रस्तुत २००१ मे ५–७ ।

भारतको जलपाइगुडीमा ई. २४.२.२००२ मा आयोजित North Eastern Foundation for Social Science Research, International Conferencedf "Rajbansis of Nepal" शीर्षकमा कार्यपत्र प्रस्तुत ।

भारतको उत्तरबंग विश्वविद्यालयमा २००२.३.११ ई.मा आयोजित नेपालीमा साहित्यिक समालोचना शीर्षक गोष्ठीमा भाग लिई "तारानाथ शर्मा : समालोचकको रूपमा" विषयक कार्यपत्र प्रस्तुत ।

National Seminar on Nepali Folklore, Department of Nepali, The University of North Bengal, 15 -16 March 2012.

"जातीय आलोचनाचक्र, विश्वबङ्ग साहित्य तथा संस्कृति सम्मेलन, राँची शाखा, राँची, भारत, 10 Apr. 2012.

International Seminar on Nepali Culture, Milanjyoti Natya Manch, Gameri, Sonitpur, Assam, 31st Jan - 1st Feb 2015.

International Seminar on "Bangla Bhasa o sahitye nana charcha", Department of Bengali, Samsi College, Malda, West Bengal, 17th Feb 2015.

International Seminar on "The Renaissance Across

Continents and Cultures M A Trans-disciplinary Perspective", Department of English Samsi College, Malda, West Bengal, 9th Feb 2016.

International Seminar on "Poverty Beyond Boarders", Research Forum, Pramathesh Baruwa College, Gauripur, Assam, 10-12 Feb 2016.

One Day International Seminar on "Influence of Sanskrit on Indian Culture", Department of Sanskrit, Raiganj University, West Bengal, 11th Mar. 2016.

International Seminar on "Philosophy, Religion and Society", Department of Philosophy, Raiganj University, West Bengal, 12th March 2016.

भारतको असम प्रान्तमा पं. गङ्गाधर उपाध्याय पौडेलको प्रतिमा स्थापना तथा साङ्गवेद विद्यालयको हीरक जयन्तीमा प्रतिनिधित्व र सहभागिता २००२.६.१५-१६ ई.

**ट) जीवनको अवसान** : २०७६/१०/१५ (29th Jan. 2020), **निजी निवास, मैत्री टोल, भद्रपुर– १०,**

निधन समय : रात्रि (९:३५, बसन्त पञ्चमी तिथि)

यसरी डा. द्रोणकुमार उपाध्यायको जीवनीको समग्रता हाम्रा सामू देखिन्छन् । यी विवरणबाट के स्पष्ट हुन्छ भने श्री पौडेल समाजका विभिन्न क्षेत्रका एक विशेष व्यक्तित्वका धनी हुनुहुन्थ्यो । साथै, समाजबाट यथेष्ट मात्रामा सम्मान पाउनुभएको थियो भन्ने पनि सिद्ध हुन्छ ।

*॥ समाप्त ॥*



अच्युत घिमिरे

# एउटा स्रष्टाको नाममा

'५० साल यता द्रोण पौडेलसँग चन्द्रगढीतिरका साहित्यिक कार्यक्रममा प्रायः भेटघाट भइरहन्थ्यो । लेखनाथ चोकदेखि उत्तरमा उहाँको एकतले घर छ । एकचोटि त्यहाँ पुगेको सम्झना छ मलाई, चूडामणि सरसँग हुनुपर्छ या जुही साहित्यिक त्रैमासिक रचना कम्प्युटर गर्ने नारायण अधिकारीसँग, जुही पत्रिकामा रचना प्रकाशनको सिलसिलामा म त्यहाँ पुगेको थिएँ । मोटो, सामान्य भन्दा अलि अग्लो, बोलक्कड हुनुहुन्थ्यो द्रोण सर । धेरै वर्ष अगाडिको कुरा, उहाँको घर पुगी गफगाफ समेत भएको, यति मात्र सम्झना छ मलाई ।

द्रोण सर साहित्यकार हो, यति कुरा जान्दछु म । मान्छे कि सम्पर्कले अथवा लेखनले बढी परिचित हुने हो । मेची क्याम्पसका आफ्ना सहकर्मीसँग दिनहुँ नै उहाँको सम्पर्क हुन्थ्यो । साहित्यिक कार्यक्रममा उहाँ भद्रपुर र चन्द्रगढी आक्कल झुक्कल औंसी पूर्णे जानुहुन्थ्यो होला, तर हामी जस्तो भुइँफुट्टा भएरै हिंडेको मैले थाहा पाइनँ । लोकसाहित्यका विषयमा भने उहाँ विद्‍वान हुनुहुन्थ्यो । उहाँको विषय नै लोकसाहित्य थियो ।

पत्र-पत्रिकामा लोकसाहित्य सम्बन्धी उहाँका फुट्कर रचनाहरू पनि प्रकाशित भइरहन्थे । लोकसाहित्यको विषयमा उहाँका पुस्तकाकार कृति पनि प्रकाशित छन् । नेपाली साहित्यको लोकसाहित्यमा कलम चलाउने स्रष्टाहरू कम छन् । यो अर्थमा म उहाँलाई विद्‍वान र लोक साहित्यका क्षेत्रमा स्थापित स्रष्टा ठान्छु ।

पछिल्लो समय भेटको कुरा हो, मैले मेरी श्रीमती सुनिता भट्टराईको कृति 'पूर्वी नेपालका लोकगीतहरू' भूमिका लेखाउनु थियो । म लोकसाहित्यकै आधिकारिक व्यक्तिबाट भूमिका लेखाउन चाहन्थें, त्यो पनि पूर्वकै । त्यसका लागि मैले उपयुक्त पात्र द्रोण सरलाई देखें र 'भूमिका लेख्दिनुहोस्' भनेर पाण्डुलिपि उहाँको इमेल ठेगानामा पठाएँ । उहाँले दुई पेजको भूमिका लेखेर पठाउनु भयो । मैले 'लामो लेखेर पठाइदिनुहोस् !' भनेर फेरि भनें । उहाँसँगको गहिरो परिचयले मन जितेर

त्यसरी बोल्न सक्ने बनाएको थियो, मलाई । त्यसपछि उहाँले ५-६ पेजसम्मको भूमिका लेखेर पठाउनु भयो । यति गर्न झन्डै चार महिना समय लाग्यो । पुस्तक प्रकाशन भएपछि मैले तत्कालै काठमाडौंबाट स्रष्टा देवीचरण भण्डारी 'सरोज'का कान्छा छोराको हातमा पुस्तक पठाएँ । त्यो पुस्तक उहाँले प्राप्त गर्नु भयो, भएन; मलाई थाहा छैन । प्राप्त भएको सूचना उहाँले दिनु भएन । कामको व्यस्तताले मैले खोजखबर गर्न पनि बिर्सें ।

२०७५ साउनदेखि मैले 'आलेख' साहित्यिक मासिक प्रकाशन गर्न शुरु गरेको थिएँ । पत्रिकालाई बचाउनु थियो । २०७५ पुसमा लेखनाथ पुस्तकालयको कार्यक्रममा मैले उहाँलाई ग्राहक बनाएको थिएँ । अर्को साल पुसमा म फेरि काठमाडौंबाट झापा आएँ । संयोग नै भन्नुपर्छ, लेखनाथ पुस्तकालयको कार्यक्रममा जान फेरि जुऱ्यो । मैले अघिल्लो साल ग्राहक बनाएकाहरूलाई 'पैसाको तागेता गर्नु पऱ्यो,' भन्ने सोचें । फोन गर्ने क्रममा द्रोण सरलाई पनि गरें । उहाँले आफूलाई क्यान्सर भएको कुरा गर्नुभयो । यस्तो कुरा पहिलो पटक उहाँकै मुखबाट सुन्दा म छक्क परें । 'पैसाकै लागि फोन नगरेको भए हुने थियो', जस्तो लाग्यो । तर, मलाई उहाँ त्यस्तो अवस्थामा हुनुहुन्छ भन्ने के थाहा ? ४-५ मिनेटको कुराकानीमा उहाँले आफूलाई पीडा भएको कुरा गर्नुभयो । उहाँका अभिव्यक्ति निराशावादी थिए । मैले उहाँलाई पैसाको 'प' पनि उच्चारण गरिनँ । समय, परिस्थिति अनुसार बाटो आफैं तय हुँदो रहेछ । मान्छेले कुन बेला के कुरा गर्नुपर्ने रहेछ, जान्दो रहेछ। त्यही भएर नै मान्छे चेतनाले भरिएको विवेकशील प्राणी हो ।

द्रोण सर 'त्यति छिटो खसिहाल्नुहुन्छ' भन्ने मैले सोचेको थिइनँ । सोचेको भए लेखनाथ पुस्तकालयको कार्यक्रममा जाँदा समय मिलाएर एकछिन उहाँलाई भेट्थें होला । काठमाडौं फर्केको केही समयमै मैले उहाँको मृत्युको खबर सुनें । त्यसबेला म दुःखले मर्माहत भएँ ।

म अहिले पनि सोचिरहन्छु, उहाँले भूमिका लेखेको पुस्तक 'पूर्वी नेपालका लोकगीतहरू' देख्न/पढ्न पाउनु भयो, भएन । एउटा असल गुरु, लोकसाहित्यका ज्ञाता द्रोण सर बाँचिरहनुहोस् नेपाली साहित्याकाशमा सधैं-सधैं ।

*कनकाई नगरपालिका, सुरुङ्ग*

*मो. ९८५१११४०६६, इमेल - achyutghimire01@gmail.com*

*(लेखक युवा साहित्यकार हुनुहुन्छ)*



अशोक भट्ट

# चित्त वृत्ति आचरण से शिक्षक– डा. द्रोण जी

मेरी जीवन यात्रा के पिछले तीस बरस सामाजिक प्रयासों में बीते, शुरु से लेकर अब तक हजारों लोगों से आत्मीय संबंधों में जीने का सौभाग्य मिला है। किन्तु जिनसे जीवन को दिशा और प्रेम मिला, ऐसे कुछ विशेष लोग बहुत याद आते हैं, जो अब स्मरण शेष मात्र हैं। पहाड़ों की ऊंचाई और प्राकृतिक सौंदर्य मुझे बचपन से बहुत आकर्षित करता रहा है। संघ के प्रचारक के नाते जन्मभूमि से १,२०० किलोमिटर दूर की धरती पर विक्रम संवत २०५२ के सावन मास में सुदूरपूर्व नेपाल पहुंचा था। हिमालय के सौंदर्य का दर्शन करने का प्रथम अवसर मिला और साथ ही हिमालय से शांत चित्त किन्तु उतनी ही ऊंचाई वाले डा.द्रोण उपाध्याय जी से मिलना हुआ। प्रथम भेंट में ही अभिभावक सा स्नेह मिला तो नेपाल के परिप्रेक्ष्य में शिक्षक रूप में मार्गदर्शन भी। समय के साथ परिवार से आत्मीयता अत्यंत गहरी हुई, मै परिवार का हिस्सा ही हो गया।

समय बीतता गया। समाज संगठन के काम में उनका शैक्षिक मार्गदर्शन और मेरे लिए नेपाली भाषा में ही बोलने का उनका आग्रह मुझे संघ कार्य को कम समय में अच्छी गति देने का सौभाग्य दे गया। उनकी दूरदृष्टी और परामर्श मील का पत्थर बने। चाहे नेपाल के विद्यार्थियों को वेद पढ़ने के लिए प्रेरित कर भारत के वेद विद्यालय में भेजने का उपक्रम हो, या एकल विद्यालयों का प्रारम्भ। तत्कालीन समय में भारत आए विद्यार्थियों में से वेदाचार्य और वेदविद्यालय कारसेवकपुरम् अयोध्या के वर्तमान प्राचार्य दुर्गा प्रसाद गौतम से मिलने वह स्वयं अयोध्या आए और गर्वित हुए। आदिवासी बच्चों को पढ़ाने की उनकी हार्दिक इच्छा के कारण गोमेंद्र कैंपस के रूपक खनाल जी से और सामाजिक व्यक्तित्व दाताराम शर्मा, डा. दुर्गा पोखरेल जी से चर्चा कर संघ कार्यालय पर आदिवासी बच्चे रखकर उनके पढ़ने की व्यवस्था करना उनकी दूर की सोच का ही परिणाम था, जो विद्यार्थी आज नेपाल के सामाजिक जीवन के प्रमुख स्तंभ हैं। जैसे प्रेम थुलुंग राष्ट्रीय महासचिव जनजाति कल्याण आश्रम, बुद्धिलाल राजवंशी, सामाजिक अभियंता खेम आचार्य,

आदि। समर्पित कार्यकर्ताओं की पूरी श्रृंखला बनाने में आदरणीय गुरू की महत भूमिका रही थी, जिसने आज नेपाल के सामाजिक जीवन को अत्यंत प्रभावित किया है। तब के शुरु किए गए छोटे प्रयास आज अपने आप में अनोखे हैं और जमीनी काम बहुत बड़े व प्रभावी हुए हैं। ३२ छात्रावासों के साथ जनजाति कल्याण आश्रम की अलग ही पहचान बनी है तो प्राज्ञिक विद्यार्थी परिषद सबसे बड़ा छात्र संगठन बना है। तत्समय निर्मित कार्यकर्ता देश के निर्माण में शोधपूर्वक सलाह देने में समर्थ हुए हैं।

एक बार नील कंठे ब्रज नाम की किताब का असमिया भाषा से हिंदी नेपाली में अनुवाद के क्रम में भाषागत शुद्धता का आग्रह मेरे लिए विशेष प्रेरणादायक रहा। बातचीत में अंग्रेजी शब्दों के मिश्रण पर द्रोण जी की डांट खानी पड़ती थी। कोई भी भाषा शुद्धता के साथ बोलो और लिखो- उनका यह विशेष आग्रह मैंने जीवन में उन से ही सीखा। व्यक्तिगत जीवन में द्वंद के क्षणों में सच्चे साथी अभिभावक सौभाग्य से ही मिलते, यह उनके जाने के बाद ही अनुभव में आया। अवकाश प्राप्ति के बाद भी उनकी सक्रियता प्रेरित करती है। तीन वर्ष पूर्व मानवीय शिक्षा संस्कार संस्थान, कानपुर में अध्ययन हेतु उनके आगमन से परिलक्षित होती है। जीवन विद्या शिविर करने के पश्चात परिवार के सभी सदस्यों को शिविर में भेजने का उनका आग्रह और नेपाल में संबंधों के अध्ययन की व्यवस्था हेतु संस्थान निर्माण का उनका संकल्प भी हम सबकी जिम्मेदारी है।

कृषि ऋषि सुभाष पालेकर जी को सुनने के बाद विषमुक्त भोजन प्राप्ति को अभियान का रूप देने हेतु जागरण कृषि फार्म उनकी समाज के प्रति गंभीरता का परिचय देती है। नियति के नियम में शरीर तो सभी का पञ्च तत्व में विलीन होना ही है, किन्तु कुछ समय और जो साथ मिलता तो उनके सृजनशक्ति के कुछ और आयाम देखने को मिलते; ऐसा मेरा विश्वास है। हम सबने एक सच्चे अभिभावक, सरस्वती पुत्र शिक्षक को खोया है, उनकी जगह तो नहीं भरती। किन्तु उनका प्रेरणादायी व्यक्तित्व एवं आचरण हरसमय प्रेरणा देता रहेगा। बहन योगिता, यवनिका, भाइ यशवंत और मां जी और अब तो तीसरी पीढ़ी सब उनके दिखाए मार्ग पर चल ही रहे हैं।

शांत हिमालय सा उनका व्यक्तित्व शब्दों में बांधना असम्भव है। किन्तु जो दृष्टि और दिशा उन्होंने दी, उस मार्ग पर पूर्ण ध्येय निष्ठ होकर चल सकूं- यही प्रार्थना।

*-कानपुर (भारत)*

*(लेखक मानवीय सचेतना विकास अध्ययन एवम् शोध संस्थान नेपालका संयोजक हुनुहुन्छ)*



आरती पोखरेल 'अनु'

# सम्झनामा द्रोण सर

मान्छे हेर्दाहेर्दै इतिहास हुन्छ, अनि मात्र लेखिन्छ उसको जीवन-जगतसँगको सम्बन्ध । उसका कृतिहरू जो लिपिबद्ध छन्, पल्टाइन्छ तिनै पानाहरू एक-एक गर्दै र भनिन्छ- जीवन बाँचेकै बेलामा केही सिकेको भए ? हरेक विद्वान् वर्गको श्रद्धाञ्जलि सभामा भेला भएर हामीले भन्दै आएका कुराहरू यिनै हुन् । हामीलाई बेला छँदै कहिले होश आउँदैन । कहिले चेत पलाउँदैन । कैयौंको मलामी गएर उसको पूरै अस्तित्व खरानी बनाएर घर फर्किंदा समेत हामी पत्तै पाउँदैनौं, भोलि मेरो जीवनका इच्छा र आकांक्षा पनि पूरै समाप्त भई खरानी बन्छन् भनेर । यस्तै एक विद्वान् साहित्यकार हुनुहुन्थ्यो- डा. द्रोणकुमार पौडेल । अब उहाँ हुनुहुन्छ बाट हुनुहुन्थ्योमा रूपान्तरण हुनु भइसक्नुभयो । फगत सम्झना मात्र बाँकी छ अब !

म उहाँको छिमेकी पनि हुँ । २०४६ सालमा म मेची क्याम्पसमा कार्यरत थिएँ, त्यही समयदेखि म उहाँसँग परिचित थिएँ । मेरी छोरी र सरकी छोरी सँगसँगै पढ्थे । फेरि केही समय मीरा दिदीसँग पढाउने अवसर पनि जुटेकोले म त्यो परिवारसँग आफूलाई नजिकको महसूस गर्छु । पुस्तकालयका हरेक कार्यक्रमहरूमा भेट हुने ठाउँ पनि हाम्रो एउटै थियो । अभिव्यक्ति दिने क्रममा उहाँले असमको लोकसंस्कृति, बंगाली लोकसंस्कृति र साहित्यका बारेमा भनेको सुन्दा कति आनन्द लाग्थ्यो । उहाँ धेरै भाषाको ज्ञाता हुनुहन्थ्यो । बंगाली, असमिया गीत सुनाउनु हुन्थ्यो । बहुप्रतिभाका धनी द्रोण सर । यस्ता व्यक्तिहरूको अवसानले हाम्रो साहित्य जगत दिनदिन धराशायी बन्दै गइरहेको छ । आजका नयाँ पुस्ता कमैमात्र साहित्यप्रति आकर्षित छन् । बदलिंदो परिस्थिति, नयाँ नयाँ चाहना बोकेका युवा पिँढीमा आकर्षणको केन्द्र बन्न सकिरहेको छैन- साहित्य क्षेत्र । यसैमा दत्तचित्त भएर पनि जीविकोपार्जनको गतिलो आधार बन्न सकेको छैन यो । फेरि राजनीतिको रंगका छिटाहरूबाट यो क्षेत्र पनि अछुतो छैन । त्यसैले

राम्रा पिछडिने र हाम्राले सधैं प्रोत्साहन पाइराखेका हुन्छन् !

जीवन बाँचेकै बेलामा समाजका यस्ता विद्वान् वर्गलाई सम्मान गर्नुभन्दा मृत्युपछि श्रद्धाञ्जलिका दुई-चार शब्द बोलेर पन्छाउनमा नै हामी सन्तुष्ट हुन्छौं । जीवन रहुञ्जेल समाज र राष्ट्रले कहिल्यै चिन्न खोज्दैन । यस्ता महान साहित्यकारभित्रको प्रतिभालाई कसैले सम्मान दर्शाउँदैन पनि । कहिले क्षेत्रीय स्तरबाट या राष्ट्रबाट द्रोण सर सम्मानित हुनु भएको पनि मेरो बुझाइमा छैन । यस्ता शालीन व्यक्तित्वका धनी द्रोण सरको विलय सँगसँगै उहाँको प्रतिभा पनि विलय भयो । अब फगत स्मरण मात्र छ । हिंडेका डोबहरू छन् । भित्ताहरूमा उहाँका स्वरहरू गुञ्जिरहेका छन् । ती पनि विस्तारै-विस्तारै हराउँदै जानेछन् ।

एक शालीन व्यक्तित्व, जो कहिल्यै कसैलाई बिझ्नेगरी नबोल्ने, चित्त नदुखाउने, हामीले बोल्दै गर्दा शब्दहरू गल्ती भए भने कार्यक्रम सकिएपछि सम्झाउने । विद्वताको घमण्ड कत्ति नभएका यस्ता व्यक्तिहरू समाजमा कमैमात्र देखिन्छन् । यस्ता औंलामा गन्न सकिने आदरणीय गुरुलाई अरू के गर्न सक्छु र ! यिनै श्रद्धाञ्जलिका दुई-चार शब्द अर्पण गरें । हार्दिक श्रद्धाञ्जलि सर !

*भद्रपुर–१०*

*(लेखक प्रसिद्ध गजलकार एवम् लेखनाथ पुस्तकालयकी उपाध्यक्ष हुनुहुन्छ)*



इन्द्रप्रसाद ओली

# डा. द्रोणकमार उपाध्याय : सम्झनामा मात्र

*धर्मो रक्षति रक्षित :*
*जाला देह मरेर वीरजनको विश्वास त्यो बाँच्दछ,*
*आत्मा जान्छ उडेर अन्तर कतै कीर्ति सदा हाँस्दछ ।*

२००६ साल आषाढ ६ गते आइतबारका दिन पिता स्व. टिकाराम शास्त्री र आमा भेजमाया पौडेलका जेष्ठ सुपुत्रका रूपमा भारत आशामको बिहाली बटियामारी गाउँमा एक संस्कृतका पृष्ठपोषक परिवारमा डा. द्रोणकुमार उपाध्यायको जन्मभएको हो ।

उहाँले असमी भाषामा अध्यायन थालेर एस एलसी पास गरेपछि, नेपाली भाषामा पढनु भएको हो । गुवाहटी विश्वविध्यालयबाट विए र त्रिभुवन विश्वविध्यालयबाट स्नाकोत्तर गर्नु भएको हो । उहाँले भारतको उतरबङ्ग विश्वविध्यालयबाट लोकसाहित्यमा विधावारिधि गर्नु भएको थियो । वि.सं. २०३८ साल देखि २०६८ सालसम्म मेची बहुमूखी क्याम्पसमा अध्यापन गराउनु भयो । सेवा अवकाश पश्चात अनुसन्धानात्मक लेख, पुस्तक लेखन र प्रकाशनमा आफूलाई सदैव व्यस्त राख्नु भयो । लोकसहित्य डा.उपाध्यायको खास रूचिको विषय रहेको थियो । त्यसैले सम्बन्धित स्थानीय भाषा जाति र संस्कृति सम्बन्धी कृति प्रकाशन पछि २०५५ सालमा लोकवार्ता-लोककै चर्चा चिन्तन केही साधक-केही साधना जस्ता अत्यन्तै महत्वपूर्ण कृति एकै चोटि विमोचन गराउनु भयो । उहाँले आर्दश नेपाली व्याकरण इ.२००५ मा र नेपाली लोककथाहरूको असमी भाषामा रूपान्तरण गरी असम साहित्य सभा मार्फत प्रकाशन गर्नु भएको थियो । यसै सिलसिलामा रविन्द्रनाथ र नेपाली सहित्य-बङ्गलाबाटै नेपालीबाट अनुवाद गर्नु भएको थियो ।

संस्कृत, अग्रेजी, हिन्दी बङ्गला असमी भाषामा उतिकै बोल्ने लेख्ने डा. दोणकुमार पौडेल संस्कृत र हिन्दीमा उपाधि धारी विद्वान् हुनुहुन्थ्यो । विभिन्न राष्ट्रिय तथा अन्तराष्ट्रिय सेमिनारहरूमा गहकिला कार्यपत्र र वक्तव्य प्रस्तुत

गर्नुका साथै नेपाली र असमी भाषाका पत्र-पत्रिका सम्पादन गर्नु हुने उहाँलाई भारतका विभिन्न विश्वविद्यालयले अतिथि प्राध्यापकका रूपमा समेत निमन्त्रण स्वीकार गरी कार्य गर्नु भएको थियो । यतिमात्र होइन उहाँलाई भारतको गुवाहटी विश्वविद्यालयले नेपाली र असमिया भाषाको साहित्य स्तर बुझ्नका निमित्त एक चर्चित कृतिको नेपाली अनुवाद गर्न अनुरोध गरेको थियो । उहाँले सो स्वीकारेर सो कृति अति शिघ्र नेपालीमा विश्वविद्यालय द्वारा प्रकाशित समेत गराएको थियो ।

डा. उपाध्याय फरासिला, सहयोगी मिष्टभाषी छिटै खुल्न र मित्र बनाउन सक्ने तथा आफ्नो प्रचार प्रसार अन्धानुकरण र अन्धविश्वास नरुचाउने स्वभावको हुनुहुन्थ्यो ।. केही वर्षदेखि वैदिक आचरण व्यवहार ज्ञानको अध्यायनतर्फ एकोहोरिनु भएको थियो । साथै २०६० सालदेखि 'चेतना नेपाल' नामक संस्था राष्ट्रिय हिन्दू एकता मञ्च नेपालको केन्द्रीय सल्लाहकार समिति सदस्यको रूपमा समेत रहनु भएको थियो । समाज सुधारमा अति नै चिन्तित रही लागू औषध दुर्व्यशन नियन्त्रणमा उत्तिनै चासो राख्नु हुन्थ्यो । स्वधर्म संस्कार, संस्कृति संरक्षण, सम्र्द्धनमा एक हस्ती नै हुनुहुन्थ्यो । समाजको गतिशीलतालाई अगाडि वढाउन 'जरोकिलो महाअभियान'मा अतिनै रुचि राख्नु हुन्थ्यो । यसका लागि हरेक सल्लाह सुझाव दिदै देशप्रति ममता नै उहाँको जीवनका थप आयाम हुन् । एक छोरा दुई छोरी का पिता डा. द्रोणकुमार उपाध्यायकी सहधर्मिणी श्रीमती मिरा देवी पौडेल ३० वर्ष लामो शिक्षा पेशामा रहनु भएको छ ।

एउटा कुशल अभिभावक आज हामी बीच उहाँका केवल कृतिहरू मात्र छन् । उहाँ भौतिक रूपमा हामी बीच हुनुहुन्न तापनि उहाँले गरेका सत्कर्म सत्कार्य ताजै छन् । उहाँका मार्ग निर्देशन हाम्रा लागि सदा-सदा भावी पुस्ताका लागि पनि ताज रहिरहनेछन् । उहाँले समाजलाई बाटो देखाएर नै ब्रम्ह लीन हुन पुग्दछन । आजका दिनमा हामी यसै सत्यलाई नै स्वीकार गरिरहेका छौ । धार्मिक सांस्कृतिक गतिविधि लगायत अध्यात्मिक ज्ञान गंगांको अविरल प्रवाहका संवाहकका रूपमा परिचय दिन सफल द्रोणकुमार उपाध्याय सम्झनाका पात्र मात्र उहाँप्रति भावपूर्ण श्रद्धाञ्जलि अर्पण गर्दछु । ॐ

अन्त्यमा डा.द्रोणकुमार उपाध्यायको स्मारिका प्रकाशन गर्न लागेको सु-समाचार प्राप्त भएको हुँदा ज्यादै खुशी लागेको छ । यस घडीमा स्मारिका प्रकाशन परिवारप्रति हार्दिकताका साथ राष्ट्रिय हिन्दू एकता मञ्च नेपालको केन्द्रीय अध्यक्ष तथा मञ्च परिवार जरोकिलो महाअभियानका तर्फबाट हार्दिकता सहित शुभकामना दिन चाहान्छु । शुभकामना शुभकामना शुभकामना ।

*भद्रपुर, झापा*

*(लेखक राष्ट्रिय हिन्दू एकता मञ्च नेपालको केन्द्रीय अध्यक्ष एवम् सामाजिक अभियन्ता हुनुहुन्छ)*



कृष्ण धराबासी

# द्रोण सर अब समाजको सम्पत्ति

द्रोण सरलाई मैले २०४० सालदेखि चिनेको हुँ। मेरो उहाँसँगको चिनाइ एकपक्षीय थियो। म शनिश्चरे माविको शिक्षक थिएँ। उहाँ मेची क्याम्पसको सहप्राध्यापक हुनुहुन्थ्यो। मैले उहाँलाई चिन्ने आधार भनेको साहित्य नै हो। बिर्तामोडमा स्थापित विश्वदीप मुद्रणालयले छपाई मात्र गर्दैन थियो, त्यो उत्तरी झापाको साहित्यिक गतिविधिको केन्द्र नै बनेको थियो। मदन ढकाल र गोपीकृष्ण खनालको सक्रियतामा स्थापित त्यस प्रेसले २०३७ सालमा मेची अञ्चलस्तरीय साहित्य सम्मेलन गरेपछि अब त्यो केवल प्रेस मात्र रहेन। त्यसका संस्थापक दुबै जना आफैं साहित्यकार समेत हुनुहुन्थ्यो। त्यो प्रेसले छोटै समयमा झापाको साहित्यिक गतिविधिमा केन्द्रीय भूमिका निभाउन पुग्यो। त्यही प्रेसद्वारा स्थापित मञ्चबाट हामी त्यो बेलाका नवझापाली कविहरू जन्मिन थालेका हौं। त्यसको नेतृत्व भवानी घिमिरेले गर्नुभएको थियो। त्यसैबेलाको साहित्यिक यात्राको क्रममा उहाँसँग पहिलो भेटघाट र परिचय भएको हो। परिचयका क्रममा उहाँले आफू भट्टराईको भाञ्जो भएकोले मलाई मावलीको दर्जा दिनुहुन्थ्यो।

अत्यन्त सरल र मिलनसार स्वभावले गर्दा म पनि चाँडै उहाँसँग घुलमिल हुनपुगें। उहाँ पनि साहित्यिक साथी भएको र आफ्नो पनि साहित्यिक रुचि भएकाले होला, त्यो क्षण रमाइलो थियो। हामी नयाँ कविहरूसँग समकालीन साथीसँग जस्तो खुलेर उहाँ कुरा गर्नु हुन्थ्यो। उहाँले हाम्रा कविताहरूको प्रशंसा पनि गर्नुभयो र कमजोरीहरू पनि सहजै देखाउने गर्नुभयो।. त्यसअघि चाहिं मैले भद्रपुरका लेखक भनेर चिनेका नकुल काजी, भवानी घिमिरे, एसएल शर्मा, चूडामणि रेग्मीहरू नै हुनुहुन्थ्यो। बिस्तारै परिचयको दायरा फैलिने क्रममा म पनि उहाँसँग निकट हुन पुगें। २०४० सालमा हामी केही युवाहरूले 'भोक कविता आन्दोलन' शुरु गरेपछि एकाएक हाम्रो चर्चा शुरु भएको थियो। त्यसले झन् हाम्रा अग्रजहरूलाई हामीतिर आकर्षित गर्न थालेको थियो। झापाका भानु,

विश्वदीप, युगज्ञान, साप्ताहिक विचार, विवेचना, वरुण, जुही आदि पत्रिकाहरूले 'भोक कविता' स्तम्भ नै बनाएर हाम्रा कविता छाप्न थाले । यो बेला झापाली बुद्धिजीवी र प्रशासन एकैचोटिजस्तो सँगसँगै हामीतिर आकर्षित भएका थिए । प्रशासन हामीलाई शंकाको नजरले हेर्थ्यो भने बुद्धिजीवीहरू प्रोत्साहन र प्रशंसाको लस्करमा थिए । त्यही लस्करमा हुनुहुन्थ्यो, द्रोण सर पनि । उहाँले मेरा छापिएका वा मञ्चमा वाचन गरेका हरेक कविताहरूको प्रशंसा गर्नु हुन्थ्यो । त्यही भएर पनि म उहाँप्रति अझ आकर्षित भएको थिएँ ।

पछि २०४३ सालदेखि कृषि बिकास बैंकको जागिरमा प्रवेश गरें । मेरो पोष्टिङ पछि चन्द्रगढीमा भएर उतै डेरा लिनुपर्ने भयो । त्यसबेला हामी केही साथीहरू मिलेर मैत्री टोल, चन्द्रगढीका कृष्णबहादुर थापाको घरमा डेरा लियौं । अब त झन् म उहाँको घरकै छिमेकी पो हुनपुगेछु । त्यो टोल बौद्धिक समुदायहरू बस्ने भनेर चिनिएको रहेछ । त्यही टोलमा थियो, तारा बरालको घर र बराल छापाखाना । जहाँबाट छापिन्थ्यो, साप्ताहिक विचार पत्रिका । मेची क्याम्पसका नेपाली विषयका सहप्राध्यापक तारा विविधको घर पनि त्यहीं थियो । रामनाथ बाँस्कोटा पनि त्यही टोलमा हुनुहुँदो रहेछ । नजानिकनै डेरा बस्न पुगेका हामी एकदम नै बौद्धिक समुदायको संगतमा पुगेछौं, जुन मलाई चाहिएकै थियो ।

त्यसपछि त उहाँसँग मेरो निरन्तर भेट हुन थाल्यो । मैले आफ्नो लेखन र अध्ययनमा उहाँबाट निरन्तर सल्लाह र हौसला पाउन थालें । मैले साप्ताहिक विचारमा नियमित गद्य लेखन पनि गर्न थालेपछि अझ निकट हुन पुगें । उहाँले पनि लेख्नु भएका सांस्कृतिक र भाषिक लेखहरू सुनाउनु हुन्थ्यो । असमी साहित्यको पनि गहिरो ज्ञान भएकाले हाम्रो लेखन र असमी लेखनमा के कस्ता भेद छन् ? भनेर पनि सुनाउनु हुन्थ्यो । त्यो राजनीतिक विचारका लागि प्रतिबन्धित बेला थियो । त्यसले पनि हामी प्रजातन्त्रवादीहरूलाई निकट हुन आवश्यक थियो । हामी विद्रोही कविका रूपमा परिचित थियौं, तर प्रशासनले कार्वाही गरिहाल्ने निहुँ भेटेको थिएन । हामीमध्ये हिरा आकाशलाई भने प्रशासनले अलिक बढी नै खेद्थ्यो । ऊ सिडियो कार्यालयमा तारिख धाइरहन्थ्यो ।

द्रोण सर पनि विद्रोही चेतनाको हुनाले उहाँको सामीप्यता मलाई शितलु लाग्थ्यो । धेरै विवादमा आउन नचाहने, अनावश्यक बहसहरूमा भाग नलिने, सबैसँग मिल्ने, सधैं केही न केही खोज र अनुसन्धानमा लागिरहन मन गर्ने उहाँको बानी सबैका लागि प्रिय थियो ।

म २०४५ सालदेखि मेची क्याम्पसमा भर्ना भएँ, बी.ए.पढ्न । पछि उहाँ मेरो नेपाली विषयको शिक्षक पनि हुनुभयो । म पहिल्यैदेखि चिनिएको र जिल्लामा स्थापित कवि भइसकेकाले कक्षाभित्र पनि उहाँको मप्रतिको व्यवहार छात्रसँगको भन्दा भिन्दै थियो ।

पचासको दशकदेखि म पनि साहित्यिक संघ-संस्थाहरूमा सक्रिय तथा आयोजक हुन थालेपछि उहाँलाई हामीले विभिन्न विषयमा कार्यपत्रहरू लेखाउने दुःख दिन थाल्यौं । तर, उहाँले कहिल्यै हुँदैन, भ्याउँदिन, सक्दिन भन्नु भएन । आफूभन्दा भाइ पुस्ताहरूमा पनि आफै सरहको हैसियत देख्ने उहाँको नजरको हामी सधैं कदर गर्थ्यौं । पछि-पछि त हामीले हरेकपल्ट केही लेख्नु र बोल्नु पर्ने भएमा द्रोण सरको नाम शुरुमै राख्थ्यौं । उहाँले नभ्याउने हुँदा मात्र अरूतिर लाग्थ्यौं । जो सरल र सजिलो हुन्छ, उसैलाई धेरै पिरोलिंदो पनि रहेछ, भन्ने लाग्छ ।

मैले साहित्यमा लीलालेखनको अभियान लिएर हिंडेपछि झापामा निकै विरोध खप्नुपऱ्यो । प्रगतिशील पक्षका लेखक तथा बुद्धिजीवीहरूको निकै कडा आक्रमण हुन्थ्यो । तर, त्यसमा पनि द्रोण सरले मलाई कहिल्यै निराश बनाउनु भएन । उहाँमा आध्यात्मिक चेत र अध्ययन भएकाले पनि त्यो विषयमा सम्भावना देख्नुभएको थियो होला । भन्नु हुन्थ्यो- 'इन्द्रबहादुर राई जस्तो विद्वानले त्यसै यस कुरालाई उठाउनु भएको छैन । यसको गहिराईसम्म पस्ने कोशिश गर्नु, बहस र विवादसँग नआत्तिनु ।' त्यस कुराले मलाई ठूलो हौसला मिल्थ्यो । पछि, रत्नमणि नेपालको नेतृत्वमा चन्द्रगढीको नवयुवा भाइहरूको साथ पाएपछि मेरो यो यात्राले पखेटा हाल्यो ।

हिन्दू धर्म र दर्शनबारे गहिरो अध्ययन भएका उहाँलाई फरक प्रकारले नै हेर्ने गरिन्थ्यो ।

२०६४ सालदेखि म काठमाडौं आएपछि झापाका सबैसँग नै मेरो सम्पर्क पातलिन गयो । त्यो पातलिनेमा द्रोण सर पनि पर्नुभयो । तैपनि पछि फेसबूकमा म जोडिएको रहेछु । तर, मेसेन्जरमा खासै सम्वाद भएको भेटिनँ । झापा जाँदा पनि माथि-माथि नै घुमेर फर्किन थालियो । पर-परबाट हालखबर लिंदै गरे पनि वास्तवमा सूचना पातलिएकै थियो । त्यसै बीचमा म आफैं पनि पारिवारिक शोकमा परेपछि सम्पर्कहरूबाट भाग्न थालें । एकलकाँटे जस्तो हुँदै गएँ । जीवनका स्वाभाविक उतारचढावहरूले कतिपय पुराना सम्बन्धहरूलाई पातलो बनाउँदै जाने रहेछ ।

त्यस्तै परिस्थितिले गर्दा केही वर्ष मैले देशै छोड्न पर्‍यो । ती पाँच वर्ष मेरो जीवनका लागि बनवास नै थिए । अत्यन्त मानसिक कष्टका साथ बिताएको छु त्यो समय । त्यसबेला त झन् मेरो कसैसँग पनि सम्पर्क हुने कुरै भएन । त्यसै बेलामा उहाँलाई क्यान्सर जस्तो असाध्य डरलाग्दो रोगले समातेछ । त्यो रोगसँग हाम्रो परिवारले लडिसकेको हुँदा 'त्यसको पीडा कस्तो हुन्छ' भन्ने म सहजै अनुभव गर्न सक्छु । तर, मलाई उहाँ 'त्यस रोगबाट बिरामी हुनुभएको छ' भन्ने कहिल्यै थाहा भएन । बरू खडानन्द वाशिष्ठ सरको कलेजोको क्यान्सरका बारेमा अमेरिकामै थाहा पाएको थिएँ, उहाँका छोराबाट । पछि, एकाएक द्रोण सर बितेको समाचार फेसबूकबाट थाहा पाएँ र अचम्भित भएँ । अनि सोधखोज गर्दा मात्र उहाँ त्यो 'असाध्य डरलाग्दो रोगको पीडासँग जुध्दा-जुध्दै बित्नु भएछ' भन्ने बुझें ।

हामी सबैले कुनै न कुनै कारण बोकेर एक दिन यो जीवनबाट पाखा निस्कनै पर्छ । को कहिले कसरी निस्कने हो ? भन्ने थाहा नभएकाले मात्र हामी हाँसिरहेका, रमाइरहेका हुन्छौं । झापाका धेरै अग्रज र समकालीनहरूमाथि हामीले श्रद्धाञ्जलिका फूल चढाइसकेका छौं । मानिस भौतिकरूपमा बितेर गए पनि उसको योगदानलाई हामीले समाजको जिम्मा लगाउनु पर्छ । त्यसका लागि यिनै स्मरण र उनले दिएका कृतिहरू नै हुन्छन् । आज फेरि हामीले द्रोण उपाध्याय सरलाई समाज हस्तान्तरण गर्न लागेका छौं । त्यस काममा मैले पनि यो एउटा सानो स्मृति चढाउन पाएकोमा खुशी लागेको छ । हार्दिक श्रद्धाञ्जलि द्रोण सर !

*बिर्तामोड, झापा*

*(लेखक प्रसिद्ध आख्यानकार हुनुहुन्छ)*



कृष्ण सुवेढ़ी 'निराकार'

# द्रोण सरसँगका क्यै-क्यै कुरा !

हरेक व्यक्ति एउटा न एउटा नातामा वाँधिएको हुन्छ । त्यो नाताले उसलाई अर्को नातासँग परिचत गराएको हुन्छ । 'जीवन एक-नाता अनेक' भनेझैं द्रोण सर पनि धेरै मान्छेको मनभित्र अनेकौं नाताभित्र बाँधिएर बस्नु भएको थियो र ऐलेपनि बसिरहनु भएको छ । । ती नाताहरु मध्ये मेरो पनि प्रगाढ नाता छ द्रोण सर प्रति । त्यो नाता हो 'गुरु-चेला'को नाता ।

२०३९ सालको को कुरा हो । जब म मेची क्याम्पसमा प्रविणता प्रमाण-पत्र तहमा अध्ययन गर्न सिन्धुलीबाट झापा झरेँ, हो त्यो बेला सुरुसुरुमा म द्रोणसरलाई अलिअलि चिन्थें । म मेरो दिदी भिनाजुको घरमा बसेर क्याम्पस पढ्थें, त्यसै घरमा मेची क्याम्पसकै लाइब्रेरियन रामनाथ बास्कोटा सर पनि डेरा गरेर बस्नुहुन्यो । उहाँहरु वीच ज्वाइँ-जेठानको नाता थियो । बैनी ज्वाइँकोमा आउँने जाने क्रममा मसँग पनि बाक्लै भेट हुन थाल्यो द्रोणसर सँग ।

जब म मेची क्याम्पसमा प्रविणता प्रमाण-पत्र तह दोश्रो वर्षमा अध्ययन गर्न थालें, द्रोणसरले हामीलाई त्यसबेला नेपाली विषय पढाउनु हुन्थ्यो । पढाउने क्रममा जब द्रोणसर हामीलाई बसाई उपन्यास पढाउन थाल्नुभयो, हो त्यही पाठदेखि म द्रोणसरलाई 'हो, पढाइ भनेको यस्तो पो हुनु पर्छ !' भन्दै मनमनै सलाम गर्न थालें । मैले त्यो बेला आक्कल-झुक्कल अरु सरहरुको कक्षा छाडेपनि द्रोणसरको कक्षा कहिल्यै छाडिनँ । द्रोणसरले बसाइँ उपन्यासका 'झुमा र रिकुटे' पात्रको चरित्र चित्रण गर्दा कक्षाका सबै विद्यार्थीहरु भावुक हुन्थे । आँसु नै झर्लाजस्तो हुन्थ्यो । बडो गम्भिरतापूर्वक, साँच्चि नैं हामी ती पात्रहरु बनेर नाटक मञ्चन गरिरहेका छौं जस्तो गरेर पढाउनु हुन्थ्यो । द्रोणसरका बारेमा कुरा चल्दा म त्यो क्षण ऐले पनि झल्झली सम्झन्छु ।

द्रोणसरको बारेमा सम्झँदा अर्कोकुरा पनि मलाई याद आउँछ, जुनबेला

द्रोणसरले बसाई उपन्यास पढाउन सुरु गर्नु भयो, पहिलो दिन लेखक परिचय गराउनु भयो । बसाइँ उपन्यासका उपन्यासकार लीलबहादुर क्षेत्रीको बारेमा उहाँले यति राम्ररी परिचय गराउनु भयो कि- कतिखेर असम पुगेर लीलबहादुर क्षेत्रीलाई भेटेर सुमसुम्याउन पाएहुन्थ्यो जत्तिकै पार्नुभयो । त्यसैबेलादेखि लीलबहादुर क्षेत्री प्रति पनि मेरो श्रद्धा जागेर आयो । पछि लीलबहादुर सर नेपाल आउँदा दमकको बृहत् अन्तर्राष्ट्रिय नेपाली भाषा सम्मेलनमा भेट भयो । नजिकबाट देखें । र, ऐले पनि म साहित्यिक यात्रामा होस् वा पारिवारिक तीर्थयात्रामा होस् अथवा शैक्षिक भ्रमण-अवलोकन भ्रमणमा गौहाटी जाँदापनि लीलबहादुर क्षेत्री सरको घरलाई साहित्यिक तीर्थस्थलका रुपमा उहाँको घरमा पुगेर भेटघाट गरेर मात्रै आउँछु । यो श्रेय म द्रोणसरलाई नै दिन्छु, किनकि उहाँले त्यो दिनको त्यो पाठ त्यसरी नपढाइ दिनुभएको भए मलाई त्यसरी श्रद्धा नजाग्न पनि सक्थ्यो होला ।

समय बित्दै गयो । द्रोणसरसँगको सामिप्यता अझै प्रगाढ हुँदै गयो मेरो । मैले बुझेसम्म द्रोणसर लेखनाथ पुस्तकालयसँग पनि आबद्ध हुनुहुन्थ्यो । २०५० साल असोज २३ गतेका दिन लेखनाथ पुस्तकालयको दयनीय अवस्थाको सुधार गर्न चन्द्रगढी क्षेत्रका साहित्यकार, पत्रकार, समाजसेवी र शिक्षासेवीहरुको पहलमा पुस्तकालयको पुनर्गठन गर्न भेला बोलाइयो । कविशिरोमणि लेखनाथको थर पौडेल भएकोले यो पटक पौडेल थरी भएकाहरुलाई प्राथमिकता दिने भन्ने कुरा उठ्यो र पुस्तकालयको अध्यक्षमा द्रोणसरको नाम प्रस्ताव भयो । सबैले स्वीकार्नु भयो । उहाँको नेतृत्वमा मुख्यतया माथिल्लो (मेजर) ५ पदमा पौडेलहरुलाई नै प्राथमिकता दिइयो । जस अनुसार- अध्यक्षमा द्रोणकुमार पौडेल, उपाध्यक्षमा योगराज पौडेल, सचिवमा ताराराज पौडेल, सह-सचिवमा मणिराम न्यौपाने (पौडेलको ज्वाइँ), कोषाध्यक्षमा रजनी बराल (पौडेलको छोरी), सदस्यहरुमा अच्युतराज पोखरेल, रामप्रसाद दाहाल (पौडेलका छिमेकीहरु) गरी विधानतः जम्मा सात जनाको समिति सर्वसम्मत चयन भयो । पछि कार्य समितिको बैठकबाट चारजना सदस्यहरु मनोनित गरी ११ जनाको कार्य समितिलाई पूर्णता दिइयो । 'येनकेन प्रकारेण' यो समिति २०५७ भाद्र सम्म रह्यो । पछि खडानन्द वाशिष्ठ सरको पहलमा २०५७ भाद्र २६ गतको फेरि अर्को भेलाले नीलमणि नेपालको अध्यक्षतामा अर्को समिति गठन भयो त्यसैबेला मैले पनि सचिव पद धारण गर्ने अवसर प्राप्त गरें ।

द्रोणसर सादा जीवन उच्च विचारका धनी हुनुहुन्थ्यो । सबैसँग मिल्ने, घुलमिलहुने उहाँको स्वभाव थियो । एउटा न एउटा साइनो लगाएर बोल्ने बोलाउने उहाँको चलन थियो । मेरो जेठो छोराले पौडेलकी छोरी विवाह गरेको हुनाले पछिल्लो समयमा प्यारो गरेर बडो आत्मीयताका साथ रमाइलो र ठट्यौली पाराले मलाई “ओ सम्धी के छ तिम्रो हाल खबर ?” भन्दै जिस्कँदै-जिस्क्याउँदै बोल्नुहुन्थ्यो ।

द्रोणसरको अर्को विशेषता- कतिपय मान्छेहरु हामी असमबाट आएको भन्न हिच्किचाएको मैले धेरै पाएको छु, खै किन अप्ठ्यारो मानेका हुन्, तर द्रोणसर “हामी असम बटियामारीबाट आएका हौं” भनेर निर्धक्कसाथ भन्नहुन्थ्यो । उहाँ आफ्नो जन्मभूमि असमलाई धेरै मायाँ गर्नुहुन्थ्यो । असमबाट कोही साहित्यकारहरु आउँदा प्राय सबै साहित्यकारहरुका घरघरमा चिनजान गर्न ल्याउनुहुन्थ्यो । मेरै घरमा पनि धेरै पटक असमका साहित्यकारहरु लिएर चिनजान गराउन ल्याउनु भएको थियो ।

२०६८ साल श्रावण महिनामा म निक्कै ठूलो विरामी परें, एक महिना पछि काठमाण्डौंबाट उपचार गरेर फर्केपछि मलाई हेर्न द्रोणसर मेरो घरमा आउनु भयो । सबै हालखबर सोधखोज गर्नुभयो । मेरो स्वास्थ्यलाभको कामना गर्नुभयो । मैले त्यसैबेला मुक्तक विधामा पूर्वाञ्चलबाट छनोट भएर अन्तरङ्ग मुक्तक राष्ट्रिय साहित्यिक सम्मान पाएको खबर उहाँले पत्र-पत्रिका मार्फत थाहा पाइसक्नु भएको रहेछ । मलाई बधाई पनि दिनुभयो, र कुरैकुरामा “बरु तिमी हामीलाई बाहिरकाले चिन्छन् तर स्थानीय, जिल्लाकाले चिन्दैनन्, यहाँ विद्या र योग्यताको कदर हुँदैन, ‘स्वदेशे पूज्यते राजा विद्वान सर्वत्र पूज्यते !’ भन्छन् तर यहाँ नातावाद र कृपावादबाट धेरै पुरस्कारहरु पजनी हुन्छन् !” आफैं दोसल्ला किनिदिएर आफैंलाई आढाई माग्छन् भनेर धेरै गुनासो पनि गर्नुहुन्थ्यो । उहाँको यो कुरा मैले धेरै दिनसम्म सम्झिरहें । पछि म साहित्य चौतारी झापाको कोषाध्यक्ष भएको बेला साहित्य चौतारीको बैठकमा चौतारीको वार्षिक कार्यक्रममा सम्मान गर्न स्रष्टा छनोट समितिको सदस्यको नाताले मैले द्रोणसरको नाम प्रस्ताव गरें अरुहरुले पनि धेरै नामहरु प्रस्ताव गर्नुभयो । त्यो बेला मेरो प्रस्तावलाई सबै साथीहरुले सहर्ष स्वीकार्नु भयो, तर द्रोणसरले यो पुरस्कार स्वीकार्नु हुन्छकि हुन्न भनेर बैठकमा तर्क वितर्क उठ्यो । मैले त्यत्तिनै बेला द्रोणसरलाई फोन गरेर अनुमति मागें, नभन्दैं सरले पनि स्वीकार्नु भयो र त्यो वर्षको साहित्य चौतारीको वार्षिक

कार्यक्रममा असार ३१ गते विशेष सम्मानका साथ 'डिकमान विरही साहित्य स्रष्टा पुरस्कार'बाट द्रोण सरलाई सम्मान गरियो । त्यो दिन द्रोण सर निक्कै भावुक मुद्रामा हुनुहुन्थ्यो । बेलुकी घरमा आएपछि सरले मलाई धेरै धन्यवाद दिनुभयो । साहित्य चौतारी परिवारलाई पनि धेरै धन्यवाद दिंदै आभार व्यक्त गर्नुभयो ।

द्रोणसरको विद्वत्ता निक्कै थियो । उहाँमा नेपाली, बंगाली असमिया, हिन्दी, अंग्रेजी, सँस्कृत लगायतको धेरै भाषाको ज्ञान थियो । उहाँले महाकवि देवकोटाको मुना-मदन कृतिलाई असमिया भाषामा अनुवाद नै गरिसक्नु भएको थियो तर प्रकाशन भने हुन पाएन । यस्ता धेरै रचनाहरु अप्रकाशित रुपमा रहेका हुन सक्छन् । परिवार श्रोतले उहाँका यस्ता सबै अप्रकाशित  रचनाहरु प्रकाशन गर्नसके नेपाली भाषा साहित्य जगतलाई धेरै फाइदा हुने थियो ।

अन्तमा, द्रोणसरले आफ्नो भौतिक शरीर छाडेर हामीबाट टाढा जानु भएपनि उहाँका वाणी र लेखनीले सँधै जिवित राखेको छ उहाँलाई । उहाँ अजर-अमर हुनुहुन्छ हामी धेरैको मन-मुटुभित्र । यस्ता श्रद्धेय गुरु प्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्नु शिवाय अरु के नै गर्न सक्छु र !

*निराकार बसिबियाँलो*

*भद्रपुर-१०, केन्द्रमोड, झापा*

*बँधुवा फोन- ०२३-४५६०२२*

*डुलुवा फोन- ९८५२६५६०२२*

*(लेखक- हास्यव्यङ्ग्यकार, बालकविका साथै शुक्रराज आधारभूत विद्यालय, देवनियाँ, बिर्तामोड- ८, झापाका प्रधानाध्यापक हुनुहुन्छ)*



प्रा.डा. के.आर. खम्बू

# फरासिला सर द्रोणकुमार उपाध्याय !

म बीरगञ्जबाट मेची क्याम्पस सरुवा भएर आउँदा त्यति बिरानो महसूस भएन। किनभने पहिलो कुरो, यो मेरो गृह जिल्ला थियो। दोस्रो कुरो, कीर्तिपुर क्याम्पस पढ्दाका थुप्रै मेरा दौंतरी साथीहरू पहिल्यैदेखि यहाँ कार्यरत हुनुहुन्थ्यो। मेची क्याम्पसको विज्ञान भवन मुख्य भवनबाट निकै पर (करीब २०० मिटर) उत्तर-पूर्व पर्ने घोडामारा (टेङ्गा) खोलाको किनारामा भएकोले काम नपरी मुख्य भवन आइन्न थियो। तर पनि क्याम्पसको प्रशासनिक कार्यालय पुरानो मुख्य भवनमा भएकोले कहिलेकाहीं प्रसाशनिक काम पर्दा त्यहाँ पुग्नै पर्थ्यो। त्यो बेला क्याम्पस पढाउने शिक्षक संख्या पनि कम थियो। क्याम्पस-प्रमुखको कार्यालयमा आउने जानेको संख्या पनि पातलै थियो।

एक दिन म मुख्य क्याम्पस भवनको शिक्षक साझा कोठामा धुम्धुम्ती बसिरहेको थिएँ। सरहरू फाट्टफुट्ट आउनु हुन्थ्यो, कोही चक-डस्टर पिजनहोलमा थन्काएर फर्किहाल्नु हुन्थ्यो त कोही हतारिंदै आई आफ्नो पिजनहोलबाट चक-डस्टर झिकेर क्लासरूमतिर कुद्नु हुन्थ्यो। यस्तै चहलपहल एक्लै टोलाएर हेर्दै बसिरहेको बेला एक जना मझौला कदका, अधबैंशे सर हँसिलो अनुहार बनाउँदै मेरो छेउमा आएर ओजिलो तरिकाले भन्नु भयो- 'बीरगञ्जबाट आएका नयाँ सर भनेको तपाईं नै हुनुपर्छ जस्तो मलाई लाग्यो।'

'हजुर, मै हुँ। मेरो नाम केआर खम्बू हो।' मैले जबाफ दिएँ।

'मेरो नाम द्रोणकुमार उपाध्याय हो। म यही क्याम्पसको नेपाली विषयको शिक्षक हुँ। ग्लाड टू मीट यू !' भन्दै हात अघि बढाउनुभयो।

म पनि झट्पट जुरुक्क उठेर 'मी टू' भन्दै 'मलाई पनि तपाईंसँग भेट्दा सारै खुशी लाग्यो !' भनेर दुबै हात उहाँको हातसँग मिलाएर निकै बेर हल्लायौं।

उहाँ पनि बडो फरासिलो हुनुहुँदो रहेछ। नजिकैको बैठक टेबुलको छेउको कुर्सीमा बस्दै मेरो अन्तर्वार्ता लिन थाल्नुभयो। उहाँको सोधाइअनुसार मैले

मेरो जन्मस्थानदेखि हुर्केको-बढेको-पढेको अनि जागिर खान थालेकोसम्म जवाफ दिएँ । उहाँले पनि आफ्नो थातथलोदेखि असमतिर उच्च शिक्षासम्म पढी त्रिवि कीर्तिपुरबाट नेपाली विषयमा स्नातकोत्तर गरेको कुरा ठाँटिलो तरिकाले बताउनुभयो । असमतिर पढ्नु भएर होला, घरिघरी अंग्रेजी पनि मिसाएर कुरा गर्नु हुन्थ्यो । आफ्नो सबै परिचय दिएपछि अन्त्यमा 'म यस क्याम्पसको नेपाली विभागको अहिले अध्यक्ष पनि छु' भन्नु भयो ।

अनि त्यहींबाट मैले पहिलोपल्ट द्रोण सरलाई मेची क्याम्पसका अरूको पनि चासो राख्ने एक फरासिला साथै सक्रिय शिक्षक हुनुहुँदो रहेछ भनेर चिनेको थिएँ । त्यसपछि त 'आयो गयो माया मोह, आएन गएन को हो को हो !' भने झैं क्याम्पस जाँदा-आउँदा, हाटबजारतिर घुम्दा, बाटो हिंड्दा नियमित भेट हुने गर्थ्यो । त्यो बेला मलाई सम्झना रहेसम्म प्रायः क्याम्पस आउँदा साइकलमा आउने गर्नु हुन्थ्यो । बाटातिर भेट हुँदा अभिवादन आदानप्रदान गर्दै एकछिन साइकलबाट ओर्लेर भए पनि कुराकानी गर्नु हुन्थ्यो । भलाकुसारीका कुरा गर्दा मसँग आधा जति अंग्रेजी मिसाएर बोल्नु हुन्थ्यो । पहिले-पहिले त मलाई ताजुब लाग्थ्यो कि, नेपाली विषयका शिक्षक किन यसरी अंग्रेजी मिसाएर बोल्नु भएको हँ... भनेर । उहाँसँग कुराकानी गरिसकेपछि पनि म एक्लै हिंड्दा 'शायद म अंग्रेजी माध्यमबाटै पढाउने विज्ञानको शिक्षक भएकोले होला भनेर' चित्त बुझाउथें । तर पछि, रहँदै बस्दै जाँदा उहाँ असमतिर पढ्दा अंग्रेजी मिसाएर कुरा गर्ने बानी बसेको रहेछ, भन्ने थाहा भयो ।

यस्तै परिवेश थियो, मैले मेची बहुमुखी क्याम्पसमा द्रोण सरसँग भेटघाट भएको पहिलो चरण ।

त्यसपछिका दिनहरू मेची क्याम्पसमा बित्दै गए । हरेक वर्ष नयाँ विद्यार्थीहरूलाई कक्षा कोठामा स्वागत गर्दै पढाइ शुरु गर्ने अनि हरेक वर्ष आफ्ना पुराना विद्यार्थीहरूलाई शुभकामनाका साथ बिदाई गर्ने हामी शिक्षकहरूको जीवनसँग गाँसिएको कार्यतालिका नै थियो । प्राध्यापन कार्यबाट बचेको समयमा उहाँ शायद २०५० देखि २०५५ सालतिर झापाका 'आदिवासी मेचे, राजवंशी, धिमाल, सतार आदि जातिहरूका भाषा, संस्कार र संस्कृति बारे खोज गर्दैछु' भन्नु हुन्थ्यो । उहाँ आफ्नो खोजबारे अझ स्पष्ट पार्न यहाँका यी मेचे, राजवंशी आदि आदिवासी भाषाहरू कोच भाषाकै हाँगाबिगा हुन् पनि भन्नु हुन्थ्यो । उहाँ कोच असमिज भाषा, संस्कार संस्कृति बारे आफूलाई राम्रो ज्ञान भएको कुरा बताउनु हुन्थ्यो ।

एक दिन उहाँसँग कुरैकुरामा असमिज भाषाको गीत-सङ्गीतको कुरा निस्क्यो । मैले पनि जान्नु हुन्छ भने एउटा सुनाउनुस् न त, भनेर अनुरोध गरें । आहा... उहाँले त असमिज भाषा त रैथाने असमिजहरूले बोलेजस्तै फरर धाराप्रवाह बोल्नु हुँदै एउटा मात्र होइन, दुई-तीन वटा छोटा-छोटा टुक्रे गीत मौलिक लयमा नै गाएर सुनाउनुभयो । अनि म छक्क पर्दै उहाँलाई भनेथें 'लौ सर, साँच्चै तपाईं आसामिज भाषा संस्कृतिको विज्ञ नै हुनुहुँदो रहेछ ।'

म २०५५ देखि २०६० सालसम्म विद्यावारिधिको अध्ययन अनुसन्धानमा लागेको बेला उहाँले पनि 'विद्यावारिधि गर्न नर्थ बङ्गाल युनिभर्सिटीतिर प्रयास गर्दैछु' भन्नु हुन्थ्यो । तर, हाम्रो अनुसन्धानको विषय फरक थियो । उहाँले त्यसबेला नेपालका पुराना 'सवाई साहित्यमा आधारित 'सवाई' बारे अनुसन्धान गर्दैछु' भन्नु हुन्थ्यो । उहाँको नयाँ साथीहरूसँग छिट्टै घुलमिल हुने अद्वितीय गुण थियो । साथीभाइले कुनै जिज्ञासा राखेर सोधेमा बडप्पन नदेखाई आफूले जाने जति भन्नु हुन्थ्यो ।

शायद त्यसबेला आफ्नो अनुसन्धानका लागि उभयचर र सरिसृपको नमूना सङ्कलन गर्न म पहाडको कुनै नयाँ ठाउँमा पुगेको बेला एकपल्ट उहाँसँग भेट भयो । मैले सोधिहालें- 'सरको अनुसन्धान कहाँ पुग्यो होला ?' उहाँले 'चल्दैछ, म पनि तपाईं जस्तै अनुसन्धानका लागि तथ्याङ्क सङ्कलन गर्न यता आएको हुँ ' भन्नुभयो । उहाँले पनि 'अनि सरको चैं डाक्टर बन्ने बेला कहिले आउला ?' भनेर मलाई दरो प्रश्न सोध्नुभयो । मैले पनि सङ्कलन गरी सामग्री बोक्न झोलीतुम्बी देखाउँदै 'यी हेर्नुस् न सर !' भन्दै केही भ्यागुता, छेपारा र सर्पहरूका नमूनाहरू देखाइदिएँ । अब यसलाई पहिचान गर्नु छ अनि लेख्नु छ, बुझाउनु छ, अझै दिल्ली टाढै छ सर !' भनेर जवाफ दिएँ ।

मेरो पालो फेरि उहाँलाई भने 'लौ सर ! अब तपाईंको प्रगति सुनौं न त !'

शायद उहाँ यही मौकाको पर्खाइमा हुनुहुन्थ्यो होला । तुरुन्त डायरी निकालेर 'यी यो डायरी भरिन लाग्यो 'सवाई' सङ्कलन गरेर । तपाईंका भ्यागुतो, छेपारो जस्तै अब यी सवाईहरूलाई छानबिन गर्न पर्‍यो, यसबारे व्याख्या विश्लेषण गर्नु पर्‍यो, शोध निर्देशकको चित्त बुझाउनु पर्‍यो, स्वीकृति हुनु पर्‍यो । यसर्थ मेरो पनि तपाईंको जस्तै दिल्ली टाढै छ' भन्नुभयो ।

एकछिन दुबै जना आपसमा हाँस्दै उहाँको हातको डायरीलाई देखाएर मैले- ' त्यो डायरीको एउटा सवाई सुन्न मिल्छ सर ?' भनेर सोधी हालें । उहाँ ठूलो

भएर गमक्क पर्ने मान्छे नभएकोले 'लौ सुनाउँला न त' भन्दै डायरीको सवाईहरू छान्नु थाल्नुभयो । त्यसपछि उहाँले 'भोटको लडाइँको सवाई र नब्बे सालको महाभूइँचालोको सवाई सर्रर गाएर सुनाउनुभयो । उहाँले 'सुन सुन पाँच हो, म केही भन्छु, भोटको लडाइँको सवाई कहन्छु' भन्ने लयमा भाँती पारेर सवाई भनेको सुन्दा मैले उहिले बाबु-बाजेको पालातिर घुमन्तेहरूले सवाई भनेको सम्फें । उहाँले यस्तो लोप हुनै लागेको लोकसंस्कृतिकै रूपमा रहेको सवाईलाई अध्ययन अनुसन्धानको विषयवस्तु बनाई अहिलेको पुस्तासम्म ल्याइदिने जुन जमर्को गर्दै हुनुहुन्थ्यो, त्यसबाट म अति प्रभावित बनेर उहाँलाई भनको थिएँ- 'तपाईंले समाजका लागि गर्न लाग्नुभएको योगदान अतुलनीय छ । कडा परिश्रम गरिरहनु भएको रहेछ, सफलताको हार्दिक शुभकामना !'

मैले २०६१-'६२ सालतिर विद्यावारिधि गरिसक्दा उहाँले पनि गरिसक्न लाग्नुभएको रहेछ । त्यसपछिका जीवनमा पनि हामी एकै क्याम्पसमा कार्यरत रह्यौं । प्राध्यापन कार्यमा व्यस्त रहँदारहँदै सेवा अवधिको उत्तरार्द्ध पनि आइपुगिहाल्यो । मभन्दा केही वर्षअघि उहाँ सेवानिवृत्त हुनुभएको थियो । तर पनि उहाँ प्राज्ञिक काममा सक्रियताका साथ लागिरहनु भएको देखिनु हुन्थ्यो । बाटाघाटामा भेट्दा पनि पाँच-दश मिनट कुरा चलिहाल्थ्यो । कहिले 'लोकसङ्गीतको सम्मेलन गर्न पहाडतिर लागेको छु' भन्नु हुन्थ्यो । कहिले 'नेपाली भाषिक सम्मेलनको लागि बाहिर जाँदैछु' भनेर भारतको विभिन्न ठाउँ पुगेको कुरा बताउनु हुन्थ्यो ।

बाहिर सभा, सम्मेलनमा सहभागी हुन जाँदा प्राप्त गरेका अनुभवहरू पनि साथीभाइमा बाँड्न उहाँ कञ्जुस्याइँ गर्नु हुन्न थियो । प्रायः उहाँ विदेश यात्रामा आफू प्राज्ञिक भएर हिंड्दा अंग्रेजी फर्रर बोल्न सकिएन भने हेप्छन् भन्नु हुन्थ्यो । यसर्थ जुनसुकै विषयको विशेषज्ञ भए तापनि देश बाहिर जाँदा अंग्रेजीमा दखल चैं हुनै पर्छ, नभए अन्तर्राष्ट्रिय सभा-सम्मेलनमा नगए हुन्छ' भनेर आफ्नो कटु अनुभव बताउने गर्नु हुन्थ्यो ।

पछिल्लो पटक के थाहा र ! पूर्व क्याम्पस-प्रमुख उमानाथ ओली सरको घरमा उहाँसँगको भेटघाट र कुराकानी नै द्रोण सरसँगको हाम्रो अन्तिम भेट होला भनेर ! उक्त भेटघाट कार्यक्रममा क्याम्पसका प्रायः पुराना सबै सरहरू भेट भएका थियौं । सबै सर तथा म्याडमहरू आ-आफ्नै धुनमा कुरा गरिरहनु भएको थियो भने द्रोण सर र म सबभन्दा पछिल्लो लहरको कुर्सीमा बसेर गफ गरिरहेका थियौं । त्यसबेला उहाँ हट्टाकट्टा हुनुहुन्थ्यो र सेवानिवृत्त जीवनमा विभिन्न सेमिनार-

गोष्ठीहरूमा सहभागी हुँदा झन् व्यस्त रहनु परेको कुरा चाखलाग्दो तरिकाले भन्नुभएको थियो । त्यस भेटघाटमा पनि उहाँले मलाई भन्नुभयो- 'हेर्नुस्, म ७०-७१ वर्ष लाग्न लागें, तैपनि म अझ युवकै छु जस्तो ठानी कुदिरहेको छु । तपाईंको त अवकाश हुने मिति आइपुग्न बाँकी नै छ । मैले जानेको कुरो, अल्छी मान्न हुँदैन यति हो । जाँगर चलाउन पऱ्यो, सबै ठीक हुने गर्छ ।'

उहाँका ती साहसी कुराले मेरो निम्छरोपनालाई घोचिरहेको थियो ।

भव्य पार्टी सकिएपछि उमा सर र आयोजक ओली परिवारलाई धन्यवाद दिँदै हामी सबै फर्क्यौं ।

यसरी सँगै भेटघाट कार्यक्रमबाट छुटेर आएको करीब ४-५ महिना पनि बित्न नपाउँदै द्रोण सर त बिरामी परेर उपचार गराई फर्कनुभएको छ रे भनेर छिमेकी सहकर्मी घनिष्ठ मित्र होम सुवेदी सरले सुनाउनुभयो । उहाँको खबरबाट अचम्भित हुँदै 'हो र !' मात्र भनें । तीन-चार महिना अघि मात्र गफ गरेर फर्केका साथी ' यति चाँडै बिरामी पर्नु होला' भन्ने कल्पना नै गर्न सकिन । तर के गर्नु र ! हावा-पानीको शरीर, करकौलोको पातमा अडिएको पानीको थोप्लो जस्तो जीवन सानो हावा चल्दा पनि टल्किरहेको थोपो भूइँमा झरिहाल्दो रहेछ । ठीक त्यस्तै भयो, फेरि दुई महिनापछि खबर सुनें... 'द्रोण सर अब रहनु भएन भनेर !' हो... सबैको जीवन नै करकौलोको पातको पानीको थोपाजस्तै रहेछ, कतिखेर झर्छ, कसैलाई थाहा हुन्न !

अन्त्यमा, फरासिला द्रोणको आत्माप्रति श्रद्धा सुमन !!

*१५ भदौ २०७७ (३१ अगस्त २०२०)*

*-भद्रशिवा मन्दिर मार्ग, भद्रपुर- ८, झापा (नेपाल)*

*(लेखक मेची बहुमुखी क्याम्पसका सेवा निवृत्त विशिष्ट प्राध्यापक तथा साहित्यकार हुनुहुन्छ)*



खेमराज ढाहाल (खोमन)

# प्राज्ञिक डा. द्रोणकुमार उपाध्याय

डा. द्रोणकुमार उपाध्याय विद्यार्थी, समाज तथा ज्ञान लिन चाहने सम्पूर्णका लागि आफैमा एक पुस्तक तथा प्राज्ञिक व्यक्तित्व हुनुहुन्थ्यो । झापा जिल्ला, भद्रपुर-९, मैत्रीटोल निवासी तथा त्रिभुवन विश्वविद्यालय अन्तर्गत भद्रपुर मेची बहुमुखी क्याम्पसका नेपाली भाषा विभागका प्राध्यापक डा. द्रोणकुमार उपाध्याय एक जना मृदुभाषी सहज-सरल र विद्वान हुनुहुन्थ्यो । छोटो समयमा पनि आत्मीय सम्बन्ध गाँसिएको उहाँसँग प्राज्ञिक विद्यार्थी परिषद्को माध्यमबाट परिचित हुन पुगेको थिएँ । उहाँको असामयिक निधनको दुःखद समाचारले मर्माहत भएको छु । उहाँलाई सम्झना गर्दै पवित्र स्मृतिमा केही शब्द लेख्ने प्रयास गरेको छु ।

प्राज्ञिक विद्यार्थी परिषद्का तत्कालीन महासचिव श्री नारायण ढकाल झापा प्रवासमा आउनु भएको बेला उहाँले डा. द्रोणकुमार उपाध्यायको विषयमा कुरा गर्नु भयो, उहाँ पनि प्राज्ञिक विद्यार्थी परिषद्को शुभचिन्तक हो, प्राज्ञिक विद्यार्थी परिषद्लाई अत्यन्तै माया गर्ने व्यक्ति हुनुहुन्छ, बेलाबखत भेट गर्ने गर्नु भन्नुभयो । मैले उहाँलाई नचिनेको जानकारी गराएँ । मेची क्याम्पसका प्राध्यापकलाई मैले नचिनेकोमा नारायण ढकाल छक्क पर्नुभएको थियो र भन्नुभयो- 'भद्रपुर बस्ने मान्छेले डा. द्रोणकुमार उपाध्यायलाई नचिन्ने पनि कहीं हुन्छ ? म भेट गराउँछु' भन्दै मलाई डा. द्रोणकुमार उपाध्यायको घरमा लगेर परिचय गराउनुभएको थियो । वास्तवमा म २०६२ सालदेखि भद्रपुर बसेको भए पनि मैले मेची क्याम्पसमा पढेको हैन । म भद्रपुरलाई कर्मथलो बनाएर बसेको थिएँ । मेरो कम्प्युटर पसलमा काम लिएर आउनुहुने प्रायः व्यक्तिहरूसँग परिचित थिएँ, तर उहाँसँग भेट भएको रहेनछ । नारायण ढकाल सरले परिचय गराउनु भएपछि हाम्रो बाक्लै भेटघाट भइरह्यो । म प्राज्ञिक विद्यार्थी परिषद्को सदस्य भएको नाताले उहाँले मलाई आत्मीय तवरले विभिन्न सल्लाह र सुझावहरू दिनुहुन्थ्यो, जुन म अहिले पनि अनुशरण गरिरहेको छु ।

लगभग २०७० सालतिरको कुरा हुनुपर्छ, म प्राज्ञिक विद्यार्थी परिषद्को जिल्ला संयोजक भएको बेलामा तत्कालीन श्री वीरेन्द्र नमूना उच्च मा.वि.का विद्यार्थी भाइ-बहिनीहरूलाई लेखनाथ पुस्तकालयमा एक दिवसीय अन्तरक्रिया कार्यक्रम गर्ने योजना अनुसार हामीले डा. द्रोणकुमार उपाध्याय सरलाई प्रमुख अतिथिका लागि आमन्त्रण गरेका थियौं। पुस्तकालयका अध्यक्ष श्री देवीचरण भण्डारी सरलाई पनि अतिथिको रूपमा आमन्त्रण गरेका थियौं। समय दिनको ११ बजे तोकिएको थियो। प्राज्ञिक विद्यार्थी परिषद्मा कार्यक्रम तोकिएको समयमा शुरु भएर तोकिएकै समयमा समापन पनि हुन्छ, सोही अनुसार उहाँहरूलाई औपचारिक जानकारी समेत गराउन भ्याएका थियौं। सबै व्यवस्थपन कार्य सम्पन गरी ११ बज्न केही मिनट अघि हामी आयोजक पुग्नु भन्दा पहिला नै प्रमुख अतिथि डा. द्रोणकुमार उपाध्याय र देवीचरण भण्डारी सर आइपुग्नु भएको थियो। नयाँ विद्यार्थी भाइबहिनीहरू नेपाली समय भन्दै ढिलो गरी आइपुगेका थिए। द्रोणकुमार उपाध्याय सरले समयको महत्व र देशमा युवाको भूमिका विषयमा आफ्ना भनाइहरू राख्नुभएको थियो। उहाँको गहकिला भनाईलाई त्यहाँ उपस्थित प्रायः विद्यार्थीले त्यसपछिका अन्य कार्यक्रमहरूमा अनुशरण गरेको पाइयो।

आफ्नो बोलीको प्रभाव पार्न सक्ने डा. द्रोणकुमार उपाध्यायको असामयिक निधनले मर्माहत तुल्याएको छ। उहाँको आत्माको चिर शान्तिको कामना सहित श्रद्धासुमन अर्पण गर्दछु।

*भद्रपुर-७, झापा*

*(लेखक युवा व्यवसायी हुनुहुन्छ)*



प्रा.डा.गंगाप्रसाद अधिकारी

# द्रोण सरको त्यो गुण म कहिल्यै भुल्दिनँ

मेरो बुबा बिरामी हुनुभएकोले बुबाको रेखदेख र उपचार गराउँदै केही दिन काठमाडौंमा स्नातकोत्तर तहको शोधपत्र लेख्दै गर्दा बुबालाई लिएर घर झापा, खम्बुटार आएपछि विशेष परिस्थितिवश घरमैं बसेको थिएँ । त्यसैबेला मेची क्याम्पसका प्राध्यापकहरूको एउटा टिम हाम्रो गाउँमा एकाबिहानै छिर्‍यो । त्यो वर्ष २०४५ थियो । त्यही टिममा मैले सर्वप्रथम द्रोण सरलाई भेटेको हुँ मेरै घरमा । सामान्य गफगाफ पनि भयो । उहाँहरू मेची क्याम्पसको विज्ञान भवन निर्माणका लागि चन्दा सङ्कलन गर्न आउनुभएको थियो । द्रोण सरले मेरो पढाइ बारेमा सोध्नुभयो । मैले शोधपत्र लेखिसकेको थिइनँ, तापनि शोधपत्र बाहेकै प्रथम श्रेणी पुगिसकेको र शोधपत्र पूर्ण गर्दा लगभग ७५ प्रतिशत पुग्ने सम्भावना मैले बताएँ । उहाँ धेरै लोभिनुभयो र भन्नुभयो : 'तपाईं डिग्री पास गरेर अन्यत्र होइन, आफ्नै जिल्लाको मेची बहुमुखी क्याम्पसमा सेवा गर्न आउनुपर्छ है !'

चन्दा उठाउँदै जाँदा बाटामा उहाँका अर्का प्राध्यापक मित्रसँग निकै भनाभन पनि भएछ, मेरो विषयलाई लिएर । जतिले फस्ट डिभिजन ल्याउँछन्, त्यतिलाई तपाईं मेची क्याम्पस ल्याउने ? भनेर । ती मित्रले उहाँको ठाडै विरोध गरेको कुरा पनि तत्कालै मलाई मेरा गाउँले साथीभाइले सुनाए । त्यसो त म एम.ए.पास गरेर क्याम्पस अथवा कतै जागिरे नै हुँ भनेर सधैं धुप हाल्दै थिएँ । मेरो उन्नतिलाई रोक्न मेरै आफन्त र तल्ला गाउँका केही व्यक्तिहरू मिलेर मलाई पञ्चायत विरोधी राजनीति गरेको भनेर फसाउन, प्रहरी समेत गुहार्दै गरेका थिए । यिनीहरूकै प्रयासमा म व्यवस्था विरोधी भएको आरोपमा दुई-तीन वर्षअघि शिक्षण सेवाबाट बर्खास्त पनि भएको थिएँ ।

द्रोण सरले मलाई शोधपत्र चाँडै पूरा गर्ने हौसला दिनुभयो र आवश्यक परे मेची क्याम्पसको पुस्तकालयमा पढ्ने व्यवस्था मिलाइदिने वचन पनि दिनुभयो । त्यसबेला शायद उहाँ सहायक क्याम्पस प्रमुख पनि हुनुहुन्थ्यो । उहाँलै नै हौसला

दिनुभएको हुँदा म मेरा मान्छेले ममाथि गर्न लागेको षडयन्त्रबाट समेत बच्न लगत्तै भद्रपुर चूडामणि दाइकोमा गएँ । मेरा सहपाठी चूडामणि दाइ भने ८-१० महिनादेखि मेची क्याम्पसमै पढाउन थाल्नुभएको थियो । उहाँकै घरमा एक-दुई महिना बसेर मैले शोधपत्र पनि पूरा गरें । त्यसबेला समेत मेरो आक्कल-झुक्कल द्रोण सरसँग भेटघाट हुँदै रह्‌यो ।

म शोधपत्र तयार भएपछि घरमै थिएँ । केही समयपछि त्रिविले सहायक प्राध्यापक पदका लागि विज्ञापन गर्‍यो । सेवा आयोगको फर्म भर्न मेरा अर्का सहपाठी मित्र खगेन्द्रप्रसाद चापागाईं काठमाडौं जानुभएको थियो । मेरा शोधनिर्देशक देवीप्रसाद गौतम सर हुनुहुन्थ्यो । उहाँ म बेपत्ता भएको कुराले बेचैन हुनुहुँदो रहेछ । खगेन्द्रजीको देवी सरसँग भेट भएछ र उहाँले मलाई तुरुन्तै काठमाडौं मगाउन भन्नुभएछ । त्यो खबर पहिले मेची क्याम्पसमै आएछ । मैले चूडामणि दाइबाट तुरुन्तै खबर पाएँ । तर, मेरो तत्कालै काठमाडौं जान सक्ने अवस्था पनि थिएन । म भद्रपुर आएँ, आफ्ना सामग्रीका साथ ।

द्रोण सर, ताराराज पौडेल सर र चूडामणि दाइबीच मेरा बारेमा सल्लाह भएछ । तत्कालै द्रोण सरले काठमाडौं जाने खर्चका लागि २ सय रूपैयाँ जोहो गरिदिनुभएको रहेछ । मलाई त्यो खर्च दिंदै तपाईंका पछि विरोध गर्नेहरू हात धोएर तपाईंकै तल्लो गाउँका आफन्त पनि लागेका रहेछन् । तपाईं आर्थिक अवस्था कमजोर भएको मान्छे, अब तपाईंले गाउँ जान हुँदैन । गाउँ गएर बस्नुभयो भने जे पनि हुनसक्छ । त्यसैले तपाईं काठमाडौंबाट डिग्रीको प्रमाणपत्र लिएर सिधै मेची क्याम्पस आउने है ! शब्द यिनै नभए पनि यही भाव भएको अर्ती र शुभकामना दिएर उहाँहरूले मलाई त्यहाँबाट बिदा गर्नुभएको थियो । नभन्दै त्यसको एक महिनापछि म डिग्रीको प्रथम श्रेणीको गहकिलो प्रमाणपत्र लिएर भद्रपुर आएँ । त्यसको पाँच-छ दिनपछि क्याम्पस-प्रमुख घनश्याम खनाल सरले सहायक प्राध्यापकको तीन महिने अस्थायी नियुक्ति दिनुभयो । मेरो नियुक्तिका क्रममा पनि चुक्ली लाउनेको कमी थिएन । त्यसैले मैले पाँच-छ दिन असमञ्जसमै गुजारेर बल्ल नियुक्ति पाएको थिएँ ।

मलाई 'मेची क्याम्पसमा ल्याउनु पर्छ' भन्ने कुरामा चूडामणि दाइ र द्रोण सरसँगै चूडामणि रेग्मी सर र ताराराज पौडेल सरको पनि ठूलो प्रयास थियो । त्यो प्रयास नै मेरो मेची क्याम्पसमा नियुक्तिको ठूलो आधार थियो । त्यसको कथा कुनै समयमा मौका मिले सुनाउँला नै । तर, म अहिले जे छु, त्यसको पृष्ठभूमिमा

रहेको उहाँहरू र विशेषतः द्रोण सरको त्यो गुन, त्यो हौसला र त्यो सदाशयता मेरो अहिलेको अवस्थासम्म आउनका लागि ठूलो कारण थियो, प्रगतिको प्रथम खुड्किलो थियो ।

केही समयअघि द्रोण सर 'दुःसाध्य रोगले ग्रस्त हुनुहुन्छ' भन्ने सुनेको थिएँ । तर, यति चाँडै देहमुक्त हुनुहोला भन्ने सोचाइ थिएन । अचानक उहाँको अवसानको समाचार देवीचरण भण्डारीको फेसबूक वालमा आउँदा स्तब्ध भइयो । उहाँसँग पहिलो भेट हुँदाको क्षण, भद्रपुरमा पुनः भेट हुँदा हौसला दिंदाको क्षण, त्यो आर्थिक सहयोग र पछि मेची क्याम्पसमा आएपछिको सहकार्यका एक-एक रिल स्मृतिपटमा घुमे । बिर्सिनसक्नुकै थियो त्यो प्रेरणा, हौसला, सद्भावना र सहयोग !

हार्दिक श्रद्धाञ्जलि मेरा प्रेरक व्यक्तित्व श्रद्धेय द्रोण सरलाई !

*२६ चैत्र २०७६*

*कौशलटार, भक्तपुर*

*(लेखक विशिष्ट समालोचक हुनुहुन्छ)*



गङ्गाप्रसाद उप्रेती

# डा. द्रोणकुमार उपाध्यायसँग जोडिएका केही प्रसङ्ग

मान्छेसँगका विभिन्न सन्दर्भले सम्बन्धको आयाम निर्माण गर्दा रहेछन् । डा. द्रोणकुमार उपाध्याय (२००६-२०७६) सँगको मेरो सम्बन्ध पेशागत समानताका कारणले निर्माण भएको हो । २००४ सालमा आठराई, तेह्रथुममा जन्मेको मैले जीवनको प्रमुख पेशाका रूपमा अध्यापनलाई अँगाले । वि.सं. २०२१ मा एस.एल.सी. उत्तीर्ण गर्ने बित्तिकै मैले आफूले पढेको विद्यालयमा नै पढाउन शुरु गरें । वि.सं. २०२१ देखि २०२९ सम्मको मेरो समय पढ्ने-पढाउनेमा नै बित्यो । वि.सं. २०२९ मा राजनीतिक कारणले टुटेको मेरो पढाउने पेशा विद्यालयबाट महाविद्यालयमा स्तरोन्नति भई २०३२ सालमा प्राध्यापन गर्नेगरी त्रिभुवन विश्वविद्यालयले फेरि जोडिदियो । २००६ सालमा भारतको असम राज्यमा जन्मेका डा. द्रोणकुमार उपाध्यायको विद्यालय र महाविद्यालयको अध्ययन पनि मेरो जस्तै पढ्दै र पढाउँदै गर्ने क्रममा नै अघि बढेको रहेछ । २०३० सालमा त्रिभुवन विश्वविद्यालयबाट नेपालीमा एम.ए. गरेपछि पनि असम राज्यका विभिन्न विद्यालयमा अध्यापन गर्दै बितेको र २०३८ सालमा त्रि.वि.मा प्राध्यापन गर्न थालेपछि उच्च शिक्षाका विभिन्न तहमा प्राध्यापन गर्दै भारतको उत्तरबङ्ग विश्वविद्यालयबाट विद्यावारिधि गरेको कुरा उनको व्यक्तिवृत्तबाट थाहा पाइन्छ । यसरी एकै प्रकारले जीवन अभिनय शुरु गरेका हामी दुबैले एकअर्कालाई भेट्ने, चिन्ने र सहकार्य गर्ने चाँजो भने हामीलाई त्रिभुवन विश्वविद्यालयले मिलाइदिएको हो । मैले २०३२ सालमा तत्कालीन सगरमाथा अञ्चलको राजबिराजमा रहेको महेन्द्र विन्देश्वरी बहुमुखी क्याम्पसमा उच्च शिक्षाका विभिन्न तहमा नेपाली र कानून विषय पढाउन शुरु गरें र २०३७ सालमा काठमाडौंमा सरुवा भई विभिन्न क्याम्पसमा पदभार राख्दै २०६७ सालमा काठमाडौंमा रहेको विश्वभाषा क्याम्पसबाट म सेवानिवृत्त भएँ । उपाध्यायजी पनि २०३८ सालमा त्रि.वि. सेवामा प्राध्यापन पेशामा प्रवेश गरी केही समय काठमाडौंको पद्मकन्या

क्याम्पसमा कार्यरत रही अन्त्यमा आफूले प्राध्यापन शुरु गरेको झापाको भद्रपुरमा रहेको मेची बहुमुखी क्याम्पसमा लामो समयसम्म अध्यापन गरी २०७१ सालमा सेवानिवृत्त हुनुभएको रहेछ । सेवानिवृत्त भएपछि पनि आफूले विज्ञता प्राप्त गरेको क्षेत्रमा स्वतन्त्र अभियन्ताका रूपमा उनले आफूलाई सक्रिय राखे । यसरी हामी दुईलाई जोड्ने त्रिभुवन विश्वविद्यालय र हामी दुबैले पढाउने नेपाली विषय हुन् ।

उनी मेरो गृह जिल्लामा रहेको मेची क्याम्पसमा पढाउने हुनाले विश्वविद्यालयका प्राज्ञिक गतिविधिका अतिरिक्त हाम्रो आक्कलझुक्कल भेट भइरहन्थ्यो । तर, एउटै शिक्षण संस्थामा रहेर सहकार्य गर्ने अवसर भने हामी दुबैले पाएनौं । भाषा, साहित्य तथा लोकवार्ताका ज्ञाता उनले २०७३-७४ सालतिर म कुलपति रहेको नेपाल प्रज्ञा-प्रतिष्ठानबाट विद्वत् वृत्ति लिएर केही गहन अध्ययनको काम गरेका रहेछन् । वि.सं. २०७४ मा उनको अनुसन्धानपरक सो अध्ययन 'लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ'को शीर्षकमा छापिएर आएपछि पो मैले थाहा पाएँ – एउटै संस्थाको छातामुनि रहेर पनि हामीले सहकार्य गरेका रहेछौं ।

आफ्नो विषयमा गहन अध्ययन भएका मित्र द्रोणकुमारजी अत्यन्तै मिलनसार, विनयशील र मृदुभाषी थिए । व्यक्तिगत रूपमा आर्जन गरेका यिनै गुण र स्वभावले उनी आफूले सङ्गत गरेका सबै प्रकारका मानिसका आँखाका नानी हुन पुगे । आफ्नो विषयमा आधिकारिक विज्ञ रहेका उपाध्यायले अध्यापनका अतिरिक्त भाषा, साहित्य तथा संस्कृतिको क्षेत्रमा गहन विचार बोकेका कृतिहरूको सिर्जना गरी नेपाली वाङ्मयको प्रवर्द्धन गर्न उल्लेखनीय काम गरेका छन् । नेपाली, अङ्ग्रेजी, हिन्दी, बङ्गाली, असमिया, संस्कृत तथा राजवंशी भाषाका ज्ञाता रहेका उपाध्यायले भाषा, साहित्य, लोकसंस्कृति तथा लोकसाहित्यमा आधिकारिक विचार प्रक्षेपण गर्ने झन्डै पौने दर्जन जति कृतिहरूको रचना गरेको पाइन्छ । यी कृतिहरूका अतिरिक्त विभिन्न राष्ट्रिय एवम् अन्तर्राष्ट्रिय गोष्ठी, सेमिनारमा माथि उल्लिखित विषयहरूमा प्राज्ञिक कार्यपत्रहरू प्रस्तुत गर्ने कामले उनको प्राज्ञिक क्षमता सार्वजनिक भएको देखिन्छ । यसरी उनको व्यक्तित्वका बहुआयामिक पाटाहरू देखिन्छन् । तिनलाई निम्न बमोजिम संक्षेपमा प्रस्तुत गर्न सकिन्छ–

**(क) कुशल अध्यापकका रूपमा द्रोणजी**

डा. द्रोणकुमार उपाध्यायको जीवनको अधिकांश समय शिक्षण पेशामा नै बितेको देखिन्छ । उनले आफ्नो सक्रिय जीवनका दश वर्ष माध्यमिक तथा उच्च

माध्यमिक तहका विद्यालयमा अध्यापन गरेको उनको जीवनवृत्तले बताउँछ। स्नातकोत्तर तह पार गरिसकेपछि पनि उनलाई विश्वविद्यालय अन्तर्गतका संस्थाहरूमा प्रवेश प्राप्त गर्न सहज भएन। स्नातकोत्तर तहको प्रमाणपत्र प्राप्त गरेको दश वर्षपछि मात्र उनले त्रि.वि. सेवामा सहायक प्राध्यापकका रूपमा प्रवेश पाउनुमा उनको परिवारको भारत प्रवासको बसाइले अवरोध पुर्‍याएको हुन सक्छ। जे होस्, २०३८ सालमा त्रि.वि. अन्तर्गतको मेची बहुमुखी क्याम्पसमा प्रवेश पाएपछि अविछिन्न रूपमा वि.सं. २०६९ सम्म शिक्षण कार्यमा कार्यरत रही प्राध्यापन गर्ने अवसर उनले पाए। त्रि.वि. सेवामा रहेर उनले प्राध्यापन गरेका क्याम्पसहरू (मेची बहुमुखी क्याम्पस र पद्मकन्या बहुमुखी क्याम्पस) को अभिलेख सुन्दा र हेर्दा उनी आफ्नो पेशागत धर्म र कर्ममा पूर्णतः समर्पित रही एक कुशल शिक्षकका रूपमा स्थापित भएको कुरा मेरो जानकारीमा रहेको छ। उनका सहकर्मी प्राध्यापक र उनले पढाएका विद्यार्थीहरूको पनि उनीप्रतिको अभिमत यस्तै रहेको मैले थाहा पाएको छु।

**(ख) सफल स्रष्टाका रूपमा द्रोणजी**

मैले माथि नै के सङ्केत गरिसकेको छु भने डा. द्रोणकुमार उपाध्याय पौडेलले साहित्य, सिर्जना, भाषा, व्याकरण, साहित्य समालोचना तथा लोक साहित्यसम्बन्धी विभिन्न विषयमा नौ ओटा गहन पुस्तक सिर्जना गरी विभिन्न प्रकाशनबाट सार्वजनिक गरिसकेका छन्। विषयगत रूपमा सिर्जना, विश्लेषण तथा विवेचनाको रूपमा उनका सिर्जना सार्वजनिक भएका छन्। लोककथाको सहलेखनका रूपमा सार्वजनिक भएका असमिया भाषामा रचित नेपाली लोककथा उनको सिर्जनात्मक लेखनका प्रारम्भिक रूप हुन्। उनको प्राध्यापकीय दायित्वले उनलाई सिर्जनात्मक रचनातिरभन्दा भाषाव्याकरण तथा साहित्यको विवेचनात्मक ग्रन्थ रचना गर्न र लोकवार्ता जस्ता लोकसाहित्यका महत्वपूर्ण विषयमा कृति सिर्जना गर्न प्रेरित गरेको देखिन्छ। भाषा चिन्तनसम्बन्धी उनका राजवंशी परिचय : जाति, भाषा र सहित्य (वि.सं. १९९४), आदर्श नेपाली व्याकरण (इ.सं. २००५) तथा भाषिक चिन्तन (भाषिक लेखहरूको सङ्ग्रह-वि.सं. २०६५) जस्ता कृतिहरू भाषाको क्षेत्रमा काम गर्ने अध्येताका लागि काम लाग्दा सन्दर्भ सामग्री हुन सकेका छन्। साहित्य समालोचनाको क्षेत्रमा केही साधक : केही साधना (वि.सं. २०६५) र भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा (इ.सं. २०११) प्रकाशित भएका

छन् । यी दुबै कृतिले उनको समालोचकीय क्षमतालाई देखाएका छन् ।

डा. द्रोणकुमार उपाध्यायको रुचिको विशेष क्षेत्र भनेको लोक साहित्यभित्र पर्ने लोकवार्ता हो । नेपाली लोकवार्ताभित्रकै एउटा सशक्त एकाइ सवाई काव्य हो । नेपाली लोकसाहित्यको मौलिक विधा 'सवाई काव्य'का विषयमा उनले आफ्नो विद्यावारिधिको शोधग्रन्थ तयार पारेका हुन् । यही ग्रन्थकै सेरोफेरोका विषयलाई समेटेर उनले सवाई काव्यको सैद्धान्तिक परिचय नामको ग्रन्थ वि.सं. २०६७ मा सार्वजनिक गरेका थिए । यसका अतिरिक्त लोकवार्ता : लोककै चर्चा (वि.सं. २०६५) र लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ (वि.सं २०७४) जस्ता कृति पनि उनले रचना गरी सार्वजनिक गरेको पाइन्छ ।

उपाध्यायका उल्लिखित कृतिहरूमा विचरण गर्दा भाषासम्बन्धी लेखक र साहित्यिक आस्वादनको झड्का दिने उनका समालोचनाका कृतिहरू शिक्षकको धर्म निर्वाह गर्ने क्रममा सिर्जना भएको जस्तो लाग्छ भने लोकसाहित्यका विभिन्न एकाइको सैद्धान्तिक परिचय भएका कृतिहरूमा उनको विषयगत विज्ञता मुखरित भएको पाइन्छ । यस अर्थमा द्रोणकुमार उपाध्यायको प्राज्ञिकतालाई बचाउने सामग्रीहरू भनेका लोकसाहित्यसम्बन्धी उनका कृतिहरू हुन् भन्नुमा कुनै अत्युक्ति हुने छैन ।

### (ग) प्राज्ञिक एवम् सामाजिक अभियन्ताका रूपमा द्रोणजी

डा. द्रोणकुमार उपाध्यायले राष्ट्रिय एवम् अन्तर्राष्ट्रिय गोष्ठी एवम् मञ्चमा दर्जनौं कार्यपत्रहरू प्रस्तुत गरेर ती कार्यपत्रहरूउपर हुने बौद्धिक छलफलमा सक्रिय सहभागी भई आफ्नो प्राज्ञिक क्षमता प्रस्तुत गर्न भ्याएका छन् । आफ्नो कर्मथलो झापाका आदिवासी-जनजाति राजवंशीका बारेमा उनको गहन अध्ययन थियो । राजवंशी जाति सम्बन्धी उनको अध्ययनको गहनता त्रि.वि. मानविकी डीन कार्यालयअन्तर्गत उनले गरेको लघुअनुसन्धानको शोधपत्रले देखाउँछ । त्यसो त यही विषयमा उनले छुट्टै कृति लेखी प्रकाशित गरेको कुरा माथि नै उल्लेख भइसकेको छ । भारतका विभिन्न विश्वविद्यालय तथा प्राज्ञिक मञ्चमा प्रस्तुत गरिएका उनका लोकगाथा, लोकसाहित्य तथा लोकसंस्कृति, धर्म-संस्कृति तथा समाजको अन्तरसम्बन्ध, बङ्गाली तथा संस्कृत भाषामा बाँचेको भारतीय संस्कृतिको अस्तित्व जस्ता गहन विषयका कार्यपत्रहरू र तिनमाथि गरिएका विमर्शमा सक्रिय सहभागी भएर डा. पौडेलले आफ्नो प्राज्ञिक क्षमता तथा

विषयगत ज्ञानलाई विद्वत् समुदायबीच प्रस्तुत गरेका छन् । यस्ता गोष्ठीपत्र एवम् कार्यपत्रले डा. उपाध्यायको बौद्धिकताको अर्को पाटो देखाएको छ ।

गोष्ठी, सेमिनार तथा फोरमहरूमा सक्रिय सहभागी हुनुका अतिरिक्त डा. पौडेलले विभिन्न शैक्षिक, सामाजिक, धार्मिक सङ्घ-संस्थामा सक्रिय सहभागी भएर त्यस्ता संस्थाले चलाएका सामाजिक सुधारका अभियानमा आफ्नो सक्रिय सहभागिता देखाई सामाजिक सुधारका सक्रिय अभियन्ताको रूपमा आफूलाई स्थापित गरेको पनि पाइन्छ । आफ्नो कर्मथलो (झापा) मा स्थापित विभिन्न प्रकृतिका संस्थाहरूमा संलग्नताले उनी समाज सुधारका क्रियाशील अभियन्ता बनेका थिए ।

माथि उल्लिखित भएजस्तै त्रिआयामिक व्यक्तित्व स्थापित गरेका डा. द्रोण उपाध्यायले आफूले गरेका असल कार्यहरूका लागि विभिन्न सङ्घ-संस्थाबाट नगद पुरस्कार, पदक र प्रमाणपत्र समेत प्राप्त गरी सम्मानित र अभिनन्दित हुने मौका पनि पाएको देखिन्छ। यी सम्पूर्ण कुराहरूको आलोकमा हेर्दा डा. द्रोणकुमार उपाध्याय पौडेलको जीवन अभिनय सफलताका साथ व्यतीत भएको देखिन्छ। एक छोरा र दुई छोरीलाई उत्तराधिकारीको रूपमा आफ्नी जीवनसंगिनी श्रीमती मीरादेवी पौडलसँग छोडेर उनी वि.सं. २०७६ माघ १५ गते तदनुसार २९ जनवरी २०२० मा कृतिशेष भए । अहिलेको सन्दर्भमा उनको निधन असामयिक नै हो । तथापि त्यो सबैले स्वीकार गर्नैपर्ने तितो यथार्थ हो । यस स्थितिमा सो तितो यथार्थलाई स्वीकार गर्दै म पनि मेरा सज्जन मित्र द्रोणजीप्रति श्रद्धाञ्जलि अर्पण गर्दछु ।

*१० साउन २०७७*

*(लेखक प्राज्ञ- नेपाल प्रज्ञा प्रतिष्ठानका कुलपति हुनुहुन्छ)*



प्रा.डा. गोविन्दराज भट्टराई

# डा. द्रोण उपाध्यायको सम्झनामा डा. खगेन शर्मा र मुक्ति बरालका सन्दर्भहरू

सन् २०१६ सालको फरवरी महिनामा एउटा अन्तर्राष्ट्रिय सम्मेलनमा भाग लिने निमन्त्रणा प्राप्त भयो। गौहाटी विश्वविद्यालयको आधुनिक भाषा एवम् साहित्यिक अध्ययन विभागको निमित्त दुई जना विद्वान्‌बाट हस्ताक्षरित निमन्त्रणा आयो– डा. दिलिपबरा एवम् डा. खगेन शर्मा !

नेपाल-असम जोड्ने कुनै विषय भए राम्रो हुन्थ्यो– डा. खगेन भाइले भन्नुभयो। मैले पनि केही वर्ष पहिले असमिया भाषाकी महान् स्रष्टा मामनी रयसम गोश्वामी (१९४२-२०११) का बारेमा सुनेको मात्र थिएँ। दार्जीलिङकी स्रष्टा विन्द्‌या सुब्बाले लेखेको एक संस्मरणात्मक समीक्षा ग्रन्थमा असमेली स्रष्टा गोश्वामीबारे पढेर म अत्यन्तै प्रभावित थिएँ। त्यसपछि ती ज्ञानपीठ पुरस्कारले सम्मानित हाम्रै छिमेककी महान् प्रतिभाको योगदानबारे राम्ररी परिचित हुने इच्छा जागृत भएको थियो।

त्यसो त विन्द्‌या बहिनीले गोश्वामीका पुस्तक (आख्यान) हरू नेपाली अनुवाद भइसकेका छन् अनि ती नेपालीमा प्रकाशित छन् भन्ने कुरा पनि लेखेकी छन्। तर, मैले ती दिनमा तेजपुर निवासी अनुवादक किरण राईलाई भेट्न सकेको थिइनँ, उनीद्वारा अनुदित गोश्वामीका आख्यान पुस्तक पनि पाउन सकेको थिइनँ (पछि पाएँ)।

त्यस्तो अप्ठ्यारो परेको कुरा गर्दा एक दिन विद्वान् भाइ डा. खगेनले मलाई सुझाए– 'सर ! गोश्वामीको एउटा पुस्तक हाम्रै नेपाली विद्वान्‌ले पनि नेपाली भाषामा अनुवाद गरेका छन्। त्यसको खर्च बिहोरेर मैले टंकण गराएको छु; मैले आफैं सम्पादन पनि गरिसकेको छु। तर, प्रकाशनमा जान भ्याएको छैन।'

मैले सोधें- 'अनुवादक को हुनुहुन्छ ?'

'एक विद्वान् हुनुहुन्छ, डा. द्रोण उपाध्याय पौडेल, भद्रपुरका अध्यापक।'

द्रोण पौडेलसँग एक-दुईपल्ट भेट भएको हो, तर गहिरो थिएन। उनको नाम

बारम्बार सुनिएको ।

मैले उत्साह राखें– 'सो टाइपलिपि पढ्न पाए राम्रो हुन्थ्यो होला । उहाँ आसामिज र नेपाली जान्ने अनुवादक हुनुहुँदो रहेछ । तत्कालै यो पाण्डुलिपि पाउन सके त्यसमा आधारित भएर गुवाहाटीमा प्रस्तुत गर्ने कार्यपत्रमा पनि समावेश गर्थेंहुँला भाइ !'

नभन्दै डा. खगेन भाइले सम्पादन गरिसकेको सो कृति उपहारस्वरूप प्राप्त गरें । कृति हात लागेपछि द्रोणजीलाई सो जानकारी र धन्यवाद दिएर पढ्न लागें । अनि तयार पारेर १६ फरवरीको दिन एक कार्यपत्र पठाएँ, डा. खगेनलाई । त्यो शीर्षक थियो- नारी दलन विरुद्ध समकालीन सिर्जनामा विद्रोह । त्यसो त नीलकण्ठी ब्रजको मात्रै मेरो विषयमा थिएन । मेरो कार्यपत्रले अरु पनि विश्व लेखनका तीन कृति लिएर तिनमा यसलाई पनि समावेश गरेको थियो । त्यसैले मैले आफ्नो लेखसार (एब्स्ट्राक्ट) यस्तो बुझाएँ :

प्रस्तुत पत्रमा विश्वसाहित्यका चार जना नारी स्रष्टा लिखित कृतिको संक्षिप्त तुलनात्मक अध्ययन गरी वर्तमान नारीस्थितिको चित्र प्रस्तुत गर्न चाहन्छु । ती कृति हुन्- सन् २००४ को नोबेल शान्ति पुरस्कार विजेता अफ्रिकी स्रष्टा वाङ्गारी मथाई (सन् १९४०-२०११) को अन्बौड, सन् २०१५ की नोबेल साहित्य विजयी बेलोरसियाकी स्वेतलाना अलेक्सियाभिचको (सन् १९४८) को भोइसेज फ्रम चेर्नोविल, असमेली भाषाकी महान् स्रष्टा मामोनी रयसम गोश्वामी तथा ज्ञानपीठ पुरस्कार प्राप्त (सन् १९४२-२०११) को नीलकण्ठी ब्रज तथा असमेलीकै रुद्राणी शर्माकृत दमीताको दस्तावेज ।

द्रोणजीको सम्झना गर्ने क्रममा म नीलकण्ठी ब्रजको मात्रै प्रसङ्ग उठाउने छु ।

यस कृतिको प्रशंसा गर्न दुई वटा जगत् चिनेको हुनुपर्छ । ती हुन्- असमिया संस्कृतिको जगत् र नेपाली संस्कृतिको जगत् । किनभने अनुवाद पढ्नुको तात्पर्य यी दुई समाजको मूल्याङ्कन (प्रशंसा वा आलोचना) गर्न समर्थवान हुनु हो । तर, ममा त्यो द्वैभाषिक वा द्वैसांस्कृतिक चेतनाको अभाव भएकाले द्रोणजीले अनुवाद गर्नुभएको नीलकण्ठी ब्रजको ज्ञानमा सीमित रहेर लागेको केही बताउन चाहन्छु । परिणामस्वरूप नेपाली पाठकमा असमिया संस्कृतिलाई नजिकबाट हेर्ने उत्सुकता जाग्नेछ र इन्दिरा गोश्वामीको महान सिर्जनालाई नजिकबाट हेर्ने इच्छा जाग्नेछ ।

मैले साहित्य अकादमी पुरस्कार विजेता स्रष्टा बिन्द्या सुब्बाको "डा. इन्दिरा गोश्वामी उर्फ मामोनी रयसम गोश्वामी" शीर्षक लेखबाट नै स्रष्टा गोश्वामीलाई

अलिकति चिन्न पाएको थिएँ । सो लेख विन्दयाको तिम्रा अक्षरहरूको आयाम शीर्षक ग्रन्थमा समाविष्ट छ ।

गोश्वामीको समाज सुधारप्रतिको त्याग र निष्ठा ती कुरालाई अद्भूत शक्तियुक्त लेखनीमा प्रस्तुत गर्ने क्षमता देखेर जगत् प्रभावित थियो । त्यसैले उनका असमेली आख्यान निरन्तर रूपले अन्य भाषामा जान थाले । नेपालीमा मात्रै द्रोणजीले आरम्भ गर्नुअघि दार्जीलिङका किरण राईले उनका तीन वटा आख्यान नेपालीमा ल्याइसकेका थिए । ती हुन्- अभ्यन्तर कामरूपको, अर्द्धवृत्तजीवन-यात्रा र अयन दशरथीको । यस्तो योगदानको लागि किरण राईले सन् १९९९ को साहित्य एकेडेमी अनुवाद पुरस्कार प्राप्त गरे । यो ठूलो सम्मान हो । असम क्षेत्रबाट आजसम्ममा जम्मा १२ जना स्रष्टाले सो सम्मान प्राप्त गरेका छन्; तीमध्ये एक हुन्- किरणकुमार राई । सन् २००० मा स्रष्टा इन्दिरालाई सर्वोच्च स्थानको ज्ञानपीठ पुरस्कार मिल्यो । त्यो भन्दा अघि सन् १९८२ मै उनले साहित्य एकाडेमी पुरस्कार प्राप्त गरेकी थिइन् । यी दुबै पुरस्कार उनलाई भारतका दुखी, परित्यक्त, सबाल्टर्नको जीवन लेखेवापत प्राप्त भएका थिए । उनको लेखन आदर्श त्यही थियो ।

सन् १९७६ मा प्रकाशित इन्दिरा गोश्वामीको कालजयी कृति असमियामा नीलकण्ठी ब्रज शीर्षकमा थियो, अंग्रेजीमा ब्लू थ्रोटेडब्रज (कतै ब्लू-नेक्ट ब्रजछ) भने नेपालीमा नीलकण्ठी ब्रज) नामले अनूदित भयो । नेपालीमा पनि अनुवाद गरेर डा. द्रोणले नेपाली आख्यानमा एक नवीन शक्ति र चेतनाको परिचय गराउन खोजेका थिए । एक जना नेपालीले अद्वितीय दर्जाकी समकालीन भारतीय नारीको बौद्धिकता, सिर्जना शिल्प र विद्रोही चेतनाप्रतिको सम्मान गरेका थिए । दुखान्ती जीवनभोक्ता गोश्वामीले विवाहपश्चात् पति गुमाइन् र २५ वर्षको उमेरदेखि संघर्षपूर्ण एकल जीवन भोग्न थालिन् ।

वास्तवमा यो हिन्दू संस्कृतिका मकाइसकेका अवशेषको चित्र थियो । ब्रजभूमि वृन्दावनमा बाध्य भएर जीवन बिताउन पुगेका बीस हजार बिधवा र तिनको त्रासद जीवन त्यहाँका ठग, पुलिस, महन्त, चोरबाट बच्न नसकेका ती असहाय नारीको क्रन्दन पुकार र निस्क्रिय जीवन बयान गर्ने यस आख्यानले भन्दा जसरी भगवान् शिवको गला विषले गर्दा नीलो भएको छ– यो ब्रजभूमिको घाँटी त्यस्तै नीलो भएको छ– यौन दुराचार, ठगी, चोरी, पापाचार, धर्माडम्बर सबले सडेको भारतीय समाज छ । खासगरी अपरिवर्तनीय देवस्थलको अपरिवर्तनीय चरित्र

त्यस्तो हुन्छ । नेपालको पनि उही व्यथा छ । नेपाली बिधवाहरूको यस्तो तुलनीय स्थिति अमर न्यौपानेको आख्यान सेतो धर्तीमा छ ।

वृन्दावनको शरणमा पुगेका राधास्वामीका अनुयायी नारीहरू; बिधवा, परित्यक्त, असहायहरू चरम गरीबीमा छन् । अनि यौन शोषणमा । कृष्ण भगवान्को पवित्र शहर हिन्दू धर्मको यो कलंक र फोहरले दुर्गन्धित- भौतिक र भावनात्मक दुबै प्रकारले निकृष्ट छ । कति कट्टरपन्थीले इन्दिराको यो निन्दनीय पक्ष प्रस्तुत गर्ने साहसको आलोचना पनि गरे । तर, यो कृति आधुनिक भारतीय साहित्यमा एक 'क्लासिक' मा गनिन्छ । यस्तो कृति चयन गरी त्यसको अनुवाद गर्ने द्रोणजीको प्रयत्न र दूरदर्शिताको हामी हृदयले प्रशंसा गर्दछौं ।

यसमा नारीले भोग्ने (बिधवा भएपछि समाजले भोगाउने) अनन्त पीडाको शृङ्खलालाई हजारौं वर्षदेखि प्रदूषित वृन्दावन पुऱ्याएर सौदामिनी नामक ए पात्रको चरित्रमा आरोपित गरेकी छन् । इन्दिरा गोश्वामीले सानैमा पति गुमाएर जुन हण्डर खाइन्, त्यसको प्रत्यक्ष प्रतिध्वनि यमसा पनि छ भन्छन् । धर्मको नाममा नारीलाई एक्ल्याई यौन र अन्य शोषण गर्नु नै पुरुषको लक्ष्य हुन्छ, धर्मको उद्देश्य हुन्छ । विश्वविद्यालयमा लेक्चरर बन्नुभन्दा पहिले उनले धेरै वर्ष वृन्दावनमा बसेर ती पीडा र भुक्तमानको प्रत्यक्ष अनुभव गरेकी थिइन्; प्रस्तुत आख्यानमा जीवन्त चित्रण प्रस्तुत गरेकी छन् । उनको प्रत्येक उपन्यासले समाजको एक-एक विगलित पक्ष प्रस्तुत गर्दछ ।

भारतीय साहित्यबाट रवीन्द्रनाथ ठाकुरका मात्र चार वटा कृति (गीताञ्जली, गोरा, चित्राङ्गदा, कथासंग्रह) नेपालीमा अनुदित भए । त्यसपछि अरु कसैका थिएनन्- इन्दिरा गोश्वामीका मात्रै चार पुगे । त्यसै समयमा असमकै सुधा शर्माले साहित्यमा विद्यावारिधि विषय चयनमा मसित सल्लाह मागेर लेखिन् । मैले उत्तर गरें-

'प्रिय बहिनी, मैले पनि मामोनी रयसम गोश्वामीको एक कृति पढें, विशेषगरी नीलकण्ठी ब्रजमा केन्दित रहेर । कत्रो सिर्जना कला र शक्तिले निर्मित रहेछ यो कृति ।

यो डा. द्रोण पौडेलले गर्नुभएको अनुवाद, डा. खगेन शर्मा मार्फत प्राप्त गरेर पढेको हुँ । तपाईंले पनि इन्दिरा गोश्वामीका एक वा धेरै कृति चयन गर्नुभयो भने यसमा समकालीन विश्वसाहित्यको चेतना पाउनु हुनेछ । खासगरी जेण्डर स्टडिज, विमिन स्टडिज, अझ विशेषगरी चिरिएको परम्परा ढालेर नारी सशक्तिकरण स्थापित गर्नुपर्ने कुरा, सबाल्टर्नको दमित स्वर... । यसमा नवनारीवाद छ, यसमा

सम्पूर्ण रूपले उत्तरआधुनिक दृष्टिकोण छ, यसमा दृढतासाथ नारी पहिचानको, आफ्नो पुनर्स्थापनाको आह्वान छ। तर, तपाईं अंग्रेजी वा नेपाली साहित्यबाट जाने भएकोले अनुवाद स्वीकृत हुन्छ, हुन्न; एकपल्ट सोधेर प्रस्ट गर्नुहोस्। अरु म सहायता गरौंला।'

यसरी असम विद्या सम्मेलन हुनुभन्दा छ महीना अघि २९ जुलाईमा शोधार्थी सुधा शर्मालाई यस्तो इमेल पठाएको थिएँ। यसको तात्पर्य हाम्रै निकटवर्ती विदुषी मामोनी रसयम गोश्वामीको महानतालाई प्रकाशनमा ल्याउन मिल्छ कि भन्ने थियो। त्यसको तात्पर्य उनै डा. द्रोण पौडेलको कृति चयन र अनुवाद कर्मलाई नेपाली जगत् समक्ष प्रकाशनमा ल्याउनु थियो। आर्य संस्कृतिको एउटा छातामुनि ओत लागेका हामी कति-कति कस्ता विकारहरू नदेखी तिनीहरूसँगै रमाएर बसिरहेका छौं, त्यो देखाउनु थियो; तिनलाई उखेल्दै फ्याँक्तै समाज सङ्लो पारेर, नारी उन्मुक्ति तर्फ मद्दत गरौं भन्नु थियो।

मैले नीलकण्ठी ब्रजलाई लिएर गुवाहाटी विश्वविद्यालयमा आयोजित अन्तर्राष्ट्रिय सम्मेलनमा प्रस्तुत गर्ने कार्यपत्रको सारसंक्षेप बनाई पठाएको थिएँ।

त्यस सम्मेलनमा भाग लिने दिन आउँदा मैले चार वटै विश्वस्तरीय नारी आख्यानबारे सकेको बुझेर तयार पारें, त्यहाँ पुगेर प्रस्तुत गरें। नीलकण्ठी ब्रज र दमिताको दस्तावेज दुबै असमियाबाट गरिएका नेपाली अनुवाद थिए। लेखक अनुवादक दुबैलाई कार्यपत्रमा चिनाएँ। त्यति मात्र होइन, सन् २०१५ को नोबेल विजयी भोइसेज फ्रम चेर्नोविल पनि मौलिक थिएन। यो पनि बेलोरसियन भाषाबाट अंग्रेजीमा अनुवाद गर्ने व्यक्ति थिए- किथ गेसेन। उनी रसियामा जन्मेका अमेरिकी आख्यानकार, पत्रकार, साहित्य अनुवादक थिए (अझै छन्)।

मैले किथ गेसेनकै हारमा लगेर डा. द्रोण पौडेललाई र रुद्र बराललाई राखें। किथले रसियनबाट अंग्रेजीमा ल्याइदिए र पढ्न पायौं, द्रोण र रुद्रले असमियाबाट नेपालीमा ल्याइदिए र हामीले पढ्न पायौं। अफ्रिकी वाङ्गारी माथाईको अन्बौड चाहिं अंग्रेजीमै थियो।

नोबेल पुरस्कार पाउन पनि अनुवादक बिना सम्भव छैन। गत वर्ष (सन् २०१८) कै ओल्गा तोकार्जुकका कृति पनि पोलिशबाट अंग्रेजीमा अनुदित भएपछि मात्र विश्वसमक्ष पुगेका थिए।

त्यसकारण गुवाहाटी सम्मेलनमा एक्काइसौं शताब्दीमा अनुवादको महत्वबारे निकै चर्चा पनि राखें। धन्य छ, धेरै स्रष्टाले विशेषगरी असमेली भाषाका राम्रा

कृति नेपालीमा ल्याएर एकअर्कालाई नजिक्याउने प्रयत्न गर्दैछन् । भौतिक रूपले दुई भाषाभाषी निकटमा बसेर मात्र पुग्दैन, भावात्मक रूपले एकअर्काको हृदय जोडिनु पनि पर्दछ । एकअर्कालाई बुझाउने र जोड्ने भाषा नै साहित्य हो । टाढाको होस् वा उच्च साहित्य- घरघरमा पुऱ्याउनु पर्दैन, अनुवादले आफैं पुऱ्याउँछ ।

डा. द्रोण उपाध्यायलाई बधाई छ । यो अनुवाद पढ्दा कति सहज र स्वाभाविक लाग्दछ । अत्यन्तै सुन्दर 'क्लासिक' लाग्दछ । यो अनुवाद मेरो अनुमान छ, मौलिक कृतिको निकटतम हुनुपर्छ । मलाई स्रोत भाषा (असमिया) को ज्ञान छैन, परन्तु यो थाहा छ- नेपाली र असमिया भगिनी भाषा हुन् । हाम्री उनै माता (संस्कृत) का सहोदर पुत्रीहरू । नेपालीले जस्तै असमेलीले पनि अत्यन्तै धेरै शब्द संस्कृतबाट ग्रहण गरेको छ । जसलाई हामी तत्सम भन्दछौं । त्यसले गर्दा हामी (पाठक) लाई उताको शिष्ट वाणी झट्ट सुन्दा उही भाषा बोल्दैछौं भन्ने अनुमान हुन्छ । यिनीहरू समय र स्थानको दूरत्वले भिन्न जस्ता पारिएका मात्र हुन् । गहिरिंदा बुझिन्छ, फेरि उता आर्य संस्कृतिको विस्तृतिले गर्दा हामी एउटै भावभूमिमा बसेका हुन्छौं । मनोजगत् उही छ ।

इन्दिरा गोश्वामीको कृति नेपाली पाठकको हातमा पुगेपछि हाम्रा निमित्त इन्दिरा गोश्वामी पनि असमका विश्ववन्द्य कलाकार हाजरिकाजस्तै लोकप्रिय हुनेछिन् । हाजरिकाका गीतहरू नेपालमा पनि कति लोकप्रिय छन् । गुवाहाटीका डा. कमल र कृष्णा क्षेत्रीलाई अनेक बधाई छ, जसले हाजारिकाका गीतलाई अनुवाद गराएर नेपालीमा पुऱ्याए । उच्च कलाले जहाँ पनि जसलाई पनि छुन्छ । कुनै बतासले र पर्वतले नछेक्ने कुरा उच्च कला नै रहेछ ।

इन्दिरा गोश्वामीको जीवन असाध्य पीडा र अपूरणीय क्षतिकारक चोटले भरिएको थियो । २५ वर्षमा बिधवा बनेकी युवती पचास वर्ष पहिलेको त्यो रुढ समाजमा युवतीको जीवनले बाँच्न कस्तो संघर्ष गर्नुपऱ्यो होला । परिणामस्वरूप अमेरिकी कवि एन सेक्स्टनझैं इन्दिरा पनि अवसाद (डिप्रेशन) को बिमारी भइन् । असहाय र अकिञ्चन भइसकेपछि यो पृथ्वी नै नरकमा परिणत हुँदो रहेछ । तर, उनको उच्च शिक्षा र जीवनमा केही गर्छु भन्ने दृढताले गर्दा जीवनपथ बदलिंदै गयो; नवपथ बन्दै गयो ।

हाम्रा सनातनी (हिन्दू) संस्कृति र धर्म (सबै कुरा) नारी स्वतन्त्रताप्रति अति क्रूर र निष्ठुर छन् । खासगरी बाल विवाह प्रथाले जति नारीलाई ध्वस्त गराउँछ, पुनर्विवाहको निषेधले त्यतिलाई नै । धेरैजसो त्यो अवस्था भोग्न पुगेका नारीहरूले

मृत्युवरण गर्छन् कि जीवनको सक्रियता टुङ्ग्याउँछन् । बाँच्नको अरु विकल्प नहुँदा वृन्दावनका आश्रममा पुग्दछन् । इन्दिराले धेरै वर्ष वृन्दावनमा बसेर ती नारीको कष्ट प्रत्यक्ष हेरिन् ।

उनले आफूमाथिको बज्रपातलाई अर्थात् आजीवन खपिरहनु पर्ने त्यो अपूरणीय क्षतिलाई धैर्य र त्यागले सिर्जनामा लीन भएर क्षतिपूर्ति गरिन् । उनले ठूलो शक्ति उत्पन्न गरेर शब्द र विम्बको प्रयोग गर्दै लेखिन्, जीवनलाई बदल्नेगरी लेखिन, समाजलाई छुनेगरी लेखिन् । उनले पददलित र उपेक्षित वर्गका दुःख त्यहाँ देखिन्- गायत्री स्पिभाकले भनेझैं बोली खोसिएका वर्गको निमित्त लेखिन्, बोलिन् । कहीं राजनीतिले खोस्छ, कही संस्कृतिले, धेरै धर्म र परम्पराले । नेपालमा पनि पददलितहरू अनाहकमा मृत्युदण्ड भोग्दैछन् । अन्यायमा पर्दैछन्- यसपालिको जाजरकोट काण्डले त्यही भन्छ ।

हामी भारतीय सामाजिक-सांस्कृतिक परम्परासँग तुलना गर्दा नेपालको जीवनमा धेरै समानता पाउँछौं । तीमध्ये नीलकण्ठी ब्रज त्यहाँ जीवन नै मृत्यु भोग्नेको अकल्पनीय त्रासदी हो ।

यसका पात्रहरू इन्दिराका अन्य कृतिमा झैं सबै वञ्चित र अति शोषित वर्गबाट आएका छन् । कति निर्माणस्थलबाट टिपिएका, कति मन्दिरबाट, विहारबाट, कति नाङ्गा सडकबाट उठाइएका, कति अँध्यारा गल्लीबाट उद्धार गरिएका । नीलकण्ठी ब्रज उनको विविध यस्ता उपेक्षित स्थलको अध्ययन र अनुभवमा आधारित अभिलेख हो । धर्मान्धतालाई पक्रेर गुण्डागर्दीले कसरी शासन गर्छ भनी मानवशास्त्रीय दृष्टिले अध्ययन गरेर यो तयार पारिएको छ । सारा पीडाहरूको प्रतीक छ- पात्र सौदामिनी ।

लेखनप्रति आफ्नो अत्यन्तै गहिरो अनुरागले नै इन्दिरालाई बाँच्ने बाटो दियो । उनले एक ठाउँ भनेकी छन्- "लेखन मेरो रगतको नसानसामा छ । म रोकिएँ भने सास थुनिएर मर्नेछु । कलम बेगर म मर्दछु । आफूसित लेखानशक्ति भएकैले गर्दा म चराझैं स्वतन्त्र छु र कहीं कतै पनि अड्न स्वतन्त्र छु, कुनै कुरा बुझ्न सक्छु ।" फेरि उनले थपेकी छन्- "कलम नभए म के गर्थें होला ? कुन हतियारले म लड्ने थिएँ होला, यो अन्याय विरुद्धको लडाइँ ? यो घाउ जस्तै भएको छ ।" (विन्द्या सुब्बा) ।

वास्तवमा उनी कलमका लागि बाँचेकी छन्, लेख्ने महान् उद्देश्यले कलमसित बाँचेकी छन्- उनको अन्तर्हृदयमा यस्तो एक आवाज छ, जसलाई बाहिर निकाल्न

लेख्तछिन्- "लेखन नभएको भए अर्थोक म के गर्न सक्थें र ? म मेरो विरोध प्रकट गर्न लेख्तछु । म दलितको आवाज हुँ । अनि म आफ्नो प्रेम प्रकट गर्न लेख्तछु । किनभने एक लेखकको मनमा यस्तो एक गहिरो तत्व छ, त्यो तत्व हो- प्रेम । म प्रेमलाई अभिव्यक्ति दिन लेख्ने गर्छु ।" (पुनः विन्द्या सुब्बा)

त्यसैले उनले नारी दमन विरुद्ध लेखिन् । उनले पशुबली, हत्या अनि अनेक प्रकारका हिंसा विरुद्ध लेखिन्, बालिकामाथि हुने अपराध विरुद्ध लेखिन् । वास्तवमा अकिञ्चन बिधवाको पनि बलिदान भइरहेको छ, त्यस सांस्कृतिक परम्परा विरुद्ध लेखिन् । ती सन्यासी विरुद्ध, जसले प्रेतात्मा बन्छु भन्दै ब्वाँसोका रूप धारण गरेर ती बिधवालाई खाने गर्दछन् । एक नारी त्यो ब्रजभूमिमा सदैव असुरक्षित देखेर उनले ती ब्वाँसा र फ्याउराका विरुद्ध लेखिन् ।

उता, शव दाह भएका ठाउँमा गएर हेर्नू– जलिरहेको मुर्दामा चढाइएका सिक्का टिप्न भिखारीहरू लर्दैछन् । उनीहरू कुनै शवको दाँतमा ठोकेको सुन निकाल्न ढुकिरहेका हुन्छन् । यहाँको सडकमा मानव अनुहारमा ब्वाँसाहरू घुम्दैछन् ।

यो आख्यान असममै पढेका नेपाली असमेली विद्वान्‌बाट अनुवाद र सम्पादन भएकाले नेपाली भाषामा एक सुन्दर अनि अति पठनीय ग्रन्थ आएको छ । कति शब्द असमकै जलवायुको सुवास बोकेका छन् । जस्तोः कडिपत्ता  (त्यसको समानार्थी नेपालको नेपालीमा छैन अर्थात्) फाटक (ढोका), टङ्गा (टाँगा), गुण्डामि (०), सनाख्त (सनाखत) सन्तरी (पाले), बेरिबेरि (फेरिफेरि), छट्याङ्ग्रा (०), दुई एक (एकदुई), भूमिशुल्क (तिरो), अपचलन (०) नाखुस (०) इत्यादि ।

त्यो वर्ष अर्थात् २०१६ फरवरीदेखि नै द्रोणजीसँग निकट बन्दै गएको थिएँ । उता पुगेर उहाँको कृति (नीलकण्ठी ब्रज समेत) मा कार्यपत्र प्रस्तुत गरेको कुरा उहाँलाई सुनाएँ । खुशी हुनुभो । यो कुरा डा. खगेनजीले पनि सुनाएँ भन्नुहुन्थ्यो ।

त्यसको अर्को वर्ष मैले उहाँलाई धुलाबारीमा आयोजित साहित्य कर्ममा भेटें– त्रिफला राष्ट्रिय पुस्तकालयमा केही वार्ता गऱ्यौं । मैले भनें- 'जसरी पनि यो नीलकण्ठी ब्रज प्रकाशनमा ल्याउनुहोस् ।'

'प्रकाशक पाएको छुइनँ ।'

'प्रकाशक नखोज्नोस् । ऋण गरेर पनि यत्रो परिश्रमको यस्तो अमूल्य उपहार आफैं प्रकाशित गर्नोस् ।'

'सरले काठमाडौंतिर प्रयत्न गरिदिनोस् न ।'

'हुन्छ, मलाई पाण्डुलिपि दिनुहोस्, म गरिहेर्छु ।'

त्यो पाण्डुलिपि लिएर म फर्किएँ। काठमाडौंका दुई-तीन प्रकाशकलाई अनुरोध गरें । तर, हिन्दी स्रष्टा जस्तो होइन रहेछन्– असमिया, बंगाली, अनुवाद बिना चिनारी पनि नहुने । इन्दिरा गोश्वामीको नाम यता नसुनिएको, नपढिएको र पुस्तकको नौलो शीर्षकले उहाँहरूलाई आकर्षित गरेन होला शायद । त्यसो त यहाँ महादेवी बर्मा, महाश्वेतादेवी, कमला दास, कमला मार्कण्डेय बहुपठित र अनुदित पनि छन् । हिन्दीमा हुने आउनेहरू सहजै नेपालीमा पुग्छन् । तर असमिया, उडिया, तेलुगु, पञ्जाबी जस्ता भाषा आउन समय लाग्ला कि नयाँ पुस्ताका सफल अंग्रेजी माध्यमका स्रष्टा सहज भ्रमण गर्दछन् ।

मैले उहाँसित जे भनें, त्यो कुरा अन्यत्र पनि बारम्बार भन्ने गर्छु- एउटा स्रष्टाले ऋणदेखि डराउनु हुँदैन । निर्भीक भई पुस्तक छाप्तै जानुपर्छ । आफ्ना पालामा नगरे भविष्यमा कसले गरिदिन्छ ?

तर, उहाँ तत्पर नभएको मात्रै कुरा गर्नुहुन्थ्यो । गर्दै लाँदा उहाँ अलि बिरामी भएको कुरा पनि सुनियो । तीन वर्षअघि ज्ञानबहादुर छेत्रीको नेतृत्वमा असमका १० जना नेपाली साहित्यकार नेपाल भ्रमणमा आउनुभयो । दशैं-तिहारको बीच थियो । म यता काठमाडौंदेखि उहाँहरूको स्वागतमा काँकरभिट्टा पुगें । भोलिपल्ट त्रिफला राष्ट्रिय पुस्तकालयमा आयोजित अर्को भव्य साहित्यिक कार्यक्रममा भाग लिन भद्रपुरदेखि अरु स्रष्टासँगै डा. द्रोण पनि आउनुभयो । उहाँलाई पनि अतिथि बनाइयो, छोटो प्रवचन दिनुभयो ।

भरे निकै बेर गन्थन गऱ्यौं । उहाँले भन्नुभो- 'मैले असमका छविलाल उपाध्यायले तपाईंलाई पठाउनु भएको काव्य उषा अनिरुद्ध पनि ल्याउन बिर्सेछु । कुनै बेला हात लाउँला ।'

'हुन्छ, म भद्रपुरतिर पनि कुनै दिन आउँला ।'

तर, उहाँ आउन सक्नुभएन, म पनि जान सकिनँ । उहाँको बिमार बढ्दै गएछ । उताबाट छविलालले अर्को प्रति उषा अनिरुद्ध पठाउनुभयो । यसरी पाएँ भनी डा. द्रोणज्यूलाई सुनाएँ । तर, उहाँ गल्नुभएको रहेछ । त्यो धुलाबारीको नै हाम्रो भेट अन्तिम रहेछ ।

एक दिन सिलिगुडीका स्रष्टा मुक्ति उपाध्याय बरालबाट दुखद समाचार सुनें- डा. द्रोण रहनु भएन ।

लाग्यो- नीलकण्ठी ब्रज उहाँको जीवनकालमै छापिनु पर्थ्यो । जीवनकालमै प्रकाशन गर्नाले लेखकहरू शान्त आत्मा लिएर जानेछन् । परिवारलाई हुने भनेको

अलिकति ऋण मात्र हो । जीवनकालपछि पनि दिवंगतहरूको आत्मशान्तिको लागि त्यो इच्छा पूरा गरिदिनै पर्छ । परिवारले नै आखिर त्यो व्ययभार बोक्नु पर्दछ । तर, उता लेखकले देख्न पाउने छैनन् । त्यसैकारणले सम्पूर्ण लेखक समक्ष, लेखकका परिवार समक्ष म एउटा अनुरोध गर्दछु– जीवनकालमा लेखकका कृतिहरू छपाइदिने गर्नुपर्दछ । धोको रह्यो भने परिवारलाई पनि सधैंको खुट्को रहन्छ । उहाँको जीवनोपरान्त पनि यो कृति छिटै छापियोस्, परिवारजन लाग्नुहोस्- आज यही पुकारा गर्दछु । उहाँको आत्मा यसैमा छ ।

केही समयदेखि डा. खगेनले सोध्न थाले- द्रोण उपाध्यायको स्मृतिग्रन्थ निकाल्ने कुरा छ । सरको पनि नाम लिएको छु, केही खबर आएन ?

आजसम्म कसैले क्यै भन्नुभएको छैन । म पनि अलिकति ता जोडिएको थिएँ ।

मुक्ति उपाध्यायको प्रश्न आयो- द्रोण उपाध्यायको स्मृतिग्रन्थ निकाल्ने कुरा छ, सरको पनि नाम लिएको छु, कतैबाट अनुरोध आएको छ ?

आजसम्म कुनै सूचना जानकारी अनुरोध छैन ।

धेरै बितेपछि एक दिन स्रष्टा भाइ डा. रत्नमणि मार्फत इमेल पाएँ, उनैको एक फोन पनि । अनि सम्झें, द्रोणजीको सम्झनामा लेख्ने केही कुरा छन्, लेख्नुपर्‍यो । जे भए पनि उनी बहुमुखी प्रतिभा थिए । तर, साहित्य वा सिर्जना कर्मलाई व्यवस्थित गर्न नपाई बितेर गए । उनको आत्माले चिरशान्ति प्राप्त गरोस्, उनका सुकर्महरूको परिवार र समाजले संरक्षण र प्रकाशन गरोस् ।

यति गरेर यो लेख उनी डा. खगेन र उनै मुक्ति बरालका घरतिर पठाउँदैछु ।

*२४ असार २०७७*

- *सुकर्मटोली, कीर्तिपुर*

*(लेखक विशिष्ट समालोचक हुनुहुन्छ)*



घनेन्द्रप्रसाद शर्मा

# डा.द्रोण बारेका मेरा केही अभिव्यक्तिहरू

डा. द्रोणकुमार उपाध्याय पौडेलसँग मेरो चिनजान २०४५ सालतिर म मेरो नोकरीको सिलसिलामा झापा चन्द्रगढीमा सरुवा भएपछिदेखि भएको हो। त्यसबेलादेखि भएको त्यो चिनजान विस्तारै घनिष्टतामा परिणत हुँदै गयो र हामी अन्ततः घनिष्ट मित्र भयौं। उहाँ मेची क्याम्पसको प्रोफेसर र म जिल्ला शिक्षा कार्यालयको कर्मचारी। अनि मेरो घर मेची क्याम्पसकै छेउमा भएको र मलाई शिक्षा क्षेत्रमा काम गर्ने सरहरूसँग हिमचिम बढाउन मन लाग्ने... यिनै कारणहरूले फुर्सदमा म क्याम्पसतिर पसिरहन्थें। द्रोण सरसँग यस्तै सिलसिलामा यसरी नै हाम्रो संगत बाक्लिँदै गएको हो। पछि, २०४५ सालमा प्रज्ञा एकाडेमी स्कूल स्थापना र सञ्चालन गर्ने हाम्रो एउटै टिम भयो- घनश्याम खनाल सर, द्रोणकुमार उपाध्याय सर, श्यामकृष्ण श्रेष्ठ सर, खडानन्द वाशिष्ठ सर, वरिष्ठ अधिवक्ता लेखनाथ निरौला सर, रामनाथ बास्कोटा सर र म। यसरी त्यो स्कूलको स्थापनापछि द्रोण सर र म सहकर्मी पनि भयौं। अहिले सम्ममा प्रज्ञा एकाडेमीका संस्थापकमध्ये लेखनाथ निरौलाजी र म मात्र जीवित रह्यौं !

प्रज्ञा एकाडेमीका संस्थापक सञ्चालकहरूमध्ये खडानन्द सर र म पूर्णकालीन शिक्षक थियौं। बाँकी सरहरूमध्ये द्रोण सर चाहिं कहिलेकाहीं स्वेच्छाले आएर भिजिटिङ शिक्षकको रूपमा पढाउनु हुन्थ्यो। हाम्रो (द्रोण सर र मेरो) पढाउने विषय एउटै भएको हुनाले उहाँ स्कूलमा आउँदा मलाई ठूलै राहत महसूस हुन्थ्यो।

मैले मेरो जीवनमा प्राप्त गर्न सकेका उपलब्धिहरूमध्ये द्रोणकुमार उपाध्याय पौडेलजीसँगको सान्निध्यलाई ठूलै उपलब्धिको रूपमा लिएको छु। उहाँसँग संगत शुरु भएपछि उहाँको जीवनकाल पर्यन्त मैले उहाँसँग धेरै बौद्धिक र प्राज्ञिक ज्ञान एवम् फाइदाहरू लिएको छु। कतिपय अवस्थामा उहाँ मभित्रको ऊर्जाको स्रोत बन्नुभयो। यी कुराहरू सम्झेर ल्याउँदा उहाँको मृत्युले एक प्रकारको ठूलै

रिक्तता मैले अनुभव गरेको छु र यस कुराले मलाई बारम्बार पीडाबोध भइरहेको छ । उहाँको मृत्युले नेपाली साहित्य, नेपालको शिक्षा जगत र हामी साथीसंगाति र इष्टमित्रहरूमा जुन रिक्तता, जुन क्षति भएको छ; वास्तवमा त्यसलाई अपूरणीय क्षति मान्नु नै पर्छ । यसबेला हामी उहाँमा केवल श्रद्धा-सुमन चढाउन सक्छौं ।

द्रोण सरसँगको संगतमा उहाँका विशेषताबारे म आफूले अनुभूत गरेका व्यक्तित्व पक्षका केही विशेष उल्लेखनीय आयामहरू छन् । तिनीहरूलाई म यहाँ बुँदागत रूपमा प्रस्तुत गर्न चाहन्छु । यी बुँदाहरू उहाँ बारेका मेरा नितान्त निजी अनुभवहरू हुन् । यी बुँदाहरू मात्रै उहाँका व्यक्तित्वका पूर्ण आयामहरू होइनन्, अझै धेरै हुन सक्छन् भने मलाई लागेको छ । केवल मैले उल्लेख गरेका बुँदाहरू मात्रलाई द्रोण सरको व्यक्तित्वको सम्पूर्णता नठानिदिनुहुन हार्दिक आग्रह गर्न चाहन्छु । द्रोण सर बारेका मैले अनुभूत गरेका उहाँका व्यक्तित्व पक्षका केही बुँदाहरू–

१) डा.द्रोणकुमार पौडेलले आफ्नो निजी जीवनशैलीलाई अत्यन्तै साधारण रूपको देखिनेगरी अघि बढाउने गर्नुभएको थियो । उहाँ Simple living, high thinking को जीवन्त रूप हुनुहुन्थ्यो ।

उहाँले आफू सामान्य जीवनमा जिउने अभ्यास गर्ने गर्नुभएको भए तापनि यथार्थमा उहाँभित्र अत्यन्त महान व्यक्तित्व रहेको थियो । उहाँ धेरै विषयहरूका बारेमा सूक्ष्म रूपमा जानकारी राख्ने विद्वान व्यक्ति हुनुहुन्थ्यो । धर्म, संस्कृति र संस्कारका विषयमा कसैले कुनै जिज्ञासा राख्यो भने उहाँ अत्यन्त सरल र आकर्षक भाषामा व्याख्या गरिदिनुहुन्थ्यो । उहाँ विश्वकै धर्म, संस्कृति र संस्कारका विषयमा यथासम्भव गहिरो जानकारी राख्नु हुन्थ्यो ।

२) उहाँ नेपाली, संस्कृत, अंग्रेजी, हिन्दी, बंगाली र असमी भाषाको ज्ञाता हुनुहुन्थ्यो । साथै, यी भाषाहरूसँग नजिक भएका अन्य भाषा-भाषिकाहरूको पनि जानकार हुनुहुन्थ्यो ।

३) नेपाली भाषा, नेपाली लोकसंस्कृति र नेपाली संस्कारका बारेमा विशेष दख्खल राख्नु हुन्थ्यो । नेपाली लोकसंस्कृतिको विषय त उहाँको विद्यावारिधिको विषय नै थियो । त्यस अतिरिक्त नेपाली चाडपर्व र जात्रामात्रा बारे उहाँले छुट्टै पुस्तक लेख्नुभएको छ । नेपाली भाषा-साहित्यको उहाँ प्राध्यापक नै हुनुहुन्थ्यो ।

४) उहाँ आफू भाषा, धर्म, संस्कृति, संस्कार आदि विषयको विज्ञ हुनुहुन्थ्यो भन्ने प्रमाण उहाँका रचनाहरूबाट नै प्रष्ट हुन्छ । तर पनि उहाँ जहिल्यै आफूलाई

म त्यति ठूलो जानकार व्यक्ति होइन भन्ने गर्नुहुन्थ्यो । उहाँको यस कथनलाई मैले उहाँको महानताको कसीमा राखेको छु । यो कवितापंक्ति उद्धृत गर्न चाहें-

*"उपकारी गुणी व्यक्ति निहुरिन्छ निरन्तर,*
*फलेको वृक्षको हाँगो नभुकेको कहाँ छ र!"*

५) उहाँ सफल अभिभावक हुनुहुन्थ्यो । त्यसैकारणले उहाँका सबै सन्तानहरू असल संस्कारले युक्त एवम् उच्च शिक्षित छन् र आ-आफ्नो पारिवारिक एवम् गृहस्थ जीवनलाई कुशलतापूर्वक अगाडि बढाइरहेका छन् । साथसाथै उहाँ एक कुशल र सफल शिक्षक पनि हो । उहाँका विद्यार्थीहरूमा अमिट प्रभाव परेको छ भन्ने कुरा मैले व्याख्या गरिरहनु नपर्ला ।

६) उहाँ उच्चकोटीको स्थापित साहित्यकार हो । यसको प्रमाणमा उहाँका कृतिहरू नै पर्याप्त छन् । यस बारे केही भनिरहन आवश्यक छैन ।

७) उहाँ सबै मित्रहरूका लागि एक असल सहृदयी मित्र हुनुहुन्थ्यो । त्यसकारणले नै उहाँसँग एकपटक मित्रता भइसकेपछि त्यो मित्रता प्रगाढतामा परिणत भइहाल्थ्यो ।

८) उहाँ एक कुशल संगठक र कुशल व्यवस्थापक पनि हुनुहुन्थ्यो भन्ने कुरा हामीले सँगै प्रज्ञा एकाडेमी चलाउँदाका बखतदेखि अनुभव गरेको छु ।

९) उहाँभित्र सदा प्रशन्न रहने हँसमुख व्यक्तित्व थियो । जति अवधिसम्म अर्थात् उहाँसँग चिनजान र बसउठ भएदेखि उहाँको जीवनको अन्तिम अवधिसम्म उहाँलाई रिसाएको, उत्तेजित भएको मैले कहिल्यै देखिन । मलाई लाग्थ्यो, उहाँले रिसलाई जितिसक्नुभएको छ ।

१०) उहाँभित्र आत्मबल र आत्मविश्वास धेरै थियो । मैले मेरो जानकारीमा लिएसम्म उहाँलाई कहिल्यै पनि हताश र निराश भएको देखिन । मैले यतिसम्म देखें- 'मलाई क्यान्सर भयो, अब उपचार सम्भव छैन, अब मेरो जीवनको अन्तिम क्षण आयो' भन्ने पनि त्यतिका सबै कुराको जानकारी राख्ने व्यक्तिलाई थाहा थियो होला; यो मेरो अनुमान हो । उहाँ दिल्लीबाट उपचार हुन नसकेर फर्किएर घरै आएपछि उहाँको जीवनको लगभग अन्तिम क्षणतिर भेट्न भनेर म उहाँको घरमा गएको थिएँ । सामान्य औपचारिकताका कुराकानीहरू भए । त्यस्तो बेलामा पनि उहाँ फरासिलो र हँसिलो देखिनुभएको मलाई लाग्यो । अर्थात् आफूलाई क्वै

नभएजस्तो हाउभाउ देखाउँदै उहाँले सामान्य अवस्था सरह नै गफिन थाल्नुभएको थियो । उहाँको दृढ आत्मबललाई सलाम गरें मैले ।

११) उहाँ अत्यन्तै सकारात्मक सोच भएको व्यक्तित्व हुनुहुन्थ्यो । जुनसुकै समस्या वा विषयवस्तुलाई जहिल्यै पनि सकारात्मक र गुणात्मक पक्षबाट हेर्ने उहाँको बानी थियो । उहाँको त्यही सद्गुणको कारणले होला, उहाँसँग नजिकमा रहेर बस्दा मलाई भित्रैबाट एकप्रकारको आनन्दानुभूति हुन्थ्यो । उहाँसँग निकटवर्ती शायद सबैलाई यस्तै भएको हुँदो हो । सम्भवतः उहाँको यसै गुणले होला, उहाँको पछाडि कुरा काट्ने मान्छेहरू थिएनन् भन्दा पनि फरक नपर्ला ।

अन्त्यमा, यस धराधामबाट बिदा हुनुहुने मेरा मित्र द्रोण पौडेलको आत्माको चिर शान्तिको कामना गर्दछु ।

*भद्रपुर (झापा)*

*(लेखक चर्चित बाल साहित्यकार हुनुहुन्छ)*



चिन्तामणि दाहाल

# मित्र द्रोणमा स्मृतिका श्रद्धा सुमन

कहाँबाट शुरु गरौं, मेरा अनन्य मित्र र सहकर्मी द्रोण सर अर्थात डा.द्रोणकुमार पौडेलको स्मृतिमा श्रद्धा सुमन व्यक्त गर्न । उनी यति छिट्टै मास छर्न जान्छन् भन्ने सोचेकै थिइनँ । लगभग हमउम्र जस्तै थियौं हामी । उनको र मेरो कुराकानी तँ तिमीको थियो, चिन्हारी भएदेखि नै । हाम्रो भेट २०३७ सालमा भएको हो, मेची क्याम्पस भद्रपुर झापामा ।

म २०३७ सालमा मेची क्याम्पसमा इतिहास विषय पढाउन आएँ भने उनी केही समयपछि त्यहीं नेपाली विषय पढाउन आए । मेरा माहिलो ठूलोबुबाका छोरा विद्यापति दाहालका पनि साथी, जो अहिले भारतको असमस्थित उदालगुरीमा बस्छन्, का नाताले पनि होला; द्रोण सरको र मेरो चिन्हारी भएदेखि नै अत्यन्त नजिकको सम्बन्ध बन्यो ।ं द्रोणजी पनि असममै पढे हुर्के । तर, नेपालीमा एम.ए.पढ्न उनी नेपालमा आए र काठमाण्डौको कीर्तिपुर क्याम्पसमा पढे । यता पढ्न आएकैले होला, उनलाई मातृभूमिप्रति प्रेम जाग्यो र यतै बस्न थालेर राम्रो काम गरे ।

उनी एक प्राज्ञिक व्यक्ति थिए । त्यसैले विद्यावारिधि गरे, नेपाली लोकलय सवाईमा । लेखन अध्ययनमा नै ध्यान भएकोले होला, उनी अरूतिर बरालिएनन् । नत कुनै प्राइभेट प्लस-टु पढाउन नै दौडधुप गरे, न अन्य कुनै व्यापार व्यवसाय । सादगी जीवन बिताएका उनलाई क्यान्सर जस्तो घातक रोगले कसरी आक्रमण गऱ्यो ? भन्ने कुरा नै पत्यार लाग्दो छैन । तर, नपत्याएर के गर्नु । उसैले लग्यो उनलाई यति चाँडै ७० वर्षकै उमेरमा । नेपालीहरूको सरदर आयु अहिले ७० वर्षभन्दा बढी छ ।

उनको ध्यान पछिल्लो कालमा आदिवासीहरूको त्यसमा पनि राजवंशी जातिको भाषा-संस्कृतिको अध्ययन गर्नेतिर थियो । उनले त्यसबारेमा केही खोजेका पनि थिए । मलाई बारम्बार उनले राजवंशी जातिको भाषा-संस्कृतिमा

केही गरौं न भनेका थिए । मैले पनि गर्नु पर्ला, राम्रो कुरा हो भनें, तर साथ दिन सकिन । उनले भनेका थिए, भाषाको अध्ययन म गर्छु, तिमी संस्कृतिको अध्ययन गर । एकसाथ दुबै हुन्छ । झापा राजवंशी जातिको पहिचान बोकेको जिल्ला भएकोले यहाँ राजवंशी जातिको बारेमा गहिरो गरी खोज गर्ने हो भने असाध्यै धेरै कुरा पत्ता लाग्छ- मानव विकासक्रमको ।

यति छिट्टै यस धराधाममा उनको भोग सकिएला भन्ने नसोचेर पनि मैले अलिक अल्छी गरें । त्यसको अहिले मलाई पछुतो छ - एउटा विद्वान् पुरुषको साथमा लागेर मैले लाभ लिने मौका गुमाएकोमा ।

जे हुनु त भइसक्यो । यस धरामा उनको पार्थिव शरीर छैन । हामी हिन्दू सनातनीका साथै वैदिक आर्यहरू गीतामा पनि विश्वास गर्छौं । गीताले भनेको छ( यो शरीर एउटा लुगा मात्र हो, आत्माका लागि । एउटा फाटेपछि आत्माले अर्को नयाँ लुगा लाउँछ । आत्मा मर्दैन । यही ब्रम्हाण्डमा रहन्छ । यस विश्वासलाई आधार मान्दा द्रोणजीको आत्मा अमर छ । यहीं छ । उनको आत्माले अर्को लुगा लगाइसक्यो कि सकेन, थाहा हुने कुरा होइन वा उनको आत्माले मोक्ष पो पाइसक्यो कि । मलाई जहाँसम्म उनीसँगको ३९ वर्षको संगतबाट के विश्वास छ भने उनले मोक्ष पाएको हुनुपर्छ । उनी जस्तो पवित्र आत्माले नै हो, मोक्ष पाउने । उनी मुमुक्षु पनि थिए र उनले मोक्ष पाउने व्यवहार र काम गरेका थिए ।

उनको हिन्दूको पनि वैदिक समाजप्रतिको आस्थाले उनलाई छुट्टै चिन्हारी दिएको थियो । वैदिक समाजले जातीय भेद मान्दैन । उँच-नीच मान्दैन । छुवाछुत मान्दैन । तर, मानसिक र शारीरिक शुद्धता भने खोज्छ । त्यसैले उनले झापामा वैदिक समाजको स्थापना गरी त्यसको अध्यक्ष भएर समाजसेवा पनि गरेका थिए । शैक्षिक सेवा त उनको जीवन नै थियो ।

उनको एउटा असाध्य राम्रो बानी थियो, अरुलाई सहयोग र साथ दिने । मलाई पनि उनले धेरै कुरामा सहयोग गरेका थिए । साथ दिएका थिए । मैले पनि उनको कुरा काटेको याद छैन । त्यति लामो चार दशकको संगतमा एक पटक पनि नराम्रो बोली र व्यवहार भएन हामीबीच । अनि उँचो बोली पनि बोल्नु परेन दुबैले । यो ठूलो कुरा हो जीवनमा ।

२०४६ सालमा मेची क्याम्पसमा विज्ञान विषयको पठनपाठन हुने भयो । तत्कालीन क्याम्पस-प्रमुख घनश्याम खनाल, जो झापामा प्राविधिक शिक्षाको दियो बाल्ने सेवी थिए, उनको पहल र प्रयासले मेची क्याम्पसमा विज्ञान विषय

पठनपाठनको स्वीकृति मिल्यो । तर, पढाउन आवश्यक पर्ने भवन र प्रयोगशाला थिएन । त्यसका लागि अत्याधुनिक भवन आवश्यक थियो । क्याम्पससँग पैसा पनि थिएन । विश्वविद्यालयले स्वीकृति र विज्ञान विषयका लागि केही दरबन्दी दिने वचन दियो । तर, भवन बनाउन एक सुको पैसा पनि दिन्न भन्यो । छैन पनि भन्यो । तर, भवन तयार पारे पठनपाठन गर्न स्वीकृति र दरबन्दी दिने भन्ने कुरा पनि महत्वको थियो ।

मागेको झापावासीले, उसले किन सबै कुरा दिन्थ्यो । अनि जनतासँग चन्दा उठाएर भवन बनाउने कुरा भयो । लागत करीब ४० लाख रूपैयाँ लाग्ने भयो । २०४६ सालमा ४० लाख रकम चानचुने थिएन । तर, घनश्याम सरको हिम्मत र लगनले चन्दा संकलनको सूत्रपात भयो । भवन निर्माण समिति बन्यो । चन्दा संकलनको काम पनि गर्नुपर्ने भयो ।

त्यसबेला मेरो दैनिक एक-एक घण्टाका ४ वटा क्लास लिनुपर्थ्यो भने द्रोणजीले पनि त्यति नै क्लास लिनुपर्ने अवस्था थियो । पढाउन तयारी पनि चाहिन्थ्यो भने विज्ञान भवनका लागि चन्दा उठाउन हिंड्नु पर्ने अवस्था पनि थियो ।

हामी दुबै समितिमा भएकोले चन्दा उठाउनु पर्ने बाध्यतामा पनि थियौं । त्यसमाथि द्रोणजी पनि 'आफूले समय र परिश्रम दिंदा झापामा प्राविधिक शिक्षाको जग बस्छ भने दिनुपर्छ' भन्ने मान्यता एवम् विश्वास भएको र मेरो पनि सोही धारणा मिल्दा हामीले घनश्याम सरको शिक्षाको अभियानमा भरपुर साथ दियौं । अनि हामी हिउँदे १५ दिने बिदा र बर्खे १ महिनाको बिदा दुबै बिदामा पनि हामी चन्दा उठाउन गाउँ-गाउँ घुम्थ्यौं । हामीले कुनै थप पारिश्रमिक पनि मागेनौं । सेवाको भावनाले आफूले पाउने बिदामा पनि क्याम्पसकै काममा खटियौं । म त निर्माण समितिमा भएकोले मजदूरलाई हप्ता पेमेन्टका लागि कहिले कसैसँग, कहिले कसैसँग सापटी पनि लिनु पर्थ्यो । त्यस काममा पनि समय दिनु पर्थ्यो । निस्वार्थ सेवाभाव भएका द्रोणजीको त्यस कामलाई सम्झेर र सँगै एउटै ओछ्यानमा सुतेर हामी झापाको बाहुण्डाँगीदेखि गौरीगञ्जसम्मको क्षेत्रमा एक व्यक्तिबाट एक रूपैयाँदेखि अढाई लाख रूपैयाँसम्म चन्दा यात्रामा कुदेको कुरा बिर्सने कुरा भएन ।

अर्को उनको असाध्यै राम्रो बानी थियो, केही नयाँ काम गर्ने - जसले शिक्षाको क्षेत्रमा, समाजका क्षेत्रमा राम्रो होस् । कतिपय कुरामा उनी एक्लै पर्दा

सोचेजति काम गर्न सकेनन् । जे गरे, उनले प्राज्ञिक उन्नयन र खोजमा गरे । मेची क्याम्पसमा म क्याम्पस-प्रमुख भएका बेला चियाको पठनपाठन गर्ने कुरा भयो । विश्वविद्यालयमै पाठ्यक्रम थिएन । अनि चिया विषयको पठनपाठनमा पाठ्यक्रमको अध्ययन गर्न र चिया विषयको पठनपाठन भएको असमको झोराहाटसम्म पुगेर अध्ययन गर्ने कुरामा उनले असम सँगै गएर मलाई साथ दिएको पनि बिर्सन सक्ने कुरा भएन ।

यस्ता धेरै स्मृति छन्, उनको र मेरा बीचका । धेरै गन्थन पाठकका लागि पनि दिक्क लाग्ने हुन्छ । अहिलेलाई उनीप्रति हार्दिक र भावपूर्ण श्रद्धाञ्जलि व्यक्त गर्दै मेरा स्मृतिका शब्दहरूलाई यहीं विराम दिन्छु ।

*भद्रपुर, झापा*

*(लेखक खोज अनुसन्धानकर्ता तथा मेची बहुमुखी क्याम्पसका पूर्व क्याम्पस प्रमुख हुनुहुन्छ)*



चित्रबहादुर श्रेष्ठ

# बडेभाइसँगको एउटा मीठो सम्झना

स्व.द्रोणकुमार उपाध्यायसँग तीन दशकसम्म एउटै संस्थामा कार्य गर्ने अवसर प्राप्त भएको थियो । त्यस अवधिका बीच मित्रवत् व्यवहार थियो । मित्रको रूपमा म उहाँलाई 'बडेभाइ' भन्ने गर्दथें । मलाई भने उहाँ 'चक्र' भन्नु हुन्थ्यो । कहिलेदेखि र किन 'बडेभाइ' भनें, मलाई यकिन थाहा छैन । शायद उमेरले जेठो भएकोले त्यसो भने हुँला । तर, मलाई 'चक्र' भन्नुको कारण एक व्यक्तिको भेटसँग सम्बन्धित छ । ती व्यक्ति प्रा.डा.लोकराज बराल हुनुहुन्छ ।

हामी दुबै काठमाडौंमा थियौं । एक दिन प्रा.डा.लोकराज बराललाई भेट्न जाने सल्लाह भयो र गयौं । डा. बराल त्रि.वि.वि.पढ्दा मेरा गुरु हुन् भने द्रोणजीको नातामा मामा । हामीलाई देख्नासाथ डा.बरालले 'ए... चक्र पनि आएको ?' भन्नुभो । द्रोणजी छक्क पर्नुभो । तर, केही भन्नु भएन । त्रि.वि.वि. पढ्दैदेखि मलाई उहाँले किन हो, चित्रको सट्टा 'चक्र' भन्ने गर्नु हुन्थ्यो । फर्केर आउँदा बाटैदेखि द्रोणजीले पनि 'ओ चक्र' भनी बोलाउन शुरु गर्नुभयो ।

बडेभाइसँगको एउटा मीठो सम्झना आइरहन्छ । कुरा २०४३ साल आषाढ महिनाको हो । दुबैले त्रि.वि.वि. सेवा आयोगको उप-प्राध्यापक पदको परीक्षा दिएका थियौं । सर्वप्रथम नेपाली विषयको परीक्षाफल प्रकाशित भएछ । हामी धेरै साथीलाई थाहा थिएन । द्रोणजीले कुन स्रोतबाट बुझ्नुभयो, उहाँ असफल भएको जस्तो लागेछ क्यार । कसैलाई केही नभनी उदास भइरहनु भएको रहेछ । केही दिनपछि राजनीतिशास्त्रको परीक्षाफल प्रकाशित भयो । मित्रहरूलाई लिएर म परीक्षाफल बुझ्न दूरसञ्चार कार्यालय जाँदा द्रोणजी पनि साथ लाग्नुभयो । ट्रंकमार्फत बुझ्दा म सफल भएको थाहा भयो ।

यसै सिलसिलामा द्रोणजीले पनि नेपाली विषयको बुझ्न आग्रह गर्नुभयो । हामीले आफैं ट्रंक गरेर बुझ्नुहोस् भन्दा मान्नु भएन । त्यसो गर्नुको कारण के थियो, तत्काल हामीलाई थाहा भएन । उहाँले जोडबल गरेपछि एक मित्रले

ट्रंक गर्नुभयो । मित्र एक्कासी उत्तेजित हुँदै 'बधाई छ ओ द्रोणसर ! बधाई छ' भन्दै उहाँसँग हात मिलाउन पुग्नुभयो । द्रोणजीले विश्वास नै गर्न सक्नुभएन । उहाँको अनुहारमा खुशीका लहर फैलन सकेन । उहाँ के भन्नु, के गर्नु भने झैं विश्वास र अविश्वासको दोसाँधमा पुग्नुभयो । सबैले भनेपछि आफैं ट्रंक गर्न लाग्नुभयो । ट्रंकमा कुरा गर्दागर्दै उहाँको अनुहारमा खुशी छायो । हाँस्दै रिसिभर राखेर भन्नुभयो- 'मैले सपनामा पनि सोचेको थिएन पास हुन्छु भनेर ।' सबैले किन र ? भनी प्रश्न गर्दा पो रहस्य खुलाउनु भयो । उहाँको एक मित्रले काठमाडौंबाट फोन गरेर फेल भइस् भनेर खबर पठाएको रहेछ ।

खुशियालीमा कोक खाने प्रस्ताव मित्रहरूले राखे । कोक खाने कुरा ठूलो भएन, तर खुवाउने कुरा भने विशेष चर्चा भयो । द्रोणजीको भनाइमा पास भएका दुबैले मिलेर खुवाउने, तर साथीहरू भने सहमत भएनन् । नचिताएको सफलता प्राप्त गरे वापत द्रोणजीले मात्र खुवाउने भन्ने कुरा भयो । द्रोणजी अन्कनाउँदै सहमत भएर पैसा तिर्नुभयो । खुशीका साथ सबै क्याम्पसतिर लाग्यौं ।

बाटोमा पान खाने कुरा भयो । द्रोणजीले भनिहाल्नु भयो- 'पैसा मैले तिर्नुपर्ने ?' उहाँको कुरा ठीकै थियो । त्यसैबेला द्रोणजीलाई पान पसलमा कुनै चिज किन्न मन भएछ र पैसा निकालेर गन्न थाल्नुभयो । एक्कासी ठूलो हाँसो हाँस्दै भन्नुभयो- 'भगवानले जे गर्छ, भलै गर्छ ।' सबै छक्क पऱ्यौं । कुरोको चुरो के रछ भनेर बुझ्दा पो थाहा भयो; उहाँले कोकको जति पैसा तिर्नुभयो, त्यो भन्दा बढी व्यापारीले फिर्ता गरेछ ! हामीलाई पनि 'के खोज्छस् कानो, आँखो' भने झैं भइहाल्यो । कोक फ्रीमा खाइयो, नाफा पनि कमाइयो । द्रोणजीको दिन भला रहेछ, अब पानको पैसा तिर्नु भनी सबैले आग्रह गरे । द्रोणजीले चूपचाप तिर्नुभयो ।

यिनै खुशी र रमाइला क्षणहरूलाई स्मरण गर्दै स्व.द्रोणकुमार उपाध्यायप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु । उहाँको आत्मालाई शान्ति मिलोस् ।

*भद्रपुर- ८ (झापा)*

*(लेखक मेची बहुमुखी क्याम्पसका पूर्व क्याम्पस प्रमुख हुनुहुन्छ)*



चूडामणि वशिष्ठ

# मेची क्याम्पस र डा.द्रोणकुमार उपाध्याय पौडेल

होचो-होचो कद, मोटो-मोटो ज्यान, रातो वर्ण, हृष्टपुष्ट शरीर, फुर्तिलो चाला, मीठा रमाइला कुराकानी गर्ने, अनौपचारिक ढङ्गले गफ गर्ने ठट्यौलो स्वभाव, हँसमुख अनि बोलैया बानी, मनमा उत्रो धेरै पीर चिन्ता औडाहा नलिने, पीर परे पनि बाहिर नदेखाउने, जसो पर्ला उसै टर्ला किसिमको निष्फिक्री जीवनशैली, सामान्य सादा पोशाक, सात्विक जीवन, कसैलाई भनी नबिझाउने, जे छ त्यसैमा सन्तोष गर्ने। यो भएन उ भएन, यो छैन त्यो छैन भनेर लल्लौश नगाउने, बिलौना नगर्ने, सानातिना बाधा अड्चन तनाव आफैंमा पचाइदिने सहज शान्त सुखायको अनुकरणीय जीवन थियो द्रोण सरको। गाउँघर छरछिमेकमा कोही बिरामी भयो, कसैलाई आपद्-विपद् पऱ्यो भने सबैभन्दा पहिले द्रोण सर पुग्नु हुन्थ्यो र सहयोगका निम्ति तन, मन धन वचनले तत्पर रहनु हुन्थ्यो।

द्रोण सर २०३८ सालमा मेची बहुमुखी क्याम्पसमा अस्थायी सहायक प्राध्यापकका रूपमा प्रवेश गर्नुभएको थियो। त्यसबेला म बी.ए.दोस्रो वर्षमा पढ्थें। उहाँले भाषा विज्ञान पढाउनुभएको अहिल्यै जस्तो लाग्छ। शुरु-शुरुमा असमिया भाषाको लवज (जिब्रो)ले कतिपय शब्दहरू बुझ्न केही गाह्रो परेको पनि सम्झन्छु। नेपाली, अङ्ग्रेजी, हिन्दी, बङ्गला, असमिया, संस्कृत, राजवंशी भाषाका ज्ञाता सरले विभिन्न भाषाहरूसँग तुलना गर्दै भाषा विज्ञान पढाउनु हुन्थ्यो। २०४२ सालमा सहायक प्राध्यापक स्थायी नभई एकैचोटी सरले उपप्राध्यापक स्थायीमा नाम निकाल्नुभयो।

२०४४ सालदेखि म पनि मेची क्याम्पसमा नियुक्त भएँ। गुरु-चेला सहकर्मी बन्यौं। त्यसपछि द्रोण सरलाई अझ नजिकबाट नियाल्ने अवसर मिल्यो। बाक्लो बाक्लै घरमा पनि आइ-जाइ चल्थ्यो। द्रोण सर सारै मिहिनेती, जाँगरिलो, परिश्रमी हुनुहुन्थ्यो। बिहान-बेलुका फुर्सदको समयमा कुटो लिएर करेसाबारी, कोठेबारीमा पसेर फलफूल, सागसब्जी आफूलाई मात्रै होइन; छिमेकी र साथीभाइलाई समेत

बाँड्न पुग्नेगरी उत्पादन गर्नुहुन्थ्यो । गौमाताको सेवा गर्ने सीप, कौशल जाँगर पनि सरको लोभलाग्दै थियो । सकेसम्म 'आत्मनिर्भर बन्नुपर्छ' भन्ने उहाँको सोच थियो । दूध दही मोही घिउ प्रशस्त खाने द्रोण सरले २०६० सालतिर आएर दूध मात्रै होइन, सम्पूर्ण दुग्धजन्य पदार्थ खान चटक्कै छोड्नुभयो । 'दुग्धजन्य पदार्थ खाने मान्छे असली निरामिष हुन सक्तैन' भन्नुहुन्थ्यो । तर, जीवनको पछिल्लो समयमा फेरि दही-दूधको सेवन गर्नुभयो भन्ने सुनेको छु ।

वि.सं.२००६ मा भेजमाया र टीकाराम पौडेलका सुपुत्रको रूपमा बयाली बटियामारी असममा जन्मनु भई त्यहीं माध्यमिक शिक्षा हासिल गर्नु भएछ । त्यसपछि गुवाहाटी विश्वविद्यालयबाट आई.ए. (२०२८) उत्तीर्ण गरिसकेपछि त्रिभुवन विश्वविद्यालय कीर्तिपुर काठमाडौंबाट २०३० सालमा नेपाली विषयमा एम.ए. गर्नुभयो । आठ-दश वर्ष असमकै उच्च माध्यमिक विद्यालयहरूमा अध्यापन गरी मेची क्याम्पसमा आएर प्राध्यापन कार्य शुरु गर्नुभयो । विद्यावारिधि गर्नका निम्ति २०४८ सालमा पद्मकन्या क्याम्पस काठमाडौंमा काज सरुवा गरी जानुभएको थियो । तर, त्यहाँ त्यसबेला कसो-कसो तौजी मिलेन, विद्यावारिधिको चाँजो मिल्न नसकेपछि दुई वर्षपछि काज फिर्ता गरेर मेची क्याम्पसमै आउनुभयो । विद्यावारिधि गर्ने आफ्नो अठोटलाई पूरा गर्न अध्ययन बिदा लिएर उत्तरबङ्ग विश्वविद्यालय जानुभयो र २०६१ सालमा 'नेपाली सवाई' विषयमा विद्यावारिधि उपाधि हासिल गर्नुभयो । 'मैले विद्यावारिधि धेरै ढिलो गरें, उमेरका साथीहरूले यो काम बेलैमा गर्नुपर्छ । यो प्राज्ञिक स्थलमा विद्यावारिधि नगरी अब हुँदैन' भनेर विभागका साथीहरूलाई घच्घच्याई रहनुहुन्थ्यो ।

द्रोण सरको सम्पूर्ण जीवन शिक्षा सेवामा नै बित्यो । नेपाली भाषा-साहित्यको विषयमा आफू पढ्ने, विद्यार्थीलाई पढाउने, शोध खोज, अनुसन्धान गर्ने, सिर्जना समालोचना अनुवाद गर्ने, कृति प्रकाशन गर्ने, राष्ट्रिय अन्तर्राष्ट्रिय साहित्यिक भाषिक भेला, गोष्ठी सेमिनारहरूमा कार्यपत्र प्रस्तुत गर्ने, टीकाटिप्पणी गर्ने, प्राज्ञिक चिन्तन बहस गर्ने आदि जस्ता कार्यमै उहाँ व्यस्त रहनुभयो । आफ्नो ३१ वर्षे प्राध्यापन कार्यकालमा द्रोण सर २०४३ सालमा मेची क्याम्पसको सहायक क्याम्पस प्रमुख, कहिले निमित्त क्याम्पस प्रमुख भएर शैक्षिक प्रशासनमा पनि रहनुभयो । त्यसबेला घनश्याम खनाल सर क्याम्पस प्रमुख हुनुहुन्थ्यो । मेची क्याम्पसमा विज्ञान विषयको पठनपाठन गराउने अभियानमा जुट्नुभएका घनश्याम सरसँग सहयोद्धा भएर द्रोण सरले धेरै काम गर्नुभयो । रात-साँझ नभनी भोकै-

तिर्खै झापा जिल्लाभरि घुमेर विज्ञान भवन निर्माणका निम्ति सहयोग, चन्दा संकलन गर्न जुट्नुभयो । कतै रकम, कतै झ्याल-ढोकाका निम्ति काठ, कतै रड इँटा सिमेन्ट सहयोग जुटाएर दुई वर्षमै घनश्याम सरको नेतृत्वमा झापालीहरूको सहयोगमा भव्य विज्ञान भवन उभियो र पठनपाठन शुरु भयो ।

२०५० सालमा एक कार्यकाल र २०६२ सालदेखि लगातार दुई कार्यकाल नेपाली विभागको अध्यक्ष बनेर १५ जना नेपाली विषयका प्राध्यापकहरूको प्राज्ञिक नेतृत्व उहाँले गर्नुभयो । विभागका सदस्यहरू कसैलाई काखा र पाखा गर्नु भएन । उहाँ सबैसँग न्यायपूर्ण समान व्यवहार गर्नु हुन्थ्यो । कक्षा भाग वितरणमा कसैलाई गाह्रो पऱ्यो भने भारीमाथि सुपारी आफैं थप्नु हुन्थ्यो । स्नातक तहमा पत्रकारिता उहाँको रुचिको विषय थियो र स्नातकोत्तर तहमा नेपाली लोकसाहित्य रोजी विषय थियो । उहाँको विशेष अध्ययन तथा विद्यावारिधि पनि त्यही विषयमा भएको हुँदा उहाँले लोकसाहित्य नै पढाउनुभयो । 'नेपाली विभागको कार्यालय पनि हुनुपर्छ,' विभागमा एउटा सानो विभागीय पुस्तकालय हुनुपर्छ भन्ने सोच द्रोण सरले त्यसैबेला राख्नुभएको थियो, जुन कुरो २०७५ सालमा आएर मात्रै साकार भयो । भारतका गुवाहाटी र उत्तरबङ्ग विश्वविद्यालयहरूसँग उहाँको राम्रो सम्पर्क-सम्बन्ध थियो । विभागका अन्य प्राध्यापकहरूलाई पनि सम्पर्क गराउने, बौद्धिक- प्राज्ञिक कार्यहरूमा सहयोग आदानप्रदान गर्ने क्रम द्रोण सरकै सक्रियतामा भएको थियो । यसरी मेची क्याम्पसलाई अन्य विश्वविद्यालयसँग जोड्ने सेतुको काम पनि द्रोण सरले गर्नुभएको थियो ।

क्याम्पसहरूमा प्रायः गुरु पुस्ता, चेला पुस्ता र चेलाका पनि चेला पुस्ताका प्राध्यापकहरू हुने गर्छन् । चेलाहरू आफ्ना गुरुहरूसँग समान सहकर्मी भए पनि निश्चित दूरी राखेर झुकेर नमन गर्दै गुरुहरूको आदर कदर गर्छन् । गुरुहरूसँग हात मिलाउने आँट गर्दैनन् । तर, समभाव भएका द्रोण सर गुरु पुस्ताकै भएर पनि चेलाहरूसँग आफैं हात मिलाउनु हुन्थ्यो । ज्येष्ठ वरिष्ठ-कनिष्ठको भेद उहाँमा थिएन । हामी धेरै साथीहरू द्रोण गुरुसँग निकै असजिलो मान्दै हात मिलाउँथ्यौं ।

एक दर्जनभन्दा बढी कदर, सम्मान, कृतज्ञता, प्रशंसा-पत्रहरू राष्ट्रिय अन्तर्राष्ट्रिय रूपमा प्राप्त गर्नुभएका द्रोण सरको डेढ दर्जन जति सामाजिक सांस्कृतिक, साहित्यिक, बौद्धिक, भाषिक धार्मिक संघ-संस्थाहरूमा संलग्नता थियो । सधैं केही न केही गरिरहन व्यस्त रहने द्रोण सरले नेपाली र अन्य भाषाका पत्रपत्रिकाहरूको सम्पादन प्रकाशन पनि गर्नुभएको थियो । उहाँले आफ्नो

समयको बौद्धिक नेतृत्वको जिम्मेवारी सफलतापूर्वक सम्पन्न गर्नुभयो । अन्य सामाजिक धार्मिक क्षेत्रमा योगदान गर्न पनि पछि पर्नु भएन । यो उहाँको सक्रिय जीवनकै परिणाम हो ।

क्याम्पसको जागिर, दुई छोरी र एक छोराको लालनपालन, शिक्षादीक्षा, बिहावारी, घरव्यवहार, बाह्य सामाजिक दायित्व इत्यादि काम कुरा फर्स्याउँदै द्रोण सरले नौ-नौ वटा पुस्तकाकार कृति प्रकाशन गर्न सक्नु लर्तरो कुरो थिएन । धेरै सर्जक र समालोचकहरूका सिर्जना र समालोचना आर्थिक अभावका कारण सिरानेमै सीमित भएको कुरा यहाँ मैले लेखिरहनु पर्दैन । सबैले लेख्तैनन्, लेख्नेहरू सबैले प्रकाशन गर्न सक्तैनन् । तर, सरले लेख्नु पनि भयो र लेखेको सामग्री प्रकाशन गरेर सन्ततिलाई छोडेर जानुभयो । नेपाली साहित्यको भण्डारलाई धनी बनाउनु भयो र आफू अमर बन्नुभयो ।

उहाँका प्रकाशित कृतिहरूमा १) राजवंशी भाषा परिचय : जाति भाषा र साहित्य-२०५१, २) नवमी (सहलेखन) २०५४ (३) आदर्श नेपाली व्याकरण २०६२ (४) भाषिक चिन्तन २०६५ (५) केही साधक : केही साधना २०६५, (६) लोकवार्ता : लोककै चर्चा २०६५ (७) सवाई काव्यको सैद्धान्तिक परिचय २०६७ (८) भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा २०६८ (९) लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ २०७४ । यी पुस्तकका अतिरिक्त विभिन्न राष्ट्रिय अन्तर्राष्ट्रिय पत्रपत्रिकाहरूमा अङ्ग्रेजी, हिन्दी, नेपाली, असमिया भाषामा फुटकर सिर्जना समालोचनाहरू पनि प्रकाशित छन् । यी कृतिहरू द्रोण सरले प्राध्यापन अवधिमै लेख्नुभएको हो ।

द्रोण सर २०३८ सालमा सहायक प्राध्यापक पदबाट मेची क्याम्पसमा प्रवेश गरी २०४२ सालमा उपप्राध्यापक पदमा स्थायी भई २०६३ सालमा सहप्राध्यापकमा बढुवा हुनुभयो । २०६७ सालमा प्राध्यापकको बढुवाका निम्ति प्रतिष्पर्धा गर्नुभयो, तर सफलता मिल्न सकेन । २०६९ सालमा ६३ वर्षे उमेरका कारण अनिवार्य अवकाश प्राप्त गरी निवृत्त जीवन बिताउनुभएको सात वर्ष बितेको थियो । उहाँसँगको भेटघाट पनि निकै पातलिएको थियो । बेलामौकामा साहित्यिक सामाजिक भेला, गोष्ठी कार्यक्रमहरूमा भेट हुन्थ्यो । समयले नै मानिसलाई नजिक र टाढा बनाउँदो रहेछ । उहाँ बिरामी पर्नुभएको कुरा शुरुशुरुमा थाहै भएन । दुई-तीन पटक उपचारका क्रममा पटना आइ-जाइ गरिसक्नु भएको रहेछ । जतिबेला उहाँलाई हेर्न म पुगें, त्यसबेलासम्ममा अपराधी क्यान्सरले निल्न

मात्रै बाँकी राखेको रहेछ । त्यस्तो जीर्ण अशक्त बेलामा पनि मलाई देखेपछि सरले गीताको एउटा श्लोक-

*'वासांसि जीर्णानि यथा विहाय,*
*नवानि गृह्णान्ति नरोऽपराणि ।*
*यथा शरीराणि विहाय जीर्णा:,*
*न्यन्यानि संयाति नवानि देही ।'*

...भनेर सबै कुरा एकैचोटी सिध्याउनु भयो । अन्य विभिन्न कुरा सोध्ने मेरो हिम्मतै भएन र सबै कुराको उत्तर दिन सक्ने शक्ति उहाँमा थिएन पनि । गुरुसँग मुखामुख भएर आँखाहरू मात्र जुधे । आँखाहरूले नै गुरु-चेलाका रमाइला विगत र सम्मुखमै आइरहेको वियोगान्त दुखान्त आगतको मापन गरे । गुरुआमासँग एकछिन केही कुरा गरें । उहाँले मलाई फल खान दिनुभयो । त्यो खाएर गुरुलाई नमस्कार गर्दै भारी मनले म निस्किएँ । त्यही नै मेरो गुरुप्रतिको अन्तिम नमस्कार भयो । २०७६ माघ १५ गते साँझ ९:३० बजे उहाँको स्वर्गवास भयो । मेची क्याम्पस, नेपाली विभाग र मेरो व्यक्तिगत तर्फबाट श्रद्धेय गुरुप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु ।

*२०७७/१/१३*

*भद्रपुर-८, झापा*

*(लेखक मेची बहुमुखी क्याम्पसका नेपाली विभागका विभागाध्यक्ष तथा प्रसिद्ध हास्यव्यङ्ग्यकार हुनुहुन्छ)*



छविलाल उपाध्याय

# अब सम्झना मात्रै रह्यो

*अच्छेद्योऽयमदाह्योऽयमक्लेद्योऽशोष्य एवचः*
*नित्यःसर्वगतऽस्थाणुरचलोऽयं सनातनः ।।*
*(श्रीमद्भगवद् गीता अ.२ श्लो.२४)*

भगवान आफ्ना प्रिय बन्धु अर्जुनलाई भन्नु हुन्छ, हे अर्जुन ! यो आत्मा अच्छेद्य छ । अनि आत्मा अदाह्य पनि छ । फेरि यो आत्मा निःसन्देह नित्य र सर्वव्यापक तथा अचल स्थिर रहने छ भने अर्कातिर सनातन पनि छ । यस अर्थले पनि तिमीले शोक गर्नु उचित छैन औ सुहाउँदैन पनि ।

अब यो आध्यात्मिक प्रवचनलाई यत्तिमै थन्क्याएर मूल विषयवस्तुतिर लम्कौं । हाम्रो मूल विषयवस्तु हो, दिवङ्गत द्रोणकुमार उपाध्याय पौडेलका बारेमा सम्झनास्वरूप श्रद्धाञ्जलिका दुई शब्द अर्पण गर्नु ।

'भाइ द्रोण दिवङ्गत भए' भन्ने कुरा कानमा पऱ्यो । तर, मलाई एकरति विश्वास लागेन । किनभने उनी असमको नौगाउँ जिल्ला अन्तर्गत 'सोलङ' भन्ने गाउँमा आफ्नो ससुराली घर आउँदा म बिरामी भएको कुरो उनका कानमा पर्ने बित्तिकै हतार-हतार आत्तिएर मलाई भेट्न भनी मकहाँ (कवि निकेतन, ढेकियाजुली, शोणितपुर) आइपुग्थे । म बिरामी भएको कुरामा उनले धेरै गुनासो मानेर गएका थिए । मबाट बिछोड भएका ६-७ महिना पुग्दा नपुग्दै उनको देहावसान भएको समाचार मेरा कानमा पर्दा मलाई विश्वास नहुनु स्वाभाविक कुरो हो । त्यसबेला उनको स्वास्थ्यमा बिरामीको कुनै लक्षण नै थिएन । न त उनले आफू बिरामी भएको कुरा नै गरे । तर, के गर्नुछ र हामीले ! भाग्यकै कुरा भन्नु सिवाय अर्थोक के पो छ र ! मृत्यु त अनिवार्य हो, जन्मेपछि मर्नु पर्छ नै । शरीर नाशवान हो, क्षणभङ्गुर हो अनि हो प्राकृतिक प्रक्रिया । अबउसो कहिल्यै नफर्किने बाटो लागे,

अजान देशमा । अनि अबउप्रान्त उनीसँग कसैको भेट हुँदैन, सम्झना मात्र रहने भयो । यहाँनेर मलाई कवि शिरोमणि लेखनाथ पौडेलको सम्झना आयो । उनले कालको महिमा भनेर यसरी गाएका छन्-

*"राजारङ्क सबै समान उसका, वैषम्य गर्दैन त्यो,*
*आयो टप्प टिप्यो लग्यो मिति पुग्यो टारेर टर्दैन त्यो ।*
*लाखौं औषधि, अश्र-शस्त्र महिमा देखेर डर्दैन त्यो,*
*व्याधा-तुल्य लुकेर चल्दछ सदा, मारेर मर्दैन त्यो ।"*

यो कुरा साँचो सत्य र अकाट्य नै भन्नु पर्दछ । यसमा कसैको केही चल्दो रहेनछ । त्यसैले 'बाँचुञ्जेल राम्रो काम गर्नु पर्दछ' भन्ने कुरा दिवङ्गत द्रोणलाई थाहा थियो र उनले भरिसक्के राम्रो काममात्र गर्दै आएका थिए पनि ।

अबउसो द्रोणका बारेमा केही व्यक्त गर्नुका अगाडि उनका पुर्ख्यौलीको बारेमा केही कुरा उल्लेख समीचीन होला । अनि मात्र यो स्मृतिलेख सार्थक होला भन्ने ठान्दछु म, नत्र अधुरो रहन्छ कि भन्ने सम्भावना हुनु स्वाभाविकै हो । तसर्थ उनका पुर्ख्यौलीको छोटो परिचय दिने प्रयास गरें । यस्तो छ–

प्रथमतः द्रोणकुमार पौडेलका पितामह (हजुरबा) पण्डित गङ्गाधर उपाध्याय पौडेलको जन्म पूर्वी नेपालको सानो पहाडी जिल्ला भोजपुर अन्तर्गत 'दिङ्ला' भन्ने अविकसित गाउँमा वि.सं.१९२५ मा भएको थियो । आठ वर्षको कलिलो उमेरमै आफ्नो प्यारो जन्मभूमि छोडेर विदेशिएका बालक गङ्गाधर साधु-सन्यासीहरूसँग लागेर साधुकै वेश-भूषामा भारतको काशी र वृन्दावनमा संस्कृतको गहिरो अध्ययन गरी पाणिनीय व्याकरणको शास्त्री उपाधि प्राप्त गरेका हुन् भन्ने जान्न पाइन्छ । यसपछि पण्डित भएर आफ्नो जीविकाको निम्ति भ्रमण गर्दै जाँदा पूर्वोत्तर भारतको असम राज्यमा आइपुग्छन् । त्यसबेलाको दरङ, पछि शोणितपुर र वर्तमान विश्वनाथ जिल्लान्तर्गत बिहाली अञ्चलको बटियामारी भन्ने अविकसित गाउँमा पुगेर बसोबासको चाँजो मिलाउँदछन् । अनि आफू बसेको जङ्गलावृत्त र शिक्षाको झिल्को नपुगेको अन्धकार गाउँलाई धार्मिक र शैक्षिक वातावरणको उद्देश्यले इस्वी १९०२ (विक्रमाब्द १९५९)मा 'सर्वेश्वर देवालय' नामक शिव मन्दिर र इस्वी १९१०मा 'साङ्गवेद विद्यालय संस्कृत टोल (पाठशाला)' स्थापना गरी शिक्षाको ज्योति फैलाउन सक्षम भएका हुन् । त्यति मात्र होइन, स्थानीय

भाषा असमियाको प्राथमिक विद्यालय (त्यतिखेर असमिया भाषालाई बङ्गला भन्ने चलन थियो) स्थापना गरी शिक्षा फैलाएका हुन् । त्यसैगरी, जनजागरणका निम्ति रङ्गमञ्च (नाट्य गृह) पनि निर्माण गरेर युवाहरूलाई उत्साहित पारेका हुन् । उनी आफू पनि अभिनय कुशल र संस्कृतिप्रेमी थिए भनिन्छ ।

त्यसको स्वीकृतिस्वरूप इस्वी २००२ मा मन्दिरको शतवार्षिकी उपलक्ष्यमा पण्डित गङ्गाधर उपाध्याय पौडेलको शालिक (प्रतिमूर्ति) समेत निर्माण गरेर स्थापना गरिएको छ । यसउसले उनका छोरा-नातिहरूमा पनि वंशगत केही प्रभाव पर्नु स्वाभाविकै हो ।

पण्डित गङ्गाधर उपाध्यायका छोराहरू मैले जान्दा पाँच भाइ हुन् । जेठा देवीप्रसाद, माहिला टीकाराम, साहिँला पुण्यप्रसाद (जस्तो लाग्छ) अनि कान्छा मोतीखर पौडेल हुन् । पुण्यप्रसाद र मोतीखर नेपालका नागरिक भएर बिराटनगरमा बसोबासो गरेका थिए, त्यसबेला । अहिले उनका शाखा-सन्तान कहाँ छन्, थाहा छैन । अँ... कान्छा मोतीखरलाई भने चन्द्रगढीमा मैले भेटेको हुँ । माहिला टीकाराम शास्त्री चाहिं द्रोणकुमारका बुबा हुन् । उनले असम संस्कृत बोर्ड अन्तर्गत गुवाहाटी मुनिकुलाश्रमबाट पाणिनीय व्याकरणको शास्त्री परीक्षा उत्तीर्ण गरेका हुन् । बुबाको बिँडो थामेर नाच्न, गाउन, हारमुनियम बजाउन र अभिनय गर्न-गराउन सिपालु थिए । शिङरीमा छँदा उनले गराएका नाटकमा यस पङ्क्तिकारले पनि केटीको पहिरनमा दुई-एक पटक नाचेको हो, साना केटीको दलमा । अनि ठूलाको दलमा चाहिं उनकै (टीकारामकै) भानिज दुर्गाप्रसाद सापकोटा नाच्न सिपालु हुनुका साथै हाँस्य-व्यङ्ग्य कलाकार पनि थिए उनी । त्यसपछि नोकरीकै उद्देश्यमा ओदालगढीतिर लागेका हुन् ।

इस्वी १९५०/५१ देखि नै मैले द्रोणलाई भेटेको हुँ । तापनि इस्वी १९५५ देखि चाहिं उनको र मेरो दाजु-भाइको सङ्लो र पवित्रको साइनो अन्तिम घडीसम्म थियो । उनको जन्म बिहालीको बटियामारीमा भए तापनि उनका बुबा टीकाराम शास्त्री हाम्रै छेउको (दरङ जिल्लाभित्रै) भारा शिङरी भन्ने गाउँमा भर्खर-भर्खरै स्थापना भएको हरगौरी (शिव-पार्वती) देवालयमै त्यही नाउँले अर्थात् हरगौरी संस्कृत टोल स्थापना गरेर पढाउँथे । त्यसबेला आफ्नो परिवारलाई पनि आफू बसेकै ठाउँमा ल्याएका थिए र मेरो पहिलो भेट त्यहीं भएको हो । परिवार अर्थात् द्रोणकी आमा (भेजमायादेवी) रोगी-पिलन्धरे भएकाले टीकाराम गुरुज्यूले घरको काम-धन्दा आफैंले समाल्नु परेको थियो । त्यसकारणले द्रोणले पनि बालख

अवस्थादेखि नै धेरै कष्ट भोल्नु परेको थियो । आफूले पढाउने गरेको संस्कृत पाठशाला सरकारीकरण नभएकाले त्यसलाई छाडेर आफ्नै मूलघर बटियामारी पुगेर घर समाल्न बाध्य भएका थिए ।

दैवसंयोग उनी गएका केही दिनपछि इस्वी १९५५ को मार्च महिना म त्यही पण्डित गङ्गाधर उपाध्याय पौडेलले स्थापना गरेको साङ्गवेद संस्कृत विद्यालय (बटियामारी)मा अध्ययनका उद्देश्यले भर्ना हुन पुगें । अनि त्यही विद्यालयमा दुई वर्ष पाणिनीय व्याकरणको अध्ययन गरेर आद्य (प्रथमा) परीक्षा तेजपुर सरकारी उच्चतर माध्यमिक विद्यालयबाट दिएँ । त्यसपछि भने टीकाराम शास्त्रीले नोकरीका निम्ति त्यतिखेरको दरङ वर्तमान बोडोल्याण्ड अन्तर्गत ओदालगुढीको उच्च माध्यमिक विद्यालयमा स्थायी रूपले सेवा कार्यमा आफूलाई समर्पित गरेका थिए । त्यहाँ हुँदा पनि हामीबीच आइ-जाइ भइरहन्थ्यो । त्यसपछि केही वर्षका निम्ति म आफ्नो पुर्खाको थलो (नेपाल)मा पुगेर पाहुनु लागेर बसें । विशेषगरी चक्रघटी, चतरा र धरानमा बिताएको थिएँ र पुनः मूषिकोभवः भएर आफ्नै प्यारो जन्मभूमि (असम)मा अद्यावधि छु । यसबीच द्रोणसँग भेटघाटको सम्पर्क हराएको थियो । द्रोण पनि आफ्नो पढाइको प्रसङ्गमा नेपालतिरै लागे तापनि घर आएका मौकामा भेट गर्न धाएर आउने गर्थे ।

उनले त्रिभुवन विश्वविद्यालयबाट नेपालीमा स्नातकोत्तर (एम.ए.) उपाधि प्राप्त गरेपछि त्रिभुवन विश्वविद्यालय अन्तर्गत मेची बहुमुखी क्याम्पस (महाविद्यालय) भद्रपुर, भापामा सहप्राध्यापकको पद अलङ्कृत गरेका हुन् । अनि आफ्ना परिवारका साथ चन्द्रगढीको मैत्रीटोलमा स्थायी रूपले बसोबासो गरिआएका हुन् । समय-समयमा म चन्दगढी जाँदा (चन्द्रगढी जानुको उद्देश्य मेरा ससुराली घनश्याम खनालको बसोबास त्यहीं भएकाले) पनि द्रोणसँग भेट नगरी चित्त बुझ्दैनथ्यो । अनि उनी पनि यतातिर आउँदा मसित भेट नगरी जाँदैनथे । हामी बीच त्यस्तो घनिष्टता भनौं अति नैं नजिकको सम्बन्ध रहेको थियो । उनी मलाई धेरै श्रद्धा पनि गर्दथे ।

इस्वी २००२ मा प्रकाशित मेरो "देवकोटा" महाकाव्यको समीक्षात्मक प्रबन्ध प्रस्तुत गरी "महाकवि स्वयम् महाकाव्य बनेको 'देवकोटा'-"महाकाव्य" शीर्षकले "महाकवि देवकोटा स्मारिका २०६० (प्रकाशन भद्रपुर, भापा)मा प्रकाश गरिदिएका छन् र भनेका छन्- "महाकविको काव्यमय जीवनलई स्पष्ट र छर्लङ्ग पार्ने बृहत् छन्दमय-प्रस्तुति तर्फ भने नेपालको भूमिभन्दा सयौं कोश टाढा बस्ने

असमेली कवि छविलाल खतिवडाको दृष्टि आकर्षित हुन पुगेको छ। यसमा देशका स्रष्टाहरू निराश हुनुपर्ने केही छैन। अँ, एउटा कुरा के भने आज नभए भोलि वा पर्सि नेपाली शहरभित्रै पनि यसको सिर्जना हुन्थ्यो। त्यही काम प्रवासी नेपाली कवि छविलाल खतिवडाले बेलामै गरेर धेरैलाई पछि पारेका छन्। (पृ.३६) अनि पुनः यसै समीक्षात्मक प्रबन्धलाई यसै नाउँमा "केही साधक : केही साधना" नामक पुस्तक (वि.सं.२०६५)मा प्रथम स्थान दिएर प्रकाश गरिदिएका छन्। यस निम्ति पनि विदेही आत्माप्रति सदैव स्मृति रहने छ।

यसरी वैकुण्ठबासी द्रोणले सर्वप्रथम पुर्खाको थलो (नेपाल राष्ट्रमा) मेरो साहित्यिक परिचय गराएर "देवकोटा महाकाव्य"को मूल्याङ्कन गरिदिएका हुन्। हुन त धेरै विद्वान्, वरिष्ठ साहित्यकार एवम् ख्यातिसम्पन्न समालोचक वृन्दमा मैले आफ्ना पटक-पटक प्रकाशित कृतिहरू नपठाएका होइनन्। अनि आफ्नै हातले पनि उहाँहरूका हातमा थमाइदिएका हुन्; तापनि उनीहरूबाट मैले केही पाउन सफल भइन। तर पनि दुई-चार जना विद्वान् एवम् विद्यानुरागी महानुभावहरूका लेखनीले मेरा दुई-चार वटा कृतिहरूको समालोचना तथा मूल्याङ्कन नभएको भने होइन, भएका छन्। (उनीहरूको नाउँ यहाँ उल्लेख गरिन, त्यस निम्ति क्षमाप्रार्थी छु, उहाँहरूप्रति श्रद्धा नमन छ) वास्तवमा डा.द्रोणकुमार उपाध्याय पौडेल विद्वान् विद्यानुरागी, भाषा-साहित्यका सच्चा सेवक र उदार मनोभावनापन्न व्यक्तित्वका धनी थिए। अथवा भनौं, उनको मन एवम् हृदय फराकिलो थियो, अनि थियो आकाश जस्तो निर्मल र फराकिलो। उनलाई मैले बाल्यकालमा बोकेको पनि हो। भाइ भए तापनि उनको विद्वतालाई म सम्मान दिन्थें, आदर गर्थें अनि गर्थें माया।

उत्तरबङ्ग विश्वविद्यालयबाट विद्यावारिधि (पीएच.डी.) गरेपछि भाषा-साहित्यका विषयमा चासो, रुचि, जाँगर र दायित्व पनि बढ्दै गएकाले नै भनौं, उनको ठूलै देन छ भन्नु पर्दछ। उनी बहुभाषिक पनि हुन्। असममा जन्म र असमिया माध्यमका पढाइले गर्दा असमिया भाषा पण्डित समाजमा पनि उनको स्थान र मान ठूलो थियो। त्यस अर्थले उनलाई समय-समयमा विशेष कार्यहरूमा वा अनुष्ठान-प्रतिष्ठानहरूबाट निम्तो पुग्दथ्यो र उनी पनि सहर्ष सहभागी भएर अनुष्ठान-प्रतिष्ठान र साहित्यिक एवम् सांस्कृतिक कार्यक्रमहरूमा निमन्त्रण गर्दै आएका हुन्। जस्तै अप्ठ्यारो परे तापनि उनी सहभागी हुनबाट वञ्चित हुँदैनथे।

विद्वान् द्रोणले नेपालमा भएका राजवंशीहरूका बारेमा गहिरो अध्ययन

र शोधकार्य गरेका हुन् (इस्वी २००५)मा। त्यसपछि "केही साधक : केही साधना" नामक पुस्तकमा काव्य-कविता, महाकाव्य, उपन्यास, नाटक आदिका साथै जीवनीमूलक लेखहरू पनि समावेश गरेर प्रकाशन गरेको (वि.सं.२०६५) पाइन्छ। त्यसै वर्ष अर्को कृति "भाषिक-चिन्तन"(भाषिक विश्लेषणात्मक रचना सङ्ग्रह-२०६५)मा प्रकाशमा आएको पाइन्छ। त्यसउप्रान्त धेरै दिनपछि "लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ अनुसन्धानमूलक कृति नेपाल प्रज्ञा-प्रतिष्ठानद्वारा (वि.सं.२०७४) प्रकाशित छ। यो उनको उत्कृष्ट एवम् गहकिलो कृतिको गन्तीमा पर्दछ। सम्भवतः यही नै उनको अन्तिम कृति होला कि ? यसरी उनको लेखन कार्यमा अभिरुचि बढेकाले स्रष्टा र द्रष्टा दुबै रूपमा पाठक वर्गले पाएका छन्। अझ भन्न जाँदा विद्वान् द्रोणका त्यस्ता समालोचनात्मक लेखहरू स्वदेशभित्र र बाहिरका पत्रपत्रिकाहरूमा यत्रतत्र सर्वत्र छरिएका पाइन्छन्। उनले धेरै ठाउँबाट अभिनन्दन र पुरस्कारहरू पनि पाएका हुन्।

अरु पनि कति के के गरुँला भन्ने इच्छा र कल्पनाहरू थिए होलान् ! तर दैवको लीला ! ती इच्छा आकाङ्क्षा र कल्पनाहरू सबै लथालिङ्ग भएर रहे। एक जना योग्य तथा सफल अध्यापक, निष्ठावान् एवम् निःस्वार्थ समाजसेवक, भाषा-साहित्यका साधक र गवेषक हुनुका साथै सरल प्रकृतिका, हँस्यौलो, मृदुभाषी, सादा जीवन-उच्च विचारका धनी थिए। अनि थिए शाकाहारी, नैष्ठिक र विशुद्ध ब्राह्मण। यस्ता सर्वसम्पन्न गुण भएका द्रोणकुमार उपाध्याय पौडेलको निधन नेपाली संसारका निम्ति ठूलो क्षति हो। उनले आफ्ना परिवारका सदस्यहरू पत्नी मीरादेवी, एक मात्र पुत्र यशवन्त पौडेल, बुहारी परिना चापागाईं पौडेल, दुई छोरी योगिता भूर्तेल र यवनिका पाण्डे अनि नाति-नातिना आदिलाई यस अथाह संसारमा छाडेर परलोक गमन गरे।

उनी आज हाम्राबीच सशरीर छैनन्, तापनि सदासर्वदा अजर अमर भएर रहने छन्, आफ्ना सत्कर्मद्वारा। भनिएको पनि छ 'कीर्तियस्य स जीवति' भनेर। सर्वान्त्यमा निम्नलिखित हरफहरूले विदेही भाइप्रति विशुद्ध हृदयले श्रद्धाञ्जलि अर्पण गर्दछु। अनि उनको विदेही आत्माले चिरशान्तिका साथ बैकुण्ठमा बास पाओस् भन्ने कामना गर्दै –

*शिक्षामा परिपूर्ण भैकन तिमी स्रष्टा र द्रष्टा बन्यौ,*
*नाना काव्य र नाटकादिहरूको ऊँचो समीक्षा गर्‍यौ।*
*धेरैथोक विचार थे नि मनमा के के भनौंला भनी,*

*छाड्यौ च्वाट्ट धरा र धाम कसरी कैल्यै नफिर्ने गरी ॥*
*अथवा*
*थियौ स्रष्टा द्रष्टा विमल मनका कर्मठ सदा,*
*अझै गर्ने भन्थ्यौ तर पनि रहे कर्म कति ता ।*
*दियौ शिक्षा राम्रो तनमन उज्यालो गरिकन,*
*विदेही आत्माले परम गति पाओस् चिरदिन ॥*
*पुनश्चः*
*कलिकाल कठोर छ सम्झ सबै,*
*दिन आइ सकेपछि हुन्न नगै ।*
*धरणी धन धाम त्यजेर हरे,*
*परधाम भनेर प्रयाण गरे ॥*

*–शुभमस्तु–*

*२७ अप्रिल २०२०*

*- कवि निकेतन, शोणितपुर (असम)*

*(लेखक असमका प्रसिद्ध लेखक हुनुहुन्छ)*



जमुना खनाल

# स्मृतिको पानामा द्रोण सर

प्रकृतिको निरन्तर प्रक्रिया अनुरूप मानिस जन्मनु र मर्नु सामान्य जस्तै कुरा हो । जीवन रफ्तारमा बहँदै जाँदा हजारौं मोडहरू आउने गर्छन् । कैयौं साथ जोडिन्छन् भने नचाहँदा नचाहँदै पनि कैयौं साथ बिछोडमा परिणत हुने गर्छन् ।

जीवन भोगाइको क्रममा जीवन ज्यून हरेकले कुनै न कुनै कार्य गर्नैपर्छ । समयसँगै बग्ने क्रममा केही अगाडि चन्द्रगढीस्थित लेखनाथ पुस्तकालयमा द्रोण पौडेल सरसँग भेट भयो । प्रत्येक महिनाको अन्तिम शुक्रबारे कार्यक्रममा भेट हुनु प्रायःनिश्चित नै थियो । अत्यन्त सरल शिष्ट सभ्य र शालीन व्यक्तित्वका धनी कुशल अभिभावक जस्तो लाग्थ्यो उहाँ ।

समय बित्न केही बेर लागेन । छोटो समयको अन्तरालमा नै उहाँलाई प्राणघातक रोग लागेको खबर सुन्नमा आयो । नमीठो लाग्यो, पत्याउनै गाह्रो । अन्ततः सत्य त्यही थियो, आखिर उहाँ हामी माझ रहनुभएन । यो प्रकृतिको नियम बडो अचम्मको छ । मर्न पाए हुन्थ्यो भन्नेहरू मर्न पाउँदैनन् । तर, बाँचेर केही गर्छु भन्नेहरू बाँच्न पाउँदैनन् ! आज पनि म सम्झन्छु, उहाँले भनेका कुराहरू । भौतिक शरीर नभए पनि उहाँ स्मृतिका पानामा सदैव जीवित रहनुभएको छ ।

*भद्रपुर-१०, झापा*

*(लेखक कवि हुनुहुन्छ)*



जयनारायण लुइँटेल

# प्रिय द्रोणको सम्झनामा

द्रोणकुमारको आकस्मिक निधनको समाचार हामीलाई उसै दिन प्राप्त भएको थियो । त्यो दुःखद समाचार सुनेर केहीबेर त म र श्रीमती स्तब्ध भयौं । हँसिलो चेहरा, हृष्ट-पुष्ट शरीर तथा आत्मविश्साव भरिएको व्यक्तित्व, आफ्नो निकट सम्बन्धको मान्छे अकस्मात् अन्तर्ध्यान भएको समाचार सुनेर मन बुझाउन साह्रै गाह्रो पर्दो रहेछ । तर, त्यस्तो अमाङ्गलिक घटना पनि एक सनातन सत्य, कसैले टार्न नसक्ने अर्थात् अवश्यम्भावी रहेछ । त्यही भनेर त्यस्तै सोचेर शोक सन्तप्त आत्मीयजनहरू चित्त बुझाइआएका छन् अनादिकालदेखि नै ।

द्रोणकुमारको प्रसङ्ग निस्कँदा मलाई लाग्छ, उनी मेरा सम्मुखमा बसेर हँसिलो मुखले कुरा गरिरहेका या मेरा कुरा सुनिरहेका छन् । एक समयमा उनी दरङ कलेज (तेजपुर)मा पढ्दथे अनि म त्यही कलेजमा राजनीति विज्ञान पढाउँदथें । कलेजमा उनी थिए- एक शान्त, शिष्ट, सरल प्रकृतिका र अध्ययनशील छात्र । उनको स्वभाव पछिसम्म (बाचुञ्जेल) त्यस्तै नै थियो जस्तो लाग्छ । दरङ कलेजबाट उनले प्राक-विश्वविद्यालय (Pre-University) र बी.ए. गरी चार वर्ष अध्ययन गरे । कलेजबाट निस्केर गएपछि उनी उदालगुढीमै एउटा बैंकमा काम गर्न थालेछन् । साहित्य रसमा डुबुल्की मार्ने प्रवृत्ति भएका द्रोणको मन संख्या र परिसंख्याको जालमा अल्झिरहन खोजेन । एउटा हाइस्कूलमा पढाउने काम भेटे । शिक्षण त उनले मन पराएकै हो, उनी एक जना सफल शिक्षक भनी परिचित हुन लागे ।

हाइस्कूलमा पढाउँदै गरेका दिनमा हुनुपर्छ, उनको विवाह भएको । सोलङ निवासी अवकाशप्राप्त शिक्षक तथा समाजसेवी गणेश उपाध्याय (खनाल)की जेठी छोरी माया (मीरा)सँग हो, उनको विवाह भएको । माया हुन्- मेरी श्रीमती नयाँदेवीकी फुपूकी छोरी । त्यस नाताले द्रोण मेरा साढुभाइ भए । तर, पहिलेदेखि चलेको पारस्परिक सम्बोधन चाहिं यथावत् बर्तिरह्यो ।

द्रोणकुमार हाइस्कूलमा पढाउँदा डेढ-दुई वर्षभित्र उनका माता-पिता एक-एक जना गरी दुबै जना परलोकगामी भए । विशेषगरी उनका पिता टीकाराम शास्त्रीको निधन भएपछि उनलाई घरसंसार अलिक न्याम्रो लाग्न थाल्यो । टीकाराम शास्त्री हुनुहुन्थ्यो, एक जना अक्लान्त समाजसेवी व्यक्ति । उहाँसँग मेरो धेरैचोटि भेट भएको हो- विभिन्न ठाउँमा, विभिन्न समारोह अनुष्ठान आदिमा अनि कैयौंपल्ट हाम्रै घरमा । १९७४-७५ मा उदालगुढीमा अनुष्ठित अखिल भारतीय नेपाली भाषा समितिको अधिवेशनको स्वागतकारिणी समितिको कोषाध्यक्षको दायित्व उहाँले सम्हाल्नुभएको म जान्दछु । युवक द्रोण पनि अधिवेशनलाई सफल तुल्याउने प्रयासमा दौडधूप गरिरहेका देखिन्थे ।

हाइस्कूलको शिक्षक मात्रै हुनु थिएन द्रोणकुमारलाई । नेपाली भाषा-साहित्यको सेवा गर्ने उत्कण्ठाले उनलाई अस्थिर तुल्यायो । पिता नभएको उदालगुढी नै उनलाई शून्य लाग्यो । उनले उदालगुढी छोडे अनि हान्निए नेपालतिर । के सूत्रले या कोसँगको कस्तो सम्पर्कले उनी भद्रपुर पुगे ? त्यो म जान्दिन । हुन ता भद्रपुर र चन्द्रगढीमा असमबाट गएर काम गरेका-बसेका मानिस निकै जना पाइन्छन् । भद्रपुरमा उनको मेची क्याम्पसका प्रोफेसर पूर्वपरिचित व्यक्ति घनश्याम खनालसित भेट भयो । खनालज्यू भद्रपुरका एक जना प्रतिष्ठित या नाम चलेका व्यक्ति भइसक्नु भएको थियो । द्रोणले उहाँलाई भेटे होलान्, एक जना भरपर्दा अभिभावक । तेलिया गाउँ हाइस्कूलका शिक्षक तथा त्यस क्षेत्रका समाजसेवी हुनुहुन्थ्यो, खनालज्यू नेपाल जानु अघि ।

मेची बहुमुखी क्याम्पस, भद्रपुरको चौहद्दीलाई शिक्षा तथा समाजसेवी घनश्याम खनालको प्रतिमाले सुशोभित पारेको छ । क्याम्पसको आदिकालदेखि नै यसमा सेवारत घनश्याम खनालको ठूलो अवदान रहेको छ । यस प्रतिष्ठानलाई पूर्णाङ्गी बनाउनमा । विशेषगरी क्याम्पसको विज्ञान विभाग उहाँकै दूरदर्शी योजना र परिश्रमको सुफल भनेको सुनिन्छ । घनश्यामजीको निःस्वार्थ सेवाले एउटा आदर्श स्थापना गऱ्यो, त्यसरी नै क्याम्पस परिसरमै उहाँको प्रतिमूर्ति राखेर भद्रपुरको शिक्षाप्रेमी समाजले पनि एउटा आदर्श देखायो ।

घनश्याम खनालको शैक्षिक सेवाको स्वीकृतिस्वरूप क्याम्पस कर्तृपक्ष तथा स्थानीय शिक्षाप्रेमी समाजले उहाँको प्रतिमूर्ति स्थापना गर्दाका प्रत्यक्ष साक्षी त्यसै कलेजका प्राध्यापक द्रोणकुमार उपाध्यायका मनमा उनका आफ्ना पिता गङ्गाधर पौडेलले अशिक्षा र अन्धविश्वासमा डुबेको समाजलाई शिक्षा र सदाचारको

महत्व बुझाउन गरेका महान् कार्यहरूको पनि स्वीकृति हुनुपर्ने भन्ने भावना उब्जियो । महामना मदनमोहन मानवीयको आदर्शले प्रेरित भएर पण्डित गंगाधरले आफ्नो ठाउँ (बटियामारी विश्वनाथ जिल्ला, असम)मा सन् १९०२ मा एउटा मन्दिर (सर्वेश्वर देवालय) र सन् १९१० मा एउटा संस्कृत टोल (सांगवेद संस्कृत विद्यालय) स्थापना गरे । ती अध्यावधि छन् । त्यस खण्डको शोभा बढाएको छ, ती दुइटा प्रतिष्ठानले । त्यति मात्रै होइन, आफ्नो जीवनकालमा उनले असमिया प्राथमिक विद्यालय र नाट्यशाला पनि गाउँलेहरूको सहयोगमा स्थापना गरे । संस्कृत, असमिया र बाङ्ला भाषाका नाटकहरू नेपालीमा अनुवाद गरी मञ्चस्थ गराउँथे, आफू समेत अभिनयमा भाग लिएर केटाहरूलाई सिकाउँथे । पितामहको पनि एउटा प्रतिमा उनको कर्मथलोमा राख्न पाए कति राम्रो हुन्थ्यो भन्ने द्रोणकुमारलाई पहिलेदेखि नै थियो, जो उनले संकोचवश प्रकाश गरेका थिएनन् । आफ्नो गाउँ आएका बेला उनले के भेट्टाए भने गाउँ (बटियामारी)का धेरै जना सामाजिक कार्यकर्ताहरूका पनि मनमा त्यही कुरो खेलेको रहेछ, जुन कुरो द्रोणका मनमा खेलेको थियो ।

पण्डित गङ्गाधर पौडेलले धर्म, सदाचार, शिक्षा र संस्कृतिको माध्यमले बटियामारीमा ल्याएको नवजागरणले मान्यता पाउनु थियो, पाई छाड्यो । सन् २००२ मा सांगवेद संस्कृत विद्यालयले शतवर्ष पूर्ण गरेको उपलक्ष्यमा विभिन्न कार्यसूचीमा कार्यक्रम साथ बडो धुमधामसित शतवार्षिकी मनाइयो । त्यही अवसरमा देवालय-विद्यालय प्राङ्गणमा दुइटै प्रतिष्ठानका जन्मदाता पण्डित गङ्गाधर पौडेलको एउटा प्रतिमूर्ति स्थापित भयो । बटियामारी क्षेत्रका जनताको जाँगर, त्याग, परिश्रम तथा सत्भावना सह्राना नगरी सकिँदैन । सह्राना गर्नैपर्छ, त्यस उत्सवलाई सफल तुल्याउन कायमनोवाक्य र अर्थले सहभागी हुने गङ्गापौत्र द्रोणलाई पनि ।

द्रोणकुमार एक जना समाजसचेतन व्यक्ति थिए, उनमा परिलक्षित हुन्थ्यो- सामाजिक दायित्वबोध । दरङ नेपाली छात्रसंघ, उदलगुढी शाखा, अखिल भारतीय नेपाली भाषा समितिमा विभिन्न कार्यक्रममा सक्रिय रूपले उनी संलग्न भएको देखेको थिएँ । भद्रपुरमा क्याम्पस प्राध्यापकको हैसियतले अध्ययन-अध्यापन निष्ठापूर्वक गर्नु बाहेकै उनी कतिपय शैक्षिक सामाजिक तथा सांस्कृतिक कार्यहरूमा व्यस्ततासाथ जडित थिए भन्ने पनि सुनेको थिएँ ।

परिस्थितिवश द्रोणले असम छोडे, नेपाललाई आफ्नो कर्मस्थल बनाए ।

नेपालको समाजमा एकाकार भए, सामाजिक र राजनैतिक दुबै प्रकारले नेपालकै अनुगत भए। तर, आफू जन्मेको बढेको खेलेको ठाउँ र आफ्ना यताका नाता सम्बन्धी र विभिन्न प्रकारले आफ्ना सम्पर्कमा आएका कसैलाई उनले बिर्सेनन्। उनी असम आई नै रहन्थे। मौका पर्दा (मौका पारेर पनि) उनी आउँथे ब्रह्मपुत्रतटमा बसेको सोलङ गाउँमा भएका उनका ससुरालीहरूलाई भेट्न । उनका ससुरा गणेशचन्द्र उपाध्याय हुनुहुन्थ्यो- एक जना प्रखर भारत राष्ट्रप्रेमी, भारतीय संस्कृति, सनातन भारतीय विचारधाराका पृष्ठपोषक साहित्यिक व्यक्ति । हाइस्कूलमा शिक्षकका रूपमा अवकाश लिएको लगभग चालीस वर्ष भएपछि उहाँ स्वर्गवास हुनुभयो (दुई वर्ष अघि) उहाँलाई उछिनेर केही महिना अघि स्वर्गवासी हुनुभएको थियो, उहाँकी धर्मपत्नी। ससुराली घरमा भएका विवाह, चौरासी, ब्रतबन्ध, सप्ताह-भागवत्, शुद्धाइँ, बर्खान्त आदिमा द्रोण अनिवार्यतः उपस्थित भएका देखिन्थे । सोलङ आएपिच्छे उनी ब्रह्मपुत्र कटेर तेजपुर आउँथे नेपालीपटी र चान्दमारिया भएका हामी नाता सम्बन्धी र उनका अरु शुभाकाङ्क्षीहरूलाई भेट्नै भनेर । यसरी उनको आगमनले हामी बीचको आत्मीयता बढ्दथ्यो । उनको जन्मथलो बटियामारी र बाल्य तथा युवावस्था बिताएको ठाउँ उदालगुढी पनि उनी गइरहन्थे मौका पारेर। उनको एउटा ठूलो इच्छा थियो- भद्रपुरको शिक्षित तथा साहित्यिक समाज र शोणितपुर (असम)को त्यस्तै बौद्धिक, समाजका बीचमा परिचय र विचार विनिमय गराउने। पुष्पमाला स्मृति अध्ययन गोष्ठी (तेजपुर)मार्फत शोणितपुर विशेषगरी तेजपुरको नेपाली बौद्धिक समाजलाई झापा भ्रमणार्थ निमन्त्रणा गरेका थिए। विशेष असुविधाले गर्दा तेजपुरले त्यस्तो एउटा साहित्यिक टोली पठाउन सकेन। नेपाली भाषाको माउ थलो नेपालको झापा जिल्लाका दिग्गज साहित्यकारहरूसँग भेट हुन सकेन - हाम्रै दुर्भाग्य हो त्यो । द्रोणको शोणितपुर र झापाका बीचमा बौद्धिक साँगो हाल्ने धोको पूरा भएन ।

द्रोणकुमारका विषयमा धेरै कुरा छन् भन्नु पर्ने अनि साथै अनुकरण गर्नुपर्ने । यो लेखोट त एउटा छोटो संस्मरण मात्रै हो- आफ्नो प्रिय छात्र एवम् साढुभाइको । 'सरल जीवन-उच्च विचार'-जतिसक्दो अनुशरण गर्दथे उनी । उनको चन्द्रगढीस्थित निवास (मैत्रीटोल)मा दुई-तीनपल्ट पुगेको छु, एकपल्ट त सात जनाको जमात लिएर बास बसें पनि ।

एउटा विवाहमा सामेल हुन काठमाण्डौ जाँदा चन्द्रगढीमा रात बस्नु पर्‍यो । माओबादी आन्दोलन चम्केको बेला थियो त्यो। आन्दोलन गर्दा यातायात

व्यवस्था खल्बलिएको या व्याघात भएको जानेर हामीले भद्रपुरबाट काठमाण्डौ हवाईजहाजमा जाने तय गऱ्यौं। द्रोण बाबूलाई सात जनाको लागि टिकटको चाँजो मिलाउनु भन्ने अनुरोध गऱ्यौं। आश्वस्त भएर हामी भद्रपुर एयरपोर्ट पुग्छौं त कुइरोले गर्दा त्यस दिन जहाज गएन, भोलिपल्ट पनि भद्रपुरबाट जहाज जाने निश्चय पाइएन। द्रोण बाबूले हामीलाई उनको घर लगे 'अहो, मेरो भाग्य ! तपाईंहरूलाई एकै दिन भए पनि मेरा घरमा राख्न पाएँ' भन्दै। भोलिपल्ट बिहान नौ बजे काठमाण्डौ जाने फ्लाइट बिराटनगरबाट जाने रहेछ, हामीलाई त्यसैमा पठाउने कुरो भयो। विकल्पहीन तथा निरूपाय थियौं हामी, बास बस्यौं द्रोण र मायाको आतिथ्य स्वीकारेर। खान, बस्न, सुत्न किञ्चित असुविधा भएन। एजेन्टले भोलिपल्टका लागि फ्लाइट टिकट बेलुकै घरमा ल्याएर दियो। कति ढुक्क। भोलिपल्ट उज्यालो हुँदै हामीलाई बिराटनगर एयरपोर्ट पुऱ्याउन गाडी आइपुग्यो। द्रोणले बन्दबस्त गरेको गाडी थियो त्यो। बाक्लो र पातलो कुइरो छेड्दै कुदेर गाडीले हामीलाई आठ नबजी एयरपोर्ट पुऱ्याइदियो। टिकट साथमा छँदै थिए। बोर्डिङ पास लिने, सामान जिम्मा लाउने सेक्युरिटी जाँच गराउने औपचारिकता पूरा गरेर जहाजमा चढ्न मात्रै पर्खेर बस्यौं आपसमा गफ गर्दै। जहाज हिंड्ने निर्धारित समय आइपुगेपछि सूचना पायौं 'फ्लाइट क्यान्सल' भन्ने। सोद्धा काउन्टरका कर्मचारी एक जनाले सजिलै भनिदिए 'जहाजै बिग्रियो, टेक्निकल डिफेक्ट' टिकट फर्काउन र पैसा लिन सिटी अफिस पुग्नु पऱ्यो। टिकट क्यान्सेल भए, तर पैसा जम्मै पाइएन। कर्मचारीहरूले भने 'अरु पैसा भद्रपुरमै लिनुहोला, किनभने तपाईंहरूका टिकट वहीं काटेका हुन्'। त्यति पैसाका लागि के फर्केर भद्रपुर जानु ? माया मारौं भन्दै हामी सिटी अफिसलाई बिदा दिएर काठमाण्डौ जाने अन्य साधन (बस, ट्याक्सी आदि)को खोजीमा लाग्यौं। द्रोणसँग हाम्रो फोनमा सम्पर्क भई नै रहन्थ्यो। हाम्रा कुरा सुनेर उनले हामीलाई टिकट ल्याइदिने एजेन्टलाई भेटेर कुरा गर्दा केही हुन्छ कि ? भन्दा हामी ढुक्क पऱ्यौं। एजेन्टको कमिशन छोडेर अरु प्राप्य जम्मै पैसा फर्किएछन्। फर्केर आउँदा धुलाबारीको एउटा निर्दिष्ट ठाउँमा द्रोणले राखिदिएका पैसा गएर हामीले संग्रह गऱ्यौं। कति दक्षता र कत्रो आन्तरिकताले उनले काम गरे हाम्रा लागि ! निकै पैसा पो फिर्ता भएछन्।

द्रोणकुमार थिए निरलस साहित्यसाधक पनि। विभिन्न पत्रपत्रिकामा उनका गहकिला लेख, कार्यपत्र आदि प्रकाशित भएका छन्। असमिया भाषामा पनि

उनको ब्युत्पत्ति थियो । उदालगुढीमा छँदा उनले एउटा असमिया पत्रिकाको सहसम्पादन गरेका हुन् । उनका कृतिहरूमा दुइटा केही साधक : केही साधना र लोक वार्ता : लोककै चर्चा चाहिं मैले पाएको हुँ । उनले घरमै आएर अर्पण गरेका थिए । मैले पढें पनि दुइटै किताब । लोकवार्ता लोककै चर्चालाई लेखकले नै लोकसाहित्यसँग सम्बन्धित समीक्षात्मक प्रबन्धहरूको संगालो भनेका छन् । यो कृति प्रस्तुत गर्नुपर्दा द्रोणकुमारले नेपालको तराई खण्ड खासगरी मेची अञ्चलको ब्यापक भ्रमण गर्नुका साथै गहिरो नृतात्विक (anthopologie) अध्ययन गर्नुपरेको हुनुपर्छ । आदिबासीहरूको पारिवारिक एवम् सामाजिक जीवनका कार्यकलाप र आचरणहरूको सूक्ष्म निरीक्षण नगरी उनीहरू विषयक मन्तव्य गर्नु वृथा छ । तर, द्रोणकुमारले सैद्धान्तिक अध्ययन, पर्यवेक्षण र निरीक्षण सबै पद्धति अवलम्बन गरेको बुझिन्छ, यो कृति पढ्दा । हामी भारतका पूर्वी खण्डका मानिसका लागि विशेषतः यो पुस्तक अधिक पठनीय जस्तो लाग्छ । नेपालको तराई खण्डमा उहिलेदेखि बसोबासो गरिआएका आदिबासीहरू प्रायः सबैका नाम (गन्गाई, धिमाल, मेचे, कोचे, थारू र राजवंशी) उल्लेख गर्दै लेखकले कतिपयका बारेमा चाखलाग्दा चालचलन वर्णन गरेका छन् । राजवंशीहरूका विषयमा भने उनीहरूको परिचय, पुर्ख्यौली संस्कृति र संस्कारहरू अर्थात् सामाजिक स्थिति-समस्त जीवन प्रणाली समेटेर लामो चर्चा गरिएको छ यस कृतिमा । राजवंशी विषय अन्तर्गत कोचवंशीय राजा विश्वसिंह र उनकी पत्नी रतीकात्री (नेपाली)का औरसमा जन्मेका पराक्रमी नरनारायणका दिनमा कोच राज्य र कामरूप (असम)का बीचमा मैत्री सम्बन्ध रहेको चर्चा गरिएको हुनाले असमका लागि यो विषय चाखलाग्दो छ । यस्ता ऐतिहासिक तत्वहरूले भरिएको लोकवार्ता : लोककै चर्चा यता र उता सबैका लागि शिक्षाप्रद भएको छ । असममा राजवंशीहरू किन आफूलाई कोच राजवंशी भन्दछन्, त्यो यहाँ स्पष्ट भएको छ । राजवंशीहरूका विषयमा जान्नुपर्ने धेरै कुरा छन् (रहेछन्) । अनुसन्धानकर्ताहरूले उद्‌भावन गर्न सकुन्, नयाँ-नयाँ तथ्यहरू । तर, साधारण जिज्ञासुहरूका लागि यो कृति नै पर्याप्त छ ।

द्रोणकुमारको अर्को कृति साधक : साधना पनि मूल्यवान भन्ने ठान्दछु । यता र उताका नेपालीहरूले जान्नु, सिक्नु र अनुकरण गर्नुपर्ने कैयौं कुराले भरिएको छ यो ग्रन्थ पनि । उच्च मानदण्डको भएको छ यो । विद्वान् भूमिकाकार होम सुवेदीको भाषामा “यस कृतिभित्रका प्रबन्ध रचनाहरू आफैंमा भिन्न-भिन्न

विशेषता भएका र उच्च मूल्यका छन् ।"

समग्रमा भन्नु हो भने डा.द्रोणकुमार उपाध्यायको ठूलो स्पृहा थियो अझै केही गर्ने, गर्दै जाने, नरोकिने । उनी दरङ कलेजमा पढ्दथे जतिखेर, म त्यही कलेजमा राजनीति विज्ञान पढाउँथें । उहिल्यैको कुरो, तर अस्ति जस्तो लाग्छ । अधिवेशन, भानु जयन्ती या साहित्य सम्बन्धी भएका त्यस्तै कुनै जमघटमा म उनलाई भेट्तथें, अनि देख्तथें उनी कुनै न कुनै दायित्वमा अल्झेका । पछि उनी साढुभाइ भए । यसरी उनलाई भेटें विभिन्न समय र स्थानमा, बेग्लाबेग्लै रूपमा । सोझो प्रकृतिका, शान्त र शिष्ट स्वभावका अध्ययनशील र समाजप्रिय व्यक्ति थिए उनी । उनलाई बिर्सन सक्तिन । आज उनी हाम्रा बीच छैनन्, इहलोकबाटै बिदा लिए केवल स्मृति छोडेर । उनको स्मृतिमा श्रद्धाञ्जलिस्वरूप अर्पण गरें यो छोटो संस्मरण ।

*- तेजपुर, असम*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका परम् शुभेच्छुक हुनुहुन्छ)*



जयमती दत्त रायचौधरी

# भाइजी की याद में

*जिन्दगी आती है चार दिन के लिए*
*और रुला जाती है हमेशा के लिए।*

मृत्यु एक अजीब शब्द है। कहते हैं कि इसके आने से सारा का सारा जीवन खत्म हो जाता है। रह जाता है अपना परिवार अपने सगे-सम्बंधी। पर समय बड़ा ही शक्तिशाली होता है। समय के अनुसार मृत्युका सारा दुख भी इन्सान भूल जाता है। मुझे भी आज (अगस्त, २०२०) दिन के ग्यारह बजे इस तरहका एक झटका लगा। मेरे एक भाइ ने जब मेरे घर में आकर उस दुखदायी खबर का राज बताया। राज बतानेवाले भाइ का नाम है पुष्पधर शर्मा। जो अभी उदालगुड़ी उच्चतर माध्यमिक विद्यालय के अध्यक्ष हैं।

यह राज ऐसा कि मेरे भाइजी का देहान्त चार महिने पहले हुआ था। जो मुझे पता ही नहीं था। अगर शर्मा भाइ नहीं बताते तो मैं अनजानी ही रहती। भाइजी का जन्म १९४९ जुन १९ में हुआ था। उनके पिता का नाम था- टीकाराम शास्त्री और माताका नाम भेजमाया था। उनके पिता ने मुझे हिन्दी परीक्षा देने के लिए आग्रह किया था और इसी खातिर मैं उनके घर पर जाया करती थी। टीकाराम शास्त्री सर के ही बेटे थे सद्य प्रयात द्रोणकुमार उपाध्याय। जिनको 'भाइजी' के नाम से मैं पुकारती थी। भाइजी ने अपनी बहन के साथ मुझे भी हिन्दी परीक्षा देने के लिए आग्रह किया था। उनकी बहन का नाम था- कनकलता। जो मेरी सहेली थी। हाइस्कूल के पाँचवीं श्रेणी से ही हिन्दी मुझे बहुत अच्छी लगती थी और धीरे धीरे हिन्दी मेरा प्रिय विषय बन चुकी थी। घर में मेरे पिताजी ने भी हिन्दी परीक्षा देने के लिए प्रेरणा दी थी।

अपनी पढ़ाई के बाद सन् १९७३ में भाइजी उदालगुड़ी हायार सेकेण्डारी स्कूल में शिक्षक के रूप में नियुक्त हुए। भाइजी उच्च विचारवाले व्यक्ति थे।

भाइजी की मातृभाषा नेपाली है । अपनी मातृभाषा के अलावा उनकी बंगाली, अंग्रेजी, संस्कृत और हिन्दी भाषामें भी रुचि थी । असमिया भाषा तो उनकी मातृभाषा जैसी थी । अपने शिक्षक समुदाय और छात्र समुदाय में भाइजी बहुत ही प्रिय थे । अपने हँसमुख आचरण से सभी को आकर्षित करते थे । इसी तरह समय अपनी गति ले रहा था ।

सन् १९७८ को मुझे भी इसी स्कूल में हिन्दी शिक्षिका की नौकरी मिल गयी । भाइजी तो थे ही । उन्होंने मुझे हिन्दी जगत मे फिर से परिचय कराया । मुझे उनकी यह बात अच्छी तरह याद है । उन्होंने कहा था- 'तुम मेरे साथ हिन्दी में बातें करो, तब ही तुम्हारी हिन्दी की समस्या सुलझ जायेगी और आदत भी बढ़ती जायेगी ।' तभी से भाइजी के साथ हमारी बातचीत हिन्दी में ही होती थी । पीएचडी के लिए भाइजी उत्तर बंग विश्वविद्यालय में गवेषणा यानी शोध कार्य में जुटे हुए थे । इसी विश्वविद्यालय से उन्होंने 'डक्टरेट' की उपाधि हासिल की थी । बाद में आप भद्रपुर मेची क्याम्पस में प्राध्यापक भी रहे । इसी समय भाइजी ने राजवंशियों का अनुसन्धान करके पुस्तक भी लिखा था । आप सामाजिक कार्यों में और साहित्यिक दिशा में हमेशा रत थे ।

भाइजी मेरे पति के भी अच्छे दोस्त थे । जब वह उदालगुड़ी आते तो समय निकाल कर एक न एक बार मेरे घर अवश्य आते और बहुत समय तक मेरे पति से बातें करते थे । इसी तरह हँसी, फुर्ति और मजाक में समय बीतता जा रहा था । अचानक मेरे जीवनको काले बादलों ने घेर लिये, वहाँ से निकलना बड़ा ही मुश्किल था । हमारे दो बच्चों को छोड़कर अपनी कार एक्सिडेंट मे मेरे पति का २०११ के ७ मई को निधन हो गया । मेरे पति के चले जाने के बाद भी भाइजी हमारी खबर लिया करते थे और मेरे घर पर पधारते थे । पर होनी को हम कभी अनहोनी नहीं कर सकते ।

इसी समय भाइजी का भद्रपुर मेची क्याम्पस से अवकाश ग्रहण हो गया था । पर दुख की बात तो यह है कि सदा ही हँसमुख, अच्छा व्यवहार, किसीको न सताने वाले, हमेशा औरों की सहायता करने वाले भाइजी अन्त में जटिल रोग का शिकार हो गये ।

रोग से जूझते-जूझते आखिर २९ जनवरी २०२० के दिन भाइजी इस दुनियाँ से चल बसे । भाइजी की मौत को बर्दास्त करना मेरे लिए आसान नहीं था । भगवान से मेरा यह निवेदन है कि भाइजी की आत्मा को शान्ति दे और उनके

परिवारको उनकी अनुपस्थिति में सुखी और सन्तुष्ट रखे । आज भाइजी नहीं हैं । पर उनका आदर्श हमारे बीच सदा रहेगा ।

मैं यहाँ एक बात अपनी ओर से फिर दोहराना चाहती हुँ कि अगर पुष्पधर शर्मा भाइ ने मेरी सहायता न की होती तो भाइजी के बारे में दो शब्द लिखना मेरे लिये सम्भव नहीं था । उन्हें भी मेरी तरफ से आभार व्यक्त करती हुँ । भाइजी का मन, कर्म और वचन बहुत ही ऊँचे और पवित्र थे । ऐसी एक महान आत्मा का स्मरण होते ही मेरा शिर कृतज्ञता और श्रद्धा से झुक जाता है । अन्त में, यह छोटा लेख भाइजी के नाम पर ही अर्पण करती हुँ । ओम् शान्ति ।

*- उदालगुडी, असम*

*(लेखक उदालगुडी उच्चतर माध्यमिक विद्यालयकी भूतपूर्व शिक्षयित्री हुनुहुन्छ)*



प्रा. जीवन पोखरेल

# द्रोण सर हुनुहुन्न जस्तो लाग्दैन

आदरणीय द्रोण सरमा अहिले शब्द श्रद्धाञ्जलि अर्पण गरिरहँदा पनि उहाँ हुनुहुन्न जस्तै लाग्दैन। साह्रै हँसिलो, रसिलो मान्छे। धार्मिक आचरण, आध्यात्मिक चिन्तन, सरल स्वभाव, नम्र वचन, सबैका सहयोगी, गाउँघरमा कोही बिरामी हुँदा वा आपद्-विपद् पर्दा सबैभन्दा पहिले दौडिएर पुग्ने र जुनसुकै सहयोगको निम्ति तत्पर रहने द्रोण सर हँसमुख सबैका प्रिय हुनुहुन्थ्यो।

असम गुहावाटीबाट स्नातकसम्मको शिक्षा आर्जन गरी त्रिभुवन विश्वविद्यालय कीर्तिपुर काठमाण्डौबाट नेपाली विषयमा स्नातकोत्तर गरी १० वर्षसम्म असममै शिक्षण कार्य गरेपछि २०३८ सालदेखि उहाँले मेची क्याम्पसमा प्रवेश गर्नुभयो। उत्तर बंग विश्वविद्यालय, भारतबाट लोकसाहित्य अन्तर्गत सवाई विषयमा विद्यावारिधि गर्नुभयो। २०३८ देखि २०६९ सालसम्म ३१ वर्ष शिक्षण सेवामा आफूलाई समर्पित गर्नुभयो।

मेची क्याम्पसमा विज्ञान विषयको पठनपाठन शुरु गराउने कुरामा विज्ञान भवन निर्माण गर्न क्याम्पस-प्रमुख घनश्याम खनालसँग हातेमालो गर्दै भोक, तिर्खा, दिन, रात, नभनी द्रोण सर पनि खट्नुभयो। यस कार्यमा उहाँको गहकिलो योगदान रहेको छ। उहाँले मेची क्याम्पसमा सहायक क्याम्पस-प्रमुख बनेर शैक्षिक प्रशासनमा रहेर समेत सेवा पुऱ्याउनु भयो।

क्याम्पसमा रहँदा भाषा, साहित्य, व्याकरण, समालोचना, पत्रकारिता आदि जुनसुकै विषय पढाउन जहिल्यै तत्पर रहनु हुन्थ्यो। नेपाली विभागमा पहिलो विद्यावारिधि गर्नु भएकोले विद्यार्थीहरूलाई मात्रै होइन, मेची क्याम्पसका नेपाली विभागका प्राध्यापक साथीहरूलाई समेत अध्ययन-अनुसन्धानमा निर्देशन गर्नु हुन्थ्यो।

द्रोण सरले नेपाली विभागमा पटक-पटक विभागाध्यक्षको जिम्मेवारी निर्वाह गर्नुभयो। आफूले साहित्य समालोचना समेत पुस्तक प्रकाशन गर्न प्रेरणा दिनुभयो।

नेपाली, अंग्रेजी, संस्कृत, हिन्दी, असमिया, राजवंशी भाषाको ज्ञान द्रोण सरमा थियो । यी सबै भाषामा बोल्न-लेख्न उहाँ सक्नु हुन्थ्यो । बहुभाषिक ज्ञान उहाँको विशेषता नै हो । द्रोण सरले झापाका आदिवासी राजवंशी, मेचे, गनगाईका भाषा संस्कृति संस्कार सम्बन्धी धेरै अध्ययन अनुसन्धान गर्नुभयो । विभिन्न वैदिक धार्मिक आध्यात्मिक साहित्यिक सांस्कृतिक संघ-संस्थाहरूमा सधैं सक्रिय रहनुभयो र आफूले जाने सके जति योगदान पुऱ्याउनु भयो ।

अहिले पनि द्रोण सरको घरमा जानु हो भने वेद, पुराण, उपनिषद्, गीताका पुस्तक अगाडि राखेर अध्ययन गरिरहनु भएको छ होला जस्तो लाग्छ, उहाँ हुनुहुन्न भन्ने नै लाग्दैन । द्रोण सरको स्मृतिग्रन्थ प्रकाशन गर्न लाग्नु भएका उहाँका परिवारजन र द्रोण पौडेल स्मृतिग्रन्थ प्रकाशन समितिमा यो स्तुत्य कार्य सफलताका निम्ति शुभकामना दिन्छु र आदरणीय गुरु द्रोण पौडेलको वार्षिक पुण्यतिथिको यो समयमा हार्दिक रूपमा यिनै शब्द श्रद्धाञ्जलि अर्पण गर्दछु ।

*(लेखक मेची बहुमुखी क्याम्पस भद्रपुरका क्याम्पस प्रमुख हुनुहुन्छ)*



टंक विकल्प

# हृदयको डायरीमा लेखिएको नाम हो द्रोणकुमार उपाध्याय

मान्छे जन्मदा आफू रुन्छ र अरुलाई हसाउँछ तर जीवनको समाप्तीमा जिन्दगीका अन्तरङ्ग रसरङहरू बिसर्जन गर्छ र अरुलाई रुवाउँछ । यो सर्वज्ञात तथ्य हो , यसलाई जो कोहीले नस्वीकार्ला तर नकार्न भने सक्तैन, सक्तैसक्तैन । त्यसैले मलाई हरेक मान्छेको जन्म र मृत्यु दुबै कुराले एक तमासको भावुक बनाउँछ । अरुले ठानेको वा भनेको भन्दा फरक कल्पना मन मस्तिष्कभित्र गुजुल्टिन्छ र म आफैंलाई फरक लाग्छु । अरूले भन्ने गर्छन् प्राणी मृत्युपछि मात्र मर्छ तर मलाई लाग्छ जुन सुकै पनि प्राणी जन्मसँगै मृत्यु पनि बरण गर्छ उसको जीवनको यात्रासँगै मृत्युको यात्रा पनि आरम्भ हुन्छ अर्थात एउटा प्राणी जति समय बाँचेको हुन्छ त्यति नै समय उसले मृत्यु ग्रहण गरिसकेको हुन्छ अझ यसो भनौं हामी जति उमेर पार गरेर बाँचेका छौं त्यति नै उमेर मरेका पनि छौं। यो भौतिक जीवन बाँच्ने र मर्ने सन्दर्भ हो तर आत्मिक जीवन भने कालजयी हुन्छ अर्थात आत्मा मर्दैन । आत्मा जस्तै अमर हुन्छ मानवीय गुण, यश वा कीर्ति पनि । यश वा कीर्ति पुण्य कर्मले मात्र आर्जन हुन्छ तसर्थ यो प्राणी मध्येको मानवले मात्र गर्न सक्छ । हुन त सबै मानवले प्रत्यक्ष परोक्ष केही न केही असल कर्म गरेकै हुन्छ, कसैले सुक्ष्म दृष्टिगत हुने र कसैले टड्कारो दृष्टिगत हुने कर्म गरेर मानवीय गुण प्रदर्शनको भूमिका निर्वाह गरिरहेका हुन्छन् । बृहद् मानव समुदायभित्र केही सङ्ख्याका सुकर्मीहरुले जाति, भाषा, साहित्य, कला, संस्कृति, प्राणी र प्रकृति जस्ता विषयमा आफूलाई समाहित गर्दै समाज र राष्ट्र हितमा कार्य गरेका हुन्छन् र आफूलाई अमर सावित गरेका हुन्छन् । उनीहरू समाज र राष्ट्रको हृदयबाट कहिल्यै ओझेल हुँदैनन् । समाज औ राष्ट्रमा सुकीर्ति फैलाउने त्यस्ता व्यक्तिहरू अरुका लागि उदाहरणीय, उत्प्रेरक र प्रेरणाका स्रोत बन्छन् । यिनै उल्लिखित विषय र सन्दर्भसँग जोडिएका अब्बल उत्प्रेणाका प्रतिमूर्ति हुन् डा. स्व. द्रोणकुमार उपाध्याय ।

द्रोण सर बहुआयमिक व्यक्तित्वका धनी हुनुहुन्थ्यो । उहाँलाई भाषा साहित्य, कला र संस्कृतिको संगमका रुपमा हेरिन्थ्यो । यी चारवटै विषयका भङ्गालाहरू उहाँभित्रको विराट चैतन्य सरोवरमा समाहित हुन्थे र पुनः पृथक पृथक गन्तव्य लिएर प्रवाह हुन्थे । संस्कृतिमा उहाँको झुकाव, लगाव र दखल थियो । भाषा साहित्यको प्राध्यापक, उहाँले आफ्नो प्राध्यापनको माध्यमले कयौं मस्तिष्कका गराहरूमा भाषा साहित्यको दल छर्नुभयो, कलाको बेर्नाहरू उमार्नु भयो र संस्कृतिको खेती गर्नुभयो । अनेकौं सुख्खा मस्तिष्कहरुमा यिनै विषय को मलजल गर्नुभयो, गोलमेल गर्नुभयो र समुन्नत फसल तयार गरी समाजलाई सुम्पनु भयो । लोक साहित्य कला र संस्कृति उहाँले रुचाएर ख्याती आर्जन गरेका क्षेत्र हुन् । उहाँलाई लोक साहित्य एवम् संस्कृतिका फाँटमा उपल्लो कार्य गरी ख्याती आर्जन गरे वापत साहित्य चौतारी झापाले “साहित्य चौतारी कला सम्मान” अर्पण गरेको थियो ।

द्रोणकुमार उपाध्याय सर हँसमुखा, मिष्टभाषी, सहृदयी, सहयोगी र उच्च विचारको धनी हुनुहुन्थ्यो । जुनदिन देखि उहाँको र मेरो औपचारिक चिनजान भयो, त्यसैदिन देखि हामी नौला भएनौं । एकार्काका बारेमा र सँगमा सङ्कुचन हुनु परेन । हाम्रो परिचय भएकै समयदेखि वर्षौं पुराना परिचित झैं भयौं हामी । उहाँ त्यो सर्वश्रेष्ठ गुणको अलङ्कारले आलङ्कारिक हुनुहुन्थ्यो । म आफू पनि भाषा, साहित्य, कला र संस्कृतिकै जिज्ञाशु भएका कारण पनि उहाँसँग जति समय भेटवार्ता भए ती अक्षुण्ण रहे । उहाँ मेरा निम्ति पनि उत्प्रेरक हुनुभयो । म भाषा साहित्य कला र संस्कृतिको सिकारु विद्यार्थी भैरहँदा उहाँसँगको बसाइउठाइ र सानिध्यले उत्प्रेरणा जागिरहन्थ्यो । भाषा, साहित्य, लोककला र लोकसाहित्यका त्यस्ता मूर्धन्य व्यक्तित्व आदरणीय द्रोण सरको असाध्य रोकका कारण भएको दुखद निधनले सम्बन्धित क्षेत्रमा अपुरणीय क्षति त भयो नै तै पनि उहाँले गर्नु भएको योगदानमा उहाँले अमरत्व प्राप्त गर्नु भएको छ । उहाँले गर्नु भएका सुकर्ममा अमिट छाप बनी प्रतिविम्वित हुनु भएको छ । त्यसैले हामी उहाँको सत्कर्म अभियानमा पदचिन्ह हेरेर पछ्याउने अभियन्ताहरूका हृदयको डायरीमा नमेटिने गरी लेखिएको नाम हो द्रोणकुमार उपाध्याय । उहाँको सत्कर्मलाई सलाम ।

*बुद्धशान्ति, बुधबारे, झापा*

*(लेखक रंगकर्मीका साथै प्रसिद्ध नाटककार हुनुहुन्छ)*



टीका प्याकुरेल

# श्रद्धाञ्जलि अर्पण गर्दा पीडाबोध भइरहेको छ

म २०४१ सालमा मेची बहुमुखी क्याम्पसमा स.प्राध्यापकको हैसियतले प्रवेश गरेपछि डा.द्रोणकुमार उपाध्याय सरलाई आफूभन्दा सिनियर प्राध्यापकका रूपमा चिन्ने अवसर प्राप्त भयो । विचार र अनुहार दुबैले सधैं स्वस्थ, तन्दुरुस्त देखिने द्रोण सर सरल, मिजासिलो र आफ्नोपनले युक्त व्यवहार गर्ने हुनुभएकाले चाँडै नै घुलमिल भई आफ्नो अभिभावक जस्तो लाग्न थाल्यो ।

अध्ययनशील अनुसन्धान अन्वेषणमा रुचि राख्ने, लोपोन्मुख जातिका बारेमा चासो राख्दै तिनको उत्थानका लागि यथाशक्य प्रयास गर्ने, यात्रा तथा घुमफिर गर्न रुचाउने उहाँका विशिष्ट गुणहरू थिए । उहाँका यिनै विषयहरूसँग जोडिएका धेरै कृतिहरू पनि प्रकाशित भएका छन्, जो सदैव अमर रहनेछन्... ।

"सार्क मुलुकको भ्रमण" र "सामूहिक आवास"को चाहना द्रोण सरको साह्रै इच्छाएका विषय थिए । भेटैपिच्छे यी विषयमा वार्तालाप हुन्थे । पारिवारिक भ्रमणमा जाने तथा सामूहिक आवासमा सबै परिवार मिलेर सँगै बस्ने भन्ने अवधारणा सुन्दा सबैलाई ग्राह्य लागेको पनि हो । तर, गृहस्थ जीवनमा सबैको, एउटा समयमा एउटै पारिवारिक अवस्था नहुने, परिवेश र आवश्यकता पृथक पृथक हुने व्यावहारिक बाध्यताले गर्दा सही समयमा सबै मित्रजनमा एउटै विचार पलाउन सकेन तथा यी विचारहरूले सार्थक रूप लिन सकेनन्; अफशोच छ... ।

द्रोण सर बिरामी हुनुभएको थाहा पाएपछि घरमा गएर भेट्दा पनि क्याम्पस जीवनका धेरै आरोह-अवरोहका बारेमा खुलेर वार्तालाप भए । उहाँ सेवानिवृत्त हुनुभएको हो जस्तो पनि लागेन, यो भौतिक संसारबाट बिदा लिंदै हुनुहुन्छ भन्ने त कत्ति पनि आभाष भएन । आज श्रद्धाञ्जलिका दुई शब्द लेख्नुपर्दा असाध्यै पीडाबोध भइरहेको छ । हाम्रो सम्झनामा द्रोण सर कहिल्यै अस्ताउनु हुने छैन । हार्दिक श्रद्धाञ्जलि छ...... ॥

*९ पौष २०७७* *(लेखक मेची बहुमुखी क्याम्पसको पूर्व क्याम्पस प्रमुख हुनुहुन्छ)*



तीर्थ चापागाईं

# स्मृतिमा डा.द्रोणकुमार पौडेल

केही शिक्षा लिनु पर्ने मानिसको बारेमा स्मृति लेखन गर्नु पर्दा मेरो लेखनी समेत केही डराएको, काँपेको छ। विद्वान्, शान्त-सौम्य, शालीन व्यक्तित्वका धनी द्रोणकुमार उपाध्याय पौडेलको अल्पायुमा भएको दुःखद निधनले नेपाली भाषा-साहित्यको जीवित इतिहास नै केही गुमेको महसूस भएको छ। तर, शाश्वत सत्यलाई मान्नु नै विशेषता हो। नीति शास्त्र भन्दछ "कालो हि व्यसनः प्रशारित गृहे गृन्हाति दूरादपि"।

द्रोणकुमार उपाध्याय पौडेलका बाजे पं. गंगाधर, बज्यै मनोरथा, बुबा पं. टीकाराम शास्त्री र माता भेजमाया थिए। यिनै टीकाराम-भेजमायाबाट वि.सं. २००६ असार ५ गते (ई.स.१९४९.६.९) मा बिहाली, बटियामारी, दरङ् (असम) द्रोणकुमारको जन्म भएको हो। उहाँका बाजे शिक्षाका ज्योति आवाल ब्रह्मचारी षडानन्द अधिकारीका मामाका छोरा थिए। समकालीन षडानन्द र गंगाधरको प्राथमिक शिक्षा रुद्री, चण्डीसँगै अध्ययन भएको थियो। गुरु महाराज अध्ययनका लागि जनकपुरतर्फ जानुभयो। गंगाधर परिवारको पेट पालन हेतु असम जानुभयो। उहाँका साथमा दिङ्लाका डिल्लीकेशर चापागाईं पनि सँगै असमतिर गएका थिए। तर, फरक-फरक स्थानमा बसोबास गरे।

पं. टीकाराम शास्त्री विद्यालयका शिक्षक हुनाले बटियामारीबाट उदालगुडी दरङ असममा सरुवा हुँदा परिवार सबै उदालगुडीमा बसोबास गर्न थाले। द्रोणकुमारले उदालगुडीबाटै एस.एल.सी. गरी दरङ कलेजबाट आई.ए., बी.ए. पूरा गर्नुभयो। एम.ए.का लागि त्रिभुवन विश्वविद्यालय काठमाण्डौमा अध्ययन गरी एम.ए. पूरा गर्नुभयो। २०३८ सालमा मेची क्याम्पस-भद्रपुरमा सहायक प्राध्यापकमा रही अध्यापन गर्नुभयो। २०४८-४९ सालमा पद्मकन्या क्याम्पस-काठमाण्डौमा अध्यापन गरी पुनः मेची बहुमुखी क्याम्पसमा स्थानान्तर भई आउनुभयो। उहाँको

पाठनकला सरल र सरस थियो । यो पंक्तिकारले पनि केही समय लेक्चर सुन्ने सौभाग्य पाएको थियो । उहाँको पाठनकलाको ख्याति अझै मसँग जीवित छ ।

उहाँले नेपाली सवाई विषयमा अनुसन्धान गरी सन् २००४ मा नर्थ बंगाल युनिभर्सिटीबाट विद्यावारिधि (पी.एच.डी) गर्नुभयो । उदात्त स्वभावका धनी द्रोणकुमारजी जीवनमा निराश कहिल्यै हुनु भएन । आफू इज्जत चाहनेले अरूको इज्जत गर्नु पर्दछ भन्ने कुरा उहाँ सधैं दोहोऱ्याउनु हुन्थ्यो । अनादिग्रन्थ वेदलाई जीवनको गुरु मान्नु हुन्थ्यो । मूर्ति पूजामा हैन, कर्म पूजामा विश्वास गर्ने द्रोणजीको वैकुण्ठवासको कामना सहित भावपूर्ण श्रद्धाका साथ यो लेखनी विश्राम गर्दछु ।

*-भद्रपुर, झापा*

*(लेखक कवि हुनुहुन्छ)*



# प्रा.डा.द्रोणकुमार उपाध्यायसँग भेटका एक–दुई स्मरण

तेराख

पहिले चन्द्रगढी झापाको सदरमुकाम थियो । जालीझेलीले सोझासाझालाई झुक्याएर धनीपुर्जा हात पार्ने चन्द्रगढीको नाम राम्रो थिएन, आकर्षण थिएन । हिजोआज चन्द्रगढी तीर्थस्थल भएको छ । यो तीर्थमा पुग्दा पुग्नेहरू आनन्दाभूति बोकेर घर फर्कने गर्छन् । केही वर्षदेखि लेखनाथ पुस्तकालयलाई धुरी बनाएर ठूला-ठूला साहित्यिक, सम्मानित कार्यक्रमहरू भइरहेका छन् । फेसबूक हेरेर आनन्द लाग्छ । ठाउँ परिवेश पनि मिलेको, मेची क्याम्पस नजिकै, त्यहाँका साहित्यिक प्राध्यापकहरू र चन्द्रगढीका सक्रिय साहित्यकर्मीले गर्दा त्यो क्षेत्र धेरैको लोभलाग्दो भएको छ । प्रदेश- १ र काठमाण्डौसम्मका मूर्धन्य साहित्यकारहरू चन्द्रगढीको साहित्यिक जमघटबाट आकर्षित भएका छन् । म भने लगभग दुई वर्षदेखि शारीरिक र अन्य परिस्थितिले गर्दा चन्द्रगढीका कार्यक्रमहरूमा भाग लिन नसकेकोका दुःखी भएको छु । लेखनाथ पुस्तकालयका अध्यक्ष नवराजजीले बोलाउन पनि छाड्नुभयो । मलाई बोलाइदिए जान नसके पनि निम्तो पाएँ भनेर आनन्दित हुने थिएँ ।

झापाका अन्य पुस्तकालयमा साहित्यिक गतिविधि लेखनाथ पुस्तकालयको जस्तो हुँदैन । यति लेख्दालेख्दै पनि म विषयदेखि टाढिएको छुइन । चन्द्रगढीकै सेरोफेरोमा छु । देवीचरण भण्डारी, खगिन्द्रा खुशी, कृष्ण निराकारले विद्वान चिन्तक, अन्वेषक डा.द्रोणकुमार उपाध्यायका बारे लेख्न अघि पछि गरेर फोन गरिरहनु भएको छ । मैले डा.द्रोणजीका बारे दुई अक्षर भए पनि लेख्न पाउनु मेरो सौभाग्य हो । यतिबेर म धेरै कुराले सुस्त छु । कसरी लेख्न सकौंला ? गाह्रो हुँदा पनि कलम समातें । कृतिका बारे समीक्षा लेख्नुभन्दा स्मरण लेख्दा राम्रो ठानी संस्मरण तर्फ लागें ।

डा.द्रोण असममा जन्मनुभयो, असम मै हुर्कनुभयो, असममै शिक्षा ग्रहण गर्नुभयो । म पनि आधा असमकै उपज हुँ । आमा असम तेजपुर-नेपालीपट्टीमा

जन्मनुभएको हो । डा.द्रोण मातृभूमि सम्भिmएर नेपाल आउनुभयो । मसँगको भेटमा भन्नुभएको थियो- असममा मलाई जागिर मिलेको थियो, तर म भाषाप्रेमी र त्यसमा पनि नेपाली भाषा औधि मन पराउने भएका कारण त्रि.वि.बाट एम.ए. गरें । असमका धेरै आफन्तको पूर्वी नेपालमा बसोबास भएकाले मैले झापालाई कार्यथलो बनाएँ । झापाबाट नजिक उत्तरबङ्ग विश्वविद्यालय भएकाले नेपाली सवाईमा पी.एच.डी गरें ।

मेरो द्रोणजीसँग चिनजान भएको १५-२० वर्ष भयो । उहाँ गम्भीर रूपले पढ्ने, मनन, चिन्तन गर्ने अनि मात्र लेख्ने गर्नुहुन्थ्यो । मेरा दाइ श्री डिल्लीराम खतिवडा (पटवारी)कोमा जाँदा उहाँको घर नजिकै भएकाले पुग्न थालें । पहिलोचोटि उहाँको घर पुग्दा उहाँकी धर्मपत्नी मीरा गुरुआमा घरमा हुनुहुन्थ्यो । त्यो दिन साहित्यिक र खोज अनुसन्धानका कुरा भए । म भाषाशास्त्री महानन्द सापकोटाका बारे उहाँको खोजमूलक कृति लेख्न प्रकाशन गर्ने सोचमा थिएँ । महानन्द सापकोटाका कुरा हुँदा उहाँले डटेर महानन्द सापकोटाको जन्म इलाम जिल्लाको इरौंटार गा.वि.स. देवानछाप वार्ड नं. ८ मा जन्मनुभएको हो । मसँग भरपर्दा धेरै प्रमाणहरू छन् । ती प्रमाणका साथै महानन्द सापकोटा स्वयम्ले मेरो जन्मथलो देवानछाप हो, म बुढो भएँ, मलाई त्यहाँ मेरो जन्मथलोमा पुऱ्याइदेऊ नानी भनेपछि म उहाँलाई लिएर त्यता गएँ । साथमा पं.नरपति लुइँटेल, सरोज ओली र धेरै अरुहरू पनि थिए । मैले उहाँको जन्ममिति पारेर लर्केतातीका साथ २०३० बैशाख ३० गते उहाँलाई उहाँको जन्मथलो देवानछाप पुऱ्याएँ । उहाँको साक्षीको रूपमा रहेको पुरानो चिलाउनेको रुखलाई अँगालो मारेर रुनुभयो । एउटा चुचे ढुङ्गो देखाएर यो मेरो बाल्यकालमा आची गर्ने ठाउँ हो भन्नुभयो । यी प्रमाणित कुरा गर्दा पनि उहाँले पत्याउनु भएन । उहाँलाई एउटा प्रश्न दिएर यसको उत्तर म लिन आउँछु भनें र म घर फिरें । पछि त्यो अन्तर्वार्ता नै लिन गएँ । उहाँले दिएको अन्तर्वार्ता मेरो महानन्द दर्पण पुस्तकको पेज ८८ मा प्रकाशित भएको छ । डा.द्रोणसँगको अन्तर्वार्ता यसप्रकार छ–

*मेची क्याम्पसका प्राध्यापक डा.द्रोणप्रसाद उपाध्यायसँगको छोटो भेटवार्ता :*

प्रश्न : महानन्द सापकोटाको जन्म देवानछाप इलाममा भएको होइन भनेर तपाईंले साथीभाइसँग चर्चा गरेको सुनियो । तपाईंकै विचारमा महानन्दको जन्मथलो कहाँ हो ? जानकारी पाउँ न ।

उत्तर : महानन्द सापकोटा नेपाली साहित्यका एक उज्याला नक्षत्र हुन् ।

नेपाली साहित्यमा भाषाशास्त्रीय चर्चा उठाउने पहिलो व्यक्ति वा विद्वान्का रूपमा उनको बलियो प्रसिद्धि छ। हाल उनको जन्मस्थलमा महानन्द जयन्ती मनाउँदै आउने गरेको पाइन्छ। महानन्दको जन्मस्थान सन्दर्भ अलिक अन्योलमा पर्न सक्ने देखिन्छ। किनभने केही ज्ञाताहरू महानन्दले देवानछापको बढाइँ गरी कविता लेख्तैमा उनको जन्मस्थान त्यही हो भन्ने तर्कमा असहमत पनि रहेका पाइन्छन्। उनीहरू असमको कतै वा डुवर्सतिर महानन्द जन्मेका हुन् भन्ने आग्रह गर्छन्। हुन पनि महानन्दको पठनपाठन, भ्रमण विवरण र नोकरी आदिलाई अनि उनको बाङ्गला, असमी जस्ता पूर्वी भारतीय भाषा ज्ञानलाई नियाल्दा उनको जन्मस्थान सम्बन्धी उठेको शंकाले केही मल पाउन सक्दछ। असमको तेजपुर, नैविल बिहाली, आरिम, अरु पनि महानन्दको पूर्वजीवन बारे जहाजघाटमा टिकट काटेको जान्ने प्रशस्त मानिसहरू पाइन्छन्। बिहालीका विद्वान् लेखक साहित्यकार विष्णुलाल उपाध्याय, तेजपुरका अमर भट्टराई, दुर्गा घिमिरे, भवानी उपाध्याय तथा गमिरी, बटियामारी, माझगाउँ आदि ठाउँमा सापकोटाबारे जान्ने उहींकै मानिस छन्। उनीहरूसँग भेटघाट गरे यस कुराको टुङ्गो लाग्छ। मेरो बाल्यकाल उतै बितेकाले मेरा मामा नरपति उपाध्याय महानन्दसँग परिचित मानिस भएकाले बिराटनगर आएपिच्छे उहाँ महानन्दसँग भेट गर्न जाने गरेको र म पनि एकाध पटक सँगै गएको कुरा स्मरणमा छ। तर, त्यसबेला कतै उहाँको जन्मथलोको चर्चा भएको थिएन। असमतिरका धेरै मानिस महानन्द असमतिरकै कुनै बस्ती, गोठ वा झुपडीतिर जन्मेका भनी जान्दछन्। तसर्थ महानन्दको जन्मस्थल केही विवादग्रस्त विषय बन्न गएको हुन सक्दछ।

२०६४/३/५

- डा.द्रोणकुमार उपाध्याय
चन्द्रगढी, झापा

डा.द्रोणजीलाई महानन्द सापकोटाबारे छोडेको उत्तर लिन म उहाँकोमा पुगें। भाषाका कुरा भए। उहाँ सात भाषाका ज्ञाता हुनुहुँदो रहेछ। बङ्ला, असमिया भाषाको लिपि (अक्षर) एकै जस्तो भए पनि यी भाषामा धेरै अन्तर भएको कुरा डा.द्रोणले बताउनुभयो। मेरो मावल तेजपुर नेपालीपट्टी र साहित्यका कुरा हुन्थ्यो। मेरा बा फुर्सतको समयमा बंगला अक्षरको रामायण पढ्नु हुन्थ्यो।

बटियामारी कान्छी फुपूका छोरा प्रा.मोहनसँग भेट हुँदा साहित्य र भाषाकै कुरा हुन्थे । म भाषाविज्ञ नभएका कारण डा.द्रोणसँग दाँजिएर तर्क गर्न सक्दिन थिएँ; मेरो काम सुन्ने र जान्ने मात्र रह्यो । असमिया, बंगाली भाषाका कुरा हुँदा तेजपुर-नेपालीपट्टी रहने माहिली सानिमासँग विवाह गर्ने विद्वान्, सम्मानित साहित्यकार पुष्पलाल उपाध्यायसँग पनि अग्निगढ पहाडमा बसेर असमिया, बङ्गाली, नेपाली भाषाका बारे कुरा हुन्थे । नेपाली बङ्गाली-असमिया भाषाका कविता हुन्थ्यो । असममा रहने नेपाली सभ्य, सुसंस्कृत र पढेलेखेका हुने- यसैभित्र डा.दोण पनि हुनुहुन्छ । म महानन्द सापकोटाबारे कृति निकाल्न असम भ्रमणमा केही दिन रहँदा त्यहाका प्रायः नेपाली प्रजातन्त्र (बहुदलीय प्रजातन्त्र) घर पाएकाले मैले डा.द्रोणजीलाई सोधें- 'तपाईं कुन राजनैतिक विचारलाई समर्थन गर्नुहुन्छ ? मेरो प्रश्नको उत्तरमा उहाँले भन्नुभयो- 'म प्रजातन्त्रमा विश्वास राख्छु । असममा रहने सबै नेपाली प्रजातन्त्रमा विश्वास राख्छन् । अब राजनैतिक प्रश्न नराखिदिन आग्रह गर्दछु । (त्यसबेला म प्रबल मार्क्सवादी थिएँ) असममा रहेका आफन्त केही सचेत व्यक्तिहरूबाट द्रोण उपाध्यायका बारे केही जानकारी पाएको थिएँ ।

मैले डा.द्रोण उपाध्यायसँग मेरो मनमा खट्किएको कुरा राख्ने विचार गरें- असमका ब्राह्मणले किन उपाध्याय लेख्छन् ?

मेरो यो प्रश्नलाई उहाँले गम्भीर रूपमा लिनुभयो । उहाँले भन्नुभयो- 'हेर्नुहोस्, भाषा (टाइटल) नाता गोता, थर, गोत्रबाट जाति चिन्न सकिन्छ । जति नै आधुनिक कुरा गरे पनि रगत, रूप-स्वरूपलाई पन्छाउन मिल्दैन । असममा भएका उच्च ब्राह्मणहरूको जातीय पहिचान, उपाध्याय हो । यसैले असमका उच्च ब्राह्मणले नाममा 'उपाध्याय' राख्छन् । एक स्टेप मुनिका मानिने ब्राह्मणहरूले शर्मा लेख्ने गर्छन् । शर्मा भन्नाले सजिलो सबैले जान्ने 'जैसी' बुझिन्छ । असममा जाँदा म शर्मा हुँ भन्यो भने उच्च ब्राह्मणले विवाह गर्न छोरी दिंदैनन् । चुलोचौकोको कुरा उठिहाल्छ । पढेका प्रमाणपत्र, नागरिकतामा ब्राह्मण, शर्मा, बहादुर के हो ? लेखिनु पर्छ । उहाँसँगको यो अन्तर्वार्ताले म गम्भीर भएँ । हाम्रा विद्वानहरू डा.तारानाथ शर्मा र उहाँका सबै भाइहरूले दाजुको देखासिकी गरेर शर्मा लेखेका छन् । डा.लोकराजले पनि शर्मा लेख्नुभएको छ । डा.खगेन्द्रनाथ अधिकारीले पनि शर्मा लेख्नुभएको छ । करफोक, इलाम पढ्दा मैले पनि देखासिकी गरेर एस.एल.सीको परीक्षामा शर्मा लेखेको छु, खतिवडा छैन । पहिलो प्रमाणपत्र शर्मा भएकाले सबै परीक्षामा शर्मा लेख्नै पर्दोरहेछ । यी

माथिका शर्मा लेख्ने हामी सबै उच्च ब्राह्मण हौं भने डा.द्रोणजीलाई । उहाँले भन्नुभयो- यो गल्ती हो ।

डिल्लीराम खतिवडाका नातिको उपनयन कार्यमा भाग लिन चन्द्रगढी पुगें । मैले खो गरी गायत्री मन्त्रबारे सानो पुस्तिका हुने कृति नै भनौं लिएर गएको थिएँ । यी आधुनिक बटुकलाई गायत्री मन्त्रबारे जानकारी होस् भनेर सम्झाइकन यो मेरो सानो कृति हातमा राखिदिएँ । एक-दुई प्रति झोलामा राखेको थिएँ । डा.द्रोणका आँखा परेछन्, हाँस्दै सोध्नुभयो- 'यस्तो पर्वमा तपाईं बटुकलाई के दिंदै हुनुहुन्छ ?' मैले हाँस्दै भनें- 'गायत्री मन्त्र बारे अर्थ खोलेर लेखेको जानकारीमूलक सानो पुस्तिका ।' गायत्री मन्त्र सुन्नासाथ निक्कै आकर्षण छायो उहाँमा । उहाँले हाँस्दै भन्नुभयो- प्रबल मार्क्सवादीले गायत्री मन्त्रको खोज अनुसन्धान गरी छपाएर बाँड्नु एकदमै नयाँ कुरा भयो । मलाई पनि एक कपी दिनु पर्‍यो भन्नुभयो । कार्यक्रममा भीड थियो । डा.द्रोण र म एक-एक वटा कुर्सी लिएर केही फरक ठाउँमा बस्थौं । मैले झोलाबाट झिकेर गायत्री पुस्तिका दिएँ । उहाँ त्यसमा गम्भीर भएर पढ्न थाल्नुभयो । झण्डै आधा घण्टा बितेछ । उहाँले भन्नुभयो- 'पूरा पढ्न भ्याइन । यति मेहनत गरेर गायत्री मन्त्रको अर्थ र महामनाहरूले गायत्री मन्त्रबारे व्यक्त गरेका महान वाणीहरू देख्दा म गम्भीर भएको छु । मैले तपाईंलाई पार्टीको मान्छे मात्र सम्झिएको थिएँ । तपाईं यति गहिरो अध्येता पाएर म धेरै खुशी भएँ । पूरै पढेर म अर्को भेटमा यहाँसँग सम्वाद गर्नेछु भन्दै हात मिलाउनुभयो ।

मैले सत्यार्थ प्रकाश धेरै पढेको थिएँ । आर्य समूहले गायत्री मन्त्र धेरै मन पराएको कुरा र विद्वान लेखक आर्य सामाजिक कमलीकान्तज्यूले गायत्री मन्त्र धेरै मन पराएको चर्चा मसँग गर्नुभएको थियो । अब भने डा.द्रोणका विचार, आस्था, धर्म संस्कृतिबारे जान्ने मेरो मनमा विचार उम्रियो । ध्यानपूर्वक पछिल्ला भेटमा उहाँबारे खोजी गर्दा उहाँ आर्य सामाजिक समर्थक, उपासक हुनुहुंदो रहेछ । उहाँ आर्य समर्थक ब्राह्मण-नीति नियममा कट्टर, म भने सनातन हिन्दू धर्मावलम्बी सर्वहारा-जे पनि खाने, जोसँग पनि गला मिलाउने । धार्मिक, सांस्कृतिक आस्थाका दृष्टिकोणले हामी फरक-फरक देखियौं । तर, हाम्रो मित्रता पहिलेभन्दा गहन भयो ।

बसाइको दूरी र व्यवसायले गर्दा सँगै बसेर भेट-वार्ता गर्ने मौकै नपर्ने । लेखनाथ पुस्कालयमा हुने कार्यक्रमहरूमा टाढैबाट हेराहेर मात्र हुने । तर, पटक-

पटक भएका वार्ताले मैले के बुझें भने, डा.द्रोण प्रकाण्ड विद्वान्, खोज अनुसन्धाता हुनुहुँदो रहेछ । उहाँले आफ्ना पछिल्ला केही कृतिहरू पठाइदिनु भयो ।

डा.द्रोणसँगको भेटले गर्दा मेरा आत्मीय मित्र खडानन्द वाशिष्ठलाई सम्झिएँ । उहाँ साथी सहित लामा-लामा घारा-लोरा लिएर गंगा नदीमा हुने पर्वमा नुहाउन आउने धार्मिक यात्रीहरूलाई मार्ग निर्देशन र सुरक्षा खातिर खटनु हुन्थ्यो । उहाँ आर.एस.एस. केमा छौं भन्नु हुन्थ्यो । यही प्रसङ्गमा मित्र वाशिष्ठलाई सोधें- ' तपाईं पनि आर्य धर्ममा हुनुहुन्छ, तपाईं कस्तो आर्य हो ? द्रोणजी पनि आर्य हुँ भन्नुहुन्छ । उहाँ आदर्श र धार्मिक निष्ठामा हुनुहुँदो रहेछ ।

'म पनि आर्य हुँ, तर द्रोणजी जस्तो कट्टर आर्य हुन सक्दिन ।' म गम्भीर भएँ- बाहिरबाट हेर्दा सबै ब्राह्मण । तर धार्मिक, सामाजिक आस्थामा भने फरक-फरक । यो गहिराइतर्फ जान्न सिक्न डा. द्रोणजीको सम्पर्कबाट प्राप्त भयो । जात-जाति वर्ग पनि सामाजिक जीवनको एक पाटो हो । यस्ता विषयमा पनि जानकारी राख्न आवश्यक ठानें मैले । जीवित अवस्थामा उहाँबाट नै बनिसकेको छ - जीवित अवस्थामा महत्व नदिने - मृत्युपछि हाइहाइ गर्ने ।

म निकै प्रशन्न भएको छु, साहित्यिक क्षेत्रमा चन्द्रगढीका केही विद्वान् वर्ग लागिपर्नु भएको छ। हिजो त्यहाँका द्रोणजीका बारे खोज्न तल्लीन हुनुभएका साहित्यकारहरू धेरै अप्ठ्यारो झेल्दै बङ्गाल-सिलिगुडी नजिक रहेको माटिगाडामा बस्नुभएका प्रा.डा.भीमकान्त उपाध्यायसँग जानकारी लिन पुगेको लामो जानकारीमूलक समाचार सम्पादकमण्डलमा रहनुभएका देवीचरण भण्डारीले फेसबूकको वालमा राख्नुभयो। यो टोलीमा प्रधान सम्पादक खगेन्द्रा खुशी, तारा विविध, कृष्ण सुवेदी निराकार, देवीचरण भण्डारी र प्रा.द्रोण उपाध्यायका परिवार रहेको थाहा पाएँ । प्राडा.द्रोणकुमार उपाध्यायका बारे महत्वपूर्ण खोजमूलक स्मृतिग्रन्थ निकाल्न लाग्नुभएका प्रा.डा.द्रोणजीकी धर्मपत्नी मीरादेवी पौडेल, छोरा-बुहारी यशवन्त पौडेल-परिना चापागाईं पौडेल र सम्पादकमण्डलमा म श्रद्धाले नमन गर्दछु। म सम्झन्छु- डा.द्रोणकुमार पौडेलले कहिल्यै म सम्मानित छु भनेर खुसामत, प्रचारबाजी चाप्लुसी गर्नु भएन । कर्ममा (गीता दर्शनअनुसार) विश्वास राखी राम्रा कृति लेखन र सामाजिक गतिविधिमा लागिरहने महान् व्यक्ति द्रोणजीको निधन भयो । उहाँको यश फैलियोस् भनी कामना राख्दछु । उहाँमा श्रद्धाञ्जलि ।

*२ माघ २०७७* *- धुलाबारी, झापा*

*(लेखक प्रसिद्ध साहित्यकार तथा आख्यानकार हुनुहुन्छ)*



डा. द्वीजेन्द्रनाथ भकत

# राजवंशी स्नेही डा. द्रोणकुमार उपाध्याय

डा. द्रोणकुमार उपाध्याय आफू राजवंशी नभए पनि असम, बङ्गाल, बिहार आदि ठाउँहरूमा बसोबास गरिआएका कोच-राजवंशीहरूलाई औधी माया गर्ने एक जना स्वनामधन्य व्यक्ति हुनुहुन्थ्यो । नेपालको झापा जिल्लाको चन्द्रगढी मैत्रीटोल निवासी तथा त्रिभुवन विश्वविद्यालय अन्तर्गत भद्रपुर मेची क्याम्पसका नेपाली भाषा विभागका अध्यापक डा. द्रोणकुमार उपाध्याय एक जना मृदुभाषी, निरामिषभोजी, अत्यन्त सहज-सरल विद्वान हुनुहुन्थ्यो । उहाँले नेपालका राजवंशीहरूबारे शोधमूलक ग्रन्थ तथा शोधपत्र प्रकाशित गर्नुभएको छ । उहाँसँगको २०-२५ वर्षे लामो सान्निध्य प्राप्त गरी मित्रताको सम्बन्धमा गाँसिन पाएको हुनाले म असामयिक वियोगको दुःखद समाचार पाएर साह्रै मर्माहत भएको तथा व्यथित भएको छु । उहाँका ती माया मिश्रित कुराहरूको सम्झना गर्दै पवित्र स्मृतिमा केही हरफ लेख्ने प्रयास गरें ।

नब्बेको दशकको अन्तातिरको कुरा हो । जलपाइगुडी शहरको एउटा सभागृहमा अन्तर्राष्ट्रिय पर्यायको सङ्गोष्ठी (Seminar) अनुष्ठित भएको थियो । त्यहाँ असमका भूतपूर्व मुख्यमन्त्री शरदचन्द्र सिंह तथा अन्य धेरै विशिष्ट व्यक्तिहरू आमन्त्रित अतिथिका रूपमा उपस्थित हुनुहुन्थ्यो । त्यस विचारगोष्ठीको आह्वान नर्थ इस्ट फाउण्डेशन फोर सोसियल साइन्स स्टिडिज एण्ड रिसर्च, जलपाइगुडीले गरेको थियो । सङ्गोष्ठीको विषय थियो - राजवंशी भाषा, साहित्य, संस्कृति आदि । त्यस सङ्गोष्ठीमा असम, बङ्गाल, बिहार, नेपाल तथा बङ्गलादेशबाट पनि अन्वेषकहरूको आगमन भएको थियो । त्यसै सङ्गोष्ठीमा नेपालबाट डा. द्रोणकुमार उपाध्यायज्यू आउनुभएको थियो । टेकनिकल सेसन (Technical Session) को प्रारम्भमै मैले र डा. द्रोणकुमार उपाध्यायज्यूले सँगसँगै शोधपत्र पाठ गर्‍यौं । सङ्गोष्ठी-पत्रहरू अङ्ग्रेजी भाषामा थिए । डा. द्रोणकुमार उपाध्यायज्यूको शोधपत्रको नाम थियो- "Rajbanshi of Nepal"

र मेरो शोधपत्र थियो- "Formation and development of Rajbanshi language" सङ्गोष्ठीको परिसमाप्तिपछि परिचयको आदान-प्रदान पर्वमै मैले जब आफ्नो परिचय दिँदै म असमबाट आएको भनें; तब लगत्तै उहाँले मसित असमिया भाषामै वार्तालाप गर्न थाल्नुभयो । पहिलो परिचयमै नेपालबाट आएका एक जना असमिया भाषा बोल्नसक्ने भनेर म छक्क परेको थिएँ । पछि उहाँले नै मेरो मनको भाव बुझेर शङ्का समाधान गर्दै उहाँ पहिले मध्य असमतिरको एउटा विद्यालयमा शिक्षकका रूपमा कार्यरत हुनुहुन्थ्यो भन्ने कुराको जानकारी दिनुभएको थियो । त्यसैकारण उहाँ असमिया भाषा राम्रोसँग पढ्न-लेख्न सक्नु हुन्थ्यो । यही थियो, डा. द्रोणकुमार उपाध्यायज्यूसँगको मेरो पहिलो परिचय । नेपालका राजवंशीहरूबारे लेखिएको उहाँको त्यो सङ्गोष्ठी-पत्र (शोधपत्र) मलाई पछि प्रकाशित गर्न उहाँले अनुमति प्रदान गर्नुभएको थियो । मैले पनि मेरो सम्पादित ग्रन्थमा राजवंशी भाषाको प्रसङ्गमा केही अंश समाविष्ट गरी प्रकाशित गरेको थिएँ ।

पहिलो भेटघाटमा उहाँबारे मेरा मनमा अनेकौं प्रश्नहरू जागेका हुन् । एक जना ब्राम्हण विद्वान भएर पनि राजवंशीहरूबारे लेख्ने इच्छा उहाँको मनमा कसरी जाग्यो होला ? पछि-पछि धेरै सङ्गोष्ठीहरूमा उहाँसँग भेटघाट हुँदै जाँदा मलाई छक्क पार्दै मेरो जिज्ञासाको समाधान पनि उहाँले नै गरिदिनुभएको थियो । उहाँ असलमा राजवंशीहरूलाई माया गर्ने एक जना शोधकर्ता विद्वान हुनुहुन्थ्यो । उहाँले विभिन्न सङ्गोष्ठीहरूमा राजवंशीहरूबारे अध्ययन गरी धेरै शोधपत्र पाठ गर्नुभएको रहेछ । उहाँबाटै मैले नेपालका विशेषगरी झापा र मोरङका राजवंशीहरूबारे जान्ने मौका पाएको थिएँ ।

दिनहाटा कलेजको एउटा सङ्गोष्ठीमा भाग लिन गएका बेला हामी अतिथि आवासमा सँगै थियौं । भोलिपल्ट विशान भुटानका अर्का एक जना विद्वान सहित चिया पिउन जाँदा प्लास्टिकको कपमा चिया पिउनु स्वास्थ्यका लागि हानिकारक हो भन्ने कुरा त्यस दिन नै उहाँबाटै जान्न पाएको हुँ । सधैं स्वास्थ्यप्रति सजग उपाध्यायज्यू निरामिष भोजनको व्यवस्था नभएकोले गर्दा धेरै सङ्गोष्ठीहरूमा भोकै रहनुपर्ने भएको पनि मैले देखेको छु । नेपालमा एउटा सङ्गोष्ठीमा भाग लिन गएका बेला चन्द्रगढी मैत्री टोलको उहाँको वासगृहमा पुग्ने तथा सबैसित परिचित हुने सौभाग्य पनि मैले प्राप्त गरेको थिएँ । त्यसैगरी, असमको प्रमथेस बरुवा महाविद्यालयमा अर्को सङ्गोष्ठीमा भाग लिन आएका बेला धुबुडीको

उहाँहरू बसेको होटलबाट भुटानका एक जना विद्वानसहित डा. दीपककुमार रायलाई लिएर उहाँ हाम्रा घरमा पनि आउनुभएको थियो । यसरी नै यस्ता एक विद्वानसँगको सम्पर्कमा रहँदै हाम्रा दिनहरू बितिरहेकै थिए ।

धेरै दिनअघि उहाँले मलाई नेपाली भाषामा लेखिएको उहाँको एउटा पुस्तक उपहारस्वरूप दिनुभएको थियो । त्यस पुस्तकको नाम थियो “राजवंशी परिचय” (भाषा, लिपि र व्याकरण खण्ड, १९९५) । आज त्यसै पुस्तकबारे केही कुरा लेखेर त्यस्ता एक महान विद्वानप्रति म श्रद्धा निवेदन गर्न चाहन्छु । डा. द्रोणकुमार उपाध्यायज्यूले राजवंशीहरूलाई अन्तरात्माबाटै माया गर्नुहुन्थ्यो । एक जना ब्राम्हण भएर पनि उहाँले राजवंशीहरूबारे जान्ने इच्छा राखेर त्यसतर्फ मन लगाउनुभयो । नेपालका राजवंशीहरूले पनि उहाँलाई साँचो श्रद्धा र सम्मान गर्दथे । डा. द्रोणकुमार उपाध्यायज्यूको पुस्तकमा नेपालका ‘राजवंशी भाषाको उत्पत्ति, विकास र वर्तमान स्थितिबारे चर्चा गरिएको छ । उहाँका अनुसार राजवंशी भाषा असमिया, बङ्ला र मैथिली भाषाको समानान्तर भाषा हो तथा यिनीहरूसँग निकट सम्बन्ध भएको भाषा पनि हो । उहाँले त्यस पुस्तकमा राजवंशी भाषाको परिचय, लिपि, भाषिक संरचना, समाज र लक्षण, भाषा व्याकरण, राजवंशी भाषाको ध्वनि परिवर्तन, शब्दभण्डार, उपसर्ग, परसर्ग, क्रियाको काल, समास, द्विरुक्ति अथवा द्वित्वरूप, सङ्ख्यावाचक शब्द, विभक्ति र कारक, वाच्य, लिङ्ग व्यवस्था, करण/अकरण आदिबारे चर्चा गर्नुभएको छ । राजवंशी भाषामा उहाँले हिन्दी, उर्दू, मैथिली, बिहारी भाषाको पनि व्यापक प्रभाव देख्नुभएको छ । उहाँले नामवर सिंहद्वारा लिखित “हिन्दी के विकाश में अपभ्रंशों का प्रयोग” शीर्षक लेखको आधारमा राजवंशी भाषामा पनि धेरै पूर्वभारतीय भाषाका वैशिष्ट्य फेला पार्नुभएको छ । ती वैशिष्ट्यहरू यसप्रकार छन् –

१) संस्कृत ‘क्ष’ ध्वनि ‘क् ख’ अथवा ‘ख’ मा परिवर्तन हुनु । जस्तै : भिक्खा ।
२) संस्कृत ‘त्व’ ‘त्त’ मा परिवर्तित हुनु । जस्तै : तत्त, महत्त, गुरुत्त आदि ।
३) संस्कृत ‘व’ ‘स्वर’ मा रूपान्तरित हुनु । जस्तै : दुआर ।
४) ‘व’ ध्वनि ‘ब’ मा परिवर्तित हुनु । जस्तै : बेहतर, बास्तब आदि ।
५) ‘ष’ ध्वनिको ‘स’ उच्चारण हुनु । जस्तै : केसब, नास ।
६) संस्कृतमा भन्दा राजवंशी भाषाको लिङग व्यवस्था धेरै सरल छ ।
७) पूर्वकालिक क्रियामा राजवंशी भाषामा ‘अइ’ प्रत्ययको आगमन हुन्छ । जस्तैः कराइ, खाइ, जाइ ।

८) तव्य भाव इबमा परिवर्तित हुनु । जस्तै : जाब, खाब, देखिब
९) भूतकालमा 'ल' प्रत्ययको व्यवहार । जस्तै : खाइल, गाइल, गइल आदि ।

हिन्दी, बिहारी र मैथिली भाषाका केही रूप राजवंशी भाषाले स्वाभाविक रूपले आत्मस्थ गरेको छ। जस्तै : हरबराय, सुनमान, आमने-सामने, कमबेशी, नजर, टहल, समल, खाराब, बिकाल, गप, बाद, किसिम, अगल-बगल आदि । माथि उल्लेखित रूपहरू हामी असम, बङ्गाल, बिहारका राजवंशी भाषामा पनि पाउँछौं ।

द्रोणकुमार उपाध्यायज्यूले राजवंशी भाषासँग आधुनिक असमिया, बङ्गला, मैथिली र नेपाली भाषामा पाइने एकात्मता यसरी उल्लेख गरेका छन् –

| (**क**) **बङ्गला** | (**ख**) **असमिया** |
|---|---|
| १) आमि भात खाबोना | १) मइ भात नाखाउँ |
| २) मा तोके डाके | २) तोक माये माते (बरपेटा असमीया) |
| ३) आमार बारीते जल नेइ | ३) मोर घरत पानी नाइ । |
| ४) एकथा आमि काउके बोलबो ना | ४) एइ कथा मइ काको नकउँ |
| (**ग**) **राववंशी** (**नेपालमा**) | (**घ**) **मैथिली** |
| १) मुइ भात निखाम | १) हम भात नही खायब । |
| २) तोक मा डाकासे | २) म्मा तोरा जौबत छौ । |
| ३) मोर घरत पानी नाइ | ३) हमरा घरमे पानी नै है । |
| ४) एक कथा मुइ काहक निकम | ४) यी बाद हम ककरो नै कहबै । |

(**ङ**) **नेपाली**

१) म भात खान्न ।
२) तिमीलाई आमाले बोलाउँदैछिन् ।
३) मेरा घरमा पानी छैन ।
४) यो कुरा कसैलाई भन्दिन (भन्ने छैन)

डा. द्रोणकुमार उपाध्यायज्यूले राजवंशी भाषासँगको मेल देखाउन असमिया, मैथिली, बङ्गला र नेपाली भाषाका केही अंश पाठकलाई बुझाउने उद्देश्यले उद्धृत गर्नुभएको छ । जस्तै :

**असमिया**

एक अतितर सुखर संसारर परा आजि मोक समये दूर बहु दूरलै टानी आनिसे । समयर परिवर्तनर लगे लगे मोर सुखर घर (संसार) जुइत ज्वलि छाइ

होइ गोल। खेइ जुई आजिउ बुकुर माजत दाउ-दाउकै ज्वलिसे। तार प्रथमे मोर खोनर पथार हेराइ गोल। तार पिछत एक एक कतर खकलोवे मोर परा बिदाय लब धरिल। खदौशेषत मोर खेइ खरू घरटि जार प्रत्येक बन्धनत मोर सात पुरुषर काहिनी बन्या आछिल, खेइ घरखनो मोर परा बिदाइ होइ गल।

**बङ्गला**

एक अतितेर सुखेर संसार थेके आज समय आमाके दूर बहुत दूर टेने निये आसछे। समयेर परिवर्तनेर सङ्गे सङ्गे आमार सुखेर संसार (घर) ज्वले छाइ हये गेल। सेइ अग्नि आजउ आमार भितरे टाय टाय करे ज्वलछे। प्रथमे आमार सोनार क्षेत्र (खेत) सबाइ हारिये गेल। तार पर एक एक करे सबाइ आमार निकट थेके बिदाय निते धरिल। अन्ततः आमार सेइ छोट्टो घरटा जाहार प्रत्येक बन्धने आमार सात पुरुषर काहिनी बान्धा त्रचलो सेइ घरटिउ बिदाय हये गालो।

**मैथिली**

अतीत के ए सुखे संसारसं आइ समय हमरा बहुत दूर सिंचक अनलक अन्देछु। समयके परिवर्तन सँग सँगे हमर खुकर घर आइगमे डाहिक छाओर भ गे। उ आइग आइओ छातिके भितरमे फरफराक जलिरहल अर्भछ। प्रथम हमर सोनके खेत हरा गेल, तकर बाद एक एक सबटा हमरा से बिदा लेव लागल। आखिर हमर ओ छोटका घर जकर प्रत्येक बन्धनमे हमर सात पुस्ताके कथा बान् हल छल ओह घर सेहो बिदा भगेल।

**नेपाली**

अतीतको यस सुखको संसारबाट आज समयले मलाई टाढा धेरै टाढा खँचेर ल्याएको छ। समयको परिवर्तन सँगसँगै मेरो सुखको घर (संसार) आगोमा डढेर खरानी भयो। त्यो आगो आज छातीभित्र हुरहुर गरी बलिरहेछ। पहिला मेरो सुनको खेत मासियो, त्यसपछि एक-एक गरेर मबाट सबैले बिदा लिन थाले। आखिरमा मेरो त्यो सानो घर जसका प्रत्येक जुइनाहरूमा मेरा सात पुस्ताको कथा बाँधिएको थियो, त्यो घर पनि बिदा भयो।

माथि उल्लेख गरिएका उदाहरणहरूद्वारा द्रोणकुमार उपाध्यायज्यूले यी सबै भाषा (Sister Language) हुन् भनी दर्शाउन चाहनुभएको छ। ग्रियरसनको उक्तिको

उल्लेख गर्दै उहाँले राजवंशी भाषामा स्वतन्त्र उच्चारण शैली छ भन्ने कुरा पनि स्वीकार गर्नुभएको छ। उहाँका अनुसार कामरूपका कोच राजवंशी राजाहरूको मातृभाषा राजवंशी नै थियो। यसैलाई राजाभाष र राष्ट्रभाषा भनिन्थ्यो। कोच राजवंशी राजाहरूले नै यो भाषालाई राजभाषाको मान्यता दिएका हुन्।

यसै भाषलाई कामरूपी भाष भनिन्थ्यो। उहाँका मुताबिक यसै भाषामा यशस्वी कवि साहित्यकारहरूले अनेकौं काव्यग्रन्थको रचना गरेका थिए। तिनीहरूभित्र माधव कन्दली, श्रीमन्त शङ्करदेव, माधवदेव, दामोदरदेव, अनन्त कन्दली, रामसरस्वती, चन्द्र भारती, पुरुषोत्तम विद्यावागीश, सार्वभौम भट्टाचार्य, पीताम्बर कवि, पीताम्बर कायस्थ, बकुल कायस्थ, श्रीधर दैवज्ञ, रतिकान्त उपाध्याय, रामराय आदिको नाम उल्लेख गर्न सकिन्छ।

यहाँहरू असमिया साहित्यका वैष्णव युगका कवि हुनुहुन्थ्यो। अर्कातिर उहाँहरूको समयलाई बङ्गला साहित्यको मलिलो कालखण्ड पनि भनिन्छ। तर, द्रोणकुमार उपाध्यायज्यूले उहाँको नेपाली भाषामा लेखिएको 'राजवंशी परिचय' शीर्षक ग्रन्थमा ती प्राचीन साहित्यकारहरूलाई प्राचीन कालका राजवंशी साहित्यिक र उनीहरूद्वारा लिखित साहित्यलाई प्राचीन राजवंशी साहित्य हो भनेर भन्न सक्ने साहस अहिलेका राजवंशी साहित्यिक तथा संरक्षकहरूले जुटाउन सक्नुपर्दछ भन्नुभएको छ। त्यस ग्रन्थमा उहाँले अझ राजवंशी भाषाको शब्दभण्डार सहित व्याकरणका अन्यान्य पक्षहरूको पनि चर्चा गर्ने प्रयास गर्नुभएको छ। यो लेख विस्तृत हुने डरले ती सबै विषयहरू यहाँ चर्चा गरिएन।

उहाँले "Rajbanshi of Nepal" शीर्षक शोधपत्रमा नेपालका राजवंशीहरूको प्रसङ्ग उल्लेख गर्दा नेपाल ३६ वटा जात र जनगोष्ठीहरूको आवासभूमि हो भन्नुभएको छ। ती जातहरूभित्रका चार वटा जनजाति राजवंशी, मैथिली, मेचे र धिमालहरू प्राचीन कालदेखि नै प्रभावशाली जनजाति हुन्। यिनीहरूभित्रका राजवंशीहरू चाहिं तराई क्षेत्रका रैथाने बासिन्दा हुन्। यिनीहरूको बसोबासो पूर्व तराई जिल्लाको झापा र मोरङ क्षेत्रमा देखिएको छ। तराई क्षेत्र भनेको खाद्य-शस्य उत्पादन हुने मलिलो पर्वतको फेदी अञ्चल हो। यस क्षेत्रभित्र धेरै नदी-नालाहरू छन् र यहाँ प्रशस्त मात्रामा माछा पाइन्छ। माछा राजवंशीहरूको अति प्रिय खाद्य हो। कोशी नदीका पूर्वपट्टि राजवंशी गाउँहरू देखिन्छन्। सन् १९५० अघि यस अञ्चलमा बसोबासो गर्न धेरै कठिन थियो। किनकि घना जङ्गल भएकाले यहाँ अनेक प्रकारका वन्यजन्तुहरू जस्तैः बाघ, भालु, हात्ती, जङ्गली भैंसी र

विषाक्त सर्पहरूको रगरगी हुन्थ्यो । वर्तमानको समयमा पहाडी क्षेत्रभन्दा तराई क्षेत्र बसोबासका लागि धेर उपयोगी ठहरिएको छ । अहिले यस क्षेत्रमा ताजपुरिया, गन्गाई, कोच, हाडी, बोड्गाहास, खोटाहास, बान्ता र मुलसमानहरूको बसोबासो देखिन्छ । नेपालको तराई क्षेत्रको दक्षिण भागमा राजवंशी भाषा जस्तै अरु नै भाषाहरूको चलन रहे तापनि उनीहरूका बीच आपस्तमा सम्पर्क गर्ने माध्यम चाहिं राजवंशी भाषा नै हो अर्थात Lingua Franca हो । उनका मुताबिक ताजपुरी राजवंशी नामको एउटा स्वतन्त्र भाषाको कुरा गरिए तापनि एक-दुई वटा शब्दबाहेक यो राजवंशी भाषा नै हो । अति थोरै मानिसले मात्रै ताजपुरिया राजवंशी भाषाको प्रयोग गर्दछन् । उहाँले एउटा कुरामा आश्चर्य प्रकट गर्दै के भन्नु भएको छ भने काठमाण्डौ उपत्यकामा नेवार सम्प्रदायका केही मानिसहरूले आफ्नो उपजाति (Sub-Cast) राजवंशी लेखेका छन् तथा तिनको थर पनि राजवंशी लेख्छन् । तर, आफूलाई भने नेवार जातिको भनेर परिचय दिन्छन् । यिनीहरूको मातृभाषा नेवारी हो । यिनीहरू असलमा तराई अञ्चलबाट बसाइँ सर्दै आएर यहाँका रैथानेहरूसित मिलेर आफैंलाई नेवारी भनेर परिचय दिएका हुन् । यस कुरामा उपाध्यायज्यूले सन्देह प्रकट गर्नुभएको छ । उहाँका मुताबिक असलमा उहिलेका झापा मोरङ अञ्चलका राजवंशीहरू सबै कामतापुरका बासिन्दा थिए । कोच राजवंशी राजाहरूको राज्य झापा, मोरङसम्म विस्तृत थियो । यसै सन्दर्भमा उहाँले केही ऐतिहासिक तथ्य पनि प्रस्तुत गर्नुभएको छ ।

यस्ता राजवंशीहरूलाई माया गर्ने विद्वान आज हामीबीच हुनुहुन्न । असलमा उहाँले हामीलाई छोडेर गएपछि ब्राम्हण समाज सँगसँगै कोच राजवंशीहरूका लागि पनि कहिल्यै पूर्ति नहुने क्षति भएको छ। उहाँका सान्निध्यमा रहँदाका सुमधुर स्मृतिहरूले आज हामीलाई बाँचिरहने शक्ति र प्रेरणा प्रदान गर्नेछ । उहाँको आदर्शले नै हाम्रो आउने पिँढीलाई जीवनमा अघि बढ्ने क्षेत्रमा पथ प्रदर्शन गर्नेछ । उहाँको विदेही आत्माप्रति अन्तरबाटै श्रद्धासुमन अर्पण गर्नुका साथै सद् गतिको कामना गर्दै यस लेखलाई यहीं बिराम दिएँ ।

***अनुवाद :* श्री पुष्पधर शर्मा**

*(लेखक राजवंशी भाषाका पण्डित हुनुहुन्छ)*



देवीचरण भण्डारी

# डा. द्रोणकुमार पौडेलको सामाजिक संघ–संस्थासँगको आवद्धता

डा. द्रोणकुमार पौडेल सरसँग मेरो परिचय कहिले भयो, ठ्याक्कै तिथि मिति त सम्झना छैन । तर, जहाँसम्म मेरी जीवनसाथी गीताजी मेची क्याम्पस भद्रपुरमा स्नातकोत्तर अध्ययन गर्दा चाहिं पक्का चिनजान भएको हो । शायद उहाँ त्यो बेला मेची क्याम्पसको नेपाली विभाग प्रमुख हुनुहुन्थ्यो र लोकसाहित्य पढाएजस्तो लाग्छ, स्नातकोत्तरमा उहाँले । उहाँसँगको निकटता भने मेरो पहिलो कृति "यौटा असल सन्तान जन्माउनु पर्छ" कविता संग्रह २०६५ को लोकार्पण कार्यक्रमदेखि मात्रै बढेको हो । चन्द्रगढीस्थित लेखनाथ पुस्तकालयको दुई कार्यकाल सचिव र एक कार्यकाल सभापतिको रूपमा सेवा गर्ने अवसर प्राप्त भएको थियो मलाई । शिक्षासेवी आदरणीय खडानन्द वाशिष्ठ र त्यसपछि घनेन्द्र शर्मा लेखनाथ पुस्तकालयको सभापति हुँदा म सचिवको भूमिकामा रहेको थिएँ । लेखनाथ पुस्तकालयले आयोजना गरेका प्रायःजसो कार्यक्रममा द्रोण सरको उपस्थिति रहन्थ्यो । त्यसो त द्रोण सर पनि लेखनाथ पुस्तकालयको सभापति भइसक्नु भएको व्यक्तित्व हुनुहुँदो रहेछ । जिल्लामा हुने प्राज्ञिक बहस र छलफलमा उहाँको गर्विलो उपस्थिति रहने गर्थ्यो । आफूलाई सधैं सक्रिय र क्रियाशील राख्न रुचाउने द्रोण सर 'तपाईंको सक्रियता देखेर म त छक्क पर्छु, कसरी समय व्यवस्थापन गर्नु हुन्छ ?' भनी बेला-बेला मलाई सोध्ने गर्नुहुन्थ्यो । द्रोण सर आफूलाई सक्रिय र क्रियाशील राख्न विभिन्न साहित्यिक तथा सामाजिक संघ-संस्थाहरूमा आवद्ध भएर समाजसेवामा समेत लागिरहनु भयो । उहाँको वैयक्तिक विवरणले यो कुराको प्रमाण दिन्छ ।

मातृभूमि स्वयम्सेवक संघ नेपालको संस्थापक सदस्य, हिन्दू स्वयम्सेवक संघ नेपालका प्रथम पूर्वाञ्चल चालक र निवर्तमान पूर्वाञ्चल क्षेत्र बौद्धिक शिक्षण प्रमुख, राष्ट्रिय हिन्दू एकता मञ्च नेपालको केन्द्रीय सल्लाहकार समिति सदस्य, हिन्दू स्वयम्सेवक संघ झापाको प्रथम अध्यक्ष, वैदिक समाज नेपाल, झापाको

संस्थापक सदस्य तथा दुई कार्यकाल अध्यक्ष, पौडेल वंश प्रकाशन समिति पूर्व क्षेत्र सल्लाहकार र झापा जिल्ला समितिको पहिलो अध्यक्ष रहेर समाजसेवामा आफ्नो समर्पण भावका साथ महत्वपूर्ण भूमिका निर्वाह गर्नुभएको देखिन्छ । उहाँ राजवंशी भाषाको पनि ज्ञाता हुनु हुन्थ्यो । त्यही भएर उहाँ यस भाषाको प्रथम उद्धारक र राजवंशी भाषा साहित्यको अध्येता भएर खोज अनुसन्धानमा लागिरहनु भयो । उहाँ लोकवार्ता परिषद् नेपालको राष्ट्रिय र अन्तर्राष्ट्रिय प्रतिनिधिका रूपमा रहेर लोकसाहित्यको उन्नयनमा निरन्तर लागिरहनु भयो । मेची क्याम्पस ,भद्रपुरका पूर्व क्याम्पस-प्रमुख घनश्याम खनालको स्मृतिमा स्थापित संस्था ‘घनश्याम स्मृति प्रतिष्ठान’ भद्रपुरका संस्थापक-अध्यक्ष र पछिल्लो समय उपाध्यक्ष रहनुभएको थियो । अध्यक्ष पदमा बसिसकेको मान्छे फेरि एक तह घटेर उपाध्यक्षमा बस्नु भनेको जोकोहीलाई स्वीकार्य हुने कुरा होइन । तर, द्रोण सरले यसलाई सजिलै स्वीकार गरी उपाध्यक्ष पदमा रहनुभयो । यो उहाँको उदारभावना र महानता पनि हो भन्छु म । आफूलाई सामाजिक तथा शैक्षिक संघ-संस्थामा आवद्ध गर्ने क्रममा उहाँ प्राज्ञिक विद्यार्थी परिषद् नेपालको पूर्वाञ्चल क्षेत्र सल्लाहकार, प्रज्ञा एकेडेमी चन्द्रगढीको संस्थापक सदस्य, पूर्वाञ्चल उच्च मा.वि. चन्द्रगढी र बिर्तामोडको संस्थापक सदस्य रहेर उहाँले बौद्धिक र शैक्षिक क्षेत्रमा पनि आफूलाई समाहित गरिरहनु भयो । सामाजिक, शैक्षिक, साहित्यिक र बौद्धिक संघ-संस्थाहरूमा मात्र सीमित रहनु भएन द्रोण सर, धार्मिक क्षेत्र र धार्मिक गतिविधि अनि सहकारी गतिविधिमा पनि उहाँको उत्तिकै सक्रिय उपस्थिति देखिन्छ । काली मन्दिर चन्द्रगढी (चन्द्रगढी बजारभित्र अवस्थित) को संस्थापक सदस्य, दुर्गामाता उपासना समिति चन्द्रगढी (केन्द्रमोड) को सल्लाहकार, साना किसान कृषि सहकारी संस्था लि. भद्रपुरको सल्लाहकार रहेर यस क्षेत्रमा उहाँले आफूसँग भएको ज्ञान र सीपको उचित सदुपयोग र संयोजन गर्नुभएको पाइन्छ। द्रोण सर सामूहिक सहकार्यमा रमाउनु हुन्थ्यो । मान्छे एक्लैले समाजमा खासै योगदान गर्न सक्तैन, तर सामाजिक संघ-संस्थामा रहेर सो संस्था मार्फत इमान्दारीपूर्वक लागिपर्ने हो भने समाज र राष्ट्रका लागि धेरै गर्न सकिन्छ भन्ने मान्यता राख्नु हुन्थ्यो उहाँ । सकारात्मक सोचका साथ बाँचुञ्जेल ‘समाज र राष्ट्रका लागि सकेको जति निस्वार्थ भावले केही न केही गर्नुपर्छ भनेर सधैं अरुलाई ऊर्जा दिइरहनु हुने द्रोण सरले आफ्नो जीवनकालमा कसैको चित्त नदुखाई, कसैलाई अर्घेलो नदेखाई आफूलाई सफल व्यक्तित्वको रूपमा चिनाउनु भयो ।

द्रोण सर प्राज्ञिक तथा बौद्धिक व्यक्तित्व भएका कारण राष्ट्रिय तथा अन्तर्राष्ट्रिय सेमिनार एवम् गोष्ठीहरूमा उहाँको सहभागिता रहेको पाइन्छ । सन् २००५ मा त्रिभुवन विश्वविद्यालय डिनको कार्यालयको लघुशोध परियोजना अन्तर्गत 'राजवंशी जाति : एक परिचय' विषयक शोधपत्र प्रस्तुत गर्नुभएको देखिन्छ । उहाँले International Folklore Conference को काठमाण्डौ अधिवेशनमा "सवाईको नालीबेली केलाउँदै" शीर्षकमा कार्यपत्र प्रस्तुत गर्नुभएको थियो, जुन इस्वी सन् २००१ मे ५-७ मा सम्पन्न भएको थियो । भारतको जलपाइगुडीमा ई. सं. २००२/२/२४ मा आयोजित North Estern Foundation for Social Science Research, International Conference मा 'Rajbasis of Neoal' शीर्षकको कार्यपत्र प्रस्तुत गर्नु भएको थियो । यसैगरी, द्रोण सरले भारतको उत्तर बङ्ग विश्वविद्यालयमा ई. सं. २००२/३/११ मा आयोजित 'नेपाली साहित्यिक समालोचना' गोष्ठीमा भाग लिई 'तारानाथ शर्मा : समालोचकका रूपमा' विषयक कार्यपत्र प्रस्तुत गर्नुभएको थियो । उत्तर बङ्गाल युनिभर्सिटीको नेपाली विभागले ई. सं. २०१२ मार्च १५-१६ मा आयोजना गरेको National Seminar On Folklore मा द्रोण सरको सहभागिता रहेको थियो । यसैगरी, अप्रिल ८-१० सम्म भारतको राँचीमा भएको 'जातीय आलोचना चक्र विश्वबङ्ग साहित्य तथा संस्कृति सम्मेलन'मा द्रोण सरले सहभागिता जनाएको कुरा उहाँको वैयक्तिक विवरणबाट थाहा हुन आएको छ । मिलन ज्योति नाट्य मञ्च गामेरी, शान्तिपुर, असममा जनवरी ३१ र फेब्रुअरी १, ई. सं.२०१५ मा भएको दुई दिवसीय International Seminar on Nepali Culture मा द्रोण सरको सक्रिय सहभागिता रहेको थियो । उहाँले अन्तर्राष्ट्रिय स्तरका उपरोक्त किसिमका अन्य धेरै भाषिक तथा साहित्यिक गोष्ठी तथा सेमिनारहरूमा सहभागी भई आफ्ना कार्यपत्रहरू प्रस्तुत गर्नुका साथै प्रभावशाली प्रवचनहरू पनि दिनुभएको पाइन्छ ।

अन्ततः कालको अगाडि कसको के पो लाग्दो रहेछ र ! जीवनमा आइपर्ने अनगिन्ती समस्याहरूलाई परास्त गर्नुभयो द्रोण सरले । तर, कालका सामू आत्मसमर्पण गर्नैपऱ्यो । त्यसो त मान्छेले संसार जितिसकेको छ । यहाँसम्म कि अन्तरिक्षमा समेत विजय प्राप्त गर्दैछ, गरिरहेछ । तर, मृत्युमाथि अथवा भनौं कालमाथि विजय प्राप्त गर्न सकेको छैन । विजय प्राप्त गर्न असम्भव छ । जन्मेपछि मृत्यु निश्चित छ । समय ढिलोछिटो हुन सक्छ, तर यसलाई प्रकृतिको नियम भन्न रुचाउँछु म । हो, द्रोण सरले पनि काल वा मृत्युलाई जित्न सक्नु

भएन । क्यान्सर जस्तो घातक रोगले उहाँलाई अचानक लिएर गयो । हामीसँग अब कहिल्यै साक्षात्कार नहुनेगरी वि. सं. २०७६/१०/१५ गते द्रोण सर शून्यमा विलीन हुनुभयो । हामीसँग बाँकी छन् त केवल उहाँसँगका अविस्मरणीय सम्झनाहरू । उहाँले समाज र राष्ट्रका लागि गरेका सत्कर्महरू । उहाँलाई चिरकालसम्म अमर राख्ने उहाँका कृतिहरू, जो समाजलाई दिएर जानुभएको छ । यो राष्ट्रलाई दिएर जानुभएको छ । हामीलाई जिम्मेवारी सुम्पिएर जानुभएको छ । उहाँले देखाएका सत्कर्मका मार्गहरूमा हामी हिंड्न सक्यौ भने उहाँप्रतिको सच्चा श्रद्धाञ्जलि हुनेछ । उहाँप्रति हामीले गरेको सच्चा सम्मान हुनेछ । सम्झनामा सदा रहिरहनु हुनेछ द्रोण सर । हार्दिक श्रद्धासुमन ।

*भद्रपुर, झापा*

*(लेखक प्रसिद्ध गीतकार तथा साहित्यकार हुनुहुन्छ)*



देवीप्रसाद आचार्य

# गुरु द्रोणकुमार उपाध्यायलाई सम्झँदा

सहप्राध्यापक डा. द्रोणकुमार उपाध्याय सादा जीवन र उच्च विचारका धनी व्यक्तित्व हुनुहुन्थ्यो । उहाँको व्यवहारमा निपुणता र शालीनता, बोलीमा मिठास, मृदुलता, मितव्ययिता र मिजासिलोपना पाइन्थ्यो भने हेराइमा दया झल्किन्थ्यो । भाव गाम्भीर्य, पहिरन र बाहिरी आवरणमा निख्खारता, कर्ममा तत्परता अनि साथीभाइहरूमा हँसमुख तथा मिलनसारिता स्पष्ट देखन्थ्यो । विद्यार्थीहरू माझमा लोकप्रियता, अध्ययनमा गहनशीलता, शैक्षणिक गतिविधिमा निरन्तरता र इमान्दारी उहाँले आर्जन गरेका विशेषता हुन् । त्यस्तै, नेपाली भाषा साहित्यमा गहिरो रुचि र कर्त्तव्यपरायणता एवम् असहाय र दीनदुःखीहरूप्रतिको सम्वेदनशीलतालाई सम्झँदा एउटै मान्छेमा पनि कति धेरै गुणहरू हुन सक्दारहेछन् भनेर म सधैं छक्क पर्छु । मेची बहुमुखी क्याम्पसमा पहिले चेला र पछि सहकर्मी भएर धेरै वर्षसम्म उहाँसँग नजिकिने सौभाग्य मैले प्राप्त गरेको छु ।

वि.सं. २०४० मा आई.ए. पढ्न मेची क्याम्पस भर्ना भएदेखि नै द्रोण सरलाई मैले नेपाली विषयको गुरुको रूपमा चिनेको हुँ । सरल र सहज भएरै होला, हामी अरु प्राध्यापकहरूको तुलनामा उहाँसँगै बढी झुम्मिन्थ्यौं । क्याम्पस प्रशासनप्रति केही शैक्षिक क्रियाकलाप तथा अतिरिक्त क्रियाकलाप सम्बन्धी सल्लाह, गुनासाहरू हामी उहाँमार्फत नै पुऱ्याउँथ्यौं । त्यसताका आई.ए.र बी.ए. पढ्दाको मेरो अनुभवमा अरु प्राध्यापकहरूको तुलनामा उहाँको कक्षा बढी मजाले जम्दथ्यो । त्यसबेला प्रायः सबै प्राध्यापकहरूले विद्यार्थीहरूलाई समेत तपाईं भनेर सम्बोधन गर्नु हुन्थ्यो, तर द्रोण सरले भने आफ्ना छात्र-छात्राहरूलाई सधैं तिमी भनेर सम्बोधन गर्दा उहाँ र विद्यार्थीहरूमा त्यति ठूलो र असजिलो खल्लोपन नरहेको नै महसूस भयो । हामी उहाँसँगै बढी झुम्मिन्थ्यौं र बढी सहज अनि सामीप्यता पनि महसूस गर्दथ्यौं ।

द्रोण सरको कक्षामा विद्यार्थीहरूलाई पढाउने आफ्नै ढंग-ढाँचा थियो ।

बी.ए.को कक्षामा उहाँसँग व्याकरण पढ्दाको स्मरण ३५/३६ वर्षपछि पनि आज मसँग ताजै छ । उहाँ कक्षामा पढाउनु हुन्थ्यो त सम्पूर्ण बलबुता, ज्ञान-विवेक र शक्ति लगाएर हँसिलो मुद्रामा विद्यार्थीमैत्री भई सरल सहज सीप सिकाइको तौर-तरिकाले पढाउनु हुन्थ्यो । रूप, शब्द, पदावली, वाक्यांश र वाक्यलाई जतिसक्दो शुद्ध र प्रष्ट उच्चारण गर्न उहाँ रुचाउनु हुन्थ्यो । उहाँको अलिक छिटो बोल्ने बानी भएकाले उहाँले उच्चारण गरेका केही शब्दहरू शुरुमा नबुझिए पनि स्वतःस्फूर्त तिनको बारम्बार उच्चारण गरेर व्याकरण बुझाउनमा उहाँ खप्पिस हुनुहुन्थ्यो । कक्षा सञ्चालनको बीच-बीचमा विद्यार्थीहरूलाई उठाएर प्रश्न सोध्ने गरे पनि विद्यार्थीले जवाफ फर्काउन नसक्दा कत्ति पनि लज्जित नपारी बरु उत्साह जगाउने हिसाबले आफैं सहजीकरण गर्नुहुन्थ्यो । विद्यार्थीहरूलाई रमाइलो पारेर हसाउँदै उत्तर खोज्ने र भनाउने उहाँको कौशल सारै लोभलाग्दो थियो । शायद त्यही भएर उहाँको कक्षामा तँछाड मछाड गर्दै हर्ष र उल्लासका साथ हामी सहभागी हुन्थ्यौं ।

मैले एम.ए. सकेर २०४९ सालमा मेची क्याम्पसमा सहायक प्राध्यापकका रूपमा नियुक्ति पाएपछि हामी गुरु-चेला अब सहकर्मीको भूमिकामा भयौं । क्याम्पसमा आफू नयाँ-नयाँ नियुक्त । सँगैमा मेरा अन्य गुरुहरू जस्तोः गणेश झा, चूडामणि रेग्मी, चिन्तामणि दाहाल, चित्रबहादुर श्रेष्ठ, उमानाथ ओली, कमलप्रसाद गुरागाईं आदि सबैजसो गुरुहरूले मलाई तपाईं भनेर नै सम्बोधन गर्नु भयो । द्रोण सरले चाहिं पहिलेझैं तिमी भनेरै सम्बोधन गर्दा मैले बढी खुशी, आत्मीयता र सामीप्यता अनुभव गरेको थिएँ । म भर्खर एम.ए. गरेर आएको मेची क्याम्पसमा नेपाली विषयको कान्छो प्राध्यापक, 'निकै जान्दछु' भन्ने घमण्ड पनि थियो क्यार ! आफू पुरुष भएकोले मेरो नामको देवीको 'वी'लाई शुरु-शुरुमा ह्रस्व वि (यसरी : देवि) लेख्थें । अरुलाई जस्तै यो कुरा द्रोण सरलाई पनि खट्किएको रहेछ । एक दिन साझा कोठामा गफ्फिरहेका बेला गुरुले नजिकै बोलाएर तिमी देवी भगवतीको प्रसाद भन्ने अर्थमा तिम्रो नाम देवीप्रसाद हो । त्यसकारण तिम्रो नाम देविप्रसाद होइन, देवीप्रसाद नै लेख्ने गर न भनी सल्लाह दिनुभयो । 'गुरुसँग कुतर्क नगर्नु भन्छन्' ठानेर मैले हवस्को मुद्रामा टाउको हल्लाएँ । त्यसयता यस विषयमा पहिलेझैं मैले कसैलाई पनि स्पष्टीकरण दिनु परेको छैन, गुरुकृपाले ।

द्रोण सरसँगका यस्ता रोचक संस्मरणात्मक घटना थुप्रै छन् । ती सबैलाई भन्ने ठाउँ यो होइन । तिनलाई समय परिस्थिति मिलाएर पस्किंदै गुरुदक्षिणास्वरूप

शब्दसुमनका श्रद्धाञ्जलि अर्पण गर्ने नै छु ।

द्रोण सर धेरै हदसम्म वरिष्ठ भाषाविद् तथा साहित्यकार चूडामणि रेग्मीसँग तुलनीय हुनुहुन्छ । यी दुबै गुरुहरू ज्येष्ठता, योग्यता र अनुभवले अलिक अग्रज पनि भएकाले मेची क्याम्पसको नेपाली विभागमा लामो समयसम्म अभिभावक भएर रहनुभयो । द्रोण सर पनि चूमरेजस्तै नेपाली साहित्य लगायत भाषाका समेत गहिरो अध्येता र ज्ञाता हुनुहुन्थ्यो । यो कुरा उहाँका रचनाहरूले पनि सिद्ध गरेकै छन् । चूमरेजस्तै द्रोण सर पनि साहित्यिक र शैक्षिक उन्नयनका अभियन्ता हुनुहुन्थ्यो । आफू मात्र खुसुखुसु गर्ने भन्दा उहाँ बारम्बार युवा सहकर्मी (हामी) लाई मात्र होइन, आफ्ना विद्यार्थीहरूलाई समेत अध्ययन गर्न, लेख्न र पत्रिका (विद्यार्थीहरूका मुखपत्र, भित्ते पत्रिका आदि) प्रकाशन गर्न अभिप्रेरित गरिरहनु हुन्थ्यो । त्यसैले उहाँ समाजका धेरै अग्रणी व्यक्तित्वहरू, शिक्षक, साहित्यकार, पत्रकार, सम्पादक आदिका प्रेरणाका स्रोत पनि हुनुहुन्छ ।

द्रोणकुमार उपाध्यायलाई राजवंशी एवम् सन्थालका भाषा र साहित्य अनि उनीहरूको सामाजिक/सांस्कृतिक परम्परा, रीतिरिवाज आदिको पनि विशेष ज्ञान र अनुभव थियो । असमिया भाषा र साहित्यका पनि गहन अध्येता र जानकार हुनुहुन्थ्यो । उहाँ पछिल्लो चरणमा विद्यावारिधि गरेसँगै नेपाली लोकसाहित्यका गहन चिन्तक र विश्लेषकका रूपमा क्रियाशील हुनुभयो । मेची क्याम्पसको शैक्षिक उन्नयनमा होस् कि, झापाली तथा समग्र नेपाली भाषा-साहित्यको श्रीवृद्धिमा होस् अथवा नेपाली लोकसाहित्यको अध्ययन-विश्लेषणमा होस्; उहाँले विविध क्षेत्र र संघ- संस्थाहरूमा थुप्रै काम गरेर जानुभएको छ । अन्तमा, उहाँले गर्नुभएका भाषा र साहित्य सम्बन्धी यस्ता सम्पूर्ण योगदानहरूको सूक्ष्म रूपमा खोज-अनुसन्धान तथा अध्ययन विश्लेषण र मूल्याङ्कन हुनु/गरिनु जरुरी छ । त्यसो हुँदा मात्र उहाँप्रति उचित न्याय र साँचो श्रद्धाञ्जलि भएको ठहर्ने छ । नेपाली शैक्षिक जगत एवम् भाषा र साहित्यका सरल, सौम्य तथा शिष्ट शिक्षक, साधक र सर्जक स्वर्गीय द्रोण सरप्रति भावपूर्ण श्रद्धाञ्जलि ।

*(लेखक गजलकार तथा मेची ब.क्याम्पस भद्रपुरका सहप्राध्यापक हुनुहुन्छ)*



डा. ढेवेन सापकोटा

# द्रोण उपाध्याय : ऐले झझल्को मात्र

केही गम्म परेको शरीर, पोटिलो अनुहार, उचाइ शायद साढे पाँच फिटको होला, सधैं प्रशन्नता छाएको मुहार, तर हाँसिदिंदा अझ जाज्वल्यमान हुने। मिष्ट र अल्पभाषी, विभिन्न पहिरनमा भेटिए पनि सेता कुर्ता-पाइजामामा धेरै सुहाउँदिलो देखिने, यिनै हुन् हाम्रा सबैका प्यारा द्रोण दाइ। उहाँ मेरा साइँला दाजु हिमसागर उपाध्यायका साढुदाइ। तर, मेरो र उहाँको छुट्टै दाइ-भाइको मधुर सम्पर्क थियो। म नेपाली साहित्यमा चासो राख्ने हुनाले उहासँग भेट हुँदा या फोनमा भाषा साहित्य संस्कृतिबारे बेलाबखत चर्चा भइरहन्थ्यो।

हाम्रो पहिलो भेट भएको थियो, अंग्रेजी १९८३ सन्‌को २२ नोभेम्बरका दिन। मेरो केटौले अवस्थादेखि नै तस्वीर खिच्ने शोख छ। आफ्नै दाजुको बिहेको दिन मलाई कसले भेट्ने ? उक्त दिनको बेलुकी सोलङको (शोणितपुर, असम) बाँध (माथाउरी) माथि उभ्याएर बेहुलालाई उहाँकै साढुदाजुको साथमा राखी विभिन्न भङ्गिमा नक्शा उतारेको थिएँ। ती अहिले कता-कता हराएर गएछन्। तर, त्यस दिन खिचेको उहाँको नक्शा मेरो मानसपटमा सदाका लागि रहिरहेको छ।

द्रोण दाइसँग सम्पर्कको मियो धेरै बलियो भएको थियो, मेरो नियात्रा 'यता हुँदा उताको झझल्को' लेख्ने सिलसिलामा। सन् २०१८ मा उहाँ केही दिनका लागि आफ्नो ससुराली गाउँ सोलङ आउनुभएको रहेछ। त्यतिबेला मेरो पुस्तकको खेस्रा पाण्डुलिपि प्रायः प्रस्तुत भइसकेको थियो। मैले फोनद्वारा सम्पर्क गरी उहासँग भेट हुने समय मिलाएँ। त्यसै बमोजिम मौका छोप्दै उहाँ समक्ष पुगेको थिएँ गुवाहाटीबाट सोझै। प्रायः दुई दिनसम्म (जुलाई २१-२२) सँगै बसी त्यो पाण्डुलिपिको प्रत्येक पन्ना पढ्दै सच्याएका थियौं। त्यतिबेला मैले नेपाली वाङ्मयबारे निकै कुरा सिक्ने मौका पाएँ। भाषा, साहित्य, संस्कृतिबारे रहेको उहाँको प्रगाढ ज्ञान थाहा पाएर म अभिभूत भएको थिएँ।

नेपाली साथै असमिया, हिन्दी, बङ्ला र अंग्रेजी भाषामा पनि उहाँको उत्ति नै

गहिरो ज्ञान रहेछ । त्यसको लगत्तै अर्को वर्ष पुस्तक प्रकाशित भयो । म जतिबेला पनि उक्त पुस्तक हातमा लिन्छु, त्यति नै बेला उहाँको स्मृति उजागर हुन्छ । सो पुस्तक सच्याउने क्रममा कतिपय मीठा शब्दका अलङ्कार उहाँले जोडी दिनुभएको थियो । यी शब्दबीच उहाँलाई म सजीव पाउँछु । यो पुस्तकले 'साहित्य प्रभात पुरस्कार' (२०२०) पाएको कुरा असम साहित्य सभाले घोषणा गरिसकेको छ । द्रोण दाइको वात्सल्य नपाएको भए यो पुस्तकले यत्रो दर्जा पाउने थियो जस्तो मलाई लाग्दैन ।

द्रोण दाइ नेपाल र भारत, दुई राष्ट्रबीच नेपाली भाषा साहित्य संस्कृतिको राजदूत जस्तो हुनुहुन्थ्यो । उहाँको निधनले नेपाली साहित्य जगतमा पूर्ति नहुनेगरी क्षति भएको छ। मृत्युबारे ऋषि अरविन्दले भन्नुभएको छ- Death is a pathway for immortality. अन्त्यमा, द्रोण दाइको दिवङ्गत आत्मालाई चिरशान्ति मिलोस्- ईश्वरसँग प्रार्थना गर्दछु ।

*खानापारा, गुवाहाटी (भारत)*

*(लेखक असम कृषि वि.वि.का प्राध्यापक हुनुहुन्छ)*



# वैदिक समाज नेपाल र डा.द्रोणकुमार उपाध्याय

द्रोण अधिकारी

वैदिक समाज नेपालको स्थापना २०६२ साल साउन १ गतेबाट भएको हो । यस संस्थाको स्थापना गर्ने सोच साविक चन्द्रगढी- ६, हाल भद्रपुर- १० केन्द्रमोड निवासी सामाजिक अगुवा स्वर्गीय दाताराम धिमिरेका पुत्ररत्न अमेरिका निवासी चेतनाथ घिमिरेको उत्प्रेरणाबाट भएको हो । पूर्वीय सभ्यताको उद्‌गमस्थल नेपाली भूमिमा जन्मने हरेक व्यक्तिले कम्तीमा ज्ञानको पहिलो स्रोत वेद विद्या बारेमा सामान्य भए पनि जानकारी पाउने स्रोत केन्द्र निर्माण हेतु वैदिक समाज झापाको नामबाट यस संस्थाको स्थापना गरिएको हो । सोही धारणा अनुरूप चेतनाथ घिमिरे नेपाल आएका बेला आफ्ना माता-पिता रहेको पुर्ख्यौली भूमि चन्द्रगढीमा आर्य सभ्यता संरक्षण गर्ने तथा प्राचीन ग्रन्थ वेद विद्या पढ्ने पढाउने सामाजिक संस्था निर्माण गर्ने अठोट पिताजीसित राखेपछि छोराको महान् कार्यलाई पूर्णता दिन स्वर्गीय दाताराम घिमिरेले शिक्षासेवी स्वर्गीय खडानन्द वाशिष्ठलाई रोज्न पुग्नुभयो ।

प्रज्ञा एकेडेमीका संस्थापक-प्रिन्सिपल वाशिष्ठ सरले घिमिरे परिवारको प्रस्ताव अनुसारका कार्य गर्न सक्षम व्यक्तिका रूपमा मेची बहुमुखी क्याम्पसका सहप्राध्यापक डा. द्रोणकुमार उपाध्यायलाई जिम्मेवारी सुम्पने प्रस्ताव गरेपछि घिमिरे परिवारले २०६२ साउन १ गते शनिबारदेखि साप्ताहिक साधना गर्ने गरी वैदिक समाजको नेतृत्व डा. उपाध्यायको काँधमा सुम्पेको थियो । उपाध्यायले वैदिक समाजलाई चलायमान संस्थाका रूपमा अगाडि बढाउन सल्लाहकार संयोजकमा खडानन्द वाशिष्ठलाई अगाडि राखेर उपाध्यक्षको जिम्मेवारी दाताराम घिमिरे, सचिव चन्द्रकुमार सुवेदी, सहसचिव उदयदेव आचार्य र कोषाध्यक्ष शालिग्राम आचार्यलाई कार्य बाँडफाँड गरी दीपेन्द्र भट्टराई, द्रोण अधिकारी, किशोर बाँस्तोला, रवीन राई, पुष्पराज काफ्ले, शौरभ पोखरेल, डेञ्जनी आचार्य, राजेश ढकाल, श्रीमती देवी आचार्य, विनोद खतिवडा, पदम दाहाल सदस्य रहनेगरी झण्डै चार वर्ष कानूनी रूपमा बैधानिक संस्था नभइकन सामाजिक अभियान सञ्चालनमा ल्याउनुभएको थियो ।

प्राचीन आर्य सभ्यता अनुकुल ऋषिमुनिहरूले वेद विद्याका आधारमा गर्ने यज्ञ कर्म तथा पठनपाठनको कार्य साप्ताहिक रूपमा हरेक शनिवार गरिने यस संस्थाले बालबालिका लक्षित कार्य अगाडि बढाइरहेको छ। खास गरी हिन्दु धर्म मान्नेहरूको मौलिक सभ्यताप्रतिको खच्कँदो अवस्था अन्त्य गर्न यस संस्थाले प्राचीन सभ्यताको संरक्षण गर्न प्रेरित गर्दछ। ऋषिकर्मलाई प्रयोगात्मक रूपमा बालबालिका सहभागी गराएर अघि बढाउँछ। यसले गर्दै गरेका कामहरूले कहिलेकाहीं हाम्रो समाजमा नयाँ काम भनेर आलोचना पनि खप्नु परेको छ। विशेष गरी कर्मकाण्ड गर्ने ब्राम्हणहरूले यस संस्थाको कार्यलाई समाज विरोधी काम भनेर अफावह फैलाउने समेत गरिरहे तर डा. उपाध्यायको नेतृत्व टोलीले वैदिक विधिको वैज्ञानिकता प्रमाणित गरेर वास्तविक कर्मको स्थान निर्माण गर्न झण्डै एक दशक संघर्ष गर्नु परेको थियो।

वैधानिक रूपमा वैदिक समाज नेपालको दर्ता जिल्ला प्रशासन कार्यालय-झापामा २०६६ साल असोजमा भएको हो। सामाजिक संस्थाका रूपमा दर्ता भएको यस संस्थाले हिन्दू धर्मग्रन्थ वेदको अध्ययन/अध्यापन गर्नेगरी सामाजिक जागरणको जिम्मेवारी पाएको छ। संस्थापक-अध्यक्षको रूपमा रहनुभएका डा. द्रोणकुमार उपाध्यायले वैदिक समाज झापालाई वैदिक आचरण निर्माण गर्ने सामाजिक संस्थाका रूपमा अगाडि बढाउन भूमिका निर्माण गरिरहनु भयो। शुरूमा दुई वर्षे कार्यकाल मात्र राखिएको यस संस्थाको कार्यकाल पनि चार वर्षे बनाइयो। यसमा उहाँले सम्पूर्ण समय सकुशल नेतृत्व दिनुभएको थियो। संस्था स्थापनाको १५ वर्षे अवधिमध्ये दश वर्षको समय डा. उपाध्याय वैदिक समाजको मूल खम्बाका रूपमा रहनुभयो। पछिल्लो कार्यभारको अन्तिम समयसम्म कुशल नेतृत्व दिइरहनु भएको अध्यक्ष पौडेलले निधन हुनुभन्दा अघिल्लो दिनसम्म संस्थाको काम गरिरहनु भएको थियो। त्यस समयमा बिरामी भए पनि अध्यक्षको दायित्व बिर्सनु भएन। उहाँले संस्थाको कार्यालयमा शौचालय तथा स्नान गृह निर्माण भइरहेको अवधिमा समेत रेखदेख गरिरहनु भयो।

पछिल्लो कालखण्डमा अध्यक्ष पौडेलको निकट सहयोगी भएर मैले पनि सामाजिक अभियानमा सहभागी हुने अवसर वैदिक समाज मार्फत प्राप्त गरें। खासगरी अघिल्ला समितिमा रहेका अधिकांशले यस संस्थालाई छोडेर गएपछि म (द्रोण अधिकारी), मीना घिमिरे पराजुली, उद्धवप्रसाद पराजुली हाम्रै शिष्यहरू पुरुषोत्तम कार्की, प्रवीन अधिकारी, अश्विन खनाल, प्रणव भट्टराई लगायतले अध्यक्ष पौडेललाई सहयोग गरिरहेका थियौं। यस संस्थाको उद्देश्य अनुरूप

हिन्दुत्वभित्रका नकारात्मक पक्ष सुधार गर्दै आदिम ग्रन्थ वेदको भावना अनुकूल जडिबुटीमिश्रित यज्ञकर्म हवन गर्ने, वेदका ऋचा अध्ययन गर्ने, गराउने कार्य निरन्तर गर्दै आएका छौं । भविष्यका आधार बालबालिकालाई साप्ताहिक साधना मार्फत हरेक शनिबार संस्कार विधि तथा वेदका ऋचा अध्ययनको कर्म अगाडि बढाइरहेका छौं । तर, विश्वव्यापी महामारीको रूपमा कोरोना संक्रमण नेपालमा पनि प्रवेश भएपछि २०७६ चैत्र दोस्रो साताबाट १५ वर्षयता निरन्तर चलिरहेको साप्ताहिक साधना बन्द भएको छ। यो महामारीको अन्त्यपछि संस्थाको मूल उद्देश्य पूर्तिका लागि हामी जिम्मेवार व्यक्ति तयारी अवस्थामा रहेका छौं । 'छोरीले वेद पढ्नु हुँदैन, छोरीको ब्रतबन्ध गर्नु हुँदैन' भन्ने सामाजिक अन्धविश्वास हटाउन स्थापनाकालदेखि नै वैदिक समाजले काम गरिरह्यो। यस संस्थामा दर्जनौं छोरीहरू वेद पढ्न आइरहेका छन् । कतिपयको ब्रतबन्ध पनि भएको छ । पहिला-पहिला यस्ता कार्य आलोचना गर्नेहरूलाई बाटो भयो, तर पछिल्लो समय सबैले बुझ्दै गए । रुढीवादको जालोमा रहेको समाज रूपान्तरणका लागि वैदिक समाज सानो इँटा जोड्दै अगाडि बढ्न सफल भयो । यस महान् कार्यको पहिलो जश अध्यक्ष पौडेलसित नै गाँसिएको छ ।

२०७६ बैशाखदेखि २०७७ बैशाखसम्म आइपुग्दा वैदिक समाज नेपालले संस्थाका तीन हस्तीलाई गुमाएको छ। संस्थालाई वैधानिक रूपमा लैजान महत्वपूर्ण भूमिका निभाउनुभएका उदयदेव आचार्य, संस्थाका केन्द्रविन्दु रहनुभएका अध्यक्ष डा. द्रोणकुमार पौडेल र तन मन एवम् धन खर्चिएर दाताराम घिमिरेले वैदिक समाजको लालनपालनमा महत्धवपूर्ण भूमिका निर्वाह गर्नुभएको थियो । यी तीन व्यक्तित्वको यस संस्थाको गरिमा निर्माणमा अविस्मरणीय योगदान छ । उहाँहरूलाई भौतिक रूपमा गुमाउनु परे पनि कर्मवीर उहाँहरूको योगदानलाई पछिल्लो पुस्ताको दायित्वका रूपमा बोकेका हामीले बिर्सन सक्ने छैनौं । आर्यव्रत राज्यका हामी नेपालीले पूर्वीय ज्ञानको ज्योति वेद विद्या अध्ययन-अध्यापनको वातावरण निर्माणमा वैदिक समाज नेपाल लागिरहने छ। यस संस्थाले जातीय विभेद अन्त्य गर्दै छोरा र छोरीबीचको विभेद हटाउन भूमिका निर्वाह गरिरहेको छ। अध्यक्ष पौडेलको सपना पनि यही नै हो कि समाजमा धर्मका नाममा भइरहेका जातीय विभेद तथा छोरा-छोरीबीचको भेदभाव अन्त्य गराउन वैदिक समाजले नेतृत्व लिइरहोस् । हाम्रो समाजले पनि यस अभियानमा साथ दिन सकोस् भन्ने वैदिक समाज नेपालको चाहना छ ।

*2-06-2020*

*(लेखक पत्रकार तथा वैदिक समाज नेपाल भद्रपुरको सचिव हुनुहुन्छ)*



नरेन्द्र खतिवडा

# डा.द्रोणकुमार उपाध्याय सरसँग मेरो १ वर्षे काठमाडौं बसाइ

समय : २०४८ साल

द्रोण सर झापा मेची क्याम्पसबाट पद्मकन्या क्याम्पस सरुवा भई काठमाण्डौ जाने क्रममै म पनि सरकारी नोकरीको सिलसिलामा सर्वोच्च अदालत पोष्टिङ भएको बेला संयोगवश मैले र द्रोण सरले मैतीदेवीस्थित एउटै घरमा डेरा लिन पुगेछौं । त्यसपश्चात उक्त घरमा बस्न केही कठिनाइ भई डेरा सर्ने निर्णय लिई डिल्लीबजारस्थित अर्याल थरका व्यक्तिको घरमा संयुक्त १ तलामा द्रोण सरको अभिभावकत्वमा मेरो परिवार, धुलाबारी निवासी श्रद्धेय श्री लीलाप्रसाद सापकोटाज्यूका दुई छोरी अञ्जु र रञ्जु समेत रहनेगरी डेरा बस्ने निधो गरियो ।

विडम्बना... त्यस घरमा सर्नु अघि सबै जनाले सामान प्याक गरेपछि द्रोण सर र म सरसफाईका लागि त्यस घरमा गयौं । त्यस घरका घरधनीले पहिले निधो गरे पनि हामीलाई झापाली भएको नाताले 'हामी हाम्रो घर तपाईंहरूलाई दिन असमर्थ छौं' भन्दा हामी साह्रै अप्ठ्यारोमा पऱ्यौं । हामी सबैले पहिलाको डेरा छोडी सामान प्याक गरी ठेलामा लोड गरिसकेको अवस्था थियो ।

त्यसपछि द्रोण सरले घरबेटीसँग धेरै अनुनय विनय गर्दा पनि डेरा दिने अवस्थामा रहनु भएन । अनि मैले जिल्ला प्रशासन कार्यालय-काठमाण्डौमा उजुरी गर्नुपर्ने तयारी गरेको कुरा अवगत गराएँ । त्यसपछि घरबेटी अलिक डराउनुभयो र उहाँले 'यत्रो संख्यामा हजुरहरू हाम्रो घरमा बस्ने सबै आफ्नै परिवार हो ?' भनी सोध्नुभयो । द्रोण सरले 'यहाँ बस्ने सबै मेरा छोरा-छोरी, बुहारी र नाति-नातिनाहरू हुन्' भन्नुभयो भने छिमेकी हाम्रा दिदी-भिनाजु खगप्रसाद नेपाल र पार्वती नेपालज्यूको पहलमा बल्ल त्यो घरमा बास पाइयो । त्यस दिनदेखि द्रोण सरले हाम्रो अभिभावकको भूमिका निर्वाह गर्नुभयो । उहाँको संरक्षणमा हामी १ वर्ष काठमाण्डौमा सँगै बस्यौं । त्यसपछि उहाँ पुनः सरुवा भई मेची क्याम्पस रवाना हुनुभयो ।

अलिक फरक घटना । त्यहाँ बस्ने क्रममा सरका परिवार काठमाण्डौ घुम्ने क्रममा दिदी, द्रोण सरकी श्रीमती), छोरी योगिता र यवनिका आउनुभयो । छोरा यशवन्त शुरुदेखि नै सँगै थिए । एक दिन दिदी र जेठी छोरी योगिता बजार घुम्ने निधो गरी कान्छी छोरी यवनिका हामी सँगै छाडेर जाने क्रममा कान्छी छोरीले आमा र दिदीसँगै जाने भनी भाँडभैलो गरिन् । त्यसबेला उनी आठ वर्षकी मात्र थिइन् । उनलाई कोठामा थुन्न हामी बाध्य भयौं । त्यो घटनाले यवनिका मेरो नजरमा कहिल्यै परिनन् रिसले । साह्रै रिसाइन् मसँग, धेरै समयसम्म । सानैको त्यो घटनाले ठूलो हुँदासम्म असर पर्दोरहेछ । झापा आउँदा म सरसँग भेट गर्न जाँदा यवनिका लाजले लुक्थिन् । यो रोचक घटना मात्र हो, पछि त सरल भयो ।

यो भयो सरसँगको सामीप्यताको कथा ।

म लामो अवधि सरकारी नोकरीको सिलसिलामा बाहिरी जिल्ला रहँदारहँदै पछिल्लो समय म पनि झापा सरुवा भएर आएँ । त्यसपछि सरसँग भेट हुन्थ्यो । रामनाथ बाँस्कोटा भिनाजु र द्रोण सर बेलुका हिंडडुल गर्ने क्रममा म पनि यसो उहाँहरूको पछि लाग्थें । रामनाथ भिनाजु बिरामी अवस्थामा हुनुहुन्थ्यो । उहाँको संरक्षणमा द्रोण सरको ठूलो भूमिका रहेको अनुभव हामीले महसूस गरेका छौं ।

विडम्बना... रामनाथ भिनाजुको अमेरिकामा नै दुःखद निधन भयो । स्वस्थ र हट्टाकट्टा देखिनुहुने द्रोण सर पनि यति चाँडै जानुहुन्छ भन्ने हामीले कल्पनासम्म गरेका थिएनौं । तर, विधिको विडम्बना, विश्वासै नलाग्ने कुरा भयो । जुन कुराले मलाई अहिले पनि झसङ्ग पार्छ । मेरा भिनाजु खडानन्द वाशिष्ठज्यू लामो समय बिरामी भई अवसान हुनुभयो । मेरा प्रिय गुरु एवम् अभिभावक हामीसँग प्रिय हुँदाहुँदै चटक्क छोडेर जानुभयो ।

मेरा र हाम्रा गुरु तथा अभिभावक द्रोण सरप्रति हार्दिक श्रद्धाञ्जलि समर्पण गर्दै यही अवसरमा हाम्रा अभिभावक द्रोण सरका सहपाठी आदरणीय खडानन्द वाशिष्ठ तथा रामनाथ बाँस्कोटाज्यूप्रति पनि हार्दिक श्रद्धाञ्जलि... !

*मैत्रीटोल, भद्रपुर-१०*

*(लेखक निजामती सेवाका निवृत्त लेखा अधिकृत हुनुहुन्छ)*



नवराज घिमिरे

# डा.द्रोणकुमार उपाध्याय पौडेललाई सम्झँदा

२०५० साल असोज २२ गते लेखनाथ पुस्तकालयका सभापति निर्वाचित भएपछि मैले द्रोणकुमार उपाध्याय पौडेललाई चिनेको हुँ । गहुँगोरो रातो वर्णका मझौला कदका धनी पौडेल अबीर र मालाले होला, गुलाब फक्रिएझैं मुसुक्क मुस्कुराउँदा वातावरण नै रोमाञ्चित भएको थियो । त्यो बेला चिनेको मैले सधैं मुस्कुराएकै अवस्थामा देखिरहें । मेरा अगाडि रिसाएको, झ्वाँक्किएको, उदास भएको अवस्थामा कहिल्यै पाइन । अन्तिम अवस्था हुनु ३ महिना अघि म र होम सुवेदी उहाँ बिरामी हुनुहुन्छ, भनेको सुनेर भेट्न गयौं । तर, उहाँले 'आफू बिरामी परेको होइन, केही असहज मात्र भएको' भन्ने जानकारी गराउनुभयो ! संजोग के भयो भने, त्यही बेला छोरा यशवन्त बुहारी परिना, छोरीहरू योगिता र यवनिका ज्वाइँ पंकज भूर्तेलसँग चिनाजानी भयो । म द्रोण सर र मीरा गुरुमालाई मात्र चिन्थें । द्रोण सर केही भएको छैन भन्नुहुन्थ्यो, तर माहौल भने सिकिस्त बिरामीको थियो !

वि.सं.२००६ मा पिता टीकाराम माता भेजमायाका पुत्रका रूपमा भारत असमको बिहाली बटियामारीमा जन्म भई असममै अध्ययन गरी ई.सं. १९६७ मा एस्.एल.सी, १९६८ मा गुवाहाटी विश्वविद्यालयबाट आई.ए. र १९७१ मा बी.ए. उत्तीर्ण गरे तापनि उनले १९७३ मा त्रिभुवन विश्वविद्यालयबाट नेपाली विषयमा एम्.ए. र २००४ मा उत्तरबङ्ग विश्वविद्यालयबाट 'नेपाली सवाई'मा विद्यावारिधि प्राप्त गरेका हुन् ।

उच्च माध्यमिक विद्यालयमा अध्यापन गराउँदै अध्ययन गर्दै संघर्षरत १० वर्ष बिताएका डा.द्रोण काँडाको टुप्पोमा फूलेको फूल झैं लाग्दछन् । पीडा आफू व्यहोर्ने र सुखानुभूति अरुलाई गराउने उनको अब्बल दर्जाको बानी थियो ।

पहिलोपटक २०३८ सालदेखि २०४७ सालसम्म मेची बहुमुखी क्याम्पसमा र दोस्रोपटक २०५० सालदेखि २०६९ सालसम्म अध्यापन गराउँदा २०४३

सालदेखि २ वर्षसम्म सहायक क्याम्पस-प्रमुख र तीन वर्ष उनले नेपाली विभागको प्रमुखको भूमिका निर्वाह गरेका थिए। २०४८/४९मा भने उनले पद्मकन्या क्याम्पस काठमाडौंमा अध्यापन गरे।

अध्ययन, अध्यापन र लेखनलाई सँगसँगै डोऱ्याउने डा.द्रोण सरको एकल ७ कृति र सहलेखनका २ कृति छन्। उनको अन्तिम कृति 'लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ' नेपाल प्रज्ञा प्रतिष्ठान, काठमाडौंले २०७४ मा प्रकाशित गरेको छ। उनका रचनाहरू नेपाली र असमिया भाषामा प्रकाशित छन्। हुन त उनी नेपाली, अंग्रेजी, संस्कृत, हिन्दी, बाङ्ला, असमिया, राजवंशी भाषाका ज्ञाता थिए। उनका लेख-रचनाहरू भाषिक अनुसन्धान, जातीय अनुसन्धान र समालोचनाहरूले नेपाली साहित्य भण्डारमा ठाउँ ओगटेको छ।

२०५० सालदेखि २०५६ सालसम्म लेखनाथ पुस्तकालयको नेतृत्व २ कार्यकाल सम्हालेका भए पनि उनको संलग्नता पुस्तकालयमा सधैं रहिरह्यो। बिरामी भई अशक्त भएपछि मात्र सल्लाहकारको पदबाट मुक्ति पाएर पुस्तकालयका संरक्षक सदस्य रहिरहे। लेखनाथ पुस्तकालयले आयोजना गरेका गोष्ठी, भेला, उत्सवमा उनको महत्वपूर्ण योगदान थियो। विषयगत विषयमा प्रवचन, विचार-गोष्ठी आदिमा उनको प्रमुख भूमिका हुन्थ्यो। प्रतियोगितात्मक कविता गोष्ठी, निबन्ध, प्रवचन आदिमा उनको निर्णायक भूमिका रहन्थ्यो।

एक गोष्ठीमा डा.द्रोण, चूडामणि रेग्मी र म निर्णायक रहेका थियौं। तीन जनाले दिएको प्रत्याशीको अंक समान देखिंदा मैले आफ्नो विचार यी २ महारथीहरूसँग मिल्दोजुल्दो पाएको सम्झना अझै ताजै छ।

साहित्य क्षेत्रमा मात्र होइन, भाषा र अनुसन्धानका क्षेत्रमा पनि सफलता हासिल गरेका डा.द्रोणकुमार सरलाई १० जना पूर्वसभापतिका साथमा पनि लेखनाथ पुस्तकालयले २०७१ साल चैत २८ मा सम्मान गऱ्यो। यो बाहेक पनि उनी १२ वटा सम्मान र कदरपत्रले विभूषित भएको देखिन्छ। देवकोटा स्मारक संरक्षण समितिमा स्थापित मनोरथ दाहाल काव्य पुरस्कारका लागि प्रतिभा छनौट गर्न उक्त समितिले होम सुवेदी, चूडामणि वशिष्ठ र मलाई जिम्मेवारी दिएकोले झापाको चन्द्रगढीमा बसी काव्य सिर्जना गरी नेपाली साहित्यको श्रीवृद्धिमा योगदान पुऱ्याएवापत डा.द्रोणलाई हामीले सिफारिश गऱ्यौं। फलतः २० हजार नगद सहित २०७६ सालको देवकोटा जयन्तीमा 'मनोरथ दाहाल काव्य पुरस्कार'बाट समेत उनी अन्तिम साहित्यिक सम्मान पनि बन्न पुगे। मरणोपरान्त

सम्मानित हुने सम्भावना पनि बाँकी नै छ ।

साहित्यिक, सांस्कृतिक र भाषिक मात्र नभएर उनको सामाजिक सेवा पनि उत्तिकै उज्यालो छ । 'संस्कृतिबाट युवाहरू विमुख नहुन्' भनी चेतना फैलाउने चेतना समूह आफ्ना वैदिक सनातन धर्म परम्परालाई जीवित राख्ने वैदिक मातृभूमि स्वयम्सेवक संघ, हिन्दू स्वयम्सेवक संघ, वंश प्रकाशन समिति, मन्दिर व्यवस्थापनका सदस्य रहेर डा.द्रोणले समाजसेवा गरेको पाइन्छ ।

'आर्थिक उन्नतिमा निकास हुँदैन' भन्ने मान्यता राख्ने डा.द्रोण विभिन्न सहकारीमा, साना किसान समूहमा, प्रज्ञा एकाडेमी र पूर्वाञ्चल उच्च मा.वि.को संस्थापक-सदस्य रहेको पाइन्छ । शैक्षिक उन्नति र आर्थिक समृद्धिका द्योतक निजी विद्यालयको अहिलेको बेहाल भने उनले ब्यहोर्नु परेन ।

एक छोरा र दुई छोरीको जोडी मात्र उनले बाँधी दिएनन्; नाति-नातिनाको तोतेबोली र ज्वाइँहरूको पूर्ण आदर अनि बुहारीको सेवा पनि प्राप्त गरेर आनन्दका साथ परमधाम गमनको छिटो तयारीमा लागेका डा.द्रोण निरामिष थिए । हिंसा हुन्छ भनेर गाईको दूध पनि खाँदैन थिए । यस्ता ज्ञानी पुरुषसँग लामो संसर्ग गर्ने मन त थियो, तर समयले साथ दिएन । आजलाई यत्ति नै । उनको आत्माले चिरशान्ति प्राप्त गरोस्, यही कामना छ ।

*२०७७/५/२२*

*(लेखक लेखनाथ पुस्तकालय चन्द्रगढी भद्रपुरका अध्यक्ष हुनुहुन्छ)*



नारायणप्रसाद ढकाल

# धर्म, संस्कृति शैक्षिक एवम् सामाजिक व्यक्तित्वका रूपमा डा. द्रोण पौडेल

असमको विहाली, वटियामारी, असममा वि.सं. २००६/०३/०५ मा जन्मिनुभएका द्रोण पौडेलज्यूलाई पहिलो पटक चन्द्रगढीमा नै भेट्ने संयोग मिलेको थियो । विशेषगरी सामाजिक कार्यको सिलसिलामा म चन्द्रगढी पुगेको थिएँ । चन्द्रगढीमा युवाहरूलाई व्यक्तित्व तथा नेतृत्व विकास, राष्ट्रियता, अनुशासन लगायतका विषयमा प्रशिक्षण दिने कार्यक्रमको नमूना मा.वि.मा भएको थियो । कार्यक्रममा प्रमुख अतिथि कसलाई बोलाउँदा राम्रो होला भनेर हामी त्यहाँका स्थानीय कार्यकर्ताहरूसँग चर्चा गरिरहँदा हामी दलगत राजनीतिभन्दा माथि रहेर कार्य गर्ने सामाजिक विद्यार्थी संगठनका भएकाले कुनै शिक्षकभन्दा समाजका असल शैक्षिक र बौद्धिक व्यक्तित्वलाई आमन्त्रण गर्ने प्रयास रहन्थ्यो र सोही क्रममा हामीले उहाँलाई त्यस कार्यक्रममा प्रमुख अतिथिका रूपमा उपस्थित भइदिन हुन आग्रह गर्‍यौं । बौद्धिक व्यक्तित्व भएकाले हाम्रो बारेमा पनि उहाँलाई पूर्वजानकारी थियो । त्यसैले निमन्त्रणालाई स्वीकार गरी कार्यक्रममा आउनुभयो, उहाँका भनाइहरू हामी र त्यस कार्यक्रममा आएका विद्यार्थी साथीहरूलाई पनि राम्रो लाग्यो । हाम्रो विचार पनि मिलेको अनुभूति भयो । कार्यक्रमको समापनमा हामीले समिति निर्माण गर्नुपर्ने भएकोले उहाँलाई सल्लाहकारमा बसिदिन आग्रह गर्‍यौं । त्यसलाई पनि उहाँले सहज रूपमा स्वीकार गर्नुभयो । त्यसपछाडि उहाँसँग हाम्रो निरन्तर सम्पर्क एवम् सम्वाद भइरह्यो । घरमा पनि आउने-जाने क्रम चलिरह्यो । समाज र जीवनका अनेक विषयमा हाम्रो घण्टौं चर्चा हुने गर्दथ्यो । उहाँको सरल, संस्कारित र बौद्धिक व्यक्तित्वले चन्द्रगढी जाँदा बसेर भलाकुसारी गर्दा आनन्दको अनुभूति हुने गर्दथ्यो । संगठनको कार्यमा प्रत्यक्ष रूपमा उहाँ सक्रिय भूमिकामा नरहे तापनि हाम्रो (प्राज्ञिक विद्यार्थी परिषद्, नेपाल) जस्तो कार्यपद्धति, संरचनामा रहेर कार्य गर्ने सामाजिक संगठनको मर्म, आवश्यकता, कार्यकर्ताको भाव र विचार बुझ्नसक्ने अद्‌भुत क्षमता निरन्तरको झापा बसाइका क्रममा हामीले उहाँमा पाउँथ्यौं । हामी लगायतका युवा वर्गलाई संगठन एवम् सामाजिक कार्यका लागि निरन्तर प्रेरणा र हौसला प्रदान

गर्ने, संगठन कार्य एवम् गतिविधिका बारेमा विस्तृत जानकारी लिने साथै समग्र कार्यकर्ताको स्थितिका बारेमा चासो र जिज्ञासा सदैव उहाँमा पाउन सकिन्थ्यो ।

उहाँको बाल्यकालको संस्कार एवम् वातावरण, उचित शिक्षा र उच्च विचारको कारण नै सदैव समाजका लागि केही गर्नु पर्दछ भन्ने भावका साथ जीवनको उत्तरार्द्धमा समेत शारीरिक अस्वस्थताका अवस्थामा पनि सक्रिय रहिरहेको प्रत्यक्ष अनुभव हामीले गरिरहेका हुन्थ्यौं । बालबालिकामा अनुशासन, संस्कार, असल चरित्र र राष्ट्रिय भाव दिन सक्यौं भने आगामी दिनहरूमा देशले असल नेतृत्व प्राप्त गर्न सक्दछ भन्ने भावका साथ सदैव बालबालिकाको क्षेत्रमा सक्रिय, गुरुकुल निर्माण तथा विस्तारको क्षेत्रमा एवम् आध्यात्मिक जागरण तथा धार्मिक कार्यमा समेत उहाँ अहोरात्र सक्रिय रहनुभयो । परिणामस्वरूप उहाँको सक्रियता, प्रेरणा र सहभागितामा झापामा अनेकौं सामाजिक, शैक्षिक एवम् सांस्कृतिक संस्थाहरूको स्थापना, विकास, विस्तार र संरक्षण हुन सकेको छ । समाजमा सदैव असल व्यक्ति निर्माणका लागि उहाँले शिक्षा क्षेत्रमा रहँदा एवम् शिक्षण पेशाबाट अवकाश प्राप्त पश्चात् पनि सदैव सक्रिय रहिरहनु भयो । देशको शिक्षा क्षेत्रको सकारात्मक परिवर्तन, नेपालको मौलिक धर्म संस्कृति र परम्पराको संरक्षण एवम् सम्बर्द्धनका लागि सदैव उहाँ चिन्तनशील रहनु हुन्थ्यो । हामी युवा वर्गलाई पनि सदैव देशको मौलिकता, इतिहास, भूगोल र संस्कृतिको अध्ययन एवम् जानकारीका लागि प्रेरणा प्रदान गरिरहनु हुन्थ्यो । चन्द्रगढीमा यदि स्वतन्त्र, सामाजिक, बौद्धिक एवम् आध्यात्मिक व्यक्तित्वका बारेमा जानकारी खोज्दा उहाँ नै त्यस्तो व्यक्तिका रूपमा रहनुभएको हामीले पटक-पटक अनुभूति गर्ने अवसर पाएका छौं ।

उहाँको स्वर्गारोहणले झापा जिल्लाले मात्र नभएर समग्र राष्ट्रले एक कुशल सामाजिक व्यक्तित्व, असल अभिभावक एवम् मार्गदर्शक, बौद्धिक तथा आध्यात्मिक व्यक्तित्व गुमाएको हामीले महसूस गरेका छौं भने समग्र चन्द्रगढी क्षेत्रले पनि गरिरहेको छ । उहाँले जीवनमा गरेका कार्य, प्राप्त गरेका उपलब्धि र सफलता सबैका लागि प्रेरणादायी, अनुकरणीय र स्मरणीय बनिरहने छन् र बनिरहनु् । उहाँको व्यक्तित्व एवम् छवि सदैव मानसपटलमा एक स्मृतिको रूपमा सदैव रहिरहनेछ । त्यस्ता पुण्यात्माको पूर्ण शान्तिको कामनासहित उहाँका सन्ततिमा सदैव उहाँको आदर्श र प्रेरणा प्राप्त भइरहोस्- श्री भगवान् पशुपतिनाथसँग प्रार्थना सहित पुनः आदरणीय व्यक्तित्व डा. द्रोण पौडेलज्यूप्रति भावपूर्ण श्रद्धाञ्जलि ।

ॐ शान्तिः ॐ शान्तिः ॐ शान्तिः

*- राष्ट्रिय संगठन सचिव (प्राज्ञिक विद्यार्थी परिषद्, नेपाल)*



नीलमणि नेपाल

# सम्झनामा स्व.द्रोणकुमार उपाध्याय

डा.द्रोणकुमार उपाध्याय पौडेल प्रवासमा जन्मिएर नेपालको झापा जिल्लालाई कर्मथलो बनाउने भाषा र साहित्यको क्षेत्रमा ख्यातिप्राप्त एक नेपाली हुनुहुन्थ्यो । उहाँका पूर्खा पूर्वी नेपालको भोजपुर जिल्लामा पर्ने आवाल ब्रह्मचारी षडानन्द अधिकारीको जन्मथलो दिङ्लाको गडीगाउँबाट जीवन निर्वाहको क्रममा भारतको असममा गई बसेकाले उहाँको जन्म असममै वि.सं. २००६ सालमा भएको र वि.सं.२०२८ सम्म उतै रही बी.ए.सम्मको अध्ययन सकेको देखिन्छ। नेपाल प्रवेश गरी नेपालको त्रि.वि.बाट नेपालीमा एम.ए.उत्तीर्ण गरी अध्यापन पेशाबाट जीवनयापन गर्दै भारतको उत्तरबङ्ग विश्वविद्यालयबाट पीएचडी. गर्नुभएको देखिन्छ । जीवनपर्यन्त अध्यापन पेशामा आबद्ध रही विभिन्न सामाजिक संघ-संस्थामा सेवारत् रहँदै विशेषतः भाषा र साहित्यको क्षेत्रमा आफ्नो छुट्टै परिचय दिन सफल पौडेलजीका विभिन्न भाषा र साहित्य सम्बन्धी कृतिहरू प्रकाशित छन् ।

असमका स्कूलहरूमा र झापाका उच्च मा.वि.तथा मेची बहुमुखी क्याम्पसमा धेरै समय अध्यापन गराउनु हुने उहाँले केही समय काठमाडौंको पद्मकन्या क्याम्पसमा पनि अध्यापन गर्नुभएको थियो । भनिन्छ, उहाँ ६/७ भाषाको राम्रो ज्ञाता हुनुहुन्थ्यो । मसँग उहाँको धेरै भेटघाट भएन, तर तत्कालीन लेखनाथ वाचनालय तथा पुस्तकालय चन्द्रगढीमा फाट्टफुट्ट यस क्षेत्रमा हुने साहित्यिक र धार्मिक कार्यक्रमहरूमा भेट हुन्थ्यो । लेखनाथ पुस्तकालयले गर्ने प्रतियोगितात्मक साहित्यिक कार्यक्रममा निर्विवाद निर्णय दिन सक्षम उहाँलाई प्रायशः निर्णायक मण्डलमा राखिन्थ्यो र त्यो काम अप्ठेरो नमानी सधैं सम्पन्न गर्नु हुन्थ्यो ।

केही समय उहाँ लेखनाथ वाचनालय तथा पुस्तकालयको सञ्चालक समितिको अध्यक्ष पदमा रहनुभएको थियो भने धेरै समय सल्लाहकार मण्डलमा रही पुस्तकालयको विकासमा अन्तसम्म सहयोग पुऱ्याइरहनु भएको थियो । उहाँको कूल परम्परा वैदिक सनातन धर्म मान्दथ्यो र उहाँ पनि मैले बुझेसम्म जीवनको उत्तरार्द्धको

प्रारम्भसम्म त्यही परम्पराका अनुयायी हुनुहुन्थ्यो । धार्मिक कार्यक्रमहरूमा भेट हुँदा कहिलेकाहीं छलफल पनि हुन्थ्यो । आस्तिक प्रकृतिको उहाँ मबाट “अष्टावक्र गीता”आदि धार्मिक पुस्तकहरू अध्ययन गर्न लाने, ल्याउने गर्नु हुन्थ्यो ।

जीवनको अन्ततिर उहाँ आर्य समाज प्रवेश गरी जिल्ला अध्यक्ष पनि हुनुभएको थियो रे..! ‘शरीर मरे पनि आत्मा मर्दैन र त्यो आत्माले केही इच्छाका साथै सद् गतिको कामनाले शास्त्र निर्दिष्ट धार्मिक कर्म मेरो निम्ति गरिदिउन् भन्ने चाहन्छ’ भन्ने मान्यता बोकेको सनातन धर्मबाट “भष्मान्तम् शरीरम्” शरीर डढाएपछि जीवन सकिन्छ, त्यसको निम्ति केही गरिदिन पर्दैन भनेर मान्ने आर्य समाज धर्ममा कसरी सर्नुभो- यस बारे सँगसँगै बसेर विचार-विमर्श गर्ने मेरो धोको थियो । केही समय म बाहिर बसेको कारणले त्यो अधुरै रह्यो ।

पछिल्लो समय म झापा आउँदा उहाँ बिरामी परिसक्नुभएको थियो । उहाँलाई भेट्न बोलाउन भनेर गएको पनि थिएँ, बिरामी मान्छे निधाउनु भएको रहेछ, फेरि भेटौंला भन्ने सोचेर फर्किएँ । दुःखद मलामीमा सहभागी हुँदा मात्र पुनः भेट भयो । कुल परम्परा विपरीतको धर्ममा जाँदा मृत्यु संस्कारमा सन्ततिले कुल परम्परा छोड्न नचाहँदा वा परिवर्तित धर्म सम्बन्धी कर्मकाण्ड गराउने गुरु नपाउँदा अप्ठेरो परेको देखिन्छ । उहाँको काममा पनि त्यो स्थिति रहेको र दुबै विधिबाट काजक्रिया गरेको देखियो ।

प्रवासबाट नेपाल सरेर क्रियाशील रही राम्रो ख्याति कमाउन सफल पौडेलजी जीवन सञ्चालनको क्षेत्रमा भने दुःख गरेर जीविकाको मध्यमवर्गीय आधारस्तम्भ खडा गरी राम्ररी भोग गर्न नपाउँदै असमयमै अस्ताउने आयु लिएर आउनुभएको रहेछ । प्रवासबाट नेपाल सरेर उहाँ जस्तै क्रियाशील रही जीविकाको आधार र यश आर्जन गरी राम्ररी भोग गर्न नपाउँदै अस्ताउने प्रा. घनश्याम खनाल र शिक्षक खडानन्द वाशिष्ठको अनुशरण गर्दै उहाँ उच्च विचारका पक्का अनुयायी पौडेलजी कुनै कुलतमा लागेको र नशालु पदार्थ ग्रहण गरेको जीवनपर्यन्त मैले देखिन र पनि ‘आयो टप्प टिप्यो लग्यो, मिति पुग्यो टारेर टर्दैन त्यो...’ कविशिरोमणि पौडेलको कवितालाई स्मरण गराउँदै कलिकालको पूर्णायु १०० वर्षको तेस्रो पाउ पूर्ण गर्न नपाउँदै यस धराबाट अस्ताउनु भयो । पूर्वीय दर्शनले आत्मा मर्दैन भन्छ र हामी त्यो दर्शनका अनुयायी हौं । उहाँको आत्माले राम्रो आश्रयस्थल प्राप्त गरोस् । श्रद्धा-सुमन अर्पण गर्दछु ।

*२०७७/५/२९* *- सरस्वती चोक, भद्रपुर-७*

*(लेखक कवि तथा लेखनाथ पुस्तकालयका पूर्वअध्यक्ष हुनुहुन्छ*



पर्शुराम तिमसिना

# सम्झनाको तरेलीमा डा.द्रोणकुमार उपाध्याय

सबै मान्छेहरूको जन्मथलो र कर्मथलो एकै ठाउँ हुँदैन । आफ्नो लक्ष्य पूरा गर्न कहाँको मान्छे कहाँ गएर आफ्नो तरक्की देखाई स्थापित भएको हुन्छ । अझ हामी नेपालीहरूको त एक ठाउँबाट अर्को ठाउँमा बसाइँ सर्ने इतिहासै छ भन्दा पनि फरक पर्दैन । त्यसमा अझ विद्वत् वर्ग जहाँ जाँदा आफ्नो उद्देश्य पूर्ति हुन्छ, त्यहाँ पुग्छ नै । नभन्दै कहाँ जन्मिएको मान्छे कहाँ गएर काम गरी नाम, दाम कमाएर स्थापित भएको हुन्छ । प्रसङ्ग यहाँ डा. द्रोणकुमार उपाध्यायसँगको छ । डा.द्रोणकुमार उपाध्याय गङ्गाधरका सात भाइ छोराहरूमध्ये माइला छोरा बुहारी टीकाराम र टीकामायाको एक मात्र छोरा हुन् । दिङ्लाबाट आफ्नो पति हराएपछि आफ्नो नाबालक छोरा गङ्गाधरलाई काखी च्यापी पतिको खोजमा डा.द्रोणकुमार उपाध्यायकी जिज्युहजुरआमा भारतको असम राज्यको स्वर्णितपुरसम्म पुग्दा पनि पतिको पत्तो नलागेपछि ब्रह्मपुत्र किनारको बाक्लो नेपाली बस्ती बटियामारीमा आफ्नो ढाकर बिसाउन पुग्छिन् । त्यहाँका नेपालीहरूले सहाराविहीन महिला र नाबालक बच्चा देखेपछि सबैले रेखदेख गर्दागर्दै बुढियाले खेतीपाती गर्न थालिन् । रहँदै बस्तै गर्दा छोरा गंगाधर ठूलो भएपछि विवाह गरिदिइन् । गंगाधर ठूलो भएपछि सन् १९०१ तिर उनले त्यसै ठाउँमा एउटा पशुपति ढाँचाको शिव मन्दिर बनाएका थिए । त्यसैमा सटेको संस्कृत विद्यालयमा आफ्नो प्रारम्भिक शिक्षाको ढाँचा निर्माण भएको कुरा वि.सं. २००६ असार ५ गतेमा जन्मनुभएका डा.द्रोणकुमार उपाध्यायले "म जन्मजात शिक्षक" शीर्षक राखी साझा मञ्च मासिक खबर पत्रिका २०७४, वर्ष १, अंक ९ को 'फ्ल्यास ब्याक' स्तम्भमा उल्लेख गरेका छन् । आफूहरू सात-सात दाजु-भाइ आफ्नो एउटै मात्र छोरा भएकोमा टीकाराम दम्पत्तीलाई कस्तो लाग्थ्यो कुन्नि ! नेपाली समाज हो; एउटा छोरो के छोरो, एउटा आँखो के आँखो भन्न पछि परेन होला । तर, यस्तो पनि हाम्रा धर्मग्रन्थहरूमा उल्लेख गरेको पाइन्छ ।

*एकोपि गुणवान् पुत्रो निर्गुणैश्च शतैर्वर : ।*
*एकश्चन्द्रस्तमोहन्ति न च तारा सहस्रश : ॥*

अर्थात् गुणवान एउटै पुत्र हुनु वेश छ, गुण नभएका १०० वटा छोरा भएर के काम ?

जस्तैः चन्द्रमाले तमाम् अन्धकारलाई हराउँछ। सहस्रौं ताराले के गर्छन् ? डा.द्रोणकुमार उपाध्यायले त्यस भनाइलाई सत्य सावित गरिदिए। यो मात्र होइन, आफ्ना हजुरबुबा गंगाधरले विद्यालय खोलेर शिक्षक बनेको, बुबा पनि शिक्षक, आमा पनि घरमै खोलेको रात्रीकालीन विद्यालय शिक्षिका, आफू शिक्षक, ससुरालीमा ससुरा-सासू, आफ्नी पत्नी, सालो र मामासम्म पनि शिक्षक र आफ्ना छोरा बुहारी दुबै जना शिक्षक भन्दै आफ्नो चौथो पुस्तासम्मको पुर्पुरोमा मास्टरी गरिआएस् भनी लेख्ने त्यो भावीले कस्तो रमाइलो गरेको हो माथि भनी 'म जन्मजात शिक्षक' फ्ल्यास ब्याकमा लेखिएको कुराको पुष्टि गरेका छन्। प्रारब्धमा भावीले जे लेखिदिएको छ, त्यो कर्म मान्छेले नगरेर हुँदै हुँदैन भन्छन् आस्तिकहरू। डा.द्रोणकुमार उपाध्यायले पनि यस कुरालाई आत्मसात गरेको देखिन्छ। सन् १९७१ मा स्नातक गरेका डा.द्रोणकुमार उपाध्यायले सन् १९७३ मा नेपालको त्रिभुवन विश्वविद्यालयबाट नेपाली विषयमा स्नात्तकोत्तर गरेका थिए भने सन् २००२ मा भारतको उत्तरबङ्ग विश्वविद्यालयबाट नेपाली लोकगीतको अध्ययन विषयमा विद्यावारिधिको उपाधि प्राप्त गरेका थिए। सन् १९७३ मा स्नात्तकोत्तर उत्तीर्ण गरेपछि डा.द्रोणकुमार उपाध्याय केही वर्षसम्म असमतिर बसी वि.स. २०३८ देखि नेपालमा आई वि.सं. २०६८ सम्म मेची बहुमुखी क्याम्पस-भद्रपुरमा प्राध्यापन गरी वि.सं. २०६८ मै सेवानिवृत्त भएको कुरा बुझिन्छ। नेपाली भाषा र साहित्यको सेवामा औधि रुचि राख्ने उपाध्याय नेपाली, हिन्दी, अंग्रेजी, बङ्गाली, असमिया र संस्कृतका ज्ञाता थिए। ती भाषाहरूमा लेख्न बोल्न पढ्नसक्ने क्षमता आफूमा भएको बताउने उपाध्यायले केही कृतिहरू पनि प्रकाशित गर्नुका साथै राष्ट्रिय तथा अन्तर्राष्ट्रिय पत्रपत्रिकाहरूमा विभिन्न लेख रचनाहरू प्रकाशित गर्ने गरेको बुझिन्छ। डा.द्रोणकुमार उपाध्यायका प्रकाशित कृतिहरू निम्नानुसार देखिन्छन् –

क) नवमी (सहलेखन : असमिया भाषामा नेपाली लोककथा संग्रह)– (असम साहित्य सभा, गुवाहाटीद्वारा प्रकाशित, १९७७ ई.सं.)

ख) राजवंशी परिचय : जाति, भाषा र साहित्य (राजवंशी भाषा प्रचार समिति नेपालद्वारा प्रकाशित, १९९४ ई.सं.)

ग) आदर्श नेपाली व्याकरण (सहलेखन)– (किरणवाला भट्टराई, उदालगुढी, असमद्वारा प्रकाशित, २००५ ई.सं.)

घ) भाषिक चिन्तन (भाषिक विश्लेषणात्मक रचना संग्रह, २०६५)

ङ) केही साधक : केही साधना (समालोचना संग्रह, २०६५)

च) लोक वार्ता : लोककै चर्चा (लोकसाहित्यसँग सम्बन्धित समीक्षात्मक प्रबन्धहरूको संगालो, २०६५)

छ) सवाई काब्यको सैद्धान्तिक परिचय (लोकसाहित्य समीक्षा, २०६७)

ज) भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा (साहित्येतिहास, २०६८)

यी त भए उपाध्यायका प्रकाशित पुस्तककार कृतिहरू । यी बाहेक पनि फुट्कर रचनाहरू विभिन्न पत्रपत्रिकाहरूमा लेख्ने गरेको देखिन्छ ।

- विभिन्न राष्ट्रिय तथा अन्तर्राष्ट्रिय पत्रपत्रिकाहरूमा अंग्रेजी, हिन्दी, नेपाली, असमिया भाषामा विश्लेषणात्मक लेख निबन्धहरू प्रकाशित ।
- नेपाली तथा अन्य भाषाका पत्रपत्रिका सम्पादन तथा प्रकाशन ।
- राष्ट्रिय तथा अन्तर्राष्ट्रिय सेमिनार गोष्ठीहरूमा कार्यपत्र प्रस्तुत ।
- विभिन्न साहित्यिक तथा सामाजिक संघ-संस्थाहरूमा सहभागिता ।

डा. द्रोणकुमार उपाध्यायले भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखाले बृहत् असमको नेपाली साहित्यको विषयमा केही विस्तृत जानकारी दिन सके तापनि दार्जीलिङ, सिक्किम त्यस्तै बनारस, कलकत्ता, देहरादुन, भाग्सु, दिल्ली र मुम्बई तर्फको चर्चा छुट्नु पनि यस पुस्तकको ठूलो कमजोरी मानेको छु भन्दै आउँदा दिनहरूमा यसमा सुधार गर्ने वचनवद्धता समेत व्यक्त गर्दै लेखकको भनाइ टुङ्ग्याएको छ । डा.द्रोणकुमार उपाध्यायले शान्तिनगर, झापाबाट प्रकाशित आँखो पत्रिकाको पाँचौं किरणमा 'लोकपरम्परा र मानव समाज' शीर्षक राखी मानव समाजको संरचना त्यसले अवलम्बन गर्दै आएको लोकपरम्परा, त्यसका मूल्य-मान्यता अहिलेको अवस्थासम्म आइपुग्न के कस्ता गल्छेडाहरू तथा उकाली-ओराली पार गर्दै आएको भन्ने कुरा सटिक र महत्वपूर्ण कुरा उल्लेख गरेका छन् । त्यस्तै, नेपाली समाजको संरचना र नेपालका विभिन्न जात-जाति, भाषा- भाषीका कुराहरूको उल्लेख गर्दै तिनीहरूको लोकपरम्परा संस्कृति आदि बारे विश्लेषणात्मक ढंगले वर्णन गरिएको छ । त्यसैगरी, काँकरभिट्टा झापाबाट प्रकाशित हुने सुसेली वर्ष-१३, अंक-१२ चूडामणि रेग्मी विशेषाङ्कमा 'आधा शताब्दी यता झापाको भाषिक गतिविधि र चूडामणि रेग्मी' शीर्षकमा नेपाली

भाषा र साहित्यको उन्नयनमा चूडामणि रेग्मीले पुऱ्याउनुभएको योगदान बारे विशेष उल्लेख गर्दै रेग्मीको झर्रोवादी आन्दोलनका हस्तीहरूमध्ये चूडामणि रेग्मीका बारेमा सिलसिलेवार अध्ययन गरिनुपर्छ भन्ने डा.द्रोणकुमार उपाध्यायले सुझाव दिएका छन् ।

डा.द्रोणकुमार उपाध्याय र सहप्राध्यापक होम सुवेदीको सम्पादकत्वमा २०२९ देखि २०४८ सालसम्म युगज्ञानका विभिन्न अङ्कहरूमा प्रकाशित चूडामणि रेग्मीका गजवाष्टकहरूमध्ये १०८ वटा हाँस्यव्यङ्गपुत्रगयतसर्ण गजवाष्टक प्रकाशित भएका छन् । यस गजवाष्टक बारेको टिप्पणी डा.तारानाथ शर्मा, डा.गणेश भण्डारी र शिव रेग्मीको समेत उपाध्याय र सुवेदीले उल्लेख गरेका छन् ।

डा.द्रोणकुमार उपाध्यायसँगको मेरो सामान्य भेटघाट यदाकदा भए पनि एक दिनभरि नै हामी झापा, मोरङ र सुनसरीका साहित्यकारहरू साहित्यकार केदार सत्यालले आयोजना गरेको साहित्यिक कार्यक्रम र उहाँको कृति विमोचन कार्यक्रममा रंगेलीमा बिताएका थियौं । त्यही नै हो, मेरो उहाँसँगको लामो सम्पर्क भएको । डा.द्रोणकुमार उपाध्यायको अवसानले नेपाली साहित्यको अपुरणीय क्षति भएको छ भने साहित्यप्रेमीहरूले एक असल अभिभावक, एक असल मित्र गुमाएका छन् । जन्मनु र मर्नु त प्राकृतिक नियम नै हो । उनी यस धर्तीमा शारीरिक रूपमा नरहे पनि उनले गरेका असल कर्मले सदासर्वदा जीवित रहन्छन् । द्रोणकुमार उपाध्यायलाई उनकै सिर्जनाहरूले जीवित राख्नेछन् । श्रद्धेय मूर्धन्य व्यक्तित्व डा. द्रोणकुमार उपाध्यायलाई यिनै श्रद्धासुमन अर्पण गर्दछु । अहिलेलाई यत्ति नै भनौं ।

*-मेचीनगर–९, झापा*

*(लेखक साहित्यकार हुनुहुन्छ)*



पुण्यप्रसाद आचार्य 'बाछिटा'

# हेर् काल ! मेरो स्मृतिपटलमा द्रोण सरको आकृति ज्युँदै छ, बुझिस् ?

कोभिडको बिगबिगी थियो, जोगिँदा जोगिँदै म आफैं संक्रमित भएँ । दशैंमा सधैं झापा घर जान्थें, यसपटक त्यत्तिकै भयो । मंसीरमा एउटा विवाहको सिलसिलामा मोरङ हुँदै झापा गएँ । झापा, मोरङ, सुनसरी, सप्तरी, इलाम चाहार्ने अवसरहरू मिले, म सबैतिर घुमें । एक दिन घर बसेका बेला भाइ गोपालले भन्यो, 'दाजु ! द्रोण सरको स्मृतिग्रन्थ तयार हुँदैछ । सम्पादकहरूमध्ये कसै न कसैले तपाईंलाई पनि सम्झिन सक्छन् । माइण्ड मेक-अप गरिराख्नु है ।' यो त भाइले अड्कलेको कुरो मात्रै न हो भने जस्तो लाग्यो, तैपनि मलाई सन्तोष चाहिं लाग्यो । किनकि मलाई माया र खुशी प्रदान गर्ने मेरा आदरणीय अग्रज, गुरु, मित्र एवम् आफन्त स्वर्गीय द्रोण सरको स्मृतिग्रन्थ तयार हुनु, मैले एवम् मेरो समाजले अथवा भनौं द्रोण सरकै पनि समाजले गर्नुपर्ने एउटा पुण्यकार्य थियो । जसमा मेरो योगदान रहन नसके पनि पूरा हुने भयो भन्ने मलाई लाग्यो ।

त्यसपछि म काठमाडौं फर्किएँ । म काठमाडौं फर्किएको केही दिनपछि भाइ गोपालको अड्कल सही साबित भयो । मित्र देवीचरण भण्डारीको फोन आयो र उहाँले द्रोण सरको स्मृतिमा आफ्नो संस्मरण पढाइदिन अनुरोध गर्नुभयो । मेरो हर्षको सीमा रहेन । म औधि खुशी हुनुपर्ने दुई वटा कारणहरू रहे- एउटा सम्पादन समूहका साथीहरूले मलाई सम्झनु र अर्को उक्त स्मृतिग्रन्थ प्रकाशनका क्रममा मैले पनि सानोतिनो योगदान पुऱ्याउने अवसर जुर्नु । यसै खुशीका साथ मैले साथीहरूको अनुरोधलाई शिरोपर गरें । लेख्छु भनेर वचन त दिएँ, तर वचन भन्ने कुरो दिन सजिलो; पूरा गर्न गाह्रो हुने र'छ । लेख्न त लेख्ने, के लेख्ने ? झण्डै हप्ता दिन जति यही प्रश्नले मलाई उल्झनमा राखिरह्यो । यो उल्झनबाट उम्किने उपाय सोच्दै थिएँ, अकस्मात मेरो स्मृतिपटलमा द्रोण सरको आकृति आयो । अनि तत्काल मैले काललाई सम्झिएँछु । बस् ! त्यसपछि लेख्ने आइडिया फुऱ्यो ।

कुनै पनि दुःखद खबर सुन्न नपरे हुन्थ्यो- यो हामी मान्छेहरूलाई लागिरहने कुरो हो । तर, सुन्न नपरे हुन्थ्यो भन्ने खालका खबर सुन्नु परिरहन्छ । यो हाम्रो नियति हो । सुनाउन मनै लाग्दैन, नसुनाइ पनि हुँदैन । सुन्नै मन लाग्दैन, नसुनी पनि धरै छैन । अझै सञ्चारको व्यापकता र तीव्रताको होडबाजी चलेको यस युगमा त्यस्ता दुःखद खबरहरू अलि ढिलै सुन्छु भन्न पनि पाइँदैन ।

उता, द्रोण सर बित्नुभो । यता मैले तत्कालै सुनें । सुनिसकेपछि भावविह्वल हुनु र श्रद्धाञ्जलि व्यक्त गर्नु बाहेक अर्को विकल्पमा जाने छुट पनि नियतिले मलाई किन पो दिन्थ्यो ? शायद नियति पनि उसकै बाध्यतामा जकडिएको होला । मन खिन्न भयो, उदासी छायो । फेरि गर्नु पो के र ? बितिहाल्नु नपर्ने मान्छे बित्नु भो । म लगायत उहाँलाई चिन्ने अरू सबैलाई थाहा थियो यो कुरो । थाहा पाएर पनि केही गर्न नसक्ने भएपछि थाहा पाउनु पनि थाहा नपाउनुमा तुरुन्तै परिणत हुने रहेछ ।

अनुभूतिका लाखौं करोडौं श्रृङ्खलाहरूमा यो श्रृङ्खला थपियो अनि मनभित्र खात लागेर बस्यो । मनले यसलाई खात लाएर राखिसकेपछि मैले जबर्जस्ती नै सही, मन बुझाउनै पऱ्यो । मन बुझाएँ पनि । मन न हो, बुझ है भन्दामात्रै सजिलै किन बुझ्थ्यो; नानाभाँतिका तर्क खोज्यो । ती पनि लगेर मनका अगाडि तेर्स्याइदिएँ । मेरा गुरु, मित्र, अग्रज र आफन्त द्रोण सर अजम्मरी हुनुहुन्थेन । उहाँ यस संसार वा समाजलाई केही दिन आउनुभएको थियो, दिनु'भो, उहाँको काम सिद्धिएछ जानु'भो । काम सिद्धिएका कसैलाई पनि एक सेकेण्ड मात्र पनि यहाँ बस्ने छुट छैन । मनले बुझिदिएपछि मलाई आफ्नो दिनचर्यामा फर्किन सहज भयो । फरक चाहिं यति पऱ्यो कि, अब म झापा घर गएका बेला मेरा आत्मीय अग्रज गुरु द्रोण पौडेललाई पहिला-पहिला भेटेजस्तो भेट्न पाउने छैन । आत्मीयता साट्न पाउने छैन । एकैछिन भए पनि उहाँसँग गफिन पाउने छैन ।

भेटें त मैले द्रोण पौडेल गुरुलाई धेरै पटक भेटें । किन द्रोण पौडेल गुरुलाई मात्रै, डाक्टर द्रोण पौडेललाई पनि भेटें । झापा जानासाथ उहाँसँग भेटे भइहाल्थ्यो । मसँग भेट हुँदा उहाँको मनभित्रको खुशी उहाँका ओठको मुस्कानको बाटो हुँदै मेरो मनसम्म आइपुग्थ्यो र मेरो खुशीलाई उसैगरी तानेर उहाँको मनसम्म लैजान्थ्यो ।

परिवारका, भाषा साहित्यका, गाउँघरका, देश र राजनीति आदिका विषयहरू मिसाएर कति मजाले गफको खिचडी पकाउँथ्यौं द्रोण सर र म । उहाँभित्रको

ज्ञानले हरेक पटक, मेरो मनमा हरेक पटक केही न केही छाप पारेकै हुन्थ्यो । उहाँमा दर्जन बढी भाषाहरूको ज्ञान हुनु चाहिं मलाई स्वाभाविक लाग्थ्यो । यति हुँदाहुँदै पनि उहाँको शोध कार्यसँग भने म फिटिक्कै परिचित वा भिज्ञित भएनछु । हामी दुई बीचको नाता जोड्ने एउटा कडी वा अंकुशे पनि थियो र पनि हाम्रो पारिवारिक घनिष्टता भने हुन सकेन ।

द्रोण सरसँग बीच-बीचमा भएका भेटहरू कहाँ-कहाँ र कति-कति बेला भए-तिनको लेखाजोखा राखिरहने पनि कुरो भएन । तर, मैले सम्भेसम्म उहाँसँग मेरो पहिलो भेट मेची क्याम्पसमा भयो । म मेची क्याम्पसको त्यस्तो फटाहा विद्यार्थीहरूमध्येको एउटा विद्यार्थी थिएँ, जो एडमिशन चाहिं गर्छ; तर पढ्न चाहिं जाँदैन ! मैले क्याम्पस गएर क्लास लिन वा पढ्न दुई वटा साइत जुर्नु पर्थ्यो - कि त मैले पढाउने स्कूलमा हडताल हुनु पर्थ्यो कि त बिदा हुनु पर्थ्यो ।

एक दिन स्कूल हडतालको साइत पारेर क्याम्पस गएँ । अनिवार्य हो वा ऐच्छिक, त्यो त अहिले बिर्सिहालें । तर, नेपाली विषय पढाउन त मैले आई.ए. पढ्दा चिनेका सरहरू नआएर नौला व्यक्ति आउनुभयो । म टुरिष्ट विद्यार्थीलाई उहाँले के पढाउनुभयो, कसरी पढाउनुभयो, उहाँ राम्रोगरी पढाउन सक्ने शिक्षक हो कि होइन... आदि इत्यादिसँग मलाई कुनै मतलब भएनछ । सोच्न थालेछु- नयाँ प्रोफेसर र'छन् । अब यिनलाई कुनै न कुनै तरिकाले आफ्नो प्रभावमा पारिहाल्नुपर्छ ।

क्लास सकेर उहाँ बाहिर निस्कनुभयो । म उहाँको पछि-पछि लागें । उहाँ प्राध्यापक कक्षमा छिरेपछि आफ्ना कुरा गर्न त अप्ठ्यारो हुन्छ भन्ठानेर उहाँसँग परिचय गर्न मन लागेको कुरा बाटैमा राखिहालें । उहाँ पनि अडिनुभयो र आफ्नो परिचय दिनुभयो । मैले पनि मेरो परिचय दिएँ अनि आफ्नो बाध्यता पनि बताइहालें । त्यसपछि हामी छुट्टियौं । एउटा विद्यार्थीले परिचय गऱ्यो त गऱ्यो, कुरो सिद्धि'गो नि । तर, द्रोण सरको मान्यता त्यो रहेनछ । उहाँले त चासो राखेर मेरो बारेमा सोधीखोजी गर्नु भएछ ।

दुई-चार दिनपछि चन्द्रगढी चोकतिर भेट भयो । नमस्तेको आदानप्रदानपछि उहाँले बडो सौहार्दता देखाउनुभयो । मलाई पनि 'सर' भनेर पो सम्बोधन गर्नुभयो ! उहाँले क्याम्पसमा परिचय भइसकेपछि 'भाइ' भनेर गरेको सम्बोधनको नै अपेक्षा थियो मलाई । उहाँले गरेको सम्बोधनप्रति प्रतिवाद गरौं कि जस्तो पनि लाग्यो, तर गरिन । उहाँको सरलता, सहजता र सहदयतामाथि अपमान हुन्छ जस्तो लाग्यो ।

गुरु-चेलाको नाता यति छिट्टै सर-सरमा बदलिएकाले मलाई भने अलि असहज महसूस हुन्थ्यो । मेरो ससुरालीपट्टिका जेठान नाता पर्ने गणेश पौडेल र द्रोण सर त दाजु-भाइ पो हुनु हुँदोरहेछ ! काका बडाबाका छोराहरू । उहाँहरूकै भेटमा मेरो प्रसंग निस्केपछि त द्रोण सरले मलाई झन् नजिक पार्न थाल्नुभयो ।

यिनै द्रोण सरसँगको भेट र तिनले पारेका प्रभाव एवम् छापहरूका क्रम र उपक्रमकै श्रृंखलामा उहाँसँगको अन्तिम भेट मेचीपारि गलगलियाको रेलवे स्टेशनमा उहाँको छोरालाई रेल चढाउन गएका बेला म पनि पश्चिम दाङतिरका दुइटा बस्नेत भाइहरूको पूर्व हेर्ने र रेल चढ्ने रहर पूरा गरिदिन त्यहीं पुगेको थिएँ । बस्... अब हाम्रो रेल पर्खाइ किन पट्यारलाग्दो हुन्थ्यो र ? रेल आउन निकै ढिला गरे पनि हामीलाई केही फरक नपर्ने भयो । दोृण सर र मैले गफका खिचडी आत्मीयतासँग मुछेर यति स्वादले खायौं कि हामी नअघाउँदै रेल आइपुग्यो । हामी रेल चढेर सिलिगुडीतिर लाग्यौं । द्रोृण सर घर फर्किनुभयो ।

मलाई के थाहा ? त्यो नै द्रोण सरसँगको मेरो अन्तिम भेट होला भनेर ! थाहा त भयो, तर द्रोण सर बित्नुभयो भन्ने दुःखद खबर सुनेपछि थाहा भयो । त्यस्तो थाहाको के काम ? द्रोण सर हामीमाझ नरहे पनि उहाँले छोडेका पदचिन्हहरू हामीसँग छन् । उहाँको सरलता, सद्चरित्र, सहृदयताका उदाहरणहरू र उहाँले भाषा, साहित्य एवम् समाजमा पुऱ्याएका योगदानहरू हामीसँग छन् । उहाँको पदचिन्ह पछ्याउनु, उहाँको सद्चरित्रको अनुकरण गर्नु, उहाँले पुऱ्याएका योगदानहरूको संरक्षण एवम् सम्बर्द्धन गर्दै तिनको कदर गर्नु हामी बाँचेकाहरूको कर्त्तव्य हो, धर्म हो र साथै उहाँप्रतिको सच्चा श्रद्धाञ्जलि पनि हो ।

बलिया र निर्धाको द्वन्द्व भयो भने निर्धाले हार्नु पर्छ, हार्छ । निर्धाको हात-खुट्टा-ढाड भाँच्चिन सक्छ, तर पनि निर्धाले बलियालाई एक-दुई मुक्का हान्छ, टोक्छ, चिथोर्छ र मात्रै हार्छ, पछारिन्छ । मलाई थाहा छ, काल हामीभन्दा कति हो कति बलवान छ । हामी उसका अगाडि निरीह छौं, निर्धा छौं; त्यही भएर कालले द्रोण सरलाई लग्यो । तर पनि म काललाई चोर औंलो ठड्याएर भन्छु- 'हेर् काल ! मेरो स्मृतिपटलमा द्रोण सरको आकृति ज्युदै छ । बुझिस् ?'

*(लेखक साहित्यकार हुनुहुन्छ)*



# डा.द्रोण उपाध्यायलाई सम्झँदा

पुण्यप्रसाद खरेल

राम्ररी परिचय भए पनि धेरै उठबस नगरेका, घनिष्ट हिमचिम नभएका मित्र डा.द्रोणकुमार पौडेलज्यूका बारेमा लेख्न बसेको छु । उहाँका बारे लेख्न कलम-कापी ठीक पार्न थाल्दैखेरि एक प्रकारको कोक्याउँदो असजिलो बोध भएको छ । 'अरु निकै वर्ष गोष्ठीहरूमा, भेलाहरूमा उहाँसँग भेट हुन्छ होला, उहाँको उज्यालो हँसिलो मुहारको सामीप्यता पाइरहिन्छ भन्ने विश्वास थियो । यस्तै बेला सुसेली साहित्यिक परिवारको स्मारिका 'सुसेली-१८'को स्रष्टा परिचय अङ्कमा उहाँको परिचय समावेश गर्न सम्पर्क गर्न खोजें । त्यही क्रममा चूडामणि वशिष्ठ मार्फत् मैले उहाँलाई त्यो अपराधी बिमारले गाँजेर उपचार निम्ति लगिएको सुनें । मनमनै मैले- 'त्यस बिमारलाई जित्नुहोस् ! भर्खरै त्रिवि सेवाबाट फुर्सद लिनुभएको छ, अब धेरै सिर्जनाहरू दिनुपर्छ, अनुभवले खारिएका कुराहरू नयाँ पिँढीलाई हस्तान्तरण गर्नुछ' भनेर कामना गरेको थिएँ । तर, हाम्रो कामनालाई त्यस बिमारले पराजित गऱ्यो । एकैचोटि 'द्रोण सर त बित्नुभयो !' भन्ने सुनें, स्तब्ध भएँ ।

भारतका पूर्वोत्तर राज्यहरू पश्चिम बङ्गालको दार्जीलिङ, सिक्किम, असम, मणिपुर एक बेला लडेका ढुङ्गा जस्ता भएका नेपालीहरूले बास पाउने आश्रयस्थल थिए । बितेका दुई शताब्दी त धेरै नेपालीहरू नेपालबाट आफ्ना जे भएका हाँडाभाँडा, झत्ताझुम्रा ढाकरमा हालेर, श्रीमती र लडिका छोराछोरी अघि लाएर बसाइँ जान्थे । धेरै जना लीलबहादुर छेत्रीको 'बसाइँ' हुन्थे, थुप्रै नेपालीहरू लैनसिंह वाङ्देलका 'मुलुक बाहिर' हुन्थे । अर्थात् ती विवश नेपालीहरूको ढाकर बिसाउने ठाउँ असम हुन्थ्यो, मणिपुर हुन्थ्यो, बर्मा पनि हुन्थ्यो । अङ्ग्रेजको उपनिवेशमा कोचिनु परे पनि भारतले शिक्षा र सभ्यतामा राणाशासनको नेपाल जस्तो अशिक्षामा ठिंगुरिनु पर्दैनथ्यो । पाठशाला, विद्यालय-महाविद्यालय त्यता खोलिएथे, रेल-मोटरको बाटो (रेलआली, मोटरआली) बनेथ्यो । अर्थात् शिक्षा र सभ्यतामा नेपालभन्दा असम, मणिपुर अगाडि थियो ।

नेपालमा स्वयम् नेपाली भाषाका अतिरिक्त अन्य विषयको शिक्षामा थिगिरी-थिगिरी गर्दै ताते हिंडाउने जश भारतका यी पूर्वोत्तर स्थानहरू दार्जीलिङ, असमका शिक्षित व्यक्तिहरूलाई छ। आजभन्दा केही वर्ष अगाडिसम्म त नेपालको पूर्वाञ्चलका सबैजसो शिक्षालयमा शिक्षकहरू असम-दार्जीलिङका नेपालीभाषीहरू नै थिए भन्दा हुन्छ। अब मात्र नेपाल शिक्षामा लगभग आत्मनिर्भर हुँदैछ।

मलाई थाहा छ, वि.सं. २००७ को परिवर्तनपछि मात्र नेपालका गाउँहरूमा क, ख चिनाउने विद्यालयहरू स्थापनाको शुरुवात भयो। त्यतिबेलासम्म नेपाल पूर्णतया निरक्षर समुदायको बस्ती थियो। जब पूर्वी नेपालमा विद्यालयहरू स्थापना हुन थाले, गाउँका अगुवाहरू भिटीगुन्टा कसेर शिक्षकको खोजीमा दार्जीलिङतिर हानिइहाल्थे। यस्तो स्थितिमा कति दार्जीलिङमा पढेका, कति असममा पढेका नेपाली मूलका व्यक्तिहरू नै ती नयाँ स्थापित विद्यालयलाई उकास्ने शिक्षक बन्थे।

यही क्रम रह्यो डा.द्रोणकुमार उपाध्यायको पनि। उहाँ असमको गुवाहाटी विश्वविद्यालयबाट स्नातक पास गरेर शिक्षण गर्दै नेपाल भित्रिनुभयो। वि.सं. २०३८ देखि त मेची बहुमुखी क्याम्पस, भद्रपुरमा प्राध्यापन गर्न नै लाग्नुभयो। द्रोण सरले झापाको यही क्याम्पसमा प्राध्यापन गरेर नै आफ्नो समय व्यतीत गर्नुभयो भन्दा पनि हुन्छ। हो, बीचमा एक-डेढ वर्ष जति (२०४८-२०४९)मा उहाँले पद्मकन्या क्याम्पस, काठमाडौंमा पनि प्राध्यापन गर्न भ्याउनुभयो।

द्रोण सरले आफूलाई क्याम्पस प्राध्यापनमा मात्र सीमित राख्नुभएन। उहाँ साहित्यिक अध्ययन, विभिन्न जाति-जनजातिको भाषा तथा संस्कृतिको अध्ययनमा पनि लाग्नुभयो। नेपाल आएर त्रिभुवन विश्वविद्यालयबाट नेपाली विषयमा स्नातकोत्तर गरेपछि नेपाली संस्कृतिको महत्वपूर्ण विधा 'नेपाली सवाई'मा उहाँले विद्यावारिधि गर्नुभयो। नेपाली, हिन्दी, बाङ्ला, असमिया आदि भाषामा फर्र बोल्न तथा संस्कृत, अङ्ग्रेजी र राजवंशी भाषामा पनि राम्रो दखल राख्ने उहाँ बडो जाँगरिया र उत्साही व्यक्ति हुनुहुन्थ्यो।

द्रोण सरको त्यही जाँगर र उत्साहकै कारण हो, नेपाल तथा भारतका विभिन्न स्थानमा आयोजना हुने विभिन्न सभा-सम्मेलनमा उहाँ उपस्थित हुन भ्याउनु हुन्थ्यो, सहभागी बन्नु हुन्थ्यो र कार्यपत्रहरू, शोधपत्रहरू प्रस्तुत गर्नु हुन्थ्यो। नेपालका राजवंशी जातिको भाषा तथा साहित्यबारे गम्भीर अध्ययन गरेर उहाँले एउटा पुस्तक 'राजवंशी परिचय : जाति, भाषा र साहित्य' नामक पुस्तक लेखेर प्रकाशन गराउनुभएको छ। उहाँका आफ्ना ९ वटा पुस्तक प्रकाशित छन्। तर, मैले यो पुस्तकको किन चर्चा गरेको भने, असममा हुर्के-बढेको, गुवाहाटी विश्वविद्यालयबाट

स्नातक पास गरेर त्रिविबाट स्नातकोत्तर गरेको व्यक्ति यदि जाँगरिया, उत्साही र समर्पित नहुने हो भने नेपालको सीमान्तकृत जाति 'राजवंशी'का बारेमा अध्ययनमा लाग्नुहुने थिएन । सभा-सम्मेलनमा कार्यपत्रहरू, शोधपत्रहरू प्रस्तुत गर्ने कुरा सिरिप्ती सभा-सम्मेलनमा प्रस्तुत गर्ने मात्र होइन, कार्यपत्र या शोधपत्र तयार गर्ने क्रममा नै सम्बन्धित विषयको गहिराइसम्म गोता लगाउनु, खोज्नु, केलाउनु, व्याख्या विश्लेषण गर्नुपर्ने हुन्छ र त्यस्तो गर्ने व्यक्ति ज्ञानको एक चरण माथि उक्लिन्छ । त्यसैले सहजै भन्न सकिन्छ, यथार्थमा डा.द्रोण सर हाम्रो ठाउँको एक उपमेय विद्वान् बन्नुभएको थियो ।

हाम्रो समाज अचेल बडो उपभोक्तावादी, स्वार्थी बनेको छ । कोसँग कति धन छ ? को कुन शक्तिशाली पदमा छ ? त्यो मात्र हेर्ने र तिनलाई मात्र 'जी-हजुरी' गर्ने समाज भएकाले विद्वान्को कदर गर्दैन ! यस्तो अवस्था भए पनि द्रोण सरलाई यहाँको समाजले अँगालेकै थियो, कदर गरेकै थियो; धेरै सामाजिक, सांस्कृतिक तथा धार्मिक संस्थाहरूले सम्मान र पुरस्कारले उहाँलाई सुशोभित गरेका थिए । घनश्याम स्मृति प्रतिष्ठान चन्द्रगढी, देवकोटा स्मारक संरक्षण समिति चन्द्रगढी, मेची बहुमुखी क्याम्पस भद्रपुर, जुही (साहित्यिक त्रैमासिक) चन्द्रगढी, साहित्य चौतारी बिर्तामोड, लेखनाथ पुस्तकालय चन्द्रगढी, असम नेपाली नाट्य सम्मेलन, बिहाली (असम) आदि दर्जनौं संस्थाद्वारा उहाँ सम्मानित तथा पुरस्कृत हुनुभएको थियो ।

नेपाली साहित्यमा अभिरुचि राख्नुहुने उहाँले कथा, कविता आदिको सिर्जनामा भने त्यति समय दिनुभएन । उहाँ समालोचनामा कलम चलाउनु हुन्थ्यो । भाषा तथा व्याकरणमा, लोक संस्कृति, परम्पराको अध्ययन उहाँको रुचिको विषय थियो ।

जीवन साँच्चै कर्कलाको पातको पानी नै रहेछ । जीवनको कुनै टुङ्गो पनि साँच्चै रहेनछ । उहाँसँग यति छिटो विछोड हुन्छ भन्ने लागेकै थिएन । अत्यन्त सरल, ठूलोसानो नछुट्याई सबैसँग जानपहिचान गर्ने, सबैको थातथलोको सोधपुछ गर्ने उहाँ मीठो बोलीका हुनुहुन्थ्यो । सधैं हँसिलो देखें मैले उहाँलाई । भोजपुर दिङ्ला पुर्ख्यौली थलो भएका उहाँ त्यो पितृथलोको अर्थात्, मातृभूमिको प्रेमले त्यहाँ पुगेर आफ्ना बन्धुबान्धवसँग चिनापर्ची गरेर माया गाँसेर फर्कनुभएको थियो । उहाँसँग अझै निकै वर्षको सङ्गतको अपेक्षा हठात् लुटियो । म उहाँप्रति भावपूर्ण श्रद्धाञ्जलि अर्पण गर्दछु ।

*७ साउन २०७७*

*- बिर्तामोड (नयाँ बसपार्क) अर्जुनधारा- ११, झापा*

*(लेखक प्रसिद्ध आख्यानकार एवम् 'सुसेली साहित्य परिवार'का अध्यक्ष हुनुहुन्छ)*



डा. पुण्यप्रसाद सिग्देल

# सधैं श्रद्धेय : द्रोण दाइ

सन् १९८३ को मार्च महिना जस्तो लाग्छ, काशी हिन्दू विश्वविद्यालयमा हरिप्रपन्न शर्मा, नारायणप्रसाद भट्टराई, सुशीला भण्डारी, दामोदर ढकाल, भवानीशंकर तिमसिना समेत ७/८ जना विद्यार्थी नेपाली भाषा साहित्यको स्नातकोत्तर परीक्षाको तयारी गर्दै थियौं । भारतीय भाषा विभाग अन्तर्गत नेपाली विभागमा जहाँ आदरणीय गुरु डा. डिल्लीराम तिमसिना पढाउँदै हुनुहुन्थ्यो । त्यसैबेला एक जना व्यक्तित्वको उपस्थिति भयो । उहाँलाई बस्ने संकेतसँगै डा. तिमसिनाले पढाइलाई विश्राम दिंदै आगन्तुक व्यक्तिलाई स्वागत गर्दै भन्नुभयो- ' उपाध्यायजी ! स्वागत छ, कहिले बनारस आउनुभयो ? आज नेपाली विभाग र हामी पढ्ने-पढाउने सबै पवित्र भयौं ।'

आगन्तुकको मृदु मुस्कान पूर्ण हुन नपाउँदै तिमसिना गुरुले- 'उहाँ द्रोणकुमार उपाध्याय, थर पौडेल । भारतको असममा जन्मी, बढी, पढी अहिले नेपाली भाषा, साहित्य एवम् संस्कृतिको विकास र विस्तारका लागि त्रिभुवन विश्वविद्यालय अन्तर्गत मेची बहुमुखी क्याम्पस-भद्रपुरमा प्राध्यापन गर्दै हुनुहुन्छ। नेपाली, संस्कृत, असमिज, बङ्ला, हिन्दी, राजवंशी, अंग्रेजी भाषाका ज्ञाता हुनुका साथै सबै भाषामा कलम चलाउन खप्पिस पनि हुनुहुन्छ ।' हामीले नमन गर्‍यौं उहाँलाई अनि पालैपालो परिचय दियौं । परिचय दिने क्रममा मेरो अन्तिम पालो परेको थियो, मैले मेरो नाम पुण्यप्रसाद पौडेल भन्नासाथ द्रोण दाइले 'कस्तो' भन्नेबित्तिकै तिमसिना सरले हाँस्तै भन्नुभयो- 'तपाईं कालो पौडेल, पुण्यप्रसाद चाहिं सेतो पौडेल, अलि पुराना पुस्ता चाहिं दाजु भाइ ।' डा. द्रोणकुमार उपाध्याय पौडेलसँग मेरो पहिलो भेट र परिचय त्यही थियो ।

जो कोही नेपाली विद्वान काशी हिन्दू विश्वविद्यालयमा पुग्दा विद्यार्थीले विचार सुन्न चाहेका खण्डमा विश्वविद्यालयले ती विद्वानको सम्मानमा दुइटा कक्षा

बराबर अर्थात ९० मिनटको पारिश्रमिक उपलब्ध गराउने चलन डा. डिल्लीराम तिमसिनाले चलाउनुभएको थियो । प्राध्यापक डा. द्रोणकुमार उपाध्यायबाट पनि हामीले दुई घण्टा नेपाली भाषा, नेपाली साहित्य, नेपाली संस्कृतिपरक चिन्तन सुन्यौं । उहाँका चिन्तनले हामीलाई नेपाली साहित्यको इतिहासका साथै विस्तारित रूपको बोध गर्न निक्कै सहज भएको थियो । डा. उपाध्यायका प्रवचनले भन्दा पनि उहाँको विषय ज्ञानले म प्रभावित भएको थिएँ । सुटुक्क अर्को कुरा पनि भनौं-भनौं लाग्यो; द्रोण सर पौडेल अनि म पनि पौडेल भएकाले हो वा मलाई मात्र त्यस्तो लागेको हो, डा. द्रोण सरको मप्रति अलि बढी स्नेह हो कि !

ठेगाना आदानप्रदान भए, दाजु-भाइको पवित्र नाता स्थापित भयो - डा.डिल्लीराम गुरुलाई साक्षी राखेर । भोलिपल्ट दिनभरि दाजु-भाइले बनारसका विभिन्न मठ, मन्दिर र घाटको अवलोकन गरेका थियौं । त्यस्ता स्मृति अजर र अमर हुँदा रहेछन् ।

समय बित्दै गयो । २०४७ सालको अन्तिमतिर अध्ययन पूर्ण गरी म नेपाल आएँ । २०४८ साल मंसीर २ गतेदेखि सञ्चालन आरम्भ भएको कन्काई आवासीय क्याम्पस-बिर्तामोडमा अध्यापन गर्न थालेपछि मेची बहुमुखी क्याम्पस-भद्रपुरमा अध्यापन गर्ने श्री जीवन पोखरेल सरबाट डा. द्रोणकुमार उपाध्याय पौडेलको नाम सुन्नासाथ बनारसको सम्झना आयो । संयोग नै भनौं, त्यसै दिन मेरा पूज्य भिनाजु वरिष्ठ पत्रकार, साहित्यकार गोपीकृष्ण खनालको वीरेन्द्र मा.वि. चन्द्रगढीका प्रधानाध्यापक डिल्ली सरले परिचित डिल्लीप्रसाद भट्टराईकहाँ जाने काम रहेछ, म पनि उहाँसँगै गएँ । केही उत्तरमा अर्का बन्धु तारा विविध पौडेलको घर रहेछ । त्यहाँ पुगी केही भलाकुसारी पश्चात् तारा सरलाई समेत साथ लिएर डा. द्रोणकुमार पौडेल सरकहाँ पुगेको थिएँ ।

बनारसमा भएका भेटको लामै व्याख्या गरेपछि चाहिं द्रोण दाइले 'ए... डिल्लीराम तिमसिना गुरुका उपस्थितिमा हामी दाजु-भाइ भएका थियौं । भाइको नाम पुण्यप्रसाद होइन त ?' भन्दा म निकै भावुक भएको थिएँ । आँखाका कुनाले नजानिंदो अभिषेक गरेका थिए । भेट गर्न गएका तीनै जनाले भाउजू मीरादेवीले थपी-थपी दिनुभएको इस्कुसका तरुलको खाजा पेटभरि खाएर फर्किएका थियौं । त्यो भेट भाउजूसँग पहिलो र दाजुसँगको दोस्रो थियो । त्यसपछि दाइ कालो पौडेल अनि भाइ सेतो पौडेल अर्थात् सिग्देल भएरै पूर्ण परिचित भयौं । तर, के कुतौजी परेर हो... दाजु-भाइको मेल जस्तो पारिवारिक निकटता भने हुन सकेन ।

निम्तो पाएका साहित्यिक, सामाजिक कार्यक्रममा सहभागी हुन म जति अल्छी छु, दाइ मभन्दा पहिले नै जन्मनुभएको हो एउटा मुख्य कारण चाहिं त्यही पो हो कि जस्तो पनि लाग्छ ।

द्रोण दाइले एकै दिन आफ्ना तीन कृति–

१. लोकवार्ता : लोककै चर्चा

२ केही साधक : केही साधना

३. भाषिक चिन्तन, विमोचन गर्नुभयो । भाषिक चिन्तन कृतिको समीक्षा गर्ने जिम्मा मलाई दिँदै हुनुहुन्थ्यो । तर, सोही दिन काम-विशेषले मेरो अन्तै जानुपरेकाले सो कार्य पूर्ण गर्न सकिन । कार्यक्रममा सहभागी नभए पनि भाइलाई सबै पुस्तक दिने इच्छा भएछ अनि एक दिन बिहान ८ बजेतिर मनकामना कलेज बिर्तामोडमा आएर कृति दिँदै एउटा विशेष मन्त्र प्रदान गर्नुभएको थियो, आज पनि त्यो मन्त्र जप्तै छु । मन्त्र यस्तो थियो - 'बाबरी फूलको बोट हल्लायो भने मीठो वासना दिन्छ, तरिका पुऱ्याएर मान्छेले पनि हल्लिनु पर्छ अनि मान्छेको जीवन सार्थक हुन्छ । त्यसमा पनि नेपालमा त पाइला-पाइला फुकेर हिंड्नु पर्दोरहेछ, म भर्खर बुझ्दै छु, भाइ ! तिमी धेरै दिन बनारस बसेर आएका छौ, विचार गरेर अघि बढ्नु ।'

द्रोण दाइले दिएको यो मन्त्र आज पनि खोकिलामा सजाएर राखेको छु । यसैबीच मेची बहुमुखी क्याम्पसमा प्राध्यापकको माग आएको थियो । आफू सहभागी हुने नहुने विषयमा दाइसँग सल्लाह गरें अनि सहभागी भइन । साँच्चै नै सहभागी भएको भए आफ्ना शैक्षिक प्रमाण-पत्र प्रस्तुत गर्ने काम मात्र हुने रहेछ भन्ने पछि स्पष्ट भयो । यसै प्रसंगमा हाल मनकामना कलेजका प्राचार्य श्री प्रेमप्रसाद भट्टराईज्यूले प्राध्यापन गर्न मेची क्याम्पसमा निवेदन गर्न निकै कर गर्नु भएको भए पनि 'मलाई आँट आएन है प्रेम सर !' भन्दै हाँसेर टारेको थिएँ । समुचित सल्लाह प्रदान गर्नुहुने द्रोण दाइलाई स्मृतिका माध्यमले सपनामा भए पनि सल्लाहको आग्रह ।

डा. द्रोणकुमार उपाध्याय पौडेल मेची बहुमुखी क्याम्पसमा नेपाली विभागका प्रमुख हुनुहुन्थ्यो । म मनकामना कलेजमा नेपाली प्राध्यापन गर्थें । दाइ-भाइको वैचारिक निकटता विशेष थियो । यसै अवधिमा मेची क्याम्पसमा स्नातकोत्तर तह नेपाली विषयको दशौं पत्रको परिपूर्तिको प्रयोजनार्थ प्रस्तुत - पदम बहादुर नेम्बाङ २०६१/६२, यादवप्रसाद अधिकारी २०६२, बीना सापकोटा २०६३, हरिनारायण

खतिवडा २०६३, दुर्गादेवी खतिवडा २०६४, हरिप्रसाद पौडेल २०६६ आदिका शोध-पत्रको बाह्य परीक्षक बनाएर मेची क्याम्पसमा कार्यरत धेरै विद्वान गुरुसँग परिचय गर्ने सुअवसर द्रोण दाइबाटै प्राप्त भएको थियो ।

अन्तमा, मेरा सामाजिक, शैक्षिक, बौद्धिक गतिविधि अवलोकन गर्दै आवश्यक उपयुक्त सुझाव प्रदान गर्ने आदरणीय दाइ डा. द्रोण्कुमार उपाध्याय पौडेलको आत्माले चिर शान्ति प्राप्त गरोस् भनी आत्रेय वंशका इष्टदेवसँग प्रार्थना गर्दै दाइप्रति भावपूर्ण श्रद्धाका केही शब्दसुमन अर्पण गर्दछु - ॐ-३ !

*- शान्तिपथ, कनकाई न.पा. ४ (झापा)*

*(लेखक विशिष्ट विद्वत व्यक्तित्व हुनुहुन्छ)*



पुष्करनाथ उपाध्याय

# आदरणीय गुरू द्रोणकुमार उपाध्यायमा श्रद्धासुमन !

विधिको विधानसँगै मानिसको जीवन र भाग्य गाँसिएको हुँदोरहेछ। यिनै आँखाहरूले सन्सारका धेरै राम्रा नराम्रा कुराहरूलाई हेर्नु पर्ने र सुख र दुःखको अनुभूति गर्नुपर्ने कस्तो विडम्बना ! यिनै शब्दावली दुःख र सुखमा नचाउनुपर्ने मानवीय जीवनको नियति नै कस्तो भनौं ?

यही सन्दर्भमा हाम्रा आरदणीय गुरु तथा नाताले मेरा जेठान द्रोणकुमार उपाध्याय पौडेलको निधनले फेरि जीवनको यस क्षणलाई दुःखको भुमरीमा हालेको छ। २००६ साल आषाढ ५ गते भारतको असम राज्यको बटियामारीमा जन्मिनुभएका उहाँ पिता टीकाराम शास्त्री र माता भेजमायाका ज्येष्ठ सुपुत्र हुनुहुन्थ्यो । आफ्नो सम्पूर्ण बाल्यकाल भारतको असममै बिताउनुभएका उहाँले आफ्नो स्नातकसम्मको अध्ययन गुहाटी युनिभर्सिटीबाट गर्नुभएको थियो । संस्कृत भाषाको राम्रो अध्ययन गर्नुभएका उहाँले सन् १९७३ मा त्रि.वि.वि.बाट नेपाली भाषामा स्नातकोत्तर गर्नुका साथै नेपाली सवाईमा सन् २००४ मा उत्तरबङ्ग विश्वविद्यालयबाट विद्यावारिधि गर्नुभएको थियो । नेपाली, संस्कृत, अंग्रेजी, हिन्दी, बंगला, असमियाका साथै मैथिली, भोजपुरी, सतार र राजवंशी जस्ता भाषाहरूका ज्ञानी हुनुका साथै उहाँ व्यक्तिगत रूपमा एकदमै मृदुभाषी र मिलनसार व्यक्ति हुनुहुन्थ्यो । भाषा विज्ञान जस्तो विषयमा गहिरो अध्ययन गर्नुंभएका गुरुवर द्रोणकुमार पौडेलका नेपाली साहित्य भण्डारमा थुप्रै अनुसन्धानात्मक कृतिहरू सञ्चय हुनुका साथै अंग्रेजी, हिन्दी, असमिया जस्ता भाषाहरूमा पनि थुप्रै अनुसन्धानात्मक लेख रचनाहरू प्रकाशित भएका छन् । राष्ट्रिय तथा अन्तर्राष्ट्रिय जगतबाट थुप्रै पदक तथा सम्मान प्राप्त गर्नुभएका उहाँजस्ता बौद्धिक व्यक्तित्व विरलै भेटिन्छ भन्दा अत्युक्ति हुँदैन ।

मैले उहाँका बारेमा अन्य थुप्रै सेवामूलक तथा सामाजिक कार्यहरूको विवरण दिन यो कागजको वक्षस्थलमा सकिन । तर, आदरणीय गुरु तथा मेरा जेठान भनौं या कर्मपिता स्व. डा.द्रोणकुमार उपाध्यायलाई श्रद्धासुमन अर्पण गर्दै उहाँका बारेमा मेरा व्यक्तिगत अनुभव अवश्य पनि लेख्न मन लाग्यो । आफ्नी बहिनी मायाका साथमा

मेरो विवाह गराइदिएपछि मैले राम्रोसँग उहाँलाई चिन्ने र जान्ने अवसर प्राप्त गरें । उहाँले मलाई दिनुभएको प्रेम, सम्मान र उहाँले दिनुभएका शिक्षाहरू मेरा लागि सदैव अविस्मरणीय रहनेछन् । अनेकन् शास्त्रका ज्ञाता तथा प्रकाण्ड विद्वान् भए तापनि उहाँको जीवनशैलीमा कुनै प्रकारको अहम् नदेख्दा र सबैलाई सम्मान र प्रेमका साथ व्यवहार गरेको देख्दा लाग्थ्यो- उहाँको आफन्त (ज्वाइँ) हुन पाउनु मात्र पनि मेरो अहोभाग्य हो । उहाँसँग निकट रहँदा मैले धेरै कुरा सिक्ने अवसर पाएँ । तर, आज उहाँ हामीबीच नहुँदा एउटा अभिभावक गुमाएको भान हुन्छ र शायद त्यो कमी सदैव रहिरहने छ । डा. द्रोणकुमार पौडेल जस्ता प्रकाण्ड विद्वान् तथा गुणी व्यक्तिको निधन परिवार र हामी आफन्तजनको मात्र होइन, सम्पूर्ण शिक्षा जगत तथा समाजकै ठूलो क्षति हो भन्दा किञ्चित अत्युक्ति हुँदैन ।

यस्ता परम श्रद्धेय दाजु डा. द्रोणकुमार पौडेललाई श्रद्धाञ्जलिस्वरूप एक-दुई पंक्ति कविता अर्पण गरेको छु । शार्दूलविक्रिडित छन्दमा मेरो अन्तरङ्ग हाम्रा प्रियदाजु स्व. डा.द्रोणकुमार उपाध्यायको स्मरणमा केही पंक्ति–

*आत्मा एक अनेक जीवहरूको यो सृष्टि आश्चर्यको*
*मृत्यु सत्य असत्यजीवन कठै! सम्पूर्ण ब्रम्हाण्डको*
*मर्नु नित्यअनित्यजीवनबुझ्तीदिव्यआत्माहरू*
*सारा तत्वबुझेर त्याग भवमाजन्मेर आउन बरु*

*हाम्राअन्तरका स्मरण हृदयका सद्भावकाअञ्जली*
*दिव्यात्माभई नित्यवास गरनु वैकुण्ठमा हर घडी*
*देहै मात्र रहेन आजभवमा सम्पूर्ण देख्छौ यहाँ*
*आत्मानित्य अमर छ भावयहीलीआनन्दहोलात्यहाँ*

*हामी छौं सब स्वार्थका भुमरिमा छिट्टै हजुर पाल्नुभो*
*सम्झन्छौं उही रूप त्यो हजुरको छिट्टै यहीँफाल्नुभो*
*कर्कटले कहिले लिएछ सहसात्यो वंशको बाहुली*
*सम्झीहंडमीत्यही स्वरूप रूपको दैनिकश्रद्धाञ्जली*

*युगको अन्त्यहुँदैन मानिस पछि जन्मिन्छ फेरि यहाँ*
*त्यै सम्झेर बुझाई चित्तअहिले यो काव्य संस्मृतिमा*
*श्रद्धाभाव लिएर विह्वलभई पोंखे यीशब्दावली*
*आत्मादिव्यबनोस् अमर बनिरहोस् यही छ श्रद्धाञ्जलि ।।*

*-बिर्तामोड नगरपालिका-१, झापा*

*(लेखक परिवार निकट व्यक्तित्व हुनुहुन्छ)*



पुष्पधर शर्मा (बास्तोला)

# मेरा अति आदरणीय दाइ द्रोणकुमार उपाध्यायलाई सम्झेर...

मानिसको जीवन वडा विचित्रको खेल रहेछ । हो, यो एउटा यात्रा हुँदाहुँदै पनि सबैका यात्रा एकै प्रकारका हुँदैनन् । प्रकृति एकै भए तापनि प्रवृत्तिले यात्राहरू छुट्टिन्छन्, स्पष्ट रूपले चिनिन्छन् । एउटा तयारी हुन्छ... प्रतीक्षा हुन्छ... केही अनुभूतिहरू बटुलिन्छन्... प्राप्ति र अप्राप्तिको जोडाइ-घटाइ गर्दागर्दै थाहै नपाई अन्त्य हुन्छ- एउटा जीवन यात्रा । मलाई कहिलेकाहीं लाग्छ, यो समय साह्रै निष्ठुर हुँदो रहेछ । हामी हाम्रा जीवनकालमा अनेकौं मानिसका सम्पर्कमा आउँछौं । अनेकौं जीवन देख्छौं, मृत्यु पनि देख्छौं । शत्रु-मित्र पनि भेटिन्छन्, जीवनका घुम्तीहरूमा । त्यसैभित्र केही जीवन अति अनमोल हुन्छन् हाम्रा लागि । ती अनमोल अथवा व्यक्तिका सम्पर्कले हाम्रो जीवनको गतिपथ नै परिवर्तित भएको हुन्छ । जब अपर्झट त्यस्ता कुनै व्यक्ति 'अब यस संसारमा रहेनन्' भन्ने दुःखद समाचार पाइन्छ; तब त्यस हुरीले हामीलाई भित्रैबाट तहसनहस पारेर जाँदो रहेछ !

खै कस्तो-कस्तो भयो भनेर भन्नै सकिन, जब मैले मेरा अति आदरणीय, मेरा आदर्श 'द्रोण दा' अब यस संसारमा हुनुहुन्न भन्ने अत्यन्त हृदयविदारक समाचार सुनें । एक किसिमको असह्य पीडाको अनुभव भयो । भित्र कहाँ हो कुन्नि, मुटु नै पो हो कि... फुट्ला जस्तो गरी दुख्न थाल्यो । डाको छोडेर रुन मन लाग्यो । धेरै दिनसम्म म सहज हुन सकिन-सकिरहेको छुइन ।

मेरा मानसपटलमा सदैव जीवन्त रहने मेरा आदरणीय दाइ द्रोणकुमार उपाध्याय बारे केही लेख्नुपर्ने भन्ने सोचेर नै मलाई एक किसिमको अप्ठ्यारो अनुभव भइरहेको छ । लेख्छु भनेर सोचेकै दिनदेखि चौतर्फबाट विचारहरूले आएर घेरेका छन् मलाई । यति धेरै शब्दहरू, यति धेरै कुराहरू लाम लागेर आएर मलाई शब्दहीन तुल्याएका छन् । यस्तै शब्दहीनताको स्थितिबाट केही शब्द खोज्ने प्रयास गर्नेछु, केही संस्मरणको धागामा उन्ने प्रयास मात्र गर्नेछु ।

'द्रोण दा'द्वारा म कहाँ-कहाँ प्रभावित भइन होला ? सामाजिक चेतना, मनोवैज्ञानिक अन्तर्दृष्टि, गहन भारतीय चिन्तन, प्रखर राष्ट्रभक्ति, एउटा जीवन जिउनुपर्ने कारण, मानिसप्रति मानिसको दायित्व, अति उच्च संस्कारित मनजस्ता अनेकौं गुणले सम्पन्न द्रोण दाको जीवन, कर्म र आदर्शले मेरो मन-मस्तिष्कलाई धेरै हदसम्म प्रभावित पारेको म अनुभव गर्छु । उहाँको छेउछाउसम्म पुग्नु मेरा लागि सम्भव छैन भनेर जान्दाजान्दै पनि मैले 'दादा'को अनुकरण गर्न भने छोडिन - यति कुरा स्वीकार गर्न पाएर मलाई आज गर्वको अनुभव भइरहेको छ ।

हाम्रो घर र द्रोण दाको घरका बीचमा केवल तीनोटा घर थिए । बालकदेखि नै मेरो रासोबासो दादाहरूका घरमै धेर हुन्थ्यो । त्यसको कारण पनि नभएको होइन । द्रोण दाका बुबा श्रद्धेय स्व.टीकाराम शास्त्रीज्यूले जो सबैको 'गुरुजी' हुनुहुन्थ्यो, मलाई औधि माया गर्नुहुन्थ्यो । गुरुआमा पनि उस्तै माया गर्ने । अनि मेरो बास घरमा कसरी हुने ? केवल राती सुत्ने बेलामा मात्रै म शायद घरमा हुन्थें होला । उहाँहरूकै काखमा लुटुपुटु खेल्दै, गुरुजीका साइकलमा झुण्डिएको दृश्यको सम्झना आज पनि मेरा स्मृतिमा जीवन्त छन् ।

समय आफ्नै गतिले दगुरिरहेको थियो । कक्षा सातको विद्यार्थी थिएँ शायद । उदालगुढीमा 'अखिल भारतीय नेपाली भाषा समिति'को राष्ट्रिय अधिवेशन सम्पन्न हुने भयो । स्वागतकारिणी समिति बन्यो । मेरा बुबा पनि त्यस समितिको सक्रिय कार्यकर्ता हुनुहुन्थ्यो । लामो समयसम्म बुबा दार्जीलिङ, कालिम्पोङ, सिलिगुडीतिर अल्मलिनु भयो । मौका छोपेर हाम्रा पसलमा राखेको मानिसले सर्वस्व लुटेर भाग्यो । बुबा त्यस मानिसलाई खोज्न गएर लामो समयसम्म हराउनुभयो । मेरो पढाइ अब एकदम ठप्प हुने अवस्थामा आयो । पढाइ छोडेर घर सम्हाल्नु पर्ने बाध्यताले मलाई छोप्यो । म एउटा माध्यमिक विद्यालयबाट उत्तीर्ण भएको थिएँ र उच्च माध्यमिक विद्यालयमा नाम दर्ता गराउनुपर्ने थियो ।

असलमा मेरो परिस्थिति बुझ्ने उमेर नै कहाँ थियो र ? तैपनि पढ्ने इच्छा थियो अनि दादाले मलाई सम्झाउनु भयो 'अलिकति कष्ट हुन्छ, तर तैंले पढाइ छोड्नु हुँदैन । म तँलाई ट्युशन खोजिदिन्छु, त्यसले तँलाई केही न केही सहयोग अवश्य मिल्छ । छोरो मान्छे भएर आत्तिएर हुँदैन । समस्या आउँछन् र जान्छन् पनि, जुझ्न सक्नु पर्दछ ।' यसरी नै दादाले मलाई साहस दिनुभएको थियो । साँच्चै त्यसबेला मेरा छेउमा कोही थिएनन् । कसैले सघाएका थिएनन् । दादाका ती उत्साहवर्द्धक शब्दहरू नै मेरा लागि मन्त्र साबित भए र मैले जीवनमा उभिन

सिकें । त्यसपछि 'द्रोण दा'बाट नै देश, समाज र राष्ट्र बुझें । धर्म-संस्कृति बुझें । जीवनको अर्थ बुझें । र, जीवनका कठिन परिस्थितिहरूसँग लड्नुपर्दा मैले कहिल्यै अल्मलिनु परेन । जस्तै परिस्थिति आए पनि आओस् भन्ने हिम्मत ममा उत्पन्न भइसकेको थियो । किनकि मसँग द्रोण दा हुनुहुन्थ्यो । दगुरेर 'दादा' छेउ पुगे भइगयो । त्यसबेला मेरो एक मात्र सहारा 'द्रोण दा' नै हुनुहुन्थ्यो ।

मलाई सम्झना छ । उदालगुढी भेकमा जे काम गर्नु परे पनि 'द्रोण दा' हुनैपर्ने हुन्थ्यो । यहाँका सबै जनगोष्ठीमा 'द्रोण दा'को उत्तिकै प्रभाव थियो । असम साहित्य सभा, नेपाली भाषा समिति, वनवासी कल्याण आश्रम आदि संस्थाहरूमा उहाँले अग्रणी भूमिका निभाउनुभएको हो । एकपटक दशैंका बेलामा 'मुकुन्द इन्दिरा' नाटकको मञ्चन पनि दादाकै नेतृत्वमा भएको हो । त्यस नाटकको सम्पूर्ण व्यवस्थामा दादा नै संलग्न हुनुहुन्थ्यो । मेरा लागि दादा Encyclopaedia (विश्वकोष) हुनुहुन्थ्यो । भाषा ज्ञानका क्षेत्रमा पनि उहाँ अतुलनीय हुनुहुन्थ्यो । नेपाली, संस्कृत, अङ्ग्रेजी, असमिया, बङ्ला, हिन्दी बाहेक उडिया र बोडो भाषाको ज्ञान पनि दादालाई थियो । राजवंशी भाषाको त कुरै नगरौ, त्यसको त उहाँ व्याकरण नै बनाउने मान्छे । उहाँले भाषा जान्नु भनेको अलि-अलि जान्नु भनेको होइन, उहाँ भाषा-विशेषज्ञ नै हुनुहुन्थ्यो ।

दादालाई देखेरै मैले संस्कृत सिक्ने इच्छा गरें । आफ्नो मातृभाषा जसरी भए पनि पढ्नु पर्दछ भन्ने उहाँको भनाइ थियो । त्यसैले मैले IDOL (Institute of Distance and Open Learning) गुवाहाटी विश्वविद्यालयको अधिनको व्यवस्था अन्तर्गत नेपाली पढें । मलाई लेख्ने प्रेरणा पनि दादाले नै दिनुभएको हो । द्रोण दा मेरा प्रेरणा, मेरा आदर्श, मेरा पथप्रदर्शक हुनुहुन्थ्यो । मेरा लागि मात्रै द्रोण दा आदर्श हुनुहुन्थ्यो भन्ने कुरा सम्पूर्ण शुद्ध होइन । किनकि यस्ता हजारौं विद्यार्थी दादाद्वारा अनुप्राणित भएका छन्, प्रेरित भएका छन् । दादाको स्पर्श पाएर धेरैको जीवनमा आमूल परिवर्तन भएको छ ।

शिक्षागुरुका रूपमा द्रोण दा एक जना आदर्श शिक्षक हुनुहुन्थ्यो । एक दिन दादाले अपर्झट घोषणा गर्नुभयो- 'म भारतमा बस्तिन' । मेरा प्रश्न थियो- 'किन ?' उहाँले उत्तर दिनुभयो - 'जहाँ मेरो कदर हुँदैन, जहाँ मेरो त्यागको गन्ती हुँदैन, जहाँ प्रत्येक पाइलामा मैले अपमान मात्रै खप्नुपर्छ भने म किन बस्नु यहाँ ?' कुनै कारणले गर्दा दादाको मन साह्रै दुखेको थियो । त्यसैले उहाँले आफ्नो जन्मथलो, कर्मथलो पनि छोड्ने कठोर सिद्धान्त लिनुभयो । साह्रै सजिलो थिएन, उहाँका लागि पनि ।

यस सिद्धान्तद्वारा उहाँ खुशी हुनुहुन्थ्यो भन्ने मलाई लाग्दैन । तर पनि दादाले त्यो सिद्धान्त लिनु नै भयो । दादा नेपालतर्फ लागेर त्यहाँ अर्कै माहौल, आफ्नो गुणले गर्दा सबैलाई साथमा लिएर रमाइलो परिवेश सिर्जना गर्न सफल हुनुभयो । म एक-दुईपटक त्यहाँ डुल्न जाँदा त्यसको महक पाएको हुँ ।

द्रोण दाले असम छोडेर जानु मेरा लागि अत्यन्त कष्टदायक कुरा थियो । किनकि मैले मेरो अभिभावकलाई छेवैबाट नभेट्ने कुरा सम्झेरै एउटा डर मेरा मनमा पसेको थियो- एक्लो हुने डर । परिस्थिति होला, नियति होला, बाध्यता होला । समय आफ्नै पाराले गतिमान थियो । दादाले विद्यावारिधि गर्नुभयो । विभिन्न विश्वविद्यालयहरूमा दादाका कार्यक्रमहरू हुन्थे । त्यो देखेर मलाई आनन्दको अनुभूति हुन्थ्यो । गौहाटी विश्वविद्यालयको दूरस्थ तथा मुक्त शिक्षण प्रणाली अन्तर्गत जब नेपालीमा एमए पाठ्यक्रम प्रारम्भ भएको थियो, तब दादालाई दुई-चार दिनका लागि अतिथि अध्यापकका रूपमा निम्त्याइएको थियो । त्यसैबेला यहाँका विद्यार्थीहरूले दादाको प्रकृत परिचय पाएका हुन् । त्यस्ता एक जना विद्वान् अध्यापकको मार्गदर्शन पाएर सबै खुशी भएका थिए ।

मेरा लागि सबैभन्दा ठूलो कुरा के हो भने द्रोण दाले मलाई पछिसम्म पनि उत्तिकै माया गर्नुभयो । जब-जब दादा असम आउनुभयो, मसँग उहाँको भेट भएकै थियो । उदालगुढीमा आउँदा पनि उहाँले मलाई नै लिएर साथीभाइ, आफन्तहरू भेट्न जानु हुन्थ्यो । त्यो मौका कसैले पनि पाउनु सम्भव थिएन । आज पनि सम्झिएर मलाई एउटा सुखद् अनुभूति हुन्छ ।

अन्त्यमा, दादा बिरामी भन्ने समाचार सुनें । म भद्रपुर गएर भेट्ने चाँजो मिलाउँदै थिएँ । मेरा बुबाले सुन्नु भएछ । बुबाको उमेर ९२ वर्ष । नभेटी नछोड्ने हुनुभयो । आमाको पनि इच्छा भेट्ने । मेरा बुबा र द्रोण दाका बुबा स्व.टीकाराम शास्त्री गुरुजीमा गहिरो मित्रता थियो । त्यसैले होला, गुरुजी दुरारोग्य कर्कट रोगले ग्रसित भएर थला परेका बेला सधैं छायाँजस्तै उहाँसँगै मेरा बुबा पनि बसिरहनु हुन्थ्यो । के गरौं भनेर अलमल्ल परिरहेको बेला थाहा पाएँ, दादाले रोगको उपचारको निम्ति राजस्थान जाने क्रममा गौहाटी एयरपोर्टमा ३-४ घण्टा विश्राम लिनुहुन्छ । सुन्ने बित्तिकै सबै थोक छोडछाड गरी हामी घरका सबै जना गौहाटी एयरपोर्टतिर लाग्यौं । एयरपोर्टका छेवैमा एउटा होटलमा दादा-भाउज्यूलाई भेट्यौं । त्यो थियो अत्यन्त हृदयविदारक दृश्य । अवर्णनीय दृश्य । बोल्नै सकेनौं... हामी रोयौ... सबै रोयौं । आज यहाँ सम्झना लेख्न बस्दा पनि मैले आँसु थाम्न

सकिन । हे दैव ! कत्ति असहाय हामी । कस्तो खेल नियतिको । बरु हाम्रो उमेर थपिदिन्थ्यौं दादालाई ।

एउटा व्यक्ति नभएर एक्लै एउटा अनुष्ठानसरि दादाको व्यक्तित्व र कर्म थियो । श्रद्धेय भाउज्यू, छोरा-छोरीहरूको कस्तो हाल भएको होला ! भन्ने कल्पना मनमा आउँदै भक्कानो फुटेर आउँछ । तर के गर्ने, हामी केही गर्न सक्ने स्थितिमा हुँदैनौं । जे जस्तो आइपर्छ, त्यसैलाई स्वीकार्दै हामी अघि बढ्न बाध्य छौं । यसरी नै हामीले सान्त्वना लिनुपर्दो रहेछ । यहाँनेर म परमपिता परमेश्वरसँग प्रार्थना गर्न चाहन्छु - 'हे प्रभु ! द्रोण दाको पवित्र तथा अमर आत्मा जो परमपिता परमेश्वरमै समाहित भएको छ, उसको शान्तिको कामना गर्नु एउटा औपचारिकता मात्र हो झैं लाग्छ । तर, दादाका आत्मीयजन श्रद्धेय भाउज्यू, छोरा-छोरी, दिदी-बहिनी, भान्जा-भान्जी, भतिजा-भतिजी, नाति-नातिना लगायत परिवारका जम्मैलाई यो दुःख सहन सक्ने शक्ति दिनू । दादाको सम्झना मुटुमा लिएर हामी हाम्रो कर्त्तव्यपथमा अग्रसर हुनसकौं । दादाले देखाएको बाटोमा हिंड्न सकौं ।' यही कामना...।

*-उदालगुढी, असम*

*(लेखक डा. द्रोणकुमार उपाध्यायले अध्ययन तथा अध्यापन गर्नुभएको उदालगुढी हाइस्कूलका प्रधानाध्यापक हुनुहुन्छ)*



प्रेमप्रकाश 'फलाहारी'

# साधक र साधनाभित्र डा.द्रोणकुमार उपाध्याय

एक दिन म त्रिफला सरस्वती मन्दिरको पूजा-आराधनामा व्यस्त रहेका बेला टेलिफोन बज्यो । पूजा छोडेर फोन उठाएँ । काठमाडौंबाट प्रा.डा.गोविन्दराज भट्टराईको रहेछ । २०७५ साल कार्तिक शुरुतिरको कुरा हो यो । उहाँले भन्नुभयो- 'असमका साहित्यकारहरूको टोली नेपालतर्फ साहित्यिक यात्रामा काँकरभिट्टा भएर आउँदै हुनुहुन्छ । उहाँहरूलाई त्रिफला राष्ट्रिय पुस्तकालयमा भव्य स्वागत गरौं भन्ने भएर फोन गरें ।' गोविन्द सर यस पुस्तकालयको संरक्षक समेत रहनु भएकोले सरको सल्लाह समितिबाट स्वीकार भयो ।

असम र नेपालका स्रष्टाहरूका बीच भाइचारा बढ्दै गएपछि साहित्यिक यात्रा गर्ने क्रममा असमी नेपाली स्रष्टा आठ जना नेपाल आउने भनेर सन् २०१७ अक्टोबरमा निश्चय गर्नु भएछ । नेपाली नाट्य सम्मेलन टोली (जसमा ज्येष्ठ स्रष्टा एवम् साहित्यकार समालोचक ज्ञानबहादुर क्षेत्री, असम नेपाली नाट्य सम्मेलनका अध्यक्ष चन्द्रमणि उपाध्याय, साहित्यकारहरू माधव भट्टराई, छत्रमान सुब्बा, कृष्ण आचार्य, विष्णु शास्त्री, प्राञ्जल प्रतिम बोरा, दीननाथ निरौला हुनुहुन्थ्यो) रेलमार्गबाट भोलिपल्ट सिलिगुडी हुँदै मेची तरेर काँकरभिट्टामा आइपुग्नु भयो । दश दिने यात्रा लिएर असमबाट २३ अक्टोबरका दिन बिहानै आइपुगेको सो पाहुना टोलीलाई काठमाडौंबाट आएका प्रा.डा.गोविन्दराज भट्टराई र त्रिफलाका उपाध्यक्ष रामप्रसाद दहाल सहित हाम्रो उपस्थितिले नेपालमा पहिलो स्वागत भयो ।

त्यसपछि त्रिफला राष्ट्रिय पुस्तकालयमा हामीले सम्बन्धित सबैलाई निम्ता गऱ्यौं । २०७५ कार्तिक ७ गते, बुधबारका दिन थियो । बिहान ११ बजे त्यो विशेष स्वागत कार्यक्रममा असम नाट्य सम्मेलनका अतिथिहरूलाई मेची क्याम्पसका डा.द्रोणकुमार उपाध्याय लगायत स्थानीय स्रष्टाहरू समेतले पुष्पमाला र खदा ओढाएर स्वागत गर्नुभयो । त्यस समयमा पूर्वी नेपालका स्रष्टा सर्जकहरूको बाक्लो उपस्थिति रहेको थियो । त्यसपछि त्रिफलाको सभाकक्षमा साहित्यिक जमघट

थियो । पुस्तकालयका केन्द्रीय अध्यक्ष प्रेमप्रकाश फलाहारी (मेरो) अध्यक्षता, संरक्षक डा.गोविन्दराज भट्टराईको निर्देशन अनुसार सञ्चालित सो कार्यक्रमका बीच यज्ञराज प्रसाईं, नसूह प्रसाईं, तेराख, विनोद खनाल, टीका सुवेदी, कृष्णप्रकाश सुमार्गी, देवीचरण भण्डारी लगायतका साहित्यकारले अतिथिहरूलाई पुनः खदा र पुष्पमाला लगाएर शुभकामना मन्तव्य प्रकट गर्नुभयो । सो सभामा शुभकामना मन्तव्य दिने क्रममा बोल्दै अतिथि डा.द्रोणकुमार उपाध्यायले भन्नुभयो- 'आफू बाल्यकालमा खेले-हुर्केकै भूगोलबाट आउनुभएका स्रष्टाहरूको आज यहाँ स्वागत गर्न पाउँदा जीवनमा आफूलाई ज्यादै भाग्यशाली ठानेको छु ।'

त्यसैबेला नै २००६ सालमा असम बिहाली बटियामारीमा जन्म भएको कुरा उहाँबाटै सुन्दा हामी सबै प्रशन्न भएका थियौं । टोलीका अग्रज व्यक्तित्व सभाका प्रमुख अतिथि समालोचक ज्ञानबहादुर क्षेत्रीले 'विश्व साहित्यका सेतु डा. गोविन्दराज भट्टराईबाट नै नेपालका मुख्य स्थानहरू भ्रमण गर्ने यो अवसर मिलाइदिएर नै आज यात्राक्रममा यहाँसम्म आइपुगेका छौं ।' त्यसपछि स्रष्टा एवम् असम नाट्य सम्मेलनका अध्यक्ष चन्द्रमणि उपाध्यायले आफूहरूको यात्राको उद्देश्य बारे जानकारी दिनुभएको थियो । आतिथेय संस्थाका तर्फबाट डा.भट्टराईले- पाहुना टोली झापापछि बिराटनगर, चितवन, काठमाडौं, पनौती लगायतका स्थानहरूमा हुने साहित्यिक गतिविधिमा सामेल हुँदै साहित्यिक क्रियाकलापको आदानप्रदान गर्न पाल्नुभएका अतिथिगणलाई साथ दिन पाएकोमा हर्ष प्रकट गर्दछु ।' भन्नुभएको थियो ।

डा.द्रोण सरसँग यसरी कहिले त्रिफलामा त कहिले लेखनाथ पुस्तकालय लगायत झापाका कार्यक्रमहरूमा बेलाबखत भेटघाट तथा बोलचाल भइरहथ्यो । बेलाबखत मेची क्याम्पसमा नानीहरूका भर्ना आदि काम लिएर जाँदा समेत उहाँसँग भेटघाट हुन्थ्यो र आवश्यक सहयोग पाइन्थ्यो पनि ।

अकस्मात २०७६ सालको वसन्त पञ्चमीका दिन साँझ डा.द्रोणकुमार उपाध्याय दिवङ्गत भएको समाचार सञ्चारमाध्यमबाट सुन्दा हामी पुस्तकालय परिवार नै स्तब्ध भयौं । यसै सन्दर्भमा उहाँको कर्मस्थल भद्रपुरमा द्रोण सरको व्यक्तित्व र कृतित्वको आधारमा रचना भेला पारेर श्रद्धासुमनस्वरूप एउटा स्मृतिग्रन्थ प्रकाशन गर्ने निर्णय भएछ । स्थानीय स्रष्टा खगिन्द्रा खुशीको अध्यक्षतामा प्रकाशन समिति गठन भएपछि उहाँले मलाई डा.द्रोणकुमार उपाध्यायका बारेमा प्रकाशन हुने सो स्मृतिग्रन्थ प्रकाशन समितिको सल्लाहकारमा चयन गरेको अवगत गराउँदै संस्मरण लेख्न हुन समेत अनलाइन माध्यमबाट अनुरोध गर्नुभएको रहेछ ।

डा.द्रोणकुमार उपाध्यायको संक्षिप्त परिचय र उहाँको कृति 'केही साधक : केही साधना' समालोचना सङ्ग्रह पनि प्राप्त भयो । हुन त चूमरेको प्रधान सम्पादकत्वमा प्रकाशित जुही लगायतका अनेकौं प्रकाशनहरूमा डा.द्रोण सरका रचनाहरू नछापिएका होइनन् । द्रोण सर प्राध्यापन पेशामा लगनशील व्यक्तित्व हुनुहुन्थ्यो । १४/१५ वर्ष अघिदेखि नै उहाँका रचना प्रकाशित हुँदै आएका हुन् ।

हामीले त्रिफला पुस्तकालयमा १३३ औं सम्म निरन्तर मोती जयन्ती मनाइरहेका छौं । कुनै न कुनै मोती जयन्तीमा डा.द्रोण सरको आतिथ्य हामी पाउँथ्यौं । मोतीराम भट्टप्रति उहाँको अगाध श्रद्धा रहेको थियो । उदाहरणका लागि, उहाँको समालोचना सङ्ग्रह - 'केही साधक : केही साधना' को प्रकाशन पनि २०६५ सालको मोती जयन्तीमा नै गर्नुभएको थियो । मोतीप्रति धेरै श्रद्धाभाव व्यक्त गर्नुहुने उहाँ भन्नुहुन्थ्यो- 'मानिसले केही नगर्दा पनि केही-केही गरिरहेकै हुँदो रहेछ । बाहिरी शरीर नचले पनि उसको भित्री मन त हरदम चलायमान रहेको हुन्छ । बाह्य जगतले भित्रलाई र भित्रीले बाहिरी जगतलाई चलाइरहेको हुँदो रहेछ ।' यसै पनि ठूला-ठूला तपस्वी योगी महायोगी अन्तरमुखी हुन्छन् । उनीहरूले जपतप र ध्यान साधनाबाट संसारलाई जितेको पाइन्छ । उदाहरणका लागि, भगवान् गौतम बुद्ध नै हुनुहुन्छ ।

डा.उपाध्यायले नेपाली साहित्य भण्डारलाई श्रृंगार गर्नुभएको छ । यसमा लामो समयदेखिका रचना र सिर्जनाले गर्दा निक्कै नै खँदिला र शिल्प रहेको सहजै आकलन गर्न सकिन्छ । महाकवि देवकोटा, शिरोमणि लेखनाथ पौडेल, तानासर्मा, सन्त ज्ञानदिलदास, वल्लभमणि दाहाल, पारिजात, वासु शशी, चन्द्रलाल शर्मा जस्ता थुप्रै तपोमूर्तिहरूका धुकधुकीभित्रदेखि काव्यिक मापन गरेर काव्य सिर्जना भएको रहेछ । म यसमा कवि छविलाल उपाध्यायले महाकविबारे लेखिएका छन्दका शब्दपुष्प र सुवासले पाठकलाई त्यसै मोहित पार्छ जस्ता शब्द-शब्द केलाएर, छिन्किएर फड्कारेर, निफनेर कृति कञ्चन पार्नुभएको छ ।

प्रा.होम सुवेदीले सो कृतिको भूमिकामा भन्नुभएको छ- यो लामो समयपछि आएको छ, जो खँदिलो छ । यसमा केही भारत र केही नेपालका स्रष्टाहरूका गहन कृतिमा समालोचना गरेर कृतिको ओज बढाइएको छ । थालनीमा कवि छविलालले देवकोटाप्रति अगाध श्रद्धा गर्दै पहिलो कविता यसरी लेखेका छन्-

*कस्तो काव्य म लेख्न सक्छु कविकै गाथा सुनाओस् यहाँ,*
*मेरा नायक हुन् महाकवि स्वयम् श्री देवकोटा यहाँ ॥*

डा.द्रोण सरले यसरी समालोचनाको चाल्नीबाट छानेर छामेर गहन अध्ययनबाट यो कृति तयार पार्नुभएको छ । यसमा अर्को मैया साहेब...भिक्षुलाई...! भिक्षुका कथा अरुका नाटकभन्दा अलग्ग छन् । उनका काव्यमा रमाइलो, जहिल्यै आनन्द दिने र चखिला छन् । गुफाभित्र चहारेर रमाउने कथाकारहरू बाहिरी संसारलाई बिर्सने गर्छन् । यी पङ्क्तिबाट के बुझ्न सकिन्छ कि संसारलाई चलाउने तत्व भित्रैबाट उम्रिंदो रहेछ । यस कृतिमा रचनाहरू धेरै छन्, तिवारीको काशीबास नाटक, कमला बज्यैको बनारसमा युवावस्थामा विवाह हुन्छ, उनका पति कुलतमा फसेर कलिलो अवस्थामै सन्तान दिएर मृत्यु हुन पुग्छन् । तत्पश्चात् बैधव्य जीवनमा त्यस्तै बाबु जस्तै कुलङ्गार भएका छोरा पाल्न धौ-धौ परेको र यो बैधव्यभार निल्न न ओकल्न जस्तै भएको छ । पुण्यभूमि काशीमा धर्मार्थी पुण्यार्थी, शिक्षार्थी र भलाद्मी मात्र छैनन् । यहाँ पापी पाखण्डी शठ र धुन्धुकारी पनि बस्छन् जस्ता वाक्यहरू पढ्दा मेरा नयन रसाएर आए । आफू निद्राबाट झल्यास्स ब्यूँझे झैं भएँ अनि 'सदाप्रशन्न...स्वर्ग र अत्यन्त कोप...नर्क' भनेको हामीभित्रै स्वर्ग र हामीभित्रै नर्क छ भन्ने वाक्यांशको अर्थ प्रष्ट भयो ।

उक्त कृतिभित्र उल्लेख भएका रचनाहरू पढ्न थालेपछि बिसाउन मनै लाग्दैन । फेरि पनि सबै लेख पठनीय छन्, ज्ञानबर्द्धक मानिन्छन् । डा.द्रोणकुमारको यस कृतिभित्र डुबुल्की मार्दा मनै तृप्त भएको महसूस हुन्छ । यसका अतिरिक्त आजकालका लेखकहरूले साधुसन्तलाई पशुतुल्य ठानेका कुराहरू पाइन्छन् । तर, त्यसो नभएर उहाँले त यहाँ साँच्चै ईश्वरको अंश झैं बडो श्रद्धा दर्शाउनुभएको रहेछ । सन्तको परिचयात्मक सिर्जना लेख्नुभएको छ । उदाहरणका लागि, सन्त ज्ञानदिलदास मेचीका सन्त शीर्षकमा खोजमूलक रचना आएको छ ।

प्रसङ्गवश मैले एउटा कुरा सम्झें... झण्डै १० वर्ष अगाडिको कुरा हो, सन्त ज्ञानदिलदासको जीवनी खोज गर्दै सिक्किमका एक जना पत्रकार हेमन्त गिरी त्रिफला राष्ट्रिय पुस्तकालय-झापामा बास बस्दै आएका थिए । मलाई उनले उहाँको विषयमा सोधेर तिरिखिरी पारे । अहिले यहाँ ज्ञानदिलदासलाई पढ्न पाउँदा सहर्ष र बिस्मात दुबै पाएर म आश्चर्यचकित हुन पुगेको छु । डा.द्रोणकुमार उपाध्यायले खोज गरेको यस कृतिमा सन्त ज्ञानदिलदासको जन्म मेची अञ्चलको इलाम आमचोक भन्ने ठाउँमा वि.सं. १८७८ मा लामिछाने परिवारमा भएको, दार्जीलिङमा रहेर सिक्किम गेजिङ धामको स्थापना गर्नुभएको, पछि जेरुङ्ग देवानले भत्काइदिएको, १९४० असोजमा आफ्ना चेलाहरूलाई बोलाएर सबैका बीचमा

पूर्वघोषणा गरी आफैं मृत्युवरण गरेको उल्लेख छ ।

सन्त ज्ञानदिलदास साहसी पुरुष थिए । उनी मधुक्कडी भाषामा लेख्थे, त्यो बेला उनले उदयलहरी पनि लेखेका थिए । यो उनको उच्चकोटीको नेपाली भाषाको रचना हो । यस्तै गरेर मेची अञ्चल एउटा सन्तहरूको उर्वर स्थल मानिन्छ, जहाँ डा. स्वामी प्रपन्नाचार्य, विभूति फाल्गुनन्द लिङ्देन, गुरुजी मङ्गलदासजी महाराज, जगन्नाथ गुरागाञी, स्वामी सोमेश्वरा नन्द, स्वामी गायत्री स्वरूप ब्रह्मचारी जस्ता थुप्रै महात्माहरू मेची अञ्चलमा पदार्पण गर्नुभयो र सुमार्ग देखाएर परम्पद हुनुभयो । यस्ता सन्तहरूको नीति र निष्ठा पालना गर्न सके मातृभूमि अवश्य स्वर्ग बन्छ ।

डा. द्रोण सरको पारिवारिक संरचना : टीकाराम र भेजमाया पौडेलको कोखबाट वि.सं.२००६ मा बियाली, बटियामारी, असममा जन्मिएका द्रोणकुमार पौडेलको २९ वर्षको उमेरमा मीरादेवीका साथ वैवाहिक कार्य सम्पन्न भएको थियो । उहाँका एक छोरा, दुई छोरी, पाँच नाति- नातिनाहरूको जन्म, लालनपालन, शिक्षादीक्षा, विवाहकर्म आदि आफ्नो गच्छेअनुसार गर्नुभएको पाइन्छ । उत्तरबङ्ग विश्वविद्यालयबाट नेपाली सवाईमा पीएचडी. गरेका पौडेलले मेची बहुमुखी क्याम्पसमा करीब तीस वर्ष स्नातक तहसम्म अध्यापन र स्नातकोत्तर कार्य गरी सेवा पुऱ्याएको देखिन्छ ।

सन् १९९७ को सहलेखन नेपाली लोककथा सङ्ग्रह श्रीमती मीरा पौडेलबाट, २०६७ मा प्रकाशित सवाई काव्यको सैद्धान्तिक परिचय समेत नौ वटा कृतिहरू प्रकाशमा आएका छन् । जसमा कथा, भाषा साहित्य, व्याकरण, समालोचना, समीक्षा र लोकवार्तामा आधारित काव्यहरू छन् ।

उहाँ मातृभूमि स्वयम्सेवक संघदेखि हिन्दू स्वयम्सेवक संघसम्म १५ जति संघ-संस्थाहरूमा आबद्ध रहनुभएको थियो भने जुही त्रैमासिक २०४९ सालदेखि मनोरथ दहाल काव्य पुरस्कार समेत १६ वटा सम्मान तथा पुरस्कार हासिल गर्नुभएको थियो । दर्जनौं कार्यपत्रहरू राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरसम्म प्रस्तुत गर्न विभिन्न देश-परदेशको भ्रमण पनि गरिसक्नु भएको पाइन्छ ।

यस्ता विद्वान डा.द्रोणकुमार उपाध्यायको भौतिक शरीर अब हामी बीच नरहे पनि उहाँका सत्कीर्तिहरू युगौंसम्म अमर रहिरहनेछन् । उहाँलाई यही शब्द श्रद्धाञ्जलि अर्पण गर्दछु ।

*मेचीनगर- १० (प्रदेश नं- १)*

*(लेखक त्रिफला राष्ट्रिय पुस्तकालय धुलाबारीका अध्यक्ष तथा सामाजिक अभियन्ता हुनुहुन्छ)*

# प्रा.डा. द्रोणकुमार उपाध्याय : समावेशी लेखक



फूलमान सिंह



तुलाराम राजवंशी

प्राध्यापक डा. द्रोणकुमार उपाध्याय नेपालको विशिष्ट लेखक, अन्वेषक, विश्लेषक र साहित्यकार हुनुहुन्थ्यो । उहाँका लेख-रचनाहरू अध्ययन गर्दा उहाँ नेपाली भाषामा मात्र लेख्ने गर्नु हुन्नथ्यो । उहाँले नेपाली भाषाका साथसाथै असमिया, बङ्गाली, हिन्दी, अङ्ग्रेजी भाषाहरूमा पनि अनुसन्धानात्मक लेख-निबन्धहरू लेख्नुभएको छ । यसबाट के बुझ्न सकिन्छ भने, विभिन्न भाषाको लेख्य र कथ्य दुइटै क्षेत्रमा उहाँको राम्रो दख्खल थियो ।

नेपालको प्रथम र दोस्रो जनगणनाताक सुदूर पूर्वी तराईको झापा जिल्लामा राजवंशी भाषा प्रथम स्थानमा थियो । तेस्रो जनगणनामा आएर झापामा राजवंशी भाषालाई उछिनेर नेपाली भाषा प्रथम स्थानमा परिणत भएको छ । वर्तमानमा झापा जिल्लामा नेपाली भाषा प्रथम स्थानमा छ भने राजवंशी भाषा दोस्रो स्थानमा रहेको छ ।

वि.सं. २०४० मा भद्रपुर नगरपालिकास्थित देवकोटा स्मृति भवनमा 'राजवंशी भाषा प्रचार समिति' नामक संस्था स्थापना भएको थियो । उक्त संस्थाद्वारा राजवंशी भाषामा विभिन्न पत्र-पत्रिका, पुस्तक-पुस्तिकाहरू देवनागरी लिपिमा प्रकाशित भएका छन् । डा.द्रोण सरको राजवंशी भाषा, संस्था र राजवंशी साहित्यिक गतिविधिप्रति गहिरो दिलचस्पी थियो । उहाँले लेख्नुभएको पुस्तक- राजवंशी परिचय (भाषा, लिपि र व्याकरण खण्ड) राजवंशी भाषा प्रचार समितिले २०५५ सालको पुस ५ मा प्रकाशित गरेको थियो । उहाँले राजवंशी भाषा प्रचार समितिका पदाधिकारीहरूलाई भाषा-साहित्य, लेख-रचनाका सम्बन्धमा सल्लाह-सुझाव निरन्तर दिइराख्नु हुन्थ्यो ।

द्रोणकुमार उपाध्याय सरले आफ्नो पुस्तक 'लोकवार्ता : लोककै चर्चा'मा नेपालमा बसोबास गर्ने राजवंशी जातिको इतिहास र संस्कृति बारे प्रष्टसँगले लेख्नुभएको

छ। साथै 'महानन्द स्मारिका २०५७' मा प्रकाशित स्मारिकामा आफ्नो खोज अनुसन्धानबाट झापा जिल्लाको नामकरण 'यस भेकका सबैभन्दा धेरै संख्यामा रहेका आदिवासी राजवंशीहरूको भाषाबाट लिइएको हो' लेख्नुभएको छ। त्यसरी नै 'जागरण' भन्ने राजवंशी भाषाको साहित्यिक पत्रिकामा उहाँले 'राजवंशी जाति : एक ऐतिहासिक अवलोकन' शीर्षकको अनुसन्धानमूलक लेख लेख्नुभएको छ।

उहाँमा प्रबल राष्ट्रिय भावना थियो। उहाँले एक दिनको मन्तव्यमा भन्नु भएथ्यो 'नेपाल बहुजाति, बहुभाषी, बहुसंस्कृति भएको सुन्दर फूलबारी हो, यस फूलबारीमा हरेक फूलहरूले फल्ने- फुल्ने मौका पाउनु पर्छ। अनि मात्र नेपाल सुन्दर, शान्त र विशाल देश बन्दछ।' उहाँको २०५५ साल पुस ५ गते प्रकाशित 'राजवंशी परिचय (भाषा, लिपि र व्याकरण) पुस्तकको मन्तव्यमा उहाँले लेख्नुभएको छ- 'नेपाल चार वर्ण छत्तीस जातको फूलबारी भएकोले यहाँ उम्रेका प्रत्येक फूल फक्रियोस्, फुलोस् र मौलाओस्, कहिल्यै नमुर्झाओस् भनी मलजल गरिरहनु यहाँका सबै मालीहरूको उद्देश्य हुनु उचित देखिन्छ। राजवंशी फूल पनि नेपालको पूर्वी प्रवेशद्वारमा आफैं ढकमक्क फुलेर शोभा बढाइरहेको छ।'

द्रोणकुमार उपाध्याय सरले भन्न खोज्नुभएको तात्पर्य के हो भने, नेपालमा जति पनि भाषाविद्, साहित्यकार, विश्लेषक, अनुसन्धानकर्ताहरूले आफ्नो मौलिक मातृभाषामा मात्र लेख रचना लेख्ने होइन, नेपालभित्रका विविध भाषाहरूमा एकले अर्काको भाषालाई सम्मान र सद्भाव गर्नु पर्दछ। नेपालभित्रका भाषाहरूलाई सम्बर्द्धन गर्न लेख, रचना, अनुसन्धान विश्लेषण साथै ती भाषामा पुस्तकहरू तयार गर्नु पर्दछ। नेपालभित्रका 'विविध भाषा, साहित्य, संस्कृतिलाई राष्ट्रिय स्तरमा ल्याउन सके साँच्ची नै नेपाल समावेशी भाषा, साहित्य र संस्कृतिले भरिपूर्ण हुनेछ। यसका लागि यस क्षेत्रमा लागेका सम्पूर्ण मालीहरूको साझा उद्देश्य हुनु पर्दछ भन्ने उदात्त भावना राख्ने द्रोणकुमार उपाध्याय सर यस मानेमा एक विशिष्ट खालको समावेशी लेखक, साहित्यकार, विश्लेषक र अनुसन्धानकर्ता हुनुहुन्थ्यो।

उहाँसँग लामो समयको सम्पर्कले गर्दा राजवंशी भाषा प्रचार समितिका पुराना जति पनि सदस्य पदाधिकारीहरू छौं, उहाँको भौतिक अनुपस्थितिले राजवंशी भाषा संस्कृति विकासको क्षेत्रमा अपूरणीय क्षति भएको ठान्दछौं। उहाँले दिएको अमूल्य योगदानको राजवंशी भाषा संस्कृति साहित्य परिषद् उच्च मूल्याङ्कन गर्दछ।

**सचिव : तुलाराम सिंह राजवंशी** **अध्यक्ष : फूलसिंह राजवंशी**

*राजवंशी भाषा संस्कृति साहित्य परिषद्, भद्रपुर, झापा*



प्रा.डा.भीम खतिवडा

# डा. द्रोणको कीर्तिसौरभ

एकै भेट पनि जिन्दगीको अविस्मारक पल बन्दोरहेछ । म आज निकै भावुक बनेर समयको गतिलाई नियाल्दै अतीतका घुर्मैला घटनाहरू सम्झिरहेछु । त्यसो त जीवनका घुम्तीहरूमा हजारौँ, लाखौँ मानिसहरूसँग जम्काभेट हुन्छ; तर पानीमा हिंडडेझैँ त्यस्ता आकस्मिक मिलन-स्मृतिका पाइलालाई समयको प्रवाहले सिनित्तै पारिदिन्छ । अँ, सम्झनाको कुनामा कुनै-कुनै यादका दसीहरू चाहिंड अमिट बनिरहन्छन्... जहाँ एउटा मुहार, एकजोर आँखा र तिनैभित्र खोपिएको व्यक्ति प्रभावको कालजयी छापा हुन्छ । हो, यस्तै हृदयमा खोपिएको छापाको पहिलो हारीमा एउटा नाम छ : डा.द्रोणकुमार उपाध्याय ।

'०६ सालको बर्खे झरीमा भारत, असमको बटियामारी गाउँमा जन्मिएका थिए, उनी । आमा भेजमाया र बाबा टीकारामका सुपुत्र द्रोणको २८ वर्षको उमेरमा २०३४ सालको फागुनमा मीरादेवीसँग दाम्पत्यको सूत्र कसियो । उनी यशवन्त, योगिता र यवनिकाजस्ता प्रिय सन्ततिका साथ जीवनमा सफल यात्री बनिरहे ।

असमकै गुवाहाटी विश्वविद्यालयबाट सन् १९७१ मा स्नातक गरेका उपाध्यायले सन् १९७३ मा त्रिभुवन विश्वविद्यालय, काठमाडौंबाट नेपालीमा स्नातकोत्तर गरेका हुन् । लेखन तथा अनुशीलनको लत लागेका द्रोण सरले नेपाली सवाईमा सन् २००४ मा भारतको उत्तरबङ्ग विश्वविद्यालयबाट विद्यावारिधि गरेरै छाडे । नेपाली, संस्कृत, अङ्ग्रेजी, हिन्दी, बाङ्गला, असमिया तथा राजवंशीजस्ता सात भाषामा भावनाको सम्प्रेषणको तागत भएका अनुसन्धानधर्मी उपाध्याय २०३८ देखि २०६९ सालसम्म मेची बहुमुखी क्याम्पस, भद्रपुरमा प्राध्यापनमा सक्रिय रहे ।

मैले जानेसम्म यी कलमका सारथिले जाति, भाषा, साहित्य, लोकसंस्कृति आदि विविध विधासम्बद्ध दर्जनको हाराहारीमा अनुसन्धानमूलक कृति छाडेर गएका छन् । प्रकाशनको अनुहार देख्न बाँकी अन्य कृतिहरूको सूची पनि सुरक्षित

नै छ, भन्ने लागिरहेछ । यिनको पहिलो कृति जातीय पहिचानको सम्मानमा आएको देखिन्छ । 'राजवंशी परिचय ः जाति, भाषा र साहित्य' नामक उक्त कृतिलाई राजवंशी भाषा प्रचार समिति, नेपालद्वारा सन् १९९४ मा प्रकाशन गरिएको थियो । लोकसाहित्यको अनुसन्धानमा तल्लीन द्रोण सरको पहिलो नेपाली लोककथा सङ्ग्रह असमिया भाषामा प्रकाशन भएको देखिन्छ । सहलेखनबाट तयार भएको 'नवमी' नामको उक्त कथाकृति असम साहित्यसभा, गुवाहाटीबाट सन् १९९७ मा प्रकाशित भएको हो । सहलेखनबाटै आएको उनको भाषिक अनुशीलनको अर्को कृति 'आदर्श नेपाली व्याकरण' हो र यसलाई उदालगुडी, असमकी किरणवाला भट्टराईद्वारा सन् २००५ मा प्रकाशन गरिएको हो । 'भाषिक चिन्तन' उनको २०६५ वि.सं.मा आएको अर्को भाषिक विश्लेषणात्मक रचनासङ्ग्रह हो, जसलाई यशवन्त पौडेल, काठमाडौंद्वारा प्रकाशन गरिएको थियो । 'केही साधक ः केही साधना' उनको समालोचना सङ्ग्रह, वि.सं. २०६५ मा प्रकाशन भएको पाइन्छ भने 'लोकवार्ता ः लोककै चर्चा' चाहिंड लोकसाहित्यसँग सम्बन्धित समीक्षात्मक प्रबन्धहरूको वि.सं. २०६५ मा छापिएको सङ्ग्रह हो । 'लोकवार्ता सिद्धान्त ः नेपाली सन्दर्भ' उनको सबैभन्दा महत्वपूर्ण र खोजमूलक कृति मानिन्छ । नेपाल प्रज्ञा प्रतिष्ठान, काठमाडौंद्वारा २०७४ सालमा यसको प्रकाशन भएको हो । 'भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा' उनकै जीवनसंगिनी मीरा पौडेलले सन् २०११ मा छापेको अनुसन्धानमूलक कृति हो । उनै मीराले आफ्ना जीवनसाथीको लोकजीवनमाथिको गम्भीर अनुसन्धानात्मक कृति 'सवाई काव्यको सैद्धान्तिक परिचय' २०६७ मा प्रकाशन गरेको देखिन्छ । पूर्वोक्त कृतिका अतिरिक्त द्रोण सरका कलमको ऊर्जाले विभिन्न राष्ट्रिय-अन्तर्राष्ट्रिय पत्रपत्रिकाहरूमा नेपाली, हिन्दी, अङ्ग्रेजी तथा असमिया भाषामा अनुसन्धानमूलक र विश्लेषणात्मक लेख निबन्धहरूको प्रकाशनसँगै विभिन्न भाषाका पत्रपत्रिकाको सम्पादन र प्रकाशनसमेत गरेर हामी सबैका लागि प्रेरणाको उज्यालो छरेको पाइन्छ ।

२०७० सालमा लेखनाथ पुस्तकालय, भद्रपुरले द्रोण-सम्मान गरेको कार्यक्रम होस् वा त्यसअघि र पछिका कार्यक्रमहरू नै हुन्, एकपटकको लामो जातीय भाषिक-सांस्कृतिक विमर्शबाहेक हाम्रो औपचारिक भेटघाट र कुराकानीमै सीमित रहे सबै । त्यही विमर्शको पल मेरा लागि द्रोणस्मृतिको सबल सूत्र बनेको छ । प्राज्ञिक अनुशीलनमा रमाउने व्यक्तित्व भए पनि यिनी धार्मिक-सांस्कृतिक जागरण र अभियानहरूमा पनि जाँगरिला देखिन्थे । प्राध्यापन, लेखन-अनुसन्धान तथा

सांस्कृतिक जागरणजस्ता तीनखाले सक्रियताका लागि द्रोण सरले तीन वटै पक्षबाट आदर र सम्मान पाएबाट उनका सत्कर्मको अनुशरणमा हामी सबैलाई उत्साही बनाइरहने नै छ । ठूल्ठूला टाउका मात्र देख्ने सरकारी आँखा नपुगेर के भयो र, ससाना कामले खुशी हुने जनता र हाम्रो दरकारी समुदायका आदरका आँखामा सधैं रहिरहेकै छन्- हाम्रा द्रोण उपाध्याय सर ।

वैदिक सनातन संस्कृतिमा गहिरो आस्था भएका द्रोण सरको नेपाली संस्कृति र सभ्यताप्रति समर्पणभाव थियो । धर्मान्तरण र धर्मभित्रका विकृतिहरूप्रति गहिरो चिन्ता लिने उपाध्यायले आफूलाई नरुचाउनेसँग पनि नबिझाउने मिजास साँचेका थिए । स्वाध्याय र स्वचिन्तनले खारिएको उनको प्राज्ञिक हैसियतप्रति समकालीन सबैमा गर्व थियो । हो, द्रोण सरको परिचय र भूमिका यही बन्यो, जीवनकै अन्तिम प्रहरसम्म नै । अब हामीसँग उनका कृति साथी र साक्षीसमेत बनेका छन्, कीर्तिका पताका बनेर । अक्षरकर्मका अमर शिल्पी तथा नवनवोन्मेषशालिनी प्रज्ञाले सार्थकनामा यस्ता सफल अनुसन्धाताप्रतिको स्मृतिसम्मान र कीर्तिगान हाम्रो निर्विकल्प कर्त्तव्य बनिरहने छ ।

*(लेखक पिण्डेश्वर क्याम्पस धरानका पूर्वक्याम्पस प्रमुख एवम् प्रखर साहित्यकार हुनुहुन्छ)*



भवानी क्षेत्री

# सम्झनामा द्रोण पौडेल

जीवन यात्रा गर्दैजाँदा आउने चौतारो, चौबाटो, दोबाटोमा अनगिन्ती मानिसहरूसँग भेट हुन्छ । समय-समयमा यसरी भेटिएका ती मानिसहरू सबै सधैं स्मृतिमा रहिरहँदैनन् ।समय बित्दै जाँदा विस्तारै विस्तारै विस्मृतिमा बिलाउँदै जान्छन्, हिजो भेटिएका धेरै मानिसहरू । केही मानिसका केही कुराहरू भने मानसपटलमा शिलालेख झैं बसिरहन्छन् । शायद ती कुराहरू भनेका उनीहरूमा विराजमान गुणहरू होलान् । उनीहरूको हाँसेर बोल्ने बानी, आफूलाई गरेको व्यवहार, सहयोग, उत्साह बढाउने शैली आदि आदि नै सम्झना बनेर आउने वाहक होलान् ।

द्रोणजी पनि बेला-बेला मेरो सम्झनामा आउने एक जना पात्र हुनुहुन्थ्यो । हुन त मसँग लामो संगत, धेरै घुलमिल, बाक्लो हिमचिम भएन उहाँको । झापामा हुने त्यसमा पनि चन्द्रगढीमा बेलाबेलामा हुने कार्यकमहरूमा उहाँसँग मेरो धेरैजसो भेट भएको हो । यसरी पातलो संगत गरेका मानिसका विषयमा लेख्न बस्ता के लेख्नु-के लेख्नु भयो मलाई । म उहाँका परिवारका बारेमा पनि केही जान्दिन, कसैलाई चिन्दिन । मेची क्याम्पसमा नेपाली विषय प्राध्यापन गराउने सहप्राध्यापकका रूपमा मात्र चिन्दथें म उहाँलाई । उहाँको व्यक्तिगत विवरण पढेपछि थाहा पाएँ, उहाँका दुई छोरी र एक छोरा रहेछन् ।

तर पनि मेरो सम्झनामा आउनुहुने एक पात्र हुनुहन्छ उहाँ । थोरै भेटघाट भए पनि भेट्दा घनिष्ट मित्रझैं हाँसेर बोल्ने उहाँलाई सम्झिन्छु म । द्रोण भन्नासाथ त्यही हँसिलो अनुहार स्मृतिमा झलक्क आउँछ । उहाँको सरल र सादापन असाध्य मन पर्थे मलाई । घनिष्टता कम भएर हो वा स्वभाव नै त्यस्तै हो कुन्नि... उहाँले रिसाएको, झ्वाँक्किएको, कटु बचन बोलेको कहिल्यै सुनिन मैले ।

धेरै वर्ष अघि लेखनाथ चोकको पश्चिमपट्टि एउटा पसल अगाडिको बरण्डामा

भएको लेखनाथ पुस्तकालयको कुनै एउटा कार्यक्रम सम्झन्छु । त्यो कार्यक्रममा उहाँ उद्घोषक हुनुहुन्थ्यो । सिकारु कविका रूपमा म पनि उपस्थित थिएँ त्यहाँ । कार्यक्रम सकिएपछि राम्रो कविता सुनाउनुभयो, वाचन पनि राम्रो थियो भनेर उहाँले मेरो हौसला बढाउनुभएको सम्झन्छु आज पनि ।

उहाँका विषयमा लेख्दै गर्दा मलाई दुःख लागेको छ र लागेको छ- मेरो विषयमा उहाँले लेख्नु पर्ने थियो, तर मैले लेख्नु पर्‍यो; उल्टो भयो । मन खिन्न भएको छ ।

कतै उद्घोषक, कतै शोधकर्ता, कतै वक्ता, कतै दर्शकका रूपमा भेटिनु भएका द्रोणजीका विषयमा यति लेख्न सकें मैले ।

*४ माघ २०७७ साल*

*-बिर्तामोड- ५, झापा (नेपाल)*

*(लेखक प्रखर आख्यानकार तथा कवयित्री हुनुहुन्छ)*



मधु पोखरेल

# बहुआयामिक व्यक्ति-डा. द्रोण

१. डा. द्रोणकुमार पौडेल - एक मेधावी विद्यार्थी
२. डा. पौडेल सरल एवम् सहृदयी व्यक्तित्व
३. डा.द्रोण - जिज्ञाशु एवम् अन्वेषक व्यक्ति
४. डा.पौडेल - इमान्दार एवम् लागनशील शिक्षक
५. डा. द्रोण - विविध भाषाका ज्ञाता
६. डा. पौडेल - साहित्यिक र लोकसाहित्यका ज्ञाता।
७. द्रोणकुमार - विभिन्न राष्ट्रिय/अन्तर्राष्ट्रिय सेमिनारमा कार्यक्रम प्रस्तोता।

१/ माथिका यिनै विशेषताभित्र रहेर यो आलेख तयार गर्ने जमर्को गरेको छु। प्रथमतः डा.द्रोण सानैदेखि एक लगनशील, होनहार र मेधावी हुनु पर्छ। आफ्नै जन्मस्थल असमको विद्यालय र विश्वविद्यालयहरूमा स्नातकसम्म अध्ययन गरी स्नातकोत्तर त्रिभुवन विश्वविद्यालयबाट सम्पन्न गरेपश्चात उनी २०३८ देखि मेची बहुमुखी क्याम्पसमा प्रवेश गर्न पुगे। अध्यापन कार्य गर्ने पौडेलले झण्डै तीन दशक सोही कलेजमा बिताउनुभएको देखिन्छ।

२/ उनी अन्तरमुखी स्वभावको गम्भीर व्यक्ति झैं देखिने, झट्ट हेर्दा। उनीसँग त्यति लामो अन्तरंग सम्बन्ध पनि रहेन मेरो। चन्द्रगढी-भद्रपुरका विविध साहित्यिक कार्यक्रमहरूमा हाई-हेल्लो हुन्थ्यो, कुशलक्षेम आदानप्रदान, यस्तै नै थियो- मेरो र डा. पौडेलबीचको सम्बन्ध। यसैबाट भन्न सकिन्छ- उनी अत्यन्त सरल, कसैको कुभलो नचिताउने सहृदयी व्यक्ति थिए। किनकि २०६३ देखि २०६५ सालसम्म म झापा बस्दा कसैबाट पनि उनका बारे नकारात्मक कुरा सुन्नु परेन।

३/ नेपाली भाषा-साहित्यका क्षेत्रमा विशेषगरी लोकसाहित्यका विषयमा उनको जिज्ञाशु व्यक्तित्व थियो। त्यसैकारणले नै लोकजिबानका नेपाली सवाई विषयमा विद्यावारिधिको उपाधि हासिल गर्न सक्षम व्यक्तित्वमा दरिएका छन्।

नयाँ-नयाँ क्षेत्रहरूमा खोज-अनुसन्धान गर्न प्रयत्नशील उनी 'अरुले कलम नचलाएका धेरै विषयवस्तुहरूमा रुचि राख्दा रहेछन् भन्ने कुरा विद्यावारिधिकै लागि चयन गरेको विषय, पिछडिएका र सोझा जाति राजवंशीको परिचय, तिनको भाषा-साहित्य बारेको अनुसन्धानात्मक आलेख, भारतीय-नेपाली साहित्यको ऐतिहासिक रूपरेखा बारेको कृति प्रकाशनले पनि स्पष्ट हुन्छ ।

४/ असम र नेपालको महाविद्यालय, खासगरी मेची बहुमुखी क्याम्पस-भद्रपुर झापामा तीन दशकको अध्यापन गरी सहायक क्यामपस प्रमुख र नेपाली विभागको प्रमुख (तीन कार्यकाल) जस्तो जिम्मेवारी पाउनु नै उनको इमानदारी एवम् लगनशीलताको प्रमाण हो । त्यसै भएर उनका बारेमा नराम्रो टीकाटिप्पणी भएको कहिल्यै सुनिएन ।

५/ विविध भाषाका ज्ञाता डा.द्रोणलाई विभिन्न जातजातिका भाषामा आफ्नो दखल राख्न सक्षम व्यक्तित्वका रूपमा पनि सम्झनु पर्छ । नेपाली त उनको मातृभाषा नै भयो, त्यो बाहेक उनी अङ्ग्रेजी असमिया, बङ्गाली, हिन्दी, संस्कृत र राजवंशी भाषामा पनि बोल्न-लेख्न सक्ने व्यक्तित्व थिए । नेपाली लोककथा सङ्ग्रहलाई असमिया भाषामा लेख्नु, राजवंशी बारे खोज-अनुसन्धान गर्नु तथा अङ्ग्रेजी र हिन्दी भाषामा कार्यपत्रहरू प्रस्तुत गर्नुबाट पनि उनको बहुभाषिक क्षमतालाई पर्गेल्न सकिन्छ ।

६/ डा. द्रोणलाई विद्यार्थी अवस्थादेखि नै साहित्यमा अभिरुचि राख्ने व्यक्तिको रूपमा देख्न सकिन्छ । असममै अध्ययनका क्रममा र विश्वविद्यालय स्तरमा पनि साहित्यिक कार्यक्रमहरूमा सहभागिता जनाएको बुझिन्छ । उनले सहलेखनमा नवमी असमिया भाषामा नेपाली लोककथा सङ्ग्रह तयार पारी असम साहित्य सभा गुवाहाटीबाट सन् १९९७ मा प्रकाशित गरेका छन् भने १९९४ मा नेपालबाट राजवंशी परिचय : जाति, भाषा र साहित्य नामक कृति प्रकाशन गरेका छन् । यसका साथै उनले सहलेखनमा समेत 'आदर्श नेपाली व्याकरण' २००५ मा असमबाट प्रकाशित गरेको देखिन्छ ।

डा. द्रोणबाट वि.सं २०६५ मा भाषिक चिन्तन नाउँको विश्लेषणात्मक कृतिका साथै सोही वर्षमा 'केही साधक : केही साधना' नामक समालोचना पनि प्रकाशन गरेका छन् । यसका अतिरिक्त नेपाली लोकसाहित्यकै महत्वपूर्ण विधा लोकवार्तामा डा. द्रोणको अभिरुचि निकै देखिन्छ । अनुसन्धानमूलक विषय भए पनि पौडेलले लोकवार्ताका सम्बन्धमा 'लोकवार्ता : लोककै चर्चा' नामको कृति

र नेपाल प्रज्ञाप्रतिष्ठानबाट वि.सं २०७४ मा प्रकाशित 'लोक वार्ता सिद्वान्त : नेपाली सन्दर्भ' नाउँको कृति पनि नेपाली साहित्य भण्डारमा थपेका छन् ।

यसका साथै अन्य दुई कृति पनि पाठक सामू पस्केका छन्- डा. पौडेलले । भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा सन् २०११ मा र सवाई काव्यको सैद्वान्तिक परिचय वि.सं २०६७ मा प्रकाशित गरी नेपाली साहित्यका अनुसन्धान र विद्यार्थी वर्गका लागि समेत ठूलो गुन लगाएका छन्- डा. द्रोणले । उपर्युक्त कृतिका आधारमा डा. द्रोणकुमार पौडेलको मूल्याङ्कन गर्दा उनी भाषा, साहित्य एवम् लोकसाहित्यका क्षेत्रमा उनको योगदान अविस्मरणीय रहेको छ ।

यसका अतिरिक्त राष्ट्रिय एवम् अन्तर्राष्ट्रिय पत्रपात्रिकाहरूमा उनका नेपाली, अङ्ग्रेजी, हिन्दी र असमिया भाषामा विश्लेषणात्मक आलेखहरू प्रकाशन भएका छन् भने नेपाली सहित विभिन्न भाषाका पत्रपत्रिका सम्पादन कार्य पनि डा. द्रोणबाट भएको देखिन्छ ।

स्थानीय/ राष्ट्रिय एवम् छिमेकी राष्ट्रबाट एक दर्जन मान/ समान/ कदर/ पुरस्कारहरूबाट डा. द्रोण विभूषित भएका छन् भने त्यति नै संख्यामा विभिन्न सामाजिक संघ/ संस्थामा आबद्व रही समाज सेवाकार्य गर्दै आएका सामाजिक व्यक्तित्वका रूपमा पनि डा.पौडेलले आफ्नो स्थान सुरक्षित राखे ।

यसैगरी, डा. द्रोणले नेपाल र भारतका विभिन्न स्थानमा आयोजित महत्वपूर्ण कार्यशालाहरूमा आफ्नो उपस्थिति जनाउँदै जाति, भाषा, लोकवार्ता, संस्कृति र संस्कार, दर्शन, धर्म, समाज, सीमा क्षेत्रको गरीबी समालोचना, लोकसाहित्य आदि विविध विषयहरूमा महत्वपूर्ण कार्यपत्रहरू प्रस्तुत गर्नुले उनको बहुआयामिक व्यक्तित्वको झलक पाउन सकिन्छ ।

अन्तमा, डा. द्रोण पौडेलको प्रथम वार्षिकीमा उनको स्मृतिलाई चिरस्थायी रूप दिन झापाका संघ/संस्था/साहित्यिक एवम् सामाजिक व्यक्तित्वहरूबाट 'स्मृतिग्रन्थ' प्रकाशन गर्ने जुन उदाहरणीय कार्य गर्न थालिएको छ, निश्चय पनि दिवंगत व्यक्तित्वका क्रियाकलापबारे उत्तरवर्ती पिँढीका लागि उत्प्रेरणामय भूमिका निर्वाह गर्ने छ, भन्ने कुरामा दुईमत नहोला ।

यस्ता बहुमुखी प्रतिभाका धनी डा. द्रोणप्रति हार्दिक श्रद्धासुमन व्यक्त गर्दै र शोक सन्तप्त परिवारजनमा समवेदना व्यक्त गर्दै विश्राम लिन चाहन्छु ।

- *बिराटनगर*



प्रा.डा. माधवप्रसाद पोखरेल

# कृति, कीर्ति र सम्झनामा मात्र डा. द्रोण उपाध्याय

डा. द्रोण उपाध्यायलाई पहिलो पल्ट मैले काठमाडौँमा चिनें कि भद्रपुरमा चिनें, म भन्न सक्तिन, तर मैले उहाँलाई सबभन्दा पछिल्लो पल्ट भेटेको चाहिँ भोजपुरमा हो कि ! लोकवार्ता परिषदको धरान, भोजपुर बजार र दिङ्लामा भएको सम्मेलनमा उहाँसँग मेरो पछिल्लो भेट भएको हो ।

नजिकैको पहिलो भेटदेखि नै उहाँको व्यक्तित्वले म तानिएँ । मलाई तान्ने पहिलो कुरो त उहाँले भाषा विज्ञान पढ्नु भएको रहेछ अनि समाज भाषा विज्ञान उहाँको प्रिय क्षेत्र रहेछ । मलाई आकर्षित गर्ने उहाँका व्यक्तित्वको दोस्रो कुरो चाहिँ उहाँले लोक साहित्यको सवाई विधामा पिएचडी गर्नु भएको रहेछ । मलाई नेपाली लोकको जुनसुकै पाटामा अनुसन्धान गर्ने मान्छे औधि मन पर्छ । डा. उपाध्यायको मलाई आकर्षित गर्ने व्यक्तित्वको तेस्रो पाटो थियो उहाँको बहुभाषा ज्ञान । उहाँ नेपाली, हिन्दी, बाङ्ला, असमिया र अङ्ग्रेजी भाषामा बोल्न र लेख्न दुवै सक्नु हुन्थ्यो । म पनि १२(१३ ओटा भाषा अलि अलि बोल्न जान्दछु, तर लेख्न चाहिँ नेपाली र अङ्ग्रेजी बाहेक तेस्रो भाषामा जान्दिन । देश विदेशका पत्रपत्रिकामा अनेक भाषामा आफ्ना कृति छपाउने शक्ति उपाध्यायलाई यही बहुभाषिक सामर्थ्यले दियो भन्ने बुझ्न गारो पर्दैन । यसरी भाषा ज्ञानमा मैले द्रोणजीलाई आफु भन्दा माथि राखेको थिएँ । मलाई आकर्षित गर्ने डा० पौडेलको चौथो विशेषता थियो, उहाँ मसँग एकदम आत्मीय हुनु हुन्थ्यो, आँखामा हाले पनि नबिझाउने ! उहाँ मेरा दुइटा भाइ (राजेन्द्र र सरोज) उहाँका ज्वाइँ पर्दा रहेछन् भन्ने कुरो मैले भद्रपुर पुग्दा मात्रै थाहा पाएको थिएँ !

असममा जन्मे पछि असमियाँ भाषा आउने नै भयो, गुवाहाटी विश्व विद्यालयमा पढे पछि हिन्दी र अङ्ग्रेजी थपिने नै भयो, नेपालीका प्राध्यापकै भए पछि नेपालीका कुरै नगरौँ ! प्राय असमिया भाषा बोल्नेहरु बाङ्ला पनि बोल्न सक्ने मैले पाएको

छु । द्रोण कुमार पौडेलजीको बहुभाषिकताको सूत्र मैले यसै गरी बुझेको थिएँ । अनेक भाषा जान्ने मान्छेलाई नयाँ भाषा सिक्न सजिलो हुन्छ । झापाको स्थायी वास भए पछि राजवंशी पनि थपियो होला । सरल संस्कृत बोल्न सक्ने तागत पढ्दैै आयो कि कताबाट आयो, त्यसको सुइँको मैले पाउन सकेको छैन, तर उहाँसित अलि अलि संस्कृत मैले पनि बोलेको छु ।

लोक साहित्य (सबाई) मै पिएचडी गरेका डा. पौडेलका अनुसन्धानात्मक कृतिमा असमिया भाषामा नेपाली लोककथा संग्रह (1997, 'नवमी', सहलेखन, गुवाहाटी), लोक साहित्यको परिचयात्मक पुस्तक (लोककै चर्चा, २०६५), 'सवाई काव्यको सैद्धान्तिक परिचय' (२०६७) र 'लोकवार्ता सिद्धान्त' (२०७४) जस्ता ग्रन्थ प्रकाशित गर्नु त स्वाभाविकै भयो, तर राजवंशीको जाति, भाषा र साहित्यको परिचय (1994), नेपाली व्याकरण (2005, असम), भाषिक निबन्धहरुको सँगालो ('भाषिक चिन्तन', २०६५), समालोचना संग्रह (केही साधक केही साधना, २०६५), 'भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा' (2011)जस्ता विविध नौला आयामले उपाध्यायलाई बहुमुखी र बहुश्रुत बनाएको देखिन्छ । 'नित्यं नवनवोन्मेषशालिनी प्रतिभा मता' (प्रतिभा भनेको कुरो छिन छिनमा नौलो पन खोज्ने सामर्थ्य हो)!

वर्ष दिन अगाडि डा. उपाध्यायले यो धर्ती छोड्नु भयो, तर जीवनले मान्छेलाई समान बनाउँछ भने मृत्युले विशिष्टतालाई प्रकट गर्छ भन्ने कुरो उहाँको जीवनमा पनि चरितार्थ भएको छ !

*(लेखक कीर्तिपुर क्याम्पसका सेवा निवृत्त प्राध्यापक हुनुहुन्छ)*



मानिकचन्द्र शर्मा

# मेरा भ्रातृसरह स्वर्गीय डा.द्रोणकुमार उपाध्यायको जीवन आलेख

स्वर्गीय ड. द्रोणकुमार उपाध्याय उदालगुडी सांगवेद विश्वशान्ति विद्यालय (संस्कृत टोल) का प्रतिष्ठापक शिक्षागुरु स्वर्गीय टीकाराम शास्त्रीका गुणवान् छोरा हुन् ।

सधैं हँसमुख बुद्धिदीप्त द्रोणले स्नातक उपाधि हासिल गरेर उदालगुडी उच्च माध्यमिक विद्यालयमा (अहिलेको उच्चतर माध्यमिक विद्यालयमा) सह-शिक्षकका रूपमा उनको कर्मजीवनको प्रारम्भ गरेका हुन् । त्यसबेलादेखि नै सहकर्मीका रूपमा उनी हाम्रा अति आत्मीय मित्र थिए । यहाँ विशेष रूपले के उल्लेख गर्न सकिन्छ भने एक जना शिक्षक अनि उनको प्राज्ञिक तथा सकारात्मक व्यवहारले सबैलाई आकर्षण गर्न सक्छ । उनी यस्तै आकर्षण गर्न सक्षम भएका थिए । कहिल्यै नथाक्ने, कर्मक्षेत्रमा साह्रै परिश्रमी द्रोणका व्यक्तित्वमा मानौं एक उज्ज्वल भविष्यको स्पष्ट आभास देखिन लागेको थियो ।

शिक्षादान जस्तो पवित्र कार्यमा संलग्न हुनु सँगसँगै उनी विभिन्न सामाजिक, सांस्कृतिक कार्यसित पनि संलग्न भई त्यस्ता कार्यलाई सफलतापूर्वक समापन गरेर आत्मतृप्ति लिन्थे ।

सन् १९७७ मा असम साहित्य सभाका तर्फबाट असम तथा यहाँका विभिन्न जनगोष्ठीहरूका बीचमा प्रचलित लोक-कथाहरू संग्रह गरी असमिया भाषामा प्रकाशित गराउने एउटा योजना स्वीकृत भएको थियो । सोही योजना अन्तर्गत नेपाली भाषाका लोककथाहरू सङ्ग्रह गर्ने भित्रमा सर्वश्री तारापति उपाध्याय, द्रोणकुमार उपाध्याय र टीकाराम उपाध्याय 'निर्भीक' ले संयुक्त रूपमा सहयोग गरी 'नवमी' नामक नेपाली लोककथाको पुस्तक प्रकाशित भयो । प्रकाशन गर्ने कार्यमा दिन-रात उनी खटेका हुन् ।

द्रोणकुमार उपाध्याय असम साहित्य सभाका एक जना सम्माननीय सदस्य पनि थिए । उनले उदालगुडी साहित्य सभासँग विशेषरूपले संलग्न रहँदै सन् १९७८ मा

'उदालगुडी साहित्य सभा पत्रिका' को तेस्रो अंक आफैं सम्पादन गरी प्रकाशित गरेका हुन् । त्यस पत्रिकामा द्रोणकुमार उपाध्यायले 'नेपाली साहित्यका महान् कवि भानुभक्त आचार्य' शीर्षक एउटा अति आवश्यक लेख (असमिया भाषामा) लेखेका छन् । पाठक वर्गले त्यो लेख पढेर फेरि अवश्य पनि लाभान्वित हुन सक्छन् भन्ने सोच राखेर नै लेखका बीचबाट केही प्रसंग उद्धृत गर्न चाहन्छु ।

महान् कवि भानुभक्त आचार्य पहिले कवि पनि थिएनन् अनि दुःखी-गरीब मानिस पनि होइनन् । एक दिन डुल्दै जाँदा घाँस बेचेर आफ्नो आजीविका चलाउने एक जना घाँसीले भानुभक्तसँग कुरा प्रसंगमा यसरी भनेका थिए- "म यो घाँस काटेर बेच्छु र यसरी घाँस बेचेर कमाएका धनले म बाटो हिंड्ने पथिकहरूका विश्रामका लागि पाटी बनाउँछु । पानी पिउनका लागि कुवा खनाइदिन्छु । मैले अझै धेरै काम गर्नु छ - यसैले अझै धेरै घाँस बेचेर धेरै धन कमाउन सके असल हुन्थ्यो । हेर भाइ, यो धन-सम्पत्ति भनेको अस्थायी वस्तु हो । त्यसैले 'पछिसम्म स्थायी कीर्ति रहिरहोस्' भन्ने उद्देश्यले मैले यस्ता कामहरू गर्ने विचार गरेको हुँ । " यसरी एक जना अत्यन्त साधारण घाँसीको मुखबाट यस्ता असाधारण कुराहरू सुनेर अचानक ती युवकका अन्तरमा प्रेरणा सिन्धु जागृत भयो । ... 'कुनै कीर्ति नराखी बाँच्ने मेरो जीवन धिक्कार हो ।' भन्दै यसरी अत्यन्त साधारण गरीब मानिस ती घाँसीको आदर्श र प्रेरणाद्वारा अनुप्रेरणा प्राप्त गरेर भविष्यमा केही कीर्ति राखी जाने उद्देश्यले भानुभक्तले कविता सिर्जनाको निश्चय गरे । त्यहाँबाट नै संस्कृत अध्यात्म रामायणका आधारमा नेपाली रामायणको जन्म भयो । जसलाई हामी भानुभक्तीय रामायण भन्ने गर्छौं ।

स्नातक उपाधि प्राप्त गरिसकेका द्रोण उपाध्यायले उदालगुडीमा शिक्षकका रूपमा कार्यरत रहँदै उच्चाकाङ्क्षा छोडेका थिएनन् । नेपाल सरकारबाट उच्च शिक्षाका लागि छात्रवृत्ति प्राप्त गर्नु नै उनको जीवनको दिशा परिवर्तनको बिन्दु (Turning Point) भन्न सकिन्छ । द्रोण उपाध्याय सन् १९७३ तिर नेपाली विषयमा MA गर्न नेपालतिर लागे । त्रिभुवन विश्वविद्यालयबाट राम्रोसँग स्नोतकोत्तर उपाधि हासिल गरे । पछि उनी उत्तरबङ्ग विश्वविद्यालयबाट विद्यावारिधि (Doctorate) पनि गर्न सक्षम भए । द्रोणले भद्रपुर मेची क्याम्पसमा एक 'सफल अध्यापकका रूपमा अध्यापन गर्दै सहायक क्याम्पस प्रमुखको दायित्वसमेत निर्वाह गरी आफ्नो सफल कर्मजीवनबाट अवकाश ग्रहण गरेका हुन्' भन्ने कुरा हामीले थाहा पाएका हौं ।

नेपालमै स्थायी रूपले बसोबासो गर्दै द्रोणले साहित्य-संस्कृति सम्बन्धित विभिन्न सांगठनिक संस्थानहरूसित संलग्न भएर सक्रिय रूपले धेरै कार्य गरे। नेपाली भाषामा ८-९ वटा पुस्तक प्रकाशित गर्नुका साथै बङ्ला भाषाबाट नेपाली भाषामा, हिन्दी भाषाबाट नेपाली भाषामा केही अनुवाद पनि गरेका छन्। अझ 'राजवंशी भाषाको लिपि, व्याकरण आदिको निर्माणका क्षेत्रमा द्रोणको विराट योगदान रहेको छ' भन्ने जान्न पाइएको छ।

एक गतिशील मनका मालिक द्रोण उपाध्याय एउटा विशाल, कर्मक्षेत्रको खोजीमा उदालगुडीबाट नेपालतर्फ लागेका थिए। उदालगुडी अथवा असमप्रति उनको एक विशेष माया छँदै थियो। मौका मिलाएर जब उनी पनि उदालगुडी आउँथे, तब परिचित सबैसित भेटघाट गर्नु एक अनिवार्य कार्य भनी उनले ठानेका थिए।

उनी मेरो घरमा आउँदा बाटादेखि नै उच्चस्वरमा 'दादा' भन्दै घरभित्र पस्थे र घरका सबैको कुशल-मंगल सोधेर विभिन्न प्रश्न गर्दै परिवेशलाई नै रमाइलो पारिदिन्थे।

सन् २०१२ तिरको कुरो हो, एक समयका मेरा प्रिय विद्यार्थी तथा अहिलेका उदालगुडी उच्चतर माध्यमिक विद्यालयका प्राचार्य (Principal) श्रीमान् पुष्पधर शर्मासँग उही पुरानो भंगीमै द्रोणकुमार उपाध्याय मेरा घरमा आएका थिए। आपस्तमा कुशल-मंगल सोधखोज र भावविनिमय हुँदा उनी केही गम्भीर हुँदै उनले नेपाली भाषाका महाकवि लक्ष्मीप्रसाद देवकोटाज्यूको श्रेष्ठतम काव्यग्रन्थ 'मुनामदन' असमिया भाषामा अनुवाद गरेको समाचार सुनाए। त्यस महान् ग्रन्थलाई उदालगुडी जिल्ला साहित्य सभाले प्रकाशित गरिदिए हुन्थ्यो भन्ने उनको एकान्त इच्छा रहेछ। त्यसबेला उदालगुडी जिल्ला साहित्य सभाको सभापतिको दायित्वमा म नै रहेको हुनाले 'एउटा गहिरो विश्वास मनमा लिएर आएको' भन्ने कुरा उनले व्यक्त गरेका थिए। म ठूलो अप्ठ्यारामा परें। किनभने एउटा पुस्तक प्रकाशित गर्नसक्ने गरी हाम्रो शाखामा त्यस्तो कुनै अर्थ (पूँजी) हामीसँग थिएन। त्यसउसले हामीले साहित्य सभाको बैठकमा सल्लाह गरेर मात्रै पुस्तक प्रकाशन सन्दर्भमा सिद्धान्त लिन मिल्ला भनी द्रोणलाई मैले वचन दिएको थिएँ। उनी आश्वस्त भएरै गएका थिए। हाम्रा बीचमा एकप्रकार सकारात्मक दृष्टिले नै त्यस दिनको वार्तालाप समाप्त गरेका थियौं। पछि मैले साहित्य सभाको बैठकमा त्यस विषयलाई उठान गरे तापनि आर्थिक कारणले गर्दा नै कसैले पनि

त्यस प्रस्तावलाई स्वीकार गरेनन् । यसरी द्रोणको आग्रहलाई मैले सहयोग गर्न नसकेकोले गर्दा आज पनि मेरा अन्तरमा एक दुःखको अनभूति भइरहन्छ ।

त्यस्ता उज्ज्वल प्रतिभाधर द्रोण उपाध्यायको अचानक अकाल मृत्यु भएको समाचार पाएर म एकछिनका लागि स्तब्ध बनेको थिएँ । हामी मायामा आबद्ध मानिस हौं । आत्मीयजनको वियोगको दुःखमा अस्थिर हुन्छौं । तर, शास्त्रमा भनिएको छ - "न हन्यते हन्य माने शरीरे" । अर्थात् शरीरको विनाश भए तापनि आत्मा कहिल्यै मर्दैन । यस अक्षय-अमर आत्माले पार्थिव कर्मअनुसार नयाँ शरीर धारण गरी पुनः जन्मने गर्दछ । अर्कोतिर मानिसले सेवामूलक कार्यमा संलग्न रही सफलतापूर्वक यस पृथिवीमा कीर्तिमानी रूपले परिचित भएका सज्जन मानिसहरूका आत्माले सृष्टि, स्थिति र पालनकारी परमेश्वरका शरणमा स्थान प्राप्त गर्दछन् (मुक्ति पाउँछन्) ।

अन्त्यमा, भगवानसँग मेरो यही प्रार्थना छ –

दिवंगत द्रोणको पुण्यात्माले परमपिता परमेश्वरको आश्रय प्राप्त गर्न सकुन् र साथै उनकी धर्मपत्नी, उनका छोरा-छोरी, नाति-नातिना लगायत समस्त परिवारजनको पनि ईश्वरले मंगल गरुन् ।

*- उदालगुडी, असम*

***अनुवाद* : पुष्पधर शर्मा**

*(लेखक डा. द्रोणकुमार उपाध्यायका भाइ हुनुहुन्छ)*



मुक्तिप्रसाद उपाध्याय

# केही अविस्मरणीय पलहरू

हो, बितेका पल अनमोल निधि हुन्छन् । जो कुनै व्यक्तिको मन र मस्तिष्कमा अति सुरक्षित रहेका हुन्छन् । समयको गतिशीलताले कतिपय सम्झनाहरू धमिलिंदै पनि जान्छन् । बितेका सुन्दर पलहरूलाई सिरानीमा राखेर तिनको सम्झनामा रमाउने मान्छे पनि नभएका होइनन् । मान्छे कोही अमर हुँदैन । मान्छे बितेपछि उसका सम्झनाहरू सबै ऊसितै खरानी भएर जान्छन् । तर, मान्छेले गरेका काम अमर हुन्छन् साथै अक्षर पनि अमर भएर रहन्छन् । त्यसैले विद्वान् व्यक्तिहरू भन्ने गर्छन्- आफूसित भएका विभिन्न घटनाहरू लेखिछोड़ेको छ भने त्यो पछि कुनै दिन इतिहास वा साहित्यको एउटा अनमोल धरोहर हुनसक्छ । ती सम्झनाहरूमा आफूसित बितेका घटनाहरू मात्रै नभएर त्यस समयको परिवेश, सामाजिक स्थिति, विचार, भावना साथै इतिहासका कतिपय प्रत्यक्ष र अप्रत्यक्ष तथ्यहरू पनि नजानिंदो पाराले लुकेका हुन सक्छन् । तीव्र मस्तिष्क र नजरको कला भएका विद्वान्हरूले ती फेला पारेर महत्वपूर्ण बनाउन पनि सक्छन् ।

मेरो यो सम्झनामा विशेष कुनै ऐतिहासिक तथ्य लुकेको नपाइए तापनि डा.द्रोणकुमार पौडेल दाइको मायालु सम्झनामा लुटुपुटु भएर उहाँलाई मुटुको गहिराइबाट निःसृत श्रद्धाञ्जलिका केही पुष्पाक्षर अर्पण गर्दै उहाँको दिवंगत आत्माले शान्ति पावस् भन्ने अति आत्मीय कामना रहेको छ भनी म शुरुमा नै व्यक्त गर्न चाहन्छु ।

मेरा बाका मावलीखाल हुन्- पौडेलहरू, विशेषगरी द्रोण दाइहरूको हाँगो । हामी दाजु-भाइको नातामा बाँधिएका थियौं । नाता त नाता नै हो, कसैले तोड्न सक्दैन; मृत्युले पनि सक्दैन । मृत्यु ध्रुव सत्य भए तापनि हामीलाई मर्माहत पारेर दैवले दाइलाई छिट्टै लग्यो, त्यो अर्कै कुरा हो । तर, भाउजू, छोरा, छोरी नाति-नातिना छन् त्यही साइनामा बाँधिएर रहेका आत्मीय र आफ्ना । माया लाग्छ धेरै ।

सम्झनाका झटाराले जे-जे झार्दै जान्छ, म सोही अनुरूप यहाँ पस्किंदै



*सन् १९७१ मा नीरू पौड़ेलको बिहेको समय बिराटनगरमा खिचेको फोटो। दाहिनेबाट उभिएकाहरूमाः मुक्ति बराल, दाइ श्याम पौड़ेल र बसेकामाः यमुना दाहाल र दाइ द्रोण पौड़ेल।*

जानेछु। मैले थाहा पाएसम्म बाका मावलीखालहरू द्रोण दाइका हजुरबा पण्डित गंगाधर पौड़ेलका पुत्रहरू देवीदत्त, टीकाराम, पुण्यप्रसाद, हरिप्रसाद, इन्द्रप्रसाद, नीलकण्ठ र मोतीप्रसाद सात भाइ हुन्। पुण्यप्रसाद, हरिप्रसाद, इन्द्रप्रसाद, नीलकण्ठ र मोतीप्रसाद असमबाट फर्किएर नेपालमा छरिएर बसेका थिए अनि अहिले छोरा र नातिखालहरू बसेकै छन्। जेठा देवीदत्त र माहिला द्रोण दाइका बुबा टीकारामले भने असम छोड्नु भएन। जेठाका दुई छोराहरू असममा नै छन् भने टीकारामका छोरा द्रोणकुमार सन् १९८१ मा नेपाल पसे। यो संस्मरण लेख्दासम्म ८२ वर्ष पुग्नुभएका कान्छा काका मोतीप्रसाद सपरिवार काठमाण्डुमा रही हामीलाई आशीर्वाद दिइरहनु भएको छ।

मेरा बाका मावली पौड़ेलहरूको पहाड़ घर भोजपुर, दिङ्ला हो। त्यतिबेला दिङ्लामा ठूलो 'पौड़ेल गाउँ नै थियो' भन्ने मैले सुनेको हो। शायद द्रोण र श्याम (पुण्यप्रसादका जेठा छोरा) दाइहरूका 'हजुरबा गंगाधर वि.स. १९८७ तिर असम पसेका हुन्' भन्ने दाइ श्याम पौड़ेलको अनुमान रहेको छ। शुरुमा पौड़ेलहरू असमको बटियामारी गएर खेती-किसानी गरेका हुन्। साथै, बाहुनका छोरा

भएकाले काशी गएर संस्कृतको पनि अध्ययन गरेका हुन् ।

अर्कोतिर पाँच वर्षका मेरा पिताजीलाई र हजुरआमालाई लिएर मेरा हजुरबा पद्मलाल पनि 'असम पसेका हुन्' भन्ने कुरा मलाई बाले भन्नुहुन्थ्यो । अनि उहाँले यो पनि भन्नुहुन्थ्यो- 'मेरा बा हजुरबासित असम आउँदा पाँच वर्षको हुनुहुन्थ्यो । मेरा बा जन्मिनु भएको हो वि.स. १९६५ मा । त्यसो हुँदा मेरा हजुरबा वि.स. १९७० तिर असम पसेका हुन् । मेरा हजुरबा चाहिं सदियातिर लाग्नु भएछ अनि पछि फेरि गुवाहाटी छेउको 'हाजोबड़ी' भन्ने गाउँमा बसाइँ सर्नु भएछ । हाम्रा सन्तानहरू त्यहींबाट विकसित भएका हुन्, हाम्रा पुर्खाको पहाड़ घर पनि खाँदबारी थियो । खाँदबारी र दिङ्ला साह्रै टाढ़ा होइन । दिङ्ला र खाँदबारी वारि र पारि आँखैले छर्लङ्ग देखिने डाँड़ाहरू हुन् ।

बिराटनगरमा रहनु हुने पुण्यप्रसाद काकाका घरमा मेरा पिताजीको आवतजावत बाक्लै हुन्थ्यो । दुबै जना धुरन्धर पण्डित भएकाले मन मिल्ने अनि कुरा पनि मिल्ने । त्यसरी मेरो पनि त्यहाँ गहिरो सम्बन्ध थियो । आयो गयो माया र मोह, आएन गएन कोहो कोहो भनेर कति सत्य वचन भनिएको रहेछ । भेटघाट र निकटताले नै माया र मोह बढ़ाउँछ । पुण्यप्रसाद काकाका जेठा छोरा श्याम दाइसित मेरो बड़ी आत्मीयता थियो र अहिले पनि छ । त्यसैले यो संस्मरणमा उहाँको धेरै सहयोग रहेको छ । भाइ गोपाल र अन्य बैनीहरू सानै थिए । म सँगसँगैकी बहिनी शकुनसित मेरो मित्रताको नाता थियो, अहिले पनि छ । कहिले शकुनले मलाई अनि कहिले मैले बहिनीलाई साइकलमा हाँकेर बिराटनगरको फन्को मार्दै उनका साथीकहाँ जाने गर्थ्यौं ।

एकपल्ट द्रोण दाइ, श्याम दाइ र म साइकलमा झोराहाट पनि गएका छौं । त्यतिबेला कच्चा बाटोमा साइकल हाँक्न निकै चर्को परेको सम्झन्छु, म । झोराहाटमा द्रोण दाइहरूकी कान्छी फुपू पवित्रा दिदी र फुपाजु मित्रलाल बस्नु हुन्थ्यो । मित्रलाल घिमिरेहरू मेरा दाजुका काइँला ससुरा हुनुहुन्थ्यो । मेरो बिहे भएपछि द्रोण र श्याम दाइकी फुपू पवित्राज्यू मेरी बड़ेमा सासू हुनुभयो । गजब नै छ, यो साइनाको करामत पनि ! बड़ेमा सासूको परिवार अहिले पनि झोराहाटमा बस्ने गर्छन् । त्यही झोराहाटमा श्याम दाइहरूको खेतीको जमीन पनि थियो ।

अर्को गजबको साइनो कस्तो थियो भने, श्याम दाइ र द्रोण दाइको मावली एउटै परिवार हो । साथै, मलाई अर्को एउटा सम्झना पनि छ- त्यही झोराहाटमा माझगाउँतिरबाटै आएर बसेका शरद र दिनेश घिमिरेको परिवार पनि बस्थे । तर,

त्यसबेला हामी उहाँहरूको घरमा गयौं कि गएनौं, सो कुरा सम्झना नभए पनि पछिल्लो समयमा भने म ती घरहरूमा पनि गएको छु । असमको माझगाउँ भन्ने ठाउँबाट मेरो दाइले घिमिरेकै छोरी बिहे गरेको नाताले म त्यस घरमा गएको थिएँ । पछि म पनि घिमिरेकै ज्वाइँ हुन पुगें ।

द्रोण दाइको बड़ीआमाको छोरा बलरामको पनि झोराहाटमा बसाइ थियो । तीन वटा घर पुगेर हामी मधेशको प्रकृतिमा रमाइलो गर्दै फर्किएका थियौं । साँच्चै नै अहिले ती कुरा सम्झिएर ल्याउँदा मन स्वतः उत्फुल्ल हुन्छ । किनभने त्यो किशोरवय- मनुष्य जीवनको सबैभन्दा सुन्दर, रमाइलो, स्वतन्त्रकाल हो । अनि त्यही समयबाट जीवनको भविष्य निर्माणको बाटो बनिन थाल्छ ।

वि.स. २०२८ मा मेरो स्कूल फाइनलको परीक्षा सकेर बिराटनगर गएर झण्डै दुई महिना बसेको थिएँ । पुण्यप्रसाद काकाकी जेठी छोरी शान्ता दिदीको बिहे पहिले नै भइसकेको थियो । माइली नीरू दिदीको बिहे म त्यहाँ छँदै भएको हो । त्यतिबेला द्रोण दाइ पनि ओदालगुड़ी, असमबाट बिहेकै लागि बिराटनगर जानुभएको थियो । त्यस बिहेमा साह्रै रमाइलो भएको सम्झना छ मलाई । मलाई गीत गाउन रहर भएकाले गीत गाउनेको राम्रो परिवेश त्यस बिहेमा सिर्जना भएको थियो । त्यस समयमा द्रोण दाइ, श्याम दाइ, म अनि यमुना दाहाल भन्ने पोखरिया बस्ने श्याम दाइका साथी मिलेर स्टुडियोमा गएर फोटो पनि खिचेका थियौं । (त्यही फोटो मैले यस संस्मरणको शुरुमा राखेको हुँ ।) समयमा सोचविचार पुऱ्याएर खिचेका फोटाहरू अनमोल हुँदा रहेछन् । त्यसबेलाको त्यो पल, त्यो समय र परिवेश, त्यो सम्झना अनि घटनाहरू पनि अप्रत्यक्ष रूपले फोटाले भनेको हुन्छ ।

बिहेको निकै दिनपछि द्रोण दाइ, म र यमुना दाहाल जोगबनीबाट एउटा ठूलो टिनको डब्बामा एक टिन बुन्दिया लिएर रेलमा असमतर्फ लागेको सम्झना आलै छ । हामीलाई जोगबनी स्टेशन पुऱ्याउन श्याम दाइ जानुभएको थियो । ती बुन्दिया हाम्रा छेउछाउमा बसेका रेल यात्रीलाई पनि बाँड़ेर रमाइलो गर्दै गरेको त्यो यात्रा गजबको थियो । त्यतिबेला जोगबनीबाट कटिहार अनि कटिहारबाट मात्रै गुवाहाटीको रेल पाइन्थ्यो । कटिहारबाट गुवाहाटी जाने रेल दश घण्टा लेट थियो । दश घण्टा बिताउनका लागि हामी केही सामान क्लकरूममा राखेर सिनेमा हेर्न गएको कुरा झल्झली सम्झना आउँछ । त्यस समयमा कटिहारको सिनेमा हलमा हामीले हेरेको फिल्मको नाम थियो 'पूरब और पश्चिम' ।

पछि वि.स. २०३२ मा श्याम दाइको बिहे भएको थियो । त्यस बिहेमा म

पुगेको थिएँ । श्याम दाइले भाउजूलाई माइत पुर्याउन जाँदा मलाई पनि साथमा लिएर गएको सम्झना छ । त्यतिबेला भाउजूको माइती धरानको दन्तकाली मन्दिरकै उत्तरमा थियो । श्याम दाइको बिहेमा द्रोण दाइ जान पाउनु भएन । त्यस समयमा द्रोण दाइका बाबा टीकारामज्यू बिरामी हुनुहुन्थ्यो । बाबालाई लिएर चिकित्साका लागि शायद द्रोण दाइ भेलोरतिर जानुभएको थियो ।

धेरै अघि सन् १९६७ तिर म र मेरा पिताजी गुवाहाटीबाट रेलमा चढ़ी गलगलिया ओर्लिएर चन्द्रगढ़ी गएका थियौं । त्यतिबेला यता काँकरभिट्टामा मेचीको पुल थिएन अनि यातायातको सुविधा पनि थिएन । असमतिरबाट भद्रपुर जानेहरू प्रायः सबै नै गलगलिया स्टेशन ओर्लिएर मेची तर्दै भद्रपुर जाने गर्थे । त्यस समयमा कतै पाहुना लाग्न जाँदा बेडिङ बोकेर जाने चलन थियो । हाम्रो त्यस यात्रामा गुवाहाटीबाट सँगै आउनुभएका लीलबहादुर क्षत्री दाइ पनि हामीसित हुनुहुन्थ्यो । लीलबहादुर दाइको प्रसङ्ग मैले यहाँ उल्लेख गरिनँ । किनभने 'झ्याउरे पार्टीले गर्नु गर्‍यो' भन्ने मेरो समालोचना संग्रहमा सो संस्मरण उल्लेख गरिसकेको छु ।

मेची नदीमा हिउँदमा पानी त्यति धेरै हुँदैनथ्यो । शुरुमा अलिकति गहिरो ठाउँमा चाहिं नाउबाट तर्नु पर्थ्यो । नाउ लिएर माझी बस्थ्यो । त्यसपछि केही छिपछिपे पानी र बलौटे बगर हिंड्नु पर्ने । बेडिङ टाउकामा बोकेर भद्रपुर पुग्न मलाई निकै गाह्रो परेको सम्झिन्छु । पिताजीले मेरो र आफ्नो झोला बोकेर पछाडि नहेरी लमक-लमक हिंड्नु हुन्थ्यो । उहाँलाई भेट्न मलाई गाह्रो पर्थ्यो । त्यतिबेला घनश्याम खनालजीहरू असमबाट चन्द्रगढ़ी आइसक्नु भएको थियो । असमदेखि नै घनश्याम सरसित मेरा पिताजीको आत्मीयता । अनि फेरि नव दिदीलाई मैले सानैदेखि देखेको, चिनेको । उहाँ गुवाहाटीको हैण्डिक कलेजमा पढ्ने गीता उपाध्यायभन्दा पढ़ाइमा एक वर्ष जेठी हुनुहुन्थ्यो । बिदाका दिन पारेर नव दिदी माझगाउँ र तेजपुरतिरका साथीहरू लिएर हाम्रो घरमा आइरहनु हुन्थ्यो । त्यतिबेला असमका सबैतिरबाट ठोकिने नेपालीहरूका लागि हाम्रो घर प्रसिद्ध थियो ।

घनश्याम खनालजीकहाँ हामी बाउ-छोरा एक रात बस्यौं र भोलिपल्ट भात खाएर थोत्रेनथोत्रे एउटा बेलाइती जीपमा खाँदिएर बाटो लाग्यौं । आन्द्रा नै हुँडल्नेगरी हल्लाउँदै निकै खाल्डाखुल्डी भएको धुलो मैलो बाटो हुँदै बल्लतल्ल त्यस जीपले माईखोला छेउ पुर्‍यायो । त्यो जीपको गन्तव्य त्यहींसम्म रहेछ । त्यतिबेला माईखोलामा पानी धेर भनेको घुँड़ासम्म थियो । हामीले माई हिंड़ेर तर्‍यौं र दूधे कैंदले पुग्यौं । दूधे कैंदले भनेको शायद अहिलेको दूधे होला ।

ठूल्ठूला रुख भएको जङ्गलका बीचमा एक-दुई वटा खरका झुपड़ी थिए त्यहाँ । एउटा झुपड़ीमा भएको काठको बेञ्चीमा केहीबेर बिसाएर त्यहाँ हामीले चिया-खाजा खायौं ।

सोही क्रममा केही साधन पाइन्छ कि भनेर बाले सोधिखोजी गर्नुभयो । राजमार्ग बनिनलाई रुखपातहरू काटेर लड़ाइएका थिए त्यस समयमा। सवारीसाधन त केही पनि थिएनन् । कहिलेकाहीं लठ्ठा बोक्ने लोरी (ट्रक) पाइने कुरा त्यहाँ सुनियो । तर, त्यस दिन कुनै त्यस्तो लोरी त्यता आएको थिएन भन्ने कुरा त्यहाँका मानिसहरूबाट जानकारी पाइयो, त्यस समयमा भद्रपुरबाट बिराटनगर जानु पर्दा गलगलियामा रेल चढ़ेर कटिहार हुँदै जोगबनी जानु पर्थ्यो । तर, हामीलाई जानु थियो- ढुकुरपानी । त्यसैले भद्रपुर फर्किएर रेलको बाटो जानु युक्तिसङ्गत थिएन । त्यसो गर्दा फेरि जोगबनीबाट बिराटनगर आएर इटहरी हुँदै दमक आउनै पर्थ्यो हामीलाई । बरू यतैबाट पैदल हिंड़ेकाले जितिन्छ भनेर जंगलको बाटो हुँदै बाउ-छोरा कस्सिएर हिंड्यौं ।

हामीसित त्यस बाटामा हिंड्ने दुई जना लाहुरे दाइहरू पनि थिए । बा र ती लाहुरे दाइहरू लमक-लमक चाँड़ो हिंड्ने भएकाले म उनीहरूभन्दा निकै पछि पर्थें । तर पनि त्यतिबेला ममा खै कस्तो जाँगर र फूर्ति थियो कोनि, अहिले सोचेर ल्याउँदा अचम्मै लाग्छ ! थकाइ भन्ने कुराको अनुभव हुँदै हुँदैनथ्यो । तर पनि मेरो माया लागेर एक जना लाहुरे दाइले केहीबेर बेडिङ बोकिदिएका थिए । एकछिन निकै फुक्काफाल भएर उफ्रिँदै कुद्दै प्रकृतिसित रमाउँदै, चराचुरुङ्गीको खेल हेर्दै र कलरव सुन्दै बा र ती लाहुरेहरूभन्दा म अघि लागें ।

त्यस्तै पाँच-छ घण्टा हिंडेर हामी दमक पुरानो बजार पुगेका थियौं । त्यहाँ केही चिया-खाजा खाएर एकछिन बिसायौं । त्यहाँबाट पनि ढुकुरपानी जानु थियो हामीलाई । अन्दाजी अझै तीन किलोमिटर जति हिंड़ेपछि ढुकुरपानी पुग्यौं । फेरि घर पनि चिनेको थिएन । पौड़ेलको घर सोधेर हामी साँझ पर्नुभन्दा केही अघि मात्र बाको मावली घर पुग्यौं । त्यस समयमा ढुकुरपानी बस्ने पौड़ेल काकाको नाम के थियो भन्ने कुरा अहिले मैले सम्झन सकिन । अनि ती पौड़ेलहरू द्रोण दाइहरूकै लहरो होकि वा अर्को लहरो हो, सो कुरा पनि मैले भन्न सकिन । त्यहाँका मावली काका पनि असमतिर निकै घुमेर ढुकुरपानीमा राम्रो परिबन्द मिलाएर बसेका रहेछन् । घर मुन्तिर नै थियो, खेतको जमीन । गाई-वस्तु अनि करेसाबारी पनि भएको त्यस ठाउँले मलाई आकर्षित तुल्याएको थियो ।

बाउ-छोरा केही दिन त्यहाँ बस्यौं र बिराटनगरतिर लाग्यौं । त्यसबेला दमकबाट काकाकै छोराहरूले हामीलाई इटहरीसम्म जानका लागि ढुंगा ओसार्ने ट्रकमा जाने बन्दोबस्त मिलाइदिएका थिए । त्यतिबेलाको कच्ची बाटो, ट्रकको पछाड़ि ठूल्ठूला ढुंगामाथि चढ़ेर कसरी त्यत्रो बाटो गयौं होला भनेर अहिले सम्झिँदा छक्क लाग्छ । कहिले उभिंदै, कहिले बेडिङमा बसेजस्तो गर्दै थिलथिलो भएर बाउ-छोरा इटहरी पुगेका थियौं । धन्न... बेड़िङ बोकेकाले धेरै सजिलो भयो ।

इटहरीमा हाम्रो बस्ने ठाउँ थियो- हातकाटा पौड़ेलको घर । उनी पनि असम गुवाहाटीबाट आएका थिए । तर, उनीहरू थिए छेत्री पौड़ेल । गुवाहाटीको नारङ्गी मोड़कै उत्तरमा उनको भव्य घर र निकै फराकिलो जमीन थियो । अहिले त त्यो ठाउँ छोइनसक्नु भएको छ । आकाशे घरहरू बनिएका छन् त्यहाँ । हाम्रा मानिसहरू शुरुदेखि जहाँ बसे, त्यहीं जरा गाड़ेर बसिरहेको भए आज धन, सम्पत्ति र ठाँटबाँटमा कसैले हल्लाउन सक्ने थिएन । एकै ठाउँमा रहेर राम्ररी जरा गाड़िएका बर-पिपलको विशालतालाई हल्लाउनु भनेको गाह्रो कुरा हुन जान्छ । बन्जारा भएर हिंड़ेकाहरूको न स्थायित्व हुन्छ, न साहित्य झ्यांगिन पाउँछ । उनीहरूको जीवन ठाँटबाँट बिनाको घुमन्ते भएरै बित्छ । त्यस्तै नेपालीहरूको धेर बसाइँसराइले हाम्रो जाति भनेजति सम्पन्न हुन सकेन कि भन्छु म ।

हातकाटा पौडेलको घर आफ्नो जत्तिकै थियो । कालो वर्णको ध्वाँसे नाम गरेको हातकाटा पौडेलको एउटा छोरो थियो । उसको बिहे भएर साना-साना दुई वटा छोरा पनि थिए । त्यहाँ केही दिन बसेर बाउ-छोरा लाग्यौं पहाड़ जानलाई धरानतिर । हरेक ठाउँमा बाले मान्छे चिन्नुभएको थियो । अचम्म लाग्छ, मलाई अहिले सम्झिंदा ! धमिलो सम्झना अनुसार धरानको छाता चोक छेउमा रेडियो बिक्री गर्ने र मर्मत गर्ने एउटा पलिखे सेन्टर नामको पसल थियो । त्यस पसलका मालिकको घरमा बाउ-छोरा एक रात बसेका थियौं । उनीहरूले गरेको सम्मानले बाप्रतिको आत्मीयता के कति थियो भन्ने कुरा स्पष्ट झल्किएको थियो । भोलिपल्ट एक-एक ग्लास चिया खाएर बिहानै हामी पहाड़ चढ्ने मनसायले बाटो लाग्यौं । तर, हामी जाँदै गर्दा बाटैमा खाँदबारीबाट धरान ओर्लिंदै गरेका एक जना बरालसित हाम्रो भेट भयो । उनले 'बरालहरू माझ जग्गा-जमीनको विषयलाई लिएर खाँदबारीमा रड़ाको मच्चिरहेको छ' भन्ने कुरा गरे । बा पनि त्यहाँ थपिंदा त 'यो पनि असमदेखि अंश माग्न आएछ' भन्ने हुन्छ भनेर बाले त्यहींबाट फर्कने निर्णय लिनुभयो । त्यसपछि हामी बिराटनगर पुण्यप्रसाद काकाका घरमा गएर निकै

दिन बसेका थियौं । बाका मावली पौड़ेल भेट्न जाँदाको यो संस्मरण राख्न मन लागेर यहाँ राखें ।

केही वर्षको मेरो चन्द्रगढ़ीको बसाइमा न्यायाधीश वाचस्पति निरौलाका घरमा बसेको थिएँ । उहाँकै घरदेखि पूर्वमा बाटो पारि नव दिदीहरू बस्नुभएको थियो । कस्तो संयोग ? वि.स. २०३४ मा म र दिप्ती घुम्न भनी चन्द्रगढी गएका थियौं । म गणितमा स्नातक भएकाले नेपालकै स्कूलमा काम गर्ने सल्लाह घनश्याम सर र नव दिदीले दिनुभएको थियो । गुवाहाटीमा पनि त्यतिबेला म १५० रुपैयाँ तलबमा एउटा स्कूलमा काम गर्थें । दिप्ती र मैले सल्लाह गर्‍यौं, गुवाहाटीको भन्दा राम्रै हुन्छ भन्ने हाम्रो विचार भयो । फेरि दुबै जनाले एउटै स्कूलमा जागिर पाउने हुँदा हामी नेपालमा बस्न सहमत भयौं । यसरी एक वर्ष जति बैगुनधुरा र दुई वर्ष जति चन्द्रगढ़ीमा हामी बस्यौं । ३६ सालको शिक्षक आन्दोलन नभएको भए म पनि अहिले नेपालमा नै हुन्थें होला । जे होस्, सिलिगुड़ी कर्मथलो बन्यो । भगवानले जे गर्छन्, राम्रै गर्छन् ।

द्रोणका बाबा टीकाराम पौड़ेल र मेरा बा टीकाराम बराल बीच दाजु-भाइको सम्बन्धमा धेरै आत्मीयता थियो । दुबै संस्कृतका पण्डित । काका पनि गुवाहाटी आउने अनि मेरा बा पनि ओदालगुड़ी गइरहने बड़ो घनिष्टता थियो । मभन्दा माथिका मेरा दुई-तीन जना दाजुहरू खसेपछि आमाको पेट पुछपाछ गरेर जन्मेको म कान्छो छोरो बाको प्यारो थिएँ । प्रायः नै बाले मलाई साथ लिएर हिंड्नु हुन्थ्यो । ओदालगुड़ी द्रोण दाइहरूकामा केही दिन बस्दै ढेकियाजुली, सिंग्री, शीतलमारी (अहिले छैन, ब्रह्मपुत्रको गड़ाले लग्यो) आदि विभिन्न ठाउँहरूतिर जाँदा म हुन्थे बाको साथी । त्यतिबेलाका प्रसिद्ध पण्डितहरू बृहस्पति पण्डित, प्रजापति शास्त्री, चूड़ामणि गौतम, नारद अधिकारी आदि कति हो कति, बाका आत्मीयहरू थिए । ती पण्डितहरू बीच मन मिल्ने र गहिरो आत्मीयता भएकाले आवतजावत भइरहने । त्यही नाताले अहिले उनीहरूका छोरा-नातिहरूसित मेरो पनि सम्पर्क छ ।

अहिले मानिसका समस्या धेर भए र समय पनि त्यति हुँदैन । अहिलेको युग यान्त्रिक युग भयो । मान्छे मेसिन जस्तो खट्ने गर्छ । कतै आफन्त वा साथीहरू भेट्न जाने समय नै हुँदैन कसैलाई । त्यतिबेलाको जस्तो आफन्त र साथी-भाइहरूको घरतिर आउने-जाने त्यो गजबको परम्परा अहिले छैन भन्दा पनि हुन्छ । कुनै कामविशेषले मात्रै अहिले मानिस हिंड्ने गर्छ । आत्मीय भावनाको

महत्व र कदर विस्तारै लोप भइसक्यो भन्दा पनि हुन्छ। फेरि एउटा कुरा के अचम्म लाग्थ्यो भने, त्यस समयमा असमभरिका मान्छेले एक अर्कालाई चिनेकै हुन्थे । ओदालगुड़ीका राजनैतिक व्यक्तित्व चन्द्रमोहन छेत्री, साहित्यिक व्यक्तित्व तारापति उपाध्याय, विद्यापति उपाध्याय आदिलाई द्रोण दाइसितको सम्बन्धले गर्दा त्यस समयदेखि नै म चिन्दछु। तर, त्यतिबेला साहित्य कुन चरीको नाम हो, मलाई भने थाहा थिएन । चन्द्रमोहन छेत्री भनेका सिलिगुड़ीका मानवीरसिंह छेत्रीका ससुरा हुनुहुन्छ। लहरो तान्दा पहरो गर्जिने रहेछ, त्यसैले म एबाउट टर्न गरेर हाम्रै गन्थनतिर मोड़िएँ ।

द्रोण दाइले गुवाहाटी विश्वविद्यालयबाट नेपाली विषय लिएर बी.ए. गरेपछि उहाँलाई काठमाण्डु गएर नेपाली विषयमा एम.ए. गर्ने ठूलो धोको थियो। त्यसका लागि त्यतिबेला नेपाल बाहिरका केही विद्यार्थीलाई अनुदानमा पढ्ने अनुमति थियो। सन् १९७१ मा भीमकान्त उपाध्यायले पनि सोही अनुरूपको अनुदान पाएर काठमाण्डुस्थित त्रिभुवन विश्वविद्यालयबाट नेपालीमा एम.ए. गर्नुभएको हो। हुन त म भीमकान्त दाइलाई सन् १९६६ देखि नै चिन्छु। अखिल गुवाहाटी नेपाली छात्र संघमा उहाँ पनि हुनुहुन्थ्यो । संघका विभिन्न कार्यक्रमहरूमा उहाँसित भेट हुन्थ्यो ।

पछि उहाँले पनि माझगाउँबाट मेरी जेठीसासू पर्ने मलयादेवीसित बिहे गरेपछि हामी अझै नजिकियौं। भीमकान्त दाइको सम्बोधनमा म भाइबाट ज्वाइँ भएँ। सिलिगुड़ीको उत्तरबङ्ग विश्वविद्यालयमा नेपाली विषय सन् १९७६ मा खोलिएको हो। एम.ए. खोलिएपछि नेपाली विभागका प्राध्यापक भएर सन् १९७८ को जनवरीमा उहाँले उत्तरबङ्ग विश्वविद्यालयमा नियुक्ति लिनुभयो र उहाँको कर्मथलो सिलिगुड़ी भयो। सन् १९८१ मा म पनि बरालिंदै सिलिगुड़ी आएँ र नोकरी गर्न थालें। त्यसपछि हाम्रो आत्मीयता झन्-झन् बढ्दै गयो ।

भीमकान्तजी चार वर्ष गुवाहाटीको कटन कलेजमा पढ्नुभएको हो । त्यतिबेला आई.ए र बी.ए. तहको पढ़ाइमा मुख्य भारतीय भाषा (ःक्षि) का रूपमा एक विषय नेपाली पढ्न पाइन्थ्यो। बी.ए सकेर विभिन्न स्रोत मिलाएर भीमकान्तज्यू अनुदानमा नेपाली पढ्न काठमाण्डु (नेपाल) जानुभयो। एक विषय नेपाली लिएर बी.ए. पास गरेपछि द्रोण दाइलाई पनि काठमाण्डु गएर नेपालीमा एम.ए. पढ्ने इच्छा भयो। यस्ता कुरा द्रोण दाइले मसित पनि गरेकाले सम्झिन सकें र यहा राखें। द्रोण दाइले भीमकान्त दाइसित सम्पर्क गरेर त्यस अनुदान कार्यक्रममा के कसरी निवेदन गर्ने कुराको जानकारी लिएर अघि बढ्नुभएको हो।

हुन त भीमकान्त दाइसित द्रोण दाइहरूको चिनारी धेरै अघिदेखिकै हो। भीमकान्त दाइ ओदालगुड़ी पनि जानुभएको रहेछ। काका टीकारामसित भेट गर्न जाँदा त्यतिबेला बृहस्पति गुरुजी पनि द्रोण दाइका बाबालाई भेट्न जानुभएको थियो। बृहस्पति पण्डित पनि संस्कृतका विद्वान् हुनुहुन्थ्यो अनि बटियामारीमा गंगाधर पौड़ेलले खोलेको सांगवेद संस्कृत विद्यालयमा पढ़ाउनु पनि भएको हो। त्यतिबेलादेखि नै बृहस्पतिज्यूको सम्बन्ध द्रोणका बाबा टीकारामसित भएको हुनुपर्छ। किनभने टीकाराम काकाले पनि सांगवेद संस्कृत विद्यालयमा पढ़ाउनुभएको हो। भीमकान्त दाइ स्वयम्ले मलाई ओदालगुड़ी गएको कुराको जानकारी गराएकाले मलाई थाहा भएको हो। सन् १९७३ मा द्रोण दाइले त्रिभुवन विश्वविद्यालयबाट नेपाली विषयमा स्नातकोत्तरको अध्ययन पूरा गरेर असम फर्किनुभयो।

म बी.एस्सी.को पार्ट वान पढ्दै गर्दा मेरी आमा कर्कट रोगले आक्रान्त हुनुभएकाले पुट्टपर्ती साई बाबाको आश्रम हुँदै भेलोर लगेर चिकित्सा गरायौं। तर, विधिको विधान मानिसले कहाँ टार्न सक्दो रहेछ र ? सन् १९७४ को सेप्टेम्बर महिनाको २१ तारिख आमाको स्वर्गारोहण भयो। आमाको शुद्धशान्ति कर्ममा बृहस्पति पण्डित, प्रजापति शास्त्री, चूड़ामणि गौतम, टीकाराम पौड़ेल, नारद अधिकारी आदि धेरै पण्डितहरूको उपस्थिति रहेको थियो। त्यस समयमा द्रोण दाइ पनि आउनुभएको थियो। घनिष्टता भएकाले हामी पारिवारिक हरएक शुभ-अशुभ कार्यमा भेला हुने गर्थ्यौं।

दाइलाई ग्यासको समस्याले धेरै नै सताउने गर्थ्यो। उहाँहरूको परिवार शाकाहारी थियो। मेरो परिवारमा पनि बा र आमा निरामिष हुनुहुन्थ्यो। ब्रह्मपुत्र नदीकै छेउमा घर भएकाले माछा प्रशस्त पाइन्थे वा भनौं नाउ लिएर आफैं पनि माछा मार्न जाइन्थ्यो। त्यसैले हामी छोरा-छोरीले भने माछा खाने गर्थ्यौं र कहिलेकाहीं गाउँमा खसी काटेको बेला त्यो पनि खाने गरेका थियौं। चन्द्रगढ़ी बसाइ सरेपछि द्रोण दाइले त दूध अनि दूधबाट बनिएका कुनै पनि सामग्री खान छोड्नुभएको थियो। दूध पनि गाईको शरीरबाट निस्कन्छ। त्यसैले दूधलाई उहाँले निरामिष मान्नु भएन। आ-आफ्नो भावना हो। सबैले सबैको भावनालाई कदर गर्नु पर्छ। उहाँलाई मन लागेन, खानु भएन; ठीकै छ। त्यसमा तर्क गर्ने कुरै आउँदैन।

मानिस वा भनौं कुनै पनि जन्तु शरीरबाटै जन्मेको हुन्छ अनि आमाको दूध खाएर नै हुर्किन्छ पनि। दूधलाई पवित्र मानिन्छ। त्यसैले भगवानलाई अर्पण पनि

गरिन्छ। तर, मलाई मनमा लागेको एउटा कुरा के भने, पशुप्राणीका बच्चाहरू हुर्किएपछि आमाको दूध खाएको देखिंदैन। जन्तुहरू हुर्किएपछि प्राकृतिक रूपले नै दूध खाँदैनन्। मानिस मात्रै हो, जसले जीवनको अन्तिम क्षणसम्म पनि दूध सेवन गरेको पाइन्छ। जे होस्, यस गन्थनलाई यतिमा नै बिट मारेर म अघि बढ्छु।

सन् १९७३ कै डिसेम्बर महिनामा साई बाबा समितिले गुवाहाटीमा शीतकालीन शिविरको आयोजना गरेर आध्यात्मिक ज्ञान साथै योगासन सिकाएको थियो। त्यसमा म पनि सहभागी बनेर आसनहरू सिकेको थिएँ। त्यहाँ मैले 'ग्यास जाती पार्न सकिने धौती आसन गर्नुपर्छ' भनेर जानेको थिएँ। त्यसको लगत्तै पछि म भेटघाटकै क्रममा द्रोण दाइका घर ओदालगुड़ी गएको थिएँ। त्यतिबेला दाइले मलाई 'मुक्ति भाइ ! मलाई त ग्यासले साह्रै अप्ठ्यारो पार्छ, के गरूँ र कसो गरूँ बनाउँछ' भन्नुभयो। मैले उहाँलाई बिहानै उठेर धौती गर्न सिकाएँ। धौती गर्दा खाली पेटमा सकेसम्म पानी खानु पर्छ र अनि त्यो पानी सबै वाक्वाक गरेर निकाल्नु पर्छ। पानी त हामी दुबै भाइले निकै नै खायौं। मैले त मुखमा औंला हालेर सबै पानी निकालें, तर द्रोण दाइले पानी सबै निकाल्न सक्नु भएन। त्यसो हुँदा उहाँलाई दिनभरि लघुशङ्का मात्रै जानुपर्ने स्थितिको सिर्जना भयो। 'के सिकायौ नि मुक्ति भाइ तिमीले, एकैछिन पनि बस्न पाउँदिन' भनेर मसित गुनासो पोख्नुभएको घटना मैले कसरी बिर्सनु ? सक्दिन बिर्सन। अस्ति जस्तो लाग्छ, हिजै जस्तो लाग्छ।

काठमाण्डुबाट पढाइ सकेर घर आएपछि ओदालगुड़ीको हायर सेकेण्डरी स्कूलमा नै केही वर्ष उहाँले शिक्षण गर्नुभयो। त्यही समयमा द्रोण दाइको बिहेको कुरा चल्न थाल्यो। काका र काकीले 'गुवाहाटीतिर होलान् नि मुक्तिका केटी साथीहरू। जानू र हेरेर आउनू' भन्नुभयो। नभन्दै मेरा केटी साथीहरू निकै नै थिए। गुवाहाटी आएर कलेजमा बी.ए. अन्तिम वर्ष पढ्दै गरेकी मेरी एउटी साथीसित कुरा राखें। उनले पनि नाई भनिनन्। उनले केटा हेर्ने कुरा गरिन्।

ती केटी गुवाहाटीको केटीहरूको नामी कलेज हेण्डिकमा पढ्थिन्। त्यस कलेजमा पढ्ने असमिया र नेपाली केटीहरूसित भेट्न म त त्यसै पनि त्यो कलेज धाउने गर्थें। अखिल गुवाहाटी नेपाली छात्र संघ भन्ने गुवाहाटीमा हाम्रो एउटा संस्था थियो। त्यस संस्थामा गुवाहाटीका प्रायः सबै कलेज र विश्वविद्यालयका विद्यार्थीहरू सदस्य थिए। फेरि त्यस समयमा गुवाहाटीमा हामी सबै संस्कृतिप्रेमी थियौं। त्यस संगठनले साहित्यिक र सांस्कृतिक कार्यक्रम लगायत नाटकहरू

पनि मञ्चन गर्ने गर्थ्यौं । अनि साथमा पिकनिक पनि आयोजन गर्ने गर्थ्यौं । एकपल्टको पिकनिकमा हाम्रो साथमा माया ठकुरी, चन्द्रकला नेवार, आरती नेवार, उषा छेत्रीहरूले पनि साथ दिनुभएको थियो ।

त्यस युवा समूहमा भएका केही साथीहरूको नाम नलिई सकिन । हामी जाँगरिला साथीहरूमा थियौं- अविनाश श्रेष्ठ, गोपालबहादुर नेपाली, बादल सुवेदी, मोहन गुरुङ, शिव छेत्री, मनबहादुर शाही, नरबहादुर छेत्री, हरि शर्मा, अशोक नेवार, रामबहादुर बराल, मोहन शर्मा, रतन शर्मा, प्रह्लाद छेत्री, उमा शर्मा, दुर्गा छेत्री, चम्पा गुरुङ, पम्फा गुरुङ, नीता गुरुङ, पार्वती शर्मा, रत्ना शर्मा, लक्ष्मी उपाध्याय, देवी उपाध्याय, योगमाया उपाध्याय, कृष्णप्रसाद उपाध्याय, महेन्द्र गुरुङ, किशोर गिरी आदि आदि । सम्झना आएजतिको नाम लिएँ । अनि हामीलाई मार्गदर्शन गर्नेहरूमा प्रेमसिंह सुवेदी, लीलबहादुर क्षत्री, गोपाल नेवार, नरबहादुर शाही, टेकबहादुर छेत्री, गोमा शर्मा, ओमप्रकाश सुवेदी आदि हाम्रा अग्रजहरू थिए ।

हाम्रो सल्लाह अनुसार समय निकालेर केटी हेर्नका लागि एक दिन दाजु गुवाहाटी हाम्रो घर आउनुभयो । उहाँलाई मैले हेण्डिक कलेज लिएर गएँ । त्यतिबेला अहिलेको जस्तो मोबाइल फोन थिएन । कलेजको गेट बाहिर आएका क्लास नहुने केटीहरूलाई फलानो क्लासको फलानालाई बोलाइदिने अनुरोध गर्नु पर्थ्यो । त्यसरी केटी समक्ष हामी भेट्न आएको खबर पुग्थ्यो । फेरि केटीहरूको कलेजमा केटा भेट्न जाँदा त्यो कुरा एक कान, दुई कान मैदान नै हुन्थ्यो । नभन्दै हाम्रो खबर पुग्यो पनि अनि ती केटी आइन् र दुबैको परिचय मैले गराइदिएँ । पानबजारको कुनै रेस्टुरेन्टमा चिया पनि पियौं । त्यति भएर हामी छुट्टियौं । मैले पछि दुबै जनासित भेटेर कुरा गर्दा दुबैलाई मन परेको कुरा थाहा पाएँ ।

तर, दुःखको कुरा के भयो भने काका अर्थात् द्रोण दाइका बाबालाई त्यही समयमा कर्कट रोगले समायो । भेलोर गएर के कसरी चिकित्सा गराउनु पर्छ भन्ने कुराको जानकारी लिन द्रोण दाइ स्वयम् मलाई भेट्न गुवाहाटी आउनुभएको थियो । काकाको बिमारको चिकित्साका लागि समय दिनुपर्दा व्यस्तता र कुदिकुदाइ धेरै भएकाले बिहेको कुरा त्यत्तिकै सेलाएर गयो । काका पनि खस्नुभयो । ती केटीका बाबा-आमाले पनि उनको बिहे अन्यत्र गरिदिए । त्यताको प्रसङ्ग पूरै बन्द नै भयो ।

काकाको वार्षिकी सकिएपछि द्रोण दाइको बिहे सोलङ निवासी खनालकी छोरी मीरादेवीसित ठीक भयो । मेरो बिहे भएको एक वर्षपछि दाजुको बिहे भएको

थियो । द्रोण दाइको बिहेका लागि दुई-चार दिन अघि नै म र दिप्ती ओदालगुड़ी गएका थियौं अनि अति खुशी भएर जन्ती पनि गएका थियौं । मेरो जीवनको त्यो एउटा अति नै अविस्मरणीय जन्ती यात्रा थियो । ओदालगुड़ीबाट तेजपुरसम्म हामी एउटा मिनी बसमा गएको सम्झना आउँछ । त्यतिबेला ब्रह्मपुत्रमा सोलङ र तेजपुर जोड्ने भोमोरागुड़ी पुल बनेको थिएन । १९८९-९० तिर मात्र भोमोरागुड़ीको पुल बनिएर यातायात शुरु भएको हो ।

त्यस समयमा तेजपुरबाट फेरी-जहाज चल्दथ्यो । तर, त्यसले ठ्याक्कै सोलङ पुऱ्याउँदैनथ्यो । तेजपुरबाट पानपुर, सिलघाट ओर्लिएर सोलङ पुग्न शायद निकै हिंड्नु पर्थ्यो । त्यसैले तेजपुरबाट सोझै सोलङ जान दुई वटा ठूल्ठूला नाउ बन्दोबस्त गरिएको थियो । त्यतिबेला जन्तीमा गएका कुनै बुद्धिमान व्यक्तिको सल्लाह अनुसार दुबै नाउलाई तेर्सा बाँसका भाटा बाँधेर जोड़िएको थियो । नाउ हाँक्ने दुई जना गुडी़वाल अनि साथमा चार जना दारवाला पनि थिए । गुडी़वालले नाउको पछाड़िको टुप्पामा बसेर लामो बैठा (दाबिलो) लिएर दिशा सञ्चालन गर्छ भने दारवालाहरूले नाउको बीचमा दुई छेउमा बसेर दार (छोटो दाबिलो) ले नाउलाई गति प्रदान गर्छन् ।

जन्ती साह्रै धेरै थिएनन् । त्यस्तै तीस जना जति थियौं होला । सन् २००५ मा साहित्य अकादेमी, नयाँ दिल्लीबाट अनुवादमा पुरस्कार पाउने साहित्यकार पुष्पधर शर्मा पनि जन्त जानेमा हुनुहुन्थ्यो । पुष्पधर शर्माको सहभागितामा अहिलेसम्म सम्झनामा रहेका जन्तीहरू- एम.एल.ए. पदमा उम्मेदवारी दिइसक्नु भएका चन्द्रमोहन छेत्री, दुर्गा सापकोटा, काशीनाथ धमला, दलेश्वर बड़ो (बड़ो साहित्य सभाका भू.पू.अध्यक्ष, द्रोण दाइको सहकर्मी), नेपालबाट नीलकण्ठ काका आदि थिए । हाल ९८ वर्ष पुग्नुभएका चन्द्रमोहन छेत्रीज्यू अहिले पनि 'बाहिर-भित्र गर्नु हुँदैछ' भन्ने जानकारीले भगवानको लीलाको चमत्कार बुझिनसक्नु नै रहेछ, भनी सम्झेको छु ।

नाउ आफ्नै पाराले अघि बढ्दै थियो भने जन्तीहरू आनन्दले खुशीसाथ मीठा गफमा भुलिंदै, कसैले गीत गाउँदै, कसैले पानी हातमा लिएर खेलाउँदै रमाइलो गर्दै थिए । मौसम खुल्ला र घमाइलो थियो । फागुनको महिना भएकाले सहन सकिने घाम थिए । अचानक मौसममा अकल्पनीय रूपमा परिवर्तन आयो । हल्का पश्चिमी हावा चल्न थाल्यो, जसलाई असमिया भाषामा पसुवा बताह (पश्चिमी हावा) भन्ने गरिन्छ । नेपालीहरूले पनि त्यो शब्द धेरै प्रयोग गर्छन् । विस्तारै त्यस हावाले तुफानको उग्रता लिन थाल्यो । विशाल ब्रह्मपुत्रको पानीको स्रोत पूर्वबाट

पश्चिमतिर बग्छ। अनि त्यस दिनको तुफानी हावा पश्चिमबाट पूर्व दिशातर्फ चलेको थियो। पानी र हावाको स्रोत विपरीतमुखी भएकाले ब्रह्मपुत्रको पानीमा भयंकर छालको सृष्टि हुन थाल्यो। दुई-तीन फुट अग्ला छालहरू आएर नाउमा ठोक्किन थाले ! नाउभित्र छालले उफारेको पानी ह्वालह्वाली पस्न थाल्यो। जन्ती जान आएका मानिसहरूको अनुहार डरले कालो अँध्यारो हुन थाल्यो। अलिक उमेर पुगेका मानिसहरू त रामनाम जप्न थालिसकेका थिए। म र दिप्ती पनि साह्रै डराएका थियौं। नडराइकन नाउको पानी बाहिर फ्याँक्ने अनुरोध गरेर दुई गुडीवाल र दारवालाहरूले सबैमा हिम्मत जुटाइरहेका थिए। ती माझीहरूको काम ब्रह्मपुत्रको पानीसितै रात-दिन हुने गर्छ। उनीहरूको पेटपालो काम त्यही नै हो। त्यस्ता आँधी र तुफान कति बेहोरे होलान् उनीहरूले। भएभरको आफ्नो अनुभवले नाउलाई सुरक्षित पारि पुऱ्याउने प्रयास उनीहरूले छोडेका थिएनन्। त्यस्तो छालमा दुई नाउ जोड्दा झन् आपद आइलाग्दो रहेछ। दुई नाउ जोड़िएको हुनाले माझीलाई छालको दिशामा नाउ तेर्साउन गाह्रो पर्दोरहेछ। फेरि दुई नाउको बीचमा पानी ठोक्किएर छ्वामछ्वाम नाउभित्र पानी पस्न थालेको थियो। एक-एक वटा नाउ भएको भए माझीले छाल र हावाको दिशामा ठाड़ो पार्न सक्दा छालमा नाउ तल-माथि हुँदा पनि त्यति खतरा हुँदैनथ्यो रे। अनि नाउलाई हावाले ठेल्दै अगाडि बढ़ाउने थियो रे। त्यसको अनुभव मलाई पनि पहिले एकपल्ट भएको हो। सो कुरा मैले मेरो संस्मरण 'बुच्के छपड़ी'मा उल्लेख गरेको भए तापनि यहाँ राख्नु अति प्रासंगिक लाग्यो।

सन् १९६७-६८ तिरको कुरा हो। म त्यतिबेला सात-आठ क्लासमा पढ्थें। हाम्रो खेती भएको ठाउँको नाम हो- डुमपाड़ा। गुवाहाटीबाट बाह्र माइल पूर्व पर्छ। डुमपाड़ाबाट गुवाहाटी दूध बोक्ने हाम्रो एउटा ठूलो नाउ थियो। ब्रह्मपुत्रको दक्षिणमा थियो हाम्रो घर। घरबाट सोझै उत्तरमा नदीको बीचमा थियो, एउटा छपड़ी (चारैतिर नदीको पानीले घेरेको चरभूमि), स्वाभाविक रूपमा जहाँ नाउमा जानुपर्थ्यो। डुमपाड़ालाई नेपाली बस्ती पनि भनिन्थ्यो र त्यहाँका धेरै मानिसका गाईगोठ थिए, त्यस छपड़ीमा। छपड़ी नदीले लगेपछि डुमपाड़ाका प्रायः सबैका गोठ मासिएका थिए।

त्यो छपड़ी हाम्रो रमाइलो गर्ने गजबको ठाउँ थियो। त्यस वर्ष दशैंमा हाम्रो गोठमा गोठालाहरू मिलेर खसी काटेका थिए। हाम्रो खेत-बारी हेर्ने र स्याहार्ने एक जना ठकुरी दाइ भन्ने मानिस थिए। बा-आमाले उनलाई टुहुरो भेटेर

सानैदेखि पाल्नुभएको थियो । हाम्रो घरको सदस्य भइसकेका थिए उनी । म र ठकुरी दाइ मासु लिन भनी नाउ लिएर छपड़ी पुग्यौं । मासु लिएर म र ठकुरी दाइ नाउमा वारि घर आउँदै थियौं । नाउ नदीको बीचमा आइपुग्दा ठूलो हावा-हुण्डरी आयो, त्यो पनि पश्चिमबाट । ब्रह्मपुत्र बग्छन् पश्चिमतिर अनि पश्चिमबाटै हावा चल्दा नदीमा अग्ला-अग्ला धौ (छाल) उर्लिंदै आएर नाउ नै पल्टाउला भैं भयो । नाउमा पानी त ह्वालह्वाली पस्न थाल्यो । डरले मेरो त सातोपुत्लो नै हराइसकेको थियो । त्यस दिन ती ठकुरी दाइको धैर्य र साहस मानें मैले । रत्तिभर नडराई नाउलाई उनले बड़ो कुशलतासँग हावाको दिशामा नै अघि बढ़ाए । हावा चलेकै दिशामा नाउ अघि बढ्दा छालको पानी गुडी़मा (टुप्पामा) ठोक्किंदा पानी धेर पस्न पाएन र नाउ पनि हावाले ठेल्दै अघि बढ़ाउन थाल्यो । ठकुरीले मलाई चाहिं नाउमा पसेको पानी बाहिर फ्याँक्न लगाए । हावाको धपेड़ीबाट बँच्दै वारि आइपुग्न धेरै समय लाग्यो । जे होस्, ठकुरी दाइले गर्दा सुरक्षित वारि आइयो । त्यस दिनको कुरा सम्भिंदा अहिले पनि मेरो आङ जिरिंग हुन्छ ।

जन्तीहरूको नाउलाई दुई गुडीवालले हावाको दिशामा सोभ्को बनाउने कोशिश धेरै गरे । दुई नाउ जोड़ेको हुँदा नाउ तेर्साउन गाह्रो भयो । दुई नाउ बाँधेका भाटा खोल्ने सल्लाह माभ्कीले दिएपछि दुई नाउ स्वतन्त्र भए । दुई जना गुडी़वालले आ-आफ्नो नाउ आफ्नो वशमा ल्याउन सफल भए अनि दारवालाले एकग्रताका साथ नाउलाई गति प्रदान गर्न थाले । गुडी़वालले हावाको दिशामा नाउ तेर्साए । तल-माथि उकालिंदै ओह्रालिंदै छालको पानीमा नै थेचारिंदै बल्ल दुई स्वतन्त्र नाउ अघि बढ्न थाले । नाउबाट पानी फ्याँक्ने काम पनि रोकिएको थिएन । धन्न पानी भने परेको थिएन । छालको पानीले अलि-अलि भिज्दै रुझ्दै भगवानको दया र माभ्कीहरूको प्रयासले हामी सुरक्षित पारि पुग्यौं । हावाहुण्डरी आएकाले बेहुली घरका मानिसहरू ब्रह्मपुत्रको किनारमा आएर हाम्रो बाटो हेरिरहेका रहेछन् । हामी त्यहाँ नपुगुञ्जेलसम्म बेहुली घरका मानिसहरू निकै आत्तिएका थिए । त्यस दिनको सो घटना बयान गर्दा अहिले पनि त्यो सम्भनाले मेरा रौं ठाड़ा भएर हृदयको स्पन्दन बढ़ेको पाएँ । शायद त्यस दिन द्रोण दाइको बिहेमा गएका जन्तीहरूका मनमा पनि सो घटना आलै हुनुपर्छ ।

सन् १९८१ मा नेपालमा शिक्षकहरूको निकै लामो हडताल भयो । धेरै शिक्षकहरू थुनामा पनि परे । मैले काम गरेको चन्द्रगढ़ी हाइस्कूलका शिक्षक पनि थुनुवामा परे । त्यस समयमा म सिलिगुड़ीतिर आउँदा कृष्णमाया मेमोरियल

नेपाली हाइस्कूलमा गणित शिक्षकको दरबन्दी रिक्त थियो र अन्तर्वार्ता हुने जानकारी पाएँ । निवेदन गरौं कि नगरौं भन्ने अन्योलको स्थितिमा थिएँ म । असमबाट आएर सिलिगुड़ीमा बसोबास गर्नु हुने मेघनाथ तिवारी, दिलीप तिवारी, मेरा मित्र भण्डिलाल घिमिरे अनि यज्ञनिधि ढकालज्यूहरूले प्रेरणा दिनुभयो- 'कृष्णमाया स्कूल भनेको सरकारी स्कूल हो । स्कूलमा नियुक्ति पाएको पहिलो दिनदेखि नै जागिर स्थायी भइहाल्छ ।' अनि उता चन्द्रगढ़ीमा म अस्थायी पदमा काम गर्थें । चन्द्रगढ़ीको भन्दा यता सिलिगुड़ीको तलब पनि धेर थियो । साथै, मेरी ठूलीआमाका नातिनी ज्वाइँ जीवन अधिकारी र उहाँका दाइ रामलाल अधिकारीले पनि मलाई ठूलो आँट र प्रोत्साहन दिनुभएपछि मैले निवेदन गरें । अन्तरवार्तामा पनि मेरै छनौट भयो । यसरी म १९८१ को नोभेम्बरदेखि सिलिगुड़ीमा जागिरे भएँ ।

त्यही वर्ष द्रोण दाइ चन्द्रगढ़ी भित्रिनु भयो । त्यहाँको मेची क्याम्पसमा पढ़ाउन थाल्नुभयो । असम ओदालगुड़ीको जग्गा र घर बेचबिखन गरेर उहाँ सपरिवार चन्द्रगढ़ीमा स्थायी बसोबास गर्नथाल्नु भयो । चन्द्रगढ़ी बसेर सबैतिरबाट उहाँको उन्नति हुँदै गयो । उहाँ मान्छे पनि मिलनसार, मृदुभाषी साथै भाषा-साहित्यमा अध्ययन, ज्ञान र रुचि भएको महत्वाकाङ्क्षी हुनुहुन्थ्यो । भाषा, साहित्य र समाजको उन्नतिमा उहाँ कहिल्यै पनि पछि पर्नु भएन । उहाँलाई सबैले मन पराए, आफ्नो बनाए अनि सम्मान गरे । उहाँजस्तो व्यक्तित्व पाउनु चन्द्रगढ़ीका लागि पनि गौरवको कुरा हुन गयो । असीम ज्ञान प्राप्त गर्ने प्रवृत्तिका कारण उहाँ चूप लागेर बस्नु भएन । सिलिगुड़ी आएर उत्तरबङ्ग विश्वविद्यालयका अनुभवी र वरिष्ठ प्राध्यापक डा. भीमकान्त उपाध्यायको निर्देशन र सहभागितामा सन् २००४ मा उत्तरबङ्ग विश्वविद्यालयबाटै विद्यावारिधि समाप्त गरेर डक्टरेटको उपाधि प्राप्त गर्नु भनेको हाम्रा लागि पनि खुशी र गौरवको कुरा हुन गयो ।

द्रोण दाइ चन्द्रगढ़ीमा भिज्नुभयो, सबैलाई आफ्नो बनाउनुभयो, त्यतै रमाउनुभयो र रत्तिनुभयो भने त्यसरी नै म सिलिगुड़ीमा । म दुई-तीन पटक चन्द्रगढ़ी जाँदा दाइको घरको बाटो काटिन । एकछिन भए पनि उहाँको घरमा गएँ, बसें, गफ गरें । तर, द्रोण दाइलाई मेरो सिलिगुड़ीको बासस्थानमा आउन कहिल्यै जुरेन । भीमकान्त दाइको घरमा भने उहाँको आवतजावत भई नै रह्यो । उत्तर बङ्गाल विश्वविद्यालयका बङ्लाभाषी प्राध्यापक दीपककुमार रायको घरमा भाउजूसँग आएर बास पनि बस्नु हुन्थ्यो भन्ने जानकारी पनि मलाई नभएको होइन ।

दीपककुमार रायसित उहाँहरूको परिचय असमबाटै भएको रहेछ । जे होस्,

द्रोण दाइको लक्ष्य ठूलो थियो, त्यसैले भीमकान्त दाइकहाँ मार्गदर्शनका लागि जानुपर्ने बाध्यता पनि थियो। द्रोण दाइले भीमकान्त दाइको घरबाट मलाई कहिलेकाहीं फोन गरेर कुशलक्षेमको जानकारी लिने कुरा बिर्सनु हुन्न थियो। त्यो सोधनी पनि मेरा लागि दाइको आशीर्वाद नै हुन्थ्यो। मेरो घरमा आउनै पर्ने त्यस्तो बाध्यता नभएको भए तापनि भाइ सम्झेर भाउजूलाई पनि साथमा लिएर आत्मीयता प्रदान गर्न, नजिकैको भाइलाई प्रेरणा र प्रोत्साहन दिएर माया गर्न एकैपल्ट पनि आइदिएको भए मेरो लगायत दिप्तीको मन कति रमाउने थियो होला भन्ने म सोच्छु। मेरा छोरा-छोरीले पनि हाम्रा बड़ा बा हुनुहुँदो रहेछ भनेर चिन्ने थिए। नातामा ठूलो पर्नेले माया गर्नु, सम्झिनु भनेको ठूलो महत्वको कुरा हुँदोरहेछ। सन् १९८९ मा बहिनी उषाको बिहेको निम्तो भीमकान्त दाइकै घरमा छोड़ेर मलाई फोन गर्नुभयो। म पनि अभागी नै हो; खै के काम परेर हो कुन्नि, म त्यस बिहेमा जान सकिन। त्यसको पछुतो मलाई अहिलेसम्म पनि छ। त्यसपछिका कुनै पनि शुभकार्यमा उहाँलाई मेरो सम्झना भएन। यो संसार त्यस्तै हो, कहिले सम्झना गर्न भ्याइन्छ अनि कहिले भ्याइँदैन। त्यो पनि समय-समयको कुरा हो। तर, कसैले कसैप्रति गुनासो गर्नु उचित हुँदैन। आ-आफ्नो सोच अनुसार चित्त बुझाएर आनन्दपूर्वक जीवन बिताउनका लागि सबै स्वतन्त्र छन्। जे होस्, द्रोण दाइप्रति म सधैं गर्व गर्थें अनि त्यो गर्व सदा रहने छ।

साहित्य लेखनमा मेरो प्रवेश ढिलैगरी भएको हो। आफ्नो बुद्धि र विवेकले भ्याए जति साहित्य सिर्जनाको काम मैले गरी नै रहेको छु। साहित्यमा केही चिनजान बढ्दै गएकाले बिर्तामोड़ र धुलाबारी आदि ठाउँहरूतिर भएका साहित्यिक कार्यक्रमहरूमा मलाई कहिलेकाहीं निम्तो हुन्थ्यो। त्यहाँ आफ्ना साहित्यिक साथी-भाइहरूसित मुक्ति मेरो भाइ हो भनेर द्रोण दाइले चिनाउनु हुन्थ्यो, माया गर्नु हुन्थ्यो, गर्व गर्नु हुन्थ्यो। बेलामौकाको त्यस्तो भेटमा द्रोण दाइले मेरो प्रशंसा गर्दै माया नगरेको पनि होइन। त्यतिबेला म हर्षविभोर हुन्थें, रमाउँथें अनि आफूलाई धन्य सम्झिन्थें। साहित्यिक कार्यक्रममा अलग-अलग निम्तो गरिए तापनि दुई-तीन पटक हामी एकै साथ जुटेका छौं।

सन् २०१३ को डिसेम्बर महिनाको २९, ३०, ३१ तीन दिन असम नेपाली नाट्य सम्मेलनको दोस्रो महाधिवेशन असमको बटियामारी भन्ने ठाउँमा आयोजन गरिएको थियो। त्यस अधिवेशनमा सिलिगुड़ीबाट नाटक विधामा साहित्य अकादेमी पुरस्कार पाएका व्यक्तित्व लक्ष्मण श्रीमल र मलाई निम्त्याइएको थियो।

त्यस अधिवेशनमा लक्ष्मण श्रीमललाई 'हरिनारायण विद्याभूषण सम्मान' र मलाई 'हरिभक्त कटुवाल सम्मान' प्रदान गरिएको थियो । त्यस पुनीत अवसरमा द्रोण दाइलाई पनि निम्त्याइएको कुरा बटियामारी पुगेर उहाँसित भेट भएपछि थाहा भयो । त्यतिबेलासम्म उहाँ बटियामारीमा जन्मिनुभएको कुरा मलाई थाहा थिएन । टीकाराम काकाहरू बटियामारीबाट ओदालगुड़ी बसाइँ सरेको भन्ने कुरा मलाई पहिलोपल्ट त्यहीं थाहा भएको हो ।

द्रोण दाइहरूको पौड़ेल खाल 'धेरै पौरखी, शिक्षित र ज्ञानी परिवार थियो' भन्ने कुरा स्वतः जानकारी पाइन्छ । बटियामारीको सर्वेश्वर देवालय (सन् १९०२) साथै सांगवेद विद्यालय (सन् १९२१)का प्रतिष्ठापक हुनुहुन्थ्यो- द्रोण पौड़ेलका हजुरबा गंगाधर पौड़ेल । त्यसैले उहाँको शालिक पनि त्यहाँ निर्माण गरिएको देख्न पाइन्छ । संघर्षपूर्ण जीवन व्यतीत गर्दै काशी बनारसमा गएर संस्कृत पढ़ेका विद्वान् हुनुहुन्थ्यो उहाँ । पण्डित गंगाधर पौड़ेलको अगुवाईमा सर्वेश्वर देवालयको छत्रछायाँमा बटियामारीमा सामाजिक जीवनको गतिलो आधार तयार भई सांगवेद विद्यालयले ज्ञानलाई प्रकाशमान पारेर विद्या, भाषा, साहित्य अनि सांस्कृतिक चेतना फैलाउने प्रेरणा र प्रोत्साहन प्रदान गर्छ । छोरा टीकारामलाई पनि शास्त्री गराउनुभएको थियो अनि पछि उहाँ पनि सांगवेद विद्यालयका प्राध्यापक हुनुहुन्थ्यो ।

गुवाहाटीको शुक्लेश्वर देवालय प्रांगणमा रहेको मुनिकुल आश्रममा टीकाराम र पुण्यप्रसादले केही काल विद्यार्जन गर्नुभएको थियो । आफ्नै घरपरिवारको संस्कृतमय वातावरण पाएर दाइ द्रोणले पनि संस्कृतको धेरै ज्ञान पाउनुभएको हो । 'पं. गंगाधर पौड़ेल : एक कर्ममय सार्थक जीवन' भनेर द्रोण दाइले लेखेको र प्रभाकुमारी पौड़ेलले बिराटनगरबाट प्रकाशित गरेको एउटा सानो पुस्तिकामा गंगाधरको संघर्षमय जीवनको कथा-व्यथाको जानकारी पाइन्छ । शायद त्यही निबन्ध बटियामारीको सांगवेद विद्यालयको प्लेटिनम जयन्तीको उपलक्ष्यमा सन् २००२ मा निकालिएको सांगवेद गरिमा स्मृतिग्रन्थमा पनि प्रकाशित गरिएको हो ।

बटियामारीका भाषा, साहित्य र संस्कृतिप्रेमीहरू जस्तैः श्रीनारायण खतिवड़ा, कर्णाखर उपाध्याय, गंगाधर उपाध्याय, संस्कृतका विद्वान् हरिनारायण दाहाल, गुणनाथ काफ्ले आदिको नेतृत्वमा त्यसबेला बटियामारीमा 'सांस्कृतिक जागरण नै शुरु भएको थियो' भन्नुपर्छ । सन् १९१९ तिरबाटै संस्कृतबाट नेपालीमा अनुवाद गरिएर होस् वा मौलिक रचना गरेर होस्, बटियामारीमा हरएक चाड़पर्वमा नाटक मञ्चन गरिन्थ्यो र त्यसरी त्यहींबाटै असममा नेपाली नाटक मञ्चनको थालनी

भएको भनिन्छ । नाटक लेख्ने, अभिनय गर्ने गराउनेहरूमा हरिनारायण दाहाल, गंगाधर पौड़ेल, गुणनाथ काफ्ले, काशीनाथ खनाल बाहेक सहयोगीहरूमा देवीदत्त उपाध्याय, टीकाराम पौड़ेल, हरिप्रसाद पौड़ेल, इन्द्रलाल पौड़ेल आदि अघि आउँथे । सन् १९१९ मा हरिनारायण दाहालले लेखेको नाटक 'प्रबोध चन्द्रोदय' सम्पूर्ण असमका लागि पहिलो मञ्चित नाटकका रूपमा देखा पर्छ ।

त्यतिबेला लेखेर मञ्चन गरिएका नाटकका १७ वटा पाण्डुलिपिहरू द्रोण दाइले संकलन गरेर राख्नुभएको रहेछ । ती पाण्डुलिपिहरू सन् २०१३ को असम नेपाली नाट्य सम्मेलनको दोस्रो महाधिवेशनमा द्रोण दाइले मञ्चबाटै एक-एक गरी नाम उल्लेख गर्दै प्रदर्शन गराउनुभएको थियो । ती पाण्डुलिपिहरू असम नेपाली नाट्य सम्मेलनले संरक्षण गरेर राख्ने इच्छा त्यस दिन त्यहाँ प्रकट गरेको कुरा मलाई पनि थाहा छ । तर, ती पाण्डुलिपिहरू असम नेपाली नाट्य सम्मेलनको हात लागेको छैन भन्ने कुरा सम्मेलनका सचिव पूर्णकुमार शर्माबाट जानकारी प्राप्त भएको छ । त्यसोभए ती पाण्डुलिपिको सुरक्षा हेतु शायद द्रोण दाइले आफूसितै राख्नुभएको होला । त्यस अधिवेशनमा द्रोण दाइले बटियामारीमाथि लेखेको एउटा सुन्दर कविता पनि वाचन गरेको मलाई झल्झली सम्झना छ ।

सन् २०१५ को ३१ जनवरी र १ फरवरी दुई दिन मिलनज्योति उत्सव समिति गमिरीद्वारा अन्तर्राष्ट्रिय नेपाली संस्कृति संगोष्ठीको भव्य आयोजना गरिएको थियो । त्यस संगोष्ठीमा नेपाल र भारतका धेरै साहित्यकारहरू निम्त्याइएका थिए । त्यसमा द्रोण दाइले नेपाली समाज र सांस्कृतिक रूपान्तर विषयमा गहकिलो कार्यपत्र प्रस्तुत गर्नुभएको थियो । मेरो कार्यपत्र मारुनी नृत्यलाई लिएर थियो । त्यस संगोष्ठीको एउटा राम्रो पक्ष के थियो भने, संगोष्ठीमा पाठ गरिनु पर्ने कार्यपत्रहरू समितिद्वारा पहिले नै आह्वान गरेर 'नेपाली संस्कृति सुधा' नामक पुस्तकमा प्रकाशित गरेर संगोष्ठीकै दिन वितरण गरिएको थियो । यस्तो भएको विरलै देखिन्छ । यसरी असममा भएका दुई वटा भव्य कार्यक्रमहरूमा दाइसित मेरो भेट भएको थियो ।

द्रोण दाइ स्वर्गारोहण भएको खबर वैद्युतिक सञ्जाल मार्फत मलाई समयमा नै प्राप्त भएको हो । २६ डिसेम्बर २०१९ का दिन मेरो ग्यास्ट्रिक अपरेशन भएको थियो । ८ जनवरी २०२० मा फोर्टिस हस्पिटलबाट गुड़गावँको फ्लेटमा आएर त्यो समय म विश्राम अवस्थामा थिएँ । शारीरिक अस्वस्थता र टाढ़ा भएकाले मन हुँदाहुँदै पनि म चन्द्रगढ़ी पुग्न सकिन । मार्च महिनाको १८ तारिख म सिलिगुड़ी

आएँ । तर, २१ मार्चबाट लकडाउन शुरु भयो र कतै चलमल गर्नै पाइएन ।

पछि, मलाई खगिन्द्रा खुशीले फोन मार्फत द्रोण दाइको स्मृतिग्रन्थका लागि सरसल्लाह गर्न चन्द्रगढ़ी बोलाउनु पनि भएको हो । तर, परिवेश र परिस्थिति हिंड़डुल गर्ने खालको थिएन अनि अझै पनि त्यस्तै छ। स्मृतिग्रन्थकी प्रधान सम्पादक खगिन्द्राजीले मलाई असम, सिलिगुड़ी, सिक्किमतिर सम्पर्क गरेर स्मृतिग्रन्थका लागि लेख संकलन गर्ने काम सुम्पिनुभयो । साथै, भतिजा यशवन्तले पनि मसित धेरै सम्पर्क गरेर के कसरी हुन्छ, उनको बाबाको स्मृतिग्रन्थ गहकिलो र सफल पार्ने अनुरोध गरी नै रहे । यसरी मलाई सम्झिनु यशवन्त भतिजाको ठूलो हृदयको परिचायक हो भन्छु म । सिलिगुड़ीमा मुक्ति नाम गरेको एउटा भाइ छ भनेर पक्कै पनि द्रोण दाइले छोरासित कुरा गर्नुभएको हुनुपर्छ । भाउजूसित त मेरो धेरैपल्ट भेट भएको हो, तर छोरा यशवन्तसित मेरो घनिष्ट परिचय भएको कुरा मलाई सम्झना छैन ।

दाइको स्मृतिग्रन्थका लागि लेखादि संकलन गर्ने काममा असमतिरका साथी-भाइहरूसित भिडियो कल गरेर कुराकानी धेरै भए । सिलिगुडी र सिक्किमतिर पनि लेख पाउँ भनी फोन गरें । काम पनि निकै अघि बढ्यो । केही लेख आए पनि । सम्पादकज्यूले लेख मागेर डा. गोविन्दराज भट्टराईसित सम्पर्क गरे तापनि मैले पनि मेरो तर्फबाट भट्टराईज्यूलाई एउटा लेख लेखिदिने विशेष आग्रह गरेको थिएँ । सोही अनुरूप उहाँले लेख लेखिसकेर मलाई मेलमा सम्प्रेषण गर्नुभयो । मैले सो लेख पढ़ें पनि । विद्वत्जनको लेख्ने कला नै अर्कै-अर्कै पाराको, मोहनी लगाउने खालको अतुलनीय हुन्छ ।

दाइले लेखेका एउटै पनि पुस्तक मसित नभएको हुँदा फुस्रो संस्मरण मात्रै के लेख्नु भनेर म चाहिं मन मारेर बसेको थिएँ । तर, गोविन्द सरको त्यस लेखबाट म अति नै प्रभावित र भावनात्मक बन्न पुगें । साँच्चै भन्ने हो भने म मोहित भएँ । मलाई यस्तो अनुभव भयो- मेरा आदरणीय र आत्मीय दाइको स्मृतिग्रन्थमा म छुट्नु भनेको मलाई पछि पछुतो हुने कुरा हुन जान्छ । दाइका पुस्तक सामग्री मसित नभए तापनि मन-मस्तिष्कका कुनाकाप्चामा मेटिन नसकेर गुम्सिरहेका केही संस्मरण मात्रैले भए पनि दाइलाई अक्षररूपी श्रद्धाञ्जलिका पुष्प अर्पण गर्न पाउनु पनि मेरा लागि ठूलै सौभाग्य हो भनी ठान्दछु ।... अस्तु ।

*- सिलिगुड़ी (भारत)*

*(लेखक बुहुआयामिक व्यक्तित्व हुनुहुन्छ)*



यज्ञराज प्रसाई

# मेरो सम्झनामा डा. द्रोणकुमार उपाध्याय पौडेल

२०७६ साल पुस महिनाको शुरु जस्तो लाग्छ, मैले मित्र डा. द्रोण सरलाई उहाँको स्वास्थ्य बारे जानकारी लिने ध्येयले उहाँकै बासस्थान भद्रपुर–१०, मैत्री टोलमा फोन गरें । उहाँले गलित र क्लान्त स्वरमा भन्नुभयो- 'सर ! म बिरामी नै छु । काठमाण्डौ गएर रोगको परीक्षण गर्ने काम भयो । मेरो प्यान्क्रियाजमा जटिल रोग क्यान्सरले बास गरेजस्तो छ । यसको अपरेशन सम्भव छैन रे । केही दिन अघि भारतको लखनउ गई आयुर्वेदिक औषधि लिएर आएको छु र त्यही नै सेवन गर्दैछु । तर, यसले केही काम गरेजस्तो लागेको छैन । अब म चाँडै उपचारका लागि राजस्थानको जयपुरमा रहेको आयुर्वेदिक औषधालयमा जाँदैछु...।'

प्यान्क्रियाजको जटिल रोग भन्ने बित्तिकै मलाई त्यो दुसाध्य लाग्यो र केही अत्यास पनि । प्यान्क्रियाजमा लागेको क्यान्सर रोगको कारण मित्र तथा बामपन्थी नेता द्रोणाचार्य क्षत्रीको निधन भएको थियो । उहाँलाई दिल्लीको क्यान्सर अस्पतालले पनि बचाउन सकेन । पछिल्लो समयमा प्रसिद्ध/वरिष्ठ डाक्टर उपेन्द्र देवकोटालाई राष्ट्रिय तथा अन्तर्राष्ट्रिय अस्पतालहरूले हरप्रयास गर्दा पनि बचाउन सकेनन् । नेपालीमा प्यान्क्रियाजलाई 'सातपत्रे' भन्छन् क्यार ! उहाँको गलित स्वरले थाहा लाग्यो- उहाँ महापीडामा हुनुहुन्थ्यो र सम्भावित दुर्घटनाको अत्यासमा हुनुहुन्थ्यो ।

पछि थाहा लाग्यो, उहाँ राजस्थान जयपुरको आयुर्वेदिक अस्पतालमा उपचारार्थ पुग्नुभएछ । जीवनको अन्तिम घडीमा उहाँ क्यान्सरमाथि विजय प्राप्त गर्न आयुर्वेदिक औषधिको वैकल्पिक प्रयोग गरिरहनु भएको थियो । तर, क्यान्सर अजेय बन्यो । 'उहाँमा क्यान्सर भएको कुरा पत्ता लागेको ४ महिना मात्र भएको थियो' – सहप्राध्यापक चूडामणि वशिष्ठले भन्नुभएको थियो । निरन्तर प्रयासका बाबजुद २०७६ साल माघ १५ गते उहाँको आफ्नै निवास चन्द्रगढीमा दुःखद निधन भयो ।

एउटा असल, आदर्श, शालीन तथा हँसमुख मित्र द्रोणसँग मेरो तथा हामी झापाली साहित्यकारहरूको सधैं-सधैंका लागि विछोड भयो। हामी केही दिन/वर्षका लागि धरतीमा रह्यौं; तर उहाँ थोरै समय अगाडि अर्धांगिनी, छोरा तथा छोरीहरूलाई छोडेर अनन्त यात्रामा लाग्नुभयो। २००६ साल असार ५ गते भारतको बिहाली, बटियामारी (असम) मा जन्मिएर २०७६ साल माघ १५ गतेका दिन उहाँको निधनपछि मानव जीवनको क्षणभङ्गुरतालाई सात दशकमा बिसाउनुभयो।

२०३६/३७ साल बैशाखको अन्त्यतिर उहाँसँग मेरो पहिलो परिचय भएको झिनो सम्झना मसँग छ। २०३७ साल ज्येष्ठ ३ र ४ गते चन्द्रगढीस्थित वीरेन्द्र मा.वि.मा सम्पन्न हुने शिक्षक संगठनको प्रथम जिल्ला सम्मेलनको तयारीका लागि म त्यतातिर बाक्लै आवागमन गर्दै रहेको थिएँ। म त्यो बेला संगठनको तदर्थ समितिको अध्यक्ष भएकाले संगठनका भरपर्दा मित्रहरू खडानन्द वाशिष्ठ, प्र.अ. डिल्लीप्रसाद भट्टराई र कालीप्रसाद पोखरेलबाट सम्मेलन-व्यवस्थापनका लागि हामीले सहयोग लिनु जरुरी थियो। सदरमुकाममै सम्मेलन सम्पन्न गर्नु चुनौतिपूर्ण पनि थियो। प्रशासनले हामीलाई धम्काउने र तर्साउन शुरु गरेको थियो। यही आवागमनको क्रममा मा.वि.को कार्यालयमा द्रोण सरलाई देखें र खडानन्द सरबाट परिचय लिएँ उहाँको। बटियामारी (असम) बाट नेपाल प्रवेश गर्नुभएका उहाँले २०३० सालमा त्रि.वि.वि. नेपालबाट एम.ए. उत्तीर्णपछि मेची बहुमुखी क्याम्पसमा अध्यापन गर्ने चाँजोपाँजोको लागि शायद यो भेटघाट थियो।

असममा बसोबास गर्ने नेपालीहरू बीचमा रहेको सद्भाव र आपसी संवेदनशीलता साँच्चै अनुकरणीय मान्न सकिन्छ। त्यो क्षेत्रमा सामाजिक व्यक्तित्वका रूपमा परिचित फरासिलो व्यक्तित्व खडानन्दको प्रभाव क्षेत्र निकै फराकिलो थियो। मित्र द्रोणसँगको पहिलो परिचय यही नै थियो। उहाँले एक वर्षपछि अर्थात् २०३८ सालदेखि मेची बहुमुखी क्याम्पसमा नियुक्ति लिनुभयो र २०६९ सालसम्म लगभग ३१ वर्षसम्म त्यहीं प्राध्यापन गर्नुभयो।

पछिल्ला दिनहरूमा उहाँका नातेदार (जेठान) काँकरभिट्टा मा.वि.का शिक्षक मित्र कृष्ण खनालकहाँ आउँदा ईँटाभट्टा मेरो घर छेउका छिमेकी शिक्षक मित्र भक्तिप्रसाद ढुङ्गाना 'शास्त्री'कहाँ प्रायशः निस्कनु हुन्थ्यो। भक्ति गुरु (हाल स्वर्गीय) र म धुलावारी मा.वि.मा सँगै अध्यापन गर्दथ्यौं। उहाँ द्रोण सरलाई भाइ भन्नुहुन्थ्यो र गुरुका छोरा-छोरीहरूले उहाँलाई काका भनेर सम्बोधन गर्ने

गर्दथे । दुबै जना असमबाट आएका र उहाँहरूबीच अत्यन्त आत्मीय रहेको आभास हुन्थ्यो । मलाई सम्भना भएसम्म २०३९/४० सालदेखि नै उहाँको यहाँ आवागमनले म पनि घनिष्ठ बन्दै गइरहेको थिएँ ।

२०५५/५६ सालतिर म आफू बिहान काँकरभिट्टा क्याम्पस र दिउँसो धुलाबारी मा.वि.मा अध्यापन गर्दथें । उहाँ त्यो बेला धुलाबारी क्याम्पसमा नेपाली विषय अध्यापन गर्नुहुन्थ्यो । यो उहाँको प्रातःकालीन कक्षा थियो । उहाँसँग मेरो धुलाबारी चोकमा समय-समयमा जम्काभेट हुन्थ्यो । थोरै समय भलाकुसारी हुन्थ्यो । उहाँले त्यहाँ २/३ वर्ष अध्यापन गर्नु भएजस्तो लाग्छ ।

डा. द्रोण सर अत्यन्त सरल र आत्मकेन्द्री स्वभावको हुनुहुन्थ्यो । झापामा सम्पन्न हुने विभिन्न साहित्यिक भेलाहरूमा उहाँ कम नै देखा पर्नु हुन्थ्यो । उहाँमा नाम र पुरस्कारको महत्वाकांक्षा रहेको मैले कहिल्यै बुझिन । पुरस्कारको लुछाचुडी गर्ने नेपाली साहित्यिक रंगमञ्चमा उहाँ भनसुन र दौडधुपमा कहिल्यै लाग्नुभएको थाहा छैन । नेपाली भाषामा उहाँको राम्रो दखल थियो । असमी वैयाकरणकारको सहलेखनमा उहाँले ‘आदर्श नेपाली व्याकरण’ प्रकाशित गर्नुभएको छ। उहाँ असल अध्येता र अन्वेषक हुनुहुन्थ्यो । उहाँले भाषाको विश्लेषणात्मक ग्रन्थ ‘ भाषिक चिन्तन’ २०६५ मा प्रकाशित गर्नुभएको छ ।

उहाँ नेपाली लोकसाहित्यको अन्वेषक र ज्ञाता हुनुहुन्थ्यो । उहाँको ‘लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ’ भन्ने पुस्तक ‘नेपाल प्रज्ञा प्रतिष्ठान’ बाट वि.सं. २०७४ मा प्रकाशित भएको छ। उहाँले ‘राजवंशी परिचय : जाति, भाषा र साहित्य’ अनुसन्धानमूलक ग्रन्थ वि.सं. २०५१ सालमै प्रकाशित गर्नुभएको छ । त्यस्तै, असमिया भाषामा पनि प्रशस्त निबन्धहरू लेख्नुभएको र भारतमा नै प्रकाशित गर्नुभएको पाइन्छ । वि.सं. २०६१ मा उहाँले ‘नेपाली सवाई’ बारे एउटा अनुसन्धानमूलक ग्रन्थ लेखेर उत्तरबङ्ग विश्वविद्यालयबाट पी.एच्.डी. गर्नुभयो र आफ्नो नाम अगाडि डाक्टर पदावली थप्नुभयो । यसरी उहाँले लोकसाहित्य तथा भाषा सम्बन्धित ९ वटा कृतिहरू प्रकाशित गर्नुभएको छ ।

द्रोण सर विभिन्न धार्मिक, शैक्षिक, सामाजिक संघ-संस्थाहरूसँग जोडिनु भएको थियो । ‘वैदिक समाज नेपाल’को उहाँ शुरु सदस्य र २ कार्यकाल त्यसको अध्यक्ष बन्नुभयो । उहाँ ‘घनश्याम स्मृति प्रतिष्ठान’ को संस्थापक सदस्य र पछि उपाध्यक्षमा मनोनित हुनुभयो । ‘राष्ट्रिय हिन्दू एकता मञ्च’ को केन्द्रीय सल्लाहकार हुनुहुन्थ्यो । यसरी झण्डै डेढ दर्जन संस्थाहरूमा उहाँ सामेल हुनुहुन्थ्यो । उहाँ गरीब

निमुखा तथा असहायप्रति संवेदनशील हुनुहुन्थ्यो र उनीहरूका घर-घरमा पुगेर खाट नभए पनि बाँसको खाट बनाएर सुत्न सल्लाह दिनुहुन्थ्यो । माटाको घरमा बिना खाट सुत्दा सर्पले डस्ने त्रास हुन्थ्यो । सर्पबाट पीडित गरीब जनसमुदायलाई उहाँ लगायत सामाजिक व्यक्तित्वहरूले खाटमा सुत्न प्रेरित गरिरहनु भएको थियो । राजवंशी, मेचे, सतार, कोचे आदि अल्पशिक्षित जनसमुदायबीच उहाँ घुलमिल हुनुभयो र राजवंशी भाषाको असल ज्ञाता बन्नुभयो ।

उहाँ भाषा, साहित्यको अध्येता तथा विद्वान् हुनुहुन्थ्यो । उहाँलाई राष्ट्रिय तथा अन्तर्राष्ट्रिय सम्मेलनहरूमा आमन्त्रण हुने गर्थ्यो । विभिन्न महत्वपूर्ण विषयहरूमा उहाँले कार्यपत्रहरू प्रस्तुत गर्नुभयो । International folklore conference को काठमाडौं अधिवेशनमा 'नेपाली सवाई' र भारतको जलपाइगुडीमा 'नेपालका राजवंशी' को बारेमा कार्यपत्रहरू प्रस्तुत गर्नुभयो । भारतको उत्तर बङ्गाल विश्वविद्यालयमा 'नेपालीमा साहित्यिक समालोचना' र 'नेपाली लोकसाहित्य' का विषयहरूमा छुट्टाछुट्टै समयहरूमा दुई वटा कार्यपत्रहरू प्रस्तुत गर्नुभयो । भारतीय संस्कृतिमा संस्कृतको प्रभाव तथा दर्शन, धर्म र समाजका खोजपूर्ण लेखहरू लेख्नुभयो । यसरी राष्ट्रिय र अन्तर्राष्ट्रिय क्षेत्रहरूमा दर्जनभन्दा बढी कार्यपत्रहरू प्रस्तुत गर्नु भई उहाँले आफ्नो प्राज्ञिक क्षमता विस्तार गर्नुभएको थियो ।

उहाँले भाषिक, साहित्यिक, धार्मिक संघ-संस्थाहरू तथा सामाजिक सेवामा योगदान पुऱ्याए वापत झण्डै डेढ़ दर्जन पदक, सम्मान तथा पुरस्कारहरू प्राप्त गर्नुभएको छ । स्व. श्री ५ निराजन स्मृति सेवा समितिद्वारा २०६२ सालमा उहाँ अभिनन्दित हुनुभएको थियो ।

२०६५ सालको फागुन-चैत महिनातिर सहप्राध्यापक डा. द्रोण सरले मलाई फोन गर्नुभयो- 'सर ! तपाईंलाई शोधनायक बनाउने मित्र उपप्राध्यापक होम सुवेदी र मैले अठोट गऱ्यौं । नेपाली विषयको स्नातकोत्तर तहको दशौं पत्रको प्रयोजनका लागि 'साहित्यकार यज्ञराज प्रसाईंको जीवनी व्यक्तित्व र कृतित्वको अध्ययन, विश्लेषण एवम् मूल्यांकन' विषयक शोधपत्र लेखाउने विचार गऱ्यौं । शोधपत्रको शीर्षक छनौटमा सहयोग गर्ने नेपाली विभागका श्रद्धेय गुरु होम सुवेदी हुनुहुन्छ । सरसँग अनुमतिका लागि आग्रह गर्दछौं ।'

मैले मित्रद्वय डा. द्रोणकुमार उपाध्याय तथा होम सुवेदीप्रति कृतज्ञता प्रकट गरें र आफूप्रतिको सम्मानलाई सहर्ष स्वीकार गरें । शोधनिर्देशक डा. द्रोणकुमार हुनुहुन्थ्यो र शोधार्थी विद्यार्थी रोल नं. १८०१ (२०६४) का हरिप्रसाद पौडेल

हुनुहुन्थ्यो । शोधार्थी हरि भाइ शोधपत्र तयार गर्ने क्रममा पटक-पटक मकहाँ आउनुभयो । मसँग सम्बन्धित आवश्यक कागजातहरू संकलन गर्नुभयो र मसँग अन्तर्वार्ता लिनुभयो । शोधार्थीले २०६६ साल भदौ १० गते 'शोधपत्र' शोधनिर्देशक डा. द्रोण समक्ष प्रस्तुत गर्नुभयो । यो शोधपत्रमा रहेको उहाँको छोटो मन्तव्य र हस्ताक्षर अहिले पनि मेरो अगाडि जीवित छ । उहाँ र मलाई जोड्ने यो अमिट कडीका रूपमा रहिरहेको छ ।

२०७५ साल असार २२ गतेका दिन मेचीनगर–८, धिमाल बस्तीमा बसोबास गर्ने मेरा आत्मीय छिमेकी फणिन्द्र खनालको दुःखद निधन भयो । उहाँ असमबाटै आउनुभएको थियो र ३० को दशकदेखि नै हामीमा विचारको घनिष्ठता थियो । उहाँ असम रहँदा द्रोणकुमार सरको छिमेकी रहेको कुरा मैले बुझेको हुँ । निधनको सातौं दिनमा उहाँ पनि त्यहाँ समवेदना व्यक्त गर्न आउनुभयो । त्यहाँ मेरो उहाँसँग भेटघाट र भलाकुसारी भएको अहिले पनि सम्झनामा छ ।

त्यसपछि लामो समयसम्म उहाँसँग भेटघाट भएन । उहाँसँगको अन्तिम भेट ' प्रलेस' (झापा) सम्मेलनमा भएको थियो र 'कोहेड कलेज' को सभाकक्षमा सो सम्मेलन २०७५ साल फागुन १२ गते सम्पन्न भएको थियो । उहाँ दर्शक दीर्घामा मित्र शिरोसान्दाइको ठीक अगाडि बसेको अहिले पनि झल्झली छ । बाटुलो अनुहार र हँसमुख व्यक्तित्व । कार्यक्रम समापनपछि क्याम्पस परिसरमा केहीबेर वर्तमान नेपालको विद्रुप राजनीति र देशको परिस्थितिबारे थोरै चर्चा गऱ्यौं । यो नै मेरो अन्तिम भेट थियो उहाँसँग । उहाँको आकृति र बोली स्मरणमा ताजै छ, तर यतिबेला मेरा परम मित्र डा. द्रोणकुमार उपाध्याय भने यो जुनीमा कहिल्यै नभेटिने गरी अनन्त यात्रामा हुनुहुन्छ ।

*२०७७/०३/२०*

*- मेचीनगर- ७, झापा*

*(लेखक प्राज्ञ व्यक्तित्व हुनुहुन्छ)*



योगराज पौडेल

# डा.द्रोणकुमार र उनका व्यक्तित्वका आयामहरू

बहुआयामिक व्यक्तित्व डा.द्रोणकुमार उपाध्याय पौडेलको जन्म वि.सं.२००६।३।५ मा बिहाली, बटियामारी, असम, भारतमा भएको थियो । उनले सन् १९७३ मा त्रिभुवन विश्वविद्यालय, काठमाडौंबाट नेपालीमा एम.ए. गर्नुका साथै पी.एच.डी. (नेपाली सवाईमा) सन् २००४ मा उत्तरबङ्ग विश्वविद्यालयबाट गरेका थिए । डा.द्रोणले चार दशकभन्दा बढी शिक्षण अनुभव हासिल गरेका थिए । उनको देहावसान वि.सं.२०७६।१०।१५ मा आफ्नै निवास मैत्रीटोल, भद्रपुर, झापामा भएको हो । उनले सात दशकभन्दा लामो आफ्नो जीवनयात्राका क्रममा झण्डै आधा शताब्दी विभिन्न क्षेत्रमा योगदान गरेका थिए । मूलतः उनको व्यक्तित्वलाई निम्नानुसार वर्गीकरण गरी व्याख्यात्मक विश्लेषण गर्न उपयुक्त हुने देखिन्छ–

१. शैक्षिक व्यक्तित्व,
२. भाषिक र साहित्यिक व्यक्तित्व,
३. प्राज्ञिक र बौद्धिक व्यक्तित्व,
४. सामाजिक व्यक्तित्व,
५. शैक्षिक व्यक्तित्व ।

**शैक्षिक व्यक्तित्व :**

चार दशकभन्दा बढी अवधि शिक्षण कार्यमा संलग्न डा.द्रोणको शैक्षिक व्यक्तित्व सबल, सक्षम, प्रौढ र परिपक्व बन्न गएको पुष्टि हुन्छ उनका विभिन्न कार्यअनुभवहरूबाट । उनले सर्वप्रथम उच्चतर माध्यमिक विद्यालयहरूमा एक दशकजति अध्यापन गरे । तत्पश्चात् उनले मेची बहुमुखी क्याम्पस, झापा र पद्मकन्या बहुमुखी क्याम्पस, काठमाडौंमा गरी तीन दशकभन्दा बढी समय प्राध्यापन कार्य गरे । सो समयावधिमा मेची बहुमुखी क्याम्पसको सहायक क्याम्पसप्रमुख एवम् नेपाली विभागको विभागीय प्रमुख समेत भएर उनले कुशलतापूर्वक

कार्यसम्पादन गरे। यसबाट उनको शैक्षिक व्यक्तित्व सशक्त रूपमा प्रकट भएको पाइन्छ। आधा दर्जनभन्दा बढी कृति र राष्ट्रिय तथा अन्तर्राष्ट्रिय सम्मेलनहरूमा प्रस्तुत कार्यपत्र र शोधपत्रहरूबाट पनि उनको प्रखर शैक्षिक व्यक्तित्वको झलक पाउन सकिन्छ।

**भाषिक र साहित्यिक व्यक्तित्व :**

नेपाली, अङ्ग्रेजी, हिन्दी, बङ्गला, असमिया, संस्कृत, राजवंशी लगायत सात भाषाका ज्ञाता र चार भाषाका लेखक डा.द्रोणले बेलाबखत भाषिक विश्लेषणात्मक लेखहरू लेख्ने र विभिन्न पत्रपत्रिकाहरूमा प्रकाशित गर्ने गरेका थिए। उनले प्राध्यापनका सन्दर्भमा पनि भाषिक लेखन र व्याख्यान गर्ने गर्दथे। फलतः उनको 'भाषिक चिन्तन' नामक पुस्तक यशवन्त पौडेलद्वारा वि.सं. २०६५ मा प्रकाशनमा आएको छ। यस्तै, उनको अर्को पुस्तक 'राजवंशी परिचय र जाति : भाषा र साहित्य' राजवंशी भाषा प्रचार समितिद्वारा ई.सं.१९९४ मा प्रकाशनमा आइसकेको थियो। साथै, उनको सहलेखनमा 'आदर्श नेपाली व्याकरण' पनि ई.सं.२००५ मा प्रकाशनमा आएको देखिन्छ। यसरी उनको भाषिक व्यक्तित्व निर्माण भएको पाइन्छ।

साहित्यिक व्यक्तित्वको निर्माणका सन्दर्भमा चार दशकभन्दा बढी समय साहित्य विषयकै प्राध्यापन, 'केही साधक : केही साधना' (समालोचना संग्रह, वि.सं. २०६५), 'लोकवार्ता : लोककै चर्चा' (वि.सं. २०६५), 'लोकवार्ता सिद्धान्त नेपाली सन्दर्भ' (वि.सं. २०७४), 'भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा' (ई.सं.२०११), 'सवाई काव्यको सैद्धान्तिक परिचय' (वि.सं.२०६७) लगायत आधा दर्जन जति साहित्यिक (शोधात्मक, समालोचनात्मक तथा प्रबन्धात्मक) कृतिहरूद्वारा उनको साहित्यिक व्यक्तित्व मुखरित भएको देखिन्छ। तद्‌तिरिक्त नेपाली तथा अन्य भाषाका पत्रपत्रिकाहरूको सम्पादन तथा प्रकाशनबाट पनि उनको साहित्यिक व्यक्तित्व निर्माणका निम्ति सहायक सिद्ध हुनगएको पाइन्छ।

**प्राज्ञिक र बौद्धिक व्यक्तित्व :**

डा.द्रोणको प्राज्ञिक र बौद्धिक व्यक्तित्व उनको लामो समयसम्मको अध्यापन र प्राध्यापन, विभिन्न राष्ट्रिय तथा अन्तर्राष्ट्रिय गोष्ठीहरूमा सहभागी भई शोधपत्र र कार्यपत्र प्रस्तुत, पी.एच.डी. को अनुसन्धान, बेलाबखत विविध विषयको व्याख्यान, आधा दर्जनभन्दा बढी कृतिहरूको लेखन आदि महत्वपूर्ण कार्यसम्पादन गरी प्रखर र प्रबल रूपमा प्रकट भएको पाउन सकिन्छ।

**सामाजिक व्यक्तित्व** :

प्रवासी नेपाली कोटामा नेपाली एम.ए. पढ्न आएका द्रोणकुमार उपाध्याय, कुलप्रसाद शर्मा र अर्का एकमित्र थिए । ती तीन जना प्रवासी नेपाली सहपाठी पाउँदा हामीहरू त्यतिखेर निकै खुशीको अनुभूति गर्दथ्यौं । प्रशन्नचित्तका द्रोणको मृदुमुस्कान सबै साथीहरूका निम्ति स्मरणीय बन्ने किसिमको थियो (२०२८-२९ सालतिरको मेरो मानसपटलको स्मृतिपत्र अहिले पल्टाएर हेर्दा) लामो समयसम्म अध्यापन-प्राध्यापनमा उनले समययापन गरे । पंक्तिकार भने एक वर्ष त्रिभुवन विश्वविद्यालय कीर्तिपुरको प्राध्यापन पश्चात् प्रशासन सेवामा संलग्न हुन पुग्यो । हिमाल, पहाड, तराईका जिल्लाहरूमा घुमी देशदर्शन त गऱ्यो । तर, प्राध्यापनको लामो अनुभव हासिल गर्ने अनुकूलता भने मिल्न सकेन । तीन दशकपूर्व झापा जिल्लामा पंक्तिकार कार्यरत् हुँदा मेची बहुमुखी क्याम्पसमा प्राध्यापनरत् मित्रदर्शनको सौभाग्य प्राप्त भयो- झण्डै दुई दशकको अन्तररालपछि । केही समय हार्दिकतापूर्वक कुराकानी गरेपछि उही मृदुमुस्कानका साथ मित्र द्रोणले घरमा आउन आग्रह गरे, म दोधारमा परें । म प्रशासनसम्बद्ध व्यक्ति, उनी प्राध्यापनसम्बद्ध व्यक्ति । देशको तत्कालीन राजनीतिक उथलपुथलको समय । केही समयको मनोद्वन्द्व पश्चात् उनको आग्रहलाई मैले स्वीकारें । एक दिन जे पर्ला-पर्ला भनेर एक जना मित्रलाई साथमा लिएर मित्र द्रोणको झापाको घरमा म गएँ । मेरा निम्ति मित्रस्नेह सबभन्दा प्राथमिकताको विषय बन्न गयो । शायद त्यतिखेर विद्यार्थीकालीन प्रगतिशील पक्षधरता र क्रियाशीलताको स्मृति-प्रभाव-विम्ब मनोलोकमा पर्नगएको पनि हुन सक्दछ । शान्त, एकान्त, सुन्दर ठाउँमा रहेको उनको घरको अगाडि हामीहरू पुग्दा हार्दिकतापूर्वक मृदु मुस्कानकासाथ उनले स्वागत गरे । हामीहरू हर्षविभोर भयौं । केही समय उनको घरमा बसेर मीठो चियाको चुस्की लिएपछि हामीहरू बिदा भयौं । 'फेरि पनि आउनुस् है' उनले भनेको त्यो स्नेहिल आवाज अहिले पनि मेरो कर्णविवरमा गुञ्जिरहेजस्तो लाग्दछ ।

अहिले तीन दशक बितिसक्दा पनि पुनः उनको घर जाने अनुकूलता मलाई मिल्न सकेको थिएन । तर, एक दिन तत्कालीन सहपाठी मित्र प्रा.राजेन्द्र सुवेदीको फोन आयो, 'द्रोणको स्मृतिग्रन्थका लागि एउटा लेख लेख्न पऱ्यो' भन्ने । म छाँगाबाट खसेजस्तो भएँ । विचलित बन्न पुगें म, मित्रको मृत्युको खबरबाट एकछिन सन्नाटा छाएजस्तो भयो । त्यो त्रिभुवन विश्वविद्यालयको कक्षाकोठा, परीक्षा दिंदाको समय, झापाको भेट आदि कुराहरू मेरा मानसपटलमा चक्कराइरहे । केही समयपछि स्मृतिग्रन्थका लागि मैले लेख पठाउने सङ्केत गरें ।

आज यो लेख लेख्न लाग्दा पनि त्यस्तै अनुभूति भइरहेको छ। दिवङ्गत मित्र द्रोणप्रति हार्दिक श्रद्धाञ्जलि तथा उनका शोकसन्तप्त परिवारप्रति गहिरो समवेदना ! उनी यस धर्तीमा नभए पनि उनकी श्रीमती, छोरा र छोरी, नाति र नातिनाहरू छन्। उत्तरवर्ती पिँढीले उनको प्रेरणा प्राप्त गरी उनका अपुरा र अधुरा कामहरू पूरा गर्नेछन् भन्नेआशा र अपेक्षा गर्नु सिवाय अरू के पो भन्न सकिन्छ र !

दर्जनौं सामाजिक संघ-संस्थाहरूसँग आबद्ध डा.द्रोणको सामाजिक क्षेत्रमा अविस्मरणीय योगदान रहेको छ। त्यसैले उनलाई अनेकौं संघ- संस्थाहरूले सार्वजनिक अभिनन्दनसहित सम्मान-पत्र, प्रशंसा-पत्र, कदर-पत्र प्रदान गरेका छन्। यसरी उनको सामाजिक व्यक्तित्व स्थापित र प्रतिष्ठित बन्न पुगेको छ।

अन्तमा, मित्र द्रोणका स्मृतिमा निम्न कवितापंक्तिका साथ कलम बन्द गर्न चाहन्छु–

द्रोण मित्र थियौ तिमी
प्रशन्न चित्तका धनी।
साथी-भाइहरूलाई
मुस्कुराई सघाउनी॥

कालजयी बन्यौ मित्र
पवित्र कर्मले गरी।
युगानुयुग पर्यन्त
रहोस् त्यो कीर्ति-माधुरी॥

***केही सन्दर्भग्रन्थहरू :***

१. उपाध्याय पौडेल, डा. द्रोणकुमार (ई.सं.२०११) भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा, श्रीमती मीरा पौडेल।
२. उपाध्याय पौडेल, डा. द्रोणकुमार (वि.सं.२०७४), लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ, नेपाल प्रज्ञा प्रतिष्ठान, काठमाडौं।
३. सुवेदी, राजेन्द्र (वि.सं. २०६१) नेपाली समालोचना परम्परा र प्रवृत्ति, भूमिका प्रकाशन, वाराणसी।
४. पौडेल, योगराज (वि.सं.२०७१) केही चिन्तन : केही विश्लेषण, एकता बुक्स डिस्ट्रिब्युटर्स प्रा.लि., काठमाडौं।
५. सुवेदी, दधिराज, (सम्पा. वि.सं.२०६२) डा. नरेन्द्र चापागाईं स्मृतिग्रन्थ, पूर्वाञ्चल साहित्य प्रतिष्ठान, बिराटनगर।

*(लेखक प्रसिद्ध समालोचक हुनुहुन्छ)*



रघुनाथ रिमाल 'अपूर्ण'

# "योगःकर्मसु कौशलम्"

जीवनको कुशलतम कर्महरूको संगालो जब समष्टि रूप बन्दछ अनि मात्र मानव जीवन मिल्दछ। जीवनका परिपक्व र कुशल कामको एकत्रित संगालो कर्म ढिकुटी जब बन्दछ अनि मात्र अरु शुभकामनाको निरन्तरता बढ्दै जान्छ। ती कामहरूको निरन्तरताले मानव जीवनका कर्म ज्योतिको प्रकाश पुञ्जका किरणबाट मानव जीवन धामागमन पछाडि पनि जीवित बनिराख्दछ।

संस्कार र संस्कारित कर्महरूका पुञ्जहरूमध्ये अध्ययन र अध्यापनसँगै लिखित दस्तावेजहरू, चेतना विज्ञानको प्रखरित र मुखरित विषयवस्तु, भावभावित परं चेतनाका प्रकाशमय परागबाट सिंचित र निसृत वाङ्मय सरिता सागर बन्दै माथिल्लो कोटिका कुशलकर्म मानिन्छन् हाम्रो पूर्वीय दर्शनमा। तिनै वाङ्मय सागरले नै कालजयी बनाउँछन् मानव जीवनको जीवन्ततालाई।

यसै त पाञ्चभौतिक पिण्डका समष्टि रूपहरूलाई केलाएर हेर्ने परम्परा र त्यसको परिणाममुखी निसृत अण्ड नै मानव शरीर हो। शरीर नै ब्रम्हाण्ड पिण्ड पनि हो। यसमा पञ्चज्ञानेन्द्रिय, पञ्चकर्मेन्द्रियसँगै पञ्च तन्मात्रा (रूप, रस, गन्ध, स्पर्श र श्रोत्र) का साथ मन, बुद्धि, चित्त र अहंकार अन्तरेन्द्रियबाट समेत मानव शरीरको समष्टि चेतना विज्ञानले भरिएको हुन्छ, चाहे त्यो लघुकालजयी होस् वा दीर्घकालजयी।

मानव जीवनकै अर्को कर्म श्रृङ्खलामा हेर्दै जाने हो भने कुनै पनि कालखण्डमा हजार-हजार मानवमध्ये 'मलाई बिझाउँछ भन्ने कामका तहले अरूलाई अवश्य पनि पिरोल्छ, त्यसकारण त्यस्तो काम मेरा लागि पनि गर्नु हुँदैन' भन्ने अरूहरूका उपकारका लागि सौभाग्य पाएको मानव जीवन हो। यस परपीडाका भावाङ्कुर शुद्धीकरण एवम् निर्मूलीकरण गर्न कोशिश गर्ने हरेक पल-पलका भावनात्मक कोशिशहरूलाई नै पूर्वीय दर्शनमा साधना भनिन्छ। यसरी परहित पक्षका विविध बाटोमा परपीडा वा भावविज्ञानलाई छुटाउँदै जीवनभर जसले कामलाई पनि शुद्धीकरण गर्दै लैजान्छ, उसैलाई कर्मशील कुशलकर्म प्रणेताको जीवन स्थापित गर्ने-गराउने मान्न सकिन्छ।

यसैगरी, मानव जीवनका भावनात्मक केम्रा-केम्रामा नै सात्विक, राजसी, तामसी उछाल तहका सागरहरू हुन् । यिनीहरूले मानव जीवन पाएकाहरूलाई पनि अमूर्त भाव निसृत तरङ्गका समुद्रमय छालहरूमा समाहित गर्दछन् । जसले गर्दा स्वयम् ज्ञान प्रकाशमय ज्योतिको उज्यालो किरणबाट करोडौं वर्गकिलोमिटर पर-पर नै भौतारिइरहन्छ । त्यसै उज्यालो ज्ञानको प्रकाश पाउनका लागि नै यम, नियम, आसन, प्राणायाम- यी चार वटा बाहिरी साधना, प्रत्याहार, ध्यान, धारणा र समाधि अन्तरेन्द्रिय शुद्धीकरणको व्यवस्था गरिएको छ । त्यसका लागि तल्लीन राजसी गुण प्रबल भएर नै यसको सृष्टि शुरु हुन्छ । त्यसैले त जुन वस्तु जेबाट र जस्तोबाट सृष्टि हुन्छ, त्यसको लागि नै जीवनचक्रमा सधैं छट्पटाउँछ अनि ऊ त्यसै-त्यसैमा आवर्त पुनरावर्त हुँदै निवर्तित हुँदै रमराउन चाहन्छ । जसरी समुद्रबाट सूर्य किरणले तानेको पानी हिमश्रृंखलामा पुगेर हिउँ भई पुनः सूर्य किरणबाट नै पग्लिदै छहरा नदीमय साधनाबाट फेरि समुद्रमा पुग्छ त्यसैगरी, मानव जीवन पनि प्रारम्भिक तत्वकै स्वरूपमा पुनः प्रकटित हुन्छ ।

परमात्माको प्रकाश पुञ्जबाट खिचिएको आत्मा परमात्मीय धामका श्रृङ्खलामा पुगी उसैको अधिनस्थ बनेर परमात्मीय लीला सागर वा समुद्रमय बन्छ । मानव जीवन पाउँदा पनि कहिलेकाहीं विपरीत ध्रुवमा भौतारिएर काम, क्रोध, लोभ, मोह, मद मात्सर्य अश्रद्धा, अभिमान अहंकार आदि भावभावित तरङ्गको भेलका कारण मानव स्वत्वको चैतन्य ज्योति जन्मन गाह्रो हुन्छ । कर्मको अमृतमय वृक्षमा पुग्ने निरन्तरता दिँदै कुशल कर्म गरेमात्र त्यो कोशिशले मानव पुनः जीवनको प्रक्रिया नै जीवन जीनको र जन्म-जन्मको निरन्तरता हो । सधैं-सधैं मानव जीवन, साधना र साध्य वस्तुको त्रिवेणीमा गुणातीत हुन्छ । पवित्रताको लागि उसले ध्यासनको तहबाट भावनात्मक शुद्धीकरण गर्दै व्यवहाररूपी नदीमा समेत स्थान सुरक्षित गर्छ । त्यसपछि गुणातीत कर्मकौशलताको चरमचुली उक्लिन खोज्छ । यसरी नै मानव जीवनका दुबै पाटा निर्धारित हुन्छन् । यिनै निर्धारित पक्षले गर्दा मानव जीवनका यस धराधाममा आरोह र अवरोहहरू देखा पर्दछन् ।

यिनै-यिनै वैशिष्ट्यलाई अंगीकार गर्ने जीवनमध्येको एक जीवन नक्षत्रमय परमधामको गतिमा मान्यवर विद्यासागर द्रोणकुमार पौड्याल हुनुहुन्थ्यो । उहाँका कालजयी कृतिहरू उच्च अध्ययन र उच्चतहका प्राध्यापन विधाका श्रृङ्खलाहरूबाट हामी सबैलाई सद्प्रेरणा आशीर्वाद मिलिरहोस्, लिन सकिरहौं ।

अन्त्यमा, कोटी-कोटी भावभावित नमन दिव्यधामगमित दिव्य आत्मालाई !

*- चन्द्रगढी, भद्रपुर- १० (झापा)*

*(लेखक महाकाव्यकार हुनुहुन्छ)*



डा. रत्नमणि नेपाल

# कवि तुलसी दिवसले चिनेका द्रोण सर

लेखनाथ चोक छेउको खाली ठाउँमा केही थान कुर्सीहरू राखिएका थिए । दुई-चार कुर्सीहरू अगाडिपट्टि थिए, पन्ध्र-बीस कुर्सी पछाडि । म भर्खरै मात्र कविता गजल लेख्न थालेको सिकारु लेखक थिएँ र आफ्नो घर-गाउँको कार्यक्रममा पहिलो पटक भाग लिंदै थिएँ । लेखनाथ वाचनालयले मलाई त्यो अवसर दिएको थियो । गजल वाचनका लागि तयारी भएर कार्यक्रममा सहभागी भएको थिएँ । सभामा अगाडिका कुर्सीमा बस्ने केही मानिसहरूमध्ये एक हुनुहुन्थ्यो- द्रोणकुमार उपाध्याय पौडेल । शायद उहाँ कार्यक्रमको सभाध्यक्ष हुनुहुन्थ्यो । उहाँलाई मैले त्यही दिन मात्रै चिन्दैथिएँ । पछि बुभ्दा त उहाँलाई मैले त्यो भन्दा अघि नै पनि चिन्ने सम्भावना भने रहेछ ।

म प्रशिक्षण केन्द्रस्थित कलवलगुरी प्राथमिक विद्यालयमा पढ्थें । त्यहाँ मलाई ए बी सी डी पढाउने एक शिक्षिका हुनुहुन्थ्यो । उहाँको नाम थियो- मीरा पौडेल । अलिक तिखो स्वर थियो । पढाउने कला बडो राम्रो । म उहाँको असलमध्येको एक चेलो थिएँ । उहाँ मेरो मनपर्ने मध्येको एक शिक्षक हुनुहुन्थ्यो । द्रोणकुमार उपाध्याय उहाँकै पति हुनुहुँदो रहेछ । धेरै पछि थाहा पाएँ ।

यता काठमाडौं बस्न थालेको पनि डेढ दशक बितिसकेको छ । घर-गाउँका खबर अबेर गरी आइपुग्छन् । सामाजिक सञ्जालले भने तीब्र गतिमा खबर फैलाउँछ । एक दिन फेसबूकले भन्यो 'द्रोण सर बित्नु भयो' । एकदम नराम्रो लाग्यो । तुलसाजीलाई भनिहालें त्यो खबर ।

सरलाई सम्भिएँ । लेखनाथ वाचनालयसँग जोडिएका सम्बन्धदेखि वर्तमान साहित्य प्रतिष्ठान, मेची क्याम्पस र घर-गाउँका स्वाभाविक भेटघाटका सन्दर्भहरू मेरो मस्तिष्कमा घुम्न थाले । सबैभन्दा बढी त मैले मीरा दिदीलाई सम्भें । कसरी हो, उहाँ हाम्रो पारिवारिक सदस्य जस्तो लाग्छ मलाई । म मात्र नभएर हाम्रा बाबु-आमाका पाँचै जना सन्तानलाई अंग्रेजीको प्राथमिक शिक्षा दिने गुरु उहाँ

नै हुनुहुन्छ। मेरी दिदी बिमलालाई त उहाँ बडो आत्मीयताका साथ सम्बोधन गर्नुहुन्थ्यो। द्रोण सर बित्नु भयो भन्ने खबरले त्यसकारण पनि मलाई गम्भीर बनायो। यो खबर मैले वरिष्ठ कवि तुलसी दिवसलाई फोनबाट सुनाएँ। उहाँ बितेको करीब एघार महिनापछि तुलसी दाइलाई जानकारी गराउँदा पनि मैले फेरि मीरा दिदीलाई नै सम्झें। द्रोण सर भने साइकलमा लेखनाथ चोकबाट वीरेन्द्र माध्यमिक विद्यालयतिर जाँदै गरेजस्तो लाग्यो।

खबर सुनेपछि फोनबाटै तुलसी दाइले बडो आश्चर्य लाग्यो भन्दै शोक व्यक्त गर्नुभयो। भन्नुभयो, 'त्यो मान्छे त त्यति उमेर खाएको जस्तो त लाग्दैन। एकदम आत्मविश्वासी जस्तो लाग्थ्यो। क्याम्पसको प्राध्यापक भन्ने सुन्याथें। के भएर बित्यो हँ... ?'

मैले केही बताएँ, सुने-जानेको कुरा। तुलसी दाइ स्तब्ध हुनुभयो।

तुलसी दिवस नेपाली भाषाका वरिष्ठ कवि हुनुहुन्छ। मैले पचास सालदेखि नै उहाँका कविता पढेको हुँ। पछि थाहा पाएँ, दाइ त लोकसंस्कृतिका पनि उत्तिकै अध्येता र विश्लेषक हुनु हुँदोरहेछ। नेपालमा मात्र नभएर विदेशका कैयन विश्वविद्यालय तथा अनुसन्धान संस्थाहरूसँग मिलेर संस्कृति विषय अध्ययन अध्यापन दुबै गराएका व्यक्ति हुनु हुँदोरहेछ। धेरै अघि नै उहाँले नेपाली लोकवार्ता तथा संस्कृति समाज नामक संस्था स्थापना गर्नुभएको रहेछ। सिर्जनशीलता र अनुसन्धानका एक संगम तुलसी दिवस।

द्रोण सरमा पनि पछिल्लो समय लोकवार्ता विषयमा अध्ययन र अनुसन्धान गर्ने रुचि बढेको थियो। त्यसो त असमिया भाषा, बाङ्ला भाषा अध्ययनमा समेत उहाँको दख्खल रहेको थियो। झापाका राजवंशी जातिको लोकजीवन उहाँको खास अध्ययनको विषय थियो। यसैक्रममा उहाँले तुलसी दिवस दाइसँग सत्संग गर्नुभएको रहेछ। यशवन्तको भनाइमा द्रोण सरले तुलसी दिवसलाई नेपाली लोकसाहित्यका विशेष व्यक्तिका रूपमा चिन्नु हुन्थ्यो। उहाँ एक धरोहर हो। उहाँबाट धेरै कुरा लिन सकिन्छ। उहाँसँग धेरै ज्ञान छ भन्नुहुन्थ्यो, द्रोण सर।

द्रोण सर र तुलसी दाइबीचको यो सम्बन्धबारे मलाई थाहा थिएन। मेरो सरसँग व्यक्तिगत र पारिवारिक परिचय मात्र हो। म उहाँको कक्षाकोठाको विद्यार्थी पनि भइन कलेज पढ्दाको समयमा। तर, सामाजिक जीवनमा भने केही कुरा उहाँबाट सिकेको छु। एक दिन उहाँको स्मृतिमा ग्रन्थ निकाल्ने योजना मेरा अनन्य मित्र यशवन्त पौडेलले सुनाउनुभयो। यशवन्त द्रोण सरका योग्य सुपुत्र हुन्। मेरा

आत्मीय दाइ पंकज भूर्तेल र यशवन्त सँगै मेरो निवासमा आउनुभयो । त्यस क्रममा उहाँहरूबाटै मैले द्रोण सर र तुलसी दाइबीचको सम्बन्धबारे जान्ने मौका पाएँ । अनि मलाई त्यो स्मृतिग्रन्थमा तुलसी दाइले चिनेको द्रोण सरबारे लेख्ने उत्सुकता जाग्यो ।

यसै सिलसिलामा म तुलसी दिवससँग समय मागेर उहाँको घरमा पुगें । नेपाली साहित्य, सिर्जनशीलताबारे केहीबेरको भलाकुसारीपछि हामी मूल विषयमा प्रवेश गर्‍यौं । हामी द्रोणकुमार उपाध्याय र उहाँको अध्ययन-अनुसन्धानको रुचिबारे छलफल गर्न थाल्यौं ।

मसँगको कुराकानीमा कवि तुलसी दिवसले नेपाली लोकवार्ता तथा संस्कृति समाज संस्था मार्फत नै द्रोणकुमार उपाध्यायसँग आफ्नो भेट भएको स्मरण गर्नुभयो । उहाँले भन्नुभयो- 'कहिले कुन समयमा आए उनी मसँग भेट्न, त्यो त सम्भिmन सक्तिन । तर,ज्यादै जिज्ञासु, उत्सुक र केही नयाँ गरौं भन्ने मान्छे थिए द्रोण ।'

'उहाँको के कुराले तपाईं अलिक बढ्ता प्रभावित हुनुभएको थियो ?' मैले सोधें ।

तुलसी दाइले भन्नुभयो- 'उनको लोकवार्ता बारेको सैद्धान्तिक र व्यावहारिक ज्ञान स्पष्ट थियो ।'

'कस्ता प्रसङ्गमा तपाईंहरूको भेट भयो ?' थप प्रश्न गरें मैले । तुलसी दाइको घरको आँगनमा रहेका बडेमानका दुई वटा रुखमा बसेका चराहरू चिरबिर-चिरबिर कराए । नभए त्यो एकलासको ठाउँमा जस्तो लाग्ने घरमा सन्नाटा नै थियो ।

दाइले भन्नुभयो- 'त्यही हाम्रो संस्था छ नि, लोकवार्ता सम्बन्धी काम गर्ने । त्यसको प्रत्येक वर्ष राष्ट्रिय सम्मेलन भइरहन्छ । त्यसमै द्रोणले पेपर पेश गरेको मलाई सम्भmना छ । एक-दुई वटा अन्तर्राष्ट्रिय सम्मेलनमा पनि मैले उनको नाम सिफारिश गरेको छु ।'

द्रोण सर नेपाली भाषा-साहित्यका प्राध्यापक । जीवनको करीब उत्तरार्द्ध समयमा भने उहाँको झुकाव लोकसाहित्यतर्फ भयो । तुलसी दाइका विचारमा लोकजीवन, लोकसंस्कृति ज्यादै महत्वपूर्ण विषय हुन् । यिनको सम्बर्द्धन र संरक्षण गरिनु पर्दछ । त्यसका लागि वैज्ञानिक र सैद्धान्तिक अध्ययन गर्नु आवश्यक छ । लोकसंस्कृति आम मानिसको जीवनसँग जोडिन्छ । संस्कृति ठूलो या सानो हुँदैन । संस्कृति मोटो या दुब्लो हुँदैन । मानिस र उसले आर्जन गरेका दुई वटा वस्तु महत्वपूर्ण छन् । तुलसी दाइका विचारमा ती दुई वस्तु भनेका भाषा र संस्कृति हुन् । भाषा मानिसले

जन्मिंदा आमाको गर्भबाट बोकेर आउँदैन । ऊ जहाँ जन्मियो, हुर्कियो, त्यही ठाउँको हुन्छ । त्यसैगरी, संस्कृति पनि मान्छेले सामाजिक, राजनैतिक भूगोलको प्रभावले लिन्छ । संस्कृतिलाई मान्छेसँग अलग्याउन सकिंदैन । संस्कृति मृत हुँदैन । संस्कृति जीवन्त हुन्छ ।

तुलसी दाइले संस्कृति र भाषाबारे यस्तो व्याख्यान दिइरहँदा मलाई लाग्यो... शायद द्रोण सर पनि लोकजीवन र संस्कृतिका यिनै विचारबाट प्रभावित हुनुहुन्थ्यो होला । संस्कृति विषयक यिनै कुरा बुझ्न द्रोण सर पूर्व झापाबाट नेपाली लोकजीवन र लोकवार्ताप्रति रुचि राखेर तुलसी दाइलाई भेट्न आउनुभयो होला ।

'द्रोण पूर्व झापाका राजवंशी जातिको लोकजीवन र लोकवार्ताप्रति विशेष रुचि राख्ने गरेको मलाई सम्झना छ'... दाइले सम्झिनु भयो, 'उनी एउटा पुस्तक निकाल्ने तरखरमा थिए जस्तो लाग्छ । मलाई त कुनै पुस्तक दिएका छैनन् ।'

तुलसी दाइले सम्झनुभयो, 'उनको जन्म उता भारतको असममा भएको, उतै शिक्षा समेत लिएको बताउँथे । पछि यता नेपाल पसे । पूर्व झापामा यसरी आउनेको ठूलै संख्या छ । यस अर्थमा म द्रोणलाई नेपालको पूर्व र भारतको उत्तर-पूर्व जहाँ बहुसंख्यक नेपालीहरू बस्छन्, बीचका एक सम्बन्ध सेतुका रूपमा लिन्छु । उता र यताको लोकजीवनको तुलनात्मक अध्ययन गर्ने क्षमता उनी राख्तथे । उनलाई यता आइसकेपछि चेतना पलाइसकेपछि उताका नेपालीहरूको रहनसहन रीतिरिवाज, संस्कार आदिबारे रुचि बढेको हुनसक्छ । आफूलाई हुर्काउने समाज र संस्कृतिले आकर्षित गरेको हुनसक्छ ।'

यसो भनिरहँदा तुलसी दाइले आफू दार्जीलिङ, असम, करसाङ जाँदा त्यहाँका नेपालीहरूले बचाएर राखेको नेपालीपनबाट आफू दङ्ग परेको पनि स्मरण गर्नुभयो । उनीहरूले यता नेपालपट्टि भन्दा राम्रोसँग आफ्नो संस्कार परम्परा कायम गरेको जस्तो मलाई लाग्यो । के बालक, के बृद्ध, के तरुण तरुनी सबैले नेपालीपनलाई जिउँदो राखेका रहेछन् त्यता । हामीले बरू लत्तो छोडिसक्यौं । उनीहरू भने त्यस्ता थिएनन् । त्यस्तो परम्पराबाट हुर्केर आएको मानिस भएकोले पनि होला, द्रोणमा नेपाली बहुसंस्कृतिप्रति प्रतिबद्धता देखिएको भन्ने मलाई लाग्छ ।'

'राजवंशी जातिको लोकजीवनप्रति संवेदनशील हुनु द्रोण त्यहाँ भएर हो । झापा र मोरङमा धेरै संख्यामा राजवंशीहरू बस्तछन् ।' यसो भनिरहँदा तुलसी दाइले आफूहरूले नेपालको पूर्व मोरङ र झापामा बसोबास गर्ने धिमाल जातिको अध्ययन गरेको कुरा सम्झनुभयो । उहाँले भन्नुभयो- 'हामीले धेरै वर्ष अगाडि म

प्रज्ञा प्रतिष्ठानमा हुँदा धिमालहरू बारे अध्ययन गरेका थियौं । दमक गएर हामी चार-पाँच जनाको टोलीले स्थलगत अध्ययन गरेको थियो । त्यस क्रममा मैले के थाहा पाएँ भने, धिमालहरूले राजवंशीका कतिपय परम्परागत गीतहरू गाउँदा रहेछन् । भनेपछि यी दुई जातिमा केही समानता छन् भन्ने हामीलाई लाग्यो ।'

द्रोण सर एक ऊर्जाशील व्यक्तित्व भएको मेरो भोगाइ छ । जब हामी वर्तमान साहित्य प्रतिष्ठान नामक संस्थाबाट चन्द्रगढीमा साहित्य कला विषयक गतिविधि गर्थ्यौं, ती कार्यक्रमहरूमा उहाँलाई खबर हुनासाथ आनाकानी गर्नुहुन्थेन । हामी लीला लेखनको अभियान चलाउँथ्यौं । उहाँको आलोचनात्मक सुझाव पाउँथ्यौं । वर्तमान नामको साहित्यिक पत्रिका प्रकाशन गर्थ्यौं । उहाँको नैतिक समर्थन रहन्थ्यो । २०५८ सालतिर हामीले भाषा-साहित्यमा त्यस क्षेत्रबाट भए-गरेका विद्यावारिधिको प्रस्तुति गराउने र सबैलाई जानकारी गराउने उद्देश्यले कार्यक्रम थालनी गर्‍यौं । पहिलो प्रस्तुति हाम्रा काका चन्द्रमणि नेपालको थियो । दोस्रो प्रस्तुति द्रोण सरकै थियो । त्यसपछि क्रमशः अरूका प्रस्तुतिहरू भए । त्यस क्रममा उहाँ धेरै प्रफुल्लित हुनुभएको मलाई स्मरण छ ।

तुलसी दाइसँग सम्वाद गरिरहँदा उहाँले द्रोण सरलाई धेरै नजिकबाट जान्ने मौका पाउनु भएन भन्ने कुरा मलाई बारम्बार भनिरहनु भयो । उहाँले भन्नुभयो- ' द्रोण मेरोमा धेरै पटक त आएनन् । घरमा एक-दुई पटक अध्ययनका सिलसिलामा आए । गोष्ठीहरूमा भेट भयो । तर, उनको युवकत्व, जो बोलीमा पनि झल्कन्थ्यो, त्यो मैले भुलेको छैन । उनको त्यही जोश जाँगरले मलाई प्रभावित गरेको थियो । केही खोजिरहने स्वभावले उनी मेरो स्मरणमा रहे । नभए कति युवाहरू कविहरू अनुसन्धान गर्नेहरू आउँछन् । सबैलाई कहाँ सम्झन सकिन्छ र ! अब त बुढो पनि भइयो । तर, मेरो विचार के छ भने मानिस उमेरले होइन, विचारले बुढो हुन्छ ।'

द्रोण सर पनि बुढो त हुनुभएको थिएन । विचारले उहाँ झनै युवा हुनुहुन्थ्यो । तुलसी दाइले यसो भनिरहँदा द्रोण सर मेची क्याम्पसको भवन अगाडि ठूलो स्वरले हाँसेको सम्झिएँ । म काठमाडौंबाट चन्द्रगढी जाँदा लेखनाथ चोकमा अचानक भेट हुँदा 'रत्नमणि कहिले आयौ ?' भनेर सोधेको सम्झिएँ ।

रुखमा चराहरू कराइरहेका थिए । ढोका बाहिर खैरो रङको कुकुर गुड्डुल्किएर बसिरहेको थियो । तुलसी दाइले मूल गेट खोलिदिनु भयो । म फेरि अरु कुनै प्रसंगमा आउने वाचा गर्दै बाहिर निस्किएँ ।

*भद्रपुर-७, झापा (हाल कीर्तिपुर, काठमाण्डौं)*

*(लेखक प्रसिद्ध आख्यानकार हुनुहुन्छ)*



राजबाबु शंकर

# गुरू द्रोण

मृत्यु एक अकाट्य सत्य हो । तर, विकल्परहित पनि हो, भन्ने जान्दाजान्दै त्यसको आकस्मिकताले हामी जहिल्यैसुकै पिरोलिएका हुन्छौं । जन्मले नै मृत्युको आकस्मिकतालाई छायाँ झैं पछ्याइरहेको हुन्छ । तर, हामी मृत्युको अर्थात् आफ्ना स्वजन र आत्मीय परिजनहरूसँगको चिर वियोगको पीडालाई हठात् संवरण गर्न सक्दैनौं ।

हरेक मानव, पशु-पंक्षी, वनस्पति, बोटबिरुवा, रुख अर्थात् सबै प्राणी, चराचर र सजीव वस्तुको अवसान निश्चित छ । एक न एक दिन त्यसले कालकवलित हुनैपर्ने नियतिबाट गुज्रनु पर्छ - यो हामी सबैले जाने-बुझेको शाश्वत प्राकृतिक चर्या हो । तर, मानिस प्राणीहरूमध्ये सचेत र विवेकी कहलिए पनि ऊ जहिल्यै मृत्युदेखि चाहिं अवशादग्रस्त हुन्छ, मृत्युले उसको मनोभाव जहिल्यै संवेदित तुल्याउने गर्दछ । त्यसैले हुनुपर्छ, मानिसले कहिल्यै मृत्युलाई स्वाभाविक ठान्न नसकी आकस्मिक मानिरहेको, असामयिक ठानिरहेको ।

संस्मरण/स्मृति कालातीत भए पनि मान्छे सशरीर भौतिक रूपमा कहिल्यै कालजयी हुन सक्दैन । केवल उसका जीवनगाथा, शौर्य र भूमिका कालजयी बन्न सक्छन् - इतिहासमा । र, मानिसको दैहिक अवसान त्यही इतिहासको प्रस्थान-विन्दु हो । यस धरामा भौतिक देहको आकारमा टुसाएको जीवन पल्लवित, पुष्पित हुँदै फक्रन्छ, मुर्झाउँछ र अन्ततः धरामै समाधिस्थ हुन्छ । फरक के मात्रै हो भने, त्यो जीवनले प्राप्त गरेको समय कति लामो रह्यो वा छोटो ! सामान्य मृत्यु वरण भयो वा रोगब्याध/दुर्घटनाबाट जीवन छोट्टियो ? त्यो समयावधिको अनिश्चयका बीच कुनै पनि स्वरूपमा जीवनको विनिर्माण भने अवश्यंभावी छ ।

गुरु द्रोणकुमार उपाध्याय पौडेलको जीवनलीला अस्तयको ६ महिना बित्दा म उहाँसँगका एकाध सम्झना यहाँ लिपिबद्ध गरिरहेछु । सर्वप्रथमतः उहाँ मेरा गुरु नै हुनुहुन्थ्यो । मेची क्याम्पसमा २०३८-३९ सालताका उहाँले पढाउनुभएका

विद्यार्थीहरूमध्ये म पनि एक थिएँ । त्यसपछि २०४२ साल यता प्रेस र पत्रकारिताको व्यावसायिक जीवनका क्रममा उहाँसँग निकै पटक भलाकुसारी एवम् संगत गर्ने सुअवसर पाएँ । सोही क्रममा उहाँका थुप्रै अनुसन्धानात्मक कृतिहरूमध्ये 'भाषिक चिन्तन', 'लोकवार्ता : लोककै चर्चा', 'केही साधक : केही साधना' (२०६५) र 'भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा' (२०६८) गरी ४ वटा कृतिलाई पुस्तकको रूप दिने तथा उहाँका दर्जनौं शोधमूलक लेख-रचनाहरूमध्ये चौथाई दर्जन आलेख मैले सम्पादन गरिरहेको 'साप्ताहिक समाचार'मा प्रकाशन गर्ने सुयोग पनि पाएको हुँ । समग्रमा मेरा निम्ति द्रोण सर स्नेहिल हार्दिकताका विम्ब हुनुहुन्थ्यो ।

उहाँ रंगहीन हुनुहुन्थेन, दम्भहीन हुनुहुन्थ्यो । एउटा शिक्षक/प्राध्यापक, लेखक, स्थानीय जातीय एवम् भाषिक अध्येता, समालोचक, रैथाने लोकसंस्कृतिका गवेषक, सामाजिक एवम् समतामूलक धार्मिक अभियन्ता...... यी सबै उहाँको व्यक्तित्वका भिन्नाभिन्नै रंगहरू थिए । नर्थ बंगाल युनिभर्सिटीबाट 'लोकसाहित्य'मा विद्यावारिधि हासिल गर्नुभएका गुरु द्रोण नेपाली, संस्कृत, अंग्रेजी, हिन्दी, असमी, बंगाली, राजवंशी गरी ७ भाषाका ज्ञाता एक विद्वान्, मृदुल, बोलैया र हँसमुख सज्जनका रूपमा सुपरिचित हुनुहुन्थ्यो । 'हुनु हार, दैव नटार' भन्छन्; उहाँको दैहिक चोला पनि अनायासै ७१ वर्षमै उठ्यो । शायद गुरु द्रोणको चिर वियोगको यही आकस्मिकता हामीमाझ बडो चिमोटिने बनेको छ - मलाई यस्तै लाग्छ । कल्पनातीत ब्रह्मलोकीय यात्रामा निस्कनुभएका आदरणीय गुरु द्रोणमा यिनै हरफहरूद्वारा सादर श्रद्धाञ्जलि...... !

*साउन १८, २०७७.*

*- रेयुकाई टोल, भद्रपुर- ८ (झापा)*

*(लेखक पत्रकार हुनुहुन्छ)*



राजेन्द्र चापागाईं

# हाम्रा द्रोणकुमार सर

विश्वमै फैलिएको रुढीका त्रासले बच्न घरमै बसेको खाली अवस्थामा युवा साहित्यकार खगिन्द्रा खुशीजीले दुई पटक फोन गरिसक्नु भो । पहिलो फोनमा नै उहाँले द्रोण सरको स्मृतिग्रन्थ प्रकाशित गर्ने निर्णय भएकोले 'तपाईंले पनि उहाँका बारेमा लेख्नुपर्‍यो' भन्नुभयो । मैले देखे-चिनेका झापाका उपल्लो दर्जाका साहित्यिक एवम् सामाजिक व्यक्तिहरूमध्ये 'भुल्नै नहुनेहरू पनि किन हो उहाँहरूको भौतिक शरीर सँगसँगै बिलाउनु पो हुँदैछ कि ?' भनिरहँदा म मात्र नभई कसैलाई पनि द्रोण सरको स्मृतिग्रन्थको कुरा सान्त्वनामूलक बन्नु स्वाभाविकै हो । समाजमा जसलाई इतिहासविद् भनियो, उनकै इतिहास हराउनु, वरिष्ठ साहित्यकार तथा समालोचकको छवि बनाइसकेकाको सामाजिक या पारिवारिक क्षेत्र कहीं कतैबाट खोजी भएन भन्ने सुनिँदै गर्दा द्रोण सरको स्मृतिग्रन्थ प्रकाशित हुनु एउटा असल पहल हो भन्ने लागेको छ ।

डा.द्रोणकुमार पौडेलको जन्म भारतको असम राज्यको बटियामारीमा पिता टीकाराम पौडेल माता भेजमाया पौडेलको कोखबाट वि.सं. २००६/३/५ मा भएको हो । उहाँका पुर्खा (हजुरबुबा) भोजपुर दिङ्लाको गडीगाउँबाट जीवनयापन गर्ने भरपर्दो व्यवसायको खोजीमा असम पुग्नु भए पनि पुस्तेबारी थातथलो दिङ्ला नै हो । १९३२ सालमा दिङ्लामा संस्कृत पाठशाला खोली त्यस समयको कठोर शासनकालमा पनि शिक्षाको ज्योति फैलाउने आबाल ब्रम्हचारी षडानन्द अधिकारीको जन्म त्यही गडीगाउँमा भएको थियो । गडीगाउँका पौडेलहरू षडानन्द गुरुका मावली हुन् । दिङ्लाको गडीगाउँमा पौडेलहरूको पुस्तौंदेखिको बसोबास थियो, भन्ने तथ्य पौडेल वंशावलीले पनि सिद्ध गर्छ । आबाल ब्रह्मचारी षडानन्द गर्भे टुहुरा र जन्मँदाको साइत पनि आमा पिर्ने भनी दोष लगाइएको थियो रे ! उनको बाल्यकाल मावलीको संरक्षणमा पौडेल गाउँमै बितेको हो, भनिन्छ ।

डा.द्रोण पौडेलको बी.ए.सम्मको पढाइ असममै भएको थियो । नेपाली

विषयमा एम.ए. चाहिं त्रि.वि. काठमाण्डौबाट २०३० सालमा गर्नुभयो । ब्राम्हण कुलको पौडेल परिवारमा जन्म हुँदा संस्कारले नै उहाँ कुलीन हुनुहुन्थ्यो । उहाँले संस्कृतको पनि ज्ञान हासिल गर्नुभएको थियो । असममा जन्मी-हुर्की पढे-बढेकाले असमिया र हिन्दी भाषाको ज्ञाता समेत हुनुहुन्थ्यो । बङ्गाली साथीभाइको सरसङ्गत उठबसले बङ्गला भाषामा पनि उहाँ प्रखर हुनुहुन्थ्यो । पछि आएर उहाँले राजवंशी भाषामा खोज अनुसन्धान समेत गर्नुभयो । अङ्ग्रेजीको भाषिक ज्ञान त अध्ययनले नै गरायो । बहुभाषाका धनी डा. द्रोण सर नेपाली, संस्कृत, अङ्ग्रेजी, हिन्दी, बङ्गला, असमिया आदि जुन भाषामा पनि गहिरो गरी प्रवचन गर्न सक्नु हुन्थ्यो । विद्यावारिधि चाहिं उहाँले उत्तरबङ्ग विश्वविद्यालयबाट नेपाली सवाईमा गर्नुभएको हो ।

मेची क्याम्पसमा नेपाली विषयको प्राध्यापकका रूपमा २०३८ सालतिर उहाँ झापा आउनुभएको म जान्दछु । संस्थानको नोकरीबाट अवकाश लिएपछि म स्थायी रूपले घरमैं बस्न थालें । त्यसपछि स्थानीय देवकोटा स्मृति भवनको कार्यसमितिमा आबद्ध पनि हुन पुगें । त्यसमा कुनै साहित्यक कार्यक्रम हुँदा उहाँलाई नछुटाई निमन्त्रणा गरिन्थ्यो । कति कार्यक्रमको त उहाँ प्रमुख अतिथि नै हुनुभयो । त्यस्तै अन्य कार्यक्रमहरूमा आदिकविको बारेमा होस् वा महाकवि देवकोटाका बारे होस् अथवा युवाकवि मोतीराम लगायत जो जसका बारेमा व्याख्या गर्दा पनि अघिल्लो पटक प्रस्तुत गरेको विषयलाई पुनः अर्कोपटक नदोहोरिने गरी विद्वान् द्रोण सर नयाँ कुरा र प्रसंग ल्याई कर्णप्रिय शैलीमा अभिव्यक्ति दिन सिपालु हुनुहुन्थ्यो ।

उहाँ धेरै सामाजिक संघ-संस्थामा समेत आबद्ध हुनुभएको देखिन्छ । बढी क्रियाशीलता चाहिं भाषिक, साहित्यिक र धार्मिक क्षेत्रमा पाइन्छ । हिन्दू संस्कार र संस्कृतिको जगेर्ना तथा उन्नतिको उद्देश्य राखी चन्द्रगढीमा उहाँ समेतको अग्रसरतामा स्थापित वैदिक समाज नेपालको दुई कार्यकाल अध्यक्षता गर्नुभएको हो । यो संस्था उहाँहरूकै प्रयासले निरन्तर सञ्चालित छ ।

डा. द्रोण सर अध्ययनशील भएकोले उहाँको जीवनयापनको पेशा पनि शिक्षण सेवा नै बनेको देखिन्छ । असमका स्कूलहरू हुँदै मेची बहुमुखी क्याम्पसमा लामो समयसम्म त्यो पेशा अपनाउँदा नेपाली विभागको प्रमुख समेत भई तीन कार्यकाल कुशलतापूर्वक बिताउनु भयो । ७० वर्षे जीवनमा ३५-३६ वर्ष उहाँले शिक्षण पेशामा नै अर्पण गर्नुभयो ।

साहित्यिक क्षेत्रमा उहाँको योगदान महत्वपूर्ण छ । विभिन्न भाषामा उहाँका अनुसन्धानमूलक स्तरीय लेखहरू छन् । नेपाली व्याकरणदेखि राजवंशी भाषा साहित्य, नेपाली लोकसाहित्य, लोकवार्ता समीक्षात्मक संगालो आदि थुप्रै कृति प्रकाशित छन् । अङ्ग्रेजी तथा असमिया भाषामा पनि उहाँका कृतिहरू प्रकाशित छन् ।

'विद्वान् सर्वत्र पुज्यते' भने झैं उहाँ जहाँ पुगे पनि पूजित र सम्मानित भएको देखिन्छ । व्यक्तिगत रूपमा पनि उहाँप्रति मेरो सौहार्द्रपूर्ण प्रेमादर थियो । यो प्रेम सद् भाव पछिल्ला दिन पनि जोडिन पुग्यो । मेरो नातामा काकाको सम्धी हुनुभएपछि यो सद्भाव कुटुम्बेरीमा परिणत भयो । सरस्वती पुत्र डा.द्रोणकुमार उपाध्याय पौडेलले २०७६ सालको श्रीपञ्चमी (सरस्वती पूजा)कै दिन झापाली साहित्यिक, सामाजिक, शैक्षिक क्षेत्रलाई शून्य पार्दै आफ्नो भौतिक शरीर त्याग्नुभयो । उहाँको आत्माले सदा शान्ति प्राप्त गरोस् । हार्दिक श्रद्धाञ्जलि !

*(लेखक देवकोटा स्मृति भवन, भद्रपुरका अध्यक्ष हुनुहुन्छ)*



राजेन्द्र प्रसाई

# मेरा एक आदर्श गुरु द्रोण सर

उहिले-उहिले खै कहिले हो कहिले, उता असममा मेरा बुबा कामको खोजीमा गएर उतै मावलमा बसेर विभिन्न काम गर्नुहुन्थ्यो रे ! धेरै वर्षपछि यता नेपाल फर्केर आउनुभयो । उतिबेला बुबाले 'द्रोण सरका बुबा काला-काला हुनुहुन्थ्यो' भन्नु भएजस्तो लाग्छ । तर, अब त बाबा जानुभएकै पैंतीस वर्ष भएछ ।

बुबालाई शिक्षाप्रति अति चासो हुन्थ्यो । त्यसै प्रसङ्गमा जब म मेची क्याम्पसमा २०४० सालदेखि पढ्न थालें; तब बुबाले सरहरू घनश्याम खनाल, द्रोणकुमार पौडेल मैले चिनेका मान्छे हुन् भन्नुहुँदै असमका मान्छे धेरै विद्‍वान छन् । गुवाहाटी विश्वविद्यालय छ' भन्नुहुन्थ्यो । साँच्चै हो रहेछ । घनश्याम खनाल क्याम्पस-प्रमुख हुनुहुन्थ्यो । मलाई आई.ए.मा द्रोणकुमार सरले पढाएको थाहा छैन । बी.ए.को कक्षामा द्रोणकुमार सर अनिवार्य नेपाली पढाउनु हुन्थ्यो । मोटो मान्छे हेर्दै विद्‍वान/प्राध्यापक जस्ता । अलि छिटो बोल्नु हुन्थ्यो । असमका कुरा धेरै गर्नु हुन्थ्यो । बङ्गाली भाषामा पनि पोख्त हुनु हुँदोरहेछ । उहाँ संस्कृत, नेपाली, अंग्रेजी, हिन्दी, असमी, बङ्गाली आदि भाषा राम्रो बोल्नु हुन्थ्यो । मलाई लाग्छ, उहाँ राजवंशी भाषा पनि बोल्नु हुन्थ्यो !

जान्न त उहाँ धेरै जान्ने मान्छे, ज्ञानका सागर, पढाउँदा कुरा बढी छिरोल्नु/छर्नु हुन्थ्यो । मिलाउन कठिन हुन्थ्यो, जसका कारण कहिलेकाहीं कक्षा दुरुह पनि हुन्थ्यो कि ? उहाँलाई आँ गर्दा अलङ्कार बुझ्ने विद्यार्थी चाहिने रहेछ । म अलि लाटो बुद्धिको बोधो-बोधो विद्यार्थी । सर साह्रै मन परे पनि म अलि प्रष्ट बुझ्दिनथें सरका कक्षाहरू । सर मलाई अति मन पराउनु हुन्थ्यो । एक मानेमा म उहाँको असल विद्यार्थी थिएँ । सोझो सादा गाउँले अबोध मान्छे । मेरो घर दुहागढी, हाम्रो गाउँमा उहाँ प्रायशः आउनु हुन्थ्यो । मेरा बुबासँग कुराकानी हुन्थ्यो । उहाँहरूको असमदेखिको पुरानो सम्बन्ध । हाम्रो बुबा उहाँलाई अतिश्रद्धा

गर्नुहुन्थ्यो । त्यही भएर पनि सर मलाई अतिरिक्त माया पनि गर्नु हुन्थ्यो ।

खास कुरो के रहेछ भने, त्यतिबेला हाम्रो गाउँ दुहागढीमा विशेषतः लोकराज बराल दाजु-भाइहरू, उहाँका आमा-बाबा अनि वाचस्पति निरौलाहरूका घर थिए । उहाँहरू धनी परिवारका हुनुहुन्थ्यो र असमसँग सम्बन्धित पनि हुनुहुन्थ्यो । शायद सानोतिनो कुनै नाता पनि थियो कि ? पछि धेरै पछिसम्म पनि द्रोणकुमार सर दुहागढी आइरहनु भएको म भेट्दथें । त्यसको केही वर्षपछि पोखेल (वाचस्पतिका ज्वाइँ) असमी मूलका भद्र असल मान्छे दुहागढी बस्न थाल्नुभयो अनि त द्रोणकुमार सर झन् बढी दुहागढी आउनु हुन्थ्यो । हाम्रो घर अलि तलतिर उहाँले अतिकति जमीन पनि किन्नुभएको थियो जस्तो लाग्छ ।

द्रोणकुमार सर, मेरा आदर्श गुरु हुनुहुन्थ्यो । मलाई पनि भविष्यमा सर जस्तै प्राध्यापक बन्ने रहर लाग्थ्यो । किशोरवयमा रङ्गीन सपनाहरू यसरी कति सल्बलाउँथे मनमा । यसैको कारण, द्रोणकुमार सरकै प्रेरणा र आदर्शले हुनसक्छ, म पनि अहिले अक्षरकै खेतीमा छु । माटोको खेतमा अन्नका बीज उमार्न, हुर्काउन छाडेर बोली बेच्ने र ज्ञान बाँड्ने अनि अक्षरको खेतीमा जानी-नजानी लागिरहेकै छु । द्रोणकुमार सर जस्तो विद्वान प्राध्यापक, असल मान्छे हुन नसके पनि मेरो पनि बाटो उही हो, अलि पछि भने परें । गीतमा भनिएजस्तै 'अल्झें कहीं त के भो, बाटो भुलेको छैन' ।

द्रोणकुमार सर सच्चा आदर्श मान्छे । सत्य, धर्म, प्रेम, शान्ति, अहिंसा, मानवता, दया, सेवा, क्षमा र विश्वासको बाटो हिंड्ने बटुवा... जीवनभर यही बाटो हिंडिरहनु भयो । कहिल्यै विचलित हुनु भएन । विश्वविद्यालयको अध्ययनपछि पनि सरसँग मेरो बाक्लै भेट भइरहन्थ्यो । चन्द्रगढी जाँदा म निस्किने ठाउँ २ वटा थिए । तारा पौडेल सर र द्रोणकुमार पौडेल सरको घर । सानो घर, ठूलो विचार, थोरै सम्पत्ति तर धेरै ज्ञान- द्रोणकुमार सरका परिचय हुन् । उहाँको घर जाँदा घरमा जो छन्, सबैलाई चिनाउनु हुन्थ्यो मलाई । बिना काम/उद्देश्य म सरका घर गइरहन्थें । पहिले तारा बराल पत्रकार हुँदा उनका घर जाँदा मैले द्रोणकुमार सरको घर देखेको हो । बराल सरकै छेउमा थियो सरको घर ।

संयोगवश पछि म धुलाबारी क्याम्पसमा काम गर्न थालें । आदरणीय गुरु तारा सरको सल्लाह र सहयोगमा अलि पछि द्रोणकुमार सर पनि आउनुभयो । तर, गुरु-चेलाको त्यो साहचर्य, सहकर्म धेरै दिन हुन पाएन । गुरुसँगै उहाँकै समकक्षी भएर काम गर्न पाउँदा मेरो हर्षको पारो निकै माथि चढेको थियो । मेरो भाग्य !

म अहिले पनि मेरा गुरुहरू (विशेषतः मेची क्याम्पसका)कै साहचर्य र सहकर्ममा सहयात्री बनेर क्याम्पस पढाउन पाइरहेछु । सरहरूको सान्निध्य र सद्सङ्गतले होला, अरूहरू भन्छन्- 'म बिग्रेको छैन रे, राम्रै मान्छे छु अरे !' मलाई त थाहा छैन, म कस्तो छु ? तर, द्रोणकुमार सर मलाई औधि मन पराउनु हुन्थ्यो । क्याम्पस पढाउने क्षुधापूर्ति हुन नपाउँदा म सरसँग सहयोग पनि माग्थें । जब म धुलावारीमा पढाउन थालें अनि बारम्बार द्रोणकुमार सर मलाई भन्नु हुन्थ्यो- 'अलि अलि क्षुधो त मेटियो होला नि अब ?' अनि म भन्थें- हो सर ! अब म सन्तुष्ट छु ।

द्रोणकुमार सर सत्यम्-शिवम्-सुन्दरम्को भावनाका ज्ञानका अथाह भण्डार हुनुहुन्थ्यो । गुरुवरले विद्यावारिधि गर्नु हुँदा म असाध्य खुशी भएथें, शायद उहाँ जत्तिकै । चन्द्रगढी, चारआली, बिर्तामोड, धुलाबारी जहाँकहीं द्रोणकुमार सर भेटिनु हुन्थ्यो, म श्रद्धाका साथ झुकेर अभिवादन गर्थें । एक प्रकारले भन्ने हो भने, मेरो र द्रोणकुमार सरको सम्बन्ध संस्कृतको गुरुकुलीय शिक्षा पद्धतिको गुरु-चेलाको जस्तो थियो । आधुनिक शिक्षक-विद्यार्थीको जस्तो होइन । उहाँ मेरो सच्चा आदर्श अनुकरणीय, अनुशरणीय, उदाहरणीय गुरु हुनुहुन्थ्यो । अहिलेको जमानामा कहाँ पाउनु यस्ता गुरु-चेला ? तर, हामी अपवाद थियौं । गुरुकै पथको अनुगामी म, अब पनि गुरुकै बाटो हिंडिरहन्छु । गुरुका पाइला पच्छ्याउँदै त्यही सतीसाल झैं निडर, निर्भीक, अटल आस्थाको धरोहर द्रोणकुमार सरको बाटोमा अविचलित, अविरल यात्रारत् छु ।

निकै कठिन हुँदोरहेछ- सत्य, न्याय र धर्मको बाटोमा हिंड्न । प्रेम, शान्ति, अहिंसा, सेवा र क्षमाको भावलाई मुटुभरि अटाइ-नअटाइ कोचेर बाँच्ने जमर्को गर्दैछु । बेला-बेला त लाग्छ- यस्तो अत्यासलाग्दो, कहालीलाग्दो बाटो आजको कलियुगमा यात्रा त परै जाओस्, अडिनै कठिन हुँदा यात्रा नै त्यागौं कि जस्तो पनि लाग्छ । तर, गुरु द्रोणकुमारलाई सम्झन्छु... मैले थापेका अन्य गुरुलाई सम्झन्छु अनि छोड्न सक्दिन । आधाभन्दा बढी हिंडिसकियो, अब त कति नै पो छ र ?

अँ... साँच्ची ! यौटा प्रसङ्ग त झण्डै पो बिर्सेछु मैले । द्रोणकुमार सरले मलाई आफ्नो जीवनमा ठूलो गुन लगाउनुभएको छ । धुलाबारी क्याम्पसमा उहाँले थोरै समय मात्र पढाउनुभयो । पछि, मलाई उहाँहरूले भर्खरै सञ्चालनमा ल्याउनुभएको र वीरेन्द्र मा.वि.को भवन चन्द्रगढीमा सञ्चालित पूर्वाञ्चल उच्च मा.वि.मा अध्यापनका लागि अवसर दिनुभयो । सबै सञ्चालकहरू मैले चिने-

जानेकै मेरा मेची क्याम्पसका गुरुहरू हुनुहुन्थ्यो । यो अवसरले मलाई सरसँगको साहचर्य अझ गाढा हुन मद्दत गऱ्यो । चन्द्रगढीमा दिनहुँ नै प्रायः भेट हुन्थ्यो । तारा पौडेल सर पनि त्यहीं हुनुहुन्थ्यो । तर, मलाई लामो सङ्गत गर्न जुरेन, चन्द्रगढीमा । म बिर्तामोड तर्फ लागें । आर्थिक उपार्जन भन्दा पनि कामको खोजीमा भौतारिइरहेको मलाई यो अवसरले अझ हर्षित तुल्यायो ।

मनकामना कलेजमा म अलि व्यस्त हुने गर्छु । यस्तै व्यस्तताकै बीच मलाई तारा सरले नै होला शायद, भन्नुभएथ्यो- 'द्रोणकुमार सरलाई पनि क्यान्सर लागेछ' । वाक्य पनि नसकिँदै म झसङ्ग भएको थिएँ । जिउमा अनायास काँडा उम्रे, रौं ठाडा भए, आङ जिरिङ्ग भयो, टाउको चसक्क दुख्यो, मनमा के ले, के ले घोचेजस्तो भयो ! तै पनि आजको चिकित्सा विज्ञानले क्यान्सर पनि निको पार्छ भनी सुनेको थिएँ । त्यही आशा थियो र चित्त बुझाएँ । फेरि केही समयपछि अकस्मात कुमार थपलिया सरले सुनाउनुभयो- 'द्रोणकुमार सर जानुभयो' । हरे भगवान ! जे नहोस् भनेथें, त्यही भयो । दैवको लीला अपरम्पार । मेरो आस्था र विचारको धरोहर ढल्यो । तर, द्रोणकुमार सर अनन्त यात्रामा जानुभयो, चित्त बुझाउनै पऱ्यो । अहिले पनि बारम्बार सम्झिरहन्छु, मेरा श्रद्धेय गुरु द्रोणकुमार सरलाई !

*(लेखक डा.द्रोणकुमार उपाध्यायका विद्यार्थी हुनुहुन्छ)*



प्रा.राजेन्द्र सुवेदी

# गुड बाई मित्र द्रोणलाई

मित्र द्रोणप्रसाद उपाध्याय पौडेलज्यू ! तपाईं त सूचना पनि नदिई सुटुक्कै बिदा पो हुनु भएछ । समयमै थाहा पाएको भए त म तपाईंलाई नजिक आएर समयमै बिदाको हात हल्लाउने थिएँ र ‘गुड बाई’ सम्म त भन्ने थिएँ । त्यही मौका पनि त दिनुभएन मित्र तपाईंले ! हुन त यसप्रकारको यात्रामा कतिबेर र कस्तो समयमा प्रस्थान गर्नु पर्ने हो ! त्यो पूर्वसूचनाका साथ यात्रारम्भ गरिने विषय पनि त होइन । यसमा केही पश्चात्ताप त अवश्य भयो नै; तर गुनासो गर्ने विषय पनि होइन । यसप्रकारको यात्रा हामी अनायासै गर्दछौं । हामी सबैको नियति पनि त यही हो ! यात्रा योजनाका मुहूर्त, सातुसामल र खर्चबर्च पोको पारेर यात्रा आरम्भ गर्न पनि कहाँ मिल्छ र म गुनासो गरौं मित्र !

मलाई राम्ररी सम्झना छ मित्र ! असमको बिहाली, बटियामारीबाट तपाईं त्रिभुवन विश्वविद्यालयमा नेपाली विषयमा स्नातकोत्तर तहको अध्ययनका निम्ति आउनुभएको थियो । असमकै शोणितपुर रौताबाट तपाईंका साथ सोही प्रयोजनका निम्ति मेरा अर्का मित्र कुलप्रसाद सेढाईं पनि आउनुभएको थियो । त्यतिखेर नेपाली विषयको स्नातकोत्तर तह अध्ययन गर्ने भारतीय विद्यार्थीहरूका निम्ति नेपाल सरकारले छात्रवृत्तिको पनि व्यवस्था गरेको थियो । तपाईं-हाम्रो पहिलो भेट २०२८ सालको श्रावणमा विश्वविद्यालयको प्रवेशका निम्ति आउँदा भएको थियो । असमबाट यसभन्दा अघिल्लो शैक्षिक सत्रमा आएका विद्यार्थीहरूमा भीमकान्त उपाध्याय र सदानन्द शर्माको पनि त्यहाँ उपस्थिति थियो । तपाईंलाई थाहै होला । अनि यो पनि त थाहा होला- हामीसँगका सहपाठी कालिम्पोङ्गबाट आएका देवकुमार प्रधान र अघिल्लै सत्रदेखि अध्ययनरत रहेका दार्जीलिङबाट आएका मित्रहरू रुक्मिणी क्षेत्री, नवमी खालिङ, अमृत राई लगायतका मित्रहरूको पनि उपस्थिति रहेको थियो ।

नेपालकै विभिन्न क्षेत्रबाट त्यहाँ अध्ययनार्थ उपस्थित मित्रहरू वसन्त थापा,

नरेन्द्रराज पौडेल, स्थिरप्रसाद पराजुली, योगराज पौडेल आदि मित्रहरूको एक झुण्ड नै थियो । त्यतिखेर नेपालको शिक्षा पद्धतिमा नयाँ योजनाहरू ल्याउने सरकारको नीति उद्घोष भएको थियो । यसका विरुद्ध विद्यार्थीहरूको आन्दोलन चलेका कारण स्नातकोत्तर दोस्रो वर्षको परीक्षाको तालिका छ महिना पर धकेलियो । यसकारण हाम्रो उपस्थिति त्यस छ महिनाका निम्ति छिरलिन पुग्यो । एकैचोटि २०३० सालको चैत्रमा भएको परीक्षामा मात्र पुनः हाम्रो भेटघाट भयो । तर, परीक्षा सकिएपछि कोही कता र कोही कता छरिन पुग्यौं । धेरै मित्रहरूले आ-आफ्नो मार्ग तय गरे । संयोग र वियोगको स्थितिको नियम पनि यही नै रहेछ, आ-आफ्नै अनिश्चित गन्तव्यमा धकेलिनु । प्राकृतिक नियमलाई तल-माथि गर्ने हिम्मत कसको पो हुन्छ र !

२०३० सालमा स्नातकोत्तर तहको प्रमाण-पत्र हातमा लिएर तपाईं असमतिरै फर्किनुभयो । म पनि इलाम क्याम्पसमा अध्यापन कार्यमा जुटें । यहाँ समयको प्रवाह पनि धेरै बितेछ । २०३० सालपछिका सात वर्ष तपाईंले असमका विभिन्न उच्च माध्यमिक विद्यालयमा अध्यापन गरेर बिताउनु भएछ । समय बितेको थाहै भएन । मैलै जम्मा ५ वर्ष इलाममा बिताएर काठमाडौं नआएसम्म तपाईंसँगको सम्पर्क जुटाउन सकिन । म काठमाडौं आएपछि पनि यहाँको दौडमा व्यस्त रहेकै कारण तपाईंसँगको सम्पर्क ताजा हुन पाएन । यस स्थितिमा पनि तपाईंसँगको सम्पर्क केवल चिठीपत्रका बासी समाचारमा मात्र सीमित रह्यो । आजजस्तो फोन र मोबाइलको सुलभता नभएका कारण सम्पर्क भनेको चिठीपत्र मात्र एक उपाय थियो । यसकारण जीवन्त सूचना र सम्पर्कको स्थिति अवगत हुने अवस्था रहेन । २०३८ सालमा तपाईं मेची क्याम्पस भद्रपुरमा नियुक्ति लिन आइपुग्दाको अवस्थामा तपाईंसँगको सम्पर्क पुनरावर्तन हुन आइपुग्यो । मैले पनि त्यही इलाम क्याम्पसमा क्याम्पस-प्रमुखको पद बहाली गर्न पुग्दा मेची क्याम्पसमा घनश्याम खनाल प्रमुख बन्नुभयो । एक प्रकारले तपाईंको र मेरो प्राध्यापकीय यात्रा समान किसिमकै रह्यो ।

२०३८ सालदेखि २०७० सालसम्मको प्राध्यापकीय जीवनमा २०४८ र २०४९ सालका शैक्षिक वर्षमा काठमाडौंको पद्मकन्या क्याम्पसमा प्राध्यापन गरेबाहेकको समय तपाईंले मेची क्याम्पसको प्राध्यापनमा नै व्यतीत गर्नुभयो । क्याम्पसमा नेपाली विषयको विभागीय प्रमुख तथा सहायक क्याम्पस-प्रमुखको जिम्मेदारी निर्वाह गर्दागर्दै पनि प्राध्यापनका अतिरिक्त अध्ययनको सिलसिला पनि तपाईंबाट

निरन्तर गतिशील बन्दै रह्यो। उत्तरबङ्ग विश्वविद्यालयबाट विद्यावारिधिको उपाधि प्राप्त गरेको तपाईंको व्यक्तित्व प्राज्ञिक हिसाबले निकै गौरवपूर्ण रहेको थियो र तपाईंको व्यक्तिगत स्वभाव पनि निकै सौम्य तथा सज्जनताको सम्पूरक किसिमको थियो ।

समाज र परिवेशमा तपाईंको स्वभाव तथा व्यवहार चाँडै घुलमिल हुने किसिमको भएका कारण तपाईं परिवार तथा स्वजन र छरछिमेकसम्म पनि निकै मिलनसार तथा परिवारकै सदस्य समान बनेर उपस्थित हुने स्वभावको व्यक्ति हुनुहुन्थ्यो । तपाईंले आफ्नो भौतिक व्यक्तित्व असमको जलवायुबाट निर्माण गर्नुभयो र बौद्धिक तथा प्राज्ञिक व्यक्तित्व चाहिं नेपालमा निर्माण गर्नुभयो । सेवा चाहिं नेपालभित्र नेपाली भाषा र साहित्यको श्रीवृद्धिमा लगाउनुभयो । यसबाट के सिद्ध हुन्छ भने तपाईंले भाषा र साहित्यका निम्ति आफ्नो जीवन अर्पित गर्नुभयो ।

मित्र ! तपाईंको प्राज्ञिक ऊर्जा सिर्जनात्मकताभन्दा बढी शोध तथा अन्वेषणशीलतामा खर्च भएको छ। यस स्थितिलाई साक्ष्य गर्ने तपाईंका कृतिहरूमा लोकसाहित्य, भाषाचिन्तन र साहित्येतिहास तथा समालोचना नै विशेषतः अध्ययनको केन्द्र बनेको स्थिति देखिन्छ। यस क्रममा तपाईं मुख्य रूपमा अन्वेषणशील व्यक्तित्वका तहमा विवेचित हुने प्रतिभा देखिनु हुन्छ। तपाईंका पाठकले के-के भने, त्यो सबै त मलाई थाहा हुने विषय भएन मित्र ! मैले त तपाईंलाई जीवनका लगभग ५० वर्षको इतिहाससँग जोडेर नजिकैबाट नियालेको छु। यी ५० वर्षहरूमा जम्माजम्मी सात वर्ष केही दूरबाट नियाल्ने र सन्तोष लिने स्थिति बन्यो । यी सात वर्षहरू पनि अप्रत्यक्ष सम्पर्कबाट त नजिकै रहेका हुन् । तिनलाई साक्षी राखेर तपाईंको भाषिक तथा साहित्यिक योगदान पनि आफैंमा उल्लेख्य विषय बनेको छ ।

लोकसाहित्यका सन्दर्भमा तपाईंको योगदान निम्नानुसार विवेच्य ठानिन्छ। उदाहरणका निम्ति तलका कृतिहरू उल्लेख गर्नु असान्दर्भिक मानिन्न : असमिया भाषामा नेपाली लोककथालाई रूपान्तरण गर्ने काम मित्रहरूका साथ तपाईंबाट सम्भव भएको र नवमी (२०५४) शीर्षकको संग्रह नाममा असम साहित्यसभा, गुवाहाटीबाट प्रकाशित भएको छ। त्यस्तै, लोकसाहित्यमै केन्द्रित अर्को कृति लोकवार्ता : लोककै चर्चा (२०६५) लोकसाहित्यसँग सम्बन्धित समीक्षात्मक प्रबन्धहरूको संगालो प्रकाशनमा अएपछि तपाईंको लोकसाहित्य चेतको स्थितिलाई अझ गति प्राप्त भएको देखिन्छ। नेपाली लोकसाहित्यका सन्दर्भमा अर्को कृति

पनि तपाईंले तयार गर्नुभएको छ । लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ (२०७४) शीर्षकको कृतिले लोकसाहित्यको अन्वेषणप्रतिको तपाईंको समर्पणभावलाई पनि साक्ष्य गरेको छ । यसरी तपाईं लोकसाहित्यका सन्दर्भमा पनि अन्वेषक व्यक्तित्व बनेको स्थिति देखिन्छ ।

तपाईंले आफ्नो भाषा तथा साहित्यसेवाको परिणति राजवंशी परिचय : जाति, भाषा र साहित्य (२०५१) बाट पुस्तकाकार कृति प्रकाशनको यात्रा शुभारम्भ गर्नुभएको हो । यस कृतिले तपाईंको अन्वेषणशील कर्मको परिचय राम्ररी प्रतिपादन गरेको स्थिति देखिन्छ । बहुभाषी देश भनेर चिनिने नेपालको एक निकै लामो इतिहास बनाएको नेपालीकै भगिनी भाषाको रूपमा चिनिने राजवंशी भाषाको विशेषतालाई निरूपण गर्ने काम तपाईंबाट भएको छ ।

त्यस्तै, तपाईंबाट भाषा-साहित्यका सन्दर्भमा भएका कार्यहरूमा सहलेखनको स्तरमा आदर्श नेपाली व्याकरण (२०६२) पनि प्रकाशनमा आएको छ । यस कृतिका माध्यमबाट नेपाली व्याकरणका क्षेत्रमा भएको तपाईंको योगदान आफैमा विवेचनीय कृति बनेको छ । तपाईंको भाषिक तथा व्याकरणिक चेतको तहलाई प्रतिष्ठा प्रदान गर्ने अर्को कृति भाषिक चिन्तन (२०६५) हो । यसलाई पनि भाषिक विशेषताको विश्लेषण र विवेचनालाई गरिमा प्रदान गर्न गरिएका प्रयत्नको साक्ष्यका रूपमा लिन सकिने स्थिति देखिन्छ ।

साहित्य समालोचनाका तहमा पनि तपाईंको लेखन निकै श्रमशील रहेको छ । समीक्षक द्रोणप्रसाद उपाध्यायका नामले पनि तपाईंलाई पुकारिन्छ । केही साधक : केही साधना (२०६५) समीक्षा ग्रन्थको प्रकाशनमा तपाईंको समीक्षक व्यक्तित्व आफैमा विश्लेषणशील पनि बनेको छ । नेपाली भाषा तथा साहित्यका चिन्तक तथा स्रष्टाहरूको प्राप्तिलाई आकलन गर्ने काम पनि यस कृतिमा भएको छ । सवाई काव्यलाई अध्ययनको आधार मानेर सिर्जना गरिएको समालोचना चिन्तन सैद्धान्तिक दृष्टिले निकै प्रबल र आधिकारिक बनेको समालोचना कृति सवाई काव्यको सैद्धान्तिक परिचय (२०६७) पनि तपाईंको पहिचान प्रस्तुत गर्न सफल बनेको छ । यसरी नै साहित्येहासको अध्ययन समीक्षणका क्रममा भारतीय नेपाली साहित्यको विवेचनात्मक इतिहास तयार गर्ने क्रममा भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा (२०६८) पनि सार्वजनिक भएको छ । यसप्रकारका यी तपाईंका ग्रन्थहरूलाई सामान्य पाठक तथा विद्यार्थी र अन्वेषकहरूले सह्राएका छन् ।

मित्र ! तपाईंका यी कृतिहरूले आज मलाई पनि विचलित तुल्याएका छन् । यसो हुनुको तात्पर्य आज मेरा सामू तपाईं हुनुहुन्न, तपाईंकै कृति मात्र असरल्ल छरिएका छन् । कृतिका आवरण पृष्ठमा रहेका तपाईंका तस्वीरहरू मतिर टुलुटुलु हेरिरहेछन् । म भने शोकसंविग्नमना बनेर तिनै पुस्तकका पछिल्तिर रहेको तस्बिरमा ट्वाल्ल परेर हेरिरहेछु ।

मित्र ! हाम्रा ती दिनहरू कुनै खुला किताबका पानाहरू हावामा फर्फराए झैं फर्फराइरहेछन् । जीवनको स्वभाव यही हो र गन्तव्य पनि त्यही हो भनेर फर्फराइरहेछन् । नश्वर प्रकृतिको आयतनमा छरिएका जीवनहरू श्वर हुँदैनन् भन्ने मैले राम्ररी नै आत्मसात् गरेको छु । तैपनि कता-कता मनका कुनाहरूमा विचलितताको आवर्तन र प्रत्यावर्तन भइ नै हाल्दोरहेछ । जति भोगिन्छ, त्यति नै रहेछ– जीवन । जति अनुभव गरिन्छ, त्यति नै रहेछ– वस्तु र यथार्थ । अनि शाश्वतताको अवस्थालाई आत्मसात् गर्नु नै रहेछ– जीवनको स्वाभाविकता । मित्र ! म निकै अभिघातको स्थिति समन गरेर यो बिदाइ सन्दर्भ प्रकट गरिहेको छु । जे जति र जस्तो स्थितिमा जीवन भोगिन्छ, त्यही नै स्वीकार्य हुने रहेछ । जीवन र जगत्को मूल्य पनि यही नै रहेछ ।

तपाईं प्रस्थानको बिन्दुमा उभिइसक्नु भएको छ । म चाहिं अन्यमनस्क भाव लिएर धमिलिंदै गएका दृष्टिले तपाईंतिर हेरिरहेछु । तपाईंको आकृति धमिलिंदै टाढा-टाढा हुँदै गइरहेछ । म चाहिं अर्द्धचेतनकै अवस्थामा बिदाईको भावमा हात हल्लाइरहेछु र भनिरहेछु – गुडबाई मित्र द्रोणलाई !

*rsubedi09@gmail.com*

*(लेखक वरिष्ठ समालोचक हुनुहुन्छ)*



रूद्र पौडेल

# सम्झनामा रहेका द्रोण

नेपाली भाषा मान्यताको आन्दोलन र त्यस आन्दोलनको एक सिपाहीको रूपमा कार्यरत रहेको बेला गान्तोकमा धेरै जनासँग भेट भएथ्यो । त्यसै भीडमा सम्भवतः प्रथमचोटि द्रोण पौडेलसँग भेट भएथ्यो, मेरो । उस्तो लामो आदानप्रदान केही भएन त्यसपटक ।

गान्तोक घुम्न आएका दलमा द्रोण पनि आएको र श्री पी.के. बस्नेतकी श्रीमती पुष्प बस्नेत पनि आएकी, उहाँहरू सहाध्यायी भएकाले श्री बस्नेतका घरमा म पनि निम्त्याइएको थिएँ । त्यहाँ भेटघाटकै क्रममा द्रोण पौडेल वंशावली समितिको अध्यक्ष (शायद)को रूपमा रहेको कुरा बुझियो । उनले मलाई पनि सिक्किमका पौडेल (पौड्याल) वंशको खोजतलाशबारे कुरा गर्दा द्रोण सम्बन्धले मेरो भाइ पर्न गएको बुझें । त्यसपछि अझ आत्मीयता बढेथ्यो । सन् ७० को दशकमा चन्द्रगढीतिर मेरो आवतजावत भइरहन्थ्यो । त्यहाँ हाम्रा छोरी-ज्वाइँ श्री गोविन्द अधिकारीज्यूका घरमा हामी जाने गर्थ्यौं । यसै क्रममा एक दिन लेखनाथ चोक छेउ उनको घरमा मलाई बोलाएर परिवारसँग परिचय गराएथे भाइले ।

त्यसपछि उनको अनुसन्धान कार्यको सिलसिलामा गान्तोक आउँदा हाम्रै निवासमा रासोबासो भयो । हामी साँच्चै वंशबृक्षका फल थियौं, उसबेला । हाम्रो आपसी सम्बन्ध प्रगाढ भएको थियो । द्रोण अर्कै राष्ट्रमा रहेको महाविद्यालयका प्राध्यापक भने म अर्कै राष्ट्रको नागरिक एवम् सरकारी जागिरे । हामी एकै वंशका भए पनि भेटघाट कमै हुन थाल्यो । आफ्नो आफ्नै दायित्व तथा व्यस्तताले ।

विगत केही दिन अघि एउटा दुःखद खबर सुनियो- 'द्रोण सर खस्नुभयो' भन्ने । म खङ्ग्रङ्ग भएँ । त्यस्तो दह्रो व्यक्ति, हँसिलो अनि मलाई दाज्यूको सम्मान दिन जता पनि अग्रणी रहने प्यारो भाइ द्रोण अब यहाँ भेटिन्न भन्दा कसो-कसो म आत्तिएको थिएँ, त्यस खबरले ।

म सम्भवतः अरू कुनै व्यावहारिक कामले चन्द्रगढीतर्फ लाग्न सकिन ।

त्यतिबेला मेरा अरू अनुजहरूबाट हामी पुग्यौं, श्रद्धाञ्जलि दियौं, जुठो बार्‍यौं भन्ने खबर पाइरहें ।

द्रोण भाइ छैन, यसले मलाई धेरै दिनसम्म खिन्नता भइरह्यो । उनको नश्वर शरीर नरहे पनि उनको स्मृति मनभित्र छिपेर बसेको छ । उनको भौतिक शरीर बाहेक एक आत्मीय भाइ गुमेको गहिरो चोट मेरो मनले बोक्तै छ । कदाचित् उनलाई सम्झँदा ती पुराना उनीसँगका यात्राहरू मलाई घच्घच्याइरहन्छन् ।

श्रीकृष्णले गीतामा भनेको कुराको सम्झना आउँछ- "जातस्य हि ध्रुवोर्मृत्युः" । सँगसँगै देवकोटाको त्यो पद "जन्मलक्ष्य नै मृत्यु किनार" । हो, यी सत्यहरूले हामीलाई चित्त बुझाउने मार्ग देखाउँछन् । अन्त्यतः भाइ द्रोणले आफ्नो जीवनमा गरेका कार्यहरूको सम्झना आउँछ । उनले आफ्नो जीवन धान्ने क्रममा शिक्षा क्षेत्र अपनाउनु भएको थियो । शिक्षण कार्य अत्यन्त गौरवपूर्ण पेशा हो भन्छ, मेरो मन । त्यहाँ नजान्ने तर जान्न चाहने राम्रो विचारको युवाशक्ति रहेको हुन्छ, उनीहरूलाई जीवन मार्गमा अग्रसर हुने शैली सिकाउने काम हुन्छ । त्यहाँ रहेका विद्यार्थीहरूलाई नितान्त पूर्वाग्रह र दूराग्रह नगरी सबैतर्फ समान रूपमा शिक्षा दिने काम हुन्छ । शिक्षा जीवनको अघि बढ्ने क्रममा रात्रिको पुल्ठो झैं हो, त्यो कार्य गर्ने अवसर पाउनुभयो भाइले । आफ्ना पूर्वजले निर्धारण गरेका संस्कृतिको सम्बर्द्धन, मातृभाषाको संरक्षण र विकासमा आफूलाई समाहित गर्ने भाइ द्रोणले आफ्नो समाजमा ठूलो आदर्श प्रस्तुत गरेर जानुभयो । "कीर्तिर्यस्य सजीवति" भन्ने प्राचीन कथनको आधार लिंदै उहाँका सुकार्यहरू हाम्रा समाजमा बाँची रहनेछन् ।

अन्त्यतः जहाँ र जस्तो अवस्थामा रहे पनि उहाँको दिवंगत आत्माले सायुज्य प्राप्त गरोस् । साथै, यस घटनाले आहत परेका उहाँका शोकाकुल परिवारका सदस्यहरूमा यो कष्ट सहन गर्ने क्षमता प्राप्त होस् भन्ने हार्दिक कामना सहित ईश्वरमा प्रार्थना गर्छु ।

*- गान्तोक (सिक्किम)*

*(लेखक साहित्यकार हुनुहुन्छ)*



लता खरेल

# विद्यार्थीहरूका माझ द्रोण सरको छवि

**प्रवेश :**

*आफू जलेर धर्तीमा उज्यालो गुरु छर्दछन्,*
*आफू गलेर मट्टी झैं मूर्ति निर्माण गर्दछन् ।*
*जसको स्नेहका सामू अरुको स्नेह व्यर्थ छ,*
*जसको त्याग देखेर धर्ती माथ झुकाउँछ ॥*

प्रखर छन्दकवि डा.देवी नेपालद्वारा रचना गरिएको 'गुरु' कविताको एक श्लोक यहाँ उल्लेख गर्न चाहें । 'गुरु'लाई अति नै आदर गर्ने हाम्रो पूर्वीय परम्परा हो । गुरु र चेलाको सम्बन्धलाई अत्यन्तै प्रगाढ र स्वच्छ सम्बन्धको रूपमा आदिकालदेखि नै लिने गरिन्छ। वैदिक कालदेखि नै माता, पिता र गुरुलाई भगवानको प्रतिरूप मानेको पाइन्छ ।

*'गुरु ब्रम्हा, गुरु विष्णु, गुरु देवो महेश्वरः,*
*गुरु साक्षात परब्रम्हाः तस्मै श्री गुरवै नमः ॥'*

यसरी गुरुलाई अत्यन्तै आदर-सत्कार गर्ने र साक्षात भगवानको रूपमा लिने हाम्रो परम्परा रहेको छ। जीवनको भोगाइ र सिकाइका क्रममा साक्षात गुरु भएर अँध्यारो जीवनमा बत्ती, मैनबत्ती, पानस, टर्च, लालटिन, चन्द्रमा, सूर्य बनेर उज्यालो छाइदिने आमा-बुबा, दाजु-भाइ, दिदी-बहिनी, आफन्तजन, साथीभाइ सम्पूर्ण गुरुहरूप्रति हृदयबाट नमन गर्दछु ।

यसै क्रममा मेरो जीवनको गोरेटोमा जीवनको भोगाइलाई शिक्षा ग्रहण गर्न सिकाउने मेरा पथप्रदर्शक, मलाई शिक्षा दिने आदरणीय गुरु द्रोण पौडेल सरको स्मृतिका पाना पल्टाउन लाग्दा मलाई 'गुरु' शब्दले नै झक्झक्याएको छ । 'गुरु'

शब्दमा नै म अल्झिएँ, मेरा बुबा समानका अभिभावक, छोरीलाई जस्तै मलाई प्यार दिने मेरा गुरु आदरणीय व्यक्तित्व द्रोण सरलाई गुमाउनु पर्दा मेरो म आफैंभित्र रुमल्लिइरहेको, हराइरहेको छ । मेरो मन-मस्तिष्कमा यस्ता व्यक्तित्व परलोकगमन हुँदाको विरह र वेदनाको क्षणमा माया र प्रेमलाई, आँशु र सहानुभूतिलाई, भावना र दृष्टिकोणलाई कुन र कस्ता शब्दले प्रतिनिधित्व गर्छ होला र ?- भन्ने लागेको थियो । त्यो भावुक क्षणका भाव तरङ्गहरूलाई शब्दले प्रतिनिधित्व गर्न नसकेर अन्यायमा पर्दछन् कि ? जस्तो भान भइरहेको थियो मलाई । आज म त्यो भावुक क्षणका मनोवृत्ति समेट्दै उनै आदरणीय गुरु द्रोणकुमार पौडेलका बारेमा दुई-चार शब्द कोर्ने प्रयास गरेकी छु । मैले द्रोणकुमार पौडेल सरको विद्यार्थी माझ कस्तो छवि थियो भन्ने बारेमात्र सानो चर्चा गर्ने जमर्को गरेकी छु ।

**परिचय :**

वि.सं. २००६ असार ५ गते भारत असमको बिहाली, बटियामारी भन्ने ठाउँमा भेजमाया र टीकारामका सन्तानको रूपमा द्रोणकुमार पौडेल सरको जन्म भएको हो । एस.एल.सी, आई.ए. र बी.ए.सम्म भारतको गुवाहाटी विश्वविद्यालयबाट अध्ययन पूरा गर्नुभएका द्रोण सरले त्रि.वि. काठमाडौंबाट सन् १९७३ मा नेपालीमा एम.ए..पूरा गर्नुभयो । पढेर कहिल्यै नथाक्ने उहाँले धेरै मेहनत गरेर सन् २००४ मा 'नेपाली सवाई'मा उत्तरबङ्ग विश्वविद्यालयबाट पीएचडी. उपाधि हासिल गर्नुभयो ।

आफ्नो पढाइ भनेर नै जीवनभरि मेहनत गरिरहने डा.द्रोणकुमार पौडेलसँग वैवाहिक जीवनमा बाँधिनुभएकी आदरणीय गुरुआमा मीरादेवीका यशवन्त, योगिता र यवनिका (१ छोरा र २ छोरी) रहेका छन् । विभिन्न विद्यालय र क्याम्पसहरूमा ३ दशकभन्दा बढी अध्यापन गर्नुभएका द्रोण सर सफल, सक्षम र प्रतिभावान व्यक्तित्व हुनुहुन्थ्यो । उहाँको नेपाली, हिन्दी, उर्दू, असमी, अङ्ग्रेजी, राजवंशी, बंगाली लगायतका धेरै भाषाहरूमा दख्खल देखिन्छ । विभिन्न समारोहमा जाँदा नेपाली साहित्य र संस्कृतिसँग अरु भाषाका साहित्य एवम् संस्कृतिको तुलनात्मक प्रस्तुतीकरण गर्ने उहाँको विशेषता बनेको थियो । उहाँले लेखेका मुख्य कृतिहरू :

- नवमी (नेपाली लोककथा संग्रहको सहलेखन, असम)
- राजवंशी परिचय : जाति, भाषा र साहित्य
- भाषिक चिन्तन
- केही साधक : केही साधना

- लोकवार्ता : लोककै चर्चा
- लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ
- भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा
- सवाई काव्यको सैद्धान्तिक परिचय,

हुन् । यी कृतिहरू प्रकाशन गर्नु भई नेपाली साहित्य भण्डारमा उहाँले महत्वपूर्ण टेवा पुऱ्याउनु भएको छ । प्रत्येक सर्जक स्रष्टामा अद्वितीय क्षमता भएमात्र कृति सफल हुन्छ । लेखक र पाठकको बुझाइको तह र कृति र पाठकको मनस्थितिको अवस्थामा कृतिको तह निर्धारण हुन्छ । एउटै हेराइ र लेखाइ सम्पूर्ण कृतिमा न्यायिक नहुन सक्छ । लेखकले युगबोधका साथै परम्परालाई पनि अंगालेर कृतिहरूमा सिङ्गो वाङ्मय प्रतिनिधित्व गर्न खोजेको हुन्छ । द्रोण सरका कृतिले सिङ्गो साहित्य र समाज एवम् परम्परा र संस्कृतिलाई पनि मज्जाले समेटेर प्रतिनिधित्व गर्न खोजेको देखिन्छ ।

**द्रोण सरका निजी स्वभाव र विशेषताहरू :**

डा.द्रोणकुमार पौडेल सरसँग व्यक्तिगत भेटघाट हुँदा सुमधुर मुस्कान र नम्र बोलिचालीको व्यवहार हुन्थ्यो । सादा जीवन उच्च विचारको आदर्श बोकेको महान् व्यक्तित्व जस्तो लाग्थ्यो । पहिलो भेटघाटमै परिवारको सुख-दुःखको खबर सोधखोज गर्ने उहाँको स्वभाव थियो । यो स्वभाव त पारिवारिक नाता सम्बन्धको जस्तो हरेक मानिसलाई लाग्थ्यो । वास्तवमा द्रोण सरको यस्तै अनौठो स्वभाव र सरल जीवनशैली उहाँको पर्याय बनेको थियो ।

घरमा मोटरसाइकल हुँदा समेत अक्सर साइकल चढ्नु त्यो उहाँको बाध्यता नभएर सरल जीवनशैलीको संकेत थियो । यो उहाँको सुन्दर पक्ष थियो- बाध्यतामा मात्र मोटरसाइकल चढ्ने । हामी धेरैजसो रहरले बाइक किन्छौं, रहरले चढ्छौं । त्यो रहर उहाँको जीवनमा मैले देखिन । मैले उहाँलाई आजीवन त्यागी, सन्त, धैर्यवान, शान्त, सहनशील, अटल साहसी, आँटिलो, परिश्रमी, मिलनसार जस्ता गुणले सम्पन्न व्यक्तिका रूपमा पाएँ ।

**विद्यार्थी र सर्वसाधारणको दृष्टिमा द्रोण सर :**

मेची बहुमुखी क्याम्पस, भद्रपुरको शैक्षिक प्रशासनका निकै पुराना कर्मचारी आदरणीय दाजु शंकर मैनालीज्यूको अनुभवमा गुरु द्रोण पौडेल सधैं सबैसँग

साथीजस्तो व्यवहार गर्नु हुन्थ्यो । त्यसकै एउटा सन्दर्भ कस्तो छ भने, २०४० सालमा तत्कालीन समयमा ब्याचलर पढ्ने २५ जना विद्यार्थीहरू 'अल इण्डिया टूर' गएका थिए । सो टोलीको संयोजक गुरु द्रोण पौडेल हुनुहुन्थ्यो । हामीले प्रशस्त रकम पनि बोकेका थिएनौं । त्यस्तो अवस्थामा आलाकाँचा उमेरका विद्यार्थीहरूलाई साधनस्रोत जुटाउँदै ३१ दिनसम्म शैक्षिक भ्रमण गराउनु, त्यसको संयोजन गर्नु चानचुने कुरा थिएन । त्यसबेला अहिलेको जस्तो सामाजिक सञ्जाल, कम्प्युटर, इन्टरनेट र मोबाइल पनि थिएनन् । कुन ठाउँ कस्ता छन् ? कहाँ पर्छन् ? भनेर खोजी गरेरै बस्ने, खाने जस्ता सबै कुराहरूको व्यवस्थापन गरेर द्रोण सरले नै शैक्षिक भ्रमण सफल बनाउनुभयो ।

त्यो ब्याचबाट निस्कने विद्यार्थीलाई अहिलेसम्म त्यसबेलाको भ्रमणका केही कुराहरू सुन्दा अचम्म लाग्न सक्छ । त्यो यात्रा बीरगञ्ज रक्सौलको बाटोबाट दिल्लीसम्म पुग्ने थियो । त्यहाँ पुगेपछि कहाँ बस्ने ? के खाने जस्ता कुराको व्यवस्थापन गुरु द्रोण सरले गर्नुभयो । द्रोण सर भारतीय हिन्दूको संगठन राष्ट्रिय स्वयम्सेवक संघ (च्क्क)को असमका सदस्य हुनुहुँदो रहेछ । जसका कारण सो संगठनले त्यो शैक्षिक भ्रमणमा पूरा सहयोग गऱ्यो । त्यो भ्रमणमा जाने शंकर मैनाली दाजु सहितको २५ जनाको टोलीलाई निःशुल्क खाने-बस्ने व्यवस्था द्रोण सर मार्फत सो संगठनले मिलाएको थियो । सो टोलीका विद्यार्थीसँगै साथीजस्तै भएर द्रोण सरले यात्रा गर्नुभयो । जस्तो विद्यार्थीले खान्छन् त्यस्तै खाने र सबैलाई साथीजस्तो व्यवहार गर्ने द्रोण सरको विशेषता हो । यात्रामा गीत गाउने, गजल गाउने, ठट्टा गर्ने, हाँसिरहने अभिभावक, साथी र गुरुसँग यात्रा गर्दा कहिल्यै असहज भएन भन्ने यात्रा अनुभव आदरणीय दाजु शंकरले निक्कै भावुक भएर सुनाउनु भयो । उहाँले त कुनै पनि समस्या आएमा घरमा आएर पनि सहयोग गर्ने अभिभावक जस्ता गुरुको विछोडको पीडाले आफू मर्माहत भएको र दुःखी भएको बताउनु भयो ।

द्रोण सरका धेरै-धेरै विद्यार्थीहरू थिए । तीमध्ये मेची बहुमुखी क्याम्पसमा स्नातकसम्म अध्ययन गरेर अर्थशास्त्रमा स्नातकोत्तर तह पूरा गरी हाल महेन्द्र बहुमुखी क्याम्पस, धरानमा लामो समयदेखि अध्यापन गरिरहनु हुने एक जना चिन्तादेवी पौडेल पनि हो, उहाँले द्रोण सरको बारेमा 'सामान्य व्यक्तिको जस्तो बोलिचाली र भेषभूषा भएका गुरु द्रोण पौडेल आदर्शवान व्यक्तित्वका धनी लाग्थ्यो । छेउमा आएर बोल्दा अभिभावकजस्तो पनि र साथीजस्तो पनि लाग्थ्यो ।

उहाँले कक्षा लिंदा न त डर हुन्थ्यो, न त सङ्कोच । फुर्सदको बेलामा वा लिजर घण्टीमा विद्यार्थीसँग गफगाफ गर्ने उहाँको बानी थियो । 'म धेरै जान्ने हुँ, ठूलो हुँ,' गुरु हुँ भन्ने भाव उहाँमा थिएन । मैले मानेका धेरै गुरुहरूमध्ये उच्चस्तरमा रहनुभएका आदर्शवान गुरु आज यो संसारबाट बिदा हुनु भएछ । एकपटक भेट्ने आशा पनि पूरा भएन । भावपूर्ण श्रद्धाञ्जलि अर्पण गर्दछु भनी उहाँले भावुक बन्दै विचार राख्नुभयो । शायद उहाँको बोली सरको बिछोडको कुराले अबरुद्ध भयो होला ।

त्यो बेला स्नातकोत्तर तह अध्ययन गर्दाका अर्का मेरा प्रिय मित्र गणेश गिरी, जो हाल शिक्षण पेशामा नै हुनुहुन्छ, को बुझाइमा गुरु द्रोण पौडेल शान्त र सहनशील व्यक्ति हुनुहुन्थ्यो । 'जीवन छोटो हुन्छ, तर द्रोण सरको यति छिटो अन्त्य होला भन्ने कल्पना पनि गरेको थिइन' भन्दै उहाँले 'हामीलाई कहिल्यै विद्यार्थीको रूपमा हेर्नु भएन, हामी साथीको रूपमा रह्यौं । सरल जीवनशैली सादा जीवन उच्च विचार भएका द्रोण सरबाट मैले सिकेको पाठ हो' भनेर निकै भावुक हुँदै श्रद्धाका २ थुँगा फूल गुरुको चरणमा चढाउनुभएको मेरा टिल्पिलाएका आँखाले देखेको घटना हो ।

द्रोण पौडेल सरका सहकर्मी र गाउँलेहरूबाट, आफन्तहरूबाट पनि मैले धेरै कुराहरू र प्रशंसाहरू सुनेको छु । म आफू पनि द्रोण सरको विद्यार्थी/चेली हुँ । मेची क्याम्पसमा स्नातकोत्तर तह (एम.ए. नेपाली)मा अध्ययन गर्दैगर्दा नेपाली विभागका प्रमुख हुनुहुन्थ्यो गुरु । त्यसबेला हामी नियमित कक्षा लिने थोरै सङ्ख्यामा विद्यार्थी थियौं । थोरै सङ्ख्यामा भएको कारण र उमेर अनि पढाइले केही परिपक्व भएका कारण सबै सरहरू, मेमहरूसँग हामी निक्कै नजिक हुन्थ्यौं । धेरै शीर्षकहरूमा लामो छलफल र भलाकुसारी हुन्थ्यो हरेक कक्षामा । अरु सरहरूसँग भने अभिभावकसँग जस्तो व्यबहार हुन्थ्यो ।

हरेक कक्षा गुरु द्रोणको गफगाफबाट अनौपचारिक जस्तै रूपमा शुरु हुन्थ्यो । प्रायः सधैंजसो द्रोण सरले आफूले भोगेका, सुनेका, देखेका कुराहरूका प्रसङ्ग जोडेर पढाउनु हुन्थ्यो । जसको कारण मलाई घरमा बुबाले सानोमा पहाडका सुख-दुःखहरूलाई कथा बनाएर सुनाउनु भएजस्तै लाग्थ्यो ।

मलाई घरको वातावरण जस्तै द्रोण सरको कक्षाको वातावरण लाग्थ्यो । त्यहींदेखि मलाई द्रोण सर बुबाजस्तै लाग्न थाल्यो । म बुबालाई जस्तै हाँसी-हाँसी सबै सोध्थें, गुरुले सहजता साथ लिनु हुन्थ्यो । कुनै दिन पढ्ने मूड नहुँदा

विषयवस्तुसँग सम्बन्धित, साहित्यकारसँग सम्बन्धित कुराहरू गरेर घण्टी बित्थ्यो । द्रोण सरको कक्षामा डर, धक कहिल्यै लागेन । विद्यार्थीलाई साथीजस्तो व्यवहार गर्ने साथै हरेक पढ्नुपर्ने कुरालाई सामान्यीकरण गरेर व्यावहारिक जीवन जगतसँग ल्याएर जोड्ने द्रोण सर साँच्चै आदरणीय हुनुहुन्थ्यो । उहाँले मलाई छोरी र मेरो श्रीमान् बिक्रमजीलाई ज्वाइँ र छोरी सफलतालाई नातिनी भन्नु हुन्थ्यो । पछिल्लो समयमा सुगर (डाइबिटिज) भएर जचाउन र बजार जाँदा-आउँदा हाम्रो घर/डेरामा पस्नु हुन्थ्यो । पुर्ख्यौली घर प्रवासी भएर होला, मेरा जीवनसाथी बिक्रमजीसँग भेट्नासाथ अँगालो मारेर छाती टँसाउनु हुन्थ्यो । यस्तो लाग्थ्यो कि, पुराना मित्रहरू लामो समयपछि भेट भएका हुन् । हरेक पटकको भेटमा यस्तै देख्थें म । ज्वाइँ सम्बोधन गरी विद्यार्थीलाई साथी जस्तो अँगालो हाल्ने यस्ता प्रिय अभिभावक र गुरुलाई अब हामी कहिल्यै भेट्न पाउने छैनौं ।

गुरु बिरामी पर्नु भएपछि घरमा म भेट्न गएकी थिएँ । मलाई देख्नासाथ खोई मेरा ज्वाइँ ? किन एक्लै आएकी ? भन्नुभयो । धेरैबेर बिरामीकै कुराकानी भयो । भोलिपल्टै हामी दुबै जना गयौं भेट्न । बिक्रमजीलाई समातेर धेरैबेर कुराकानी गर्नुभयो । त्यसपछि म प्रायः सधैं जस्तो पस्थें सरलाई भेट्न । अब त्यो मेरो स्कूल जाँदा हिंड्ने बाटोमा मेरो खबर सोध्ने कोही छैन । अब भेट्ने त याद र सम्झना मात्र रहेछ । शायद योगिता बहिनी र पंकज ज्वाइँलाई पनि त्यसै गर्नुहुन्थ्यो सरले । मलाई हरेक पटक भेट्दा सबैभन्दा पहिला स्वास्थ्य स्थिति सोध्नु हुन्थ्यो । मलाई अलि सन्चो नभएको दिन वा चिन्ता परेको दिन मैले नमस्कार, दर्शन भन्न नपाउँदै आज सन्चो छैन ? भन्नु हुन्थ्यो द्रोण सरले । म नढाँटिकन भन्छु- मलाई जन्म दिने आमा-बुबाले मात्र मेरो अनुहारमा भाव देख्नु हुन्छ तर त्यही भाव गुरुले देख्नु हुन्थ्यो । अब मेरा बगिरहेका श्रद्धाका दुई थोपा आँसु चढाउँदै भावना भरिएका शब्दगुच्छाले भावपूर्ण श्रद्धाञ्जलि अर्पण गर्दछु । अस्तु ः

*- भद्रपुर- १०, झापा*

*(लेखक साहित्यकार हुनुहुन्छ)*



लक्ष्मण अधिकारी

# उदालगुढी साहित्य सभाको पत्रिका सम्पादकका रूपमा द्रोणकुमार उपाध्याय

सन् १९७८ मा द्रोणकुमार उपाध्याय 'उदालगुडी साहित्य सभा'को पत्रिकाको तेस्रो प्रकाशनका सम्पादक थिए । त्यसघरि उनी असममैं थिए अनि पछि कर्मसूत्रले नेपालतिर गई स्थायी भएको कुरा भनिरहनु परेन । उनको शिक्षा-दीक्षा पनि असम-भारततिरकै हो । उनले केही काल उदालगुडी उच्च माध्यमिक विद्यालयमा अध्यापन पनि गरेका हुन् ।

उनी उसबेलादेखि एक जना प्रखर साहित्यिक व्यक्ति थिए अनि असमिया भाषामा उत्तिकै लेख्थे । अहिले मेरो हातमा उनकै सम्पादन भएको उक्त पत्रिकामा असमिया भाषामा प्रकाशित 'नेपाली साहित्यर महान कवि भानुभक्त आचार्य' नामक लेख छ, जो नेपालीमा 'नेपाली साहित्यका महान् कवि भानुभक्त आचार्य' लेखिनुपर्छ । यो लेखमा द्रोणकुमार उपाध्यायको असमिया भाषा ज्ञान पनि मनग्गे रहेको जानकारी पाइन्छ । म यहाँ उनले लेखेका असमिया लेखलाई समग्रमा अध्ययन गर्न गइरहेको छु । उनले लेखेका असमिया शब्दहरूको प्रयोग म यहाँ गर्दिन । कारण, ती शब्दहरू टंकण र बुझ्न दुबै पक्षमा असुविधाको कारण बन्न सक्छन् । किनभने यो ग्रन्थ असम बाहिर छापिने र पढिने ग्रन्थ हो । त्यसैले म उनको त्यो लेखको विश्लेषणका माध्यमबाट पाठकलाई केही कुरा बुझाउन चाहन्छु । यहाँ नभनी नहुने प्रसंग के हो भने, उनको यो असमिया भाषामा रहेको लेखमा भानुभक्तको जीवनी र कृतिहरूको चर्चा भएको हो । त्यसो हुँदा यतातिरका नेपाली पाठकका लागि मुखैमा रहेका कुराहरू नै त्यसमा समावेश छन् । तर, अन्य भाषाभाषीमा आएको यो लेखले भानुभक्तलाई अन्य भाषी समुदायसँग चिनाउने काम गरेको छ । यसर्थ यो लेखका माध्यमबाट भानुभक्तको गरिमा व्यापक बनाउने काम द्रोणकुमार उपाध्यायले गरेका छन् । हो पनि, उदालगुडीका असमियाभाषीले यो लेखका माध्यमबाट भानुभक्तलाई चिने, जाने र बुझे ।

उनको यो लेख यसरी अघि बढ्छ–

“हिमालयको पाददेशमा रहेको पर्वते ठाउँमा घामको तीब्र गर्मीको दिन रुखमा बनाइएको एउटा चाङमा बसेर थकाइ मारिरहेको बेला घाँसको भारी लिएर आउने घाँसीसँग भानुभक्तको भेट हुन्छ । घाँसको भारी यसरी ल्याएको देखेर भानुभक्तका मनमा प्रश्न उदय हुन्छन् । त्यही सम्वाद जो भानुभक्त र घाँसीका बीचमा भएको थियो । घाँसीका कुरा सुनेर भानुभक्त झस्किन्छन् । उनको मुखबाट अनायास निस्कन्छ,

*भर्जन्म घाँसतिर मन् दिई धन कमायो ।*
*नाम केही रहोस् पछि भनेर कुवा खनायो ॥*
.....................................................
*धिक्कार हो मकन बाँच्नु नराखी कीर्ति ॥*

हो, यही साधारण घाँसी एउटाले भानुभक्तलाई झक्झक्यायो, निद्राबाट ब्यूँझायो । भानुभक्त केही गरौं भन्ने अठोटमा कसिए र रामायण जस्तो कालजयी रचना नेपाली समाजलाई उपहार दिए अनि उनले चाहिं अमरत्व प्राप्त गरेर नेपाली भाषाका महान् पथप्रदर्शक बने । आर्य सभ्यतामा रमेको मध्य नेपालको रम्घा गाउँमा विक्रमाब्द १८१४, २९ असारमा भानुभक्तको जन्म भयो । उनका पिताको नाम धनञ्जय हो भने हजुरबाको नाम श्रीकृष्ण आचार्य हो । भानुभक्तले हजुरबा श्रीकृष्ण आचार्यको सान्निध्यमा संस्कृत व्याकरण, अमरकोश र रुद्रस्तोत्रादि अध्ययन गरेका थिए । उनका पिता धनञ्जय पाल्पामा सरकारी कर्मचारी थिए । पिताको मृत्युपछि योग्यता रहेकाले पिताकै काममा उनले नियुक्ति पाए । तर, भानुभक्तले हिसाब-पत्र मिलाउन नसकेर पछि थुनुवामा परे । थुनुवा परेका भानुभक्तको बाह्य जगतसँग सम्बन्ध टुटेपछि उनी अन्तर्मुखी भए । उनको अथाह ज्ञानसागर उर्लिएर अध्यात्म रामायणको नेपाली उल्थामा प्रवाहित हुन थाल्यो । काराबासका अँध्यारा कोठामा उनी रामायणका श्लोकहरू गुन्गुनाउँदै नेपाली भाषामा लेख्न लागे । ‘रामायण काँचो सुन हो, यसबाट जस्तोसुकै गहना पनि बनाउन सकिन्छ भन्ने’ भारतीय समालोचकहरूको भनाइ रहेको छ । सोही अनुरूप भानुभक्तले पनि बाल्मीकि रामायणको सट्टा अध्यात्म रामायण नै अनुवादका लागि छाने । त्यसको खास कारण अध्यात्म रामायणमा रामलाई परमेश्वर मान्नुका साथै

अध्यात्म विषयको चर्चा निहित छ ।

महापुरुष श्रीमन्त शंकरदेवले जसरी भारत-असममा भक्तिरसका साथसाथै साहित्यको पनि घडेरी निर्माण गरे, त्यसैगरी भानुभक्तले पनि नेपाली समाजमा भक्ति रसास्वादनसँगै नेपाली भाषा-साहित्यको घडेरी दर्बिलो पारेका हुन् । हुन त नेपाली साहित्यमा भानुभक्त अघि पनि बीस पच्चीस जना कविहरू छन् । तीन-चार सय वर्षको लामो इतिहास पनि छ । तर पनि भानुभक्तलाई समालोचकहरूले 'आदिकवि', 'अप्रमादि कवि', 'आदि प्रतिनिधि कवि' नामले विभूषित गरे । बाल्मीकिलाई जुन अर्थमा आदिकवि भनिन्छ, सो अर्थमा भानुभक्तलाई आदिकवि नभनेर आन्तरिक अथवा हार्दिक अर्थमा मात्र आदि भन्नु उचित हो । नभए उनी पूर्वका बीस जना कवि भएको र एउटा दीर्घ इतिहास छोडेर त्यसो भन्न कहाँ मिल्छ ?"

समालोचक द्रोणकुमार उपाध्यायले रामायणसहित भानुभक्तले रचेका जम्मै रचना र ती रचनाहरूसँग सम्पृक्त घटनाहरूको वर्णन पनि गरेका छन् । जस्तै मित्र तारापतिका घरमा बास बस्ताको तीक्त अनुभव र एकै रातमा त्यहीं ३३ वटा श्लोकको बधू शिक्षा भानुभक्तले लेखेको प्रसंगलाई द्रोणकुमारले बधू शिक्षा नमानेर 'स्त्री शिक्षा' हो भन्ने शब्दमा जोड दिएको पाइन्छ । रामायण अनुवाद गर्ने भानुभक्तले सहज-सरल घर-गाउँमा बोलिने भाषाको प्रयोग गरेर जनप्रिय भएका हुन् ।

भानुभक्त वृद्ध अवस्थामा दर्शन र धर्मतिर ढल्किएका थिए भन्दै उपाध्याय के लेख्नुहुन्छ भने, उनको 'भक्तमाला' पढेर मोहित हुँदै एक जना संस्कृतज्ञ मित्रले त्यसलाई शिखरिणी छन्दमा संस्कृतमा तत्काल उल्था गरेका थिए । त्यो उल्था नेपालीका दुई श्लोक उदाहरणस्वरूप प्रस्तुत गरेका छन्, त्यो असमिया भाषाको लेखमा ।

मूल : "सीताराम भज्न्या छु भनीकन प्रतिज्ञा अघि गरी ।
गयाको होस् आइस् कति दिन भजिस् भन अघि सरी ।।
यसो भन्नन् स्वामित् मकन यमराज त्यस बखतमा
कसो भन्नू मैले भुलिकन रह्याँ यस् बखतमा ।।"

अनुवाद : "प्रतिज्ञा कृता श्रीरमणसेवासु च पूरा ।
वदाप्यग्रे प्राप्तः कति च दिवसाश्वत् सफलिता ।।
वदाप्यग्रे याहि त्वमिति वचने भास्वरभूवः ।
प्रभो ! किं भाषिष्ये तव चरणसेवासु विमुखः ।।"

यो संस्कृत अनुवाद अप्राप्य रहेको प्रसंग पनि समालोचकले उल्लेख गर्न भुलेका छैनन् ।

यसैगरी, समालोचक द्रोणकुमारले यो समालोचनामा भानुभक्तको बालाजु दर्शनपछि रचिएको कविता, काठमाडौं देखेपछि रचेको कविता र मृत्युशैयामा पुत्र रामनाथलाई लेख्न लाएको रामगीताका प्रसंगहरू पनि समावेश गर्न भुलेका छैनन् । भानुभक्तले आफ्ना जीवनका विभिन्न घटनाहरूलाई पनि श्लोकमा उतारेका छन् । जस्तैः अदालत धाएर आजित् भएका भानुले 'भोलि भोलि नभनी बक्सियोस् आज झोली' भन्ने कविता मार्फत आफ्नो गुनासो पोखेको प्रसंग पनि यो समालोचनामा समावेश गरेका छन् ।

समग्रमा समालोचक द्रोणकुमार उपाध्यायले सो लेखको माध्यमबाट असमियाभाषी जनतामा भानुभक्तको सम्पूर्ण परिचय प्रस्तुत गरेका छन् । हुन त भानुभक्तको समग्र परिचय अति विशद् छ, र पनि प्राथमिक स्तरमा यो समालोचना जिज्ञासुका निम्ति पक्कै सोपान बन्न सकेको अनुभव हुन्छ ।

तदानीन्तन उदालगुडी साहित्य सभाको पत्रिका सम्पादन समितिमा द्रोणकुमार उपाध्याय - सम्पादक, मानिक शर्मा - सदस्य, यतीन बायन - सदस्य, क्षीतेश्वर शर्मा - सदस्य, दलेश्वर बोडो - सदस्य थिए भने पत्रिका प्रकाशकका रूपमा थिए- मानिक शर्मा । पार्थिव शरीरले द्रोणकुमार उपाध्याय नरहे पनि कृतिका माझमा उनी उदालगुडीमा जीवित छन् । अस्तु ।

*- उदालगुडी (असम, भारत)*

*(लेखक असमका प्रसिद्ध साहित्यकार हुनुहुन्छ)*



लीलाप्रसाद अधिकारी

# समालोचक द्रोणकुमार उपाध्याय पौडेल : शब्दचित्र

तीन दशकभन्दा अधिक समय मेची बहुमुखी क्याम्पस, भद्रपुरमा नेपाली विषयमा प्राध्यापनरत रही सेवानिवृत्त भएको केही वर्षमा नै यस भौतिक संसारबाट बिदा लिइसकेका दुई दशकभन्दा लामो सहयात्राका सहकर्मी अग्रज मित्र डा० द्रोणकुमार उपाध्यायको वार्षिकीको अवसरमा परिवारजन एवम् डा० द्रोणकुमार उपाध्याय पौडेल स्मृतिग्रन्थ प्रकाशन समितिको सक्रियतामा उनको योगदानको जीवन्तता र मूल्यांकन सहित श्रद्धाञ्जलिस्वरूप स्मृति अंक निकाल्ने सद्कार्यप्रति सम्मान गर्दै आफ्नै विभागका प्रमुख एवम् अग्रज सहकर्मीका बारेमा संक्षिप्त शब्दचित्र प्रस्तुत गर्ने जमर्को गरेको छु ।

डा.द्रोणकुमार उपाध्यायको जन्म सन् १९४९ जुन १९ तारिख (२००६ असार ५) मा पिता टीकाराम शास्त्री र माता भेजमायादेवी पौडेलको कोखबाट बटियामारी, शोणितपुर, असममा भएको थियो । शोणितपुरकै स्थानीय विद्यालयबाट प्रारंभिक शिक्षा शुरु गरेका उनले असमकै कलेजबाट स्नातक तहसम्मको शिक्षा प्राप्त गरी नेपाली विषयमा स्नातकोत्तर तह त्रिभुवन विश्वविद्यालय कीर्तिपुर (नेपाल)बाट हासिल गरेका थिए ।

उच्चशिक्षा प्राप्त गरेपश्चात् आफ्नो जन्मथलो असम नगई नेपालमा नै बसेर जीविकोपार्जन गर्ने अठोट गरी उनले मेची बहुमुखी क्याम्पस, भद्रपुरलाई अध्ययन-अध्यापनको कर्मथलो बनाएका थिए । चालीसको दशकबाटै झापा चन्द्रगढीको मैत्री टोलमा स्थायी रूपमा बसोबास गर्दै आएका उनी नेपाली भाषा-साहित्य एवम् लोकसाहित्यको गहन अध्ययन अनुसन्धान र संरक्षणमा अत्यन्त अभिरुचि राख्ने व्यक्तित्वका रूपमा परिचित थिए । बहु भाषाविद् एवम् संस्कृत साहित्यका समेत गम्भीर अध्येता पौडेलले मेची बहुमुखी क्याम्पसमा शैक्षणिक तथा अनुसन्धानात्मक कार्यसँगै नेपाली शिक्षण विभागको विभागीय प्रमुखको कार्यभार पनि कुशलतापूर्वक पूरा गरेका थिए ।

स्थानीय भाषा-साहित्य संस्कृति तथा लोकसाहित्यको खोज अन्वेषणकै सिलसिलामा उनले राजवंशी भाषा साहित्यको खोज अनुसन्धान पनि गरेका थिए । यसरी भाषा, साहित्य र लोकसाहित्य एवम् संस्कृतिको विषयमा सोधखोज गर्ने क्रममा उनले उत्तरबङ्ग विश्वविद्यालय (पश्चिम बंगाल, भारत)बाट लोकसाहित्य विषयमा विद्यावारिधि उपाधि हासिल गरेका थिए । समालोचना, लोकसाहित्य, भाषा, व्याकरण आदि क्षेत्रमा विद्यार्थी जीवनदेखि नै सक्रिय रूपमा कलम चलाउँदै आएका उनका सहलेखन र एकल लेखनमा प्रकाशित कृतिहरू हुन्–

१) नवमी (सहलेखन ) लोककथा संग्रह (सन् १९७७)
२) राजवंशी परिचय : जाति, भाषा र साहित्य (सन् १९९४)
३) आदर्श नेपाली व्याकरण (सहलेखन, सन् २००५)
४) भाषिक चिन्तन, समालोचना संग्रह (वि.स.२०६५)
५) केही साधक : केही साधना, समालोचना संग्रह (वि.स.२०६५)
६) लोक वार्ता : लोककै चर्चा (वि.स.२०६५)

यस बाहेक उनका राष्ट्रिय अन्तर्राष्ट्रिय पत्रपत्रिकाहरूमा नेपाली, हिन्दी, अंग्रेजी, असमिया भाषामा विश्लेषणात्मक अनुसन्धानात्मक लेखहरू प्रशस्तै छापिएका छन् । नेपाली एवम् अन्य भाषाका पत्र पत्रिकाको सम्पादन र प्रकाशन गरेका उनले राष्ट्रिय तथा अन्तर्राष्ट्रिय सेमिनार र गोष्ठीहरूमा कार्यपत्र पनि प्रस्तुत गरेका थिए । विभिन्न सामाजिक र साहित्यिक संघ-संस्थाहरूमा पनि पौडेलको सक्रियता अनुकरणीय रहेको थियो । 'कडा मेहनत र परिश्रमले जीवनलाई सबल र सफल बनाउन सकिन्छ' भन्ने दृष्टिकोण राख्ने उनी सादा जीवन र उच्च विचारका पक्षमा उभिँदै अरुलाई पनि उभिन अभिप्रेरित गर्दथे । भाषा, साहित्य, लोकसाहित्य, व्याकरण, समालोचना आदि विधामा सक्रिय कलम चलाउने पौडेल अनुसन्धानमा पनि उत्तिकै क्रियाशील रहन्थे । अध्ययन-अध्यापन र सम्पर्कका विभिन्न विषय तथा व्यक्तित्व सम्बद्ध अनुभूति समेटिएको 'केही साधक : केही साधना' (२०६५) समालोचना संग्रह कृतिका विषयमा संक्षिप्त चर्चा नै यसको सन्दर्भ रहेको छ ।

समालोचक द्रोणकुमार उपाध्यायका समालोचनात्मक रचनाहरूको संगालोका रूपमा 'केही साधक : केही साधना' देखा पर्दछ । यसमा विविध विषय र समयमा लेखिएका १६ वटा समालोचनाहरू समेटिएका छन् । त्यसमा महाकाव्य, निबन्ध, नाटक, आख्यान, कविता, व्यक्तित्व चर्चा आदिलाई यसभित्रका समालोचनाले

विषय बनाएको पाइन्छ । कविता काव्यलाई विषय बनाएर लेखिएका यसभित्रका समालोचनाहरूमा 'महाकवि स्वयम् महाकाव्य बनेको 'देवकोटा' महाकाव्य' मा असम निवासी छविलाल खतिवडाद्वारा लिखित देवकोटा महाकाव्यका बारेमा चर्चा गरिएको छ ।

यस्तै, 'कवि रोहिणीविलास र उनको काव्ययात्रा'मा कवि रोहिणीविलासको काव्य यात्रालाई संक्षिप्त रूपमा चर्चा गरेका छन् । 'चर्चा लेखनाथको प्रसंग शब्दशिल्पको, आलेखमा कवि शिरोमणि लेखनाथ पौड्यालको काव्यशिल्पको पहिचान गरेका छन् । यसैगरी, 'रिमालको आमाको सपनाभित्रको प्रेम र त्यसमा परेको जुनेली टक' समालोचनामा कवि रिमालको काव्यशैली र कलात्मक विचारलाई समेटेका छन् । निबन्धसँग सम्बद्ध आलेखमा असमतिरका सर्जक ' चिनारी चन्द्र शर्माको : सन्दर्भ छिमेकीको' शीर्षकमा निबन्ध संग्रहको संक्षिप्त चर्चा गरेका छन् ।

आख्यानको चर्चा गरिएका आलेखहरू 'घामका पाइलाहरूको वातावरण' र 'मैयाँसाहेब' का 'भिक्षु'लाई खोजी गर्दा' हुन् । उपन्यासकार ध्रुवचन्द्र गौतमको 'घामका पाइलाहरू' उपन्यासमा समेटिएको वातावरणलाई पहिचान गराउने प्रयास यसमा गरिएको छ । अर्को आख्यानपरक आलेखमा कथाकार भवानी भिक्षुको कथाशिल्पको खोजी मैयाँसाहेब कथाका आधारमा गरिएको छ । नाटक र नाट्यकारितासँग सम्बद्ध समालोचनामा 'तिवारीको 'काशीवास' वस्तु विवेचन' 'ओं नमः शिवाय' वासुशशीको नौलो नाटक' र 'समीक्षात्मक दृष्टिमा वासु शशीको नाटक : 'उपहार' रहेका छन् । यी आलेखमा नाटकको समीक्षात्मक टिप्पणीसँगै नाट्यकारिताको पहिचान गर्ने जमर्को समालोचकले गरेका छन् । समालोचनामा ' तारानाथ शर्मा : समालोचकका रूपमा' रहेको छ । यसमा शर्माको आलोचना गर्ने प्रवृत्तिको पहिचान गरिएको छ ।

व्यक्ति-व्यक्तित्व बारे चर्चा गरिएका आलेखहरूमा 'भारतेली साहित्यका अमर साधक शिवकुमार राई', 'प्रेरणापुरुष पण्डित गंगाधर पौडेल', 'एक असल व्यक्तित्व : बल्लभमणि', 'सन्त ज्ञानदिल दास : मेचीका प्रतिभा' र 'दायित्व'मा पारिजातको चर्चा रहेका छन् । यी आलेखमा समालोचक पौडेलले उल्लेखित सर्जकहरूको सिर्जनात्मक सामर्थ्य र व्यक्तित्वका विषयमा सूत्रात्मक टिप्पणी प्रस्तुत गरेका छन् ।

यी उल्लेखित कविता काव्य, निबन्ध, आख्यान, नाटक, समालोचना, व्यक्ति-व्यक्तित्व आदि विषयसँग सम्बद्ध आलेखहरूले समीक्षक पौडेलको समीक्षाकर्मको

सिकारूपनको चिनारी दिएका छन् भने कतिपयले निजको समीक्षकीय प्रौढता र परिपक्वताको परिचय पनि दिएका छन् । पूर्वीय र पाश्चात्य समालोचना सिद्धान्तका मर्मलाई गहिरो अध्ययन गरेका समालोचक पौडेल त्यही पद्धतिलाई पछ्याएर कृतिगत गुण, दोष पहिल्याउनुभन्दा मौलिक चिन्तनका आधारमा कृतिको समीक्षा गर्न बढी रुचि राख्ने गर्दथे । सर्जकका रचनाहरूको गहन अध्ययन गरी प्रभावपरक शैलीमा कृतिको गुण-दोष पहिल्याई मूल्य पहिचान गर्नु उनको समालोचकीय धर्म हो ।

सर्जकका रचनात्मक कर्मको कमजोरी पत्ता लगाई कृतिको सबल र दुर्बल पक्षको खोज गरी निष्कर्ष दिने निर्णयात्मक समालोचकका रूपमा पनि उनी चिनिन्छन् । यसभित्र सम्पादित रचनाले बहुविधि र पद्धतिलाई अंगाल्दै वस्तुवादी, शैलीविज्ञान, कृतिपरक र प्रभावपरक शैलीलाई महत्व दिने समालोचकका रूपमा उनी चिनिन्छन् । पौडेलका समालोचनामा खारिएको भाषाशैली, प्रस्तुतिगत गाम्भीर्य, विश्लेषणात्मक निक्र्यौल, कृतिकारका कमजोरी र तिनका विशिष्टतालाई पहिचान गर्न सक्ने समीक्षात्मक क्षमता पाइन्छ । बहुभाषाविद् बौद्धिक एवम् प्राज्ञिक व्यक्तित्व डा. द्रोणकुमार उपाध्याय पौडेलले नेपाली भाषा, साहित्य एवम् लोकसाहित्यको अभिवृद्धिमा पुऱ्याएको योगदानप्रति उच्च सम्मान साथ भावपूर्ण श्रद्धासुमन अर्पण गर्दछु ।

*- मेची बहुमुखी क्याम्पस, भद्रपुर (झापा)*

*(लेखक समालोचक हुनुहुन्छ)*



लीलाप्रसाद सापकोटा

# सम्झनामा द्रोण सर

द्रोण सरसँग कहिले परिचय भयो तिथि-मितिको सम्झना छैन । तर, जुन दिन उहासँग परिचय भयो, त्यही दिनदेखि उहासँग पहिल्यै परिचय भएजस्तो, लामो समयदेखिको साथीजस्तो, पुरानो मित्रजस्तो व्यवहार भएको सम्झना भने सधैं रहनेछ । म उहाँलाई मेरो परम मित्र, अनन्य मित्र, घनिष्ट मित्र भनेर सम्बोधन गर्न नसकुँला; किनभने परम, अनन्य वा घनिष्ट शब्दको साधारण नेपाली बोलचालको भाषामा आन्द्रा जोडिएको वा आन्द्रा गाँसिएको भन्ने गरिन्छ । आन्द्रा जोडिएको वा गाँसिएको मित्रता चुँडिंदा ठूलो पीडा हुँदोरहेछ । कष्टसाध्य पीडा कुनै घटना वा परिस्थितिले आन्द्रा चुडिए त्यस्तो पीडा भोग्नु नपर्ने द्रोण सरसँगको मेरो मित्रता सधैं सम्झनामा रहिरहने र सधैं एकनास रहने मित्रता हो भन्नु नै मेरो इमान्दारी हुनेछ ।

मैले मेरा छोरीहरू अञ्जना र अर्चनालाई पढाउन काठमाडौंमा द्रोण सरले लिनुभएको डिल्लीबजारको एउटा घरको चार कोठा भएको फ्ल्याट साझेदारी गरेको थियौं । चार कोठामध्ये एउटा तीनकुने कोठा सफा भान्सा कोठाको रूपमा प्रयोग गरी तीन कोठामध्ये एउटामा द्रोण सर, अर्कोमा नरेन्द्र खतिवडा सपरिवार र अर्कोमा मेरा छोरीहरू झण्डै दुई वर्ष बस्दा द्रोण सरले मेरा छोरीहरूको संरक्षकको दायित्व निर्वाह गर्नुभएको गुणलाई म सधैं सम्झिरहनेछु । त्यसबेला शायद उहाँ पद्मकन्या क्याम्पसमा प्राध्यापन गर्नु हुन्थ्यो ।

२०५१ सालको संसदीय निर्वाचनमा झापा जिल्लाको निर्वाचन पर्यवेक्षण संयोजकमा साथीहरूले मलाई आग्रह गर्नुभयो । त्यतिबेला द्रोण सरले पर्यवेक्षणका निमित्त अनौपचारिक रूपमा हाम्रो टोलीसाथै विभिन्न निर्वाचन केन्द्रमा जाने मन गर्नुभयो । हामी पूर्वाञ्चल ग्रामीण विकास बैंकको गाडीमा धेरै वटा निर्वाचन केन्द्र पुग्यौं । त्यसबेला निर्वाचन पर्यवेक्षणको हाम्रो टोलीमा अस्ट्रेलियाका

पश्चिम प्रदेश सभामुख ग्रिफिथ, भारतका एक जना बामपन्थी नेता (नाम बिर्सें) र बंगलादेशकी एक जना कानून व्यवसायी (उहाँको पनि नाम बिर्सें) साथै हुनुहुन्थ्यो । द्रोण सरले बंगलादेशकी पर्यवेक्षकसँग बंगाली भाषामा कुराकानी गरेको मलाई अझै सम्झना छ । उहाँ संस्कृत, नेपाली, अंग्रेजी, हिन्दी, असमी र बंगाली भाषामा बराबर दखल राख्नु हुन्थ्यो !

२०४८ सालमा धुलाबारीमा जनस्तरमा क्याम्पस खोलियो । मानविकी प्रमाणपत्र तहको मात्र पढाइ हुन्थ्यो । संस्थापक क्याम्पस-प्रमुख दीनानाथ शर्माको असमय निधन भएपछि सञ्चालक समितिले मलाई क्याम्पस चिफमा नियुक्त गर्‍यो । क्याम्पसमा शिक्षामा प्रमाणपत्र तह थपिए पनि चित्त बुझेन । मानविकी स्नातक तहका निमित्त त्रिभुवन विश्वविद्यालयमा निवेदन गर्दा फिजिबिलिटी स्टडी गर्न प्रा.डा. त्रिरत्न मानन्धरको नेतृत्वमा एउटा टोली आयो । टोलीले के रिपोर्ट बुझ्यो कुन्नि, त्रि.वि.ले स्नातक तहको अध्यापन अनुमति दिएन । बरू मातृका सिटौला सरको दौडधुपले सुरुंगा क्याम्पसले त्यो अनुमति पायो ।

त्यसैबेला दमक क्याम्पस-प्रमुख चित्रबहादुर बस्नेतसँग बसमा भेट भयो । उहाँको हातमा एकमुठी कागज थियो । पूर्वाञ्चल विश्वविद्यालयको नियमावलीको मस्यौदा रहेछ, चित्रबहादुर सर मस्यौदा कमिटीको सदस्य हुनु हुँदोरहेछ । मस्यौदामा सम्बन्धन दिइएका क्याम्पसलाई क्रमशः आंगिक क्याम्पस बनाउने कुरा रहेछ । त्यसबेलासम्म पूर्वाञ्चल विश्वविद्यालयले बिराटनगरमा बी.बी.ए. को एउटा आंगिक क्याम्पस मात्र चलाएको थियो । धुलाबारी क्याम्पसलाई पूर्वाञ्चल विश्वविद्यालयको आंगिक क्याम्पस बनाउन सकिन्छ भन्ने आँट बोकेर बिराटनगर जाँदा रजिष्ट्रार डा. भेषप्रसाद धमला भेटिनु भयो । उहाँ र मैले २०२५ सालमा बिराटनगरमा सँगै बी.ए. परीक्षा दिएका हौं । उहाँले धुलाबारी क्याम्पसमा बी.ए. अध्यापन गराउन अनुमति दिने व्यवस्था मिलाउनु भयो ।

पूर्वाञ्चल विश्वविद्यालयको बी.ए. को अन्तिम तेस्रो वर्ष एउटै विषयका पाँच पेपर पढ्नुपर्ने भारततिरको बी.ए.(अनर्स) को जस्तो पाठ्यक्रम रहेछ । त्यसपछि नेपाली, अंग्रेजी, इतिहास, राजनीति शास्त्र र अर्थशास्त्र अध्यापन गराउने अनुमति पाएपछि क्याम्पसलाई थप प्राध्यापकहरूको आवश्यकता पर्न गयो । पार्टटाइम प्राध्यापन गर्ने शर्तमा नेपाली विषयका ताराराज पौडेल, गोपाल आचार्य सरहरू क्याम्पस शुरु हुँदादेखि हुनुहुन्थ्यो । मैले त्यतिबेला पीएच.डी. गरिसक्नु भएका द्रोण सर सम्झेर उहाँले मान्नु हुन्न कि भन्ने लाग्दै अनुरोध गरें । तर, उहाँले सहर्ष

स्वीकार गर्नुभयो । उहाँको सरल व्यवहारलाई सधैं सम्झिरहन्छु ।

उहाँले पीएच.डी.को तयारीका सन्दर्भमा मलाई सवाई छन्दमा लेखिएका पुस्तकहरू माग्नुभएको थियो । गुरुजी मंगलदासले रचना गर्नुभएको 'पशु पुकार' सवाई छन्दमा थियो । तर, त्यो पुस्तक खोज्दा पाइएन । धेरै अगाडि प्रकाशित भएको त्यो पुस्तकको अर्को संस्करण आएको थिएन । मैले त्यसबेला उहाँलाई सहयोग गर्न सकिन । 'पशु पुकार' उपलब्ध गराउन नसकेकोमा उहाँसँग क्षमा मागे, उहाँले सहज रूपमा भन्नुभयो- 'मैले अरू खोजें, मलाई तपाईंको अरू-अरू सहयोग चाहिन्छ । तपाईंलाई पनि म केही सहयोग गर्न सकुँला ।'

गुरुजी मंगलदासले स्थापना गर्नुभएको इटहरीको मुक्तिधाम मन्दिरको सौन्दर्यीकरण पश्चात् राष्ट्रपतिद्वारा उद्घाटन हुने क्रममा २०७५ सालको चैत्रमा स्मारिका प्रकाशन गर्ने निर्णय भयो । सम्पादकहरूमध्ये म पनि रहेको थिएँ । त्यसबेला गुरुजीको 'पशु पुकार' को नयाँ संस्करण आइसकेको थियो । द्रोण सरलाई शोधग्रन्थका निमित्त उपलब्ध गराउन नसकेको त्यो पुस्तक दिएर मैले पनि स्मारिकाका लागि एउटा लेखका लागि अनुरोध गरें (उहाँले लेख्नुभएको लेख उक्त स्मारिकामा प्रकाशित छ) त्यस लेखमा उहाँले व्यक्त गर्नुभएका केही वाक्य यहाँ उद्धृत गर्न उचित ठान्दछु । त्यही लेख उहाँको साहित्यिक जीवन यात्राको अन्तिम लेख हुनुपर्दछ उहाँले लेख्नुभएको छ ।

'हिन्दू धर्मको मूल ग्रन्थ वेद हो । अर्को अर्थमा यो हिन्दू धर्मको संविधान हो भन्ने कुरा पनि बुझ्नु पर्ने हुन्छ । संविधानसम्मत कुरा मात्र वैध र कानूनसम्मत हुने र बाँकी जम्मै कुरा स्वतः अवैध वा गैरकानूनी भएजस्तै हिन्दू धर्म मान्नेहरूका निमित्त वेदमा निर्देशित बाहेक अरू जम्मै कुरा अवैध, अवैदिक, वेदविरोधी मानिन्छन् । वेदमा यस्ता कुराका निमित्त पाखण्ड (संस्कृत-हिन्दी कोश, वामन शिवराम आप्टे, मोतीराम बनारसी दास पब्लिसर्स प्रा.लि. दिल्ली राज संस्करण पुनः मुद्रण १९९६, पृ. ६००) शब्दको प्रयोग गरिएको छ । प्रसंगतः वेदमा कतै पनि प्राणीलाई खानु त परै जावस्, मार्नु वा अन्य कुनै प्रकारले सताउनु, अन्याय गर्नु समेतलाई गर्नै नहुने, अवाञ्छित, गर्हित र निन्दनीय कार्य बताइएको छ । उदाहरणका निमित्त वेदका यी तीन सूत्रहरूबाट स्पष्ट हुन सकिन्छ–

*यदि नो गां हिंसीः यद्श्वम् यदि वा पुरुषं*
*तं त्वा शीसेन विध्यामोयथानो कसो वीरह्म*

अथर्ववेद १-१६-४

(कसैले हामी गाई आमालाई, घोडा वा मान्छेलाई पनि मार्छ भने हामी त्यसलाई सिसाका गोलीले वेध गर्ने छौं ताकि त्यो वीरहा हामी माझ नरहोस्)

*अधन्या यजमानस्य पशुन् पाहि*

यजुर्वेद १-१

(पालेका पशुहरू मार्नका निमित्त होइनन्, तिनीहरू अवध्य हन्; तिनीहरूलाई माया गर्नु पर्छ)

*राजसूयवाजपेय अभिष्टोम स्वतध्वरः*
*अर्काश्वमेधाबुच्छिष्टे जीव वर्हितवधिन्तम्*

यजुर्वेद ११-७-७

(राजसूय, वाजपेय, अश्वमेध, अग्निष्टोम आदि सबै यज्ञहरू सबै प्राणीको कल्याणका निमित्त हुन् । त्यसैले त्यस्ता कुनै सत्कर्ममा पशु हत्या गर्नु पाप हो)

*एष वामभागो निहितो रत्नध्येयाय*
*मा हिसिष्ट पितरमातरञ्च*

(पूर्ववत्)

(तिम्रा तल र माथिका दन्त पंक्तिहरू चोखो भोजन गर्नका निमित्त बनेका पवित्र दाँतहरू हुन् । आमा-बाबु बन्न समर्थ पशुहरूलाई तिनले चपाएर नखाओ)

'प्रस्तुत काव्यको 'पशु पुकार' नामकरण गरेर सवाईकारले मान्छे जातिले पहिले प्रेमसाथ आफ्नै घरमा छोरा-छोरीलाई माया गरेझैं गरी पशु-पंक्षी खास गरेर भेडा, बाख्रा, राँगा, गाई, भैंसी, सुंगुर, बंगुर, हाँस, कुखुरा, परेवा आदिलाई पाल्ने अनि तिनैलाई पछि मारेर खाने गरेको हुनाले मानिसलाई यसप्रकारको अन्याय तथा अमानवीय कार्य नगर्न सत्परामर्श दिन उक्त सबै प्राणीहरूको प्रतिनिधि पात्रका रूपमा अवोध अजापुत्र खसीलाई अघि सारेर उनीहरूमाथि, उनीहरूका लालाबाला र सन्तान दर सन्तानहरूमाथि मानव समुदायबाट हुने गरेको नृशंस र निर्मम हत्या, हत्यापछि पनि उनको मृतदेहलाई छिया-छिया र टुक्रा-टुक्रा बनाई लुछ्ने, चुँड्ने, काट्ने र पकाएर, उसिनेर, भिरमा उनेर, डढाएर खाने दुर्व्यवहार बारे गुनासो गर्दै मानिसलाई कतै मान्छेले नै बनाएका रामायण, महाभारत, श्रीमद्भगवत् गीता, मनुस्मृति, श्रीमद्भागवत् महापुराण धर्मग्रन्थका उक्तिहरू, कतै मान्छेभित्रै हुने भनिएको मानवीयताको, कतै उसले आफ्नो छोरा-छोरीप्रति देखाएको माया र ममता अनि कर्त्तव्याकर्त्तव्यको स्मरण गराउँदै आफूहरूप्रति हुने गरेको घोर अन्यायको स्मरण गराउँदै मानवद्वारा हुने गरेको यस अमानवीय कृत्य सधैंका

लागि अन्त्य गर्न तर्फ सोच्न र त्यस्तो जघन्य वृत्ति त्याग्न बिन्ती अथवा विनम्र पुकार गरेको अवस्था प्रस्तुत गरेका छन् ।'

'मानिसको आडमा, मानिसकै आश्रयमा बाँच्ने, मान्छेकै हित गरी बस्ने मूक प्राणीलाई भोज्य विषय बनाउनु मानवोचित कर्म अवश्य होइन । यसै महत्वपूर्ण विषयलाई सवाईकारले यस सानो पुस्तिका (श्लोक संख्या ७२, पृष्ठ संख्या २४) भित्र अटाएर समग्र मानव समाजलाई सुललित लोकभाषामा घतलाग्दो र मान्नुपर्ने र सबैलाई मनाउनु पर्ने सन्देश प्रक्षेपण गरेका छन् । लेखकको आशय उत्तम, वरेण्य र प्राणीहरूप्रति स्नेह र मनुष्यहरूप्रति सन्मार्गसूचक रहेको छ । प्रणाम !'

द्रोण सर हामीमाझ नरहनुभएको उहाँले हामीलाई सधैंका निमित्त छोड्नु भएको वर्ष दिन भइसकेछ । उहाँ सशरीर हाम्रा सामु नरहनु भए पनि उहाँको सरल, सहज, सौम्य र शिष्ट स्वरूपको सम्झना हामीमाझ चिरकालसम्म रहिरहनेछ । उहाँ विद्याददातिविनयम्-को उदाहरण हुनुहुन्थ्यो, नम्र व्यवहारका कारण उहाँलाई चिन्नेहरूका प्रिय हुनुहुन्थ्यो, असल प्राध्यापक हुनुहुन्थ्यो । यो गुणगान होइन, यथार्थ हो । उहाँको जीवनको अन्तिम अवस्थामा भेट हुन सकेन । उहाँको जीवनलीलापछि श्रद्धाञ्जलि व्यक्त गर्न पनि पुग्न सकिन । पृथ्वीको वर्षदिन स्वर्गमा एक दिन हुन्छ अरे ! म त्यही एक दिनभित्र उहाँलाई श्रद्धाञ्जलि दिन लागेको छु । उहाँले रोजेको स्वर्ग, वैकुण्ठ, गोलोक, निराकार अथवा त्यसभन्दा परको धाममा उहाँको नित्य वास रहोस् । आत्मा अमर छ भनिन्छ, आफ्नो जीवन यात्रापछि परलोकमा भेट होला नि द्रोण सर ! अहिले मेरो श्रद्धाञ्जलि र श्रद्धासुमन !

*- धुलाबारी (मेचीनगर) झापा*

*(लेखक धुलाबारी क्याम्पसका पूर्व क्याम्पस प्रमुख हुनुहुन्छ)*



लेखनाथ निरौला

# प्रज्ञा एकाडेमीमा द्रोण सर

माघ १२ गते २०७७ साल । साँझ छिप्पिसकेको छ । जाडो निक्कै बढेको छ । पत्रकार भाइ राजबाबु शंकरले म्यासेन्जरमा लेख्नुभएको रहेछ- 'तीन वटा हेरें । द्रोण सरको स्मृतिग्रन्थको कामले तपाईंको अलि पर सर्ने भो ।'

बाफ रे ! सरको स्मृतिग्रन्थ ? मलाई करीब ५/६ महिना पहिले तारा विविधले भन्नुभएको थियो- 'तपाईंले प्रज्ञा एकाडेमीको विषय जोडेर द्रोण सरको बारेमा लेख्नुहोस् है !' मैले 'हुन्छ' त भनें । समय छँदैछ, पछि लेखौंला नि भनेर बसें । पछि गरौंला भन्ने तदर्थको बिर्कोले मानिसको स्मृतिलाई कसरी ढाक्छ ? अहिले आएर बल्ल थाहा पाएँ र झसंग भएँ ।

हतार-हतार तारा विविध सरलाई फोन गरेर 'तारा सर ! स्मृतिग्रन्थको काम के हुँदैछ ? मैले त भुसुक्कै बिर्सिएछु' भनें । प्रेसमा पुग्नै लाग्यो, आगामी शुक्रबारसम्म लेखेर दिन सके हुन्छ' भन्नुभयो । बल्ल मन खुकुलो भयो । तर, के गर्ने ? लेख्ने बानी छैन । शुक्रबार आउन चार-पाँच दिन बाँकी छ, भोलितिर लेख्नुपर्ला भन्ने लाग्यो । भोलि-पर्सि निपर्सि नै गयो । समयको चेत हुन्छ, तर कलम समाउने हतारो हुन्न ! जब शुक्रबारै भयो, तब मात्र द्रोणकुमार पौडेल सरलाई मेरै सम्झनामा स्वागत गर्न बसें ।

विक्रम सम्बत् २०४९ साल मंसीरको कुरा हो । मलाई एउटा समस्याले नराम्रोसंग गाँजेको थियो । समस्या के भने, छोरा-छोरीको पठनपाठन चौपट हुने भयो । नानीहरूलाई वीरेन्द्र मा.वि.मा. भर्ना गरिएको छ । पहिला खर्च धान्न नसकेर सरकारी स्कूलमा हालियो । सरकारी स्कूलमा विद्यार्थीको चाप, शिक्षकको हेल्चेक्र्याइँ, अभिभावकको बेवास्ते प्रवृत्तिले हाम्रो शैक्षिक क्षेत्र नै अस्तव्यस्त थियो ।

आफू नून-भुटुनको जोहोमै व्यस्त । श्रीमती जागिरे । छोरा-छोरीको भाग्य भविष्यमा बज्रपात हुँदै गरेको देख्यो चेतले । उसबखत चन्द्रगढीका निजी तवरमा

सञ्चालित स्कूलहरू उस्तो थिएनन् । एउटा विदुर इंग्लिश स्कूल थियो । भएर पनि के गर्ने ? आफ्ना बच्चा सरकारी स्कूलमा ५/६ कक्षामा पुगेका छन् । विदुर इंग्लिश स्कूलले कक्षा १ मा पनि भर्ना लिंदैन । अंग्रेजी माध्यममा नपढेका हुँदा हाम्रा बच्चा दोस्रो दर्जाका हुने नै भए । यस मुद्दाले उतिबेला मलाई सताउनु सताएको थियो ।

बिर्तामोडमा अंग्रेजी र नेपाली माध्यमबाट पढाउने सगरमाथा स्कूल खुलेको रहेछ । त्यहाँ बच्चा पठाउँ भने यातायात र भौगोलिक दूरीको असुविधाका कारण सकिएन । अब के गर्ने ? समस्या मनमा पालेर मात्रै के हुनु ? विचार गरें... सगरमाथा स्कूल जस्तो नेपाली र अंग्रेजी दुबै माध्यमबाट पठनपाठन गराउन सकिने एउटा स्कूल चन्द्रगढीमै किन नखोल्ने ? मनमा अनायासै लहड चल्यो । आखिर गाउँ-टोलका प्रायः सबै यही समस्याले पिरोलिनु भएको छ । सोचें... अब उपाय निकाल्नै पर्‍यो ।

एकदिन बिहानै रामनाथ बाँस्कोटाजीको घरमा गएँ र स्कूल खोल्ने प्रस्ताव राखें । रामनाथजीले भन्नुभयो- कुरा एकदमै ठीक ल्याउनुभयो । यस विषयमा द्रोण सर, घनश्याम खनाल सर, खडानन्द वाशिष्ठ सर समेतसँग तत्कालै कुरा राखौं भन्नुभयो । म द्रोण सर समक्ष पुगें । द्रोण सरले मेरो प्रस्तावलाई अत्यन्तै महत्व दिनुभयो र घनश्याम सर र खडानन्द सरलाई भेटेर सामूहिक रूपमा छलफल गर्ने तत्परता देखाउनुभयो ।

नभन्दै भोलिपल्ट द्रोण सर, रामनाथ बाँस्कोटा, घनश्याम सर र म, वाशिष्ठ सरको घरमा भेला भयौं । स्कूल खोल्ने कुरामा छलफल चल्यो । स्कूल खोल्ने कुरामा सबै सहमत भयौं । फाउण्डरमा श्यामकृष्ण श्रेष्ठ र घनेन्द्रप्रसाद शर्मालाई समेत समावेश गराउँदा उपयुक्त हुने कुरामा पनि सबैको सहमति बन्यो । तर, शैक्षिक सत्रान्तका कारणले स्कूलमा विद्यार्थी भर्ना गर्न ढिलाइ भएको तर्कका साथ समय अभावका कारण सोही साल स्कूल खोल्न नसकिने कुरो आयो । पौष १ गतेदेखि शैक्षिक सत्र शुरु हुने, तर हाम्रो सल्लाह मंसीरमा हुँदै थियो । तैपनि म र द्रोण सरको भनाइ चाहिं यसै वर्ष (२०४९) बाटै शुरु गरौं भन्ने रह्यो । सो बिहानको छलफलमा स्कूल खोल्ने कुरामा सहमति भए तापनि सोही वर्ष कि, अर्को वर्ष ?-भन्ने कुरामा निर्णय हुन सकेन । भोलि निश्चय गर्ने भनेर सबै जना उठ्यौं । अर्को वर्ष खोल्ने भन्ने कुरा मेरो दिमागमा कसिंगर बिझाए झैं भइरह्यो । दिनैभर मनको आङमा घाम लागेन । बेलुका अलि छिटै घर आएँ । खाना खाएर

द्रोण सरकोमा गएँ । द्रोण सरले भन्नुभयो- 'म त स्कूल अर्को वर्ष खोल्ने भन्ने कुराले दिनभर पिरोलिएँ । सरको कुराले मलाई केही राहत मिल्यो ।' मैले पनि अर्को सालको कुरामा चित्त नबुझेको कुरा उहाँलाई दर्शाएँ । उहाँ र मेरो विचारमा एकरुपता आयो । त्यसलगत्तै हामी रामनाथजीको घरमा गयौं र यसै साल स्कूल खोल्ने कुरामा गुटबन्दी गऱ्यौं ।

भोलिपल्ट शनिबारको दिन थियो । घनेन्द्रप्रसाद शर्मा, श्यामकृष्ण श्रेष्ठ, घनश्याम खनाल, रामनाथ बास्कोटा, द्रोण सर र म खडानन्द सरकै घरमा भेला भयौं । स्कूल खोल्ने कुरामा सबै नै उत्साहित थियौं । स्कूलको प्रस्ताव ल्याएकोमा मलाई सबैले धन्यवाद दिनुभयो । तथापि स्कूल कहिलेदेखि सञ्चालन गर्ने भन्ने कुरा यकिन हुन सकेको थिएन ।

छलफलकै क्रममा निक्कै लामो मौनतापछि द्रोण सरले मुख खोल्नुभयो- 'स्कूल खोल्ने भए यसै सालबाट शुरु गरौं । शुरु नै नगरी भ्याइने-नभ्याइने भन्ने तर्क नै व्यर्थ हो । शुरु गरौं न, किन भ्याइँदैन ? फर्निचरको व्यवस्थापन मुख्य विषय हो । एकाध महिनामा बनाउन सकिन्छ । हामी नेपालीहरू कुनै योजना दिमागमा ल्याउँछौं । कुरा उछाल्छौं । कार्यमा उतार्न भने जहिल्यै पछि सर्छौं । अनि समय व्यतीत हुन्छ र योजना तुहिन्छ । अहिले गर्न सकिने काम भरे साच्ने कामै छैन । सबैले काम बाँडफाँड गरौं । यसैपालि स्कूल खोल्न सकिन्छ ।'

द्रोण सरको कुरालाई घनेन्द्र सर र घनश्याम सरले पनि हँ मा हँ भर्नुभयो । रामनाथजी र म त पहिलेदेखि नै तयार थियौं । अन्ततः सबैको सर्वसम्मतिले सोही साल (वि.सं.२०४९) बाटै प्रज्ञा एकाडेमी सञ्चालन गर्ने निर्णय भयो । द्रोण सरले अलिक प्रेसर नगर्नु भएको भए २०४९ सालमा प्रज्ञा एकाडेमी स्थापना हुने थिएन । पछिल्लो वर्ष स्थापना हुन्थ्यो नै भन्न कठिन थियो । किनभने मान्छेको मन र समयको फेरोले गन्तव्य बदल्यो भने फेरि उही टुंगोमा नफर्कन पनि सक्छ । यसर्थ सत्य भन्नुपर्दा द्रोण सर नै प्रज्ञा एकाडेमीको २०४९ सालको जन्मदाता हो । २०४९ साल कटेको भए प्रज्ञा एकाडेमी जन्मन्थ्यो वा जन्मने थिएन, म भन्न सक्दिन ।

स्कूलको नामकरण गर्ने जिम्मा पनि द्रोण सरलाई नै दिइएको थियो । द्रोण सरले खडानन्द सरसँग सहकार्य गरेर प्रज्ञा एकाडेमी नामाकरण सिफारिश गर्नुभएको थियो । संस्थापक समितिले यस नाउँलाई बडो उत्साहपूर्वक स्वीकार गरेको थियो ।

यसरी हेर्दा भन्नु पर्दछ, समयको गर्भबाट प्रज्ञा एकाडेमी जन्म हुँदा मुख्य सुँडेनीका रूपमा मात्र नभई नाम जुराउने नाम गुरु समेत द्रोण सर नै हुनुहुन्छ। समयले प्रज्ञा एकाडेमीलाई जता लैजाओस्, जहाँ पुर्‍याओस्, यस शिक्षालयको इतिहासमा द्रोणकुमार उपाध्यायको भूमिका अहम् थियो भन्ने अमरगाथालाई म जस्ताकोतस्तै राखियोस् भन्न चाहन्छु।

प्रज्ञा एकाडेमीमा सबैभन्दा त्याग खडानन्द वाशिष्ठको रह्‌यो। उहाँका सहृदयी सहयोगीहरूमा द्रोणकुमार पौडेल र घनेन्द्रप्रसाद शर्माको भूमिका स्मरणीय छ। द्रोण सरले प्रज्ञा एकाडेमीमा नेपाली विषयको अध्यापन पनि गर्नुभयो। लामो समयसम्म सञ्चालक समितिमा रहेर विद्यालय सञ्चालनमा महत्वपूर्ण भूमिका निर्वाह गर्नुभयो। प्रज्ञा एकाडेमीका संस्थापक अध्यक्ष रामनाथ बास्कोटा हुनुभयो। म सदस्य-सचिव भएँ। झापाको सदरमुकाममा यस शैक्षिक संस्थाले निक्कै चर्चा पायो। केही वर्षपछि म लगायतले कार्यव्यस्तताका कारण प्रज्ञा एकाडेमी छाड्यौं। लामो समयसम्म खडानन्द वाशिष्ठले प्रज्ञा एकाडेमीको स्याहार गर्नुभयो। अन्ततः यो संस्थाको स्वामित्व हस्तान्तरण भयो। आज पनि झापा चन्द्रगढीमा एक अब्बल शिक्षालयका रूपमा चर्चित छ।

मेची बहुमुखी क्याम्पसलाई कर्मथलो बनाएर जीवनको उत्सव मनाउने द्रोण सर यस क्षेत्रका एक मृदुभाषी र सहिष्णुतावादी सामाजिक अभिभावक हुनुहुन्थ्यो। जीवन र जगतका तिरिमिरी र झिलिमिलीले द्रोण सरलाई कहिल्यै हल्लाएनन्, लछारेनन्। उहाँको नीलसागरीय स्वभाव जीवन र जगत प्रतिका जिज्ञासुहरूका लागि दर्पण बनेको छ। उहाँबाट सिक्नु र जान्नु पर्ने धेरै छन्। 'घाँटी हेरेर हाड निल्न जान्नु पर्दछ' भन्ने चेतना नै उहाँको जीवन-यात्राको अनुपम पाटो थियो।

समयले सपुतहरू जन्माउँछ, निश्चित अवधिपछि आफै फिर्ता लिन्छ। यही चक्रको फन्कोलाई जीवन भनिँदै आइएको हुनुपर्छ। सबैले यस फन्कोलाई स्वीकार्नु पर्दोरहेछ। मृत्युसँग हारेर सन्तप्त रोदन कोरल्दा आगतको बाटो छेकिन्छ। उत्तराधिकारको दिशानिर्देश बिथोलिन्छ। त्यतिमात्र होइन, हाम्रो पूर्वीय दर्शनका अनुसार परलोकीय आत्माले चिर शान्ति पाउँदैन। यतिखेर यिनै मूल्यहरूलाई आत्मसात गर्नु वाञ्छनीय हुन्छ।

अन्ततः स्मृतिग्रन्थ प्रकाशनमा जुट्नु हुने बन्धुहरू, जसले अक्षर शब्द र वाक्यहरूको श्रद्धाञ्जलि सभा आयोजना गरेर मलाई पनि द्रोण सर सम्झने अवसर दिनुभयो; सबैप्रति कृतकृतार्थ छु। मेरा सहृदयी तारा विविधले

समयको अन्तिम कुइनेटोबाट मलाई इशारा गरिदिनु भयो, उहाँलाई विशेष धन्यवाद दिन्छु । दिवंगत द्रोण सरकी धर्मपत्नी मीरा भाउजू, छोरा यशवन्त, छोरीद्वय योगिता र यवनिका समेतले यस ग्रन्थको प्रकाशनमा देखाउनु भएको तत्परताप्रति मलाई गर्व लागेको छ ।

मृत्युलाई अलग्याएर जीवनको परिभाषा हुँदैन । द्रोण सर दिवंगत हुनुभयो । म लगायत यस ग्रन्थमा सम्झना कोर्नेहरू बाँचेका छौं । हामी बाँचेर जीवनलाई के पस्किएका छौं ? समय र समाजले हामीबाट के पाएको छ ? द्रोण सर लगायत प्रज्ञा एकाडेमीका संस्थापक घनश्याम खनाल, खडानन्द वाशिष्ठ, श्यामकृष्ण श्रेष्ठ, रामनाथ बास्कोटा दिवंगत भइसक्नु भयो । तपाईंहरूले त प्रज्ञा एकाडेमी जन्माउनुभयो । प्रज्ञा एकाडेमी तपाईंहरूप्रति युगयुगान्तर कृतकृतार्थ रहने छ। जीवनको परिभाषा र जिउनुको अर्थ यहीं कतै लुकेको छ कि ? खोज्न मन लाग्छ । यति हुँदाहुँदै पनि हिजोका सहयात्री तपाईंहरूलाई आज समीपमा भेट्न नपाउँदा मन विक्षिप्त छ। यही विक्षिप्तभावमा डुबुल्किएर द्रोण सरप्रति दुई अक्षरले 'भावपूर्ण श्रद्धाञ्जलि' अर्पण गर्दछु । द्रोण सर, अलबिदा !

*चन्द्रगढी, झापा*

*(लेखक वरिष्ठ अधिवक्ता हुनुहुन्छ)*



लोकनाथ पौड्याल

# मेरा मानसपटलमा डा.द्रोण

प्राध्यापक द्रोणकुमार उपाध्याय पौडेलसँगको मेरो पहिलो भेट २०३२ सालतिरको हो । दाजु-भाइको साइनो लगाउँदा सात वर्षले म दाजु ठहरिएँ । उहाँ असममा जन्म ग्रहण गरी नेपाल आगमन पश्चात् नेपाली भाषा-साहित्यमा विश्वविद्यालयस्तरीय शिक्षा हासिल गरी मेची बहुमुखी क्याम्पस, भद्रपुर, झापामा नेपाली भाषा-साहित्य अध्यापन गराउँदै आउनुभएको र म इलाममा जन्म ग्रहण गरी असम गई, असमको फारासिमल गाउँमा बाह्र वर्ष बसी २०१८ सालमा नेपाल आई यहीं थप अध्ययन गरी शनिश्चरे मा.वि. र उच्च मा.वि.मा अध्यापन गराउँदै आएको । दुबै दाजु-भाइको बाल्यकालको बसाइ, असमको पेशा एउटै र परिवारको रहनसहन पनि प्रायः मिल्दोजुल्दो भएकोले दुबैका परिवारको बीचमा घनिष्टता र आवतजावतमा वृद्धि हुँदै गयो ।

२०४५ सालमा अंग्रेजी भाषामा स्नातकोत्तर उत्तीर्ण गरेपछि ममा उच्च तहका विद्यार्थीहरूलाई अध्ययन गराउने चाहना जागृत भएकै अवसरमा मेची क्याम्पसमा अध्ययनरत दुई छोरीहरू - चित्रा र शशीबाट एउटा शुभ समाचार आउँछ- ‘ क्याम्पस चिफ घनश्याम खनाल सर र द्रोण काकाले भन्नुभएको, बुबाले क्याम्पस पुगी पहिले द्रोण भाइलाई र पछि क्याम्पस चिफलाई भेट गरेर आउँदो माघ १ गतेदेखि (२०४६ साल) क्लास लिन प्रारम्भ गर्नु भन्नुभएको छ ।’ म दिउँसो शनिश्चरे मा.वि.मा अध्यापन गर्थें । २०२१ सालदेखि त्यहाँको पुरानो जागिरसँगै अब क्याम्पसमा पनि बिहान पढाउन प्रारम्भ गरें । यसरी घरबाटै भ्याउने ठाउँमा, सरकारी नाम चलेको क्याम्पसमा अतिरिक्त स्थायी जागिर पाउनु गौरवको कुरा भयो । एक अंग्रेजी प्राध्यापकको दरबन्दी खाली भएको जानकारी भाइ द्रोणबाट समयमै प्राप्त हुनुबाट उदारमना भाइले मप्रति देखाएको सद्भाव र सदाशयता मेरो मानसपटलमा रहिरहेको छ, सदासर्वदा रहिरहने छ ।

एउटा निश्चित डिग्री हासिल गरिसकेपछि, पुस्तक अध्ययन गर्ने तर्फ धेरैको चासो नजाने गरेको पाइन्छ । यस्तो व्यक्तिको योग्यता र क्षमता ज्यूँकात्यूँ रहन्छ भन्दा पनि अरु घटेर पो जान्छ । तर, सहप्राध्यापक जस्तो गरिमामय उच्च पदमा पुगेर विद्यावारिधि समेत गरिसक्नुभएका डा. द्रोणकुमारले भरजीवन अध्ययनलाई जारी नै राख्नुभयो । नेपाली, अंग्रेजी, संस्कृत, हिन्दी, असमिया, बङ्ला, राजवंशी आदि भाषाका कुशल ज्ञाता पौडेलले ती सबै भाषाका पुस्तक संग्रह गरी आफ्नो पौडेल-कुटीलाई एउटा लघु पुस्तकालय नै बनाउनुभएको थियो । गहन अध्ययनकै परिणामस्वरूप उहाँले विभिन्न भाषामा दर्जनभन्दा बढी कृतिहरूको सिर्जना गरी नेपाली साहित्य जगतलाई ठूलो योगदान पुऱ्याउनुभयो ।

अध्ययन, अध्यापन, लेखन र सम्पादन कार्यमा व्यस्त हुँदाहुँदै पनि समय निकाली सामाजिक र आध्यात्मिक कार्यमा समेत दिलचस्पी राखी उहाँ संलग्न हुनुहुन्थ्यो । बृहत् सामाजिक संस्था पौड्याल वंशोद्धार केन्द्रिय समिति-नेपालको अध्यक्ष जस्तो एउटा गरिमामय पदमा रहेर २०५१ सालदेखि २०६० सालसम्म सांगठनिक विस्तार र विविध सामाजिक सेवाका कार्यक्रमहरू सञ्चालन गरी बन्धु संस्थालाई उहाँले गति प्रदान गर्नुभयो । उहाँकै कार्यकालमा २०५१ सालमा कोटीहोम क्षेत्रमा पौड्याल वंशको प्रथम राष्ट्रिय सम्मेलन सम्पन्न भयो र संस्थाका महासचिव यस पंक्तिकारको प्रमुख संकलन र सम्पादनमा तयार पारिएको हजार पृष्ठको बृहत् पौड्याल वंशावली पुस्तकको विमोचन कार्य २०६० सालमा उहाँकै अध्यक्षताकालमा सम्पन्न भयो । यसका अतिरिक्त दमक- ७ मा निर्मित ‘आत्रेय सदन, पौड्याल भवन’ को वरिष्ठ नेता श्री रामचन्द्र पौडेलज्यूबाट शिलान्यास कार्यक्रम र माता मेनुकादेवी पौड्यालद्वारा निजी खर्चमा निर्माण गरिएको ‘दमक सत्संग भवन’ को उद्घाटन कार्यक्रम पनि उहाँकै पालामा सम्पन्न भएको हो ।

पूर्वीय वाङ्मय संस्कृत भाषाको उत्थान गरी विश्वमा ‘वसुधैव कुटुम्बकम्’ को वैदिक सिद्धान्तलाई विश्वव्यापी बनाउन सकेमा मात्र विश्वमा वास्तविक स्थायी शान्ति छाउन सक्दछ भन्ने उहाँको धारणा थियो ।

डा. द्रोणकुमार उपाध्याय एक राष्ट्रप्रेमी, सात्विक, निष्पक्ष, उदारमना, प्रष्टवक्ता, कठिन परिश्रमी, स्वावलम्बी, हँसमुखका साथै सबै वर्ग र तहका मानिससँग सद् भाव कायम राख्न सक्ने एक मिलनसार व्यक्ति हुनुहुन्थ्यो ।

अझै केही गर्ने उम्मेद राख्दाराख्दै, ७१ वर्षको अल्पायुमा नै उहाँ रूपान्तर हुनु भयो । हाम्रो पूर्वीय दर्शनको गूढ रहस्यअनुसार हामी प्रत्येकसँग तीन शरीर- स्थूल

बाहिर, सूक्ष्म शरीर र कारण शरीर अनि पञ्च कोष- अन्नमय कोष, प्राणमयकोष, मनोमय कोष, विज्ञानमय कोष र आनन्दमय कोष विद्यमान छन् । मानिसको देहान्त हुँदा शरीर सञ्चालनमा प्रमुख भूमिका निर्वाह गर्ने सात तत्वहरू-आकाशतत्व, वायुतत्व, जलतत्व, तेजतत्व, पृथ्वीतत्व, जीवतत्व र आत्मातत्व मध्ये कुनै एक तत्व पनि नभई नहुने, देहान्तर पश्चात् ती तत्वहरू रूपान्तर मात्र हुने, जीवतत्व चाहिं सांसारिक भोग वासना र संस्कार निर्मूल पश्चात् नष्ट हुने; तर आत्मातत्व चाहिं आवागमनरहित (ल्भष्तजभच नयभक लयच अफभक) र सर्वव्यापक परम तत्व हुनाले दिवंगत (दिव माने अन्तरिक्ष, गत माने जानु भएका) हुनुभएको भए निज, कर्मफलानुसार पुनः आवागमनको चक्करमा परिभ्रमण गर्नु हुने र सांसारिक योग वासनारहित भई दिवंगत हुनुभएको भए आवागमनको चक्करबाट उन्मुक्त भई परमानन्द पदमा सदासर्वदा कृतकृत्य बनिरहनु हुनेछ । उहाँ जहाँ, जसरी, जस्तो अवस्थामा अस्तित्वमा स्थित हुनुहुन्छ- मेरो उहाँमा पुनः पुनः स्मृति छ, भावपूर्ण श्रद्धाञ्जलि छ ।

उपाध्यायकी धर्मपत्नी, हाम्री बुहारी, शिक्षिका मीरादेवी पौडेलले एक अथक साधक पति, छोरा यशवन्त, छोरी योगिता र यवनिकाले एक कर्मवीर पिता, नाति-नातिनाहरू आदित्य, सुयश, दुर्लभ, याश्ना र प्रियांशले एक हृदयस्पर्शी हजुरबुबा, मेची बहुमुखी क्याम्पसले नेपाली भाषा-साहित्यका एक दर्बिलो खम्बा, झापाली समुदायले एक आदर्श प्राध्यापक, राजवंशी जातिले एक जातीय भाषा हितैषी, गुमाएका छन् भने मैले एक आत्मीय, हितकर प्राज्ञ भाइ गुमाएको छु ।

समाजसेवा र नेपाली भाषा-साहित्य सेवाको इतिहासमा दिवंगत डा. द्रोण भाइको अमरताको कामना गर्दछु । अस्तु ः

*(लेखक मेची बहुमुखी क्याम्पस भद्रपुरका निवृत्त उपप्राध्यापक हुनुहुन्छ)*



सरोज ओली

# डा.द्रोण पौडेल र उनका दुई लेख

मेची क्याम्पसका नेपाली विभागाध्यक्ष डा.द्रोण पौडेलज्यूसित मेरो २०३५-३६ सालतिर रोहिणीविलास लुइँटेलद्वारा चिनापर्ची भयो । त्यसपछि उनीसित झापामा हुने विभिन्न साहित्य गोष्ठीहरू र अन्य साहित्यिक समारोहहरूमा बाक्लै भेटघाट भइरहन्थ्यो । मेरो उनका काकाहरू पुण्यप्रसाद पौडेल र नीलकण्ठ पौडेलहरूसित पहिले नै भेट भएको थियो, घनिष्टता पनि थियो । त्यसले गर्दा हामी (द्रोण र म) पनि धेरै नजिकिएका थियौं । उनले नेपाली सवाई विषयमा विद्यावारिधि गर्दा पटक-पटक मसित भेट गरेका र त्यस विषयको छलफल पनि गरेका थिए । आज उनका विषयमा स्मृतिग्रन्थ निस्कँदैछ भनेर उनका छोरा यशवन्त र मेची क्याम्पसकै गुरु तारा विविधले भनेको सुन्दा साह्रै राम्रो काम हुन लागेकोमा अति प्रशन्न भएको छु । मलाई तारा विविध र यशवन्तले डा. द्रोणका दुइटा लेखका बारेमा केही लेख्न आग्रह गरेका हुँदा म त्यतैतिर केन्द्रित भएर मेरो लेखनीलाई चलाउँछु ।

सर्वप्रथम म जुही अंक ५६, श्यामकृष्ण श्रेष्ठ विशेषांक-२०६५ मा रहेको डा.द्रोणकुमार पौडेलको 'मेरो जागिरे जीवन पढेपछि' नामक निबन्धको परिचर्चा गर्न गइरहेको छु । ४० वर्षको जागिरे जीवन बिताएर वि.सं.२०४९ मा निवृत्त भएका श्यामकृष्ण श्रेष्ठको जागिरे जीवनमा थुप्रै घटनाहरू भएका छन् । उनले थुप्रै ठाउँमा काम गरेका छन् । थुप्रै हाकिमहरूसित सम्पर्क गरेका छन् । यसमा 'मेरो जागिरे जीवन' पढेपछि आत्मवृत्तान्त कस्तो हुन्छ, सबैभन्दा पहिले साहित्य जगतमा कसले यो काम गऱ्यो भन्ने बारेमा विशद् अध्ययन गरेर यो लेखलाई उज्यालेका छन् । उनका शब्दमा हेरौं- 'ईशाभन्दा दुई सय वर्ष पूर्व चीनका सम्राट चि.एन.ले लेखेको 'सिंह चि' वा 'ऐतिहासिक तथ्य' आज पाइने आत्मजीवनीको सबैभन्दा पुरानो दसी हो । त्यसपछि यूरोपमा आएको पुनर्जागरणबाट जीवनी लेख्ने परिपाटीले व्यापकता र परिपक्वता पाएको देखिन्छ' आदि । 'त्यसपछि

नेपाली साहित्यकार विश्वेश्वरप्रसाद कोइरालाको 'जेल जर्नल' नेपाली साहित्यमा आत्मजीवनी लेखनतर्फ एक नमूना ग्रन्थका रूपमा देखापरेको छ ।'...

उपर्युक्त भनाइबाट के थाहा लाग्छ भने, डा.द्रोणप्रसाद पौडेलमा आत्मवृत्तान्त कस्तो हुन्छ र हुनुपर्छ भन्ने कुराको ज्ञान थियो । उनमा त्यस विषयमा गहिराइको ज्ञान थियो । त्यसैले उनले सो लेखमा श्यामकृष्ण श्रेष्ठको गहिराइको अध्ययन गरेर कसीमा घोटेर निष्कर्ष निकालेका छन् । त्यसैले उनी भन्छन्- 'आत्मजीवनी जीवनको इतिहास हो', यो पनि श्यामकृष्ण श्रेष्ठको जीवनी हो । आत्मजीवनी जीवनको डायरी हो । यसमा जीवनमा अप्ठ्यारा, सजिला, गुलिया, तीता, अमिला-टर्रा सबै कुरा समेटिएका हुन्छन् । यो अत्यन्त कठिन काम हो । त्यही कठिन काम श्यामकृष्ण श्रेष्ठले गरे । त्यही कामको गहिराइमा डुबुल्की मारेर डा.द्रोणप्रसाद पौडेलले त्यसको सारतत्व निकाले । त्यसैले त उनी लेख्छन्- ' भटमासेका कुखुरा चोर्न उकास्ने मुन्सी, आफूले हार्मोनियम सिक्नका निम्ति सरकारी जागिर खुवाउने लप्टन साहेब, अंग्रेजीबाज मन्टु सर, सन्तबीर लामाको द्वैध सामन्ती चरित्र...' आदिका बारेमा सुन्दु वर्णन गरेका छन् ।

वास्तवमा डा.द्रोण पौडेल नेपाली साहित्यका विशिष्ट व्यक्तित्व थिए। उनले नेपाली, असमी, हिन्दी, बंगाली साहित्यको तुलनात्मक अध्ययन गरेका थिए। उनमा साहित्यका विभिन्न विधाको गहिरो अध्ययन थियो। उनले महात्मा गान्धीको आत्मवृत्तान्तका साथै नेपाल र भारतका विशिष्ट विद्वान्हरूको आत्मवृत्तान्त, जीवनी आदिको गहिरो अध्ययन गरेका थिए। त्यसैले श्रेष्ठको 'मेरो जागिरे जीवन'लाई उनले गहिरिएर अध्ययन गरेर जनतासामू यथार्थ चित्र प्रस्तुत गरे । यसमा डा.पौडेलले श्यामकृष्ण श्रेष्ठले राणाकालीन, पञ्चायतकालीन हुँदै प्रजातन्त्रकालीन जागिरेको जीवन शैलीका साथै ती समयको जनजीवन पनि सूत्रात्मक रूपमा प्रष्ट्याएको कुरा दर्शाएका छन् ।

डा.पौडेलको सो विवेचनापरक लेख उनको स्मृति पुस्तकमा नछुटाइकन राख्न योग्य छ । यस्ता साहित्यका महामना पौडेलज्यूको असामयिक निधनले नेपाली साहित्य जगतमा ठूलो खति भएको छ । यो लेख लेखिरहेका हँसिला द्रोण पौडेल सर 'दाइ !' भन्दै मेरा छेउमै छन् कि भन्ने भान हुन्छ । तर, विधिको विधानै यस्तो- 'जातस्य हि ध्रुवो मृत्युर्ध्रवं जन्म कृतथ्य च ।'

अन्त्यमा, डा. पौडेल आफ्ना अमूल्य कीर्तिहरूबाट अमर रहेका छन्; 'यथ्य कीर्ति स जीवति' । स्रष्टा डा.पौडेल नेपाली साहित्य संसारमा रहेका उनका यस्ता

अमूल्य कृतिहरूबाट अमर छन्, अजर छन् । उनी त अमर भए नै; तर उनले श्यामकृष्ण श्रेष्ठलाई पनि उनका बारेमा यस्तो गहन लेख लेखेर अमर पारे । यो विवेचना यत्तिमै टुङ्ग्याउँछु ।

डा.द्रोण पौडेलको अर्को महत्वपूर्ण लेख रोहिणीविलास लुइँटेल सम्बन्धमा छ । जुही साहित्यिक त्रैमासिक पत्रिकाको ५९ अंकमा जुहीरत्न रोहिणीविलास विशेषांकमा 'कवि रोहिणीविलास लुइँटेललाई म जस्तो जान्दछु' शीर्षकमा राम्रो लेख छ । सो लेखमा उनले तीन कुरा उठाएर लुइँटेलको चरित्र टिप्नुभएको छ । जसमा लुइँटेलको एक्लो ज्ञान र सीपको वर्णन छ । डा.द्रोण उनको चरित्रको यसरी वर्णन गर्छन्- 'मौनब्रति प्रायःएकान्त रुचाउने भएकाले हलचल हल्लाखल्लादेखि आफूलाई अलग्ग मन पराउने हुन्छन् ।...... यस्ता मानिसहरूलाई न प्रशंसाको भोक हुन्छ, न प्रदर्शनीको शोख नै हुन्छ ।' यसरी उनले लुइँटेलको एकाकीपन र सिर्जनशील स्वभावको वर्णन गरेका छन् ।

डा.पौडेलले लुइँटेलको यथार्थ र सही मूल्यांकन गरेका छन् । वास्तवमा लुइँटेल त्यस्तै थिए, जस्तो पौडेलले ठम्याएका छन् । मेरो लुइँटेलसितको लगभग तीस वर्षको संगतले जानेको कुरा डा.द्रोण पौडेलले एउटै लेखमा उतारेका छन् । यो डा. द्रोणको निबन्धकारिताको विशेषता हो । स्वयम् डा.द्रोण सरको स्वभाव पनि त्यस्तै थियो । भाषाका पारखीहरू र सिद्धहस्त लेखकमा हुने गुण डा.पौडेलमा थियो । त्यसैले उनले यस्तो राम्रो व्यक्तिविशेषका बारेमा थोरैमा धेरै लेख्न सकेका हुन् । रोहिणीविलास लुइँटेल एक्लै हिंड्न, बस्न, लेख्न, पढ्न रुचाउने व्यक्ति थिए । नाम, मान, सम्मानका भोका थिएनन् उनी । यही कुरा डा.पौडेलको लेखको पहिलो खण्डमा छ ।

दोस्रो खण्डमा रोहिणीविलास लुइँटेलको बासस्थानको बारेमा यति रोचक ढंगले वर्णन गरेका छन् कि सो वर्णन पढ्दा महाकवि कालीदासको मेघदूतको सम्झना आउँछ । मेघदूतमा यक्षले आफ्नी यक्षणी बसेको ठाउँमा पुग्ने बाटो मेघलाई बताए झैं डा.द्रोण पौडेलले झापाको शनिश्चरे, कालीस्थान रोहिणीविलास बस्ने घर पुग्ने बाटो अत्यन्त सरस ढङ्गले पढ्नै पर्ने शैलीमा वर्णन गरेका छन् । 'लुइँटेलको घर शनिश्चरे, कालीस्थानमा छ' भन्दा हुनेमा उनको प्रस्तुतिशैली नै आकर्षक छ । शब्दमा आफ्नो भाव व्यक्त गर्ने क्षमता भएका व्यक्तिले नै मात्र त्यसरी सरल तरिकाले व्याख्या गर्न सक्छन् ।

डा.पौडेलकै शब्दमा हेरौं- '...बाटोको छेउमा दक्षिण मुहुडा गरी उभिएको

झापाली शैलीको काठको तले घर र ... पिँडीको खाँबोमा ढेपिएर हातमा कलम-कापी लिई केही लेखिरहेको ......।' यस्तै सरल शैलीमा डा.पौडेलले लुइँटेलको घर पुग्ने बाटो, बाटामा पर्ने सुपारी बगान आदि र लुइँटेलको अतिथिलाई स्वागत गर्ने सनातन स्वभावलाई अति सुन्दर ढङ्गले व्याख्या गरेका छन् । माथि नै भनें, डा.पौडेलको यो शैली महाकवि कालीदासको झैं सरल र पठनीय छ। डा.द्रोणकुमार पौडेलको नेपाली भाषा खेलाउन सक्ने क्षमता राम्रो थियो । त्यो उनले सरल नेपाली झर्रा शब्दहरूको प्रयोगले आफ्नो निबन्धलाई सिँगारेका छन् । मान्छे झर्रो नेपालीको कुरो गर्छन्, तर डा.पौडेल कुरा नगरी झर्रो र सरल नेपाली भाषाको प्रयोगले आफ्ना लेख-निबन्धहरू भर्छन् ।

डा.पौडेलले सो लेखको तेस्रो खण्ड लुइँटेलको जन्म र शिक्षा-दीक्षाका बारेमा केन्द्रित छ। उनका अनुसार रोहिणीविलास लुइँटेलको जन्म कोशी अञ्चलको तेह्रथुम जिल्ला, सोल्मा कालीमाटी गाउँमा भएको थियो । उनका बाबु पं.नरपति लुइँटेल र आमा लक्षिमादेवी थिइन् । कालक्रमले पं.नरपति असम बसाइँ सरेर गए । त्यहीं उनले पं.टीकाराम शास्त्रीका रेखदेखमा रहेर मध्यमा गरे । उनका समीपमा रहेर उनले चण्डी, रुद्री, वेद आदि पढे । पछि बनारसमा गएर शास्त्री पास गरे । पछि नेपाल फर्केर विवाह गरेर झापाको कालीस्थानमा स्थाई बसोबास गर्दै शनिश्चरे मा.वि. पढाउँदै साहित्य सिर्जनामा लागे। उनले थुप्रै मौलिक कृतिहरूका साथै अनुवाद पनि गरेका छन्। यसरी डा.द्रोणकुमार पौडेलले रोहिणीविलास लुइँटेलको व्यक्तित्व र केही कृतित्वका बारेमा लेखेर उनको सिंगै जीवनी खुलस्त्याएका छन् ।

वस्तुतः डा.द्रोणकुमार पौडेल नेपाली साहित्यका प्रखर विद्वान् थिए। उनी नेपाली विषयका विशिष्ट विद्वान् थिए नै। त्यस अतिरिक्त नेपाली वाङ्मयका आधिकारिक विद्वान् व्यक्तित्व पनि थिए। उनको निबन्ध क्षेत्रमा विशेष दखल थियो । श्यामकृष्ण श्रेष्ठको 'मेरो जागिरे जीवन'का बारेमा लेखेको निबन्ध नेपाली साहित्य जगतमा मिसाएर केलाउँदा राम्रो स्थान ओगट्न सक्ने निबन्धमा पर्छ। सो निबन्धमा शब्द चयनको विद्वता झल्किएको छ। डा.द्रोण सरका यस्ता महत्वपूर्ण निबन्धहरूको संगालो निकाल्न सके नेपाली साहित्य भण्डार अझ बहुमूल्य हुनेछ ।

त्यस्तै, ती दुई निबन्धबाट विश्वमा सबैभन्दा पहिले र कसले आत्मपरक वा आत्मवृत्तान्त निबन्ध लेखे भन्ने थाहा हुन्छ भने भारत र नेपालमा आत्मवृत्तान्त

लेख्ने प्रथम व्यक्तिहरूको समेत संक्षेपमा जानकारी पाइन्छ। रोहिणीविलास लुइँटेलको 'एक्लै बसेर साहित्य सिर्जना गर्ने कर्ममा भारतीय कविन्द्र रवीन्द्रको ' एक्ला चलो रे' भन्ने उक्तिको प्रभाव परेको भान हुन्छ। त्यति मात्र होइन, नेपाली साहित्यका धुरन्धर विद्वान् महाकवि लक्ष्मीप्रसाद देवकोटाको प्रभाव पनि उनको सिर्जनामा परेको डा.पौडेलले गम्भीरतापूर्वक उठाएका छन् ।

यी माथिका निबन्धहरूले डा.द्रोणकुमार पौडेलको अध्ययन, मनन र चिन्तनका बारेमा प्रष्ट्याएका छन्। उनी कति गहिरो अध्ययनशील थिए भन्ने कुरो श्रेष्ठ बारेको निबन्धबाट थाहा लाग्छ भने उनी कति सरल र झर्रोवादी नेपाली लेखक हुन् भन्ने कुरा लुइँटेल सम्बन्धी लेखबाट थाहा लाग्छ। विशद् अध्ययनशील डा.द्रोण पौडेल विश्वमा भएका आइरहेका साहित्यिक प्रवृत्तिहरूका बारेमा सदैव अद्यावधिक जानकारी राख्थे ।

डा.द्रोणकुमार पौडेलका साथीका दुइटा लेखका बारेमा लेखिसकेपछि मेरो उनीसितको सम्बन्धमा पनि केही कुरा लेख्ने मन गरें। डा.द्रोण र मेरो बीचमा संयोग जुटाउने कडी रोहिणीविलास र डा.द्रोण पहिला असममा रहँदा एउटै टोल-बस्तीमा बसेर बाल्यकाल बिताएका रहेछन्। त्यसैले शनिश्चरे आउँदा द्रोण सर रोहिणीकामा जाने-बस्ने गर्थे भने रोहिणी र मेरा मितदाइ एउटै विद्यालयमा अध्यापन गर्ने हुँदा मेरो उनीसित भेट हुने संयोग पर्थ्यो। म कवि, कथाकार र उपन्यासकार भएकाले उनी मलाई 'दाइ' भनेर भनेर सम्मान गर्थे। द्रोण सर उमेरले साना भए पनि म आदरपूर्वक 'सर' भन्थें। उनी हाँस्दै भन्थे- 'दाइ ! मलाई भाइ भन्नु नि, सर त विद्यार्थीको पो त।' म जवाफ दिन्थें- 'मैले पदको कदर गरेको सर !, भाइ त तिमी मेरो भाइ नै हौ नि।' चिया पिउँदै हामी तीनै जना हाँस्थ्यौं। यस्ता मिलनसार प्रिय भाइको निधनले दुःखी त बनाएकै छ, तर उनको स्मृतिमा प्रकाशन हुने ग्रन्थले केहीनकेही त राहतका खुराक पनि देला कि ? प्रतीक्षा त्यसैको छ। अस्तु !

*२०७७/८/२३.*

*- तुतबारी, अर्जुनधारा नपा- ८ (झापा)*

*(लेखक प्रसिद्ध आख्यानकार हुनुहुन्छ)*



सुरेन्द्र शर्मा [भट्टराई]

# आदर्श गुरु : प्रेरक व्यक्तित्व

आफ्नो मनमा जीवितै रहनुभएको मान्छेको स्मृति लेख्न त मन थिएन, तर पनि मुटु दह्रो पारेर डा.द्रोणकुमार पौडेल सरको स्मृतिमा केही कोर्न प्रयास गरेको छु। उहाँले हामी सबैलाई यति छिटै छाडेर जानुहुन्छ भनेर कसैले कल्पनासम्म गरेको थिएन। तर, वास्तविकतालाई स्वीकार्नु पर्दा निकै ठूलो झट्का लागेको थियो।

द्रोण सर यो संसारमा नरहे पनि उहाँले मलाई सिकाउनुभएका कुराहरू मेरो मन तथा मस्तिष्कमा सदैव रहिरहने छन्। उहाँले मेरो जिन्दगीका हरेक पाइलामा प्रेरणा प्रदान गर्नुभएको छ। उहाँबाट मैले जिन्दगीमा 'जति नै सुख वा दुःख भए पनि मन शान्त बनाउनुपर्छ र अनुहारमा सधैं मुस्कान हुनुपर्छ' भन्ने कुरा सिकेको छु। उहाँले मलाई 'सानो ठाउँमा रहेर पनि ठूल्ठूला काम गर्न सकिन्छ र गर्नुपर्छ' भनेर प्रेरणा प्रदान गर्नुभएको छ। त्यतिमात्र नभएर उहाँले मेरो अध्ययनको समयमा पनि धेरै साथ दिनुभएको छ। पहिला मेरो नेपाली व्याकरण त्यति राम्रो थिएन। तर, द्रोण सरले मलाई व्याकरण पढाएपछि मेरो व्याकरण ज्ञान निकै राम्रो भयो। म उहाँसँग शिक्षकले पढाउँदा नबुझेका कुराहरू सिक्ने गर्थें। उहाँको पढाउने शैली मलाई यति राम्रो लाग्थ्यो कि म कहिलेकाहीं आफूले जाने-बुझेका कुराहरू पनि उहाँसँग सिक्न जान्थें। हामी दुबै जना प्रकृतिमा खुब रम्दथ्यौं। उहाँले कविताहरू पढाउँदाका आनन्दका पलहरू म कहिल्यै बिर्सने छैन। तर, अब... ती सबै उहाँसँगका पलहरू, यादहरू मात्र हुन् भन्नुपर्दा निकै खल्लो लाग्छ।

आजकल कहिलेकाहीं उहाँको घरमा जाँदा उहाँ सधैं झैं त्यही खाटमा बसेर ल्यापटपमा साहित्य सिर्जना गर्दै हुनुहुन्छ जस्तो लाग्छ। उहाँको अनुहारबाट कहिल्यै नमेटिने त्यो अन्तिम समयसम्मको मुस्कान शायद कसैले भुल्न सक्दैन। उहाँको देहावसानपछि राम्रो र सर्वप्रिय मान्छेलाई नै भगवानले छिटो लैजाने प्रकृतिको नियम रहेछ भनेर स्वीकार्न हामी सबैलाई बाध्य बनाएको छ। मेरा निम्ति सदैव प्रेरक व्यक्तित्व रहनुभएका आदरणीय द्रोण गुरुमा सश्रद्धा शब्दाञ्जलि !

*भद्रपुर-१०, झापा*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका विद्यार्थी हुनुहुन्छ)*



# सादा जीवन बाँच्न रमाउने द्रोण सर

**शम्भुप्रसाद ढकाल**

डा. द्रोणकुमार उपाध्याय पौडेल

जन्म - वि.सं.२००६ असम, बिहाली (भारत)

निधन- वि.स.२०७६, चन्द्रगढी, झापा

शिक्षण अनुभवसँगै नेपाली, अंग्रेजी, असमिया, संस्कृत, हिन्दी, बाङ्ला, राजवंशी जस्ता भाषाका ज्ञाता ।

डा. द्रोणकुमार उपाध्यायका शैक्षिक अनुभव निम्नानुसार भएको देखिन्छ–

उच्चतर माध्यमिक विद्यालयहरूमा १० वर्ष अध्यापन, मेची बहुमुखी क्याम्पसमा २०३८ देखि २०४७ सालसम्म तथा पुनः २०५० देखि २०६९ सालसम्म प्रमाणपत्र तथा स्नातक तहसम्म र पद्मकन्या क्याम्पसमा २०४८ देखि २०४९ सालसम्म अध्यापन सेवा ।

मेची बहुमुखी क्याम्पसमा सहायक क्याम्पस-प्रमुख पदमा २०४३।११।०१ देखि २ वर्ष कार्य गरेको, मेची बहुमुखी क्याम्पस नेपाली विभागको विभागीय प्रमुख भई २०५०।०४।०१ देखि २०५३।०९।०१ सम्म र २०६१।०९।०१ देखि २० सम्म तथा पुनः २०६२/८/५ देखि सेवानिवृत्त अवधिसम्म कार्य गरेको देखिन्छ ।

**डा. द्रोणकुमार उपाध्यायका कृतिहरू–**

१) नवमी (सहलेखन, असमिया भाषामा नेपाली लोककथा संग्रह) असम साहित्य सभा, गुवाहाटीबाट प्रकाशित, ई.सन् १९९७ ।

२) राजवंशी परिचय : जाति, भाषा र साहित्य (राजवंशी भाषा प्रचार समिति, नेपालद्वारा प्रकाशित, ई.१९८४ ।

३) आदर्श नेपाली व्याकरण (सहलेखन, किरणबाला भट्टराई) उदालगुडी, असमद्वारा प्रकाशित, ई. २००५ ।

४) भाषिक चिन्तन (भाषिक विश्लेषणात्मक रचना संग्रह) यशवन्त पौडेल,

काठमाण्डौद्वारा प्रकाशित, वि.स.२०६५ ।

५) केही साधक : केही साधना (समालोचना संग्रह) वि.स.२०६५ ।

६) लोकवार्ता : लोककै चर्चा (लोकसाहित्यसँग सम्बन्धित समीक्षात्मक प्रबन्धहरूको संगालो) वि.स. २०६५ ।

७) लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ, ने.रा.प्र.प्र.काठमाण्डौद्वारा प्रकाशित, ई.२००७ ।

८) भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा, श्रीमती मीरा पौडेलद्वारा प्रकाशित, ई.२०११ ।

९) सवाई काव्यको सैद्धान्तिक परिचय, वि.स.२०६७ ।

डा.द्रोणसँग मेरो पहिलो भेट २०४६ सालतिर म मेची क्याम्पसमा प्राध्यापनका लागि नियुक्त भएकै बेला भएको हो । उहाँ २०३८ सालदेखि नै त्यहीं प्राध्यापन गर्दै हुनुहुन्थ्यो । विभाग (नेपाली) एउटै भएकाले उहाँसँग उठबस भई नै रहन्थ्यो । सरल, सौम्य, साधारण व्यक्तित्वका धनी द्रोण सर लवाइखुवाइमा समेत साधारण नै देखिनु हुन्थ्यो । निरामिष भोजन ग्रहण गर्ने द्रोण सर मसँग भन्ने गर्नुहुन्थ्यो- ' नाक थुनेर सेकुवा पसल भएका बाटो पार गर्छु ।'

शान्ता अधिकारी (पौडेल)सँग मेरी माताको राम्रो सम्बन्ध थियो । उहाँ त डा. द्रोणको दिदी हुनु हुँदोरहेछ । त्यसकारण हाम्रो घरमा उहाँको आइजाइ भई नै रहन्थ्यो । मेरा पिताजी वैष्णव पण्डित हुनुहुन्थ्यो । द्रोण सर निरामिष व्यक्तिलाई मन पराउनु हुन्थ्यो । सत्सँग गर्न खोज्नु हुन्थ्यो । पछिल्लो समय २०६३ सालदेखि म पनि वैष्णव (निरामिष) भएँ । त्यसबेलादेखि त उहाँ हाम्रो घरमा आउजाउ गरिरहनु हुन्थ्यो । म पनि उहाँकोमा जान्थें । माई मन्दिर (लक्ष्मी नारायण) की गुरुआमा (सीता बाँस्कोटा) पनि द्रोण सरको बहिनी पर्नु हुँदोरहेछ । म बारम्बार माई मन्दिर जान्थें । गुरुआमाले भन्ने गर्नुहुन्थ्यो- द्रोण सरलाई पनि वैष्णव गराउनु पऱ्यो । मैले एक-दुईचोटि कुरा राखें । उहाँले हाँसेर जवाफ नदिई मेरो कुरा टारिदिनुभयो र भन्नुभयो- 'हेर्नुस्, म पनि त आहारविहार आदिमा वैष्णवभन्दा कम छु र ?'

क्याम्पसमा म नियुक्त भएको करीब महिनाभित्रको एक दिनको कुरा हो । त्यहाँ द्रोण सर, होम सर लगायत चार-पाँच जना गुरुहरू हुनुहुन्थ्यो । म नयाँ भएकाले उहाँहरूका कुरा सुनिरहेको थिएँ । अष्टसिद्धि कसलाई आउँछ भनी उहाँहरू एकआपसमा सोधपुछ गर्दै हुनुहुन्थ्यो । मैले अष्टसिद्धि भनी टिपें र

मेरा पिताजीलाई सोधें । पिताजीले भागवत्मा हेर् भन्नुभयो । मैले भागवत्बाट अणिमा, महिमा, गरिमा आदि अष्टसिद्धिका नाम टिपेर भोलिपल्ट उहाँलाई दिएँ । उहाँ निकै खुशी हुनुभयो ।

प्रवीणता प्रमाणपत्र तह प्रथम वर्षमा ऐच्छिक नेपाली अध्ययन गर्ने विद्यार्थीहरू त्यसताका ३०० भन्दा बढी थिए । द्रोण सर र मेरो पढाउने कोठा छेउमै थियो । उहाँको कोठाबाट विद्यार्थीहरू विस्तारै मेरो कोठामा भरिँदै गए । एक दिन उहाँले मलाई भन्नुभयो- 'शम्भु सर ! मेरा विद्यार्थी सबै सरुवा गरेर लगिसक्न लाग्नुभयो । बँचेका २-४ जना पनि म पठाइदिन्छु, तपाईं पढाउनुहोस् ।' म त अक्कनवक्क भएँ । कारण, उहाँ मभन्दा सिनियर सर ।

मैले विद्यार्थीहरूलाई त्यही कुरा भनें । उनीहरू भन्दै थिए- सर छिटो बोल्दा राम्रो बुझिन्न । त्यसैले हामी यता आएका । उहाँले त यस कुरालाई साधारण तवरले लिएको पाएँ । तर, मलाई निकै दिनसम्म यस कुराले बिझाइरह्यो ।

जीवनको उत्तरार्द्धमा अर्थात् ४-५ वर्ष अघिदेखि उहाँले २-३ जना साथीहरूसँग मिलेर आलु खेती (अर्काको जमीन भाडामा लिएर) मा समेत हात हाल्नुभयो । पहिलो वर्ष त राम्रै आम्दानी भयो क्यारे, अर्को वर्षदेखि घाटा लागेकाले उहाँले त्यो काम छाडिदिनु भयो ।

डा. द्रोणकुमार उपाध्याय सर साधारण, संघर्षशील, कसैको चियोचर्चो नगर्ने व्यक्ति हुनुहुन्थ्यो । आर्थिक हिसाबले हेर्दा उहाँलाई म निम्नमध्यमवर्गीय व्यक्तिका रूपमा देख्थें । सबै कुरा त मलाई थाहा छैन, तर पनि अन्त्यमा मैले भन्नै पर्ने हुन्छ - उहाँ उच्च विचार र सादा जीवन बाँच्ने व्यक्तित्व हुनुहुन्थ्यो । उहाँको सादा जीवनबाट म निकै प्रोत्साहित भएको छु । अस्तु !

*१५/६/२०७७*

*(लेखक समालोचक हुनुहुन्छ)*



श्रीप्रसाद्ध पोखेल

# भाषाका अम्मली डा.द्रोणकुमार उपाध्याय र स्पेरान्तो भाषा

राणाकालमा राणाहरूसँग बोल्दा शिर निहुऱ्याएर बोल्नु पर्दथ्यो । यदि कसैले शिर उठाएर बोल्यो भने दण्ड-सजायको भागी हुन्थ्यो । भोजपुर, दिङ्ला गढिगाउँका पौडेल खलकका श्रीबिलास पौडेलले राणाका अगाडि शिर ठाडो पारेर बोलेका कारण उनलाई अपमान गरियो । अपमान सहन नसकेर एघार वर्षका छोरा गंगाधर र आफ्नी श्रीमतीलाई छोडेर श्रीबिलास कसैलाई थाहै नदिइकन मुग्लान पसे । जब थाहा भयो- बुबा हराउनु भयो भनेर, गंगाधरलाई चिन्ताले छोप्यो । उनी आफ्नो बुबाको अनुपस्थितिमा गढिगाउँ बस्न नसक्ने भए । एघार वर्षका गंगाधर आमालाई लिएर बुबाको खोजीमा निस्के । तिनताक घर छोडेर हिंडेका मानिस कि त असम (असम) छिर्थे, कि त काँशी । गंगाधर आमालाई लिएर असम पसे । यसरी पौडेलहरूको एउटा हाँगो असमी बन्न पुग्यो । गंगाधर असममै घरजम गरेर बस्दै जाँदा छोरा टीकाराम शास्त्रीको जन्म भयो । टीकारामका पनि द्रोणकुमार नामका पुत्ररत्नको जन्म भयो ।

टीकाराम पौडेल संस्कृत भाषा पढाउनु हुन्थ्यो । उहाँका धेरै शिष्य थिए । बुबाले पढाएको द्रोणकुमार ध्यान दिएर सुन्दथे । ती पढ्ने शिष्यभन्दा द्रोणले धेरै छिटो बुझ्ने र भन्न सक्ने भए । यसरी द्रोणको पढाइको शुरुआत भयो । तर, द्रोणले कहिले पनि संस्कृत भाषाको औपचारिक शिक्षा लिनु भएन, र पनि परीक्षामा सामेल हुँदै मध्यमा तह उत्तीर्ण हुनुभयो ।

द्रोणकुमार भाषाका अम्मली हुनुहुन्थ्यो । कुनै पनि भाषा सुनेपछि सिक्न चाह राख्नु हुन्थ्यो । म प्रसंग जोड्न खोज्दैछु- एस्पेरान्तो भाषाको । शायद तपाईं पाठकलाई पनि थाहा छैन होला, एस्पेरान्तो भाषा । यति सानो हाम्रा देशमा त एक सय तेइस ? भाषा छन् भने संसारमा कति भाषा होलान् ? यो कृत्रिम भाषा हो । हालको पोल्याण्ड भन्ने देशका लुदो भिको लाजारो जामेनहोफ भन्ने व्यक्तिले यो भाषाको सिर्जना गरेका हुन् । यो भाषाको गहिरो जानकारी राख्ने

मानिस हुनुहुन्थ्यो- द्रोणकुमार ।

उहाँसँग २०६४ सालतिर हुनुपर्छ, काठमाडौंमा भेट भएको थियो । म घट्टेकुलोमा एस्पेरान्तो भाषाको कक्षा चलाइरहेको थिएँ । छोरा यशवन्तसँग उहाँ कक्षामा आइपुग्नु भयो । २०-२५ उमेरका केटा पढेको कक्षामा उहाँ निसंकोच बस्नुभयो । हामी सबैले परिचय गर्‍यौं । भद्रपुर मेची क्याम्पसको प्राध्यापक । एस्पेरान्तो भाषा पढ्न काठमाडौं, हामी सबै छक्क पर्‍यौं । उहाँले एस्पेरान्तो भाषाको बारेमा सुन्नुभएको रहेछ । सिक्ने इच्छा लागेर पढ्न आएको भन्नुभयो । लगभग एक हप्ताको कक्षामा उहाँ सामेल हुनुभयो । तर, अरु विद्यार्थीले एक महिनामा सिकेका कुरा उहाँले एक हप्तामै सिक्न सफल हुनुभयो । मलाई पनि उहाँलाई सिकाउन पाउँदा धेरै खुशी लाग्यो ।

अब हाम्रो सम्पर्क बाक्लिन थाल्यो । म उहाँको घरमा आउने-जाने गर्न थालें । शायद तपाईं पाठकले डा.द्रोणकुमार उपाध्यायको 'भाषिक-चिन्तन' अध्ययन गर्नुभएकै होला । पेज नं ४५ मा "एस्पेरान्तो : कृत्रिम विश्वभाषा" शीर्षकमा लगभग एक हप्ताको अध्ययनमा यी सबै व्याकरणका नियम, उच्चारण र अन्य जानकारी समावेश गर्नु चानचुने कुरा होइन भन्ने मलाई लाग्दछ ।

डा.द्रोणकुमारले नेपाली भाषा आमाका काखैमा ताराबाजी लै लै भन्दा नै सिक्नुभएको थियो । असमिया भाषा चैं साथीसंगतीसँग खेल्दाखेल्दै सिक्नु भएछ । संस्कृत भाषा बुबाले विद्यार्थीलाई पढाउँदा पढाउँदै सिक्नुभयो । अंग्रेजी, हिन्दी र बङ्गला भाषा विद्यालयमा अध्ययन गर्दा सिक्नुभयो । राजवंशी भाषा नेपाल आएपछि झापामा सिक्नुभयो । अझ राजवंशी भाषामा त विद्यावारिधि गर्न त्रि.वि.वि.जानुभएको थियो । तर, शोध निर्देशकको अभावले गर्दा विषय परिवर्तन गर्नुभयो । पछि, उहाँले 'राजवंशी परिचय : जाति, भाषा र साहित्य' नामक कृति प्रकाशित गर्नुभयो । यसरी डा.द्रोणकुमार भाषाका अम्मली हुनुहुन्थ्यो भनी प्रमाणित गर्न सकिन्छ । तर, डा.द्रोणकुमारले हामीलाई छिटै छोडेर जानुभयो । उहाँले भाषा-साहित्यका क्षेत्रमा अझै धेरै गर्न बाँकी नै थियो । दुर्भाग्य... हामीले बाँकी प्राप्त गर्न सकेनौं । डा.द्रोणकुमार उपाध्यायमा श्रद्धासुमन !

*२०७७/१०/०८*

*(लेखक पूर्वी नेपाल स्पेरान्तो समाजका अध्यक्ष हुनुहुन्छ)*



हरिप्रसाद न्यौपाने

# द्रोण सरलाई सम्झँदा

डा.द्रोणकुमार उपाध्याय नेपाली साहित्यमा चर्चित नाम 'नवमी' (सहलेखन, असमिया भाषामा नेपाली लोककथा सङ्ग्रह)-१, राजवंशी परिचय : जाति भाषा र साहित्य-२, आदर्श नेपाली व्याकरण-३, भाषिक चिन्तन (भाषिक विश्लेषणात्मक रचना सङ्ग्रह)-४, केही साधक : केही साधना (समालोचना)-५, लोकवार्ता : लोककै चर्चा (लोकसाहित्यसँग सम्बन्धित समीक्षात्मक प्रबन्धहरूको संगालो)-६ र लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ-७ सहित धेरै कृतिहरूका जन्मदाता, बटियामारी, बिहाली, शोणितपुर, असममा माता भेजमायादेवी र पिता टीकाराम शास्त्रीका पुत्ररत्नका रूपमा १९ जुन १९४९ ई.सन् (५ आषाढ २००६ वि.सं.)मा जन्म लिनुभई उत्तर बङ्ग विश्वविद्यालय भारतबाट विद्यावारिधि गरी आफ्नो पुर्ख्यौली थलो नेपाल आउने क्रममा लामो समयदेखि झापा जिल्लाको चन्द्रगढी गा.वि.स., वडा.नं- ७ (हालको भद्रपुर न.पा., वडा नं- १०) मैत्री टोलमा बसोबास गर्दै मेची बहुमुखी क्याम्पस-भद्रपुरमा प्राध्यापन पेशामा सम्लग्न रही आउनुभएको थियो ।

लामो समयदेखि नै म पनि यो चन्द्रगढीमा बसोबास गर्दै आएको भए तापनि द्रोण सरसँग मेरो सम्पर्क रहेन । म पनि आफ्नो पेशामा व्यस्त, उहाँ पनि व्यस्त । त्यसैले होला, देखाभेट हुँदा 'नमस्कार' बाहेक अन्य आत्मीयता साटासाट हुन सकेन । हुन सक्छ- "मृगाःमृगैःसङ्गमनुब्रजन्ति" भने झैं भएको । द्रोण सर प्राध्यापक, म साधारण किसान ।

२०७० साल लागेपछि म साहित्य क्षेत्रमा कलम चलाउन लागें । चन्द्रगढी-भद्रपुरका साहित्यकारहरूले आफ्नो प्रतिभा देखाउने, क्षमता बढाउने थलो लेखनाथ पुस्तकालय भएको कुरा थाहा भई म पनि लेखनाथ पुस्तकालयमा जान लागें, त्यो पल नै मेरा निम्ति खुशीको पल रह्यो । जहाँ मैले चूडामणि रेग्मी, डा.द्रोणकुमार उपाध्याय, होम सुवेदी, नवराज घिमिरे, कृष्ण सुवेदी, देवीचरण भण्डारी, आरती

पोखेल, खगिन्द्रा खुशी, लता खरेल जस्ता साहित्यिक मनहरूको सङ्गत गर्न पाएँ । यही सुन्दर पलले नै मलाई पनि साहित्यकारको रूपमा उभ्याएको छ ।

यहाँ आफ्नु कुरा गर्नुभन्दा पनि द्रोण सरको प्रसङ्ग जोड्नु छ । भेट भएका बेला अभिवादनका दुई हात जोडाइमा मात्र सीमित रहेका हामीबीच घनिष्टता बढ्दै गयो । 'सङ्गत गुनको फल' भने झैं म पनि छन्द विधामा कलम चलाउन लागें । मेरो ढल्किंदो उमेरको प्रयासलाई द्रोण सरले मुक्तकण्ठले प्रशंसा गर्नुहुन्थ्यो । हामीबीच अब साहित्यकारको नाता जोडिइसकेको थियो । द्रोण सरका त्यो समयमा ६ वटा पुस्तक प्रकाशित भइसकेका रहेछन् । मैले सरलाई प्राध्यापक मात्र नभई असल साहित्यकारका रूपमा हेर्ने मौका पाएँ । मेरो 'तरङ्ग' कविता सङ्ग्रह र 'हाम्री फुपू' महाकाव्य प्रकाशित भइसकेपछि द्रोण सर जहाँ देखे भेटे पनि 'के छ कवि जी' भनेर सम्बोधन गर्नुहुन्थ्यो, द्रोण सरको सो वाक्यमा म स्नेह भरिएको पाउँथें । त्यो सुन्दर पल अब अतीत बनिसकेको छ, अब हामीले चाहेर पनि द्रोण सरलाई पाउन सक्तैनौं । 'द्रोण सर' २०७६/१०/१५ मा नै हामीबाट बिदा भइसक्नु भएको छ ।

द्रोण सरको निधनले सिङ्गो समाज मात्र होइन, सिङ्गो साहित्य नै मर्माहत भएको छ । अब उहाँका कृतिहरू र कीर्ति मात्र हाम्रा भागमा परेका छन् । हामी अब द्रोण सरलाई कृति र कीर्तिबाट मात्र अमर देख्न बाध्य छौं ।

द्रोण सरका सबै कृतिहरू पढ्न नपाए पनि केही मेरा हातमा छन् । तीमध्ये ' भाषिक चिन्तन'का केही कुरा कोट्याउन मन लाग्यो । यो २०६५ सालमा मोती जयन्तीको अवसरमा प्रकाशित समालोचना कृति हो । प्रकाशक यशवन्त पौडेल रहेको यस कृतिमा प्रबन्धक श्रीमती मीरा पौडेल रहनुभएको छ । छपाई ५०० प्रति, मूल्य रु.१००।- भएको यस पुस्तकमा उत्तर बङ्ग विश्वविद्यालय, बागडोग्रा (दार्जीलिङ)मा नेपाली विभागका प्रा.डा.घनश्याम नेपालको भूमिका रहेको छ । कृतिमा विभिन्न भाषाको चर्चा गरिएको छ । भाषिक चर्चा सम्बन्धमा भाषिका विज्ञान शीर्षकबाट शुरु गरिएको यो समालोचनामा विभिन्न ११ शीर्षक दिएर भाषाको विश्लेषण भएको पाइन्छ । जम्मा १०० पृष्ठ देखिने यस पुस्तकमा भूमिका, आफ्नो भनाइ, समेत कभरपेज बाहेक अन्य ६ पेज थपेर १०६ गन्न सकिन्छ ।

यसभित्र भाषिक चर्चा सम्बन्धमा भाषिका-विज्ञान पाना १ देखि पाना ९ सम्म, नेपाली भाषाका निर्मित सङ्ख्यात्मक शब्दहरू १० देखि १५ सम्म, असमको नेपाली भाषामा स्थानीय प्रभाव १६ देखि २१ सम्म, विभाषीहरूद्वारा 'छ' एवम् 'देख्नु' हेर्नु

प्रयोग गर्दा देखिने समस्या-समीकरण : एक चिन्तन पाना २२ देखि २८ सम्म, अङ्ग्रेजी कि अङ्ग्रेजी ? पाना २८ देखि ३४ सम्म, राजवंशी भाषाको भाषिक संरचनाका केही पक्ष ३५ देखि ४४ सम्म । एस्पेरान्तो- कृत्रिम विश्वभाषा ४५ देखि ५२ सम्म, प्राचीन पूर्वीय जगत्मा भाषा चर्चा- ५३ देखि ६२ सम्म । व्याकरणकार पाणिनि छोटो विश्लेषण ६३ देखि ८१ सम्म । डा.सुनीति कुमार चट्टोपाध्य- आधुनिक भाषा चिन्तनका उज्ज्वल नक्षत्र ८२ देखि ८८ सम्म र पाश्चात्य विद्वानहरूमा संस्कृत भाषानुराग ८९ देखि १०० पेजसम्म । यसरी विभिन्न ११ शीर्षकमा भाषाको चर्चा गर्दै उहाँले आफ्नो यो कृतिलाई पूर्णता दिनुभएको छ ।

व्याकरणकार पाणिनिको विषयमा विश्लेणण गर्दै तत्काल भारतवर्षमा प्रचलित संस्कृत भाषालाई वैज्ञानिक ढङ्गले अध्ययन गरी सर्वकालीन आदर्श व्याकरण रचनाकार पाणिनि नै थिए । कात्यायनी, पतञ्जलि, उनीपछिका सहयात्री हुन् भन्दै पाणिनि नै पहिलो भाषा (व्याकरण)विद् भएको कुरा आफ्नो व्याकरणकार पाणिनि शीर्षकको उन्नाइस पेज लामो विश्लेषणबाट द्रोण सरले प्रमाणित गर्नुभएको छ ।

भाषा समयानुसार परिवर्तन हुँदै जाने भएकोले समय र स्थान अनुसार परिवर्तन हुँदै जाने निर्विवाद छ । 'प्राचीन पूर्वीय जगत्मा भाषा चर्चा' भन्ने शीर्षकबाट उहाँले विभिन्न उदाहरणहरू दिंदै भाषिक चर्चा गर्नुभएको छ ।

यो पुस्तकको अद्योपान्त पढ्दा उहाँ विभिन्न भाषाको ज्ञान रहेको एक विशिष्ट विद्वान हुनु हुँदोरहेछ भन्ने प्रष्ट हुन्छ ।

डा.द्रोण सरद्वारा लिखित प्रस्तुत कृतिभित्र रहेका सबै शीर्षकहरूको बारेमा यो सानु लेखमा चर्चा गरेर सकिने कुरा असम्भव छ । भाषा सम्बन्धमा जानकारी राख्न चाहनेहरूका लागि यो पुस्तक अति उपयोगी हो भन्ने मलाई लागेको छ । यो कृतिको खोजी गरी एकपटक अध्ययन गर्न सबैमा अनुरोध समेत गर्दछु ।

हाल नेपाली साहित्याकाशमा चट्याङ परेको छ । हामीले एउटा विशिष्ट विद्वान् गुमाएका छौं । यो घाउ निको हुन गाह्रो छ । द्रोण सरको आत्माले चिर शान्ति पाओस् ।

*भाषाका महनीय चिन्तक तिमी विद्वान् गुरु द्रोण हे !*
*तिम्रो कीर्ति सदैव जीवित रहोस् भन्छौं खुला चित्तले ।*
*आएथ्यौ यस लोकमा रवि बनी आभा छरेरै गयौ,*
*यो धर्ती बीच कल्पकल्प रहने गाथा भरेरै गयौ ॥*

*भद्रपुर- १०, झापा*

*(लेखक महाकाव्यकार हुनुहुन्छ)*



हिराप्रसाद पोखेल

# डा.द्रोणकुमार उपाध्याय पौडेलप्रति शब्द श्रद्धाञ्जलि

डा.द्रोणकुमार उपाध्याय पौडेल वि.स. २००६ असार ५ गते बुबा टीकाराम पौडेल तथा आमा भेजमाया पौडेलको कोखबाट भारतको असम राज्यको बिहाली-बटियामारीमा जन्मनुभएको हो । २०३४ सालदेखि मीरादेवीसँग दाम्पत्य जीवनमा बाँधिई २ छोरीहरू योगिता र यवनिका तथा छोरा यशवन्त पौडेललाई जन्म दिई हुर्काउनुभयो । २०४१ सालमा यो पंक्तिकार मेची क्याम्पसमा अध्ययन गर्न जाने क्रममा उहाँसँग प्रथम भेट भयो । त्यसपछि दिनहुँजसो प्राध्यापक र विद्यार्थीको नाताले घनिष्टता बढ्न थालेको थियो ।

विद्यार्थीहरूमा अगुवाको रूपमा एक-दुई पटक विद्यार्थीहरूका कार्यक्रममा मैले बोलेको उहाँले सुन्नु-देख्नुभयो । त्यसैले 'तिमी त नेता रहेछौ । भविष्यको हाम्रो पञ्चायतको प्रधानपञ्च' भनी हँस्यौली गर्नुहुन्थ्यो । २०४३ सालको पञ्चायती व्यवस्थाभित्र पसेर पञ्चायतलाई ध्वंश गर्ने नीति अनुरूप २०४३ सालमा प्रधानपञ्चको उम्मेदवार दुर्गाप्रसाद भट्टराई र उपप्रधानपञ्चको उम्मेदवार राजेन्द्रप्रसाद निरौलालाई लिई घरदैलो अभियानमा जाँदा 'हाम्रो भावी प्रधानपञ्चले ल्याएका उम्मेदवारलाई भोट हाल्नै पर्‍यो नि !' भनी हँस्यौली गर्नुहुन्थ्यो ।

यसरी नै मैले २०४५-४९ सालसम्म मेची क्याम्पस, स्वतन्त्र विद्यार्थी युनियनको सचिव पद सम्हालें । डा.द्रोणकुमार उपाध्याय, सहायक क्याम्पस-प्रमुख हुनुहुन्थ्यो । सोही समयमा मेची क्याम्पसको विज्ञान संकायको भवन निर्माण गर्न झापा जिल्लाभरि क्याम्पस भवन निर्माणार्थ सहयोगको अपील गर्दै घरदैलो अभियान सञ्चालनमा उहाँ सामेल हुनुभयो । यस क्रममा झापाका तत्कालीन विभिन्न गाउँ-नगर पञ्चायतमा बसोबास गर्ने दाताहरू समक्ष पुग्ने कार्यले हामी बीच अझ सम्बन्ध गहिरिएर गयो ।

यसरी नै २०३७ सालबाट चन्द्रगढी- ५ र चन्द्रगढी- ९ को मिलनबिन्दु र हालको प्रकाशपुर क्षेत्रलाई पुरानो नाम पोकापाडाबाट रूपान्तरण गर्ने अनि

चन्द्रगढी- ९ को मिलनबिन्दु देवकोटा चोक र सो स्थानमा लक्ष्मीप्रसाद देवकोटाको अर्धकदको शालिक निर्माण गर्न उहाँले सहयोग गर्नुभएको छ। त्यसैगरी, हरेक वर्ष लक्ष्मी पूजाको दिन देवकोटा जन्मजयन्ती मनाउँदा सो कार्यक्रममा हामीले साहित्यकारका रूपमा डा.द्रोणकुमार सर लगायतलाई उपस्थित गराई महाकविका सम्बन्धमा विचार अभिव्यक्त गराउने गर्थ्यौं ।

साथै, एकताका मृत्युशैयामा रहेको अवस्थाको लेखनाथ पुस्तकालयलाई हामी सहित चन्द्रगढी गा.वि.स.का प्रतिनिधिहरू मिलेर गायौं। डा.द्रोणकुमार सर एकपटक लेखनाथ पुस्तकालयको अध्यक्ष र तारा विविध (पौडेल) सरलाई सचिवमा पदस्थापन गर्ने प्रस्ताव पारित गरायौं। त्यो बेला 'लेखनाथ पुस्तकालयको आफ्नो कुनै ठाउँसम्म छैन, कहाँ बसेर संस्था सञ्चालन गर्ने ? मलाई यस्तो अवस्थामा नेतृत्वको प्रस्ताव नगर' भनी डा.द्रोण सरले पटक-पटक भन्नुभयो। तर, निकट भविष्यमै हामी पुस्तकालयका लागि जग्गा र भवनको प्रबन्ध गर्छौं, सर निश्चिन्त भएर यो संस्थालाई अघि बढाउनुहोस्' भनेको एकाध दिनपछि नै तत्कालीन चन्द्रगढी गा.वि.स.को एउटा कोठा उपलब्ध गराउन गा.वि.स.समक्ष पहल गऱ्यौं र कोठा समेत उपलब्ध गरायौं। र, त्यो नै हाम्रो  दैनिक भेटघाट गर्ने चौतारी बन्यो।

विभिन्न सामाजिक गतिविधिमा सरिक हुने सोही क्रममा म पनि लेखनाथ पुस्तकालयको उपाध्यक्ष, सदस्य, सल्लाहकार हुँदै, देवकोटा स्मारक निर्माण समितिको सदस्य, सचिव र सल्लाहकार साथै पारिजात उद्यान निर्माण समितिको सदस्य पनि भएँ। त्यस हैसियतले पनि विभिन्न साहित्यिक कार्यक्रममा उहाँसँग सामीप्यता बढ्दै गयो। २०५१ सालमा महाकवि देवकोटाको शालिक प्रगतिवादी चिन्तक एवम् साहित्यकार मोदनाथ प्रश्रितबाट अनावरण गराउने कार्यमा लागिरहँदा सरसँग अझ स्नेहभाव बढ्न गयो। यसरी यस पंक्तिकारसँग प्राध्याक र विद्यार्थी, जनप्रतिनिधि र शुभचिन्तक, साहित्यिक चौतारीका सहयात्री, सामाजिक अभियन्ता, राजवंशी भाषाबाट दुबै जोडिने र बहस गर्ने जस्ता गतिविधिले हामीबीच अत्यन्त सामीप्यता रहेको थियो। त्यसपछि २०७६ सालको लक्ष्मीप्रसाद देवकोटा जन्म जयन्तीका अवसरमा सम्मान गरिसक्दा नसक्दै आदरणीय गुरु डा.द्रोणकुमार उपाध्याय पौडेल अर्बुद रोगका कारण २०७६ सालकै माघमा यस धराधाममा रहनु भएन। आदरणीय गुरु डा.द्रोणकुमार उपाध्यायमा सादर शब्द-श्रद्धाञ्जलि !

*- चन्द्रगढी, भद्रपुर- ९ (झापा)*

*(लेखक समाजसेवी एवम् डा.द्रोणकुमार उपाध्यायका विद्यार्थी हुनुहुन्छ)*



त्रिलोचन भट्टराई

# द्रोण सरको सम्झनामा

वि.सं.२०१८-१९ साल तिरको कुरा हो । असम, तेजपुर अन्तरगत कोसमारा भन्ने एउटा गाउँमा करीव चालीस-पैंतालिस गोठ गाई-भैसीको गोठ थियो । ती गोठहरुमध्ये हामी भट्टराई परिवारहरुको मात्रै पच्चीसतीस गोठहरु थिए ।हामी छुट्टीमा गोठ जान्थ्यौं, र त्यहाँ साथीभाई मिलेर विभिन्न खेलहरु खेल्थ्यौं ।

असममा हरेक वर्ष मनाइने एउटा पवित्र चाड छ, 'रङ्गाली विहु' भन्ने । त्यो वैशाख सक्रान्तिका दिन पर्छ । त्यसका लागि हप्तादिन अघिदेखि नै नाचगान र समाइलो सुरुहुन्छ । त्यसबेला हाम्रो दश-बाह्र दिन स्कुल विदा हुन्थ्यो । त्यो पर्व हाम्रो तिहार जस्तै केटाकेटीहरु मिलेर विहु गान गाउने, नाच्ने गर्थ्यौं, चामलका पीठाको विभिन्न परिकारहरु बनाएर खाने गर्थ्यौं । त्यो चलन असममा ऐलेपनि छँदैछ ।

यस्ता पर्व विदाहरुमा हामी पनि गोठ जान्थ्यौं । त्यो वर्षको त्यो पर्व विदामा हामी पनि गोठ गोठ गयौं, त्यो वर्ष एकजना १३-१४ वर्षको एकजना खाइलाग्दो ठीटो मावल आएका थिए । उनका मावली पनि भट्टराई भएकाले हामी ती ठीटालाई भाञ्जाभाई भनेर बोलाउँथ्यौं । माक्क-मुक्क परेका लाललाल वर्णका, हँसिला-खुसिला अनुहार भएका सेता पाइजामा र असमे मुगाको कुर्था लगाएको, निधारको भृकुटीको वीचमा रातो टीका लगाएको ती ठिटाको नाम रहेछ द्रोणकुमार उपाध्याय ।

करीव साता-दश दिनको हाम्रो भेटमा उहाँ सँगसँगै बसेर खाने, खेल्ने मौका पायौं हामीले । हामी गाउँका दश-बाह्रजना जति भेला भएर त्यस बेलाका खेलहरु- कबड्डी खेल्ने, अन्य खेलहरु पनि खेल्ने, ब्रह्मपुत्रमा नाउ खियाउने, र पौडी खेल्ने गर्थ्यौं । उहाँ असाध्यै मिलनसार, मृदुभाषीका रुपमा हामीले त्यसबेला देखि नै पाएका थियौं । पछि उहाँ मावलबाट घर तर्फ लाग्नु भयो । घर कहाँ हो,

के थरिको हुनुहुन्थ्यो हामीले थाहा नै पाएनौं, तर मलाई त्यो बाल्यपनको सम्झना रहिनै रह्यो । त्यसपछि हाम्रो लामो समयसम्म भेट हुन सकेन ।

२०४१-४२ साल तिरको कुरा हो, चन्द्रगढीमा द्रोणकुमार उपाध्याय असमबाट बसाईं सरेर आउनु भएको र मेची कलेजमा पढाउनु हुन्छ रे भन्ने सुनेपछि कतै हाम्रै भट्टराईका भाञ्जा त होइनन् ? जो पर्षौं पहिले हाम्रो भेट भएको थियो भन्ने लागेर म उहाँसँग भेट गर्न गएँ । २२-२३ वर्ष पछि भेट भएर सोधी-खोजी कुराकानी गर्दा हामी दुवै बाल्यकालको यादमा मग्न भयौं ।

हाम्रो फेरि त्यही साइनो भाञ्जा दाजुको चलन भयो । उहाँ दशैमा हाम्रो आमाको हातको टीका थाप्न "माइजु म आएँ, आशीर्वाद दिनू, दक्षिणा होइनँ !" भन्दै ठट्यौली पाराले भन्नुहुन्थ्यो । आमा पनि भाञ्जा आउनु भएछ चिया ल्याउ है भन्नुहुन्थ्यो । आमाले आफुसँग भएका प्रसादी नरिवल, छोकडा दिँदा "दाजु मलाई माइजुले कति मायाँ गर्नुहुन्छ !" भनेर मेरो दाजु खाडानन्द वाशिष्ठसँग भन्नुहुन्थ्यो । उहाँका ती मीठा बोली ऐलेपनि ताजैछन् । द्रोणसर ऐले हामीबीच नभएपनि उहाँका कृतिहरुले हामीलाई सम्झाइरहेको छ 'म यही छु, कही गएको छुइनँ' भनेर ।

अन्त्यमा, द्रोणसरप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु । उहाँको आत्माले सदा शान्ति पाओस् कामना गर्छु ।

*- भद्रपुर-१०, केन्द्रमोड, झापा*

*(लेखक- डा. द्रोणकुमार पौडेलको पारीवारिक निकट व्यक्तित्व हुनुहुन्छ ।)*



डा. इन्दुप्रभा देवी

# प्रा.द्रोण उपाध्यायको असमिया सहअनुवाद कृति : नवमी

**विषय प्रवेश :**

लोकसाहित्य तथा लोकवार्ताका विशेष अध्येता डा. द्रोणकुमार उपाध्याय नेपाली साहित्यकै वलिष्ठ हस्ताक्षर मानिनु हुन्छ। उहाँको साहित्यिक जीवनको प्रारम्भ जन्मभूमि असममा भयो र विकास कर्मभूमि नेपालमा। हुन त प्रारम्भिक स्तरमा असम पनि उहाँको कर्मभूमि थियो। नेपाली मात्र नभएर संस्कृत, हिन्दी, असमिया, राजवंशी, बंगला आदि विभिन्न भाषामा पारंगत, बहुमुखी प्रतिभाका धनी प्राज्ञ पुरुष डा. उपाध्यायका महत्वपूर्ण मौलिक कृतिहरू त छँदैछन्, अप्रकाशितै रहेका अनुवाद कृतिहरू, सहलेखनमा पनि प्रकाशित छन्; अनुवाद र मौलिक कृति। विभिन्न भाषाका पत्रपत्रिका र पुस्तकहरूमा उहाँका विश्लेषणात्मक, शोधपरक निबन्धहरू प्रकाश भएका छन्। डा. उपाध्यायले असमका प्रख्यात साहित्यिक भाषाविद् तारापति उपाध्यायसित सन् २००५ मा आदर्श नेपाली व्याकरणको सहलेखन गर्नुभएको थियो। असम भेकमा त्यो थियो, भाषा विषयको एउटा महत्वपूर्ण काम। तर, त्यसभन्दा धेरै अघि पनि सन् १९७७ मा तारापति उपाध्याय र अरू एक जना वरिष्ठ साहित्यिक टीकाराम उपाध्याय 'निर्भीक'सित मिलेर उहाँले असमिया भाषामा नेपाली लोककथाको सङ्ग्रह गरी अनुवादको काम गर्नुभएको थियो। असम साहित्य सभाले नवमी शीर्षकमा त्यस सङ्ग्रहलाई दुई पटक प्रकाशित गरेको थियो। लोककथाको त्यो सङ्ग्रह र सहअनुवाद कृतिको दोस्रो संस्करण मेरा हातमा छ र त्यसकै संक्षिप्त चर्चा गर्ने सानो प्रयास गरेकी छु, यस निबन्धमा।

**नवमी कथा कृतिको प्रकाश सन्दर्भ :**

असमको सबैभन्दा व्यापक, सबैभन्दा जनप्रिय र वलिष्ठ साहित्यिक संस्था हो- असम साहित्य सभा। सन् १९१७ मा जन्मिएको यो संस्थाले

असमका सबै जाति जनजातिको उत्तरोत्तर उन्नतिका निम्ति विभिन्न साहित्यिक चिन्तनहरूलाई, प्रस्तावहरूलाई कार्यान्वयन गर्दै आएको छ। त्यस्तै कार्यभित्रको एउटा थियो 'नवमी'।

सन् १९७७ मा प्रकाशित नवमीको पहिलो संस्करणमा असम साहित्य सभाका तदानीन्तन मुख्य सचिव हेमन्तकुमार शर्माले आफ्नो मन्तव्यमा लेखेका कुराले नवमीको प्रकाश पक्षलाई स्पष्ट पारेको छ। असमका विभिन्न जाति-उपजातिहरू एउटा विराट असमिया जातिकै शाखा-प्रशाखा र अविच्छेद्य अङ्ग हुन्। असममा अनेकौं जाति-उपजाति बाहेक पनि विभिन्न धर्मका मानिस छन्। ...असमिया जातिलाई सम्यक रूपमा जान्न खोज्नु हो भने यिनीहरूको सुख दुःखको कुरा पनि बुझ्नु पर्ने हुन्छ। हामी सबै एकजुट भएर असमिया तथा महान भारतीय जातिका रूपमा समृद्धिको बाटामा हिँड्नलाई असम र छिमेकी राज्यका बासिन्दाहरूले परस्पर भ्रातृत्वको भाव अङ्गाल्नु पर्दछ। तर, त्यसभन्दा पहिला हामीले परस्परलाई बुझ्नु पर्दछ; परस्परको साहित्य, कलाकृष्टि तथा जातीय विशेषताहरूप्रति श्रद्धा गर्नु पर्दछ। यस्तै एउटा महान् उद्देश्य अघि राखेर असम साहित्य सभाको कार्यकारिणी समिति (१९७६-७७) ले असम र छिमेकी राज्यमा बसोबास गर्दै आएकाहरूको विभिन्न जनगोर्षठिका बीचमा प्रचलित लोककथाहरू सङ्ग्रह र सरल भाषामा प्रकाश गर्नलाई एउटा योजना लिएको छ। लोककथाको सङ्ग्रह गर्ने असम साहित्य सभाको यस योजनानुसार नै कार्वि, राभा, बडो, देउरी, मिसिङ आदिका लोककथा सँगसँगै नेपाली लोककथा नवमीको पनि प्रकाशन भएको हो।

खुशीको कुरा, सन् १९९० मा 'नवमी'को दोस्रो संस्करण पनि निस्कियो। त्यस समयमा मुख्य सचिव सतीशचन्द्र चौधुरीले नवमीसहित अरू धेरै पुस्तकहरू हतार-हतार प्रकाशन गर्नु परेको कुराको उल्लेख गर्नुभएको छ। यस पुस्तकमा सङ्ग्रहको भनाई अन्तर्भुक्त गरिएको छैन। सङ्ग्रहकको नाम क्रम अनुसार यसरी छन्- श्री द्रोण उपाध्याय, श्री तारापति उपाध्याय, श्री टीकाराम उपाध्याय ' निर्भीक'। नेपाली समाजमा बहुप्रचलित यी लोककथा वा दन्तेकथाको सङ्ग्रह गरी असमिया अनुवाद गर्ने व्यक्तिका रूपमा पुस्तकमा तीन जनाको नाम यसरी उल्लेख गरे तापनि कुन कथा कसले सङ्ग्रह गरी अनुवाद गर्नुभएको हो, त्यसको उल्लेख भने छैन। पुस्तकको प्रकाशकका रूपमा मुख्य सचिवको नाम छ। असम साहित्य सभाको नामोल्लेख बाहिरी पृष्ठमै छ। दोस्रो प्रकाशमा सर्वमोठ आठ हजार छापेको कुरा उल्लेख छ। यसको बाहिरी पृष्ठको अलंकरण धनञ्जय

शर्माले गरेका छन् । गुवाहाटीको शिलपुखुरीको अरुणोदय प्रेसबाट निस्किएको यस पुस्तकको मूल्य छ- पाँच रुपिया ।

**साधारण दृष्टिमा लोककथा र दन्तेकथा**

पृथ्वीका जुनसुकै भाषाले लिखित रूप पाउनु अघि अलिखित मौखिक साहित्यको परम्परा बोकेकै हुन्छ । एक पुस्तादेखि अर्को पुस्ता हुँदै लोकसमाजमा मौखिक रूपमा प्रचलित हुँदै आएका यस्ता साहित्यमा न रचनाकारको नाम हुन्छ, न ठोस समयको उल्लेख । लोकसाहित्यका अनेक विधामध्ये लोककथालाई एउटा मुख्य विधा मानिन्छ । कल्पनाको स्वच्छन्द उडान भरेर मानव समाजका नीति, कुनीति, न्याय अन्याय, विश्वास अविश्वास, स्नेह द्वेष, प्रेम इर्ष्या, सरलता कपटता आदि पक्षहरूलाई धरोहर बनाएर कथा बुन्ने प्रवृत्ति मानिसको आदिम प्रवृत्ति हो । प्रकृति, जीवजन्तु र मानिसले आत्मिक सहावस्थान गरेर बस्नाले पनि होला, लोककथाहरूमा प्रकृतिले पनि जीवन्त चरित्रको जस्तो र जीवजन्तुले पनि मानिसको जस्तो व्यवहार गरेको देखिन्छ । बालमनोजगतलाई आकृष्ट गर्न पनि यस्ता सबै किसिमका चरित्र समावेश गरिएको हुन सक्छ । अरू त के, कुनै-कुनै कथामा ईश्वर पनि साधारण पात्रका रूपमा चित्रित भएका हुन्छन् । यसरी पुस्ता-पुस्ता चल्दै आएका धेरैजसो कथाहरूमै वास्तविक जगतको लौकिक र धारणाको परिधि नाघेर अलौकिक, असम्भव विचित्र जगत्को निर्माण गरिएको हुन्छ । लोककथाहरूको अध्ययनमाथि पश्चिमेली पण्डितहरूले बडो महत्व दिएका छन् । उनीहरूले लोककथाहरूको कथानक प्रवृत्ति हेरेर विभिन्न विभागमा कथाहरूलाई विभाजन पनि गरेका छन् । हुन सक्छ, आधुनिक साहित्य प्रसंगमा यी लोककथाहरूको त्यतिबिघ्न महत्व नहोला, तर समाज तत्वको अध्ययनका लागि यी कथाहरूको मूल्य असीम छ ।

नेपाली समाजमा लोककथालाई दन्तेकथा भनेर पनि जानिन्छ । उल्लेख गर्नुपर्ने कुरा के हो भने, एउटा भाषाका लोककथाले विभिन्न अञ्चलमा आञ्चलिक विशेषता बोकेर केही फरक रूप पाउन पनि सक्छ । नेपालमा प्रचलित कथाहरू असममा अथवा अन्तै कतैको समाजमा सय प्रतिशत यथावत नहुन सक्छन् । किनकि लिखित रूप पाउनुअघि जनजिब्रो मार्फत बगेर आएका यी कथामा कतै-कतै केही थपघट हुनु स्वाभाविक कुरा हो । वर्णनमा केही भिन्नता भए पनि मूल कथानक प्रायः एकै रहेको देखिन्छ । यस्ता कथा भन्ने छुट्टै नियम पनि

सँगसँगै चलिआएका छन् । अन्य समाजमा यस्ता नियम नभएका होइनन् । ‘ दन्तेकथा राति मात्र सुनाउन सकिन्छ, दिउँसो यी कथा सुन्नु वा सुनाउनु हुँदैन’ भन्ने विश्वास नेपाली लोकसमाजमा प्रचलित छ। कथा एक्कासी शुरु नगरेर एकादेशमा वा एकादेशका टुप्पाका/टाकुरीमा भनेर शुरु गर्ने र अन्त्यमा ‘सुन्नेलाई सुनको माला, भन्नेलाई फूलको माला, मेरो कथा बैकुण्ठ जाला, भन्नेबेला तात्तातै आइजाला’ भनेर समाप्त गर्ने चलन पनि देखिन्छ। असमियामा ‘हाम्रा पनि लुगाफाटा मैला भए, अनि हामी पनि फर्किएर आयौं’ भनेर कथाको समाप्ति गरिन्छ । हिजोआजका दिनमा चाहिं यी विश्वास वा चलनहरू पनि कथा जसरी नै प्रायः हराइसकेका छन् ।

**नवमीका कथाहरूको विषय :**

नवमी नौ वटा अनुदित लोककथाको सङ्ग्रह हो। नौ वटा कथा हुनाले नै नवमी नाम राखिएको हुनुपर्छ। यसमा भएका कथाहरू असमिया शीर्षकमा क्रम अनुसार यसरी छन् - डल्ला आरु टपरा (डल्ला र टपरा), निमातीर मात (नबोल्नेको बोली), धूर्त शियालर कथा (छट्टु स्यालको कथा), सोणकेशी कुँवरी (सुनकेशरी मैया), पुरुषर बुद्धि आरु स्त्री र साहस (पुरुषको बुद्धि र स्त्रीको साहस), रिमाल आरु योगी (रिमाल र जोगी), फुलकुमारी, बाहुत चन्द्र सूर्य थका कौँवर र कथा (पाखुरामा चन्द्र सूर्य भएका कुमारको कथा) र (खेरर जुइ) परालको आगो। परालको आगो नाम चाहिं असमियामै लेखेर असमिया अर्थ खेरर जुइ चाहिं कोष्ठकभित्र दिइएको छ।

डल्ला र टपरा शीर्षक कथा नेपाली लोकसमाजमा बहुप्रचलित कथा हो, जसमा डल्ला र टपराको बन्धुत्व र एक्कासी आएको विपद्मा दुबैको सर्वनाश भएको कुरा छ। डल्ला र टपराले मित लगाएर दुबै एकसाथ खुशीले बसेका हुन्छन् । एक दिन डल्लाले भन्छ- बर्खा आउँदैछ, पानी पऱ्यो भने म भिजेर गलेर जान्छु, साथी ! तिमी छोपिदिनू ल ।’ टपराले भन्छ- ‘हुन्छ साथी ! तर, पानी नपरेर हावाहुण्डरी आयो भने मलाई उडाएर लान्छ, तिमीले थिचिदिनू ल’ भन्यो । त्यसदिन राति दुबै निदाएपछि अचानक ठुलो पानी पनि पर्छ, हावाहुण्डरी पनि आउँछ। के गरौं, कसो गरौं हुँदाहुँदै हावाले टपरालाई उडाएर लान्छ भने माटाको डल्लो माटामै बिलाउँछ। कथा यतिमै टुङ्गिन्छ। असमियामा दुबैको मितेरीको कुरा र विपत्तिको कुरा छोटकरीमै लेखिएको छ।

दोस्रो कथा नबोल्नेको बोली पनि एउटा छोटो र सरल मनको कथा हो । बाटुले बिलका रामचन्द्र पुरेतका धेरै सन्तानहरू एक-एक गरी मरेर गएपछि बाँचेको एउटै सन्तानको नाम उनले गुहे राखे । गुहे दश वर्षको भएपछि गाउँकै सात वर्षकी चेली नेप्टीसित बिहे गरिदिए । केही वर्ष माइतमा बसेर नेप्टी घर त आई, तर ऊ गुहेसित बोल्दै बोलिन । घरको सबै काम राम्रोसित गरे पनि त्यो नबोल्ने बानीले गर्दा गुहेको मन खिन्न भयो । एक दिन त 'आज चाहिं म बोलाएरै छाड्छु' भन्ने ठानी धोतीको लामो फुर्कोमा आगो लाग्न सक्ने गरी अँगेनाको डिलमा बस्यो । ठिक त्यसैबेला नेप्टी खानेकुरा लिएर आई । उसले खानेकुरा राख्दै गर्दा धोतीको फुर्कोमा आगो लागेको देखी अनि कसैको धोतीको फुर्कामा आगो लाग्यो है भन्दै कराई । नबोल्नेले बोली भन्दै गुहे मुसुक्क हाँस्यो । त्यस दिनदेखि दुबैको बोलिचाली हुन थाल्यो र हाँसिखुशी घरसंसार चलाउन थाले ।

छट्टु स्यालको कथा एउटा लामो कथा हो । स्यालको चतुराइँ र धेर चतुराइँले निम्त्याएको विपद्को वर्णन कथामा छ। यो कथा डल्ला र टपराजस्तै धेरै प्रचलित कथा हो । एउटा गाउँको एउटा ठुलो जङ्गलमा बस्ने छट्टु स्यालले चील आयो, चील आयो भनी कराई मान्छेलाई माथि हेराउँदै तल कुखुरा च्यापेर भाग्ने गरेको वर्णन छ । त्यसरी नै एक दिन मान्छेले समातेर घिसार्दा जता कष्ट पाउँछ, त्यता अहा कस्तो सन्चो भयो भनेर चतुराइँ गरेको र मान्छेले लगेर एउटा रूखमा बाँधेपछि बाटामा हिंड्नेहरूबाट मुक्की खाएर झन् मोटाएको, भालुलाई फँसाएर त्यहाँबाट भागेको, पछि मरेका हात्तीको मलद्वारबाट पसेको बेला महादेवलाई पनि ठगेको, महादेवले एउटा लिसोको बालक बनाई त्यसका हातमा लड्डु राखिदिएर स्याललाई फँसाएको र अन्तिममा पार्वतीले माफ गरिदिएपछि महादेवकै गणमा भर्ना भएको लामो वर्णन यसमा छ ।

नेपाली समाजमा सुनकेशरी मैयाको कथा (कतै सुनकेशरी रानीको कथा भनिन्छ) नसुनेका शायदै कोही  होलान् । असमिया अनुवाद सोणकेशी कुँवरीमा मूल कथानक एकै छ । एकपछि एक सुनकेशरीका तिनै घटनाक्रम यसमा छन् । सुनकेशरीको केश हराउँछ अनि राजाले जसले भेट्छ, त्योसित उसको विवाह गरिदिने भनी घोषणा गरेपछि दुर्भाग्यवश आफ्नै माइला दाजुले त्यो केश प्राप्त गर्छ, सुनकेशरी दुःखले रूखमाथि चढ्छे, सुनकेशरीलाई विवाहको बेला भयो भन्दै बाउ-आमा-दाजु प्रत्येकले बोलाउँछन्, प्रत्येकलाई ऊ करूण उत्तर दिन्छे, उसको उत्तर सुनेबित्तिकै एकएक गरी प्रत्येक जनाको मृत्यु हुन्छ । सबैको मृत्युपश्चात्

दिदी र सानो भाइ गाई-भैंसी पालेर बस्न थाल्छन् । कालक्रममा अर्कै राज्यको राजकुमारले सुनकेशरीलाई लगेपछि भाइलाई पनि एउटा बुढो गाईले त्यहाँ पुऱ्याइदिन्छ । नेपाली भाषाको यो लामो कथामा भएका सम्वादहरू नवमीको यस कथामा पनि प्रायः एकै किसिमले राखिएको छ ।

अर्को कथापुरुषको बुद्धि र स्त्रीको साहसको विषय यस किसिमको छ- वीरभद्र नामका राजाका बगैंचामा काम गर्ने रामबहादुरलाई विजया दशमीमा रानीले टीको लगाएर 'पुरुषको जस्तो बुद्धि र स्त्रीको जस्तो साहस होस्' भन्छिन् । राजा छक्क परेर 'त्यो के भनेकी' भनेर रानीलाई प्रश्न गर्छन् । रानीले त्यसको सत्यताको प्रमाण दिन्छु भन्छिन् । भोलिपल्ट रानीले सिकाएअनुसार राजाले रामबहादुरलाई एकान्तमा बोलाएर भन्छन्- 'भोलि घाम झुल्किनु अघि नै तैंले तेरी बुढीको टाउको काटेर ल्याइस् भने तँलाई राजकुमारीसित बिहे गराइदिन्छु' । रामबहादुर घर फर्किएर जान्छ । उसको एउटा मनले पत्नी धनमायाको टाउको काट्न भने पनि अर्को मनले चाहिं विचार गर्छ... धनकुमारीसित गरीबीमा पनि जति सुखी छ, राजकुमारीसित त्यति सुखी हुन सकिन्न होला...। रातभरिको अन्तर्द्वन्द्वपछि ऊ रित्तै हात राजाको सामू जान्छ र पत्नीलाई काट्न नसकेको कुरा निवेदन गर्दछ । त्यसपछि रानीले राजालाई भन्छिन्- 'देख्नुभो पुरुषको बुद्धि ?' । अब स्त्रीको साहसको कुरा प्रमाणित गर्न रामबहादुरकी पत्नी धनमायालाई राजाले बोलाउँछन् । धनमायासँग राजाले भन्छन्- 'तिमीले भोलि बिहान घाम झुल्किनु अघि नै तिम्रा बुढाको टाउको काटेर ल्यायौ भने तिमीलाई म रानी बनाउँछु ।' त्यो सुनेर धनमाया घर फर्किएर जान्छे र भोलिपल्ट बिहानै बुढाको टाउको काटेर राजाको दरबार पुग्छे । राजा छक्क पर्छन् । रानी भन्छिन्- 'प्रमाण पाइहाल्नु भयो नि महाराज !'

नवमी कथासङ्ग्रहका कथाक्रममा भएको अर्को कथा हो, रिमाल र जोगीको कथा । यमुना नदीको किनारको गाउँका निःसन्तान रिमाल दम्पती एक जना जोगीसँग आशीर्वाद लिन्छन् । त्यसपछि पुत्र सन्तान हुन्छ । विस्तारै जोगी र रिमाल परिवारमा सद्भाव बढ्छ । जोगी आफ्नो लोहाको लठ्ठी उनीहरूका जिम्मामा राखेर तीर्थ भ्रमणमा जान्छन् । बाह्र वर्षसम्म उनी नफर्किएको देख्दा रिमालले 'त्यो लठ्ठी किन जतनले राख्न दिएका थिए' भन्ने कुतूहलतावश त्यो फोरेर हेर्छन् र त्यसभित्र सुन देखेर लोभिन्छन् । त्यो सुन झिकेर राम्रो ठुलो घर बनाउँछन् । तर, बाह्र वर्षपछि ती जोगी फर्किएर आउँछन् र लठ्ठी माग्छन् । रिमालले धमिराले खायो भनेर ढाँट्न खोज्छन् । जोगी रिसाएर बाहिर खेलिरहेको

उनीहरूको छोरालाई लिएर त्यो देशबाटै बाहिरिन्छन् । छोरो हराएपछि 'जोगीले लगे' भन्ने जानेर उनलाई खोज्दै जान्छन् । रिमाल र जोगीको एक ठाउँमा भेट हुन्छ । जोगीले पनि छोरालाई चीलले लग्यो भनेर ढाँट्न खोज्छन् । अन्त्यमा, रिमालले आफ्नो भूल स्वीकार गर्छन् र त्यो सुनले किनेको सम्पत्ति जोगीलाई जिम्मा दिएर जोगीबाट आफ्नो छोरो लिन्छन् । जोगीले भन्छन्- 'तिम्रो यो कप्ट्याइँका निम्ति आजदेखि उप्रान्त हाम्रा वंशका कसैले तिम्रा घरमा फेरी लगाउँदैनन् र सिदा पनि लिंदैनन्' । कथाको अन्त्यमा लेखिएको छ- त्यतिखेरदेखि रिमाल र जोगीको आपसमा राम्रो सम्बन्ध रहेन । यसरी यस कथाले आज पनि जोगीहरू किन रिमालका घरमा फेरि लगाउँदैनन् वा सिदा लिंदैनन्, त्यसको कारण बताइदिएको छ ।

अर्को कथा फूलकुमारीमा सौतेनी आमा र उसकी छोरी धनकुमारीले फूलकुमारीमाथि गरेको अत्याचारको वर्णन सहित कसरी पछि फूलकुमारीलाई बाख्राले दूध खुवाएर पोषण दियो र कसरी उसको  राजकुमारसित विवाह भयो भन्ने घटनाहरूको विस्तृत विवरण छ । छल गरेर फूलकुमारीलाई कुवामा फ्याँकेको अनि धनकुमारीले फूलकुमारीका लुगा लगाएर राजकुमारको घर गई त्यसपछि छोरालाई दूध खुवाउन कुवाबाट निस्किएको वर्णन छ । ती फूलकुमारीको आत्मालाई राजकुमारले देखेर समातेको सबै कुरा थाहा पाएपछि धनकुमारी र उसकी आमालाई नाक काटेर राज्यबाट राजाले बहिष्कार गरेको लामो विषय यस कथाले समेटेको छ ।

पाखुरामा चन्द्र-सूर्य हुने कुमारको कथा पनि नेपाली समाजमा धेरै प्रचलित कथामध्ये एक हो ।  सुबाहु नामका एक जना पराक्रमी राजाले सन्तानको आशा गरेर धेरैवटी रानी बनाए । त्यति गर्दा पनि उनी निःसन्तानै रहे । त्यसपछि वैराग्य उत्पन्न भएर उनी मन्त्रीसित बनमा तपस्या गर्न गए । त्यो तपस्या गरेका ठाउँमा एउटा पोखरीबाट दुइटी राजकुमारी निस्किई पूजा र बातचीत गर्न लागे । उनीहरूका कुरा मन्त्रीले सुने- एउटीले, 'मलाई महाकालजस्तो भयङ्कर छोरो पाउने इच्छा छ' भनी । अर्कीले चाहिं, 'मलाई दाहिने पाखुरामा सूर्य र देब्रे पाखुरामा चन्द्र भएको तेजस्वी छोरो पाउने मन छ' भनी । उनीहरू फेरि पानीमा अलप भए । भोलिपल्ट मन्त्रीले राजालाई यी कुरा सुनाउँदा राजाले ती दोस्री राजकुमारीलाई पोखरीबाट निस्किएको बेला झटपट पाखुरामा समाते, त्यसपछि आफ्नो राज्यमा लगी बिहे गरे । पछि उनको गर्भधारणको कुरा दरबारमा फैलियो । त्यो सुनेर

अरू रानीलाई इर्ष्या भयो । त्यसपछि उनले के-कसरी ती रानीहरूले छल गरे । त्यो सन्तानलाई पोखरीमा फालेर रानीले मुसल पाएको खबर दरबारमा सुनाए । ती कान्छी रानीलाई घोडाको स्याहार गर्ने नोकर्नी बनाए । पछि, त्यो छोरालाई कसरी पहिला माछाले र पछि घोडाले मुखभित्र लुकाएर बचाएछ अनि अर्कै राज्य पुऱ्याएछ । पछि दैवक्रममा पाखुरामा सूर्य-चन्द्र हुने त्यो छोरासित राजाको कसरी भेट भयो । ती सबै कुराहरूको विस्तृत रूपमा असमिया अनुवाद गरिएको यो कथाले पुस्तकमा निकै पृष्ठ ओगटेको छ ।

अन्तिम कथा परालको आगो दुई बुढा-बुढीको झगडा लागेपछि बुढी माइत गएर उतै बसिदिंदा लथालिङ्ग भएको घर सम्भाल्न फेरि बुढाले घर फर्काएर ल्याएको कुरालाई लिएर बनिएको कथा हो । यसमा गाउँका केही अन्य पात्रहरू पनि कथालाई अघि बढाउने क्रममा देखाइएको छ ।

**नवमीका कथाहरूमा प्रतिपादित सारतत्व** :

लोककथाहरूले परोक्ष वा प्रत्यक्ष रूपमा केही सत्य उगेलेका हुन्छन् । केही नीति उपदेश दिएका हुन्छन् भन्ने देखिन्छ । नवमीका कथाहरू पढ्दा त्यस्ता केही सत्यताका वा नीतिका कुरा सामू आउँछन् । डल्ला र टपराको मितेरी सामूहिक जीवनको द्योतक हो, उज्यालो पाटो हो; तर सत्य के हो भने मृत्युले सधैं जीवनलाई जितेरै छाड्छ । मृत्युजस्तै समस्या पनि जीवनका छोडिनसक्नु पक्ष हुन् । यस सङ्ग्रहका कथाहरूमा विविध किसिमका समस्याहरू छन् र ती समस्यासँगै समाधान पनि छन् । नबोल्नेको बोली कथाको समस्या सानो हो । कथाले यो सानो समस्याको सजिलै समाधान गराएको छ : सांसारिक जीवनमा परस्पर कुराहरू साटेर हाँसिखुशी बिताउनु पर्ने यथार्थ इंगित गरेको छ । छट्ट स्यालको कथाले छट्टको अन्त्य कस्तो हुन्छ भन्ने देखाएको छ भने सुनकेशरी मैयाको कथाले 'विचार नगरी राजाले वाचा दिनु कति घातक पर्छ र दाजु-बैनीको सम्बन्ध कति पवित्र हो' भन्ने कुराको पुष्टि गरेको छ । नारी इर्ष्याले कसरी धेरैको जीवन ध्वस्त पार्न सक्छ र ती इर्ष्यालुले पनि अन्तिममा कसरी नराम्रो परिणाम भोग्नुपर्ने हुन्छ - त्यो सत्य पनि कतिपय कथामा घामझैं स्पष्ट छ । रिमाल र जोगी, फूलकुमारी पाखुरामा सूर्य चन्द्र भएका कुमारको कथाका अन्त्यमा सत्यको जीत, नैतिकताको जीत भएको देखाउनु र असत्य अनि कुनीतिको बाटो नहिंड्नु भन्ने हो । परालको आगो कथा संसारिक जीवनका 'सानातिना झगडा परालको

आगोसरि हो' भन्ने सत्यकै प्रतिपादक बनेको छ । यसरी नवमीका लोककथाहरूमा जीवन जगतका अँध्यारा, उज्याला दुबै पक्ष प्रतिविम्बित छन् र कथाहरूले केही न केही सारतत्व बोकेकै छन् ।

**नवमीमा मनस्तत्व र समाजचित्र** :

नवमी कथा सङ्ग्रहमा अन्तर्भुक्त नौ थान कथाहरूका विषयलाई हेर्दा सरल र जटिल दुबै किसिमका मनस्तत्वलाई लिएर रचिएका कथाहरू देखिन्छन् । डल्ला र टपरा, नबोल्नेको बोलीर परालको आगो कथा साधारण मनस्तत्वका हुन् भने अरू कथाहरूमा जटिल मनस्तत्व प्रकट भएको छ। अलौकिक र अवास्तविक कुरा र घटनाले सधैं मानिसको मन आकर्षित गर्छ । आकर्षण बढाउने इच्छा मानिसका मनमा लुकेकै हुन्छ। लोककथाका रचनाकारले पनि आफ्नो कल्पनाको उडानमा असम्भव भन्ने शब्दलाई राखेका । लोककथाका अख्याता वा रचनाकारका वास्तविक अभिज्ञतासित अवास्तविक कल्पना पनि मिसिएर अनन्य बनेको हुन्छ । यी कथाहरूले निर्माण गरेको संसार बालमनोजगतका लागि अत्यन्त रमाइलो संसार हो । छट्टु स्यालको कथामा मान्छे, स्याल, भालुसहित शिव-पार्वती पनि समावेश गरी कथालाई रोचक पार्नुका साथै छट्टुले सास्ती पाउँदा पाठकलाई आनन्द पनि दिएको छ। सुनकेशरी मैयाको कथामा चामल र तिल झरेर गाई-भैंसी हुनु र बुढो गाईले सुनकेसरीको भाइलाई सघाउनुजस्ता अलौकिक कुराहरू आएका छन् भने फूलकुमारी र पाखुरामा चन्द्र-सूर्य भएका कुमारको कथामा पनि बाख्राले बुद्धि दिनु, कुवाभित्रको भूतले फूलकुमारीलाई बचाइराख्नु, फूलकुमारीको आत्मा राति-राति निस्कनु, पाखुरामा सूर्य-चन्द्र हुने बालकलाई माछाले र घोडाले बचाउनु जस्ता अवास्तविक कुराहरू छन् । धेरजसो कथामा मानिसका मनको सरलता र जटिलता दुबै झल्कन्छ। कथानकलाई अघि बढाउने क्रममा आएका साधारण गाउँलेहरूको साधारण मनस्थिति पनि कतिपय कथामा देखिन्छ ।

लोककथाले केही मात्रामा समाजको प्रतिविम्ब उतारेको हुन्छ। 'नवमी' सङ्ग्रहमा भएका कथाहरूले पुरानो समयमा हुने बालविवाहको प्रचलनलाई पुष्टि गरेको छ भने कतै बहुविवाहको प्रचलनलाई । नेपाली समाजमा टपराको चलन, जोगीहरूले फेरी लाउने प्रथा, रिमालसितको जोगीको सम्बन्ध विच्छेदको कुरा, दरिद्र नेपाली समाज र त्यस समाजमा पति-पत्नीमा हुने रिस एवम् झगडालाई र परालको आगोलाई सदृश मानेको छ । झगडालाई जित्ने प्रेम उत्तम हो भन्ने स्पष्ट

पारेको छ । कतिपय कथामा गाई, बाख्रा, कुखुरा पालेर जीवन धान्ने समाजको छवि छ । धर्ममा आस्था राख्ने नेपाली समाज रिमाल र जोगी कथामा स्पष्ट छ भने मित लाउने चलनको कुरा डल्ला र टपरामा छ । एकपछि एक सन्तान मरेका खण्डमा बाँचेको सन्तानको नराम्रो नाम राख्ने चलनले वा त्यसो गर्दा त्यो सन्तान बाँच्छ भन्ने लोकविश्वासले गर्दा नबोल्नेको बोली कथामा छोराको नाम गुहे राखेको देखिन्छ । राजा-रानी भएका कथाहरूले राजतन्त्रको कुरा गरेका छन् । साधारण प्रजा केवल प्रमाणका निम्ति मर्नु पर्ने सत्यताको कुरा पुरुषको बुद्धि र स्त्रीको साहसले संकेत गरेको छ ।

**नवमी कथा संग्रहका कथा :**

नवमी कथा सङ्ग्रहका कथाहरू सहज सरल असमिया भाषामा लेखिएका छन् । भाषामा दुरुहता छैन । बालजगतकै लागि रचिएको हुनाले कथाको भाषा त्यसै पनि सरल छ । त्यसमाथि यस सङ्ग्रहका प्रकाशकले सहज भाषामा प्रकाशित गर्नु पर्दछ भनी आफ्नो भनाइमा उल्लेख गरेका छन् । सङ्ग्रहका अनुवादक द्रोण उपाध्याय, तारापति उपाध्याय र टीकाराम उपाध्याय 'निर्भीक' तीनै जना असमिया भाषाका पोख्त हुनाले कथाहरू नेपालीबाट असमियामा उल्था गर्दा कतै अल्झिएको देखिएन । केवल कथा शब्दलाई दुई ठाउँमा यथावत राखिएको देखियो, तीन र आठ नम्बरको कथामा । असमियामा कथालाई साधु वा साधुकथा भनिन्छ । कथा नलेखेर धूर्त शियालर साधुर बाहुत चन्द्र सूर्य थका कौँवरर साधु लेखिन्थ्यो भने अझ सही हुने थियो । कथाले असमियामा कुरा बुझिन्छ । हुन त त्यसरी पनि अर्थको प्रकाश नभएको त होइन ।

रचना रीति हेर्ने हो भने यी कथाहरूमा नेपाली कथामा पाइने भनाइको पारम्परिक ढाँचा छैन । कतिपय कथाहरूमा मात्र 'एकादेशमा' भन्ने प्रारम्भिक भूमिका छ, सबैमा छैन । अन्त्यमा 'सुन्नेलाई सुनको माला, भन्नेलाई फूलको माला' भनेर लेखिएको छैन । त्यो हुन्थ्यो भने असमियाहरूले कथा भन्ने चलनबारे पनि जान्न पाउने थिए । कथाहरू वर्णनात्मक र सम्वादात्मक छन् । कतिपय शब्दका असमिया अर्थ लेखिएको छ भने कतिपयमा तल विशेष शब्दबारे राम्रोगरी असमियामा जानकारी दिइएको छ । जस्तैः डल्ला र टपरा भनेको के हो, असमियामा अर्थ दिइएको छ । जोगी र रिमालको बारेमा विस्तृत जानकारी कथाको तल लेखिएको छ । यसो गर्नाले नेपाली समाजका केही चित्र असमिया जातिका सामू अझ उज्ज्वल भएका छन् ।

अनुवाद समग्रमा सरल र मीठो छ। मौलिक सरह छन्, कथाहरू।

**निष्कर्ष** :

डा. द्रोणकुमार उपाध्यायले विद्यावारिधि गरेर डक्टरेट डिग्री लिनुअघि नै श्री द्रोण उपाध्याय नाममा गरेको सहलेखन भनौं अथवा सहअनुवाद कृति 'नवमी' कथा सङ्ग्रहले असमिया भाषामा पनि उहाँको उपस्थितिलाई दर्ता गरेको छ। हुन त उहाँले लेखेका अन्य असमिया लेख निबन्ध आदि अनेक छन्, सम्पादित पत्रिका छन् र पनि आजभन्दा कयौं वर्षअघि लेखेको लोककथाको यो सङ्ग्रहको आफ्नै मूल्य छ। नवमी कथा सङ्ग्रह पुस्तकले सघाउ पुऱ्याएका वा पुऱ्याउने कतिपय पक्षहरू यस किसिमका देखिन्छन्।

१. असमिया र नेपाली भाषाको सेतु-बन्धनमा यसले केही मात्रामा भए पनि सघाएको छ। मूल सचिवले प्रकाशकीयमा 'पारस्परिक सद्भाव बढाउने प्रयास हो' भनेर लेखेकै छन्। नवमी असमका नेपाली भाषीको असमिया भाषाप्रतिको प्रेमको एउटा सानो निदर्शन हो। यो एक असमियाहरूको नेपाली भाषाप्रतिको माया हो, सद्भाव हो।

२. नेपाली साहित्यको परिधिलाई असमियासम्म पुऱ्याउने जमर्को हो यो। अनुवाद मार्फत यसरी पनि भाषाको श्रीवृद्धि हुने गर्छ, साहित्यको विस्तृति हुन्छ।

३. असमिया साहित्यको पनि ढुकुटी भरिनमा अन्य भाषाका यस्ता अनुवाद कृतिहरूको योगदान छ।

४. तुलनात्मक अध्ययनलाई हिजोआज अत्यन्त महत्वपूर्ण तरिका मानिन्छ। नवमीले नेपाली लोकसाहित्यसित असमका अरू भाषाका लोकसाहित्यलाई तुलना गर्ने सुविधा गरिदिएको छ। असमका प्रख्यात र बहुप्रचलित लोककथा तेजीमलाको कथा, तुला र तेजाको कथा, पानेशैको कथालाई नवमी कथा संग्रहका कतिपय कथासित दाँज्न सकिन्छ।

५. हराउन लागेका नेपाली लोककथाको संरक्षणमा असमिया भाषामा अनुवाद गरेर भए पनि सघाउ पुऱ्याएको छ, नवमी कथा संग्रहले। टीभी, मोबाइल, ल्यापटपमा व्यस्त अहिलेको हाम्रा पुस्ताले नेपाली कथाबारे कुनै दिन जान्न खोज्दा नवमी कथा संग्रहले सघाउ पुऱ्याउला।

डा. द्रोणकुमार उपाध्याय असमकै हावा-पानीमा हुर्किएर, बढेर असमलाई मुटुभित्रै बोकेर हिंड्नु हुन्थ्यो र पनि समयक्रममा नेपालको नागरिक हुन पुग्नुभयो।

त्रिभुवन विश्वविद्यालय अन्तर्गत मेची बहुमुखी क्याम्पस-भद्रपुरमा लामो समयको प्राध्यापनपछि सेवानिवृत्त भई समाज र साहित्य सेवामा झन् दत्तचित्तले लागेको बेला उहाँको मृत्यु हुनु केवल हामी आत्मीयहरूका निम्ति मात्र पीडा र वेदनाको कुरा होइन, नेपाली भाषा-साहित्य समाजका निम्ति नै अत्यन्त दुखद् कुरा हो । सन्देह छैन, समाजका अत्यन्त जनप्रिय मिलनसार व्यक्तित्व प्रा.डा. उपाध्यायले आफ्नो जीवन अवधिमा गरेका कामहरूले उहाँलाई अमर राख्नेछ । मृत्यु सर्वमान्य अखण्डनीय सत्य हो, तर मृत्युसित जीवनले हार माने पनि कतिपय कर्मले मृत्युलाई जित्ने गर्छ । डा. उपाध्यायले जितेर जानुभएको छ मृत्युलाई अनि जितेर जानु भएको छ, भाषा-साहित्य समाजलाई । भाषा-साहित्यको निःस्वार्थ सेवा गर्ने आदर्श हामी सबैका हृदयलाई देखाएर जानुभएको छ । नवमी कथा संग्रह त एउटा सानो उदाहरण मात्र हो, उहाँको कर्मको । साँचो भन्नु हो भने, उपाध्यायको विराट व्यक्तित्वको एउटा सानो झिल्को मात्र हो यो सहअनुवाद कृति । तर, सानोभन्दा सानो झिल्काको पनि आफ्नै महत्व त हुन्छ नै !....   ....

*-गुवाहाटी, असम*

*(लेखक असमकी प्रसिद्ध समालोचक हुनुहुन्छ)*



प्रा.डा. कपिल लामिछाने

# 'लोकवार्ता : लोककै चर्चा'मा लोकको खोजी

लोकको ज्ञानगुन, विश्वास, विचार, भाषा, कला, साहित्य र संस्कृतिको समष्टि लोकवार्ता हो । नेपाली लोकवार्ताको खोजी, सङ्कलन र अध्ययन-अनुसन्धान गर्ने थोरै स्वनामधन्य साधकहरूमा द्रोणकुमार उपाध्याय (२००६-२०७६) पनि एक हुन् । ग्रन्थाकारमा हेर्दा उनको लोकवार्तात्मक अध्ययन २०३४ (सन् १९७७) देखि आरम्भ भएको पाइन्छ भने त्यहाँदेखि जीवनपर्यन्त उनी लोकभाषा, लोकजीवन, आदिवासी-जनजाति, लोककथा, सवाई, लोकप्रथा आदि भाषिक र भाषेत्तर लोकवार्ताको खोजी वा अनुसन्धानमा निरन्तर लागिरहेको पाइन्छ । करिब चार दशक लामो यस लोकवार्ता अध्ययन वा साधनाको परिणामस्वरूप लोकवार्ताको क्षेत्रमा उनका नवमी (२०३४, असमिया भाषामा नेपाली लोककथाको सङ्ग्रह, सहलेखन), राजवंशी परिचय : जाति, भाषा र साहित्य (२०५१), लोकवार्ता : लोककै चर्चा (२०६५), नेपाली सवाई काव्यको सैद्धान्तिक परिचय (२०६७) र लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ (२०७४) गरी चार ग्रन्थ प्रकाशित भएका छन् ।

चार दशकसम्म एकलव्य दृष्टिका साथ लोकमै रहेर गएर लोकवार्ताको खोजी, सङ्कलन, अध्ययन र विश्लेषणमा निरन्तर लागिरहनु उनको लोक र लोकवार्ताप्रतिको अनन्य आस्था, विश्वास र प्रेमको परिचायक हो भन्न सकिन्छ । लोकवार्ताकै लागि असम, झापा, भैरहवा र भोजपुर आदि ठाउँमा धाएको पङ्क्तिकारलाई पूरा हेक्का छ । लोकवार्ता : लोककै चर्चा (२०६५) कृति लोकवार्ता सम्बन्धी सत्र वटा लेखरचनाको सँगालो हो । यसमा विभिन्न शीर्षकका लेख तथा काग र चापिचल्लाका बच्चा शीर्षकको एक लोककथा गरी भिन्न स्वरूपका विभिन्न सामग्री एउटै ग्रन्थमा गुँथिएका छन् । प्रस्तुत सन्दर्भमा भने उनको लोकवार्तात्मक अध्ययनयात्राको एक कडी यही लोकवार्ता : लोककै चर्चा (२०६५) कृतिको समीक्षा गरिएको छ ।

द्रोणकुमार उपाध्यायको लोकवार्ता : लोककै चर्चा (२०६५) लोकवार्ता सम्बन्धी सत्र वटा लेखहरूको सँगालो हो । लेखहरूको विषय, स्वरूप र प्रस्तुतिबाट यी कुनै योजनाअनुरूप लेखिएका नभई भिन्न समय र सन्दर्भमा लेखिएका लेख भएको स्पष्ट हुन आउँछ । यसमा भएका यी लेखहरूलाई (क) लोकजीवन र आदिवासी लोकजीवन (ख) मौखिक लोकसाहित्य र (ग) भौतिक संस्कृति गरी मुख्य तीन प्रकारमा वर्गीकरण गर्न सकिन्छ ।

पहिलो वर्ग हो, लोकजीवन र आदिवासी लोकजीवन । 'लोकजीवन : अभिलक्षणहरूको खोजी', 'झापाली लोकजीवन', 'लोकपरम्परा र मानव समाज' र 'झापाका आदिवासीहरूको छोटो चिनारी' गरी चार वटा लेखहरू लोकजीवनसँग सम्बन्धित छन् । 'लोकजीवन : अभिलक्षणहरूको खोजी'मा शीर्षकले निर्दिष्ट गरेअनुरूप लोकजीवनका अभिलक्षणहरूको खोजी गरिएको छ । लोकवार्ताको एक मुख्य अध्ययन क्षेत्र लोकजीवन हो । लोकजीवन भनेको लोकको जीवन हो । लोकजीवनका बारेमा एकदमै कम अध्ययन भएको छ । लोकजीवनलाई चिनाउँदै सुरुमा यहाँ लेखिएको छ : "परम्परागत रूपमा कुनै ठाउँमा बसोबास गर्दै आएको अनि त्यसै ठाउँको भौगोलिक, सामाजिक र सांस्कृतिक परिवेशमा सम्बद्ध रही खास किसिमको परिवेश, जनविश्वास, रहनसहन, रीतिनीति तथा जीवनबारे खास मान्यता र धारणामा आबद्ध सामूहिक जनजीवन नै लोकजीवन हो ।" (पृ.१) यो उपाध्यायले खोजेको लोकजीवनको परिभाषा र अभिलक्षण हो । यही विचार विन्दुमा रहेर यहाँ लोकजीवन सरल हुने, कृषिमा आधारित हुने, बृद्ध र बालबालिकाले वयस्कहरूलाई सघाउने, महिलाहरूको सर्वोपरि भूमिका हुने, मौलिक वेशभूषा तथा खाद्यपरिकार हुने, पशुपालन गर्ने, प्राकृतिक जीवनसँग सम्बद्ध हुने, मूलतः ग्राम्याञ्चलमा रमाउने, घरमा घरमूलीको ठूलो महत्व हुने, परम्परागत चाडबाड र मेलापर्व आदिमा विशेष सक्रिय हुने, नाचगान गर्ने, गोदना गराउने, आडम्बररहित सरल जीवन रुचाउने, स्थानीयता आदिलाई यहाँ लोकजीवनका खास-खास अभिलक्षणका रूपमा व्याख्या र वर्णन गरिएको छ । केही विषय र बुँदाको पुनरावृत्ति भए पनि लोकजीवनलाई बुझ्ने र बुझाउने क्रममा यहाँ कन्जुस्याइँ देखिँदैन । यसले पुस्तकमा उन्नाइस पृष्ठ ओगटेको छ । यो यस सङ्ग्रहको दोस्रो सर्वाधिक लामो लेख हो । पुस्तकमा यो अग्रस्थानमा छ र महत्वका हिसाबले पनि विशिष्ट छ ।

दोस्रो लेख हो, 'झापाली लोकजीवन' । यस लेखमा झापा जिल्लाको

भौगोलिक र ऐतिहासिक परिचय दिँदै झापालीहरूको बसोबास, लवाइखवाइ, आजीविका र यहाँको लोकजीवनका अनुकूलता र प्रतिकूलताको विश्लेषण गरिएको छ। पूर्वी तराई क्षेत्रमा अवस्थित महाभारतकालीन कीचक बधको प्रसङ्ग उल्लेख गर्दै पौराणिककालसम्म झापाको साइनो सोझ्याइएको छ भने चिलाराय नामले प्रसिद्ध कोच सेनापति नरनारायण शिलादित्यको राज्यविस्तारको दसी चिल्लागढ (पृ. १६ औं शताब्दी) को विस्मृत इतिहास उधिनेर ऐतिहासिक रूपमा पनि यो क्षेत्र प्राचीन रहेको प्रस्ट पारिएको छ। साथै यहाँका राजवंशी, धिमाल, मेचे, ताजपुरिया, गन्गाई, सतार समुदायको बसोबास, लवाइखवाइ, आजीविका र त्यस क्षेत्रको अनुकूलता र प्रतिकूलतामाथि प्रकाश पारिएको छ। १३ पृष्ठमा विस्तारित यो लेख झापाको विगतलाई बुझाउने चिनाउने एक महत्वपूर्ण सामग्रीका रूपमा रहेको छ।

तेस्रो लेख हो, 'लोकपरम्परा र मानवसमाज'। यो लेख सैद्धान्तिक छ। यसमा लोकसाहित्य, संस्कार, नीतिनियम, आचरण, विश्वास आदि लोकपरम्पराको परिचय दिँदै 'लोकपरम्परा' भन्ने बित्तिकै नाक खुम्च्याउनु नपर्ने तथा यसमा लोकको पहिचान भएकाले र यसले समाजलाई परिवर्तनको दिशातिर डोऱ्याउने कुरा प्रस्ट पारिएको छ। यस क्रममा यहाँ लोकसाहित्यका विधा-उपविधा र लोकसंस्कारका विभिन्न प्रकारको उदाहरण दिइएको छ। 'शास्त्रसिद्ध भए पनि लोकविरुद्ध भए त्यस्तो काम नगर्नू, लोक र वेदमा बाझिन गए लोकलाई अनुशरण गर्नू' भन्ने जस्ता उदाहरण प्रस्तुत गर्दै यहाँ लोकपरम्पराको शक्ति, सामर्थ्य र महत्वलाई पनि उजागर गरिएको छ।

'झापाका आदिवासीहरूको चिनारी' यस कृतिमा सँगालिएको चौथो लेख हो। यो लेख झापाका जाति र तिनका भाषा र संस्कृतिको परिचयमा केन्द्रित छ। दोस्रो 'लेख झापाली लोकजीवन' र यस लेखको आरम्भमा दिइएको झापाको अवस्थिति र भौगोलिक पक्ष दोहोरिन गएको छ। झापा शब्द राजवंशी भाषाबाट लिइएको बताउँदै पहिले यो क्षेत्र बनजङ्गलले ढाकेको वा छोपेको हुँदा सो नामकरण उपयुक्त रहेको प्रस्ट पारिएको छ। यहाँका आदिवासीलाई तराई वर्गमा राजवंशी, मैथिली, थारू, भोजपुरी र अवधीभाषीलाई भारोपेली वर्ग, किरात, मेचे र धिमाललाई अभारोपेली वर्गमा, सतार, किसान र उराउलाई आग्नेसियाली वर्गमा तथा नेपालीभाषीलाई भारोपेली र मगराती, गुरुङ, राई बान्तवा, लिम्ब्वानी, शेर्पेली, थकाली,

सुनुवारी र नेवारीलाई किरातगोष्ठी भनी पहाडवर्गमा छुट्याएको छ । यसरी भाषा र जातिको वर्गीकरण गर्दै यहाँ राजवंशी, मेचे, धिमाल र थारूलाई मूल आदिवासी भन्दै यी जातिको भाषा र संस्कृतिको छोटोछरितो वर्णन गरिएको छ ।

पाँचौं लेख हो, 'नेपालको राजवंशी समाज : एक परिचय' । यस लेखमा राजवंशी समुदायको परिचय दिइएको छ । यस क्रममा यहाँ राजवंशीको बसोबास क्षेत्र र ऐतिहासिक सन्दर्भको उल्लेख गर्दै राजवंशीलाई नेपालको तराइली जनजातिहरूमा उन्नतिशील र ऐतिहासिक परम्परा बोकेको जातिका रूपमा चिनाइएको छ । जम्मा तीन पृष्ठमा विस्तारित यो लेख सङ्ग्रहका छोटो आयामका लेखमध्येमा पर्दछ । प्राचीनकालमा कोच राजवंशीहरूको राज्य समुद्रदेखि भुटानसम्म र बर्मादेखि कोशीसम्म रहे पनि राजवंशी समुदाय नेपाल, भारत, भुटान र बङ्गलादेश गरी चार मुलुकका खास-खास क्षेत्रमा छरिए पनि यी चारै देशमा रहेको क्षेत्र पहिलेको राजवंशी शासित क्षेत्र नै रहेको लेखकको मान्यता छ । अहिले पनि नेपालका झापा, मोरङ र सुनसरी राजवंशीको मुख्य बासस्थान रहेको छ । भारतवर्षको उत्तरपूर्वाञ्चलका 'कोच कविलाधिपति हाजो सरदारको वंशज विशुले आफ्नो नाम विश्वसिंह राखी आफूलाई हिन्दूकरण गरेपछि त्यस वंशलाई राजवंशी भनिएको' भन्ने धारणालाई यहाँ प्रस्तुत गरिएको छ । गौरवशाली इतिहास र संस्कृति भए पनि अहिले यो अशिक्षाले गर्दा पछाडि परेको जाति जस्तो देखिएकोमा लेखकको गुनासो प्रकट भएको छ ।

छैठौं लेख 'आदिवासी राजवंशी र तिनको संस्कृति' हो । यसमा पूर्वी तराईको झापाका प्रमुख जनजाति राजवंशीलाई 'झापाका आदिवासी' भन्दै तिनको बसोबास, जनसङ्ख्या, लोकसाहित्य, तिनको शारीरिक बनोट, लवाइ, आभूषण, विवाह र पेशा-व्यवसायको परिचय दिइएको छ । यस क्रममा यहाँ गोदना गर्ने या खोपाउने चलनको पनि चर्चा गरिएको छ । राजवंशीलाई सोझा र अपढ भई गरिबीमा बाँच्नु परेको देखेर लेखकले दुखेसो पोखेका छन् ।

'नेपालको राजवंशी समाज र संस्कारहरू' सातौं क्रममा सँगालिएको लेख हो । यो यस सङ्ग्रहको सर्वाधिक लामो लेख हो । यो ४३ पृष्ठमा विस्तारित छ । यसमा नेपालका राजवंशी समुदाय, त्यसका विभिन्न संस्कारहरूको विस्तृत परिचय दिइएको छ । यस क्रममा यहाँ सर्वप्रथम राजवंशी समुदायको बसोबासको क्षेत्र र यसको ऐतिहासिक आधारको खोजी गरिएको छ । राजवंशी नेपाल, भारत, भुटान

र बंगालदेशमा फैलिए पनि यो मूलतः एउटै प्राकृतिक भौगोलिक क्षेत्र रहेको स्पष्ट पारिएको छ। नेपालबाहिर रहेको राजवंशी अध्यूसित समग्र भूभागको ऐतिहासिक पृष्ठभूमिका आधारमा इशाको चौधौं-पन्ध्रौं शताब्दीतिर असम र बङ्गालका बीचको जलपाइगुडी अञ्चलमा कोच (राजवंशी) हरूको अभ्युत्थान भई राज्य स्थापना भएको, तिनै कोचको विस्तार हुँदै जाँदा कालान्तरमा विशुले कोचविहारमा राज्यको स्थापना गरी आफू त्यहाँको राजा भएको, विश्वसिंह नाम ग्रहण गरी राजवंशीलाई हिन्दूकरण गरेको र तिनै कोचहरू नै पछि राजवंशी कहलाएको ऐतिहासिकता वर्णित छ। तिनीहरूले विभिन्न आरोह-अवरोह र उथलपुथल सहँदै कोच राज्यको अधीनस्थ मोरङ पृथ्वीनारायण शाहको राज्य एकीकरणका सिलसिलामा १७७८ मा पुनः नेपालभित्र गाभिएको लामो ऐतिहासिक तथ्यहरूलाई यहाँ प्रस्तुत गरिएको छ। स्मरणीय के छ भने अहिलेको झापा त्यतिखेर मोरङमै पर्थ्यो। कतिपय राजवंशीहरू आफूलाई कोच भन्ने र कतिपय राजवंशीहरू आफूलाई कोच भन्न हिच्किचाउने गरेको सन्दर्भ पनि यहाँ नामकरणका क्रममा उल्लेख भएको छ। यस्तै यस लेखमा राजवंशीका जातीय लक्षणको चर्चा गर्दै लेखकले यो जाति कुनै विशुद्ध एक्लो रगत भएको नभएर भिन्न-भिन्न जातिहरूको सम्मिश्रित जाति देखिने बताएका छन्। राजवंशीसँग बोडोगोष्ठीको मेचे र धिमाल आर्य-आस्ट्रिक मिश्रित वर्ग भएका, तर आर्यगोष्ठीका भाषा बोल्ने किसान, सतार, थारू, मैथिल, गन्गाई, ताजपुरिया, हाँडी आदि जातिसित अन्तर्सम्बन्ध रहेको देखाइएको छ।

यस लेखको दोस्रो विषय हो, राजवंशीका संस्कार। यहाँ राजवंशीका मुख्य संस्कार, जन्म (बाल) संस्कार, युवा संस्कार, वृद्ध संस्कार र मृत्यु संस्कार गरी चार भागमा वर्गीकरण गरिएको छ। जन्म, नामकरण, कर्णवेध र पास्नीलाई यहाँ जन्म संस्कारमा चर्चा गरिएको छ। विवाह संस्कारलाई युवा संस्कारमा राखी त्यस अन्तर्गत आयोजित र प्रेम विवाह गरी दुई प्रकारमा बाँडिएको छ र आयोजित विवाहमा मागी विवाहका साथै विवाहित महिलाको लोग्ने (केटो) मरेको अवस्थामा केटीकै घरमा केटो लोग्ने राख्ने-बस्ने व्यवस्था समेत यस समुदायमा रहेको देखाइएको छ, जसलाई डाँगुवा प्रथा भनिन्छ। यस प्रथाले राजवंशी समुदाय मातृप्रधान रहेको, सम्पत्तिमा स्वास्नीको अधिकार रहेको, जात, कुल लोग्नेको भन्दा मातृकुल प्रधान रहेको देखिने लेखकको तर्क छ। चौथो मुख्य संस्कार मृत्यु संस्कार हो। मृतकलाई मर्नासाथ उत्तर सिरान लगाउने, सिरानमा

तुलसीका हाँगाबिँगा राख्ने, मुखमा तुलसी जल दिने, छरछिमेक, इष्टमित्र भेला हुने, मृतकलाई बेर्न कात्रो आदिको व्यवस्था गर्ने लगायतका तमाम प्रक्रिया हिन्दूसरह रहेको उल्लेख गरिएको छ। शनिबार वा मङ्लबार मरेका मानिसको लासलाई एक्लै घाटतिर लान नहुने लोकविश्वास रहेको, लास दिउसो मात्र घाटमा लाने, मृतकलाई जलाउने वा गाड्ने ठाउँमै मलामी पुग्ने, बाह्र दिनमा मृत्यु सम्बन्धी कार्यको समाप्ति हुने आदि केही स्वकीय प्रचलनलाई यहाँ प्रस्तुत गरिएको छ।

यसरी पूर्ववर्ती लेखहरूमा भएका कतिपय विषय र सन्दर्भ दोहोरिए पनि राजवंशी समाज र तिनका संस्कारका बारेमा प्रस्तुत लेखमा विस्तारपूर्वक प्रकाश गरिएको छ। राजवंशीका चार संस्कार बताइए (पृ. ६६) पनि यहाँ वृद्ध संस्कार भनेको के हो र त्यो कसरी सम्पादन गरिन्छ भन्ने कुरा गरिएको छैन।

आठौं लेख हो, 'राजवंशी जातिको पुर्ख्यौली निर्क्योल'। यसमा पूर्ववर्ती लेखहरूमा भएकै तथ्य र सामग्रीको पुनरावृत्ति भएको छ। राजवंशी हाल चार मुलुकमा फैलिएका, यिनको पुर्ख्यौली बारे उनीहरू स्वयम् अनभिज्ञ रहेको, चार मुलुकमा फैलिए पनि एउटै भौगोलिक सांस्कृतिक क्षेत्र रहेको, इशाको चौधौं शताब्दीतिर भारतको असम र बङ्लादेश बीचको जलपाइगुडी क्षेत्रमा कोच राजवंशीको अभ्युत्थान भई राज्य स्थापना भएको, तिनैका वंशज विशु विश्वसिंह भई शासन गर्दै तिनका शाखा-सन्तानको विस्तार भएको कुराको उल्लेख गरिएको छ। प्रामाणिक आधार नभए पनि महाभारतको लडाइँमा कोचहरू कौरव पक्षमा लागेको र कीचकको वध यही ठाउँमा भएको पौराणिक सन्दर्भ पनि यहाँ जोडिएको छ। यसमा आएका कुराहरू पूर्ववर्ती लेखमा आएकाले यसमा तिनकै पुनरुक्ति भएको छ।

'गन्गाई जाति : एक परिचय' शीर्षकको लेखमा कनकाईको तटवर्ती क्षेत्रमा परम्परादेखि रहँदै बस्दै आएका गन्गाईको बसोबास क्षेत्र, प्राचीनता, भाषा, शारीरिक गठन, वेशभूषा, थर, पेशा-व्यवसाय, धार्मिक मान्यता, स्वभाव तथा संस्कारका बारेमा वर्णन गरिएको छ। लेखकका अनुसार गन्गाईहरू मोरङ र झापाका विभिन्न स्थानमा र खासगरी कनकाई नदीका तटवर्ती क्षेत्रमा बसोबास गर्दै आएका छन्। पूर्वी तराईका पुराना बासिन्दा गन्गाईको सम्बन्ध महाभारतकालीन विराट नरेशका साख्खै भान्जा महादेव मण्डल गणेशसँग रहेको हो। कालान्तरमा गणगाई र पछि गनगाई र अझ पछि गन्याइँ भन्न थालियो भन्ने मान्यता प्रस्तुत गर्दै लेखकले यहाँ गन्गाई प्राचीन जाति रहेको प्रष्ट्याएका छन्। लेखकका अनुसार गन्गाईको

कुनै छुट्टै भाषा नरहेको र उनीहरू जहाँ-जहाँ बसेका छन्, त्यहीं-त्यहींको स्थानीय (रैथाने) भाषा बोल्ने गरेको अनि तिनको खास भाषा सुरजापुरी, कामरूपी वा अङ्गिकामध्ये कुन हो ? भनी निर्क्योल हुन नसकेको लेखकको मान्यता छ।

लेखकका अनुसार नृतत्वशास्त्रीय दृष्टिले गन्गाई मुख्यतः आर्य वंशज भए पनि तिनमा किञ्चित् आग्नेय मङ्गोल रक्त मिश्रण रहेको हुनुपर्छ भन्ने अनुमान लगाएका छन्। पहिरनका दृष्टिले तराईका सर्वसाधारण जनजातिका पहिरन नै गन्गाईको पहिरन रहेको छ। कसैले गन्गाई थर लेख्छन् भने कसैले गणेश, विश्वास, चौधरी, राय, मण्डल, सिंह आदि लेख्ने गर्दछन्। गन्गाईहरूको मुख्य पेशा देखिन्छ- धान खेती गर्ने र मुढी (खट्टे/भुजा/सिरौंला) उत्पादन गर्ने गर्दछन्। गन्गाईहरू सरल र धार्मिक स्वभावका हुन्छन्।

लेखकका अनुसार गाउँका मठमन्दिरमा पूजा गर्नुका अतिरिक्त गन्गाईहरूको ग्रामथान नामको स्वकीय देवस्थान पनि हुने गर्छ। गन्गाईहरू आफूलाई क्षेत्रीय बताउँछन्। पूजाआजामा मैथिल ब्राह्मणको सहयोग लिन्छन्। उनीहरूमा जातीय भेदभाव छैन। हिन्दू धर्म मान्ने हुँदा गन्गाईहरू हिन्दूहरूले जस्तै संस्कार सम्पादन गर्दछन्। गर्भवतीलाई खिरपुवा ख्वाउने, कनेरघरमा राख्ने, कुन्दुकी (सुँढेनी) को सहयोगमा प्रसव गराउने, छटिहार गर्ने, छ वा नौ महिनामा खिरखिला (अन्नप्राशन) गर्ने, कानफिना (कर्णवेध) गर्ने प्रचलन यिनीहरूको संस्कारमा रहेको कुरा यहाँ प्रस्ट्याइएको छ। गन्गाईका कतिपय प्रचलन र संस्कार राजवंशीसँग मिल्छन्।

गन्गाई सम्बन्धी दोस्रो लेख हो, 'अस्तित्वको खोजीमा गन्गाईहरू'। यो लेख यसअघिको लेखको पुनरावृत्ति र पूरक रहेको छ। लेखकका अनुसार गन्गाईहरू आफ्नो पूर्वइतिहास महाभारतकालीन मत्स्यदेश र मत्स्यनरेश विराटसँग जोड्दछन्। केही मिश्रण जाति जस्तो भए पनि भाषिक स्थिति, शारीरिक बनोट, संस्कृति, धार्मिक आचरण आदि कोणबाट गन्गाई आर्यमूलको जाति भएको लेखकको ठहर छ।

यस ग्रन्थमा मौखिक लोकसाहित्य विषयक छ वटा लेख रहेका छन्। 'सवाईको नालीबेली केलाउँदा', 'नेपाली सवाईकाव्य : एक चिनारी', 'भोटको लडाञीको सवाई : लोकसाहित्यमा जेठो युद्धसाहित्य', 'शिवशङ्कर पाध्येको सवाई : एक अध्ययन', 'विस्मृत लोकप्रतिभा मन्धरा नेपाल, नब्बे सालको भैंचालाको सवाई' र 'काग र चिपिचल्लाको बच्चा' गरी छ वटा लेखहरू मौखिक लोकसाहित्यसँग सम्बद्ध छन्। यीमध्ये आरम्भिक पाँच वटा लेखहरू सवाईको सैद्धान्तिक र

प्रायोगिक समालोचना हुन् भने अन्तिम लेख लोककथाको सङ्कलन हो ।

सवाई लोककाव्य-कविताको एक प्रकार हो । परम्परादेखि लोकसमुदायमा प्रयोग प्रचलनमा रहिआएको छ । 'सवाईको नालीबेली केलाउँदा' शीर्षकको लेखमा उपाध्यायले यही मान्यतालाई विस्तार गरेका छन् । उनका अनुसार सवाई शब्द काव्यगत एवम् लयगत जस्तो द्वयर्थक रहेको छ । एकातिर सवाई लोककविताको एक प्रकार हो भने अर्कोतिर यो एक लोकलय पनि हो । सामान्यतया बाह्रदेखि चौध अक्षरसम्म हुने, अन्त्यानुप्रासयुक्त लोकलयलाई नै सवाई भनिन्छ । बाह्रअक्षरी सवाईमा चार, सात र तेह्रौं चौध अक्षरी सवाईमा चार, आठ र चौधौं अक्षरमा यति वा विश्राम हुन्छ । लेखकका अनुसार सवाईमा अक्षरको गणनालाई भन्दा लयात्मकतालाई प्राथमिकता दिइन्छ । लय मिलाउनका लागि आवश्यकताअनुसार अक्षरलाई ह्रस्व-दीर्घ, हलन्त अजन्त वा लुप्ताक्षर अधिकाक्षर पारी लयप्रवाह अटुट राखिन्छ । त्यसैले लयात्मकता, साङ्गीतिक्ता र गेयता सवाईको विशेषता हो । सवाईमा आख्यान हुन्छ, किभने घटना प्रसङ्ग, लडाइँ, ऐतिहासिक, पुरुषको कार्यावलीको वर्णन हुन्छ । यस लेखमा सवाईको परिचय दिँदै नेपाली साहित्यको प्राथमिककालदेखि यही लोककाव्य कविताको ढङ्गढाँचामा दर्जनौं लेख्य सवाई काव्यहरू देखापरेका र तिनको एउटा परम्परा नै बन्न गएको प्रस्ट्याइएको छ । यसरी यो लेख सवाईको नालीबेली केलाउनमा केन्द्रित देखिन्छ ।

सवाई सम्बन्धी दोस्रो लेख 'नेपाली सवाईकाव्य : एक चिनारी'मा विभिन्न सवाईका उदाहरण सहित नेपाली सवाईको परिचय दिइएको छ । विभिन्न नेपाली लोकलयमध्ये सवाई पनि एक भएको बताउँदै यहाँ 'भोटको लडाञीको सवाई', 'असमको सवाई', 'नागाहिलको सवाई', 'चरीको सवाई', 'जङ्गबहादरको सवाई', 'सासू बुहारीको सवाई', 'काग र कागिनीको सवाई', 'महाजनका चेली बगेको सवाई' र 'शिवशङ्कर पाध्येको सवाई'बाट केही उदाहरण दिएर नेपाली सवाईका विभिन्न सन्दर्भ र विषयमा सवाई जुराइएको प्रस्ट पारिएको छ ।

सवाई सम्बन्धी तेस्रो लेख 'भोटको लडाञीको सवाई : लोकसाहित्यमा जेठो युद्धसाहित्य'मा यसलाई जेठो युद्धसाहित्यका रूपमा सिद्ध गरिएको छ । यहाँ प्राचीन समयदेखि नै नेपालीहरूले आफ्नो अस्तित्व रक्षाका लागि युद्धसंस्कृतिलाई स्वीकार गरेकाले अन्यान्य विषयका साथै युद्ध पनि लोकसाहित्यको विषय बन्न पुगेको बताउँदै एउटा त्यस्तै युद्धविषयक सवाईका रूपमा प्रस्तुत सवाईलाई

लिइएको छ। युद्धसाहित्यको साइनो महाभारतसँग जोडिँदा यहाँ लेखकले ‘ अम्बर पहाडको लडाइँको सवाई’ (१८९४), ‘मणिपुरको लडाइँको सवाई’ (१९५०), ‘नागाहिलको सवाई’ (१९६८), ‘युरोप महाभारत वा जर्मनीको लडाइँको सवाई’ (१९७७) ‘काबुलको लडाइँको सवाई’ (१९७८)कै परम्परामा १९११ मा जङ्गबहादुरको राज्यकालमा भएको नेपाल र भोटका बीचको लडाइँलाई कथ्यविषय बनाई ‘भोटको लडाञीको सवाई’को रचना भएको उल्लेख छ। यस सवाईका बीच-बीचका खास-खास पङ्क्तिको उद्धरण गर्दै सवाईको समीक्षा समेत गरिएको छ।

सवाई सम्बन्धी चौथो लेख ‘शिवशङ्कर पाध्येको सवाई : एक अध्ययन’ हो। तुलसीमान श्रेष्ठद्वारा “गोरखाली लोकसाहित्य” शीर्षकमा अनुसन्धान गर्दै गोर्खाबाट यसको सङ्कलन भएको हो। बाइसी-चौबीसी राजाहरूको समय सोह्रौंदेखि अठारौं शताब्दीका बीचमा गोर्खा निवासी शिवशङ्कर पाध्ये नामक पण्डितको चरित्रसँग यो सवाई जोडिएको छ। सङ्कलित अंशमा सवाई छन्दका साढे तेह्र चतुष्पदी श्लोक (५४ हरक) रहेका छन्। यो सामाजिक आख्यान भएकाले, गोर्खा भवाल्ली गाउँका एक व्यक्तिको कन्जुस्याइँ र सोको परिणाम देखाइएको छ। अनि आख्यानको वर्णन यहाँ गरिएको छ। चारै भाइको विवाह गरिदिएका पण्डितले छोरा पाइसकेकी माहिली बुहारीलाई सहन नसकी छोराको दोस्रो विवाह गरिदिने षडयन्त्र गरेको र छोराले त्यो स्वास्नीका माध्यमबाट चाल पाई सुइत्त भागेको, बुहारीलाई थप हेला गरेको, काम गरी खान पनि नदिएको, बारीमा कुटो-कोदालो गर्दा सासूले भाँजो हालेको र रोक्दा हात हालाहाल मात्र होइन; कोदालो र बन्चराले हानाहान भएको दुखद घटना यस सवाईमा रहेको उल्लेख छ। यहाँ संयुक्त परिवारका समस्या उठाइएको भन्दै प्रस्तुत सवाईको विश्लेषण गरिएको छ।

सवाई सम्बन्धी पाँचौं लेख ‘विस्मृत लोकप्रतिभा मन्धरा नेपाल र नब्बे सालको भैंचालाको सवाई’ हो। यसले नब्बे सालमा गएको भुइँचालोलाई वर्ण्य विषय बनाई मन्धरा नेपालद्वारा कथिएको सवाईका रूपमा लिइएको छ, अध्ययन गरिएको छ। नब्बे सालको भुइँचालाले नेपालमा धनजनको ठूलो क्षति पुऱ्याएको र अनेक कथ्थकेद्वारा त्यसलाई वर्ण्य विषय बनाई अनेक सवाई जुराउँदै कथेको भनिएको छ। त्यस्तै एक लोकप्रतिभा हुन्, १९५७ तिर भोजपुरको गोल्मारानी छेउछाउतिर जन्मेकी मन्दोदरा दाहाल। तिनै मन्दोदरा लोकउच्चारणमा मन्धरा

हुन गएको लेखकको मान्यता छ । तिनै मन्धराद्वारा रचना गरिएको र पूर्णप्रकाश नेपाल यात्रीद्वारा 'कहिल्यै मासिन नहुने र नओइलाउने मखमली फूल' शीर्षकमा सङ्कलित सवाईलाई लेखकले केही फाँकी प्रस्तुत गर्दै यहाँ विषय, लय, भाषा आदि कोणबाट समीक्षा गरेका छन् ।

'काग र चिपिचल्लाको बच्चा' प्रस्तुत ग्रन्थमा सँगालिएको एक मात्र लोककथा हो । यो अधिका अरु लेखजस्तो समालोचनात्मक नभएर लोकसिर्जनात्मक रचना हो । यसलाई उदालगुडी निवासी खँदाल्नी बज्यैबाट सुनी सङ्कलन गरिएको जानकारी गराइएको छ । यो एक आख्यान हो । आख्यानका अनुसार काग र कोइली मीत-मीत भए पनि आआफ्ना पोथी गर्भवती भएको एकअर्काले सुरुमा गोप्य राखे । पछि कोइलीले पहिले कुरो खोल्यो र अनि कागले । कसको पोथीले पहिले बच्चा जन्माउने भन्ने विषयमा हानथाप भयो । कागले जसका बच्चा पहिले हुन्छन्, उसले पछि जन्मेका चल्ला खाने प्रस्ताव राख्यो । कोइलीले मान्यो । कागका बच्चा पहिले भएकाले कागले चिपिचल्लाका चल्ला खान पाउनुपर्ने शर्त सम्झायो । कोइलीलाई भने 'भाग्यले दिने, कर्मले ठेल्ने' जस्तो भयो । कोइलीले जुक्ति झिकेर 'यति राम्रा बच्चालाई खान फोहोरी चुच्चो धोएर आउन' भन्यो । अनि काग खोलामा गयो । खोलाले कागलाई हाँडी ल्याउन भन्यो । काग हाँडी लिन कुमालेकहाँ गयो । कुमालेले हाँडी बनाउन माटो ल्याउन भन्यो । काग माटो लिन बँदेल कहाँ गयो । बँदेलले आफू अहिले दुब्लो भएकाले पहिले अलिकति गाईको दूध ल्याउन भन्यो । काग गाईकहाँ गयो । गाईले सुख्खा मौसमले गर्दा घाँस खान नपाएकाले घाँस ल्याइदिन भन्यो । काग घाँसीकहाँ पुग्यो । घाँसीले हँसिया ल्याइदिन भन्यो । काग हँसिया लिन कामीकहाँ गयो । कामीले एउटा हँसिया आरनमा हाली रातो पाऱ्यो अनि एउटा रातो अनि अर्को कालो दुई वटा हँसिया देखाएर 'कुन लाने ?' भनी सोध्यो । कागले रातो लाने भनेर पिठ्यू थापेकाले प्वाँख डढेर काला भए, चुच्चाले समातेर लान खोज्दा डढेर त्यो पनि कालै भयो अनि बल्ल कोइलीले मुख धोएर आउन भन्नुको अर्थ कागले बुझ्यो । यो एउटा सन्देशमूलक लोककथा हो ।

यहाँ भौतिक लोकसंस्कृति विषयक एउटा मात्र लेख रहेको छ, त्यो हो- 'हाम्रो प्राचीन सम्पदा : धनपालको पोखरी' । २०१८ सालतिर मोरङ जिल्लाको साविक कद्‌माहा गाविसका कृषकहरूले गाईलाई पानी खुवाउन भनेर निर्जन ठाउँमा रहेको पिपलका बोटको पूर्वतिर पर्ने ढिस्कोनेर पोखरी खनेछन् । खन्दै जाँदा

ढिस्कोमुनिबाट एकपछि अर्को गर्दै भाँडाकुँडा आदि भेटिँदै गए । पोखरी पानीले भरियो । भेटिएका सामान अञ्चलाधीशले उठाई लगे । गाउँलेहरूले पोखरीको नाम धनपाल पोखरी राखे । वस्तुतः त्यो 'कुनै समयका धनपाल राजासित सम्बन्धित क्षेत्र हो' भन्ने लेखकको भनाइ छ । करिब चार बिघा क्षेत्रमा फैलिएको सो पोखरी खन्दा भेटिएका 'हाँडाभाँडा र इँटाका टुक्राहरू महाभारतकालीन राजा विराटको प्राचीन राजधानी भनिने भेडियारीका भाँडा र इँटाका टुक्रासँग तुलनीय छन्' भन्ने लेखकको तर्क छ । यसरी यस प्राचीन सम्पदाको परिचय दिँदै लेखकले यहाँ यसको संरक्षण र सम्बर्धनको आवश्यकता रहेको औँल्याएका छन् । भौतिक संस्कृति सम्बन्धी यस लेखकको प्राचीन भौतिक सम्पदाप्रतिको जिम्मेवारीबोध प्रकट भएको छ ।

प्रस्तुत ग्रन्थमा परिष्कृत र मानक नेपाली भाषाको प्रयोग भएको छ । अधिकांश लेखहरू अनुसन्धानमूलक भएकाले तिनमा विषयको प्रकृतिअनुरूप शोधभाषाको प्रयोग हुनु स्वाभाविक छ। एक मात्र लोककथामा सोहीअनुरूपको भाषा छ। जुन लेखको भाषामा तत्सम शब्दको बहुलता छ भने त्यसको अधिकतर वर्ण्यविषय राजवंशी जाति, लोकजीवन र तिनका संस्कार भएको स्पष्ट हुन्छ। त्यहाँ यथास्थानमा ती जाति वा समुदायका प्रचलित शब्दहरू पर्न गएका छन् । देउनियाँ, पेटानी, चुमना प्रथा, गोदना, कनसी, सनाला, गोकुल, नथिया, हासली, बिच्छी, झुलाकाठी, शाखा, बाजु, पाइजन, खरुवा, धाइनी, दाइयानी, बेन्डा, मानली, कोइना, तिलक, सान्दुस, खावा, सारनी, टौलुवा, लकुन्ड्यानी, फूलभासा, डाँगुवा, धनजिया, मुढी, बरी आदि त्यस्ता केही शब्दहरू हुन् । यस्ता शब्दलाई लेखकले विभिन्न तरिकाले यथास्थान अर्थ्याई बोधगम्य बनाइदिएका छन् । झापा कर्मथलो भएर पनि उनी झर्रो नेपालीप्रति आकर्षित भएको पाइँदैन । झर्रोप्रति भन्दा तत्सम शब्दको चयनमा उनको अभिरुचि बढी देखिन्छ । प्रचलित तत्सम शब्दका अतिरिक्त प्रलेप (पृ.१), जनवसति (पृ.२५, ...), हृत्केन्द्र (पृ.३३), प्राणवन्त (पृ.३५), साम्प्रतिक (पृ.१०९) आदि अप्रचलित तत्सम शब्दले भने बेला-बेलामा दाँतमा ढुङ्गा लगाउँछन् ।

समग्रमा लोकवार्ता : लोककै चर्चा शीर्षकको प्रस्तुत ग्रन्थ आफ्नो नामअनुरूप नै देखिन आउँछ। शीर्षकमुताबिक नै यहाँ लोकवार्ता र लोकको चर्चा छ। गहन र विशद् अध्ययन लोकवार्ताको विशाल भण्डारमध्येबाट यहाँ लोकजीवन, राजवंशी र गन्गाई जाति, सवाई र लोककथा जस्ता मौखिक लोकवार्ता तथा

भौतिक लोकवार्ता धनपालको पोखरी जस्ता सीमित विषयलाई प्रस्तुत गरिएको छ । सयौं जातजातिका सयौं मौखिक-भौतिक, मूर्त-अमूर्त लोकवार्ताका विषय छन् । तीमध्ये यहाँ उल्लिखित विषयमा लेखक सीमित भएका छन् । राजवंशी जाति, तिनको लोकजीवन, संस्कार र संस्कृतिमा लेखक बढी नै तल्लीन भएर लागेको पाइन्छ । उही विषयमा उनी घुमी-घुमी लागेका छन् । राँटा खोजी-खोजी मसिन्याएका छन् । यति भइकन पनि राजवंशीका मौखिक लोकवार्ता अर्थात् लोकसाहित्य (लोकगीत, लोकगाथा, उखान, गाउँखाने कथा, लोकनाटक, प्रदर्शनकारी कला आदि) बारे लेखक मौन देखिन्छन् । लोककथा र भौतिक लोकवार्ता सम्बन्धी एक-एक सामग्री रहेका छन् । अतः यहाँ विषयवस्तु, तिनको प्रस्तुतीकरण, विषयको गहनतामा सन्तुलन र एकरूपता पाइँदैन । यो 'योजनाबद्ध लेखन नहुनुको परिणति हो' भन्न सकिन्छ । लेखमा संरचनागत सीमा पनि रहन गएका छन् । यति भइकन पनि यहाँ लोकवार्ताको सङ्कलन, खोजी र अध्ययनमा लेखकको आस्था, तन्मयता, लगनशीलता प्रकट भएको छ । उनी लोकको खोजीमै तल्लीन देखिन्छन् । नेपाली लोकसाहित्यको सङ्कलन र अध्ययनको परम्परामा २०५८ सालदेखि यता पाँचौं चरणको आरम्भ भएको हो । यस चरणमा विशिष्ट र विविधतायुक्त प्राज्ञिक कार्य भएका छन् । त्यस्तै कार्यमध्ये उपाध्यायको यो कृति पनि एक हो । प्रस्तुत कृतिले नेपाली लोकवार्ताको अध्ययन परम्परामा एउटा महत्वपूर्ण कडीको काम गरी आएको छ । यो कृति लोकवार्ताको अध्ययन र अनुसन्धानमा रुचि लिने जोकोहीका लागि पनि उपयोगी देखिन्छ ।

*(लेखक लोक साहित्यका अनुसन्धाता हुनुहुन्छ)*



डा. कर्णाखर खतिवडा

# राजवंशी परिचय (भाषा, लिपि र व्याकरण खण्ड) को चर्चा

## १. विषय प्रवेश

भारोपेली परिवारको राजवंशी भाषा पूर्वी नेपालका झापा तथा मोरङ जिल्लामा बोलिन्छ। अन्तर्सीमावर्ती राजवंशी भाषा भारतका बिहार, पश्चिम बङ्गाल र सम्भवतः असमको पश्चिमी क्षेत्रमा बोलिन्छ (वाइल्ड २००८ : १)। यस भाषाका विभिन्न भाषिकाहरू भएकाले ती सबैलाई राजवंशी शब्दले नसमेट्ने हुँदा यस भाषालाई 'कामता राजवंशी तथा उत्तरी देशी बाङ्ला' भन्नु उपयुक्त हुने कुरा तोमलिन (२००६) ले बताएको कुरा वाइल्डले उल्लेख गरेका छन्। नेपालमा बोलिने राजवंशी भाषामा विद्यावारिधि गर्ने क्रिस्टोफर वाइल्डले सरलताका लागि ताजपुरी, गन्गाई तथा राजवंशी भनी छुट्टाछुट्टै रूपमा चिनाउन चाहने मानिसहरूले बोल्ने भाषा भने मूलतः एउटै रहेको र नेपालका सन्दर्भमा राजवंशी नामले ती सबैलाई समेट्न सक्ने सम्भावना व्यक्त गरेका छन्। राजवंशी भाषाबारे सर्वप्रथम ह्यामिल्टनले १९७१ : १८१८ ले चर्चा गरेका हुन् भनी वाइल्डले बताएका छन्। राजवंशी भाषालाई कामता बिहारी, कामरूपी, कोच, रङ्गपुरी, बाहे, सुर्जापुरी, देखिया जस्ता नामले पनि चिनिन्छ। नेपाल तथा भारतमा विभिन्न स्वरूपमा बोलिने र बेग्लाबेग्लै नामबाट परिचित यो भाषालाई नेपालमा राजवंशी भनिन्छ।

## २. नेपालमा राजवंशी भाषाको स्थिति

राष्ट्रिय जनगणना-२०६८ अनुसार राजवंशी भाषाका वक्ताहरूको कूल सङ्ख्या १,२२,२१४ रहेको छ। नेपालको कूल जनसङ्ख्याको ०.४६% मानिसहरू यो भाषा बोल्छन्। नेपालमा बोलिने १२३ भाषाहरूमध्ये १ लाखभन्दा बढी जनसङ्ख्या भएका १९ वटा भाषामध्ये राजवंशी १८ औं स्थानमा पर्दछ (यादव, २००४

सन्) । राजवंशी भाषा मातृभाषाका रूपमा बोल्ने व्यक्तिहरू बाहेक २०,०६० (०.०७%) मानिसहरू दोस्रो भाषाका रूपमा यो भाषा बोल्छन् । राजवंशी भाषा मूलतः प्रदेश नं- १ मा बोलिने भाषा हो । भाषा आयोगद्वारा प्रकाशित भाषिक तथ्याङ्क (२०७५) अनुसार प्रदेश नं- १ मा १०६ वटा भाषा बोलिन्छन् । तीमध्ये राजवंशी भाषा नवौं स्थानमा रहेको छ। प्रदेश- १ मा १२१२९१ (२.६७%) मानिसहरू राजवंशी भाषा बोल्छन् । सोही तथ्याङ्कअनुसार प्रदेश- १ मा ताजपुरिया भाषाका १८,५६० जना वक्ताहरू रहेका छन् । बिष्ट (सन् १९६७ : १०) मा राजवंशीहरूले बोल्ने भाषालाई राजवंशी वा ताजपुरी भनिन्छ भनी यी दुबै भाषालाई एउटै मानिएको छ। यता नेपालको राष्ट्रिय जनगणना (२०६८) मा ताजपुरिया भाषा छुट्टै उल्लेख गरिएको छ। जसअनुसार नेपालमा ताजपुरिया भाषाका वक्ताहरूको सङ्ख्या १८,८११ (०.०७%) रहेको छ। त्यस्तै, दोस्रो भाषाका रूपमा १,१७५ जनाले ताजपुरिया बोल्ने तथ्याङ्क देखाइएको छ। बिष्ट (१९६७ : १६०)मा उल्लेख भएअनुसार हाल राजवंशी वा ताजपुरी/ ताजपुरिया भनेर चिनिने मानिसहरूलाई पहिले कोच भनिन्थ्यो । तत्कालीन कोचहरूमध्ये कतिपयले हिन्दू धर्म अँगाले । उनीहरू राजवंशी उपाधिले विभूषित भए । कतिपय मुस्लिम धर्म मान्न थाले । आर्थिक अवस्था कमजोर भएका केही कोचहरू मात्र आफ्नो परम्परागत सांस्कृतिक अवस्थामा रहिरहे । जातिगत वा धार्मिक दृष्टिले विभिन्न रूपमा विभाजित भए पनि कोच मूलमा मानिसहरूले बोल्ने भाषाकै एउटा नाम राजवंशी हो । यही राजवंशी भाषाका बारेमा डा. द्रोणकुमार उपाध्यायद्वारा लिखित अनुसन्धानमूलक कृति राजवंशी परिचय (भाषा, लिपि र व्याकरण खण्ड) २०५५ को चर्चा गर्ने प्रयास यो लेखमा गरिएको छ।

**३. पुस्तकबारे**

राजवंशी परिचय (भाषा, लिपि र व्याकरण) का अग्रभागका १० पृष्ठ समेत गरी ७० पृष्ठमा विस्तारित सानो आकारको पुस्तक हो । राजवंशी भाषा प्रचार केन्द्रीय समिति, भद्रपुरद्वारा २०५५ सालमा प्रकाशित यो पुस्तकमा रहेका सामग्री विभिन्न १५ उपशीर्षकका विभाजित गरिएका छन् । प्रारम्भिक तीन उपशीर्षक परिचयात्मक रहेका छन्; जसअन्तर्गत क्रमशः राजवंशी भाषाको परिचय, लिपि एवम् भाषिक संरचना, प्रभाव र लक्षणको चर्चा गरिएको छ। उपशीर्षक ४ देखि १५ मा भने राजवंशी भाषाका व्याकरणका विभि पक्षहरूको चर्चा गरिएको छ।

## ४. विषयवस्तु

यस पुस्तकमा राजवंशी भाषाको परिचय दिने क्रममा लेखकले भारोपेली परिवारको आर्य-इरानेली वर्गअन्तर्गत भारतीय आर्य भाषा समूहका विभि भाषाहरूमध्ये राजवंशी एउटा भाषा भएको उल्लेख गरेका छन् । फ्रान्सिस बुकानन ह्यामिल्टनले 'अकाउन्ट अफ दि किङडम अफ नेपाल' मा सङ्केत गरेअनुसार कोच र राजवंशी एउटै जाति भएकोतर्फ सङ्केत गरेको प्रसङ्ग उल्लेख गरिएको छ । राजवंशी भाषाको पूर्वाध्ययनको समीक्षा गर्ने क्रममा उपाध्यायले इडवार्ड टुइट डाल्टनले आफ्नो डिस्क्रिप्टिव इथ्नोलोजी अफ बङ्गाल (१८७२ सन्) नामक कृतिमा कोचहरूलाई द्रविड मूलका हुन् भनेका छन् भनी बताएका छन् । एन. बी. रोजी.ले स्टाटिस्टिकल अकाउन्ड अफ बङ्गाल (१८७१) मा डब्ल्यू डब्ल्यू हन्टरमद्वारा कोचबारे चर्चा गरिएको उल्लेख गरेका छन् । रोनी होरेटिओ बिकरस्टाफले द वाइल्ड ट्राइब्ज अफ इन्डिया नामक पुस्तकमा भने कोच र राजवंशी भिन्नै रहेको र राजवंशीहरू खासमा बङ्गाली भएको चर्चा गरेका छन् भन्दै राजवंशीहरू आर्य मूलका जाति रहेको पुष्टि गर्ने प्रयास गरेका छन् ।

राजवंशी भारतीय आर्य भाषा हो कि होइन भन्नेमा अनेक मतमतान्तर भए पनि "यस भाषाको आन्तरिक शब्द रचना व्याकरणिक संरचनालाई हेर्दा यो भाषा भारतीय आर्य भाषा गोष्ठीको भाषा हो भन्न हिच्किचाउनु नपर्ने" तर्क उपाध्यायको रहेको छ । यसै क्रममा लेखकले डा. सुनीतिकुमार चटर्जीले असमिया भाषा र राजवंशीहरूले बोल्ने भाषाबीच बढी निकटता र एकरूपता रहेको देखाउन खोजेको बताएका छन् । बङ्गाली साहित्यका विद्वान् डा. सुनीतिकुमार सेनले "जलपाइगुडी, कुचबिहार, रङ्गपुर, दिनाजपुरको केही अंश र पूर्णिया अनि दार्जीलिङ जिल्लाका केही भागमा कामरूपी उपभाषा प्रचलित रहेको निर्क्यौल गरेका छन्" भनेका छन् ।

नेपालका प्रसिद्ध भाषाशास्त्री प्रा. बालकृष्ण पोखरेलले ताजपुरी भाषालाई भारतीय आर्य परिवारको मागधेली शाखाको भारतवर्गभित्र पर्ने मैथिली र भोजपुरी भाषाको सहोदर बताएका छन् । उपाध्यायका अनुसार नेपालमा ताजपुरियाहरूले बोल्ने भाषा नै राजवंशी भाषा हो । झापा तथा मोरङमा ताजपुरियाभन्दा प्रायः सबैले राजवंशी नै भन्ने बुझ्छन् (उपाध्यायः २०५५:४) ।

राजवंशी भाषाको पारिवारिक चिनारी प्रस्तुत गर्ने क्रममा निष्कर्षका रूपमा उपाध्याय भन्छन् "कामरूपी वा उत्तरबङ्गीय भाषा वा राजवंशी भाषा भन्नु एउटै

भए पनि राजवंशी भन्ने जातिले बोल्ने गरेका हुनाले यस भाषालाई राजवंशी भाषा भन्नु चाहिँ बढी उपयुक्त देखिन्छ।" कतिपयले राजवंशी भाषालाई बङ्गालीको भाषिका वा असमियाको भाषिका सिद्ध गर्ने प्रयास गरेका भए पनि कामरूपी भाषाका रूपमा धेरैअघिदेखि यो भाषा स्वतन्त्र रूपमा विकास भएको देखिन्छ भन्ने उपाध्यायको ठहर छ। वाइल्ड (२००८) ले राजवंशी भाषा पूर्वतिर असमी, पश्चिमतिर मैथिली र दक्षिणतिर बङ्गालीसँग समानता राख्छ भनेका छन्।

राजवंशी भाषाको लिपिका सन्दर्भमा डा. उपाध्यायले राजवंशी भाषा कामरूपी भाषाको विकसित रूप भएको हुँदा कामरूपी लिपि नै राजवंशीहरूको स्वकीय लिपिरहेको स्वयंसिद्ध हुन्छ भनेका छन्। उपाध्यायले प्राचीनकालदेखि नै कामरूप प्रदेशमा प्रचलित कामरूपी लिपि मूलतः कुटिल लिपिबाट विकसित भए पनि यसमा नागर र शारदा लिपिको पनि सम्मिश्रण भएको सङ्केत पाइन्छ भनेका छन्। यद्यपि राजवंशी भाषाको लेखनका लागि स्थानअनुसार देवनागरी (नेपाल), बङ्गाली (पश्चिम बङ्गाल) तथा असमिया (असम) लिपि व्यवहारमा आएको देखिन्छ।

**क. राजवंशी भाषाको भाषिक संरचना, प्रभाव र लक्षण**

उपाध्यायका अनुसार राजवंशी भाषा मूलतः आर्य गोष्ठीको संस्कृत निःसृत भाषा भएको हुनाले यस भाषाको संरचना र शब्दढिकुटीमा वंशगत प्रभाव प्रमुख रहनु स्वाभाविक हो। भारतीय आर्य परिवारका अन्य भाषामा जस्तै यस भाषामा पनि भोटबर्मेली, द्रविड तथा अस्ट्रो-एसियाली भाषाका शब्दहरू प्रवेश गरेका छन्। यस भाषाको भाषिक भूगोलको पर्यवेक्षण गर्नु हो भने पूर्वतिर असमिया र बाङ्ला, दक्षिणमा बाङ्ला र ओडिया आदि तथा उत्तरपट्टि राई लिम्बू, जोङ्खा, तिब्बती आदि भाषा बोलिन्छन्। नेपालमा बोलिने राजवंशी भाषामा नेपाली भाषाको व्यापक प्रभाव छ। राजवंशी भाषामा नेपाली भाषाको प्रभाव शब्द स्तरमा मात्र नभई व्याकरण (रूप तथा वाक्य) स्तरमा समेत अनुभव गर्न सकिन्छ। राजवंशी भाषामा मैथिलीको प्रभाव पनि उत्तिकै देखिन्छ। यी दुई भाषाबीच सहोदर दिदी-बहिनीको सम्बन्ध छ। भाषिक प्रभाव एकपक्षीय हुँदैन। नेपाली भाषा पनि राजवंशीबाट प्रभावित रहेको उदाहरण उपाध्यायले प्रस्तुत गरेका छन् : गाम्छा, मागुर माछा, भाजा, भाजी, मुरी, बैगुन (भान्टा), आली, टाटी, कोला, दुनी आदि राजवंशी भाषाबाट नेपालीमा आएका शब्द हुन्।

### ख. व्याकरण

उपाध्यायका अनुसार हालसम्म राजवंशी भाषाको व्याकरण लेखन गर्दा अन्य भाषाका व्याकरणलाई आधार मान्ने गरिएको छ। यो सही होइन। भाषाको आफ्नै मौलिकता र विशिष्ट संरचना हुने हुँदा त्यसैका आधारमा सम्बन्धित भाषाको व्याकरण लेखिनु पर्छ। संस्कृत वा अङ्ग्रेजी व्याकरणलाई मानक मानेर आधुनिक भाषाहरूको व्याकरण लेखिँदा ती भाषाको वास्तविक मर्म पहिल्याउन नसकिनाका साथै वस्तुपरक वर्णन पनि सम्भव हुँदैन। उपाध्यायका अनुसार राजवंशी भाषामा नेपालीमा जस्तै २९ वटा व्यञ्जन वर्ण र ६ वटा व्यतिरेकी स्वर वर्ण छन्। यस भाषाका व्यतिरेकी वर्णहरूलाई उपाध्यायले लघुतम युग्मका आधारमा प्रस्तुत गरेका छन्। यस पुस्तकमा राजवंशी भाषाका स्वरहरूलाई जिब्राको उचाइ, जिब्राको सक्रिय भाग तथा ओठको गोलाइका आधारमा वर्गीकरण गरिएको छ भने व्यञ्जन वर्णलाई पनि स्थान प्रयत्न, घोषत्व र प्राणत्वका आधारमा वर्गीकरण गरिएको छ।

### ग. राजवंशी भाषामा ध्वनि परिवर्तन

ध्वनि परिवर्तनको अध्ययन ऐतिहासिक भाषाविज्ञानको एक महत्वपूर्ण विषय हो। यस पुस्तिकामा राजवंशी भाषामा घटित ध्वनिपरिवर्तनका विभिन्न प्रक्रियाहरूमध्ये समीभवन, विषमीभवन, विपर्यास, आगम, लोप, नासिक्यीभवन, विनासिक्यीभवन, महाप्राणीभवन, अल्पप्राणीभवन, खकारीभवन, रकारीभवन, तालव्यीभवन, अर्द्धव्यञ्जन विपर्यय, मूर्धन्यीभवन, अर्थान्तर तथा घोषीभवनको सोदाहरण चर्चा गरिएको छ। त्यसैगरी, राजवंशी भाषाको शब्दभण्डार पर्गेल्ने क्रममा उपाध्यायले राजवंशी भाषाको शब्दभण्डारलाई मौलिक तथा आगन्तुक वर्गमा विभाजन गर्दै मौलिक समूहमा तत्सम, अर्द्ध तद्भव (किस्न, बिस्नु, सुर्ज्य, ग्यान) र तद्भव तथा आगन्तुक समूहमा भारोपेली स्रोत र अभारोपेली स्रोतका भनी वर्गीकरण गरेका छन्। तद्भव शब्दहरूमा हात (हात), जिभा (जिब्रो), गाधा (गधा), आखर (अक्षर), चखु (चक्षु), देहा (देह), करम, धरम, मरम (कर्म, धर्म, मर्म) आदि शब्दहरूको चर्चा गरेका छन्। आगन्तुक शब्दमा रूपमा राजवंशी भाषामा नेपालीबाट सुरुवाल, दौरा, खुकुरी, नयाँ, थाक्रो, गन्थन, बसाइँ, सराइ आदि शब्दहरू पचिसकेका बताएका छन् भने हिन्दी, अरबी, तुर्केली, फार्सेली, ल्याटिन, पोर्तुगाली, फ्रान्सेली, ग्रिसेली, इटालेली, रुसी आदि भाषाबाट राजवंशीमा आएका शब्दहरूको चर्चा गरेका छन्। नेपालभित्रै बोलिने भारोपेली

परिवारभन्दा बाहेकका मगर, नेवार, तामाङ, लिम्बू आदि भाषाबाट आएका शब्दहरूको पनि चर्चा गरेका छन् ।

**शब्द निर्माण प्रक्रिया**

**उपसर्ग र परसर्ग**

यस उपशीर्षकमा उपाध्यायले राजवंशी भाषामा प्र. परा, अप, सं आदि २१ वटा विभिन्न तत्सम उपसर्गहरूका साथै अ, अन, नि, कु, अति, बि, सु जस्ता ७ वटा उपसर्ग तथा बद, दर आदि ११ वटा उर्दू (?) आगन्तुक उपसर्गहरूको चर्चा गरेका छन् भने ती उपसर्ग लागेर बनेका शब्दहरूको सूचीसमेत दिएका छन् । प्रत्यय (परसर्ग) द्वारा शब्द निर्माण हुने उत्पादनशील प्रक्रिया रहेको चर्चा गर्दै कृत् प्रत्यय र तद्धित प्रत्ययमध्ये तत्सम परसर्ग र तद्भव तथा आगन्तुक परसर्गहरूको तुलना गरिएको छ । यी परसर्ग लागेर बनेका शब्दहरूको आधारपद वा व्युत्पन्न शब्दको नेपाली रूपान्तर नदिइएको हुँदा शब्दको अर्थ बुझ्न भने पाठकहरूलाई कठिनाइ हुने देखिन्छ ।

**समास र द्वित्व**

शब्द निर्माण प्रक्रियाअन्तर्गत समास शीर्षकमा राजवंशी भाषामा मुख्यतया तत्पुरुष, द्वन्द्व, द्विगु, कर्मधारय, बहुब्रीहि र अव्ययीभाव समास गरी ६ किसिमका समास प्रक्रियाबाट शब्द निर्माण हुने बताउँदै पुस्तकमा यी समासहरूको सोदाहरण चर्चा गरिएको छ । द्विरुक्ति वा द्वित्वका सन्दर्भमा पनि राजवंशी भाषामा द्वित्व प्रक्रियाबाट निर्मित शब्दका उदाहरण प्रस्तुत गरिएको छ । यसबाट राजवंशी भाषामा द्वित्व प्रक्रिया पनि उत्पादनशील रहेको स्पष्ट हुन्छ ।

**क्रियाका काल**

क्रियाका कालबारे चर्चा गर्ने क्रममा उपाध्यायले राजवंशी भाषामा पनि अन्य कतिपय आर्य भारतीय भाषाहरूमा जस्तै भूतकाल र अभूत काल रहेका र अभूतकाललाई वर्तमान र भविष्यत् गरी दुई भागमा बाँड्न सकिने बताएका छन् । उनका अनुसार क्रियामा आल, नु, इसले, इल आदि प्रत्यय लागेर भूतकालिक संरचनाको निर्माण हुन्छ । त्यसैगरी, अभूतकालअन्तर्गत चे, चु, चि, छु जस्ता प्रत्ययले वर्तमान काल र बे, बो, ओम, हुँ, यिस् ओक आदि भविष्यत् काल चिह्नित गर्ने कुरा बताइएको छ ।

**सङ्ख्यावाची शब्द**

सङ्ख्यावाची शब्दअन्तर्गत १ देखि १०० सम्मका अङ्क, क्रमार्थक सङ्ख्या, गुणनको पढाइ गर्ने ढाँचा, भिन्नार्थक सङ्ख्यावाची शब्द समूहवाची सङ्ख्या शब्द, धान, चामल आदिको मापन गर्ने एकाइ, पुरानो हिसाबको मौद्रिक गणना, आदिको चर्चा गरिएको छ ।

**विभक्ति र कारक**

विभक्ति र कारक शीर्षकअन्तर्गत राजवंशी भाषामा कर्ता, कर्म, करण, सम्प्रदान, अपादान, अधिकरण सम्बन्ध र सम्बोधन कारक तथा सोहीअनुसार प्रथमादेखि सप्तमीसम्मका विभक्ति र विभक्ति चिहन्हहरूको चर्चा गरिएको छ भने वाच्य शीर्षकमा राजवंशी भाषाका कर्तृवाच्य (राम रावनक मारिल, मुइ किताब पढ्नु आदि) कर्मवाच्य (रामसे रावन मारागेल, मोरद्वारा किताब पढा गेल) र भाववाच्य (घरत थाका होल, मोर से टहलवा होल) आदि उदाहरण प्रस्तुत गरिएको छ ।

**लिङ्ग व्यवस्था**

राजवंशी भाषामा विद्यमान लिङ्ग व्यवस्थाको चर्चा गर्ने क्रममा उपाध्यायले राजवंशी भाषामा व्याकरणिक लिङ्ग नभएको बताउँदै भाइ कानिल (भाइ रोयो), बहिन कानिल (बहिनी रोई), चेङ्रा असल छे (केटो राम्रो छ) चेङ्रि असल छे (केटी राम्री छे) जस्ता वाक्यबाट राजवंशी भाषामा व्याकरणिक लिङ्ग नभएको स्पष्ट पारेका छन् । मानवीय नामको प्राकृतिक लिङ्ग छुट्याउनका लागि भने आइ/बा, माइ/बाबु, बहिन/जुवाइँ, बेछार्नी/मर्दाना,  जाअ/भसुर जस्ता शब्द जोडामध्ये अघिल्लाले स्त्री जाति र पछिल्लाले पुरुष जाति बुझाउने बताएका छन् । केही पुरुषवाची शब्दमा ई प्रत्यय जोडे स्त्रीलिङ्गी बन्ने गरेको पाइन्छ जस्तै : दादा/दादी, काका/काकी, पेचा/पेची, घेगा/घेगी, मसाश्रमसी आदि । त्यस्तै, राजवंशी भाषामा पुलिङ्गी नाममा नी प्रत्यय जोडेर स्त्रीलिङ्गी बनाउने गरिन्छ । जस्तैः साधु/साधुनी, कोच/कोचनी । आनी प्रत्यय जोडेर देवर/देवरानी, हारि/हारियानी तआ आइ प्रत्यय जोडेर पिसा/पिसाइ, जेठो/जेठाइ आदि प्रक्रिया देखाइएको छ ।

**पुरुष र वचन**

पुरुष र वचनअन्तर्गत राजवंशी भाषामा एकवचन र बहुवचन ढाँचाको वचन

व्यवस्था र प्रथम, द्वितीय र तृतीय पुरुष व्यवस्था रहेको उल्लेख गरिएको छ। राजवंशी भाषामा कर्ताअनुसार वचन रूपायित हुने गर्छ। मुइ भात खानु (प्रथम पुरुष एकवचन), हामा भात खाइचि (प्रथम पुरुष बहुवचन), तुइ भात खाचिस् (द्वितीय पुरुष एकवचन) तम्हा भाग खालन (द्वितीय पुरुष बहुवचन), अए भात खाचे (तृतीय पुरुष एकवचन), अम्हा भात खाचे (तृतीय पुरुष बहुवचन) आदि उदाहरण प्रस्तुत गरिएको छ।

**करण/अकरण**

राजवंशी भाषाका करणबाट अकरणमा परिवर्तन गर्दा साधारणतया उपसर्गका रूपमा नि (निजाम, निखाम) र परसर्ग (प्रत्यय) का रूपमा नि लाग्ने (जामनि, खामनि) बताइएको छ। यस प्रक्रियाका थप उदाहरणहरूमा होल (निहोल/होलनि), जाबो (निजाबो/जाबोनि), खाचे (निखाचे/खाचेनि), कानिल (निकानिल/कानिलनि), करिस (निकरिस/करिसनि) आदि। वाइल्ड (२००८) ले मुख्य क्रियाका अघि र पछि दुबैतिर अकरणबोधक नि आउने भए पनि अकरणको अर्थलाई जोड दिनु पर्दा नि क्रियापछि आउने बताएका छन्।

**प्रकाशकीय**

राजवंशी भाषा प्रचार केन्द्रीय समितिका तत्कालीन अध्यक्ष फूलसिंह राजवंशीद्वारा राजवंशी भाषामा लेखिएको प्रकाशकीयमा बहुजातीय बहुभाषिक तथा बहुसांस्कृतिक नेपालमा बोलिने दर्जनौं भाषाहरू मौखिक रूपमा मात्र बोलिने गरेका भए पनि वर्तमान संविधान (२०४७) ले नेपालका सबै भाषाहरूलाई राष्ट्रिय भाषाको मान्यता दिएको कुरा उल्लेख गर्दै ती राष्ट्रिय भाषाहरूको संरक्षण, संवर्धन र विकासमा भने राज्यले खास जिम्मेवारी नलिएको कुरा उल्लेख गरिएको छ। राजवंशीहरूको पहिचानको मूल आधार नै राजवंशी भाषा भएकाले यस भाषाको विकास र विस्तारका लागि लिपि, व्याकरण, साहित्य रचना, प्राचीन सामग्रीको खोज तथा अनुसन्धान गर्नु पर्ने टड्कारो आवश्यकता रहेका सन्दर्भमा डा. द्रोणकुमार उपाध्यायले तयार गरेको 'राजवंशी परिचय' प्रशंसनीय कार्य रहेको भन्दै यो अध्ययन, अनुसन्धान तथा परिश्रमका लागि लेखकलाई धन्यवाद दिइएको छ र आफ्नो संस्थाबाट यस्तो महत्वपूर्ण पुस्तक प्रकाशन गर्न पाएकामा प्रशन्नता व्यक्त गरिएको छ।

**भूमिका**

यस पुस्तकमा रामनाथ बाँस्कोटाले भूमिका लेखेका छन् । पुस्तकका सम्बन्धमा केही शब्द शीर्षकको यस भूमिकामा द्रोणकुमार उपाध्यायद्वारा लिखित यस पुस्तकमा राजवंशी भाषाको उत्पत्ति, विकास र यसको वर्तमान स्थितिका बारेमा वस्तुपरक अध्ययन प्रस्तुत गरिएको भनिएको छ । बाँस्कोटाले राजवंशी भाषाका मूलतः निम्न पक्षहरूको चर्चा गरेका छन्–

पूर्वी नेपालको झापा, मोरङ र सुनसरी जिल्लामा राजवंशी भाषा बोलिने, यो भाषा पूर्वोत्तर भारतको असम, उत्तर बङ्गाल र बिहारको पूर्वी भागमा पनि बोलिन्छ । यो भाषा असमिया, बङ्गला र मैथिली भाषाको सन्निकट रहेको छ । नेपालका भाषाहरूको अध्ययन अनुसन्धानमा कमी भइरहेका सन्दर्भमा वि.सं. २०४७ को संविधानले नेपालका भाषाहरूप्रति चासो देखाएकामा खुशी व्यक्त गरिएको छ । कामरूपी राजवंशी भाषाको आफ्नो लिपि हो र अहिले यो लिपि बङ्गाली र असमिया लिपिका रूपमा समेत विकास भएको छ भन्दै नेपालका राजवंशीहरू देवनागरी लिपिको प्रयोग गर्छन् भनिएको छ । राजवंशीहरू शब्द उच्चारण गर्दा नेपाली र मैथिलीका तुलनामा बङ्गला र असमिया ध्वनिका नजिक देखिन्छन् भन्ने बाँस्कोटाको ठहर छ । भाषावैज्ञानिक आधारमा विश्लेषण विवेचन भएका कारण लेखकले प्रस्तुत गरेका राजवंशी भाषाको ध्वनि परिवर्तन प्रक्रिया यथार्थ देखिन्छ भन्दै बाँस्कोटाले 'नेपालमा बसोबास गर्ने राजवंशीहरूले आफ्नो भाषाको समग्र विकासका लागि पूर्वोत्तर भारतका राजवंशीहरूसँग सङ्गठित भएर लाग्नु पर्ने टड्कारो आवश्यकता रहेको' तर्फ सङ्केत गर्दै 'राजवंशी भाषा साहित्यको विकास र संवर्द्धनमा प्रस्तुत ग्रन्थ एक आधार ग्रन्थ बन्न सक्ने बताएका छन् ।

'लेखकका तर्फबाट' शीर्षकको भूमिकामा डा. उपाध्यायले बहुभाषिक, बहुसांस्कृतिक तथा बहुजातीय नेपालको पूर्वी द्वारमा ढकमक्क फुलेका फूलका रूपमा राजवंशी भाषाको परिचय दिँदै नेपालका भाषाहरूप्रति आफ्नो भावनात्मक उद्गार व्यक्त गरेका छन् । राजवंशी भाषाको अध्ययन गर्ने बृहत् योजनाअन्तर्गतको सानो स्वरूपका रूपमा यो पुस्तिका पाठकहरूसमक्ष पुऱ्याइएको स्वीकार्दै यस क्षेत्रमा अनेक भाषाहरू संरक्षणको अभावमा सङ्कट झेलिरहेको तथ्य उल्लेख गरेका छन् ।

**समापन**

यस पुस्तिकाले राजवंशी भाषाको व्याकरण लेखनका क्षेत्रमा एउटा कोशेढुङ्गाको

काम गरेको छ । यस पुस्तकलाई भाषा, लिपि र व्याकरण खण्ड भनी विशिष्टीकृत गरिएको हुँदा राजवंशी भाषाका अन्य पक्षहरूको समेत अध्ययन अनुसन्धान गर्ने लेखकको उद्देश्य रहेको बुझिन्छ । हाल डा. उपाध्यायको इहलीला समाप्त भइसकेको हुँदा उनले अनुसन्धान गरेका कृतिहरू भए खोज गरी तिनको प्रकाशन गर्नु पर्ने टड्कारो आवश्यकता देखिन्छ ।

अन्त्यमा, मेरा श्रद्धेय गुरु डा. द्रोणकुमार उपाध्यायप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्छु ।

**सन्दर्भ सामग्री**

उपाध्याय, द्रोणकुमार. २०५५. *राजवंशी परिचय (भाषा लिपि र व्याकरण खण्ड).* भद्रपुर : राजवंशी भाषा प्रचार समिति ।

Bista, Dor Bahadur. 1967. People of Nepal. Edn. 2019. Kathmandu: Ratna Pustak Bhandar.

Central Bureau of Statistics. 2012. National Population and Housing Census 2011 (National Report). Kathmandu: Government of Nepal.

Central Bureau of Statistics. 2014. Population Monograph of Nepal Vol II (social demography). Kathmandu: Government of Nepal.

Eppele, John and Jonathan D. Grimes 2001. The Rajbanshi of Nepal: A Sociolinguistic Study. Unpublished manuscript.

Eppele, Jon W.; M. Paul Lewis; Dan Raj Regmi and Yogendra P. Yadava. 2012. Ethnologue: Language of Nepal. Kathmandu: Central Department of Linguistics and SIL International.

Khatiwada, Karnakhar. 2017. A Reference Grammar of Dhimal. Muenchen: LINCOM EUROPA.

Wilde, Christopher P. 2008. A Sketch of the Phonology and Grammar of Rajbanshi. Helsinki: University of Helsinki.

Yadav, Surya Prasad. 2014. A Sociolinguistic Survey of Rajbanshi and Tajpuriya (Spoken in Morang and Jhapa) A Report Submitted to Linguistic Survey of Nepal (LinSuN) Central Department of Linguistics. Tribhuvan University.

Yadava, Yogendra P. Languages Use in Nepal. In Population Monograph of Nepal Vol II (social demography) pp. 51-72.

*(लेखक त्रिभुवन विश्वविद्यालय भाषाविज्ञान केन्द्रीय विभागका सहप्राध्यापक हुनुहुन्छ)*



गङ्गाराम ढुङ्गेल

# डा. द्रोणकुमार उपाध्यायको स्मृतिभित्र 'लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ'

**१. सामान्य परिचय :**

डा.द्रोण सरको बहुपक्षीय चिनारीमध्ये एकपाटो चिनारी मेची बहुमुखी क्याम्पस-भद्रपुरमा लामो समयसम्मको प्राध्यापन हो । यसका अतिरिक्त सामाजिक, धार्मिक, शैक्षिक, साहित्यिक तथा अनुसन्धानात्मक कार्यक्रमहरूमा सधैं जागरुक तथा लगनशील हुनुहुन्थ्यो, डा. द्रोणकुमार उपाध्याय । उहाँ ज्यादै मिलनसार, फरासिलो स्वभावको हुनुहुन्थ्यो । निरन्तर हँसमुख, सबैलाई हौसला प्रदान गरिरहने, कसैलाई भनी नबिझाउने विशेषताले नै उहाँलाई सबैको स्मरणीय एवम् प्रिय बनाएको देखिन्छ । द्रोणकुमार उपाध्याय पौडेलको जन्म २००६ साल आषाढ ५ गतेका दिन पूर्वोत्तर भारतको शोणितपुर असम अन्तर्गत बटियामारी निवासी एक सुशिक्षित परिवारका टीकाराम शास्त्री तथा भेजमायादेवीका सन्तानको रूपमा भएको हो । उहाँले प्रारम्भिक शिक्षादीक्षा पूर्वोत्तर भारतको असम आफ्नै जन्मस्थल आसपासका शिक्षालयहरूबाट हासिल गर्नु भएको हो । हजुरबुबा र बुबा दुबै जना पण्डित तथा शिक्षासेवी हुनुभएकोले जन्मस्थलतिरका आफ्नै हजुरबाले स्थापना गरेको संस्कृत पाठशाला र आफ्नै पिताले शिक्षण गराउने हाइस्कूलबाट प्रवेशिकासम्म अध्ययन गर्नुभएको देखिन्छ । उच्च शिक्षा चाहिँ गुवाहाटीको कलेजबाट बी.ए. उत्तीर्ण गरी स्नातकोत्तर तह (एम.ए.) को अध्ययन काठमाण्डौको त्रि.वि. कीर्तिपुरबाट अनि पीएच. डी. उत्तरबंगाल विश्वविद्यालय-सिलिगुडीबाट गर्नुभएको देखिन्छ ।

'संसर्गजा दोष गुणाः भवन्ति' भनेझैं उहाँको पारिवारिक सम्पर्क पहिलेदेखि नै शैक्षिक जगतसँग बढी सम्बन्धित हुँदै द्रोण सरले पनि शिक्षा आर्जनकै क्रममा शैक्षिक तथा सामाजिक गतिविधिमा सक्रियता देखाउन थालेको देखिन्छ । असममै शिक्षा सेवामा संलग्न द्रोण सर आफ्ना हितैषीहरूको सम्पर्क तथा सहयोगमा मेची बहुमुखी क्याम्पसको क्याम्पस-प्रमुख घनश्याम खनाल रहनुभएको बेला २०३८ सालदेखि नेपाली प्राध्यापन गराउन नियुक्त हुनुभएको देखिन्छ । सेवारत

भएपछि उहाँले भद्रपुर नगरीलाई कर्मथलो बनाई चन्द्रगढी मैत्रीटोलमा थातथलोको व्यवस्था समेत गर्नुभयो । मेची क्याम्पसको नेपाली विभागमा नियुक्त भएदेखि नै बढो लगनशील बनेर विद्यार्थीहरूमा लोकप्रिय रही प्राध्यापन गरेको पाइन्छ । सहायक प्राध्यपक पदमा नियुक्त भई बढुवाका क्रममा सहप्राध्यापसम्म हुनुभएका डा.द्रोण सरले क्याम्पसको प्रशासनिक गतिविधिमा समेत महत्वपूर्ण योगदान पुऱ्याएको देखिन्छ । उहाँ दुई कार्यकाल नेपाली शिक्षण विभागको विभागीय प्रमुख र केही वर्षसम्म सहायक क्याम्पस-प्रमुखको जिम्मेवारी बहन गरी यसै क्याम्पस अन्तर्गत विज्ञान संकायको पठनपाठन चालू गर्न र विज्ञान भवनको निर्माण कार्यमा समेत  महत्वपूर्ण योगदान पुऱ्याउनुभएको कुरा मेची बहुमुखी क्याम्पसको इतिहासमा स्पष्ट छँदैछ । बीचमा केही समय काज सरुवा भई पद्मकन्या क्याम्पस-काठमाण्डौमा अध्यापन गराउनुभयो भने पुनः मेची क्याम्पस नै काज फिर्ता गरी पीएच.डी. को उपाधि लिन दत्तचित्त भई लागिपर्नुभयो । उपाधि प्राप्त भइकन पनि  सेवालाई निरन्तरता दिँदै गर्दा २०७१ सालदेखि उमेर हदका कारण अनिवार्य अवकाश प्राप्त गर्नुभयो ।

डा.द्रोणकुमार उपाध्याय पौडेलले अध्यापनका अतिरिक्त पहिलेदेखि नै नेपाली भाषा, साहित्य तथा संस्कृतिका विषयमा निरन्तर कलम चलाइरहनुभएको थियो । उहाँले असम हुँदै केही लेखहरू लेख्ने, केही अनुदित पुस्तक तयार पारी छपाउने र केही पत्रपत्रिकाको सम्पादन गर्ने काम अघि बढाएको देखिन्छ । प्राध्यापन पेशामा संलग्न भएपछि त द्रोण सरले नेपाली भाषा, समालोचना र लोकसाहित्यको क्षेत्रमा बढी रुचि देखाउनुभयो । त्यसैले समयको सदुपयोग गर्दै विभिन्न खोजमूलक लेख रचना र पुस्तकहरू तयार गर्नुभएको छ । रुचिअनुरूप नै लोकसाहित्य अन्तर्गत सवाई काव्य विषयक अनुसन्धान गरी पीएच. डी. (विद्यावारिधि) को उपाधि समेत हासिल गर्नुभयो ।

यस्तै, खोजमूलक अध्ययन, लेखन र प्रतिवेदनको प्रस्तुतिमा उहाँले भद्रपुर अझ भनौं झापा आसपास मात्र नभएर असम, पश्चिम बंगाल, काठमाण्डौ लगायतका साहित्यिक तथा प्राज्ञिक कार्यक्रमहरूमा सहभागिता जनाउनुभएको छ । उहाँ यस किसिमको बौद्धिक तथा खोजमूलक कर्ममा सुपरिचित भइसक्नुभएको छ । उहाँले पूर्वोत्तर भारतको असम, पश्चिम बंगाल, सिक्किम र काठमाण्डौका साहित्यिक तथा प्राज्ञिक मञ्चहरूको बेलाबखत संयोजनको काम पनि गर्दै आउनुभएको थियो ।

डा. द्रोण सर नेपाली भाषा बाहेक संस्कृत, अंग्रेजी, हिन्दी, बंगाली, असमिया,

राजवंशी र सन्थाल जस्ता भाषाहरूमा समान रूपले वार्तालाप समेत गर्न सक्नुहुन्थ्यो । यसै भाषिक क्षमताका कारण उहाँले पूर्वीय पाश्चात्य दर्शन र साहित्यको पनि राम्रो जानकारी राख्नुभयो र प्राध्यापन पेशाबाट अवकाश पाएपछि उहाँले खारिएका हरेक विचार र चिन्तनको व्याख्या विश्लेषण र अनुसन्धानमूलक लेखन गरी उतार्न सक्रिय हुनुभयो । उहाँको सक्रियतामा खासगरी उहाँले नै तयार गरेका मुख्य कृतिहरू 'नवमी' लोककथा संग्रह (असमिया भाषामा सहलेखन, ई १९७७), 'राजवंशी परिचय, जाति, भाषा र साहित्य' (ई. १९९४), 'आदर्श व्याकरण' (सहलेखन, ई. २००५), 'भाषिक चिन्तन' (वि.स. २०६५), 'केही साधक : केही साधना' (वि.सं.२०६५), ' लोकवार्ता : लोककै चर्चा' (वि.सं.२०६५) र 'लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ' (वि.सं. २०७४) हुन् । यी बाहेक दर्जनौं फुटकर लेखहरू राष्ट्रिय अन्तर्राष्ट्रिय विभिन्न पत्रपत्रिकामा प्रकाशित छन् ।

डा.द्रोणकुमार उपाध्यायका उपर्युक्त कृतिहरूमध्ये सबैभन्दा पछिल्लो कृति 'लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ' नेपाल प्रज्ञाप्रतिष्ठानबाट २०७४ सालमा प्रकाशित भएको अनुसन्धानात्मक निक्कै गहकिलो कृति हो । डा.द्रोण सरबाट यस्तै गहकिला अरु दर्जनौं अनुसन्धानमूलक कृतिहरू आउने हामीले आशा गरेका थियौं, तर त्यो अब अधुरै रह्यो । २०७६ साल माघ १५ गते वसन्त पञ्चमीका दिन उहाँको इहलीला समाप्त भयो । उहाँको आत्माको चिरशान्तिका लागि श्रद्धासुमन अर्पण गर्दै यिनै अमर कृतिहरूमा अब हाम्रा अग्रज सहकर्मी डा.द्रोण सरको सम्झना गरिरहेछौं भन्दै मन बुझाउन चाहन्छु ।

उहाँको यो पछिल्लो कृति सौभागवश 'लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ' नेपाल प्रज्ञाप्रतिष्ठान काठमाण्डौबाट प्रकाशित हुन पुग्यो । मोफसलमा बसेर लेखेका कृतिहरू नेपाल प्रज्ञाप्रतिष्ठानबाट छाप्ने गरेको परम्परा विरलै मात्र देखिन्छ । प्रतिष्ठानको यस्तो कार्यले नेपाली बौद्धिक समुदाय वा अनुसन्धान गर्ने व्यक्तिहरूले काठमाण्डौमा नै बसेर लेख्नुपर्छ वा त्यस्ता उत्तम लेखक जति काठमाण्डौमा मात्र छन् भन्न खोजेको हो । अथवा त्यो संस्थाबाट कुनै पुस्तक छपाउनु पऱ्यो भने काठामाण्डौमै कोचिनुपर्छ भन्न खोजेको हो, प्रष्ट बुझ्न सकिएको छैन । डा.द्रोण सरको यो कृति उक्त प्रतिष्ठानबाट प्रकाशित हुँदा भने प्रतिष्ठानको त्यो दृष्टिकोण होइन रहेछ कि भन्ने देखिन्छ ।

**२. डा. द्रोण सरको पछिल्लो गवेषणात्मक कृति**
**'लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ'को सामान्य अध्ययन :**

यो अनुसन्धानमूलक 'लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ' नामक कृति जम्मा ६ अध्याय र ३५२ पृष्ठमा विस्तारित छ । यस कृतिले लोकवार्ता, लोकसंस्कृति एवम् लोकसाहित्यको सैद्धान्तिक विवेचना सहित नेपाली समाजमा प्रचलित थुप्रै लोक प्रचलनहरूको खोजी मिहिन ढङ्गले गरेको छ । नेपाली समाजका मूल्य र मान्यताहरूको खोजी गरी तिनैलाई मूलकथ्य विषय बनाई विश्लेषण र विवेचना गरिएको छ । यस कृतिको मूल प्रस्तुतिगत प्रवृत्ति अनुसन्धानात्मक रहेको देखिन्छ भने भावभूमिमा नेपाली समाजका परम्परागत अनि लोपोन्मुख मूल्य, मान्यता, चालचलन, रीतिरिवाज नै रहेको देखिन्छ । खासगरी पूर्वी नेपालको तराई क्षेत्रका आदिबासी जाति, जनजातिमध्ये राजवंशी जाति, समुदायका विविध लोकसंस्कृति र प्रचलनलाई विशेष महत्व दिँदै समग्र नेपाली समाजमा प्रचलित लोकसंस्कृति तथा प्रचलनलाई नै सकेसम्म समेट्ने जमर्को यस कृतिमा गरिएको पाइन्छ ।

यस कृतिको भित्री भागमा प्रवेश गर्दा पहिलो अध्यायमै लोकवार्ता सिद्धान्त अन्तर्गत लोकवार्ताको परिचय, लोकसंस्कृतिको अध्ययनको प्रयोजनीयता र प्रचलित सिद्धान्तहरूको विवेचना गरिएको छ । दोस्रो अध्यायमा भौतिक संस्कृति अन्तर्गत नेपाली कागज, परम्परा, नेपाली मकुण्डो, नेपाली संस्कृतिमा रुखको महत्व, नेपाली समाजले अपनाएका परम्परागत वेशभूषा, गरगहना, लोकवाद्य, वादक, प्रचलित अन्य त्यस्ता मौलिक सामग्रीहरूमा फलामका औजार तथा हातहतियार, ढुङ्गा, माटोका सामानहरू, खर, घाँस, पात, पराल, पटुवा आदि पदार्थबाट बनाइने सामानहरूको सविस्तार वर्णन, विवेचना र विश्लेषण समेत गरिएको छ ।

तेस्रो अध्यायमा नेपाली समाजमा प्रचलित रीतिरिवाजहरू, विभिन्न लोकप्रथाहरू, अनेक जातिसमुदाय (खासगरी राजवंशी जाति, समुदाय)मा पाइने लोकचिकित्साका विविध रूपहरू तथा तिनको प्रभाव, लोकविश्वास, लोकसंस्कार, जनरीति, लोकाचार, रुढी परम्परा, प्रयुक्त हुने निषिद्ध शब्दहहरूको खोजी र तिनको तात्पर्य समेत खोतल्ने प्रयास गरिएको छ । यसैगरी, कुलचिन्ह वा कुलप्रतीक जस्ता बहुजातीय समाजका मान्यतागत विविधतालाई केलाउने क्रममा केही अल्पसंख्यक जातिहरूका लोपोन्मुख प्रथाहरूको विवेचना गरिएको छ । यस्तै, ती जाति-समुदायभित्र प्रचलित झुमा, गोदना, बोक्सी, धामी-झाँक्रीहरूको बारेमा पनि

विवेचना गरिएको पाइन्छ । ती जाति-समुदायमा गरिने गाली, तिनका लोकनृत्य, लोकपर्व तथा लोकपुरुषहरूको समेत विवेचना पाइन्छ । धेरैजसो अल्पसंख्यक जाति, समुदायका लोकदेवताको खोजी गर्दै झापाका राजवंशी समुदायमा प्रचलित परम्परागत औषधोपचारको प्रयोग सम्बन्धी विषय विवेचनालाई खोजमूलक ढङ्गले समेटेको पाइन्छ ।

चौथो अध्यायमा संस्कृति र धार्मिक अनुष्ठान अन्तर्गत संस्कृति भनेको के हो ? र, यसका विशेषताहरू के कस्ता हुन्छन् भन्ने विस्तृत विवेचना गरिएको पाइन्छ । संस्कृतिको विवेचना गर्ने क्रममा भौतिक तथा अभौतिक संस्कृतिका लक्षण, विशेषता, व्यक्ति र संस्कृतिको परिपूरकता, समाज र संस्कृति बीचको अपरिहार्यता, धर्म र सामाजिक पक्षको अन्योन्याश्रित सम्बन्ध बारे निक्कै विश्लेषण गरेको पाइन्छ । यसैगरी, नेपाली समाजमा प्रचलित पानी वा जलपूजा, जीवजन्तुहरूको पूजा गर्ने क्रममा सर्पपूजाको महत्व र विशेषता, कुमारी पूजाको प्रचलन र औचित्य, स्वस्थानी तथा देवालीको प्रचलन र सामाजिक प्रभाव, विभिन्न समय तथा स्थानमा लाग्ने गरेका मेला र उत्सवहरूको महिमा तथा सामाजिक प्रभाव, पश्चिममा सभ्यताका कारण आएका चिन्तन, व्यवहार र प्रचलनका कारण विविधतामय नेपाली समाजका मौलिक एवम् सांस्कृतिक पक्षमाथि देखिन थालेका रूपान्तरणहरूको समेत अनुसन्धानमूलक विवेचना गरिएको छ ।

पाँचौं अध्यायमा लोकसाहित्य अन्तर्गत लोकगाथा, लोकनाटक, लोकगीत, लोकछन्द, लोकसङ्गीत वा शास्त्रीय सङ्गीत, लोकसाहित्य एवम् समाज रूपान्तरणमा देखिने लक्षण, प्रभाव र तिनको भूमिकाको विषयमा समेत विवेचना गर्ने जमर्को गरिएको पाइन्छ ।

छैठौं अध्यायले विविधता समेट्ने कोशिश गरेको छ । त्यस अन्तर्गत सांस्कृतिक परिवर्तन, नेपाली समाजका परम्परागत शैक्षिक प्रणालीमा सिकाइ र गुणित सङ्ख्याको ढाँचा, पुरानो पठन र स्मरण पद्धति नेपालीका बालबालिकालाई अक्षरारम्भ गराउने तथा अक्षर चिनाउने मौलिक पद्धति सहित नेपाली साहित्यका केही प्राचीन लोक-वाङ्मयहरूको विवेचनालाई पनि समेटेको पाइन्छ ।

३. **निष्कर्ष तथा मूल्याङ्कन :**

डा.द्रोण सरको यो ‘लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ’ नामक कृति गहकिलो अनुसन्धानको उपलब्धि हो । समाजका विविध पक्षको अध्ययन समाजशास्त्रीय

आधारमा हुने गर्दछन् । यस कृतिको अध्ययन गर्दा खोजमूलक सांस्कृतिक अध्ययन भएको स्पष्ट देखिन्छ। धेरै त समाजशास्त्रीय अनुसन्धानका विधि समेत समाहित छन् । यो लेखकीय स्वरुचिअनुसार अध्ययन, अनुसन्धान भएकोले पूर्णतः समाजशास्त्रीय विधिको पालना नहुन सक्छ। यस कृतिभित्र दोस्रोदेखि चौथो अध्यायसम्मका विविध विषयको विवेचना र विश्लेषण निक्कै गहन रूपमा प्रस्तुत भएका छन् । कुनै पनि सामाजिक तथा सांस्कृतिक पक्षको गहिराइसम्म हुने अध्ययन अनुसन्धानका लागि चाहिं यसमा समेटिएका सामग्रीहरू पूर्व-अध्ययनका भरपुर सामग्री हुन सक्छन् । यो कृति आफैं एउटा अनुसन्धानात्मक ग्रन्थ भएकोले वर्तमान विश्वमा यूरोपियन संस्कृतिले सबै जाति-समुदायको जसरी रगत तथा जीनमा जसरी जरा गाडेको छ, जसले पूर्वीय जीवनशैलीमा हमला गरेको छ, जुन एँजेरु झैं झांगिरहेको अवस्था छँदैछ। पूर्वीय जीवनशैली अनुशरण गर्ने हामीहरूका परम्परागत मौलिक धर्म, संस्कृति, रीतिरिवाज, चालचलन एवम् मूल्य र मान्यतामाथि त्यस्तो आक्रमण भइरहेको अवस्थामा हामी अत्याधुनिक सभ्यता र आजको विश्वव्यापीकरणका नाम लिएर पानीमाथिको ओभानु हुन्छौं । स्वतःस्फूर्त जस्तो देखिएको यो सांस्कृतिक आक्रमणले यहाँका (पूर्वीय जीवनशैली अँगाल्ने) हरेक जातिका मौलिक संस्कृतिहरू प्रभावित भई लोपोन्मुख हुन लागेको बेला तिनको संरक्षण गर्ने उद्देश्यले यसरी लिपिबद्ध गर्ने प्रयास आफैमा गौरवपूर्ण छँदैछ। अझ नेपालजस्तो बहुभाषी, बहुजाति र बहुल मौलिक संस्कृतिलाई पश्चिमा सभ्यताले जबरजस्त आक्रमण गरेको यो अवस्थामा नेपाली समाजका मौलिकता झल्काउने अनि यहाँका विविध मौलिक पक्षको सूक्ष्म रूपले खोजी गरी आउँदो पुस्तालाई नेपाली संस्कृतिका गहन अध्ययन, अनुसन्धान गर्ने एउटा बाटो पहिल्याइदिएको कुरा झन् मननीय छ । वास्तवमा नेपाली समाजका मौलिक संस्कृतिको गहन अध्ययन गर्ने शोधार्थीले यो कृतिलाई खोज-अनुसन्धानको एउटा कोशेढुङ्गा नमानी धरै छैन। अझ पश्चिमोन्मुख नेपाली संस्कृतिका अनुसन्धाताले अनि नेपालभित्रकै सामाजिक, सांस्कृतिक अनुसन्धाताका लागि यो कृति महत्वपूर्ण छ । अबका दिनमा नेपाली समाजका परम्परागत मौलिकता बारे जुनसुकै अध्येताले अध्ययन, अनुसन्धान गर्नु परेमा यो कृतिभित्र लिपिबद्ध भएका सामग्रीहरूबाट धेरैभन्दा धेरै तथ्य फेला पार्न सक्छन् । अस्तु

*(लेखक मेची बहुमुखी क्याम्पसका सहप्राध्यापक हुनुहुन्छ)*



जीवनाथ सुवेदी

# आदर्श नेपाली व्याकरण : कृति–समीक्षा

## १. विषय परिचय

प्रा. तारापति उपाध्याय तथा डा. द्रोणकुमार उपाध्यायद्वारा सहलेखनमा तयार पारिएको आदर्श नेपाली व्याकरण नामक पुस्तक विद्यार्थी-लक्षित उपयोगी नमूना नेपाली व्याकरण हो । लामो समय शिक्षण/प्राध्यापनमा संलग्न रहेर जीवनयापन गर्ने वा समाजमा चिनिने व्यक्तिले आफ्नो विषय क्षेत्रको चिनो राख्ने कुरा भनेको सम्बन्धित विषयको अनुसन्धान र लेखन कार्य नै हो । प्रस्तुत पुस्तक लेखकद्वयद्वारा गरिएको त्यस्तै पुनीत र सार्थक कार्यको उदाहरण हो ।

धेरै मान्छेले सामान्य सम्झे पनि भाषा-व्याकरण जटिल विषय हो । व्यवहारमा जुन ढङ्गले सहज रूपमा भाषाको प्रयोग हुने गर्छ, त्यस्तै रूपमा सिद्धान्त वा व्याकरणमा समेट्नु कठिन कार्य हो । नेपाली भाषामा यो कठिनाइ छ । शब्दनिर्माण, शब्दवर्ग, काल, पक्ष, पदयोग, पदवियोग आदि भाषाका धेरै पक्षमा अन्योलता, अतिसूक्ष्म भिन्नता र अपवादहरू प्रशस्त छन् । धेरै लामो अनुभव, गहिरो अध्ययन र विशेष अनुसन्धान गरी लेखिएका व्याकरण ग्रन्थमा पनि भाषाको व्यावहारिक प्रयोगमा देखिएका सम्पूर्णतालाई समेट्न सकेको पाइँदैन ।

प्रस्तुत लेखमा निरन्तर परिवर्तनशील र जहिल्यै अपवादहरूले विवादित हुने गरेको विषयमा लेखकद्वयद्वारा लिखित आदर्श नेपाली व्याकरण नामक पुस्तकमा केकस्ता विषयवस्तु समाविष्ट छन् र यो कस्तो कृति हो भन्ने बारेमा सामान्य समीक्षा गर्ने जमर्को गरिएको छ ।

## २. कृति परिचय

प्रा. तारापति उपाध्याय र डा. द्रोणकुमार उपाध्ययद्वारा लिखित तथा किरणबाला भट्टराई (उदालगुडी, दरङ, असम) बाट सन्. २००५ मा प्रकाशित आदर्श

नेपाली व्याकरण नामक पुस्तक स्वर्गीय टीकाराम शास्त्री तथा भेजमायादेवीमा समर्पण गरिएको छ। यस कृतिमा प्रकाशिकाद्वारा प्रकाशकीय तथा लेखक तारापति उपाध्यायद्वारा हाम्रो भन्नु शीर्षकमा भूमिका लेखेर पुस्तक प्रकाशन र विषयवस्तुबारे जानकारी गराइएको छ। प्रस्तुत पुस्तकमा वर्ण, अक्षर शब्द, पदावली, उपवाक्यदेखि वाक्यसम्मका नेपाली भाषाका एकाइबारे परिचय, तिनको संरचना तथा उदाहरणसहित प्रयोग पक्षको सरल ढङ्गले निर्क्योल गरिएको छ। त्यस्तै, देवनागरी लिपिको परिचय, शब्दकोश प्रयोगविधि लगायत शब्दभण्डार अन्तर्गत पारिभाषिक/प्राविधिक शब्द, अनेकार्थ, पर्यायवाची, विपरीतार्थक शब्द तथा उखान टुक्का पनि सङ्कलन गरेर राखिएको छ। यस पुस्तकमा समाविष्ट विषयवस्तुहरू (Items) निम्नानुसार राखिएका छन् :

| मूल भाग | | | |
|---|---|---|---|
| क्र.सं. | शीर्षक | क्र.सं. | शीर्षक |
| १ | स्वर र व्यञ्जनहरूको परिचय | २ | स्वरवर्णहरू |
| ३ | व्यञ्जन वर्णहरू | ४ | देवनागरी लिपि र नेपाली वर्णहरू |
| ५ | नेपाली अक्षरहरूको संरचना | ६ | वर्णविन्यास |
| ७ | पदयोग र पदवियोग | ८ | लेख्य चिन्हसम्बन्धी नियम |
| ९ | शब्दकोशको प्रयोग गर्ने नियम | १० | शब्दवर्ग |
| ११ | शब्दवर्गको परिचय | १२ | शब्दरूपायन |
| १३ | शब्दनिर्माण | १४ | सन्धिनियम |
| १५ | वाक्यतत्त्व | १६ | क्रियाको परिचय |
| १७ | काल र पक्षसम्बन्धी नियम | १८ | भाव |
| १९ | वाच्य | २० | पदसङ्गति |
| २१ | कारक र विभक्ति | २२ | पदक्रम |
| २३ | वाक्य विश्लेषण | २४ | वाक्य विश्लेषण र संश्लेषण |
| २५ | उक्ति परिवर्तन | २६ | वाक्यान्तरण |
| परिशिष्ट | | | |
| १ | नेपाली अनेकार्थी शब्दहरू | २ | पर्यायवाची शब्दहरू |
| ३ | समश्रुति भिन्नार्थक शब्दहरू | ४ | विपरीतार्थक शब्दहरू |
| ५ | समूहवाचक नाम | ६ | केही नेपाली उखानहरू |
| ७ | पारिभाषिक/प्राविधिक शब्दहरू | ८ | केही नेपाली टुक्काहरू |

**३. कृतिभित्रका विषयवस्तुबारे सामान्य समीक्षा**

प्रस्तुत पुस्तकको मूल भागमा २६ शीर्षकहरूमा नेपाली भाषाका वर्णदेखि वाक्यसम्म र परिशिष्ट भागमा ८ शीर्षकहरूमा शब्दभण्डारको प्रस्तुति छ ।

**मूल भाग**

(१) **स्वर र व्यञ्जनहरूको परिचय**

भाषा विचारविनिमयको साधन हो । भाषाको मूल रूप कथ्य भए पनि लेखेर बुझाइने, व्याख्या गरिने, भाव, विचार तथा ज्ञानविज्ञानका कुरा प्रस्तुत गरिने र अभिलेख राखिने हुँदा लेख्य भाषाका लागि लिपिको प्रयोग गरिन्छ र गर्नुपर्ने हुन्छ । कथ्य भाषाको विकासपछि लिपिको विकास भएको हो । नेपाली भाषाको लेखन पठन परम्परामा संस्कृत भाषाको वर्ण व्यवस्थामा आधारित वर्णमाला रहेको छ भन्ने प्रसङ्गमा यस शीर्षकमा संस्कृत वर्ण र नेपाली स्वर व्यञ्जन वर्णहरूको परिचय दिइएको छ। यस सन्दर्भमा वर्ण र वर्णमालाका सम्बन्धमा परम्परित देवनागरी लिपिमा आधारित संस्कृत वर्णमाला तथा नेपाली वर्णमालाका सम्बन्धमा स्पष्ट एवम् सरल ढङ्गले बुझाइएको छ (उपाध्याय, पृ.२) ।

(२) **स्वर वर्ण**

यहाँ नेपाली स्वर वर्णको परिचय दिई वर्गीकरण गरिएको छ। जिब्राको उचाइ र सक्रियता, ओठको स्थिति, मांसपेसीको अवस्था र नासिक्यका आधारमा स्वर वर्णको वर्गीकरण गरिएको छ। यी पाँच आधारको वर्गीकरणबाट स्वर वर्णलाई बुझ्न सकिने भएर होला, यहाँ कतिपय प्रचलित व्याकरणमा जस्तो मुखविवरको अवस्था वा हाब्राको स्थितिका आधारमा संवृत, अर्धसंवृत, अर्धविवृत र विवृत तथा जिब्राको बगाइ (शर्मा, पृ.४७ र ४८) र संरचनाका आधारमा एकस्वर र द्विस्वर गरी वर्गीकरण गरिएको छैन। यसबाहेक आधारभूत आवश्यकताका आधारमा नेपाली स्वर वर्णहरूको सरल तरिकाबाट वर्गीकरण गरिएको छ।

(३) **व्यञ्जन वर्ण**

यहाँ व्यञ्जन वर्णको सरल र स्पष्टसँग परिचय दिएर वर्गीकरण गरिएको छ। प्रसङ्गानुसार 'त्र' वर्ण झर्रो नेपाली भाषामा कतै प्रयोग हुँदैन (उपाध्याय, पृ.५) भनिएको छ। यसो भन्नु चाहिँ भाषा प्रयोगमा ध्यान नपुगेर सिद्धान्तकेन्द्री प्रस्तुति

भएजस्तो लाग्छ। किनभने नेपाली जनजिब्राले झर्रो नेपाली शब्दका रूपमा कत्रनु, कत्रो, कात्री, कात्रो, खत्रक्क, खत्र्याकखुत्रुक, झुत्रो, जत्रो, थोत्रिनु, थोत्रो, फुत्रुकफुत्रुक, भुत्रो, यत्रो जस्ता शब्दहरू सहज प्रयोग गरेको पाइन्छ।

यस पुस्तकमा व्यञ्जन वर्णको उच्चारण स्थान निर्धारण संस्कृत व्याकरण (लघुकौमुदी/पाणिनि) का आधारमा मात्र गरिएको छ। यहाँ तालव्य र मूर्धा भनिएका वर्णलाई नयाँ र प्रचलित नेपाली व्याकरणमा वर्त्स्र्य वर्ण (शर्मा, पृ.५४) भनिएको छ।

(४) **देवनागरी लिपि र नेपाली वर्णहरू**

यसमा लिपि र वर्णको परिचय दिई प्रयोगगत विविधताबारे सोदाहरण स्पष्ट पारिएको छ। देवनागरी लिपि रोमन जस्तो वर्णात्मक नभएर आक्षरिक लिपि हो (उपाध्याय, पृ.११)। लिपि (वर्ण) का विविधता, मात्राको विविधता, संयुक्त अक्षरमा भिन्नता आदिले कतिपय अवस्थामा नेपाली भाषाको वर्णविन्यासमा अन्योल (भ्रम) उत्पन्न हुन सक्ने कुरा औंल्याइएको छ (उपाध्याय, पृ.११)।

(५) **नेपाली अक्षरहरूको संरचना**

अक्षर वर्णभन्दा माथिल्लो वा ठूलो र शब्दभन्दा तल्लो वा सानो भाषिक एकाइ हो। उच्चारणका क्रममा एउटा स्वर वा विभिन्न व्यञ्जनहरू एउटा स्वरका केन्द्रीयतामा सासको एक झोक्कामा उच्चारण हुने वर्ण वा वर्णसमूहलाई अक्षर भनिन्छ। यहाँ त्यस्ता अक्षरको परिचय दिई नेपाली भाषाका अक्षरमा वर्णसङ्ख्या र शब्दमा अक्षर सङ्ख्या देखाइएको छ। उच्चारणका आधारमा स्वर र व्यञ्जनसमेत छुट्याएर अक्षर संरचनाका बारेमा सोदाहरण स्पष्ट पारिएको छ।

(६) **वर्णविन्यास**

नेपाली भाषामा प्रशस्त संस्कृत वा तत्सम शब्दहरू प्रयोग हुन्छन्। ती शब्दहरूको संस्कृत व्याकरणअनुसार नै वर्णविन्यास हुनुपर्छ। नत्र अर्थको अनर्थ हुने र भाषामा अस्पष्टता आउने हुन्छ। त्यसैगरी तद्भव, आगन्तुक र झर्रा नेपाली शब्दको सहज रूपमा लगभग उच्चारणका आधारमा वर्णविन्यास निर्धारण गरिएको छ। यहाँ सोही आधारमा प्रचलित नियमानुसार पदादि, पदमध्य र पदान्तमा ह्रस्व तथा दीर्घ इ/ई (ि / ी समेत) एवम् उ/ऊ (ु / ू समेत) हुने

शब्दका प्रशस्त उदाहरण दिएर स्पष्ट पारिएको छ । त्यसैगरी, अजन्त (स्वरान्त) र हलन्त (व्यञ्जनान्त) बारे परिचय दिई त्यस्ता शब्दहरूका पनि मनग्गे उदाहरण दिएर राम्ररी सम्झाइएको छ। यस क्रममा उच्चारणमा व्यञ्जनान्त र लेखनमा स्वरान्त तथा लेखनमा व्यञ्जनान्तका बारेमा समेत प्रस्ट्याइएको छ। त्यसपछि श, ष र सको प्रयोग, ब, व र ओ को प्रयोग, य र ए, ऋ र रि, क्ष, छ्य र छे, ज्ञ र ग्यँ तथा अनुस्वार, चन्द्रबिन्दु र पञ्चम वर्णको परिचय र प्रयोगबारे नियम तथा उदाहरणसहित चर्चा गरिएको छ।

(७) **पदयोग र पदवियोग**

के कस्ता पदहरू एउटै डिकामा लेख्ने र के कस्ता पद चाहिँ अलग डिको दिएर लेख्ने भन्ने कुरामा स्पष्टता र नियमितता भएन भने भाषिक अभिव्यक्ति अस्पष्ट हुन्छ र भाषाले भन्न खोजेको बुझिँदैन। त्यसैले पदयोग र पदवियोगबारे स्पष्ट हुनु जरुरी हुन्छ। यसअनुसार यहाँ नेपाली भाषाको पदयोगमा उपसर्ग, प्रत्यय, रूपायक प्रत्यय (विभक्ति, वचन आदि) समस्त तथा द्वित्वपद, अकरणको न, संयुक्त क्रियालगायतका शब्दहरू प्रचलित र आवश्यक नियम एवम् उदाहरणका साथ प्रस्तुत गरिएको छ। त्यसैगरी, विभक्ति लागेपछिको नामयोगी, पूर्ण र अपूर्ण जनाउने प्रत्यय लागेका क्रियापद, विभाजक न, निपात आदिको प्रयोग अवस्थामा एउटै पद पनि पदवियोगका अवस्था वा अलग अलग डिकोमा लेखिन्छ भन्ने नियमलाई सोदाहरण स्पष्ट पारिएको छ।

(८) **लेख्य चिन्हसम्बन्धी नियम**

उचित वर्णविन्यास र पदयोग वा पदवियोग ठीक ठीक भए पनि निश्चित स्थानमा उपयुक्त लेख्यचिन्हहरूको उचित प्रयोग भएन भने भाषिक अभिव्यक्ति अव्यवस्थित र अस्पष्ट हुने भएकाले यसको प्रयोगको ज्ञान हुनु आवश्यक हुन्छ। यसअनुसार प्रस्तुत शीर्षकमा नेपाली भाषामा प्रयोग हुने सम्पूर्ण लेख्य चिन्हहरूको सोदाहरण र समुचित चर्चा गरिएको छ। यसले सिकारुलाई नेपाली भाषामा आधारभूत लेख्य चिन्ह प्रयोगबारे स्पष्ट पारिदिएको छ।

(९) **शब्दकोशको प्रयोग गर्ने नियम**

भाषा प्रयोक्ता विद्यार्थीदेखि पाठक, लेखकसम्मलाई शब्दकोशको ठूलो महत्व

छ । हाम्रो परिवेशमा नेपाली भाषाको प्रयोगलाई त्यति ध्यान दिएको पाइँदैन । विद्यार्थी मात्र होइन, नेपाली भाषा र विषयका शिक्षक, सञ्चारकर्मी, प्रशासक, सङ्घ-संस्था तथा समाजका शिक्षित अगुवा आदिले पनि शब्दार्थ, शब्दव्युत्पत्ति जस्ता कुरामात्र होइन; सामान्य आधारभूत नियमलाई समेत ख्याल नगरी गलत प्रयोग गरेर नेपाली भाषाको मर्मलाई नकारात्मक असर पुऱ्याएको प्रशस्त पाइन्छ । यस कुरालाई विचार गर्दा शब्दकोश प्रयोगसम्बन्धी जानकारी र चेतनासमेत गराउनु जरुरी देखिन्छ । त्यसैले यस पुस्तकमा शब्दकोश प्रयोगको नियमबारे चर्चा गर्नु सराहनीय कार्य भएको छ ।

यस सन्दर्भमा यस लेखन्तेले अध्यापन गर्ने क्रममा विद्यार्थीलाई भाषा सुधार्न शब्दकोशको प्रयोग गर्ने सल्लाह दिएपछि नेपाली विषय स्नातकोत्तर तहकी एउटी छात्राले शब्दकोश ल्याएर देखाइन् र भोलिपल्ट आफ्नो शब्दकोशमा 'ज्ञान' शब्द नभएको कुरा सुनाइन् । उनले वर्णानुक्रमको अन्त्यमा सो शब्द खोजिछन् र भेटिनछिन् अनि शब्दकोश ठीक नभएको वा अधुरो भएको ठानिछन् । यस प्रसङ्गबाट पनि "'क्ष' र 'ज्ञ' कुन-कुन वर्णबाट संयुक्ताक्षरका रूपमा बनेका हुन् ?" भन्ने कुरा विद्यार्थीलाई थाहा नभएको पाइन्छ । यस पुस्तकमा पनि क्+ष्≠क्ष् र त्+र्≠त्र् को 'क' र 'त' वर्णका क्रममा आउने कुरा उल्लेख गरिएको भए पनि ज्+ञ्≠ज्ञ् 'ज' को क्रममा आउने कुराको चर्चा गर्न भुलिएको देखिन्छ । जे होस्, शब्दको अर्थ, पर्याय, स्रोत, वर्णविन्यास, शब्दवर्ग आदि धेरै कुराको जानकारी प्राप्त हुने हुँदा विद्यार्थीका लागि शब्दकोश प्रयोगको जानकारी अनिवार्य छ र त्यो यहाँ दिएर राम्रो काम गरिएको छ ।

(१०) **शब्दवर्ग**

यस शीर्षक अन्तर्गत शब्दको परिचय र त्यसको वर्गीकरणका आधारको चर्चा गरिएको छ । यस क्रममा स्रोतका आधारमा मौलिक, आगन्तुक र झर्रा शब्दको परिचय र उदाहरण दिइएको छ । रूप/बनोटका आधारमा मूल शब्द, व्युत्पन्न (उपसर्ग, प्रत्यय लागेर बनेका) शब्द, समास र द्वित्व प्रक्रियाबाट निर्मित शब्दको सोदाहरण परिचय दिइएको छ । व्याकरणिक कार्यका आधारमा शब्दको नाम, सर्वनाम, विशेषण, क्रियापद, नामयोगी, क्रियायोगी, संयोजक, विस्मयादिबोधक र निपातका रूपमा वर्गीकरण गरिएको छ ।

(११) **शब्दवर्गको परिचय**

यस अन्तर्गत शब्दवर्गको परिचय दिएर प्रत्येक वर्गका भेदोपभेदको सोदाहरण चर्चा गरिएको छ । यस क्रममा नाम, सर्वनाम, विशेषण, क्रियापद र अव्ययका प्रकारको उदाहरणसहित परिचय दिइएको छ । अव्ययका प्रकारअन्तर्गत नामयोगी, क्रियायोगी, संयोजक, विस्मयादिबोधक र निपातबारे सोदाहरण स्पष्ट पारिएको छ ।

(१२) **शब्दरूपायन**

वाक्यमा प्रयोग हुँदा नाम र सर्वनाम शब्दमा कतिपय ठाउँमा विभक्ति चिन्ह लाग्ने वा रूप परिवर्तन हुने गर्दछन् भने विशेषण शब्दहरूको पनि लिङ्ग र वचनको प्रभावमा रूप परिवर्तन हुन्छ । त्यस्तो अवस्थालाई शब्दरूपायन भनिन्छ । भाषा प्रयोग गर्दा यसबारे ज्ञान नभएर उपयुक्त प्रयोग भएन भने अभिव्यक्ति अस्वाभाविक र अव्यवस्थित हुन्छ । त्यसैले शब्दरूपायनबारे स्पष्ट हुनु जरुरी हुन्छ । यस शीर्षक अन्तर्गत नामको वचन, कारक र विभक्ति तथा आदरका आधारमा हुने रूपायनलाई देखाइएको छ भने सर्वनामको विभक्ति, वचन, पुरुष, आदर, सरल/तिर्यक कारक आदिका आधारमा हुने रूपायनलाई देखाइएको छ । त्यसैगरी विशेषणको लिङ्ग, वचन, सरल/तिर्यक कारक र आदरका आधारमा हुने रूपायन देखाइएको छ ।

वाक्यमा प्रयोग हुँदा समापिका क्रिया र कतिपय ठाउँमा असमापिका क्रियाको पनि रूप परिवर्तन हुने गर्दछन् र त्यस्तो अवस्थालाई क्रियाको रूपायन भनिन्छ । भाषा प्रयोग गर्दा यसबारे ज्ञान नभएर उपयुक्त प्रयोग भएन भने अभिव्यक्ति अस्वाभाविक र अव्यवस्थित भएर भनाइ स्पष्ट हुँदैन । त्यसैले शब्दरूपायन जस्तै क्रियाको रूपायनबारे स्पष्ट हुनु अत्यन्त आवश्यक हुन्छ । यस शीर्षकअन्तर्गत वचन, लिङ्ग, पुरुष, काल, पक्ष, आदर, भाव, वाच्य, करण आदि आधारमा क्रियापदको रूपायनसम्बन्धमा स्पष्ट पारिएको छ ।

(१३) **शब्दनिर्माण**

भाषाका मूल शब्द र धातुमा विभिन्न उपसर्ग र प्रत्यय लागेर शब्द बन्छन् । समास भएर वा दुई वा दुईभन्दा बढी शब्दहरू जोडिएर तथा द्वित्व भएर वा शब्द दोहोरिएर शब्द निर्माण हुने गर्दछन् । यस किसिमको शब्दनिर्माणसम्बन्धी जानकारी नहुँदा कतिपय अवस्थामा गलत भाषिक प्रयोग भएको पाइन्छ । यहाँ शब्दनिर्माणको

परिचय दिएर उपसर्ग, प्रत्यय (कृत्/धातु+प्रत्यय र तद्धित्/शब्द+प्रत्ययद्वारा शब्द व्युत्पादन) समास र तिनका भेदोपभेद, द्वित्व प्रक्तिया र तिनका भेदको प्रशस्त उदाहरण र प्रयोगका साथ चर्चा गरिएको छ ।

(१४) **सन्धि नियम**

शब्दनिर्माणका क्तममा शब्द वा वर्ण जोडिँदा अथवा भाषिक ध्वनि वा वर्ण एकअर्काको प्रभावमा आउँदा ध्वनि परिवर्तन हुने, घट्ने वा बढ्ने हुन्छ । यस किसिमको ध्वनि घटबढ हुने, ध्वनि परिवर्तन हुने वा वर्ण मिसिने प्रक्तियालाई सन्धि प्रक्तिया भनिन्छ । यस किसिमको सन्धि सम्बन्धी जानकारी नहुँदा कतिपय अवस्थामा गलत भाषिक प्रयोग भएको पाइन्छ । यस शीर्षकमा सन्धिको परिचय दिई तत्सम शब्दका स्वरसन्धि (दीर्घ, गुण, वृद्धि, यण, अयादि सन्धि आदि) व्यञ्जन सन्धि, विसर्ग सन्धि नियम, प्रयोग र तिनका भेदको सोदाहरण परिचय दिइएको छ । त्यसैगरी, नेपाली सन्धि नियमबारे पनि सोदाहरण चर्चा गरिएको छ ।

(१५) **वाक्यतत्त्व**

व्याकरणको सबैभन्दा माथिल्लो भाषिक एकाइ वाक्य हो । भाषिक अभिव्यक्ति वाक्य तहबाटै हुने गर्दछ । भन्न खोजेको कुरा पुरा बुझाउने वा अर्थ पूर्ण रूपमा प्रकट गर्ने भाषिक एकाइ वाक्य नै हो । त्यसकारण वर्णदेखि उपवाक्यसम्मका एकाइ वाक्यात्मक संरचनाका घटक हुन् । यस शीर्षकअन्तर्गत वाक्यको परिचय दिएर वाक्यका मुख्य संरचक घटक उद्देश्य र विधेय तथा तिनको विस्तारकका बारेमा प्रकाश पारिएको छ । वाक्यमा 'कर्ता वा कर्तासँग सम्बन्धित नामपदावली उद्देश्य र क्तिया तथा त्यसका विस्तारकसमेतका क्तिया पदावली विधेय हुन् र तिनबाट वाक्य बन्छ' भन्ने कुरा बुझाएर वाक्य संरचनाबारे स्पष्ट पारिएको छ ।

(१६) **क्रियाको परिचय**

वाक्यको मुख्य पद वा केन्द्रीय घटक क्तियापद हो । कुनै पनि भनाइ वा भाषिक अभिव्यक्ति स्पष्ट हुन क्तियापद अनिवार्य हुन्छ । यहाँ क्तियापदको परिचय, प्रकार, बनोट, अर्थ/भाव, मुख्य क्तिया, सहायक क्तिया, समापकता आदिबारे चर्चा गरिएको छ । त्यस्तै धातु, मूल धातु, व्युत्पन्न धातु, नाम धातु, प्रेरणार्थक धातु आदि र तिनबाट बन्ने क्तियाका बारे सोदाहरण प्रकाश पारिएको छ ।

(१७) **काल र पक्षसम्बन्धी नियम**

काल र पक्ष भन्नाले समय र त्यसका खास अवस्था भन्ने बुझिन्छ। यहाँ कालका भूत र अभूत, अभूतका वर्तमान र भविष्यत्, त्यसपछि पक्ष र तिनका प्रकार, पक्ष र कालमा भिन्नता, काल र पक्षगत आधारमा लिङ्ग, वचन, पुरुष र आदरसहित क्रियापदका रूपावली दिइएको छ। यसद्वारा विद्यार्थीलाई क्रियाका काल, पक्ष र तिनका रूप बुझ्न सजिलो पारिएको छ।

यहाँ भविष्यत् कालको पक्षबारे चर्चामा भविष्यत् कालका सामान्य र सम्भावना गरी दुई भेद गरेर दुबैका सामान्य, अपूर्ण र पूर्ण पक्षको चर्चा गरिएको छ। यसरी सम्भावनालाई भविष्यत् कालको एउटा भेदका रूपमा लिइएको छ।

वर्तमान प्रचलित नेपाली व्याकरणमा सम्भावनालाई पक्षका रूपमा नराखेर क्रियाका भावअन्तर्गत राखिएको छ (शर्मा, पृ.४४८)। परम्परित रूपमा सम्भावनालाई भविष्यत् कालअन्तर्गत चर्चा गर्दा पनि निश्चयार्थक भविष्यत् र सम्भावनार्थक भविष्यत् गरी दुई भेद गरेर दुबैको सामान्य, पूर्ण र अपूर्ण पक्षको चर्चा गर्ने गरिन्थ्यो र त्यो अलि स्पष्ट पनि हुन्थ्यो। 'भविष्यत्का सामान्य र सम्भावना भेद गर्दा पुनः सामान्य भविष्यत्को सामान्य पक्ष (उपाध्याय, पृ.११७) भन्नुपर्ने अप्ठ्यारो देखिन्छ भने प्रचलित व्याकरणका आधारमा हेर्दा विद्यार्थी अन्योलमा पर्छन् कि!' भन्ने पनि लाग्छ। प्रस्तुत पुस्तकमा सम्भावनालाई भविष्यत् कालको प्रसङ्गमा चर्चा गरेर पुनः भाव अन्तर्गत पनि राखिएको छ।

हुन त 'व्याकरण अपवाद र विवादरहित हुन सम्भव छैन' जस्तो लाग्छ। आधुनिक नेपाली व्याकरणमा संरचनाका आधारमा काललाई भूत र अभूत गरी विभाजन गरिएको छ। भूत कालिक 'य्' र अभूत कालिक 'छ्' का आधारमा भूत र अभूत छुट्याइएको छ। त्यसो गर्दा पनि अज्ञात भूतमा 'छ्' त आउँछ नै। त्यसैले व्याकरण सूक्ष्म तथा जटिल विषय नै हो भन्ने पुष्टि हुन्छ। खोजी गर्दा यस्ता धेरै अप्ठ्याराहरू पाइन्छन्।

(१८) **भाव**

भाव भन्नाले क्रियाका अर्थ भन्ने बुझिन्छ। यस शीर्षक अन्तर्गत प्रचलन अनुसार नै सामान्यार्थ, आज्ञार्थ, इच्छार्थ, सम्भावनार्थ र सङ्केतार्थबारे सोदाहरण चर्चा गरिएको छ।

(१९) **वाच्य**

कर्ता, कर्म वा क्रियाका केन्द्रीयतामा भन्ने तरिका नै वाच्य हो । यस अन्तर्गत पनि सामान्य प्रचलन अनुसार वाच्यको परिचय दिई कर्तृ, कर्म र भाव वाच्यबारे सोदाहरण प्रस्ट्याइएको छ भने वाच्यान्तरणसमेत गरेर देखाइएको छ। प्रायः सकर्मक क्रियाबाट कर्मवाच्य र अकर्मक क्रियाबाट भाववाच्य बन्छ भनिन्छ तर वाच्य पनि अपवादरहित देखिँदैन । व्यवहारमा सकर्मक क्रियाको वाक्यमा पनि भाववाच्य भेटिन्छ। कतिपय व्याकरणमा त्यसलाई भाववाच्यवत् भन्ने गरेको पाइन्छ ।

(२०) **पदसङ्गति**

वाक्यमा कर्ता र क्रिया (कर्तृवाच्य), कर्म र क्रिया (कर्मवाच्य) विशेषण र विशेष्य, भेदक र भेद्य, आदर, वचन, पुरुष आदिबीच तालमेल जरुरी हुन्छ र त्यसैलाई पदसङ्गति भनिन्छ । उचित पदसङ्गतिविहीन भाषिक अभिव्यक्ति अस्पष्ट र स्तरहीन हुन्छ । यहाँ पदसङ्गतिको परिचय दिएर लिङ्ग, वचन, पुरुष, आदर, विशेषण-विशेष्य, भेदक-भेद्य, वाच्य क्रियाविशेषण, क्रिया आदिको उचित संयोजन वा सङ्गतिका बारेमा सोदाहरण चर्चा गरिएको छ ।

(२१) **कारक र विभक्ति**

वाक्यमा नाम र सर्वनाम पदको क्रियापदसँग सम्बन्ध हुन्छ र त्यसैलाई कारक भनिन्छ । त्यस्तो सम्बन्ध जनाउने रूपायक प्रत्यय वा पदको भूमिकालाई विभक्ति भनिन्छ । यस शीर्षकअन्तर्गत कारक र विभक्तिको परिचय दिई वाक्यमा प्रयोगको अवस्था देखाएर स्पष्ट पारिएको छ । यस क्रममा छवटा कारक, सातवटा विभक्ति, सम्बोधन, पूरक, प्रत्यक्ष अप्रत्यक्ष कर्म, सरल तिर्यक कारक, विभक्ति चिन्हको प्रयोग आदिबारे स्पष्ट पारिएको छ ।

(२२) **पदक्रम**

वाक्यमा पदक्रमको अर्थपूर्ण भूमिका रहन्छ । उही पद वाक्यमा एउटा क्रममा आउँदा एउटा अर्थ र भूमिकामा हुन्छ भने अर्को क्रममा आउँदा त्यसले अर्कै अर्थ र भूमिका बुझाउँछ । सामान्य व्यवहारको भाषा वा ज्ञानविज्ञानको भाषामा व्याकरणसम्मत पदक्रम आवश्यक हुन्छ भने साहित्यिक वा व्यञ्जनात्मक भाषिक

अभिव्यक्तिमा विचलनयुक्त पदक्रम पनि उपयुक्त मानिन्छ । यहाँ त्यस्तै पदक्रमबारे जानकारी गराउँदै आलङ्कारिक पदक्रम, व्याकरणिक वा सामान्य पदक्रम आदिबारे छर्लङ्ग्याइएको छ ।

(२३) **वाक्यविश्लेषण**

वाक्य व्याकरणको सबभन्दा माथिल्लो महत्वपूर्ण एकाइ भएकाले भाषाका जिज्ञासुले यसबारे स्पष्ट हुनु जरुरी हुन्छ र विद्यार्थीका लागि यो आवश्यक छ । यस शीर्षकअन्तर्गत वाक्यको परिचय दिई त्यसको वर्गीकरण गरेर सरल, मिश्र र संयुक्त वाक्यका उपवाक्यका सम्बन्धमा सोदाहरण चर्चा गरिएको छ ।

(२४) **वाक्य विश्लेषण र संश्लेषण**

वाक्य भाषिक अभिव्यक्तिको पूर्ण अर्थ व्यक्त गर्ने महत्वपूर्ण एकाइ भएकाल विद्यार्थी र भाषाका जिज्ञासुलाई यस सम्बन्धमा सचेत हुनु आवश्यक हुन्छ । यस शीर्षकमा वाक्यविश्लेषण तथा संश्लेषणबारे सोदाहरण जानकारी गराइएको छ ।

(२५) **उक्ति परिवर्तन**

उक्ति भनेको भनाइ हो । भाषा प्रयोक्ताले आफ्नो भनाइ र अरूको भनाइ पनि प्रस्तुत गरिरहेको हुन्छ । यस प्रसङ्गमा भाषा प्रयोक्ताले अरूको भनाइको तात्पर्यलाई आफ्नो वाक्यमा वा आफ्नै ढङ्गले व्यक्त गर्दा अप्रत्यक्ष कथन (उक्ति) हुन्छ र अरूको भनाइ (उक्ति) लाई जस्ताको तस्तै उद्धृत गर्दा वा उसकै वाक्यमा व्यक्त गर्दा प्रत्यक्ष कथन (उक्ति) हुन्छ । प्रत्यक्ष कथनलाई अप्रत्यक्ष कथनमा र अप्रत्यक्ष कथनलाई प्रत्यक्ष कथनमा बदल्ने कार्य नै उक्ति परिवर्तन हो र यस शीर्षकमा उक्ति परिवर्तनबारे सोदाहरण स्पष्ट पारिएको छ ।

(२६) **वाक्यान्तरण**

एक प्रकारको वाक्य अर्को प्रकारको वाक्यमा बदल्ने प्रक्रिया वाक्यान्तरण वा वाक्य परिवर्तन हो । यस शीर्षकमा लिङ्ग, वचन, पुरुष, आदर, काल, पक्ष, भाव, वाच्य, करण र प्रेरणार्थकता आदिका आधारमा स्पष्टसँग परिचय दिएर पर्याप्त उदाहरणका साथ स्पष्ट पारिएको छ ।

**परिशिष्ट भाग**

शब्दभण्डार भाषाको महत्वपूर्ण र आधारभूत सम्पत्ति हो । विभिन्न प्रकारका शब्द, वाक्पद्धति, उखान आदिले भाषिक अभिव्यक्तिलाई स्पष्ट, सरल, सरस, मौलिक, प्रभावकारी, रोचक तथा सम्प्रेष्य बनाउँछन् । यस पुस्तकको परिशिष्ट भागमा नेपाली शब्दभण्डार अन्तर्गतका ९६ वटा अनेकार्थी शब्द, १४५ समूह पर्यायवाची शब्द, १८८ जोडा श्रुतिसम भिन्नार्थक शब्द, ३१५ जोडा विपरीतार्थक शब्द, २२ वटा समूहवाचक नाम, २९० वटा उखान, २५२ वटा पारिभाषिक/प्राविधिक शब्द तथा शरीरका अङ्ग र अन्य विषयसँग सम्बन्धित नेपाली जनजिब्रोमा प्रचलित केही टुक्का वा वाक्पद्धतिहरू सङ्कलन गरी राखिएका छन् ।

यस पुस्तकका विविध पक्षलाई सङ्क्षेपमा देहायअनुसार समेट्न सकिन्छ :

- आधारभूत ज्ञानका लागि पर्याप्त सामग्री,
- सरल र सुबोध्य प्रस्तुति,
- भूमिकामा भनिए अनुसार कक्षा सातदेखि स्नातक तहसम्मका विद्यार्थी तथा नेपाली पत्रकार, लेखक लगायत नेपाली भाषा र व्याकरणका सिकारु र जिज्ञासुका लागि अत्यन्त उपयोगी सामग्री,
- नेपाली भाषाका वर्ण, अक्षर, शब्द, पदावली, उपवाक्य तथा वाक्यसम्मका एकाइहरू र तिनको निर्माण एवम् प्रयोगसम्बन्धी पूर्ण जानकारी दिइएको,
- नेपाली (देवनागरी) लिपि, शब्दकोशको प्रयोगविधि, शब्दभण्डार आदिका बारेमा स्पष्ट ज्ञान गराइएको,
- शीर्षक र उपशीर्षकका नेपाली व्याकरणका शब्दका समानार्थी English Grammar का शब्दहरू दिइएको,
- शीर्षक, उपशीर्षक र उपोपशीर्षकको व्यवस्थित रखाइ वा प्रबन्धन पक्षमा त्यति व्यवस्थितता वा स्पष्टता नभएको,
- दुई रङ्ग (सेतो र बैजनी) को साधारण आवरण (Cover) भएको र सामान्य सस्तो कागजमा किनारा (Margin) थोरै राखेर मितव्ययी ढङ्गले २०२+११ पृष्ठमा छापिएको र
- प्रथम संस्करणमा ११०० प्रति छापिएको र भा.रु.१००।- मूल्य राखिएको ।

**४. निष्कर्ष**

भाषा परिवर्तनशील वस्तु हो । त्यसैले भाषिक चिन्तन पनि भाषा, स्थान, युग

र समयअनुसार अनेक थरी देखिन्छन् । निरन्तर परिवर्तनशील भाषाको व्यवस्था पहिल्याएर व्यवस्थित गर्ने व्याकरण लेखनमा पनि गतिशीलता वा विविधता रहेको छ । यसरी भाषाका बारेमा चिन्तन, व्याकरण लेखन र प्रयोगहरूमा समेत गतिशीलता वा परिवर्तनशीलता हुने भएकाले प्रस्तुत कृतिमा सबै कुरा समेटिन सम्भव हुने कुरै भएन । यस पुस्तकमा नेपाली भाषाका विभिन्न एकाइ, तिनको संरचना, वर्गीकरण र प्रयोग आदि जे जे आधारमा परिचय दिइएको छ, वर्गीकरण र व्याख्या गरिएको छ, त्यो नेपाली व्याकरणको आधारभूत ज्ञान र प्रयोगका लागि स्पष्ट, सरल र पर्याप्त छ । यसको राम्रो अध्ययन र त्यसअनुसार प्रयोग गर्ने हो भने नेपाली भाषा व्याकरणको आधारभूत ज्ञान तथा प्रयोगमा पक्कै स्तरीयता आउँछ । त्यसैले लेखकद्वयबाट यो स्तुत्य कार्य भएको छ र उहाँहरू यस क्षेत्रमा अविस्मरणीय बन्नुभएको छ । अन्त्यमा, म कीर्तिशेष बन्नुभएका श्रद्धेय द्रोणकुमार उपाध्याय गुरूप्रति हार्दिक भावपूर्ण श्रद्धाञ्जलि अर्पण गर्दछु ।

*-सुरुङ्गा, कनकाई- ४ (झापा)*

**सन्दर्भ–सामग्री**

उपाध्याय, तारापति र उपाध्याय, द्रोणकुमार (सन्.२००५).*आदर्श नेपाली व्याकरण. असम* : किरणवाला भट्टराई ।

शर्मा, मोहनराज (२०७१). *प्रज्ञा नेपाली सन्दर्भ व्याकरण.* काठमाडौं : नेपाल प्रज्ञा प्रतिष्ठान ।

*(लेखक समालोचक हुनुहुन्छ)*



प्रा.डा. टङ्कप्रसाद न्यौपाने

# डा.द्रोणकुमार उपाध्यायको भाषिक चिन्तन

## १. विषय प्रवेश

निकै महिना पहिलेदेखि खगेन्द्रा खुशी बहिनीले द्रोणकुमार उपाध्यायका भाषिक चिन्तनका सम्बन्धमा केही लेखिदिन अनुरोध गर्नुभएको थियो । द्रोणकुमार उपाध्याय मेरा अभिन्न मित्र पनि थिए । मेची क्याम्पसका कार्यक्रममा उनकै आग्रहमा म तीन-चारपटक पुगेको पनि थिएँ । उनका व्यक्तित्वका सम्बन्धमा नलेख्ने त कुरै भएन, तर कोरोना महामारीका कारण पुस्तक प्रकाशन भइहाल्दैन कि भनेर म पनि सुस्ताएको थिएँ । खुशी बहिनीले फेरि सम्झाउनुभयो । त्यसैले यस्ता परम मित्रप्रति यो शब्दश्रद्धाञ्जलि चढाउँदै केही लेख्दै छु । डा.द्रोणकुमार उपाध्यायद्वारा लिखित 'भाषिक चिन्तन' २०६५ सालमा यशवन्त पौडेलबाट प्रकाशित पुस्तक हो । यसमा तत्कालीन उत्तरबङ्ग विश्वविद्यालयका नेपाली विभागका प्राध्यापक डा. घनश्याम नेपालको भूमिकासहित डा. पौडेलका भाषा सम्बन्धी विविध विषयका एघार वटा चिन्तनमूलक लेखहरू सङ्कलित छन् । मैले यस लेखलाई यसै पुस्तकका यी लेखहरूमा सीमित भएर यिनीहरूमा प्रतिविम्बित डा.द्रोणकुमार उपाध्यायका केही भाषिक चिन्तनहरूमा मात्र केन्द्रित गरेको छु ।

## २. भाषिक चर्चा

भाषा एउटा मान्यता र व्यवस्था हो । यसैले यो अमूर्त हुन्छ । जब भाषाको प्रयोग हुन्छ, तब त्यसका अनेक वर्गीय, जातीय, भौगोलिक जस्ता भेदहरू देखा पर्दछन् । यिनीहरूलाई भाषिका भनिन्छ । सामान्यतः भाषिकाहरू दुई किसिमका हुन्छन् : क्षेत्रीय भाषिका र सामाजिक भाषिका । तर, क्षेत्रीय भाषिकालाई भाषिका भन्ने गरिएको पाइन्छ । डा. पौडेलले 'भाषिक चर्चा' सम्बन्धमा भन्ने पहिलो लेखमा यसै अर्थमा भाषिकालाई लिएको देखिन्छ । यसरी एउटा भाषाका भौगोलिक भेदलाई भाषिका भनेर त्यसको अध्ययन गर्ने भाषाविज्ञानको एक शाखा भाषिकाविज्ञान हो । प्रस्तुत पुस्तकको पहिलो लेख यसैमा केन्द्रित छ ।

सामान्यतः भाषाको भौगोलिक भेद भाषिका हो । तर, भाषिकाको निर्धारण भूगोलले मात्र गर्दैन भन्ने डा. पौडेलको मत छ । सम्बन्धित ठाउँको ऐतिहासिक परिस्थिति, स्थानीय बासिन्दाहरूको स्थायी बसोबासस्वरूप, बसाइँसराइ प्रवृत्ति, राजनैतिक सीमान्तीकरण आदिले भाषिकाका निर्माणमा भूमिका निर्वाह गर्दछ भन्ने विचार डा. पौडेलले व्यक्त गरेका छन् । यो सही चिन्तन हो । भाषा र भाषिकाको निर्धारण गर्ने आधारमा पहिले बोधगम्यतालाई मान्ने गरिन्थ्यो, तर अब यो आधार पर्याप्त रहेन । नेपालको पश्चिमाञ्चलका स्थानीय उपभाषिका र भाषिकाहरू सीमापारिका कुमाउनी र गढवालीसँग मिल्दाजुल्दा हुँदाहुँदै पनि ती भिन्न-भिन्न भाषा हुन पुगे । यसैगरी, बोधगम्यता नभए पनि लेखनप्रणालीमा एकरूपताले गर्दा चीन र चीनबाहिरका मलाया, हङकङ, फर्मोसा आदिमा बोलिने एकाधिक स्वरूपलाई चिनिया वा मन्दारिनभित्र समेटिएको उदाहरण डा. पौडेलले दिएका छन् । यसै क्रममा डा. पौडेलले झापाका पाठामारी र भारतीय क्षेत्रभित्र पर्ने बहादुरगञ्जका भाषिकाहरूको स्थलगत अध्ययनका आधारमा सरल गुच्छ र जटिल गुच्छको चर्चा गरेका छन् । यो यस लेखको मुख्य उपलब्धि देखिन्छ ।

दोस्रो, 'नेपालीमा निर्मित संख्यावाचक शब्दहरू' भन्ने लेखमा निर्मित संख्यावाचक शब्दहरू भनेर धातु वा शब्द (प्रातिपदिक) बाट व्युत्पन्न गणनावाचक शब्दलाई लिँदै विशेषतः बाह्रवटा शब्दका उदाहरणद्वारा तिनीहरूसँग सम्बन्धित एकसरो, एकोहोरो, एकहाते, एकान जस्ता अनेक शब्दको उल्लेख गरिएको छ । साधारण नेपाली जनजीवनको आवश्यकता पूरा गर्न संस्कृत मूल स्रोतका शब्द नै पर्याप्त भएकाले विदेशी (आगन्तुक) संख्यावाचक शब्दको आगमन नेपालीमा कम भएको भन्ने डा. पौडेलको निष्कर्ष पाइन्छ । प्राथमिक संख्यावाचक शब्दबाट बनेका अनेक शब्दहरूको उल्लेख गर्दै पौडेलले नेपाली उखानटुक्का र ठाउँका नाममा पनि प्रवेश गरेको सन्दर्भ रसिला पारामा दिएकाले लेख निकै आस्वाद्य भएको छ ।

लेखक भारतको असममा जन्मिई हुर्किएकाले र नेपाल आएपछि पनि असमसँगको सम्बन्ध रहिरहेकाले असमको नेपाली भाषामा स्थानीय प्रभाव शीर्षक लेखमा असमेली नेपाली भाषिकामा तारमाने "त्यसको अर्थ", जिहेतु "जब", बिन्धा "दाँदे", मोइ "जोत्दा निस्किएको डल्लो फुटाउने सामान", ड्वाङ "कुलो", गाखिर "ओलन" जस्ता शब्दहरू मात्र नभएर पदावली र वाक्यसमेत आगमन भएका उदाहरणहरू सरल भाषाशैलीमा रोचक प्रस्तुत गरिएका देखिन्छन् । यसबाट असमको माथ्लो शिरतिर नसुहाउने किसिमका असमेली शब्दहरूको अधिक आगमनले नेपाली

भाषामा आउन लागेका विकृतिप्रतिको चिन्ता डा. पौडेलले प्रकट गरेका छन् । तर, उनको भनाइ आगमनलाई निषेध गर्ने भन्ने चाहिं देखिँदैन, स्वस्थ आगमनलाई सोचेर स्वागत गर्नुपर्छ भन्नेमात्र हो । यसबाट भाषाका शब्दभण्डारमा वृद्धि हुन्छ ।

यसैगरी, अर्को लेखमा विभाषी (खास गरेर अङ्ग्रेजी, हिन्दी, बङ्गाली, असमेली, राजवंशी र मैथिली मातृभाषी)हरूले नेपाली भाषाका छ, हो, देख्नु र हेर्नु क्रियापदहरूमा गर्ने गल्ती र यसका कारणहरूको अध्ययन गरिएको छ। यसका कारणहरूमा ती-ती भाषाको संरचना फरक पर्नु हो भनिएको छ । ती-ती भाषाहरूमा नेपालीका स्थित्यर्थक र परिचयार्थक क्रियाहरू नहुनु हो भनेर सही ठम्याइएको छ । नेपालीको देख् धातुले क्षणिक समयलाई बुझाएको हुन्छ भने हेर् धातुले अपेक्षाकृत लामो समय र विचारलाई जनाएको हुन्छ । यस्तो भिन्नता सबै भाषाहरूमा हुँदैन । परिणामतः गल्ती हुन्छ भन्ने निष्कर्ष यस लेखमा पाइन्छ ।

यस्तै 'अङ्ग्रेजी कि अङ्रेजी' शीर्षक लेखमा नेपालीमा शब्दका अघिल्तिर, माझमा र पछिल्तिर आउने /ङ्/ वर्णका शब्दहरूको उदाहरणसहित शब्दका शुरु र बीचमा /ङ्/ हराउन थालेको, तर शब्दान्तमा उर्वर रहेको भनिएको छ । वस्तुतः अङ्ग्रेजी नभएर अङ्रेजी हुनुपर्ने भन्ने डा. पौडेलको धारणा पाइन्छ । ग्रिसेली–रोमन लिपिमा कोमल तालव्य नासिक्य/ङ्/लाई जनाउने एउटै वर्ण नभएका अवस्थामा एनजी लेखिएकामा त्यसमा अनुकरणमा अङ्ग्रेजी लेखिएकामा उनले असन्तुष्टि प्रकट गर्नु अस्वाभाविक होइन ।

डा. पौडेल संस्कृत र राजवंशी भाषाका विद्वान् देखिन्छन् भन्ने कुरा प्राचीन पूर्वीय जगत्मा भाषाचर्चा, व्याकरणकार पाणिनि : छोटो विश्लेषण र राजवंशी भाषाको भाषिक संरचनाका केही पक्ष शीर्षक लेखहरूबाट स्पष्ट हुन्छ। प्राचीन पूर्वीय जगत्मा भाषाचर्चा शीर्षक लेखमा वैदिक संहिताबाटै विकीर्ण चिन्तनका रूपमा भाषाचर्चा भए पनि ब्राह्मण ग्रन्थ, शिक्षा र प्रातिशाख्यहरूबाट आधुनिक भाषाविज्ञानअनुसारको विश्लेषण भएको सप्रमाण उल्लेख गरिएको छ। यस क्रममा पाणिनिका अष्टाध्यायीमा आइसकेपछि यसले पूर्ण रूप पाएको बताइएको छ। यस्तै 'पाणिनि : छोटो विश्लेषण' शीर्षक लेखमा पाणिनिभन्दा पूर्व पनि संस्कृत व्याकरणकारहरूको लामो शृङ्खलाका पृष्ठभूमिमा पाणिनिले अष्टाध्यायी बनाएको र यसमा संक्षिप्तताका लागि प्रत्याहार, अन्तरालम्बन र अध्याहारको थप व्यवस्था गरिएको उल्लेख देखिन्छ। अष्टाध्यायीभित्र सात प्रकारका सूत्रहरू देखाएका छन् : संज्ञासूत्र, परिभाषासूत्र, विधिसूत्र, नियमसूत्र, अधिकारसूत्र, अतिदेशसूत्र र

अपवादसूत्र । आधुनिक शीर्षस्थ भाषावैज्ञानिक चम्स्कीको भनाइलाई पनि उद्धृत गर्दै डा. पौडेलले आज पनि पाणिनि उतिकै नवीन, उतिकै सान्दर्भिक र मार्गप्रदर्शक भएको निष्कर्ष दिएका छन् । यसैगरी, राजवंशी भाषाको भाषिक संरचनाका केही पक्ष शीर्षक लेखमा बङ्गाली, हिन्दी, उर्दू, मैथिली, बिहारी र असमेली भाषाहरूबाट राजवंशी भाषा पर्याप्त प्रभावित भएर पनि कोचे र मेचेबाट अछुतो रहन नसकेको भनिएको छ। अन्य तीन लेख एस्पेरेन्तो : कृत्रिम विश्वभाषा भन्नेमा एस्पेरेन्तो भाषाको वर्णमाला, ध्वनि व्यवस्था, नाम र सर्वनामको संरचना, व्याकरणिक व्यवस्थाहरूको गहन अध्ययन गरिएको छ भने 'डा. सुनीतिकुमार चट्टोपाध्याय : आधुनिक भाषा चिन्तनका एक उज्ज्वल नक्षत्र' शीर्षक लेखमा डा. सुनीतिकुमार चट्टोपाध्यायलाई शीर्षकअनुसार उनका योगदानको चर्चासहित आधुनिक भाषाचिन्तनका एक उज्ज्वल नक्षत्रका रूपमा प्रस्तुत गरिएको छ । खास गरेर युवा अवस्थामा संस्कृत शिक्षाका माध्यमबाट पूर्वीय संस्कृतिको मूल उत्ससँग योगसूत्रको स्थापना, लण्डनमा भाषाविज्ञानका अध्ययनक्रममा त्यस समयका श्रेष्ठ विद्वान्हरूका सान्निध्यमा प्राप्त पूर्ण दृष्टिभङ्गी र कविगुरु रवीन्द्रनाथ ठाकुरको सान्निध्यबाट प्राप्त मानविकी विद्याको निष्कर्षस्वरूप कोमल र उदार मनोवृत्तिको प्रस्फुरण र फराकिलो दृष्टिकोणकाट नै उनका व्यक्तित्वको निर्माण भएको डा. पौडेलले उल्लेख गरेका छन् ।। पुस्तकको अन्तिम लेख पाश्चात्य विद्वान्हरूमा संस्कृत भाषानुराग शीर्षकअन्तर्गत विलियम जोन्स, गेटे, सिलर, हम्बोल्ट जस्ता विद्वान्, अनुवादक तथा कविहरू संस्कृतका अध्ययन अनुसन्धानतर्फ आकर्षित भएको सन्दर्भ छ । अमेरिकाली संरचनात्मक भाषाविज्ञानका संस्थापक ब्लुमफिल्डले त पाणिनिलाई मानव मनिषीको महत्तम कीर्तिस्तम्भसमेत भनेको उल्लेख गरिएको छ । संक्षेपमा यस लेखमा पाश्चात्य विद्वान्हरूमा संस्कृत भाषानुरागका विषयलाई ऐतिहासिक प्रसङ्गसहित चर्चा गरिएको पाइन्छ ।

३. **निष्कर्ष**

समग्रतामा डा. द्रोणकुमार उपाध्याय विशेष गरेर समकालिक भाषाविज्ञानका क्षेत्रमा समर्पित विद्वान् देखिएका छन् । नेपाल र छिमेकी देशहरूका भाषामा निपुणता प्राप्त गरेर अङ्ग्रेजी भाषा र भाषाविज्ञानप्रतिको ज्ञानबाट अर्जित चिन्तनलाई प्रस्तुत भाषिक चिन्तन नामक पुस्तकमा उल्लिखित गरिएको पाइन्छ। यहाँका लेखहरूबाट भाषाविज्ञानका क्षेत्रमा कार्यरत व्यक्तित्वहरू अवश्य लाभान्वित हुने विश्वास गरिएको छ ।

*(लेखक समालोचक हुनुहुन्छ)*



डा.ठाकुरप्रसाद पोखेल

# द्रोणकुमार उपाध्यायको विद्यावारिधि–शोधपत्र

**आरम्भ**

द्रोणकुमार उपाध्याय (२००६) को अनुसन्धानयात्रा उच्च अध्ययनका क्रमसँगै थालनी भएको देखिन्छ । शुरुदेखि नै लोकसाहित्यतर्फको रुचि भएकाले स्रष्टा वा व्यक्तिद्वारा सिर्जित साहित्यभन्दा लोककथा, कविताको गहन अध्ययन-अनुसन्धानयात्रा थालनी गरेको देखिन्छ । विद्यार्थी अवस्थामै नेपाली लोककथा सङ्कलन गरेर सहलेखनमा नवमी (२०३४, सन् १९७७) सङ्ग्रहको पुस्तक (असमिया भाषामा) असम साहित्य सभा, गुहाटीबाट प्रकाशित भयो । राजवंशी परिचय (भाषा, लिपि र व्याकरण खण्ड २०५५), शीर्षकको अनुसन्धानात्मक पुस्तक राजवंशी भाषाको अध्ययन-अनुसन्धानका निम्ति सहयोगी बनेर आएको छ । उहाँले लोकसाहित्यअन्तर्गत नेपाली सवाई काव्यको अनुसन्धान गर्दै जाँदा नेपाली सवाई काव्यको विश्लेषण, मूल्याङ्कन (वि.सं.२०५९, सन् २००२) शीर्षकमा विद्यावारिधि गर्नुभएको छ । अध्ययन–अध्यापनमा लागिरहँदा पूर्ण भएका लेखहरूको सङ्ग्रह लोकवार्ता : लोककै चर्चा (२०६५), लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ (२०७४) आदि अनुसन्धानात्मक पुस्तकहरू प्रकाशित भएका छन् । यिनमा राजवंशी र नेपाली लोकवार्ताअन्तर्गत लोकगाथा, लोकनाटक, लोकगीत, लोकछन्द, ग्रामीण नेपाली लोकजीवनमा प्रयोग हुँदै आएका सामग्रीहरूको परिचय र तिनको उपयोग “कुन प्रयोजनमा के कसरी गरिन्छ?” भन्ने प्रसङ्गको सविस्तार वर्णन गरिएको छ । राजवंशी, गन्गाई जातिको उत्पत्ति, विस्तार र तिनको नेपाल प्रवेशसहित रीतिरिवाज सम्बन्धमा अनुसन्धान, विश्लेषण भएको पाइन्छ । उपाध्यायको अनुसन्धान लोकसाहित्यतर्फ बढी केन्द्रित रहेको र त्यसैसँग साइनो लाग्ने नेपाली सवाई काव्यमा विद्यावारिधि पनि पूरा गर्नु भएको छ । यो लेखको मुख्य उद्देश्य उक्त सवाई शोधग्रन्थकै चर्चा गर्ने रहेको छ ।

**शोधप्रबन्धको परिचयात्मक अध्ययन**

नेपाली लोकजीवनका जनगलाबाट गाइने वा व्यक्त हुने सवाईको प्रयोग नेपाल एकीकरणपछि भएको पाइए पनि यसको भन्ने, सुन्ने परम्परा निकै पुरानो रहेको मानिन्छ। मेलापात, घाँसदाउरा, हलोकोदालो, घरगोठ, लेक–व्याँसी गर्दा मनोरञ्जन गरी समय बिताउन मन एकत्रित गर्ने, यथार्थमूलक, हास्ययुक्त मनोरञ्जनात्मक आदि विषयसँग सम्बन्धित भएर सवाईहरू आएका छन् । यसमा 'नेपाली लोकजीवनमा सवाईको अवस्था के कस्तो रहेको छ, त्यसका के कस्ता प्रकारहरू रहेका छन्' भन्ने बारेमा विस्तृत अध्ययन भएको पाइन्छ । यहाँ नेपाली सवाई काव्यको विश्लेषणात्मक मूल्याङ्कन शीर्षकको अनुसन्धानात्मक कार्यमा विभिन्न उपशीर्षकको आयोजना गरिएको छ। शोधप्रबन्धमा विषयसूचीभन्दा पहिला शोधनिर्देशक प्रा.भीमकान्त उपाध्यायको मन्तव्य प्रस्तुत छ । यसमा सवाई काव्यका अध्ययनकर्ता द्रोणकुमार उपाध्यायबाट कसरी शोधकार्य सम्पन्न भयो भन्ने सम्बन्धमा संक्षिप्त परिचयसहित शोधकर्तालाई विद्यावारिधि उपाधि प्रदान गरिदिन सम्बन्धित विश्वविद्यालयसमक्ष अनुरोध गरिएको छ। शोधप्रबन्धमा कतिपय नवीन तथ्यहरूको खोज गरेर प्रमाणयुक्त प्रस्तुति, प्राज्ञिक विश्लेषण गर्ने क्रममा सवाई काव्यको विकासप्रक्रियाको विस्तृत कालक्रमिक विवेचनात्मक व्याख्या गरिएको छ। मुख्य–मुख्य सवाई काव्यहरूको विश्लेषण, वर्गीकरण, मूल्याङ्कन भएको उल्लेख छ । मन्तव्यपछि शोधकर्ताको प्राक्कथनमा शोधकार्य पूरा गर्दा संस्था, व्यक्तिबाट भएका सहयोगलाई कृतज्ञता प्रदान गरिएको छ । अनुसन्धानका क्रममा त्रि.वि. कीर्तिपुरका प्राध्यापक, केन्द्रीय पुस्तकालय, मेची क्याम्पस प्रशासन, पुस्तकालय, शोधनिर्देशक भीमकान्त उपाध्याय र परिवारजनको प्राज्ञिक एवम् भौतिक सहयोग, स्नेह, सद्भाव के कसरी प्राप्त भयो ? स्पष्ट्याउँदै अनुसन्धान कार्यमा प्राप्त सहयोगलाई धन्यवाद दिइएको छ । प्राप्त भएका सहयोग हार्दिक कृतज्ञता ज्ञापन गरिएको छ । प्रस्तुत शोधप्रबन्धमा आठ वटा अध्यायको आयोजना गरी अध्ययन गर्दा बचेका सामग्रीहरू परिशिष्टमा क, ख, ग शीर्षकमा प्रस्तुत गरिएको छ ।

शोधप्रबन्धको प्रथम अध्याय विषय परिचयका रूपमा आएको छ। यसमा शोधशीर्षक, समस्या कथन, शोधकार्यको उद्देश्य, पूर्वकार्यको समीक्षा, शीर्षकको औचित्य, शोधकार्यको सीमाङ्कन, शोधविधि, अध्याय विभाजन निष्कर्ष प्रस्तुत छ । पूर्वकार्यमा सवाईका बारेमा पहिला भएका अध्ययनमध्ये केही लेखको चर्चा

गर्दै शोधलेखन यिनै सामग्रीका माध्ययमबाट गरिएको जानकारी दिइएको छ ।

अनुसन्धाताले आफ्नो अनुसन्धेय विषयको सैद्धान्तिक पुष्टि, दोस्रो अध्याय वा परिच्छेदमा गर्ने परम्परानुसारका सवाई काव्यको सिद्धान्त स्थापित गरिएको छ । सवाई के र कस्तो विषय हो ? भन्ने प्रश्नको जिज्ञासा शान्त गर्न सवाईको तात्पर्य, लोकगीत र गाथाका सन्दर्भमा सवाई काव्य, लोकगीतको परिचय आदि र विविध कोणबाट सिद्धान्तको चर्चा भएको छ। वर्ण, मात्राको एकरूपतामा आधारित लोकछन्दका माध्यमबाट व्यक्त सवाईकाव्य, कविता र यसका सापेक्षतामा सवाई आदि उपशीर्षकबाट सिद्धान्तको विस्तार भएको पाइन्छ ।

नेपाली समाजमा लोकगीत र गाथाको प्रयोग प्राचीन कालदेखि नै हुँदै आएको देखाइएको छ । श्रुतिपरम्परामा सुरक्षित रहेको भारत, झ्याउरे, सेलो, घाटु, देउसीजस्तै सवाई पनि पहिलादेखि नै गायनमा सुरक्षित हुँदै आएको एउटा विधा सवाई काव्य लोक वा झ्याउरे छन्दमा रचिदै आएको देखाइएको छ। यसको स्रोत हिन्दीको ‘सवैया’ शब्दमा आधारित र मात्रिक छन्दमा संरचित विधा भएको उल्लेख छ। “सवाई छन्दमा रचिएको काव्यलाई सवाई काव्य वा सवाई भनिँदै आएको छ” भनी अर्थ स्पष्ट पारिएको छ। यहाँ सवाईको पुष्टि गर्न लोकगीतका सामान्य विशेषताहरू प्रस्तुत छन् । लोकगीतको वर्गीकरण, लोकगाथाको परिचय, विशेषता, लोकगीत र गाथाको तुलनात्मक व्याख्या गर्दै सवाईको प्रामाणिक आधारसहित यसलाई ‘मात्रा छन्दमा संरचित विधा हो’ भनी यहाँ पुष्टि गरिएको छ । सवाईका मुख्य विशेषता र परम्परा शीर्षकका माध्यमबाट के कस्ता विशेषताहरू रहेका छन्, यसको परम्परा कस्तो थियो ? भन्ने विषयको विश्लेषण भएको छ। कविता र यसको संरचनाको तुलना गर्दै यो खण्डकाव्यस्तरीय लोकसाहित्यको एउटा विधा भएको हुँदा लघु, मझौला र खण्डकाव्यस्तरीय गरी तीन किसिमको स्वरूपमा सवाई रचिएको हुन्छ भनिएको छ। त्यसैअनुसार ‘सवाई स्रष्टाका अनुभूति समेटेर आएका हुन्छन्’ भनी निष्कर्ष दिइएको छ ।

शोधप्रबन्धको तेस्रो अध्यायमा नेपाली कविताको विकास परम्परा र नेपाली सवाईकाव्य नामक शीर्षकअन्तर्गत कविताको पृष्ठभूमि, विकासको परम्परा, काल विभाजन, आरम्भदेखि समसामयिक युगसम्मको वर्णन रहेको छ। नेपाली कवितामा सवाई काव्यको थालनी र विकासअन्तर्गत प्राथमिक कालदेखि आधुनिक कालसम्मको वर्णन छ । सवाईको कालक्रमिक वर्णनमा बाग्दल डाँगीको भोटको लडाइँको सवाईबाट शुरु भएको इतिहासमा दीनबहादुरको काबुलको

सवाई, नरबहादुरको जङ्गबहादुरको सवाई, रहजदिल विश्वकर्माको मुक्तियारको सवाई आदि प्राथमिक कालमा आएका देखिन्छन् । माध्यमिक कालमा मणिपुरको लडाइँको सवाई, ब्रह्मतत्वको सवाई, अब्बर पहाडको सवाई, शिलाङको भैंचालाको सवाई आदि सवाईको कालक्रमअनुसार सूक्ष्म टिप्पणी गरिएको छ ।

वि.सं. १९७५ देखि २००० सम्म रचिएका सवाईकाव्यलाई आधुनिक कालको प्रथम चरण भनेर कालक्रमानुसार उल्लेख गरिएको छ । नवलसिंह घर्ती जर्मनको लडाइँको सवाई, शिखरनाथ सुवेदी गङ्गा महात्म्यको सवाई, हर्षराज शाक्य बाँडाको खिका माछा जलेको सवाई, झपटबहादुर राणा काम र क्रोधको सवाई र म्याग्दी ताल परेको सवाई, सूर्य पुराणको सवाई, वात्साहका राज्याभिषेकको सवाई आदिको वर्णन रहेको छ । दोस्रो चरण २००० देखि २०१६ सम्मको अवधि भएको उल्लेख छ । यस चरणमा रचिएका केही सवाईहरूमा आत्मब्रह्मको सवाई, भैंचालाको सवाई, नब्बे सालका भैंचालाको सवाई आदिको कालक्रमिक चर्चा भएको पाइन्छ । यसरी सवाईको रचना नेपाली समाजमा निरन्तर भइरहे पनि प्रस्तुत शोधप्रबन्धमा वि.सं.२०७५ देखि २००० सम्म रचना भएका सवाईको संक्षिप्त विश्लेषण भएको छ ।

नेपाली भाषामा देखापरेका सवाईहरूमध्ये आध्यात्मिक, युद्धपरक, समाजपरक, प्राकृतिक विपत्ति आदि विषयसँग सम्बद्ध छन् । आध्यात्मिक विषय भएका बबगनी गुरुङ्– ब्रह्मत[illegible]वको सवाई, सुरवीर गुरुङ्-भक्तिको सवाई, नरसिंह राई-गोपिनीको सवाई, भवानी शर्मा-विष्णुको सवाई, चेतनाथ आचार्य-काशीको सवाई; यसैगरी रेवतीरमण शर्मा-अर्जुनगीताको सवाई, शिखरनाथ सुवेदी-गङ्गामहात्म्यको सवाई रहेका छन् । रणदल सिल्वाल, रामप्रसाद सत्याल आदिले आध्यात्मिक चिन्तनलाई सवाईका माध्यमबाट प्रस्तुत गरेका छन् । तत्कालीन युद्ध नेपालभित्र नभए पनि भारतलगायत विश्वका विभिन्न देशमा गोर्खा फौजबाट भएका र नेपाली सेनाद्वारा गरिएका युद्धलाई सवाईमा समेटिएको छ । यसक्रममा भोटको लडाइँको सवाई, मणिपुरको सवाई, तिब्बत मिसनको सवाई आदि रहेका छन् । यसैगरी, नेपाली समाजलाई नैतिक उपदेश दिने उद्देश्यका साथ सासू-बुहारीबीचका सवाईहरू रचना भएका छन् । यस्तै बाढी, पहिरो, भैंचालोजस्ता प्राकृतिक विपत्तिको वर्णन भएका सवाईहरू समावेश छन् ।

चौथो अध्यायमा प्रमुख नेपाली सवाई काव्यहरूको विश्लेषणात्मक अध्ययन शीर्षक प्रस्तुत छ । यस अध्यायमा नेपाली सवाई विश्लेषणको आधार तयार भएको

पाइन्छ । विश्लेषणका क्रममा सवाईको संरचना, स्वरूप र आयाम, विषयवस्तु वा भावविधान, छन्द र लयविधान, भाषाशैली, रस, अलङ्कारविधान, शीर्षकको औचित्य र कवित्वको स्तर गरी आठ वटा आधारहरू प्रयोग भएका छन् । यिनबाट 'नेपाली सवाई के कस्ता छन्?' भन्ने कुरा स्पष्ट हुन्छ । शोधप्रबन्धमा विश्लेषण गरिएका पन्ध्र वटा सवाईहरू– भोटको लडाइँको सवाई, जङ्गबहादुरको सवाई, मणिपुरका लडाइँको सवाई, ब्रह्मत□वको सवाई, अब्बर पहाडको सवाई, शिलाङ्का भैंचालाको सवाई, चरीको सवाई, राजा भरथरीको सवाई, भक्तिको सवाई, सासू-बुहारीका झगडाको सवाई, अछामको सवाई, नागाहिलको सवाई, खिका माछा जलेको सवाई, अम्बलका बैगुनको सवाई, नब्बे सालका भैंचालाको सवाई आदि रहेका छन् । यहाँ विश्लेषित सवाईहरू युद्धपरक, आध्यात्मिक, प्राकृतिक र सामाजिक गरी चार किसिमका छन् ।

भोटको लडाइँको सवाई (वि.सं.१९१२) बाग्दल डाँगीद्वारा रचित नेपालका युद्धको ऐतिहासिक घटनामा आधारित छ । नेपाली सेना र तिब्बती सेनाबीच युद्ध भएर नेपाल विजय भएको इतिहास स्वर्णाक्षरमा अङ्कित छ । दुई देशबीच थापाथलीमा सन्धि भएको हुँदा थापाथली सन्धि नामले इतिहासमा प्रख्यात छ । नेपाली वीर सेनाहरूको पराक्रम, उत्साहको वर्णनमा आधारित सवाई वीर, करुण, रौद्र आदि रसमा व्यक्त भएको छ । भावको सूक्ष्मता, आख्यानात्मक बहुलता रहेको उल्लेख छ ।

मणिपुरको लडाइँको सवाई (सन् १९१२ तिर) गोर्खाली सैनिक तुलाचन आलेले रचना गरेका हुन् । यसमा गोर्खाली सेना र मणिपुरका सेनाबीच के कसरी युद्ध भयो भन्ने प्रसङ्गको वर्णन छ । यो वि.सं.१९५० मा इस्टइन्डिया कम्पनीका सेनाहरूले स्वतन्त्र मणिपुरमाथि युद्ध गरेको ऐतिहासिक घटनासँग सम्बद्ध विषयवस्तु छ । त्यहाँ सन् १८९१ देखि ९३ सम्म बृटिश गोर्खा फौज र मणिपुरका नरेश जोगराजबीच युद्ध भएर विजय प्राप्त गरेको तथ्य सवाईमा रहेको छ ।

अब्बर पहाडको सवाई सन् १८९४ तिर वृटिस गोर्खाली सेनाका धनवीर भण्डारीले रचना गरेको युद्धपरक सवाई हो । भारतको पूर्वी प्रान्तमा रहेको अब्बर जातिको शक्तिशाली स्वतन्त्र कामरूप राज्य हात पार्न बृटिश गोर्खाली सेना र अब्बर जातिबीच कसरी युद्ध भएको थियो भन्ने प्रसङ्गलाई विषय बनाएर आएको प्रस्तुत सवाईमा गोर्खाली सेनाहरूले युद्ध गरी विजय प्राप्त गरेको

घटनाको वर्णन छ । गोर्खाहरूले युद्धमा देखाएको वीरता, साहसको वर्णन रहेको निष्कर्ष दिइएको छ ।

नागाहिलको सवाई वि.सं. १९७० तिर गजवीर रानाले रचना गरेको सवाई ऐतिहासिक घटनामा आधारित छ । 'युद्ध कौशलका धनी पहाडी जाति नागाहरूलाई बृटिश सेनाहरूले कसरी एक-अर्का समूहसँग परस्परमा विभेद उत्पन्न गराई पराजित गराइएका थिए' भन्ने मुख्य विषय रहेको छ । नागाको राज्य आफ्नो राज्यमा समावेश गराएको घटना रहेको छ । नागालाई दुई समूहमा छुट्याएर एक-आपसमा लडाउन तिनका घरमा आगो लगाएर आकाशतिर गोली पड्काई एकतर्फी युद्ध घोषणा गरेको मानवताहीन इतिहास देखाइएको छ । नागालाई घरवारविहीन पारेर विजय प्राप्त गरेको उल्लेख छ । धनुकाण, भाला, ढुङ्गा मात्र साथमा भएकालाई गोली प्रहार गरी आफूहरूले विजय पाएको घोषणा गरियो भनिएको छ ।

अध्यात्मपरक सवाईमा ब्रह्मत□वको सवाई वि.सं.१९५० तिर बबगुनी गुरुङले रचना गरेका हुन् भनिएको छ । यसमा नैतिक, धार्मिक, उपदेशबाट आध्यात्मिक भाव जगाउने उद्देश्य रहेको छ । सवाई ज्ञानीजनले सुनेर आध्यात्मिक ज्ञान प्राप्त गर्दछन् भन्ने धारणा भएको धार्मिक, नैतिक उपदेशमूलक रहेको छ भनी निष्कर्ष दिइएको छ । प्रतिमानबाट वि.सं.१९५०-६० तिर रचना भएको राजा भरथरीको सवाई वैराग्य भावमा आधारित छ । सांसारिक माया, मोह र दाम्पत्य भोगविलासबाट मुक्त रही अनन्तकालसम्म सुख प्राप्त गर्न आग्रह गरिएको यो सवाई अध्यात्म विषयमा आधारित छ । राजाले अध्यात्मलाई बेवास्ता गर्दा नारीको चरित्र बुझी पछि गएर अध्यात्मप्रति नै अनुरक्त बनेको घटना सवाईमा उल्लेख छ । भक्तिको सवाई सुरवीर गुरुङले वि.सं.१९५८ मा रचना गरे, यो अध्यात्म चिन्तनप्रधान विषय भएको भनिएको छ । कलियुगमा दिग्भ्रमित मानिसहरूलाई उद्धार गर्ने नैतिक, धार्मिक विषययुक्त सदाचारको मार्ग बताइएको छ । सवाइकारले सत्मार्गतर्फ लाग्न आग्रह गरेको यो सवाईमा सर्वव्याप्त ईश्वर प्राप्तिको विषय रहेको छ । ईश्वरभक्ति गरे भगवद् दर्शन मिल्ने आशा राखिएको यो सवाई पूर्णतः भक्तिपरक रहेको उल्लेख छ ।

प्रस्तुत शोध-प्रबन्धमा शिलाङका भैंचालाको सवाई प्रकृतिपरक रहेको छ । यो धनवीर भण्डारीद्वारा सन् १८९७ तिर रचित प्राकृतिक विपत्तिमा आधारित सवाई हो । भारतको पूर्वाञ्चलस्थित पहाडकी रानी भनेर चिनिने शिलाङ शहरमा वि.सं.

१९५४ सालको चैत्र मसान्तका दिन सन्ध्याकालमा गएको भूकम्पको दुःखद वर्णन यसमा रहेको छ । यो भूकम्पमा धैरै धनजनको क्षति भएको वर्णन छ । उक्त घटनामा मानिसहरूले त्रास, पीडाको प्रताडना सहेका थिए । यो सवाई प्रकृतिको रौद्र रूपमा आधारित दुःखान्त घटनाको वर्णन भएको निष्कर्ष निकालिएको छ ।

खिका माछा जलेको सवाई हर्षराज बाँडा शाक्यले वि.सं. १९७८ तिर रचना गरेका छन् । तत्कालीन समयमा भोजपुर बजारमा आगलागी भएर खिकामाछा जलेको घटनाको वर्णन गरिएको छ । टक्सार बजारका छेउमा अबोध बालकले गर्दा लागेको आगोमा परी बजारका खरका छाना भएका घरहरू ध्वस्त बनेका थिए । घर, पसलका सामान, घरपालुवा जनावर जले भन्ने दुःखद घटनाको वर्णन यसमा गरिएको छ । मानिस पनि घाइते भएका र पछि वर्षामा मानिसहरूले ओत लाग्न नपाएर बिचल्लीमा परेको प्रसङ्ग सवाईमा उल्लेख छ । विपद्को समयमा मानिसले आफ्ना सामानको रक्षा गर्न कठिन भएका अवस्थाको वर्णन गरिएको छ ।

नब्बे सालको भैंचालाको सवाई जीवनाथ काफ्ले, खडानन्द शर्मा, पद्मबहादुर खत्री गरी तीन जनाले आ-आफ्नै किसिमले तीन वटा अलग-अलग सवाईहरू रचना गरेका छन् । शोध-प्रबन्धमा ती सबैको विश्लेषण भएको पाइन्छ । उक्त समयमा भएका धनजन र पशुपंक्षी आदि विनाश भएको उल्लेख गरिएको यो विपत्तिपरक सवाई हो । क्षणभरमै मानवको भूलबाट विनाश भएको घटनाबाट सिर्जित दुःखद अवस्था सिर्जना भएको छ । यो प्रकृतिको ध्वंसात्मक व्यवहारमा आधारित सवाई हो । प्रकृतिबाट भएका यस्ता विपद्पूर्ण घटनाबाट प्रताडित जनताको दयनीय अवस्थालाई सवाईमा वर्णन गरिएको पाइन्छ ।

जङ्गबहादुरको सवाई वि.सं.१९३३ मा नरबहादुर राना मगरबाट रचना भएको हो । जङ्गबहादुरले जीवनभर हत्या, हिंसा, सुरा, सुन्दरीमा मात्र लागेर भौतिक सुखभोग गरे । तिनका त्यस्तो अवस्थामा समेत भाइ, भतिजाबाटै सत्ताका निम्ति तिनको हत्या भएपछिका घटनाहरू सवाईमा रहेका छन् । मृत्युपछि उनका आश्रयमा बाँचेका सर्वसाधारण नोकरचाकर, विवाह भएर आएका अथवा त्यतिकै जङ्गबहादुरका पत्नी बनेकाहरूबाट व्यक्त शोकको वर्णन गरिएको छ । उनको दाहसंस्कारमा दर्जनौं सङ्ख्यामा नारीहरूलाई जीवितै जलाइएको ऐतिहासिक घटना यसमा अङ्कित भएको छ । यही मृत्युको परिवेशलाई एकालाप संवादका माध्यमबाट शोकमूलक घटनाप्रसङ्गलाई सवाईमा वर्णन गरिएको छ । तत्कालीन

अवस्थामा बाँच्ने आधार गुमेकाहरूको शोकाकूल अवस्थालाई समेटेको छ ।

चरीको सवाई वि.सं. १९५७ तिर मनिराज शाहीद्वारा रचित कृति हो । सवाईमा चरीको विवाह वर्णन छ । अतिरञ्जित खालको विषय भएको यस सवाईभित्र कुथुर्केको विवाहमा कोकले कन्यार्थी भएर केटी माग्न गएको, बट्टाइ चराले मुहूर्त हेरेको, लाहाँचेले बनबाट दाउरा ल्याएको, सुनचरीले गहना निर्माण गरेको, तित्राले कपडा तयार गरेको, धोबी चराले कपडा धोएको, भँगेराले धान कुट्ने, लाटी चरीले धान केलाउने रे, कोटेरा सिन्का चिर्ने गरेको वर्णन छ । यस्तै, दुनाटपरी जुरेली चरीले गर्ने प्रसङ्गले नेपाली समाजको झल्को दिएको छ । यसरी समाजमा हुने घटनालाई प्रतीकात्मक रूपमा चराका माध्यमबाट चित्रण भएको छ । सामाजिक-सांस्कृतिक पक्षको झलक दिने सवाई मनोरञ्जनात्मक शैलीमा प्रस्तुत भएको वर्णनात्मक काव्य हो ।

सासू-बुहारीको झगडाको सवाई वि.सं.१०६० तिर अमृत सिंजापति बानिया क्षेत्रीले रचना गरेको कृति हो । यो सवाई आत्मालापी शैलीमा प्रस्तुत भएको, संवादप्रधान सम्वाद रहेको काव्य हो । सासू-बुहारीको झगडा मुख्य विषय बनेर आएको मुखमा उल्लेख  छ । सासूहरूले बुहारीप्रति गर्ने मानवताहीन व्यवहारको प्रस्तुति यस सवाईमा छ । चोरको आक्षेप लागेर बुहारी माइत जाँदा पिताले पुनः घरमै फर्काएको घटनाले सामाजिक आदर्शको, यथार्थ प्रस्तुति भएको छ । बुहारीलाई अर्ती-उपदेश गरिएको 'तत्कालीन सामाजिक, पारिवारिक अवस्थाको नमूना यसमा प्रस्तुत छ, भनी शोध-प्रबन्धमा विश्लेषण गरिएको छ ।

अछामको सवाई वि.सं. १९६५ तिर कृष्णबहादुर उदासले रचना गरेको कृति हो । यो सवाईमा  भारतको असम प्रान्तमा बसोबास गर्ने नेपालीहरूको सामाजिक, आर्थिक अवस्थाको सूक्ष्म वर्णन गरिएको छ । नेपालबाट गएका नेपालीहरू जङ्गल फाँडेर, उखु खेती गरी बिक्री गर्ने सङ्घर्षपूर्ण व्यवहारको वर्णन छ । नेपालीहरूको आर्थिक दयनीय अवस्था र अफिम खेती गरेर कुलतमा लागेका जस्ता घटनाले असम बस्ने नेपालीहरूको वास्तविक चित्र प्रस्तुत भएको भनिएको छ ।

अम्बलका बैगुनको सवाई सन् १९२५ तिर मणिराम शर्माद्वारा रचित सुर्ती, चुरोट आदिको सेवनबाट कुलततर्फ लाग्ने हुँदा समयमै सचेत हुन गरिएको सन्देश यसको मूल सन्देश रहेको छ । यसमा नेपाली समाजमा हुने विकृति, विसङ्गति अन्त भई स्वच्छ, स्वस्थ वातावरण कायम हुनुपर्ने यस काव्यको मूल कथ्य वा विचार रहेको छ ।

यसरी शोध-प्रबन्धमा विश्लेषित सवाईहरूमध्ये युद्धपरक सवाईहरू तत्कालीन नेपालीहरूले भारत, तिब्बततिर भएका युद्धमा विजय प्राप्त गरेका इतिहासमा उल्लेखित छन् । तिनमा वीरता, साहसका घटना पनि सम्बद्ध छन् । यसैगरी, यो सांसारिक मायामोहले जीवन दुःखद भएको हुँदा आध्यात्मिक चिन्तन र भक्तिभावबाट मात्र जीवन सार्थक हुने सन्देश यस काव्यले दिएको छ । यही ब्रह्मतत्व विषयक ज्ञान दिने विचारले यो सवाई प्रस्तुत छ । यहाँ प्रकृतिपरक सवाईमा भूकम्प, आगलागी जस्ता प्राकृतिक विपत्तिलाई विषय बनाइएको छ । विपत्तिमा परेर धनजनको क्षति भएको, यथार्थ घटनाको वर्णन भएको छ । समाजिक विषयवस्तुलाई समेटेर आएका सवाईहरू यथार्थमूलक, प्रतीकात्मक खालका छन् ।

शोध-प्रबन्धको पाँचौं अध्यायमा सवाई काव्यको वर्गीकरण गरिएको छ । वर्गीकरणका आधारहरू भाव, विषयवस्तु, छन्द वा लयविधान, आयाम एवम् विधागत स्वरूप, कविताको स्तर प्रस्तुत छ । यी आधारहरूको व्याख्या उपशीर्षकहरूका माध्यमबाट गरिएको छ । वि. सं. १९०० देखि २००० सम्मका 'पचास वटा सवाईहरूमध्ये निम्न मध्यमस्तरका तीन वटा, सामान्य स्तरका छत्तीस वटा र अति सामान्य स्तरका एघार वटा रहेका छन्' भनी शोधकर्ताबाट विभाजन गरिएका छन् । उच्च, उच्च मध्यम, मध्यमस्तरका नभई सवाईहरू सामान्य स्तरका भावाभिव्यक्तिमा आधारित छन् । यी सवाईहरू अपठित, अल्पपठित लोकप्रतिभाका स्वतःस्फूर्त सामग्री भएको निष्कर्ष निकालिएको छ ।

छैठौं अध्याय नेपाली सवाई काव्यको चरण विभाजन तथा चरणगत प्रवृत्तिहरू नामक शीर्षकहरूभित्र १९०१ देखि २००० सम्मको समयावधिलाई चार चरणमा विभाजन गरिएको छ । समाजका पठित वर्गबाट वास्ता नगरिएर सामान्य स्तरका व्यक्तिहरूबाट रचित सवाईमा तत्कालीन राष्ट्रिय, अन्तर्राष्ट्रियस्तरमा भएका घटना, सामाजिक, सांस्कृतिक परिवर्तनबाट नवीन शैली आकर्षित हुनखोजेको तथ्य अघि सारिएको छ । शृङ्गार रसको अभाव हुनु, कविता झैं पत्रपत्रिकामा प्रकाशित नहुनु, युद्ध र आगलागीजस्ता विविध वस्तुमा आधारित हुनु आदि सवाईका विशेषता उल्लेख गरिएको छ । ज्ञानको गहनता नहुनु, प्रायः बौद्धिकतारहित भएकै कारण नेपाली सवाईले र सवाई लेख्न कृतिकार उच्च प्रतिभाले सम्मान प्राप्त गरेको पाइँदैन भनिएको छ । नेपाली समाजका बौद्धिक, आर्थिक, सामाजिक दृष्टिले उच्च भनिने वर्गका निम्ति सवाई ग्राह्य नभई उपेक्षित भएका कारण

समाजमा सवाईको प्रयोग क्षीण र लोप हुँदै आएको पाइन्छ भनिएको छ ।

सातौं अध्यायमा नेपाली सवाई काव्यको मूल्याङ्कन रहेको छ। सवाई काव्यको थालनी १९०० देखि २००० सम्मको अवधिमा रचना भई प्रकाशित हुन पुगेकामध्येबाट केही महत्वपूर्ण सवाईको मूल्याङ्कन गरिएको छ। यो अपठित, अल्पपठित प्रतिभाद्वारा सिर्जित शुरुदेखि अन्त्यसम्म पनि उस्तै स्वरूपमा रहनु सवाईको दुर्बलता भएको तर्क दिइएको छ। युगअनुसार भन्दा पनि वीर, शान्त र करुण भावमा मात्र आधारित भई युगसापेक्ष बन्न नसक्नु वर्णन र विवरणमा मात्र आधारित हुनु, परिष्कार र परिमार्जनको अभाव लगायतका कारणले समयको गतिसँगै बग्न नसक्दा सवाई यात्रा नै अवरुद्ध भई लेखन-पठन सदाका लागि अन्त्य भएको निष्कर्ष प्रस्तुत छ ।

कविताको धारागत विकासमा सवाईको योगदान पहिला रहेको भेटिए पनि वि.सं. १९७३ पछि यो क्षीण बन्दै गएको उल्लेख छ। नेपाली सवाई काव्यमा भएको युद्धले नेपाली कविताको युद्धकाव्यको अभावलाई पूर्ति गरेको छ। माध्यमिक कालसम्मको नेपाली कविता परिपुष्ट बन्नमा सवाईको भूमिका महत्वपूर्ण रहेको छ। १९७३ सालपछि भने नेपाली कविता सशक्त बन्दै गएपछि सवाईको प्रयोग क्रमशः क्षीण हुँदै आएको छ। यसलाई आठौं अध्यायमा समग्र निष्कर्षका रूपमा प्रस्तुत गरिएको छ।

**अन्त्य,**

यसरी प्रस्तुत शोध-प्रबन्धमा सवाईको गहन विश्लेषण गरिएको छ। निर्देशक र शोधार्थीका मन्तव्य, प्राक्कथनका आक्षरिक सङ्ख्या ‘क’ देखि ‘छ’ सम्म सात पृष्ठ रहेका छन्। विषय-सूचीका दुई पृष्ठपछि शोध-प्रबन्धमा रहेका दीर्घ-लघु गरी आठ अध्यायहरूमा जम्मा तीन सय सत्र पृष्ठ छन्। विश्लेषित सामग्रीसँग सम्बन्धित सहायक सामग्री परिशिष्ट ‘क, ख, ग’ मा राखी जम्मा सात पृष्ठमा प्रस्तुत गरिएको छ। अन्त्यमा सन्दर्भ-सामग्रीभित्र पुस्तक र पत्रपत्रिका (जर्नल) सोह्र पृष्ठ गरी तीन सय चालिस पृष्ठ सङ्ख्या रहेका छन् । यो शोध-प्रबन्ध शुरुका नौ वटा र गाता पृष्ठसहित जम्मा तीन सय एकाउन्न पृष्ठमा विस्तारित विषयको गहन विश्लेषण र मूल्याङ्कन गरिएको महत्वपूर्ण सामग्रीका रूपमा रहेको पाइन्छ ।

*(लेखक समालोचक हुनुहुन्छ)*



लक्ष्मी पौडेल

# लेखकीय व्यक्तित्वमा द्रोणकुमार उपाध्याय

भारतको असममा जन्मिएर नेपालको भूमिलाई कर्मथलो बनाउनुभएका डा.द्रोणकुमार उपाध्याय पौडेल एक बौद्धिक र प्राज्ञिक व्यक्तित्वका रूपमा चिनिनुहुन्छ । त्रिभुवन विश्वविद्यालय अन्तर्गत रहेर झापाको मेची बहुमुखी क्याम्पस र काठमाडौंको पद्मकन्या क्याम्पसमा समेत उहाँले लामो समयसम्म प्राध्यापन गर्नुभयो । तीस वर्ष लामो प्राध्यापन पेशाबाट वि.सं. २०...मा अवकाश पाए पनि निवृत्त जीवनको अन्तिम क्षणसम्म बिहाली बटियामारीमा भेजमायादेवी र पिता टीकाराज शास्त्रीका पुत्ररत्नका रूपमा वि.सं. २००६ आषाढ ६ गते जन्मनुभएका द्रोणकुमार उपाध्यायको बाल्यकाल संस्कृतमय वातावरणमा बितेको थियो । पिता टीकाराज शास्त्री स्वयम् संस्कृत भाषा साहित्यका विद्वान् रहनुभएको र आफ्ना पिता गंगाधरको बटियामारीमा स्थापना गरेको आवासीय संस्कृत विद्यालयको सञ्चालक र शिक्षक पनि भएकाले हजुरबाकै पालादेखि घरको वातावरण शिक्षामय भएकाले बाल्यकालदेखि नै उहाँमा शिक्षाप्रति रुचि जागेको थियो । हजुरबुबा र बुबाले बालेको शिक्षाको ज्योतिलाई उहाँले नपछ्याइरहन सक्नु भएन ।

संस्कारकै रूपमा विकसित भएको शैक्षिक मोहले उहाँलाई कहिल्यै छाडेन । फलस्वरूप उच्च शिक्षाको चाहले उपाध्यायलाई पुर्ख्यौली थलो नेपालतर्फ डोऱ्यायो र उहाँ त्रिभुवन विश्वविद्यालयको नेपाली विषयकै प्राध्यापक बनेर नेपाली भाषा-साहित्यको सेवामा जीवनभर लीन रहनुभयो । उहाँ भविष्यको योजनाकार पनि हुनुहुन्थ्यो । अवकाशपछिको जीवनमा के गर्ने ? कसरी व्यतीत गर्ने भन्ने कुरा साथीहरूको समूहमा छलफलमा ल्याइरहनु हुन्थ्यो । 'बाँकी जीवनलाई ऊर्जाशील बनाउनुपर्छ, समयलाई खेर फाल्न हुन्न' भन्ने मान्यता बोक्ने उहाँको निवृत्तजीवन छोटै भए पनि त्यस समयलाई पल-पल भरपुर सदुपयोग गर्नुभयो । फुर्सदको समयमा

विभिन्न लेखहरू, कार्यपत्रहरू र पुस्तकहरूको रचना गरेर पछिल्ला पिंढीहरूलाई उत्प्रेरित गरिरहनुभयो । त्यतिमात्र होइन, विभिन्न राष्ट्रिय एवम् अन्तर्राष्ट्रिय सेमिनार गोष्ठी आदिमा विषयविज्ञ, प्रमुख वक्ता, कार्यपत्र प्रस्तोता भएर नेपाली भाषा-साहित्य र लोकसाहित्यलाई देश-विदेशमा चिनाउनुभयो । नेपाली लोकसंस्कृति र लोकसाहित्यका स्रोतव्यक्ति भएर स्वदेशी र विदेशी मान-सम्मानबाट विभूषित द्रोणकुमार उपाध्यायले नेपाली भाषा-साहित्य, लोकसाहित्य र लोकसंस्कृतिलाई गुन लगाएर छोटै आयुमा ब्रह्मलीन हुन पुग्नुभयो। भाषिक अध्ययनमा सधैं जिज्ञासु रहने पौडेल बहुभाषाका ज्ञाता हुनुहुन्थ्यो । उहाँ नेपालीबाहेक असमिया, बङ्गाली, अङ्ग्रेजी, हिन्दी, संस्कृत र राजवंशी भाषालाई पनि पहिलो भाषा सरह प्रयोग गर्नुहुन्थ्यो । भारतका विभिन्न ठाउँमा भएका सेमिनार, गोष्ठी आदि कार्यक्रममा त्यहाँको राज्य भाषा अर्थात् प्रान्त अनुसार असमी, बङ्गाली, संस्कृत, अङ्ग्रेजी वक्तव्य दिएको कुरा उहाँको आफ्नो अप्रकाशित भ्रमण वृत्तान्त ग्रन्थमा उल्लेख गर्नुभएको छ। विभिन्न भाषामा बोलेका सामग्रीहरू त्यसमा सुरक्षित रहेका छन् । यी कुराहरूले उहाँको प्राज्ञिक व्यक्तित्वलाई अझ ओज थपेको छ । त्यसैगरी, उहाँको लेखकीय व्यक्तित्व पनि कम महत्वको छैन । हालसम्म प्रकाशित उहाँका पुस्तकाकार कृतिहरू निम्न रहेका छन्–

**कृतिहरू :**

१. नवमी (सहलेखन, असमिया भाषामा नेपाली लोककथा संग्रह) असम साहित्यसभा, गुवाहाटीबाट प्रकाशित, १९९७ ई.
२. राजवंशी परिचय ः जाति, भाषा र साहित्य, २०५५
३. आदर्श नेपाली व्याकरण (सहलेखन २००५ ई.)
४. भाषिक चिन्तन (भाषिक विश्लेषणात्मक रचनासंग्रह २०६५)
५. केही साधक : केही साधना (समालोचना सङ्ग्रह, वि.सं. २०६५)
६. लोकवार्ता : लोककै चर्चा (लोकसाहित्यसँग सम्बन्धित समीक्षात्मक प्रबन्धकहरूको संगालो वि.सं. २०६५)
७. सवाई काव्यको सैद्धान्तिक परिचय, (लोकसाहित्य समीक्षा २०६७)
८. भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा, २०६८
९. लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ,.२०७४

**नवमी** (१९७७ ई.)

असमिया भाषामा नेपाली लोककथाहरूको सङ्ग्रह हो। असममा नेपाली भाषा पठनपाठनको स्वीकृति सरकारबाट प्राप्त भएपछिको समयमा प्रशस्त मात्रामा नेपाली भाषाका पाठ्यपुस्तकको अभावपछिसम्म नै रहिरह्यो। त्यो अभावपूर्ति गर्ने उद्देश्यका साथ प्रकाशित भएको उक्त पुस्तकले अभावपूर्तिलाई केही अंशमा पूरा मात्र गरेन, नेपाली मातृभाषीहरूलाई आफ्नो लोकभाषा, लोकसंस्कृति, लोकरीति आदिसँग परिचय पनि गरायो। साथै, बालकदेखि बृद्धसम्मलाई मनोरञ्जन पनि प्रदान गऱ्यो। भाषाप्रतिको प्रेम, हार्दिकता, अभावपूर्ति तथा मनोरञ्जन प्रदानकै खातिर यो पुस्तक लेखिएको देखिन्छ।

**राजवंशी परिचय (भाषा, लिपि र व्याकरण खण्ड,** २०५५)

पुस्तकमा राजवंशी भाषाको उत्पत्ति र विकास, यसको वर्तमान स्थितिका बारेमा वस्तुपरक अध्ययन गरिएको छ। झापा र मोरङ, जहाँ राजवंशीहरूको बहुलता छ, त्यहाँ बोलिने यो भाषा भारतको असम, उत्तरबङ्गाल र बिहारको पूर्वी भागमा पनि बोलिन्छ। प्रस्तुत पुस्तकमा यस भाषाको परिचयका साथै भाषिक संरचना, लिपि, व्याकरणको अन्य भारतीय भाषा र नेपाली भाषासँग तुलनात्मक अध्ययन गरिएको छ। भाषावैज्ञानिक आधारमा यथार्थ विश्लेषण विवेचना भएकाले प्रस्तुत पुस्तक राजवंशी भाषा साहित्यको विकास र श्रीवृद्धिमा एक कोशेढुङ्गा बन्न पुगेको छ।

**अर्को पुस्तक आदर्श नेपाली व्याकरण** (२०६२)

तारापति उपाध्याय र डा. द्रोणकुमार उपाध्यायको सहलेखनमा प्रकाशित आदर्श नेपाली व्याकरण असम राज्यमा नेपाली भाषा साहित्य ओझेलमा परेको महसूस गरी विद्यालय तहदेखि स्नातक तहसम्मका विद्यार्थीहरूलाई लक्षित गरी लेखिएको यो पुस्तक पनि अभावपूर्तिको रूपमा आएको देखिन्छ। पूर्वाञ्चल भारत विशेषगरी असममा नेपाली विषयको पठनपाठनमा आएका कठिनाइ केही हदसम्म शमन गर्ने उद्देश्यका साथ युग सुहाउँदो नेपाली व्याकरणको आवश्यकता महसूस गरी प्रवासमा रहेर लामो समयदेखि शिक्षाका क्षेत्रमा योगदान दिँदै आउनुभएका तारापति उपाध्याय र डा.द्रोणकुमार उपाध्यायद्वारा लेखिएको यो पुस्तक नेपाली व्याकरण पठनपाठनका निम्ति निकै उपयोगी देखिन्छ।

**भाषिक चिन्तन** (२०६५)

भाषा विज्ञानमा आधारित पुस्तक हो । यस पुस्तकमा सङ्ग्रहित एघार वटा लेखहरू भाषाको सूक्ष्मावलोकन गरी लेखिएका छन् । 'भाषाजस्तो जटिल र निरस विषयलाई सरस एवम् सरल तरिकाले प्रतिपादन गर्न सकिन्छ' भन्ने कुराको उदाहरण हो यो पुस्तक । साधारण पाठक र विद्यार्थीका लागि रुचिकर तुल्याएर निबन्ध झैं ललित र प्रवाहमय शैलीमा प्रस्तुत गर्न सक्नुले लेखकको लेखकीय क्षमतालाई दर्शाउँछ । यस पुस्तकमा सङ्ग्रहित लेखहरू भाषाविज्ञानका सैद्धान्तिक कुरादेखि भाषावैज्ञानिकका व्यक्तित्व विवरणमा समेत केन्द्रित छन् । त्यसैले यो पुस्तक अध्येताहरूका लागि सूचनाप्रद मात्र होइनन्, मननीय र आस्वादनीय समेत छन् ।

**केही साधक : केही साधना** (२०६५)

डा.उपाध्यायको देशभित्र र देश बाहिरका विभिन्न पत्रपत्रिकाहरूमा प्रकाशित भएका लेखहरूको सङ्कलन गरी तयार पारिएको पुस्तक हो । यस पुस्तकमा लेखकको लेखन यात्राको प्रारम्भिक र पछि लेखन प्रौढ हुँदै गएका अवस्थामा लेखिएका समालोचनात्मक लेखहरू रहेका छन् । जम्मा सोह्र वटा लेखहरूमा साहित्यिक भाषिक व्यक्तित्वहरूका बारेमा लेख्नुका साथै विभिन्न रचना तथा कृतिहरूको समेत अध्ययन गरिएको छ । परम्परित प्रभाववादी समालोचनाका साथै आधुनिक, वस्तुवादी, शैलीपरक र अन्य नवीनतम् समालोचनात्मक प्रवृत्तिहरूको समेत प्रयोग यस समालोचनात्मक ग्रन्थमा गरिएको छ ।

**१६२ पृष्ठमा संरचित लोकवार्ता लोककै चर्चा** (२०६५)

लोकसाहित्यसँग सम्बन्धित समीक्षात्मक प्रबन्धहरूको सँगालो हो । यस पुस्तकभित्र रहेका सत्र वटा लेखहरूमा लेखकले नेपाली लोकसाहित्य, लोकपरम्परा, लोकसंस्कार, लोकसम्पदादेखि लिएर झापाका आदिवासी मानिने राजवंशी, गन्गाईको जातीय परिचय र उनीहरूको लोकसाहित्य र लोकसंस्कारको पनि चर्चा गरिएको छ । चर्चाका क्रममा खास गरेर झापा र मोरङका राजवंशी, मेचे, गन्गाई आदि आदिवासीहरूको रीतिथिति, लोकनीति नियम, आचार, व्यवहार, चाडपर्व, परम्परा, भाषा, संस्कृति र जीवनशैलीजस्ता विषयहरूमाथि प्रकाश पारिएको छ । नेपाली लोकसाहित्यका क्षेत्रमा यो पुस्तक निकै सिद्ध मान्न सकिन्छ । अनुसन्धानकर्ता तथा शोधकर्ताहरूका लागि त यो पुस्तक निकै महत्वको देखिन्छ ।

**सवाई काव्यको सैद्धान्तिक परिचय** (२०६७)

डा.उपाध्यायको नेपाली लोकसाहित्य सम्बन्धी अर्को उल्लेख्य पुस्तक हो । यस पुस्तकमा लेखकले लोकसाहित्यको एक उपविधाका रूपमा रहेको सवाईको परिचय, परम्परा र महत्वलाई प्रकाश पार्नुभएको छ । लोकगाथाकै एक प्रकार मानिने सवाईको विश्लेषण गर्ने क्रममा यसको विकास, ऐतिहासिक परम्परा, महत्वका साथै लोकप्रियताको समेत उल्लेख गर्दै प्रायः लोप हुन लागेको विभिन्न नेपाली सवाईहरूको नमूना सङ्कलन पनि गरिएको छ । सवाईमै विद्यावारिधि गर्नुभएका डा.उपाध्यायको यो पुस्तक अनुसन्धानात्मक र खोजमूलक पनि रहेको छ ।

**भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा** (२०६८)

नेपालबाहिर खासगरी भारतको बृहत् असम (असम, मेघालय, मणिपुर, मिजोरम, त्रिपुरा, अरुणाचल)मा भएका नेपाली भाषिक तथा साहित्यिक गतिविधिलाई रेखाङ्कन गर्ने काम भएको छ । संसारभरि जहाँ-जहाँ नेपालीहरूको बसोबास रहेको छ, त्यहाँ-त्यहाँ नेपाली भाषा प्रयोग तथा व्यवहृत हुने भए पनि लेखकले खासगरी बृहत् असमलाई मात्र समेटेर त्यहाँ नेपाली भाषा र साहित्यमा भएका कार्य तथा उपलब्धिलाई उल्लेख गर्ने काम यस पुस्तकमा भएको छ । भारतमै पर्ने दार्जीलिङ्ग, सिक्किम, बनारस, कलकत्ता, देहरादून, दिल्ली, मुम्बईलाई भने यस पुस्तकमा समेटिएको छैन । प्रशस्त नेपालीभाषी रहेको भुटानको नेपाली भाषाको चर्चा पनि यसमा गरिएको छैन । जे होस्, यो सानो पुस्तकले जिज्ञासु विद्यार्थी र अध्येतालाई भने केही खुराक अवश्य प्रदान गर्दछ ।

माथि उल्लिखित पुस्तकाकार कृति बाहेक उहाँका विभिन्न राष्ट्रिय तथा अन्तर्राष्ट्रिय पत्रपत्रिकाहरूमा अङ्ग्रेजी, हिन्दी, नेपाली र असमिया भाषामा विश्लेषणात्मक लेखहरू छापिएका छन् । विभिन्न सामाजिक र सांस्कृतिक संघ-संस्थामा आबद्धताका साथै नेपाली तथा अन्य भाषाको पत्रपत्रिकाको सम्पादन र प्रकाशन पनि उहाँले गर्नुभएको छ । यसरी द्रोणकुमार उपाध्यायलाई लेखकीय व्यक्तित्वका रूपमा हेर्दा वा मूल्याङ्कन गर्दा नेपाली भाषासाहित्य र लोकसाहित्यमा उहाँले पुऱ्याएको योगदान उल्लेखनीय रूपमा देखिन्छ । विशेष गरेर लोकसाहित्यको क्षेत्रमा उहाँको लेखन निकै खारिएको र सबल देखिन्छ ।

संख्यात्मकता भन्दा गुणात्मकतामा जोड दिँदै अघि बढ्ने क्रममा पछिल्ला चरणमा उहाँको लेखाइ परिष्कृत बन्दै गएको अनुभव हुन्छ। पद्यसाहित्यतर्फको लेखन छिट्पुट देखिए पनि गद्यतर्फको झुकाव नै बढी पाइन्छ। अझ केही गरौं भन्दाभन्दै निर्दयी कालको शिकार बन्दा आज समाजले मात्र नभई राष्ट्रले समेत एक होनहार व्यक्तित्व गुमाएको छ। मूल्यवान रत्नको पारख गर्ने क्षमताको कमीमा उहाँ जस्ता कति प्रतिभावान व्यक्तिहरू गुमनाममा रहेका होलान्, सहजै अनुमान गर्न सकिन्छ। सम्बन्धित संस्था नै बेखबर बनेपछि विद्यावारिधि गरी यतिका पुस्तक समेत लेख्नुभएका उपाध्यायलाई सेवाको अन्त्यमा समेत पदोन्नति गर्न कन्जुस्याइँ गरिएको देखिन्छ। नेपालको राजनैतिक खेलको प्रभाव उहाँले पनि झेल्नुपर्‍यो। अन्त्यमा, मेरा लागि सधैं प्रेरक व्यक्तित्वका रूपमा रहिरहनुहुने द्रोणकुमार उपाध्यायप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु।

*(लेखक समालोचक हुनुहुन्छ)*



विद्यापति दाहाल

# असमको परिप्रेक्ष्यमा डा. द्रोणकुमार उपाध्याय लिखित 'भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा' - दृष्टिपात

मानव सभ्यताको महत्वपूर्ण आविष्कार हो - भाषा । भाषा भावाभिव्यक्तिको महत्वपूर्ण साधन हो र साहित्य भाषाकै कलात्मक अभिव्यक्ति हो । त्यसैले भाषा र साहित्य परस्परमा सापेक्षित रहन्छन् ।

नेपाली भाषा नेपाल राष्ट्रको राष्ट्रभाषा हो र भारतीय संविधानको आठौं अनुसूचीमा अन्तर्भुक्त सम्बैधानिक मान्यताप्राप्त साम्बिधानिक भाषा हो अनि विश्वमा बसोबास गर्ने नेपाली समुदायको मातृभाषा हो ।

डा.द्रोणकुमार उपाध्याय लिखित - भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा -असमका परिप्रेक्ष्यमा साहित्यिक तथ्य संक्षिप्त रूपमा रेखांकित गरिन्छ । यसले भारतका उत्तरपूर्वाञ्चल भूभागमा पर्ने असम, पश्चिम बंगाल, सिक्किम, अरुणाचल, नागाल्याण्ड, मिजोराम, मणिपुर, मेघालय, त्रिपुरा- यिनै नौ मध्ये असममा असमेली नेपाली भाषा-साहित्यको संरक्षण एवम् सम्बर्द्धनमा महत्वपूर्ण भूमिका रहेको तथ्य पाइन्छ ।

आजसम्म प्राप्त भएका ऐतिहासिक तथ्यका आधारमा भारतको उत्तरपूर्वाञ्चलमा नेपाली भाषामा पहिलो रचना गरी प्रकाशित रूपमा देखिएको कृति हो - तुलाचन आलेको मणिपुरको लडाइँको सवाई (१८९३) । यसपछि सवाई लयात्मक छन्दमा लेखिएका साहित्य कृतिहरू हुन् - धनवीर भण्डारीको 'अब्बर पहाडको सवाई' (१९९४) र भैंचालाको सवाई - पहिलो भाग (१९९७); आत्माराम मगर थापाको 'भैंचालाको सवाई - दोस्रो भाग' (१९०५), कृष्णबहादुर उदासको 'मछामको सवाई' (१९०८), गजवीर राणाको 'नागाहिल्सको सवाई' (१९१३), रामचन्द्र शर्मा ढुंगानाको 'कानीयाको सवाई' (१९३०-३२), रामप्रसाद भण्डारीको 'असम-बर्माको सवाई' (१९४४) आदि सवाई छन्दमा लेखिएका कविता-काब्य रचना कृतिहरू प्रकाशित रूपमा देखापरेका हुन् ।

यी सवाई कविताकाव्य कृतिहरूले नेपाली साहित्यको विकासक्रममा यथेष्ट सहयोग पुऱ्याएको देखिन्छ । वीरगाथा र करुणगाथाबाट प्रारम्भ गरिएका वितात्मक विकासलाई अघि बढाउने क्रममा विरचित वर्णमातृक छन्दमा देखिएका प्रमुख कृतिहरू हुन् - पद्मप्रसाद ढुंगानाका 'कर्त्तव्यनिष्ठा' (१९३७), धनुषभंग (१९३९-४०), रामायण सप्तरत्न; पं. हरिनारायण-विद्याभूषणको 'गीतमाला' (१९१०), नित्यानन्द तिम्सिनाको 'वंशावली' (१९४८), भीमबहादुर श्रेष्ठको 'जीवनी' (१९५१) जस्ता कृतिहरू देखापरेका छन् ।

कोहिमाका धनबहादुर राईको 'एक थुंगा फूल' (१९४०), गुहाटीका बबुर राणाको 'सपना कि विपना' आदि उपन्यासहरू पूर्वाञ्चलको नेपाली उपन्यास विधामा पनि स्थापित भइसकेको तथ्य पाइन्छ ।

कथा विधामा पनि - रामप्रसाद ज्ञवालीद्वारा लेखिएका कलंक, विवाह चर्चा, पैशाचिक लीला (१९६७); जुनुमाया राईनीको 'दुःखमय इतिहास' (१९३९), भोलानाथ गुरुङ्गको 'झण्डा' (१९४५), हरिप्रसाद गोर्खा राईका 'एउटा कलम' (१९४९), 'धनेको थेसिस' (१९४९), 'कमाने केटी' (१९५०), बिर्खेको हाम्रो कथा र दुःखमय इतिहास (१९६८) आदि कथाहरू गोर्खा सेवक, शारदा, गोर्खा, भारती आदि पत्र-पत्रिकामा प्रकाशित रूपमा देखापरेका हुन् ।

तिनताक निबन्ध विधामा पनि साहित्यकारहरूको गतिविधि प्रगति रूपमा देखिन्छ । प्रमुख रूपमा देखापरेका निबन्धहरू हुन् - हर्षबहादुर राईको 'गोर्खा नाटकका भाव औ मेरो बिन्ती' (१९३९), खड्गबहादुर गिरिको 'हाम्रो देशको जातिको वर्तमान अवस्था' (१९२९), मणिसिंह गुरुङको 'जापान-जर्मन सन्धि' (१९३९), धनबहादुर राईको 'बुढीबजूको गन्थन' (१९३६) आदि निवन्धहरू विभिन्न पत्र-पत्रिकामा प्रकाशित रूपमा देखिएका हुन् । नाटकका क्षेत्रमा पनि यहाँका नाटककारहरूको कलम प्रखर भएकै देखिन्छ । तिनताकका नाटकहरू हुन् - निन्यानन्द तिम्सिनाका महिषासुर मर्दिनी, अभिमन्यु बध, कर्णबध देखिएका हुन् भने रत्नबहादुर कार्कीको 'विवेक रत्नावली' (१९४०) पनि देखापरेकै छ ।

निबन्धमा त्यो समय त्यति उर्वर नदेखिए तापनि गोर्खा संसार, शारदा, गोर्खा सेवक, भारती, हाम्रो कथा आदि पत्र-पत्रिकाहरूमा यदाकदा प्रकाशित भएकै पाइन्छ । त्यतिखेर अनुवादतर्फ साहित्यकारहरूको त्यति दृष्टि नपुगेको अनुभव हुन्छ ।

कथा र निबन्ध बाहेक अन्य विधामा सामाजिक, आर्थिक चेतना त्यति स्पष्ट हुन सकेको छैन । तथापि समग्रमा भन्नुपर्दा समयसापेक्ष युगबोधी चेतनायुक्त स्तरीय

साहित्य सिर्जना सन् १९५० देखि मात्र देख्न पाइन्छ । यस समयावधिमा नेपाली साहित्य सर्जकहरूको स्वतन्त्र भारतको मुक्त वातावरण, स्वच्छ परिवेशमा साहित्यको उन्नतिका निम्ति नेपाली साहित्य सिर्जन समिति, शिलङ, तरुण दल शिलङ, गुहाटी दरङको नेपाली भाषा प्रचार समिति (१९५१), नेपाली साहित्य संघ (असम, तीनधारा प्रकाशन, प्रभात, ब्रम्हपुत्र, विन्दु, युगरेखा, मादल, हाम्रो सयपत्री, उषा, हाम्रो आशा, सुमन, कथा मञ्च, हाम्रो ध्वनि, नयाँ चेतना, च्याँखे जस्ता पत्रपत्रिकाको प्रकाशन नेपाली साहित्य विकासका निमित्त महत्वपूर्ण भूमिका रहेको पाइन्छ ।

यस अवधिमा गोकुलचरण जोशीका 'भविष्य' (१९५४) गीत संग्रह, 'बाँच र बाँच्न देउ' (१९५७) कविता संग्रह, 'सिमानाको द्वीप' (१९५८) गीत संग्रह; पं. चूडामणि शास्त्रीको 'विश्वोद्धार सन्मार्ग रक्षा' (१९५४) कविता, प्रेमसिंह सुवेदीको 'तीजको मैदानमा बहिनीको आँसु' (१९५४), हरिभक्त कटुवालका 'सम्झना' (१९६०) गीत संग्रह, 'मित्री मान्छे बोल्न खोज्दै' (१९७२) कविता संग्रह, 'सुधा' (१९६५) खण्डकाव्य र 'यो जिन्दगी खै के जिन्दगी' (१९७२) कविता संग्रह; के.बी. नेपालीका अवअश्रु (... ) गीतिकाव्य, 'विरही' (१९६०) कविता संग्रह; हरिप्रसाद खनालका 'आँसुको थोपा' (१९६२), 'तिम्रो यादमा' र 'शेषजीवन' कविता संग्रह (१९६७), चोकबहादुर थापाको 'हृदयको उद्‌गार' (१९६८), पुष्पलाल उपाध्यायको 'पुष्पाञ्जली' (१९६८), महाराज वसन्तगिरीको 'वसन्त मञ्जरी' (१९६१), दिल सहानीको 'नौलो माटो चाहिएको छ' (१९७०), धर्मराज भुषालको 'युगको घेराभित्र मलिन अनुहारहरू' (१९७१), प्रेमलाल जोशीको ' कलिकालको आवाज' (१९७२), तुलबहादुर मालेमाको 'चेतना खण्डकाव्य' (१९७२), हरिभक्त कटुवालद्वारा सम्पादित 'पूर्वकिरण' (१९६५) कविता संकलन र तीनधारा प्रकाशनद्वारा प्रकाशित कविता संग्रह देखापरेका छन् ।

यस समयावधिका अन्य प्रमुख कविता काव्यकृतिहरू हुन् - हरिप्रसाद गोर्खा राईका 'बाबरी' (१९७४) र 'मनचरीको बोली' (१९७८), गोपीनारायण प्रधानका 'साइलक आइरहेछ' (१९७५) र यस्तो भूल पो गरेछु, रणवीर गिरीको 'चरी भरर' (१९७५), भुपेन निषादको 'अनुभूति यी मेरा' (१९७५), मनबहादुर थापाको 'नौलो मान्छे जन्मदैछ' (१९७८), चन्द्रेश्वर दुबेका 'लाहुरे' (१९७८), संयुक्त वक्तब्य' (१९८६) र 'मदिरा होइन, मेरो पसिना' (२००८); अविनाश श्रेष्ठका 'संवेदना ओ संवेदना' (१९८१) र 'परेवा सेता काला' (१९८४); युद्धवीर राणाको 'चियान नपाएका तक्माहरू' (१९८२), भविलाल लामिछानेका 'अनागत' (१९६३), 'शब्द

हुन् यी मेरा' (१९९६), 'असमाप्त पाइलाहरू' (२००१) र शीर्षकविहीन कविता (२००३); दिल सहानीका 'नौलो मान्छे' (१९८३) र 'बन्दी मेथियस' (१९८४); अनिरुद्ध गौतमका 'चश्माभित्रका घायल आँखाहरू' (१९८३) र 'अज्ञात शब्दका पछिपछि' (१९८६); कुलबहादुर क्षेत्रीको 'गीताञ्जली' (१९८३), दुर्गाप्रसाद घिमिरेका 'ढुकढुकी' (१९८७) र 'शतभिषा' (१९८३); तुङ्गनाथ नेपालका 'यहाँ यस्तै छ' (१९८३) र 'माधुरी' (१९९१; के.पी. नेपालीका 'प्लेटफर्म' (१९६८), 'भक्तेको घर' (१९९५) र 'अनुरण'; प्रेमसिंह सुवेदीको 'सोह्र मिनट' (१९८४), मोतीसिंह क्षेत्रीका कविता (१९८५), 'शहीद तर्पण' (१९८६) र 'स्मृति वेदना' (१९९५); पद्म क्षेत्रीको 'आदिम सडक', दामोदर ढकालको 'अध्यारो उज्यालो (१९८५), बलराम पोखरेलका 'संघर्षसँग डराएको मान्छे' (१९८६) र 'देवरूपा' (१९९६); रणबहादुर क्षेत्रीको 'नरबुङ्को सवाई' (१९८१), मोतीराम तिम्सिनाको 'विस्मृति' (१९९९), खड्गबहादुरका 'गिनीपिग' (१९८६) र 'औंसीका रातहरू' (१९९२); बालकृष्ण उपाध्यायको 'कोलाज' (१९८६), गोमा शर्माका 'केवल तिम्रो निम्ति' र 'एकमुठी जीवन खोज्दै' (१९८६); पुष्पलाल उपाध्यायको 'उषामञ्जरी' (१९८७), हरिभक्त कटुवालको 'बदनाम मेरा यी आँखाहरू' (१९८७), मोहन सुवेदीको 'पृथिवी जसरी भोग्दैछु' (१९८७), गुरुभक्त धितालको 'मेरा पीर : मेरा गीत' (१९८८), कृष्णबिक्रम राणाको 'आँसु एउटा नयाँ बिहानको प्रतीक्षामा' (१९८८), लोकनाथ उपाध्यायको ' विवर्तन' (१९९०), लोकनाथ उपाध्याय चापागाईंको 'अन्तराल' (१९९२), छविलाल उपाध्यायका 'पवन दूत' (१९९०), 'अस्तित्वबोध' (१९९१), 'कामरूपा' (१९९५), 'छवि कविता संग्रह' (२०००), 'देवकोटा महाकाव्य' (२००२), 'कवि र कविता' (२०००) र 'कल्पना माधुरी' (२०११); रमेश दवाडीको 'टाउको खोज्दै' (१९९२), दिलबहादुर नेवारको 'इन्द्रेणी' (१९९१), खेमराज नेपालको 'मेरो देश : हिजो आज र भोलि' (१९९३), चन्द्रकला नेवारको 'चन्द्रव्यूह' (१९९६), होम सञ्जेलको 'आकाररहित' (१९९४), तारानाथ शाण्डिल्य शास्त्रीका 'शाण्डिल्य तथा अन्य कविता' (१९९५) र 'मेरो मुटुमा मेरो देश' (२००२); पुष्पधर शर्माका 'हाम्रो ढुकढुरी' (१९९६) र सपना 'हराएको रात' (२००६); टीकाप्रसाद शर्माको 'लोहित्य' (१९९६), कर्णबहादुर क्षेत्रीका 'मुठीदान' (१९९८) र 'प्रतिदान' (२००२); लालुप्रसाद उपाध्यायका 'विस्मृतिका कविता' (१९९८) र 'ओझेलमा परेका कविता'; नारायण प्रधानको 'यसै ब्रम्हपुत्रको बगरमा' (२०००), कृष्णप्रसाद ज्ञवालीको 'कृष्णप्रसाद ज्ञवालीका कविताहरू' (२००२), होमनाथ सुवेदीको 'नवोदित' (२०००), रूपनारायण

पाठकको 'फिलिङो' (२००२), विद्यापति दाहालका 'काम्य खण्डकाव्य' (२००१), 'आमा' खण्डकाव्य' (२००४) र उषाहरण महाकाव्य (२००६); हरि गजुरेलको ' शब्द बटुल्दै' (२००१), दीपक रिजालको 'आमा आशीर्वाद' (२००२), बलराम उपाध्यायका 'छेड्का' (२००८) र 'वरिपरि हेर्दा' (२०१०) आदि कविता काव्यहरू यस अवधिमा प्रकाशित रूपमा देखापरेका छन् ।

यसैगरी, इन्द्रप्रसाद गुरागाईं सम्पादित कविताकुञ्ज (१९९३), गोपालबहादुर नेपाली सम्पादित 'पूर्वाञ्चलीय नेपाली कविता' (१९९४), होमनाथ सुवेदी सम्पादित 'शङ्खनाथ' (१९९५) र 'हाम्रा देखिएका सपनाहरू' (१९८१) आदि सामूहिक कविता संग्रह प्रकाशित रूपमा देखिन्छन् ।

यस अवधिमा अनुदित काव्यकविताहरू पनि देख्न पाइन्छ । तीमध्ये पुष्पधर शर्माद्वारा असमियाबाट 'हिरेन भट्टाचार्यका निर्वाचित कविता' (१९९९)को नेपालीमा अनुवाद, जयन्तकृष्ण शर्माद्वारा के.बी. नेपालीको 'प्लेटफर्म' काव्यको अनुवाद र गीता उपाध्याय, मीरा ठाकुर आदिले असमियामा अनुवाद गरिएको 'चुनिएका कवयत्रीका कविता' असमिया भाषाका कविता नेपाली भाषामा अनुवाद गरेबाट साहित्य भण्डार भरिलो भएको देखिन्छ । नेपाली साहित्यको विकासको मार्गमा कविताकाव्यहरू प्रशस्तै देखापरेका छन् । यो शुभलक्षण हो भन्नु पर्दछ ।

पूर्वाञ्चल असममा यस अवधिका कथा विधामा पनि कथाकारहरूको कलम प्रखर रूपमा चलेको देखिन्छ । यस समयका उल्लेखनीय कथाहरू हुन् - हरिभक्त कटुवालको 'स्पष्टिकरण' (१९७६), माया ठकुरीका 'नजुरेको जोडी' (१९७६), ' गमलाको फूल' (१९७६) र 'साँघु तरेपछि' (१९८२); हरिप्रसाद गोर्खा राईको ' यहाँ बदनाम हुन्छ' (१९७४), दुर्गाप्रसाद शर्माको 'रातोपानी', अर्जुन निरौलाको 'साँझ संगसंगै', बी.एम. प्रधानको 'अर्घेलो' (१९८०), दिलबहादुर नेवारको 'लोक कथाको आधार' (१९८१), लोकनाथ चापागाईंको 'साइत' (१९८२), लीलबहादुर क्षेत्रीका 'तीन दशक : बीस अभिव्यक्ति' (१९८३) र 'लीलबहादुर क्षेत्रीका कथाहरू' (१९९७); लक्ष्मण बोहोराको 'एक बिहान : एक बेलुकी' (१९८५), शेरमान थापाको 'इन्देणी' (१९८५), खड्गराज गिरीका 'रूपपतिरुम' (१९८३), ' अभाव' (१९९२) र 'कथादेखि पर' (१९९८); के.बी. नेपालीका 'भोक', 'मृत्यु' र 'सङ्घर्ष' (१९९१), विष्णुलाल उपाध्यायको 'उत्सर्ग' (१९९४), बिक्रमवीर थापाको 'बीसौं शताब्दीकी मोनालिसा' (१९९७), मोहन सुवेदीको 'माटो' र 'मान्छे र माया' (१९९८); मुन्नी सापकोटाको 'कथा फूलबारी' (२००१), गुरुभक्त रिजालको

'डेजीसक अधुरो सपना' (२००२), रेवतीमोहन तिम्सिनाका 'जुनकीरी' (२००५) र 'मन्दाकिनी' (२००५); रेवतीरमण सापकोटाको 'बोर्डर' (२००८), नयाँदेवीको 'कथा मञ्जरी', जयप्रसाद दाहाल सम्पादित 'नयाँ घुम्ती' (१९८२), इन्द्र गुरागाईं सम्पादित 'कथाकुञ्ज' (१९९६) आदिबाट भारतीय नेपाली साहित्यमा कथाविधा पनि अन्य विधासरह मौलाएको देखिन्छ ।

लीलबहादुर क्षेत्रीका बसाइँ (१९५७) र अतृप्त (१९६८) बाट यस अवधिमा उपन्यास विधाले पनि प्रगति गरेको देखिन्छ । यस सन्दर्भमा देखापरेका उपन्यासहरू हुन् - के.बी. नेपालीको 'तस्वीर एक रातको' (१९७६), गहीन उपाध्यायको 'खोजीमा' (१९७८), चन्द्रशेखर दुबेका 'जिन्दगीको बाटो' र 'देशको माटो' (१९७८), बिक्रम थापाका 'विगतको परिवेशभित्र' (१९८३) र 'टिष्टादेखि सतलजसम्म' (१९८३); लीलबहादुर क्षेत्रीको 'ब्रम्हपुत्रको छेउछाउ' (१९८४), प्रकाश सुवेदीको 'डोबहरू' (१९८३), अर्जुन निरौलाको 'घाम डुबेपछि' (१९८३), हरि अधिकारीको 'मुटुभित्रको सिर्जना' (१९९४), रूपनारायण पाठकको 'दोसाँध' (१९९८), लोकनाथको 'आँधी' (... ), सन्तकुमार देवानका 'पाहाड पर्वत' (२०००) र 'कथा बल्ल हुन्छ' (२००२); रोहित गौतमको 'अग्निस्नान' (२००२), नयाँदेवीका 'युगसन्धि' (२००२) र कौशल्या (२००६); जयनारायण लुइँटेलको ' अर्धविराम' आदि उपन्यासहरू उल्लेखनीय रहेका छन् ।

साहित्यकारहरूले नाटक क्षेत्रमा त्यति प्रखर कलम चलाएको देखिन्न, तापनि यो विधा शून्य रहेको छ भन्न मिल्दैन । नाटक-नाटिकाहरू अनुवादित भएकै देखिन्छन् । उत्कृष्ट नाटकहरू असमिया, हिन्दी, संस्कृत वा अंग्रेजीबाट नेपाली भाषामा अनुवाद गरी मञ्चस्थ गर्ने परम्परा रहेको पाइन्छ । यस सिलसिलामा पत्रपत्रिका र रेडियोद्वारा प्रकाशित-प्रसारित गरिएको पाइन्छ । यस्ता नाटकहरूमध्ये विलासी क्षेत्रीको 'लौ खस्यो' (१९७२-७६), श्यामबहादुर सुब्बाका 'जीवन निर्वाह' र 'हुरी चलेको रात'; लक्ष्मी तिम्सिनाको 'बुलाकी', धर्मलाल भुसालको 'विद्रोह', टीकाराम निर्भीकको 'निर्वाचन', भविलाल लामिछानेको 'कति गल्ती', ध्रुवकुमार राईका 'गम बुट', 'लाहुरे' र 'धामी'; धनबहादुर सुनारको 'सावित्री सत्यवान्', चन्द्रसिंह भित्रीकोटेको 'हवलदार', हरिप्रसाद गोर्खा राईका 'हरिश्चन्द्र' (१९६७), 'कृष्ण अष्टमी', 'राम नवमी', 'जननी' र 'जन्मभूमि'; लीलबहादुर क्षेत्रीका ' परिवर्तन', 'कन्यार्थी', 'कामाख्या मन्दिर' र 'शान्तनुको शोक'; के.बी. नेपालीको ' हत्यारा', खड्गराज गिरीको 'एउटा दृष्य', जयन्तकृष्ण शर्माको 'भेलाघर', इन्द्रकान्त

कार्कीको 'एकमुठी आवाजको हत्या', मोतीसिंह क्षेत्रीको 'एक अवलाको जीवन' (१९७५), हरि अधिकारीको 'जिउँदो मुर्दाको चित्कार' (१९८८), लीलबहादुर क्षेत्रीका 'दोबाटो' (१९६३) र 'शुरुको शुरु' (१९७०); के.बी. नेपालीको ' महारानी गोमा' (१९९४), मुक्तिप्रसाद उपाध्यायको 'अनन्त यात्रा' (१९९८), शेरमान थापाको 'पाँचपाते' (२००१), प्रेमसिंह सुवेदीका 'आम्रपाली' (१९९९) र 'कुमारी आमा' (२०००); गुरुभक्त धितालको 'निसाप' (२००३), रेवतीमोहन तिम्सिनाको 'थपिनीको बाख्रो' (२००७) र छविलाल उपाध्यायको 'चन्द्रगुप्त' (१९९२) अनुवाद नाटक-नाटिकाहरू पनि उल्लेखनीय मानिन्छन् ।

यसैगरी, केही निबन्ध, लेख, नियात्रा, जीवनी, साहित्य-सिद्धान्त र समालोचनात्मक कृतिहरू पनि कमबेशी परिमाणमा देखापरेकै पाइन्छ । यस्ता रचनाहरूमध्ये कृष्णप्रसाद ज्ञवालीको 'पीपलको छहारी' (१९७५), पुरुषोत्तम उपाध्यायको 'भारतका नेपालीहरू' (१९७०), दुर्गादत्त गौतमको 'संकल्प', चन्द्रकुमार शर्माका 'मेरा बारीका भाते करेला' (१९८५), 'छिमेकी' (२००३); मोतीसिंह क्षेत्रीको 'सपना मैले मान्छेको मासु खाएँछु' (१९८१), विष्णुलाल उपाध्यायका 'असमे नेपालीहरू' (१९७१), मेरा डायरीका केही पानाहरू (१९११-१२); गोपाल कौशिकको 'असमे ज्वाइँ' (१९९८), लीलबहादुर क्षेत्रीका 'नेपाली भाषाको साह्रो गाह्रो' (१९६२), झ्याउरे पार्टीमा लाग्दा' (१९९९); लोकनाथ उपाध्यायको 'लोकनिबन्ध संग्रह' (२००१), तारापति उपाध्यायका 'निबन्ध गुच्छ' (२००२), 'साधारण सामाजिक नेपाली जीवन' (२००२), केही निबन्ध : केही जीवनी' (२००८); जयनारायण लुइँटेलको 'निबन्ध कुञ्ज' (२०११)- यी रचनाहरू प्रतिनिधि रचनाका रूपमा देखापरेका हुन् ।

यात्रा संकलनमध्ये दिलबहादुर नेवारका 'यात्रा संकलन' (१९७७) र 'यात्रा संस्मरण' (२००३); गीता उपाध्यायको 'मन्दाकिनी' र अलकानन्दाको 'तीरैतिर केदारबद्रीसम्म' (२००२), लावण्यदेवी तथा जगन्नाथ उपाध्यायको 'बृटेनमा केही दिन' आदि निःयात्रा रूप साहित्यिक रचनाहरू हुन् । जीवनी साहित्यका रूपमा देखापरेका प्रमुख रचना हुन् - अविनाश श्रेष्ठ सम्पादित 'स्मृतिमा नन्दा सुवेदी' (१९८४), विष्णुलाल उपाध्यायका 'छविलाल उपाध्याय' (१९८५), 'आजीवन संग्रामी भक्तबहादुर प्रधान' (१९९०), 'महापुरुष शंकरदेव र कर्म' (२००३), 'कलागुरु विष्णुराभाको संक्षिप्त जीवनी' (२००१) र 'ओझेलमा परेका नारीरत्नहरू' (१९९७); टीकाराम निर्भीकका ' गोपालसिंह नेपाली' (१९९४) र 'स्मृति गोरेटाहरू गंगा उपाध्याय' (१९९५); तारापति उपाध्यायको 'दश महारथी' (२०१०), गीता उपाध्यायको 'महापुरुष शंकरदेव : जीवन

र कर्म' (२००३), देवेन सापकोटा सम्पादित 'गंगा उपाध्याय सापकोटा श्रद्धाञ्जलि स्मारिका' (२००८), डा. द्रोणकुमार उपाध्याय सम्पादित 'अक्लान्त व्यक्ति गणेशचन्द्र उपाध्याय' (२००८), विष्णुलाल उपाध्यायको 'नेपाली सत्राधिकार रविकान्त उपाध्याय' (२००१), नयाँदेवीको 'अन्नपूर्ण देवी' (२०११) र 'चन्द्रप्रभा शइकियानी' आदि जीवनी स्मृतिग्रन्थहरू उल्लेखनीय रहेका छन् ।

साहित्य-सिद्धान्त सम्बन्धी कृतिप्रति विद्वानहरूको दृष्टि कम परे तापनि एकदमै शून्य छ भन्न मिल्दैन । तीमध्ये प्रमुख कृति हुन्- विद्यापति दाहालका 'साहित्य विमर्श' (१९९८) र 'पूर्वीय सिद्धान्त र पाश्चात्य समालोचना सिद्धान्त' (२००४); शिव शास्त्रीको 'छन्दको सँगालो' (१९९२), तारापति उपाध्यायको 'अनुवादको भूमिका पद्धति र स्थिति' आदि प्रमुख रूपमा देखापरेका छन् । समालोचना र अनुसन्धान सम्बन्धी कृतिहरू हुन् - चन्द्रेश्वर दुबेका 'नेपाली साहित्य एक सर्वेक्षण' (१९८१), तेस्रो आयामको 'शव परीक्षा' (१९८१), ' उर्वशी : महाभारतको पृष्ठभूमिमा' (१९८२), दुर्गाप्रसाद उपाध्याय घिमिरेका 'मेरो दृष्टिको सेरोफेरोमा बुढाछपडी' (१९८३), 'समिधा' (१९८३) र 'साधना'; भीमकान्त उपाध्यायका 'सरसर्ती पढ्दा' (१९८३) र 'आँखीझ्यालबाट हेर्दा' (१९८४); गोविन्दसिंह रावतको 'पूर्वाञ्चल भारतको नेपाली कविता : एक सर्वेक्षण' (२००२), छविलाल उपाध्याय खतिवडाको 'लीलबहादुर क्षेत्री तथा उनको ब्रम्हपुत्रको छेउछाउ' (१९९०), लक्ष्मीप्रसाद पराजुलीका 'दृष्टिपाल' (१९९३), 'उत्तरपूर्व भारतीय नेपाली समाज र साहित्य' (१९९५) र 'नेपाली कथा साहित्यमा उत्तरपूर्वीय भारतको योगदान' (२००१); लीलबहादुर क्षेत्रीको 'पूर्वाञ्चल भारतीय कथा साहित्य र पत्रकारिताको इतिवृत्त' (१९९७), ज्ञानबहादुर क्षेत्रीको 'अवलोकन' (२०००), गोपीनारायण प्रधानको 'विवर्तन' खण्डकाव्य संक्षिप्त विश्लेषण (२००३) रचनाहरू महत्वपूर्ण मानिन्छन् ।

यसैगरी, पुरुषोत्तम उपाध्यायको 'भारतीय नेपालीहरू' (१९७०), विष्णुलाल उपाध्यायको 'असमे नेपालीहरू' (१९७१), दुर्गाप्रसाद घिमिरे सम्पादित 'प्रसादसिंह सुब्बा - स्मृतिग्रन्थ' (१९०८), श्यामराज जैसीको 'असममा नेपालीहरूको ऐतिहासिक पृष्ठभूभि' (१९९०), पद्म क्षेत्रीको 'तुराका नेपालीहरू' (१९९३), बिक्रमवीर थापाको 'हत्या : रातो डायरीको' (१९९४), पद्म ढकालको नौदुवार : दिगन्तसम्म (१९९५), बद्री गुरागाईंका 'असमिया साहित्यको परिचयात्मक इतिहास' (१९९६) र 'बडो लघुचन्द्रिका' (२००३); मुक्ति गौतमको 'मणिपुरमा

नेपाली जनजीवन' (१९९९), वसन्तकुमार नेपालको 'वसन्त कोपिला' (१९९९), जगनिधि दाहालको 'हिङ बाँधेको टालो' (२००१), युद्धवीर राणाको 'मानव यात्रा' (२००२), जगदग्नि उपाध्यायको 'जब विज्ञान बोल्छ' (२००३) आदि रचनाकृतिद्धारा भारतीय नेपाली भाषा साहित्यको सम्बृद्धि भएको पाइन्छ ।

पठनपाठनका क्षेत्रमा निम्न स्तरदेखि सर्वोच्च स्तरसम्म विद्यालय, महाविद्यालय र विश्वविद्यालय स्तरसम्म समयसापेक्षित रूपमा भइरहनुका साथै सरकारद्वारा साहित्यकारहरू पुरस्कृत हुँदै साहित्यिक पेन्सनको पनि व्यवस्था भएकाले नेपाली भाषा-साहित्य समृद्ध हुँदै गएको देखिन्छ। यस दिशामा तारापति उपाध्यायको सहलेखनमा प्रस्तुत गरिएको 'आदर्श व्याकरण' उल्लेखनीय रहेको छ । यसरी सन् १९९३ बाट शुरु भएको नेपाली साहित्यको विकासक्रमले आजको मितिसम्म यथेष्ट प्रगति गरेको देखिन्छ । कविता खण्डकाव्य महाकाव्यदेखि लिएर आख्यान, उपन्यास कथा निबन्ध सिद्धान्त ग्रन्थ, समीक्षा समालोचना, इतिहास आदि सबै क्षेत्रमा उत्तरोत्तर वृद्धि भएको पाइन्छ ।

स्व. डा. द्रोणकुमार उपाध्यायद्धारा लेखिएको 'भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा'को कसीमा असमेली नेपाली साहित्यको केही संक्षिप्त साहित्यिक तथ्य मात्र यहाँ प्रस्तुत गरिएको छ । उनका कृतिद्वारा उनी सदा अमर रहने छन् । उनका प्रकाशित कृतिहरू हुन्–

१. 'नवमी' असमिया भाषामा सहलेखन, असम साहित्य सभाद्वारा प्रकाशित (सन् १९७७)
२. 'राजवंशी परिचय' रा.व.प्र.स. नेपालद्वारा प्रकाशित (सन् १९९४)
३. आदर्श नेपाली व्याकरण (सहलेखन) किरणबाला, असम, उदालगुडीद्वारा प्रकाशित (सन् २००५)
४. भाषिक चिन्तन (वि.स. २०६५)
५. केही साधक : केही साधना (वि.स २०६५)
६. लोकवार्ता : लोककै चर्चा (वि.स. २०६५)
७. सवाई-काव्यको सैद्धान्तिक परिचय (वि.स. २०६७)
८. भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा (वि.स. २०६८)

–यी कृतिहरू शिक्षार्थी, अध्यापक, अनुसन्धाताहरूका लागि अत्यन्त उपयोगी मानिन्छन् । यसै तथ्यांकित लेखद्वारा उनलाई श्रद्धासुमन अर्पण गरिन्छ । अस्तु !

*०९/०९/२०२०* *- ओदालगुडी, बी.टी.ए.डी., असम*

*(लेखक असमका प्रसिद्ध समालोचक हुनुहुन्छ)*



हेम अधिकारी

# केही साधक – केही साधनाभित्र चियाउँदा

नेपाली भाषा साहित्यको सेवामा पूर्वी नेपाल र भारतको पश्चिम बंगाल, असमलाई कार्यक्षेत्र बनाएका द्रोणकुमार उपाध्यायको जन्म, शिक्षा, दीक्षा असममा नै भएकाले पनि त्यतातिरको नेपाली भाषा साहित्यको विकासमा विशेष अभिरुचि हुनु स्वाभाविकै हो । धर्तीमा पहिलोपटक आँखा खोलेको र साथीसंगातिसँग धुलो खेलेका ठाउँको मोह कति हुन्छ ? भन्ने कुरा उपाध्यायका साहित्यिक गतिविधिबाट थाहा हुन्छ । यो आत्मीयता उनले जीवनपर्यन्त सँगाली राखे । त्रिभुवन विश्वविद्यालय सेवामा प्रवेश गरेर मेची बहुमुखी क्याम्पसमा लामो समय प्राध्यापन गरेका उपाध्याय पूर्वी नेपालको गतिविधिमा सधैं सक्रिय रहे । जहाँ रहे पनि, जहाँ बसे पनि नेपाली साहित्यलाई आफ्नो नित्यकर्मजस्तै बनाएका उपाध्यायले नेपाली लोककथालाई असमिया भाषामा अनुवाद गरेर प्रकाशन गराए । विभिन्न भाषाको अध्ययन र अनुसन्धानमा निरन्तर लागिरहने उपाध्याय एक असल र सफल व्यक्तित्व हुन् । भाषाका क्षेत्रमा अन्वेषक, साहित्यकार, समालोचक, लोकवार्ताका संकलक आदि जस्ता विभिन्न क्षेत्रमा सक्रिय रहनुका साथै देश-विदेशका साहित्य गोष्ठीहरूमा सहभागी हुँदै उपाध्यायको समर्पित जीवन बितेको पाइन्छ ।

द्रोणकुमार उपाध्यायको एक कुशल काव्यशिल्पकारिता समालोचनामा कुँदिएको पाइन्छ । विभिन्न पत्रपत्रिकामा संक्षिप्त समीक्षात्मक टिप्पणी प्रकाशित गर्ने उपाध्यायका 'केही साधक : केही साधना' समालोचना संग्रह २०६५ सालमा काठमाण्डौबाट प्रकाशित भएको हो । होम सुबेदीको गहन भूमिका रहेको यस संग्रहमा सर्जक र सिर्जना क्षेत्रका गरी १६ वटा समालोचनाहरू रहेका छन् । तिनमा भारतेली नेपाली साहित्यका अमर साधक शिवकुमार राई, प्रेरणापुरुष पं गंगाधर पौडेल, एक असल व्यक्तित्व बल्लभमणि दाहाल र सन्त ज्ञानदिलदास

मेचीका प्रतिभा समेत चार वटा जीवनीपरक समालोचना छन् भने बाँकी १२ वटा कृति र कृतित्वमाथि चर्चा गरिएका समालोचना छन् ।

यस समालोचना संग्रहभित्र पसेर हेर्दा उपाध्यायका समालोचकीय प्रवृत्तिका विभिन्न पक्षहरू भेटिन्छन् । केही समालोचनामा उनको समालोचकीय चेत उच्चतातर्फ उन्मुख देखिन्छ भने केहीमा एक कुशल समालोचना शिल्पी र खारिएका बनावट छ भन्ने कुरा खुट्याउन सकिन्छ । आफ्नो युगका एक कुशल समालोचक र प्राध्यापक उपाध्यायका समालोचनामा प्राध्यापकीय शैलीको उत्कर्षता पाउन सकिन्छ । त्यसैले उनका समालोचना बोधगम्य र सुस्पष्ट छन् । उपाध्याय कहीं-कहीं सर्जक र सिर्जनाका प्रभावमा रमाइरहेका हुन्छन् भने कहीं-कहीं तटस्थ रहेर कृतिको मूल्याङ्कन गरिरहेका हुन्छन् । उनी कहीं शैलीवैज्ञानिक पद्धतिको तलाउमा डुबेर गणितीय विधिबाट कृतिको साङ्गोपाङ्ग चिरफार गरिरहेका हुन्छन् । नेपालभित्र र नेपालबाहिर विशेष गरेर असम दार्जीलिङ, डुवर्स क्षेत्रमा भएका साहित्यिक गतिविधिमा संलग्न भएका कारण उनमा यी क्षेत्रको साहित्यको गहिरो अध्ययन र विश्लेषण यस कृतिमा पाइन्छ ।

असमका कवि छविलाल खतिवडाले महाकवि लक्ष्मीप्रसाद देवकोटालाई नायक बनाएर रचना गरेको महाकाव्य 'देवकोटा'बाट यस संग्रहको प्रारम्भ हुन्छ । हुन त एउटा सानो प्रबन्धमा महाकाव्यको सम्पूर्ण रूपले अध्ययन र विश्लेषण सम्भव पनि छैन । त्यसैले उनी 'म यहाँ कवि छविलालको यस 'देवकोटा' महाकाव्यको रसास्वादन गराउनु भन्दा पनि यस महत्वपूर्ण कृतिको छोटो परिचयमात्र प्रस्तुत गर्न लागिरहेको छु' भन्दछन् । उपाध्यायले बाह्र वटा पद्य पद्यांश उद्धरण गरेर छोटो कृतिको गुणपक्ष केलाउने काम गरेका छन् । वास्तवमा उनले पाठकलाई 'देवकोटा' महाकाव्यको तिर्खा लगाउन यो प्रबन्धबाट प्रयास गरेको हुनसक्छ । वि सं २०५९ साउन ६ गते ढेकियाचुली, शोणितपुर, असमबाट देवराज उपाध्याको प्रकाशनमा प्रकाशित यस महाकाव्यमा महाकविको सम्पूर्ण जीवन वृत्तान्त वर्णन गरिएको कुरा समालोचक बताउँछन् । पूर्वीय महाकाव्यका मान्यता अनुशरण गरेर रचिएको यस महाकाव्यको मंगलाचरणमा गुरु गणपतिको आराधना गरिएको छ । करीब एक दर्जन शास्त्रीय छन्दमा रचिएको यो महाकाव्य असमेली नेपाली साहित्यलाई दिएको एक राम्रो सम्पत्ति भएको तर्क समालोचकको छ ।

दर्शनशास्त्रको अध्ययन गरेर त्यसैको प्राध्यापन गर्ने चन्द्रकुमार शर्मा अधिकारीको अर्को नाम चतुर्भुज शर्मा हो । असमकै गुवाहाटी सिलाङमा उच्च शिक्षा हासिल

गरेका शर्मा शोणितपुर मजगाउँमा जन्मिएका थिए। युवावयदेखि नै सक्रिय शर्मा "प्रभात" नामक पत्रिकाका माध्यमबाट साहित्यमा उदाएका देखिन्छन् । विशेष गरेर निबन्धकार शर्माको मरणोपरान्त प्रा. चिन्तामणि शर्माका प्रयासमा असमको नौगाउँ, अमोलपट्टीको अभिषेक अविताश प्रकाशनको सौजन्यमा १३ वटा निबन्धहरूको सँगालो "छिमेकी" प्रकाशित भयो । समीक्षक उपाध्याय यहाँ छिमेकी निबन्ध संग्रहको ढोकाबाट भित्र पसेर चन्द्रकुमार शर्माको साहित्यिक व्यक्तित्व र कृतिगत उचाइ पर्गेलिरहेका छन् । ताजमहल निबन्धमा उनको शैली र प्रस्तुतिले एक उच्चस्तरको आत्मपरक शैली भएका निबन्धकार रहेको उदाहरण यहाँ प्रस्तुत गरिएको छ । शर्मा सामाजिक यथार्थवादी र सुधारवादी सर्जक थिए । "लक्ष्मी पूजा" निबन्धमा उनी किसानहरूकी आराध्य देवीलाई जालझेल गर्नेहरूले आफ्नी देवी बनाएको कुरा बडो रमाइलो पारामा असन्तुष्टि पोख्तछन् । समाजमा व्याप्त 'अन्याय, शोषण दमनप्रति उनी विद्रोह होइन, असन्तुष्टि पोख्छन्' भन्ने कुरा यहाँ प्रष्ट पारिएको छ । प्रहरी कर्मचारी जात धर्म चाडपर्व संस्कृति आदि क्षेत्रमा भएका विरोधाभासपूर्ण प्रवृत्तिहरूको चिरफार गर्ने बौद्धिक निबन्धकार हुनुका साथै निबन्धमा जीवनदर्शन यत्रतत्र सुगठित रूपमा पाइने निबन्धकार भएको कुरा गुणग्राही ढङ्गले समीक्षक उपाध्याय बताउँछन् ।

'घामका पाइलाहरू' उपन्यासको मूल्याङ्कनका क्रममा उपाध्यायले निकै भित्री तहबाट मसिनु गरी केलाएको पाइन्छ । वर्तमानमा शहरीकरण कसरी भइरहेछ भन्ने कुरा यहाँ राम्ररी खुट्याउने प्रयत्न गरिएको छ । शहर बन्ने क्रममा त्यहाँ बाठाटाठा हुनेखाने धनीमानीका साथै गरिखाने वर्ग पनि जम्मा हुन्छन् । यसरी मान्छेको बसोबास बाक्लिँदै जाँदा शहरी सुविधाहरू शिक्षा स्वास्थ्य यातायात सञ्चार आदिको पनि विकास हुन्छ भन्ने कुरा उल्लेख गर्दै तिनताकाको चाकरीबाज सामन्ती प्रवृत्तिको पिल्स्याइमा परेका निमुखा वर्गप्रति पनि सहानुभूतिपूर्ण चित्रण गरिएको छ । विशेष गरेर उपन्यासको वातावरण योजनाको संगठन प्रस्तुत गर्न तीन तहका बाकस पद्धति अपनाउँदै यसको केन्द्रमा ऐतिहासिक पूर्वप्रसङ्गहरू रहेका बताइएको छ । समीक्षक उपन्यासकार जन्मदाको वातावरणलाई आजको युगसम्म ल्याएर विश्वसनीय आधार दिन्छन् ।

उपाध्याय 'मैया साहेब' कथाका माध्यमबाट भवानी भिक्षुका समग्र सिर्जनात्मक पक्षको मूल्यांकन गरिरहेका छन् । २००५ सालमा प्रकाशित मैया साहेबसम्म आइपुग्दा भिक्षु मनोविश्लेषक कथाकार हुँदै 'मैनालीको सामाजिक आदर्शोन्मुख

यथार्थवादमा आइपुगेका हुन्' भन्ने समीक्षकको ठम्याइ छ। शालीन सौम्य मानवीय रतिरागका प्रस्तोता भिक्षु मानवीय नग्नतालाई च्याउँदैनन्। बौद्धिक पक्षलाई अंगाले पनि पात्र परिवेश भाषाशैलीले उनका कथा पढ्दा पाठकलाई पट्यार लाग्दैन। कथाहरू 'सरल सुबोध र रमणीय छन्' भन्ने समीक्षकको निष्कर्ष छ। भिक्षुको समीक्षाका क्रममा उपाध्याय तटस्थ भएर सिर्जनाको गहिराइमा पौडिरहेका छन्।

घामका पाइलाहरू, काशीवास, ॐ नमः शिवाय र उपहारमा समीक्षक शैली वैज्ञानिक दृष्टिकोणबाट मूल्याङ्कन गरिरहेका छन्। काशीवासको वस्तु विश्लेषण वृत्तचित्र र तालिकीकरण सूक्ष्म ढङ्गले गरेर वाशु शशीका दुई नाटक ॐ नमः शिवाय र उपहारको भित्री मर्ममै पुगी चिरफार गरेका छन्। चित्रकारी शैलीबाट उपाध्यायले नाटकको विवेचना गरेका छन्।

ताना शर्माको समालोचना शिल्प र लेखनाथको चामत्कारिक प्रयोगको विश्लेषणका क्रममा समीक्षक तटस्थ भएर पाठकीय शैली अपनाइरहेका छन्। लेखनाथको शिल्पसौन्दर्यको पारखका लागि श्रृङ्गार पच्चिसी र मानसाकर्षिणीदेखि गंगागौरीसम्म दौडिएका उपाध्याय अन्य समालोचक झैं उनको सुन्दर कला पारखमा सन्तुष्टि लिन पुगेका छन्। उपाध्यायले ताना शर्माको जीवनी र कृतित्वको निकै तिख्खर शैलीमा निख्खर विश्लेषण गरेका छन्। गोपालप्रसाद रिमाललाई क्रान्तिकारी सर्जक स्वीकार्दै आमाको सपनाको कला र भाव दुबै पक्षमा राम्ररी मूल्याङ्कन गरेका छन्। आमाको सपनालाई क्रान्तिकारी मात्र नभएर एउटा प्रेमको धून पनि भएको प्रमाणित गरिएको छ। वास्तवमै रिमाल क्रान्ति र प्रेम दुबैलाई उत्तिकै महत्व दिन्थे। त्यही सापेक्षतामा यहाँ वासनात्मक होइन, मानवीय प्रेम र क्रान्ति दुबै पक्षबाट नाटकको मूल्याङ्कन गरिएको छ।

भारतीय नेपालीभाषी लेखकहरूमा निकै उच्चकोटीका लेखक शिवकुमार राईको जीवनी व्यक्तित्व र कृतित्वको मूल्याङ्कन गर्ने क्रममा तिनताकाको दार्जीलिङको नेपाली जनजीवनको राम्ररी शब्दचित्र उतारेका छन्। शिक्षाको कमीका कारण राम्रो पेशा-व्यवसाय अंगाल्न नसकेका नेपाली जनजीवनको दारुण अवस्थाको मर्मस्पर्शी ढङ्गले उपाध्यायले चित्रण गरेका छन्। अंग्रेजी, नेपाली र तिब्बती भाषाका ज्ञाता शिवकुमार राईले राजनीति, समाजसेवाका साथै रेडियोकर्मीका रूपमा काम गरे। खर्साङ रेडियोका पहिलो कार्यक्रम प्रस्तोता हुँदै विभिन्न विधाका पौने दर्जन जति कृतिका सर्जक राईको बहुआयामिक

व्यक्तित्वको उपाध्यायले सटिक मूल्यांकन गरेका छन्। उपाध्याय दायित्व पत्रिकाका माध्यमबाट पारिजातको बहुआयामिक सर्जक व्यक्तित्वको पुनर्मूल्यांकन गरिरहेका छन् । इलामका प्रतिभा ज्ञान दिलदासदेखि बल्लभमणि दाहालका प्रखर व्यक्तित्वका मूल्यांकनमा समीक्षक खँदिलो र कसिलो समीक्षकीय क्षमताका साथ विषयवस्तुको व्यापकतालाई सारसंक्षेपमा पर्गेल्न सफल भएका छन् ।

आधा दर्जनभन्दा बढी कृतिका रचयिता द्रोणकुमार उपाध्यायका गहन, सरल र सटिक समीक्षाहरूको यस संग्रहमा उनी एक कुशल कृति पारखीका रूपमा उपस्थित छन् । विश्वविद्यालयका विद्यार्थी र प्राध्यापक साथै साहित्यका पाठकलाई एक महत्वपूर्ण सामग्री पस्किएर सदाका लागि बिदा भएका छन् उपाध्याय ।

*२०७७/०३/०६*

*- दमक (झापा)*

*(लेखक समालोचक हुनुहुन्छ)*



होम सुवेदी

# सवाई काव्यको सैद्धान्तिक परिचयको सामान्य परिचय

डा. द्रोणकुमार उपाध्यायको २०६७ सालमा मीरादेवी पौडेलको प्रकाशकत्वमा प्रकाशित पुस्तक हो- 'सवाई काव्यको सैद्धान्तिक परिचय' । यो कृति आकारमा सानो भएर पनि कृतिले समेटेको विषय अत्यन्त महत्वको र विशद् किसिमको रहेको छ। नेपाली साहित्यको फाँटमा सवाई साहित्य एक अलग विशेषता बोकेको साहित्यिक फाँट हो; जसको आफ्नै परम्परा, इतिहास र साक्षी छ। सवाईका बारेमा कृतिकार स्वयम्को प्राक्कथन र प्रकाशिकाको सानो प्रकाशकीय मन्तव्यका साथ यो कृतिमा सवाईको सिद्धान्तलाई केलाउने, चिनाउने र यसको नेपाली साहित्यमा के कस्तो इतिहास छ- त्यस कुरालाई पर्घेल्न खोजिएको छ। सवाई भनेको नेपाली साहित्यमा छन्द र काव्यको रूपमा रहेको छ भन्ने कुरा जनाउ गर्दै यसको सैद्धान्तिक परिचयको आरम्भ गरिएको छ ।

हिन्दीको 'सवैया' नामक मात्रिक छन्दका रूपमा मानिने र नेपालीको सवाई एकै जस्ता देखिए पनि भिन्न हुन् भन्ने कुरा यहाँ लेखकले ठम्याएका छन् र सवाई नेपालीकै मौलिक शब्दका रूपमा रहेको जनाएका छन् । साथै, यसका विभिन्न कोणका अर्थहरूको पनि खुलासा र तुलना गरेका छन् ।

सवाई छन्द र यसको नेपालीमा प्रयोग र परम्पराको उल्लेख गर्दै नेपाली लोकगीतका सन्दर्भमा सवाई काव्य जोडिएको कुरा आएको छ। लोकगीत, लोकगाथा र सवाईमा समानता र भेदकताका रेखाहरूबारे निक्यौंल छ। साथै, सवाईका विशेषताहरू र अन्य लोक छन्दहरूका बीचमा तुलना गरी समानता र भिन्नताको छानविन गर्दै विभाजन र वर्गीकरण आदि बारेमा गम्भीर दिग्दर्शन गरिएको छ ।

नेपाली लोकछन्दका सन्दर्भमा सवाई काव्यमा रहेका लय छन्दसंरचना र अर्थको परिभाषा गर्दै छन्दको उत्पत्ति, प्रयोग र परम्पराबारे खास खोज अनुसन्धान गरिएको

छ। यस क्रममा छन्दको आरम्भकाल वा वैदिक कालसम्मका कुराहरू समेत यहाँ आएका छन् । सवाई एक छन्द हो भन्ने कुरालाई पुष्टि गर्न शास्त्रीय छ्न्दका प्रकार र तिनका भेदको समेत यहाँ अनुसन्धाता पौडेलले गहिरो खोज अनुसन्धान गरेको देखिन्छ । यी विषयहरूको उठान र परिचय प्रस्तुत गर्दै छन्दशास्त्रकै सामान्य परिचय समेत दिएको देखिन्छ ।

यसपछि नेपाली लोकछन्दहरूको परिचय आउँछ। शास्त्रीय छन्द हजारौं वर्ष पहिले अस्तित्वमा भएर लक्षण उदाहरण आदि पनि पाइन्छन् । तर, नेपाली लोकछन्दका बारेमा परिचय, परिभाषा र सिद्धान्त नपाइएकोले यसको सिद्धान्तको खाँचो अनुभव गरी नेपाली लोकछन्दको विभाजन गर्दै झ्याउरे, सेलो र सवाईबारे विशेष विभाजन गरिएको छ। सेलोका प्रकार र यसको प्रयोगावस्था खास अवसरमा हुने भए पनि झ्याउरे र सवाई भनेको खास पर्व वा जात्रामा नभई जुनसुकै अवसरमा पनि प्रचलनमा हुने कुरा छ। तर, झ्याउरेका केही प्रकार भने खास अवसरमा प्रचलित हुने कुरा पनि स्मरणीय छ। यसका साथै नेपाली छन्द सवाई र हिन्दीको सवैया छन्द भनेको एक हैनन् भन्ने कुरा रूपगत भेद देखाएर पुष्टि गरिएको छ ।

यसपछि सवाई छन्दको स्वरूपबारे सिद्धान्तकारले चर्चा गरेका छन् । अनेकौं परिभाषा र प्रयोगहरूलाई साक्षी राखेर उदाहरण दिँदै सवाई बाह्र, तेह्र र चौध अक्षरका बढी हुने कुरा छ। शास्त्रीय छन्द जति कठोर नियम यसमा नहुने कुरा सोदाहरण दिइएको छ र सवाई काव्यका मुख्य-मुख्य विशेषताहरूको उल्लेख छ र आकलन छ–

यसलाई नेपाली लयप्रधान चतुष्पदी छन्दका रूपमा मानिएको छ ।

प्रत्येक पाउ बारदेखि चौध अक्षरका पाउ हुने कुरामा किटान गरिएको छ ।

कहाँ कहाँ लघु र गुरुको खाँचो पर्छ अनि यति वा विश्राम कहाँ हुन्छ, यसबारे किटान गरिएको छ ।

शास्त्रीय छन्दमा जसरी यसमा अजन्त हलन्तलाई कडाइका साथ कायम गरिन्न भन्ने कुरा पनि देखिएको छ ।

वीरभावधारामा रचिने रचनाहरू सवाई छन्दमा पाइएको कुरा पनि देखिन्छ ।

झ्याउरे र सेलोका भेदहरू भएझैं यसका भेदोपभेद नपाइने कुरा पनि देखिन्छ । यी विशेषता देखाएर सवाईको नेपाली काव्यको इतिहासमा प्रयोगको परम्परामाथि विशेष खानतलास गरिएको छ र नेपाली समाजको उदयकालदेखि नै सवाईको

अस्तित्व भएको मानिएको छ । नेपाली कविताको प्राथमिक कालदेखि नै यस छन्दमा रचना गर्ने परिपाटी बसेको र माध्यमिक कालमा अझ फस्टाएको अनि आधुनिक कालमा पनि यसको अवस्था उत्साहप्रद रहेको कुरा पनि सिद्धान्तकारले बडो किटानीका साथ दिएको पाइन्छ ।

नेपाली कविताका विधा उपविधाका सापेक्षतामा सवाईको अध्ययन समेत भएको छ । र, सवाई छन्द नेपालीको मौलिक छन्दका रूपमा मान्दै यस छन्दको आयाम, स्वरूप र संरचनातर्फ विचारविमर्श भएको छ । खासगरी यस छन्दमा फुट्कर रचना अधिक पाइएको र यी फुट्कर रचनाबाहेक खण्डकाव्यको आयामसम्मका रचना यस छन्दमा उपलब्ध भएको कुरा सविस्तार देखाइएको छ । सिद्धान्तको केही बुँदामा निचोड दिने काम गरी कृतिको मूल पक्षलाई समापन गरिएको छ ।

कृतिका अन्तमा परिशिष्टहरू पनि छन् । तिनमा :

क- परिशिष्टमा विसं १९०० देखि २००० सम्म प्रकाशित र उपलब्ध भएसम्मका नेपाली भाषाका सवाई कृतिको विवरण सविस्तार दिइएको छ ।

ख- परिशिष्टमा २००१ सालदेखि २०५६ सालसम्मको अवधिमा अनुसन्धाताले पाएका वा उपलब्ध भएका सवाई काव्यको विवरण दिएका छन् ।

ग- परिशिष्टमा नेपालीमा रचिएका र उल्लेख भएका, तर उपलब्ध नभएका कतिपय कृतिहरूको विवरण देखे- सुने-जानेका व्यक्तिहरूको हवालाका साथ पेश गरिएको छ । अनि कृतिको तयारी गर्दा आवश्यक भएका वा उपयोग गरिएका समग्र कृतिहरूको विवरणात्मक सन्दर्भग्रन्थ सूचीहरूको विवरण छ । यसरी यो कृति समाप्त भएको छ ।

सारमा भन्नुपर्दा नेपाली भाषामा प्रयोगमा आएको सवाई छन्दको सिद्धान्त निरूपण गरी यसको इतिहास, प्रकार, भेद आदिबारे गहिरो अनुसन्धान यस ग्रन्थमा प्रस्तुत गरिएको छ; जुन यस क्षेत्रका अध्येताका लागि एक आधार ग्रन्थ हुने कुरामा अशङ्क हुन सकिन्छ । अस्तु ।

*२०७७ माघ १२ गते*

*भद्रपुर, झापा*

*(लेखक समालोचक, आख्यानकार तथा हास्यव्यङ्ग्यकार हुनुहुन्छ)*



अनु अधिकारी [पोखरेल]

# सम्झनाका दुई शब्द

मेरो प्यारो आदरणीय मामा डा. द्रोण पौडेलको वार्षिक पुण्यतिथिमा सम्झनाका दुई शब्द कोर्ने जमर्को गर्दैछु । मामा आज हामीबीच नभए पनि हजुरले प्रदान गर्नुभएको वात्सल्यताको न्यानो प्राप्त भई नै रहेको छ । मेची क्याम्पस पढ्दा हजुरले पढाउनु हुँदाको क्षण ताजै छ । मेरो पिताको गोलोकधाम प्रस्थान पश्चात् घरको अभिभावक हजुर नै त हुनुहुन्थ्यो । म चन्द्रगढी गएर हजुरसँग भेट्न जान्थे र 'मामा' अब 'मम्मी' हजुरको जिम्मा भन्दथें । अब त्यो कुरा कसलाई भन्नु ?

हजुर पनि अल्पायुमै हामीलाई छोडेर जानुभयो । म चन्द्रगढी आउँदा 'दिदी दिदी, मेरी दिदी कता हो ?' भन्दै तलबाट बोलाउँदै आउने अनि मलाई देख्नासाथ 'अणु', 'परमाणु' भनी जिस्काउने मेरो मामा । ती दिन, समय र हाँसखेल एवम् वात्सल्यताको त्यो क्षण सम्झँदा मन भक्कानिएर आउँछ । मामा हजुर पौडेल परिवारको चम्किलो तारा हुनुहुन्थ्यो, मेरो मम्मीको प्यारो स्नेही भाइ र हाम्रो आदरणीय प्यारो मामा । परिवारका सबैको अभिभावक, समाजको मार्गनिर्देशक, पूर्वाञ्चल क्षेत्रको असल बौद्धिक सन्तति पनि ।

हिजो जसरी यो भौतिक संसारमा रहँदा हजुर सबैको हृदयमा रहनुहुन्थ्यो, त्यसैगरी परमधाममा रहँदा पनि हजुरको त्यस्तै सम्मान रहोस् । मामा हजुरको सम्झनामा हजुरको प्यारी भान्जी अनुको तर्फबाट हार्दिक भावपूर्ण श्रद्धाञ्जलि !

*(लेखक डा. द्रोणकुमार उपाध्यायकी भान्जी हुनुहुन्छ)*



आदित्य भूर्तेल

# मेरो मावलका हजुरबा

म मेरो मावलको हजुरबाको सम्झनामा केही रमाइला पलहरूको स्मृतिलाई बटुल्न चाहन्छु । म उहाँको जेठी छोरीको जेठो छोरो हुँ र उहाँको सबैभन्दा जेठो नाति । मेरो मावलका हजुरबालाई म 'पिता' भन्ने गर्थें । किनकि मेरो मामू, मामा, सानिमा, माइजूहरू सबैले पिता भन्नुहुन्थ्यो । तर, उहाँ चाहिं हामी दाजु-भाइलाई 'तिमीहरू मलाई जिबा भन, यो ठेट नेपाली साइनो हो' भन्नुहुन्थ्यो ।

हाम्रो हजुरबुबा नेपाली साहित्यमा विद्यावारिधि गरिसकेर आफ्नो नामको अगाडि डा. लेख्न सफल विद्वान व्यक्ति हुनुहुन्थ्यो । उहाँ आफ्ना नातिहरू पनि धेरै मेहनती र पढाइमा अब्बल भएको हेर्न चाहनु हुन्थ्यो । पिताले मलाई धेरै माया गर्नुहुन्थ्यो । म सानो हुँदा उहाँले नै पहिलोचोटि मेरो हातमा पैसा राखेको भनेर भन्नु हुन्थ्यो । सानोमा मलाई खुवाउने, बोक्ने, साइकलमा चढाएर घुमाउन लैजाने, खेलाउने, कथाहरू सुनाउने, लेख्न र पढ्न सिकाउने गर्नुहुन्थ्यो । मेहनत गरेर पढ्ने नातिलाई म धेरै मन पराउँछु भन्नु हुन्थ्यो । हामी दुई-चार दिन मावल गएनौं भने मेरा नातिहरूलाई हेरुँ-हेरुँ लाग्यो भनेर भेट्न आउनु हुन्थ्यो । हामी पनि खुशी भएर बुइ चढ्ने, काउकुति लाउने, विभिन्न किसिमको फर्माइस गर्ने गर्दथ्यौं । उहाँ हाम्रो खुशीमा जति पनि खर्च गर्नुहुन्थ्यो ।

पिताले मलाई धेरै ठाउँ घुमाउन लानुभएको छ । उहाँले मलाई आफूले पढाउने क्याम्पस पनि लानुभएको छ । उहाँले मलाई आफू सेवानिवृत्त भएको दिन पनि क्याम्पस लिएर जानुभएको थियो । त्यहाँ धेरैले उहाँलाई माला लगाएर, अबीर दलेर बिदाइ गर्नुभयो, मायाको चिनो दिनुभयो र उहाँको तारिफमा बोल्नुभयो ।

पिताले कति धेरैपटक मलाई स्कूल पुऱ्याइदिनु भएको छ, लिन पनि जानुहुन्थ्यो । स्कूल जाँदा र आउँदा मलाई धेरै कुराहरू सिकाउनु हुन्थ्यो ।

पिताले मलाई धेरैचोटि वैदिक समाजको भवनमा पनि लानुभएको छ ।

वैदिक समाजले वैदिक धर्मको प्रचार गर्थ्यो । उहाँ त्यस समाजको अध्यक्ष पनि हुनुहुन्थ्यो । मैले त्यहाँ हुने यज्ञ होममा सहभागी हुने र सिक्ने मौका पाएँ ।

म नेपाली भाषामा अलिक कमजोर थिएँ । पिताले नै नेपाली भाषा मातृभाषा हो । शुद्ध लेख्न र पढ्न तथा हस्तलिपि पनि राम्रो हुनुपर्छ भनेर सम्झाउनु हुन्थ्यो । भाषाप्रति उहाँको धेरै श्रद्धा थियो । उहाँले नेपाली भाषामा धेरै कथा, कविता र पुस्तकहरू पनि लेख्नुभएको थियो ।

जिबा हजुरको सम्झना आइरहन्छ । हामी पनि हजुरले भन्ने गरेका कुराहरू मानेर अगाडि बढ्ने प्रयास गर्नेछौं । हजुरमा सादर नमन !

*- भद्रपुर- ७*

*(लेखक डा. द्रोणकुमार उपाध्यायका जेठी छोरी तर्फको जेठो नाति हुनुहुन्छ)*



उषा पौडेल निरौला

# मेरो अभिभावक द्रोण दादा

मेरा परम आदरणीय श्रद्धेय अभिभावक, जसले मेरो जीवनको हरेक मोडमा अभिभावकत्व ग्रहण गरी मलाई पाइला चाल्न सिकाउनुभयो र मार्गदर्शन गरी नै रहनुभयो। मेरो लालन-पालन, शिक्षा-दीक्षा र वैवाहिक संस्कार समेतको जिम्मेवारी वहन गरी मलाई आफ्नै खुट्टामा हिंड्न सक्ने बनाइदिनु भयो। म आज उनै मेरा पितातुल्य अभिभावक द्रोण दादालाई स्मरण गर्दैछु।

म उहाँकी कान्छी बहिनी। दिदी र दादा भन्दा म धेरैपछि जन्मिएँ। मेरा पिता-माताकी बुढेसकालकी छोरी हुँ म। त्यसैले पनि होला, मायाकी पोकी पनि थिएँ। मैले पिताजीबाट धेरै माया पाएको देखेर होला, शायद भगवानलाई इर्ष्या लागेछ। त्यसैले मेरो बाल्यवस्था हुँदै पिताजीलाई दैवले हामीबाट चुँडेर लगिदियो। त्यसपछि दादाका संघर्षका दिनहरू शुरु भए। जिम्मेवारीहरू दादाका काँधमा थपिए। दिदीको त पिताजी छँदै विवाह भइसकेको थियो। बाँकी रह्यौं- आमा, दादा र म। मेरो नाम दादाले राखिदिनु भयो। शायद उषाका किरण जस्तै मेरी बहिनीले पनि सबैतिर निर्मल र प्रकाशमय किरण फैलाओस् भनेर होला 'उषा' नाम राखिदिनु भयो। उहाँले काठमाडौंमा राजा महेन्द्रको पालामा कीर्तिपुरमा स्कलरशिपमा एम.ए. गर्नुभएको थियो। त्यसबेला म बच्चै थिएँ। मलाई गुडियाहरू लिएर आउँछु भनेर लेखेका चिठ्ठीहरू भाउजूले घर सफा गर्दा भेट्नुभएको थियो।

जब पिताजीको स्वर्गवास भयो, दादा असमको एउटा स्कूलमा पढाउनु हुन्थ्यो। सानो परिवार, सुखी परिवार थियो। म सानी भएकोले मलाई चुलो पोत्ने, सरसफाई गर्ने कामको जिम्मा दिइएको थियो। दादा भाँडा माझ्ने र आमा खाना पकाउने काम गर्नुहुन्थ्यो। जसरी-तसरी दिनहरू व्यतीत भइरहेका थिए।

यही क्रममा आमाले घर सम्हाल्न बुहारीको आवश्यकता महसूस गर्नु भएछ। त्यसैले हाम्रो गाउँभन्दा पारिका गाउँको एउटा असल ब्राह्मण परिवारकी छोरी

हेर्नु भएछ । पछि नाउमा जन्ती गएर लक्ष्मीको रूपमा भाउजूलाई घरमा भित्र्याउने काम त्यो बेला सम्पन्न भयो । दादाको बिहे भएको २, ३ वर्षमा नै आमाले पनि हामीलाई टुहुरो बनाएर जानुभयो । शायद आमाले छोरा-बुहारीलाई घरपरिवार, सम्पत्ति र सानी छोरी मेरो समेत जिम्मा दिन पर्खिनु भएको थियो ।

त्यसपछि हाम्रो परिवारमा त झन् कठिन दिनहरू आए । दादामाथि नै मेरो रेखदेख र अभिभावकत्वको जिम्मेवारी पनि पूर्ण रूपमा थपियो । दादालाई धेरै तनाव भयो । यसै क्रममा सबै काका-काकी नेपालमै भएकोले, उहाँहरूलाई खोज्दै हामी नेपाल आयौं । नेपालमा आएपछि दादाले मेची कलेजमा पढाउन थाल्नुभयो । साथै, हामी सबै दादासँगै आयौं । दादाका ती संघर्षका दिनहरूमा भाउजूले हातमा हात मिलाएर साथ दिनुभयो र पारिवारिक जीवनको गाडी येनकेन अगाडि बढ्दै गयो ।

मेची कलेजमा दादाले पढाउँदा कक्षाहरूमा पूरै हाँसेको आवाज सुनिन्थ्यो । दादा कुन कक्षामा हुनुहुन्छ, बाहिरबाटै थाहा पाइन्थ्यो । उहाँले ज्यादै रमाइलो गर्दै, हँसाउँदै पढाउनु हुन्थ्यो । भाषा र साहित्यका ज्ञाता हुनुका साथै धेरै भाषा राम्रोसँग बोल्नु हुन्थ्यो । कट्टर पण्डित परिवारको छोरा, घरमा सबै धार्मिक कर्महरू पिताजी स्वयम्बाट हुने भएकोले दादा पनि संस्कृतका पारखी हुनुहुन्थ्यो ।

एवम् रितले समयले डाँडा काट्दै गयो । हेर्दाहेर्दै थाहै नपाई म पनि ठूली भइसकेछु । मेरो बिहेको कुरा चल्यो । उहाँले खोजेकै केटालाई कन्यादान गरेर मेरो विवाह गरिदिनु भयो । मलाई बिदा गर्दा हामी दाजु-बहिनी अंगालो मारेर खुब रोएका थियौं । जुन फोटो आज पनि मैले सम्हालेर राखेको छु । उहाँले डाको छोडेर रुँदै बिदा गर्दाको क्षण आज पनि म झल्झली सम्झिरहन्छु ।

मैले साह्रै माया गर्ने दाजु पाएँ । हामी दुई दाजु-बहिनीको मुटु दुई भए पनि भावनात्मक रूपमा एक थियौं । 'तँलाई केही पर्‍यो भने भन्, म पूरा गर्छु' भन्दै उहाँ मलाई आँट र हौसला दिनुहुन्थ्यो । हामीमा अचम्मको माया थियो । मलाई लाग्थ्यो म नहुँदा उहाँ अपुरो, तर आज म अपुरो भएँ दादा नभएर । मिलनसार, सहयोगी, पाहुनाहरूको साह्रै इज्जत गर्ने, हँसाउने बानी उहाँसँग थियो ।

उहाँलाई मेरो चिन्ता निरन्तर भइरहन्थ्यो, म दुःख पाउँछु कि भनेर । मेरो मात्र होइन, मेरो सन्तानको पनि त्यत्ति नै चिन्ता लिनुहुन्थ्यो । भान्जाको बिहे हेर्ने रहर थियो । उहाँले आफैंले भान्जाको लागि केटीको कुरा गरेर जानु भएछ । जुन केटीको कुरा गरेर जानु भयो, त्यही केटीलाई मैले बुहारी बनाएर भित्र्याउन

लाग्दैछु । शायद उहाँको इच्छा पनि अब पूरा हुने भयो । उहाँको आत्माले पनि शान्ति पाउनेछ ।

मेरो जन्मदिनमा बिहानै दादाको फोन आउँथ्यो । मेरो घरमा मेरो जन्मदिन कसैलाई थाहा हुन्नथ्यो । मेरो जन्मदिनमा आज पनि बिहानै दादाको फोन आउँछ कि भनेर आश लाग्छ । मेरो परिवारका सबै जना फरासिलो स्वभावका छौं । त्यसैले 'जोसँग पनि बोल्नु, तर खाली हात नराख्नु । केही न केही काम गर्दै गफ गर्नु । चाहे स्वीटर बुनाई, कडाई या अन्य कुनै काम होस् गरिरहनु' भन्नु हुन्थ्यो उहाँ मलाई सधैं ।

एउटा आत्मीय स्वभावको मानिस, आफ्ना आत्मीयजनप्रति सधैं प्रेमभाव राख्ने र मान्यजनप्रति आदरभाव राख्ने, समाजका सबै भाइबन्धुहरूप्रति सहयोगको भावना राख्ने, उहाँले प्रयोग गर्ने सम्पूर्ण चिजबिजहरूमा अहिले पनि उहाँको झल्को पाइरहेकी हुन्छु । बिहानै कान्छी भनेर फोन गर्नुहुन्थ्यो । अहिले नै पनि टुप्लुक्क आएर 'उषा' भन्नुहुन्छ कि जस्तो लाग्छ ।

आज मेरो दादा जहाँ भए पनि उहाँको आत्मालाई शान्ति प्राप्त होस् ।

*- सिनामंगल, काठमाडौं*

*(लेखक डा. द्रोणकुमार उपाध्यायकी कान्छी बहिनी हुनुहुन्छ)*



कमलचन्द्र उपाध्याय (सापकोटा)

# हाम्रा द्रोण काका

मेरा पिताका माइला मामाका छोरा हुनाले हामी डा.द्रोणकुमार पौडेललाई माथिको उपशीर्षक अनुसार नै काका भन्ने गर्दथ्यौं। मेरा बुबा सानैदेखि मावलमै बस्ने गर्नुहुन्थ्यो। त्यसैले बाबाको उहाँहरूसित अति नै आत्मीयता थियो। झन् माइला मामा शिङ्गी बसाइँ जाँदा हाम्रा पिता पनि शिङ्गीमै बसाइँ जानुभयो। सन् १९५१ को भारतको राष्ट्रिय नागरिक रजिष्टरमा (N.R.C.) उहाँहरूको नाम शिङ्गीमा छ। त्यसैमा हाम्रो पिताको नाम (सम्बन्धमा भानिज भनेर देखाइएकोछ) पनि उहाँहरूसितै संलग्न छ। यसमा द्रोणकाकाको उमेर ५ वर्ष लेखिएको रहेछ। पछि गएर उदालगुडीमा पनि हाम्रो सँगै बसाइ भयो। उदालगुडीमा अलिक वरपर भए पनि हाम्रा दुई घर एउटै जस्तै थिए। एकै ठाउँमा बस्ने हुनाले ज्येष्ठतामा उहाँ हाम्रा पितापछि हुनुहुन्थ्यो। त्यसैले गर्दा म द्रोण काकाको अभिभावकत्वमा हुर्किएको भन्दा अत्युक्ति नहोला। मलाई टङ्लाको डनबस्को स्कूलको बोर्डिङमा पुऱ्याउने-ल्याउनेदेखि लिएर स्कूल-कलेजको अध्ययनको अथवा रिजल्टको बराबर खबर उहाँले नै गर्नुहुन्थ्यो। मैले म्याट्रिकको परीक्षा पास गरेपछि उहाँले आफै दरङ्ग कलेजमा एड्मिशनका लागि लिएर जानुभएको हिजैजस्तो लाग्छ। आफन्तभन्दा मरिमेट्न खोज्ने द्रोण काकासितको साइनो रगतको मात्र नभएर आत्मीयताको थियो, इमोशनको साइनो थियो। यहाँ छँदा त अर्ती-उपदेश दिनुहुन्थ्यो नै, नेपालतिर सरेपछि पनि बेलाबखतमा आउँदा उहाँका अमूल्य सुझावहरू पाइरहने गरेको थिएँ। टाढा अर्कै देशमा भएर पनि काका हुनुहुन्छ भन्ने एउटा आड मलाई थियो।

मेरो जीवनमा काकाको प्रभाव यो छोटो लेखाइमा टुङ्गिदैन। मैले नेपाली विषय आनुष्ठानिक रूपमा कहीं पनि पढिन। असममा यो विषय पढ्ने त्यो बेला सुविधा पनि थिएन। अहिले पनि कुनै-कुनै स्कूलमा मात्र कक्षा नौ र दशमा पढाइ हुन्छ। पढ्न खोज्नेलाई नेपालीमा 'क पुरी क' नजानी कलेजमा आधुनिक भारतीय भाषा भनी एउटा विषय पढ्न लगाइन्छ। स्नातक तहसम्म काकाले पनि यस्तै

वातावरणमा नेपाली विषयको अध्ययन गर्नुभयो । नेपाली भाषामा जति पनि लेख्न सकेको छु, त्यो काकाकै योगदान हो । किनभने काकाले नेपाली विषय लिएर काठमाण्डौमा पढ्दा, घरमा उहाँका दराजमा भएका जम्मै पुस्तकहरू मैले पनि पढ्ने मौका पाएकोले नै, नेपाली भाषामा अलि-अलि कलम चलाउन सक्ने भएँ म ।

सन् २०१९ को दिसम्बर महिनाको अन्तिम सातामा म र मेरो भाइ रमण 'काका बिरामी हुनुहुन्छ' भन्ने कुराले भेट गर्न नेपाल गयौं । त्यो बेला काकाहरू उपचारका लागि राजस्थान जानुभएको रहेछ । त्यसैले गर्दा बिराटनगरमा हजुरआमा (मेरा पिताकी साइँली माइजू)लाई भेट गर्न गयौं र फर्कंदा काकालाई भेट्न चन्द्रगढी पुग्यौं । दिसम्बरको ३० तारिख राति काकासित भेट भयो । भेट हुनेबित्तिकै काका केही क्षण यतातिरको कुरा सम्भेर भावुक हुनुभयो । काकालाई धेरै दुर्बल देखें । तर, 'राजस्थानको उपचार व्यवस्थाले चैं छिटै निको हुन्छु' भन्ने विश्वास उहाँलाई रहेछ । हामी पनि निकै आश्वस्त भयौं । हुन पनि सानैदेखि काकाले बोलेको सोह्रै आना सत्य हो भन्ने विश्वास राख्ने म त्यस दिन पनि काकाको कुराले ढुक्क भएँ । 'फेरि छिटै नै भेट गर्न आउनेछु' भनेर काकासित बिदा माग्दा 'आउनु त पर्छ, तिमीहरूजस्ता मेरा आफ्ना आफन्तले' भनेर बिदा दिनुभयो । त्यही नै काकासितको अन्तिम भेट रहेछ ।

सन् २०२० को जनवरी महिनाको २९ तारिख । राति साढे नौ बजे एक्कासी फोन बज्यो । हेरेको काउडीपथार कोका दिदीका छोरा भाइ रमेशको रहेछ । शंका लागि-लागि फोन रिसिभ गरें । 'मामा अहिले नौ बजेतिर जानुभयो' भन्ने त्यो फोनको सन्देश थियो । त्यति नै कुरा भए, अरु केही सोध्न मेरो बोली नै आएन । म स्तब्ध भएँ । फोन काटियो । राति काकालाई नै सम्भिरहें, त्यो हँसिलो मुहारले मलाई बारम्बार भस्क्याउन लाग्यो । निन्द्रा लागेन । सम्भें... साना-ठूला सबैसित ख्याल-ठट्टा गर्न रुचाउने हाम्रा काकाको सान्निध्य अब यत्तिकैमा सकियो त ? श्रीमतीसँग धेरैबेर काकाकै कुरा भयो । यसरी नै रात बित्यो । बिहान कोठामा एक्लै बसेर फेसबूकमा काकासितका फोटा हालेर श्रद्धाञ्जलि दिनुपर्‍यो भनेर पोस्ट लेख्दा पो भक्कानो फुटेर आयो । ढोका थुनेर एक्लै रोएँ, मलाई मेरा पिताको देहान्त हुँदा पनि त्यस्तै भएको थियो । मलाई भान भयो- 'मैले अमूल्य रत्नतुल्य मेरो हितैषी आत्मीयजनलाई गुमाएँ ।' यो अभाव मेरो जीवनमा सधैं नै खड्किरहन्छ । काकाको आत्माले शान्ति पाओस्, काकालाई श्रद्धासुमन... ।

*तेजपुर, असम*

*(लेखक डा. द्रोणकुमार उपाध्यायका परिवारको नातेदार हुनुहुन्छ)*



कृष्ण पौडेल

# बटियामारी अञ्चलको पहिलो डक्टरेट 'द्रोणकुमार पौडेल'

द्रोणकुमार पौडेल परिवारको अंश भएकोमा म आफूलाई गौरवशाली ठान्दछु । उहाँ मेरो निम्ति प्रथम आदर्श व्यक्ति हुनुहुन्थ्यो । वैदिक भूमि भारतवर्षको प्राकृतिक सम्पदा र भाषिक तथा सांस्कृतिक विविधताले भरिपूर्ण असम भूमिको ऐतिहासिक स्थल गुप्तकाशी बिश्वनाथको हरिनारायण विद्याभुषण नाट्यक्षेत्र बटियामारीमा जन्म ग्रहण गरी वैदिक शास्त्रहरूमा महिमामण्डित हिमालको सुन्दरताले शोभायमान हाल नेपाल राष्ट्रको चन्द्रगढीको - घाटसम्मको एक स्मरणीय यात्रा ।

असमदेखि बिभिन्न संस्था, संगठनहरूमा प्रत्यक्ष-अप्रत्यक्ष रूपमा संलग्न रहेर साहित्य, शिक्षा एवम् सामाजिक क्षेत्रको अविस्मरणीय अनुभव बटुल्दै नेपालमा पनि सामाजिक मर्यादालाई अटुट राख्न सक्षम हुनुभएको डा. द्रोणकुमार पौडेल एक जना प्रबुद्ध व्यक्ति हुनुहुन्थ्यो । असमको हाल विश्वनाथ जिलान्तर्गत बृहत् एवम् ऐतिहासिक गोर्खाली अञ्चलहरूमध्ये एक बृहत्तर बटियामारी अञ्चलमा पहिलो डक्टरेट डिग्रीधारीको रूपमा समग्र अञ्चललाई नै गौरवान्वित पार्ने द्रोणकुमार पौडेललाई अहिले पनि असमका विभिन्न अञ्चलमा एक जना सुसाहित्यिक, समाजसेवी, सुवक्ताको रूपमा चिन्ने गर्छन् भने परिवारमा उहाँलाई एक हृदयवान व्यक्ति तथा राम्रो मोटिभेटर मान्ने गर्दछन् ।

अ... उहाँ आफ्नो पुर्खाको कर्महरूलाई अति गौरवले याद गर्नुहुन्थ्यो । उहाँको हजुरबुबा पण्डित गंगाधर उपाध्यायले बृहत्तर बटियामारी अञ्चलमा स्वयम् भूमि प्रदान गरी अन्दाजी १९०२ सन्मा श्री सर्वेश्वर देवालय स्थापना गरेर समग्र अञ्चललाई धार्मिक तथा सांस्कृतिक रूपमा एकसूत्रमा बाँध्न गरेको प्रयास अतुल्य छ । सन् अन्दाजी १९२१ मा सांगवेद विद्यालय स्थापना गरी समग्र अञ्चललाई शिक्षाको ज्योतिले ज्योतिर्मान पार्दै समाजलाई शैक्षिक रूपले संस्कारित पार्ने सोचलाई गौरवका साथ याद गर्दै द्रोणकुमार पौडेल (मेरो ठूलोपिता) परिवार तथा

समाजप्रति हाम्रो दायित्वलाई सम्झाउँदै भन्नुहुन्थ्यो- 'समाजको निम्ति पण्डित गंगाधर उपाध्यायको अवदान असीम छ। त्यसैले उहाँ केवल परिवारको मात्र नभएर समग्र समाजकै गौरव बन्न सक्षम हुनुभयो। उहाँले त्यसबेला राखेको त्यो दूरदर्शी सोचको फलस्वरूप सोही देवालय परिसरबाट प्रारम्भ भएको नाट्य संस्कृतिले इतिहास रच्दै बटियामारी (त्यतिबेलाको बेगटी) अञ्चलले सन् अन्दाजी १९१९ मा समग्र भारतवर्षभित्रै पहिलो नेपाली नाटक मञ्चस्थ गर्ने गौरव प्राप्त गर्न सक्षम भयो। त्यसैले हामीले पुर्खाको यस अवदानहरूलाई सम्मान गर्दै सामाजिक हितकार्यमा सदैव अग्रसर रहनु पर्छ।'

असमको नौगाउ जिलान्तर्गत कलियाबरमा ठूलोपितासँग भएका यी उपदेश तथा मार्गदर्शनका कुराहरू आज पनि ताजै छन्। आज पनि जतिबेला सांगवेद विद्यालय प्रांगणस्थित पण्डित गंगाधर उपाध्यायको शालिकको दर्शन गर्छु, मलाई २००१-०२ सन्को त्यो समय सम्झना आउँछ, जतिबेला यस अञ्चलका प्रबुद्ध व्यक्तिहरू साथै जनसाधारणको सहयोगमा र डा. द्रोणकुमार पौडेलको तत्परतामा सांगवेद विद्यालयका संस्थापक पण्डित गंगाधर उपाध्यायको शालिक स्थापनापछि मञ्चमा उहाँको बक्तव्यले धेरैलाई प्रेरित पारेको थियो।

*-विश्वनाथ, असम*

*(लेखक डा. द्रोणकुमार उपाध्यायका भतिजका साथै चर्चित युवा व्यक्तित्व हुनुहुन्छ)*



कृष्णप्रसाद उपाध्याय खनाल

# भावपूर्ण श्रद्धाञ्जलि- डा. द्रोणकुमार उपाध्याय

मानिस जन्मदै मृत्यु पनि लिएर आएको हुन्छ । जन्म-मृत्यु चिरन्तन सत्य हो । मानव जाति चेतनशील, विवेकशील खोजकर्ता प्राणी हो । अझ साँच्चै भन्नुपर्दा, पूर्णरूपले 'सामाजिक प्राणी' हो, भन्न सकिन्छ । त्यसै समाजमा विभिन्न प्रकारका धर्म-संस्कृतिको माध्यमबाट पनि मानिसको पहिचान हुन्छ । मानवका अनगिन्ती सामाजिक संरचनाहरू आवश्यकता अनुरूप निर्माण भएका हुन्छन् । मानव समाज अन्तर्गत नै केही सामाजिक मूल्य मान्यता, रीति/नीति नियम विभिन्न समाजमा आ-आफ्नो धार्मिक आधारमा बनेका हुन्छन् । हामी पनि त्यस्तै नियम नीतिमा बाँधिएका छौं । मृत्यु पछाडि दाहसंस्कार र काजक्रिया गर्ने हाम्रो सामाजिक संस्कार छ । छरछिमेक, नातागोता, इष्टमित्र, बन्धुबान्धवहरू यस्तो दुःखको घडीमा आउने, सरसहयोग गर्ने र दुःखमा सहभागी हुँदै शोकाकुल परिवारजनलाई सान्त्वना दिने सभ्यताको शुरुवातदेखि नै चलिआएको चलन अथवा संस्कार हो । हुन त यसको विकल्प पनि के छ र ?

गत २०७६ साल माघ महिनाको १५ गते डा.द्रोणकुमार उपाध्याय पौडेलज्यूको देह अवशान भयो । हामीले ठूलो अपूरणीय क्षति व्यहोर्नु पर्‍यो । हाम्रा लागि यो अति दुःखद हो । हामी दुःखमा भावविभोर भयौं । विधिको विधान, कसको के लाग्छ र ? उहाँ मेरो नातामा बहिनी-ज्वाइँ हुनुहुन्थ्यो । त्यति मात्रै होइन, मैले उहाँलाई एक असल मित्र, अभिभावक, सल्लाहकार र अनन्य सहयोगीका रूपमा पाएको थिएँ । साँच्चै भन्नुपर्दा, अनन्त खनाल परिवार (अनन्त परिवार भन्नाले पण्डित अनन्तनारायण उपाध्याय खनालका छोरा नाति पनाति अथवा सन्तति) र गंगाधर पौडेल परिवार हरेक क्षेत्रका मार्गदर्शक हुनुहुन्थ्यो । २०३४ सालदेखि हाम्री बहिनी मीरादेवीसित विवाह बन्धनमा बाँधिएपश्चात् उहाँ हाम्रो अनन्त परिवारको सदस्य बन्नुभयो । सम्बन्ध त्यतिमै मात्र सीमित रहेन; उहाँको

स्वभाव, ज्ञान, विवेक मिलनसारपनले गर्दा अनन्त परिवार र पौडेल परिवारमा आइपर्ने सामाजिक, धार्मिक कार्यका साथै विभिन्न समस्यामा पनि सहयोग र सल्लाहकारको भूमिकामा उहाँको बडो सरल र निदानमूलक उपस्थिति रहने गर्दथ्यो । उहाँको अनुपस्थिति हामीलाई अपूर्ण महसूस हुन्थ्यो ।

मानिसको रूप, रङ्ग, शारीरिक गठन, मन, मस्तिष्कमा भिन्नता छ होला । सोही अनुसार स्वभाव, बानी, व्यवहार, चाहना, रुचि र आकांक्षा पनि व्यक्तिविशेषका भिन्न-भिन्न प्रकारका हुन्छन् । सोही अनुरूप डा.द्रोणकुमार उपाध्याय पौडेलज्यू पनि विद्यार्थीकालदेखि नै भाषा-साहित्य, लोकसंस्कृति र नेपाली परम्पराप्रति धेरै अनुरागी हुनुहुन्थ्यो । त्यसैले होला, गुवाहाटी विश्वविद्यालय अन्तर्गत दरङ्ग कलेज-तेजपुर (असम)बाट बी.ए.उत्तीर्ण गरेपछि नेपालीमा एम्.ए.गर्ने इच्छाले असमबाट नेपाल आएर त्रिभुवन विश्वविद्यालयबाट नेपाली भाषा साहित्यमा दोस्रो स्थानमा एम.ए. पास गर्नुभयो ।

डा.द्रोणकुमार उपाध्याय पौडेल एउटा यस्तो व्यक्ति हुनुहुन्थ्यो- जो विद्वान्, प्राज्ञिक, दार्शनिकदेखि साधारण खेतीकिसानी गर्नेसम्म र धार्मिक पण्डितजीदेखि नास्तिक पश्चिमी जीवनशैलीमा रमाउने व्यक्तिसम्म उनीहरूकै शैलीमा बातचित गर्न, हिंड्डुल गर्न अथवा उनीहरूकै तौरतरिकामा मिल्न सक्ने व्यावहारिक खुबी थियो । नबोली नसक्ने, हालखबर नसोधी नसक्ने अथवा भेटघाट भलाकुसारी गर्न आउने-जाने आत्मीयताको नाता बढाउने उहाँको मुख्य स्वभाव थियो । शुद्ध शाकाहारी भोजनका प्रिय हुनुहुन्थ्यो । उहाँ भाषा विधाका साथै बहुभाषी हुनुहुन्थ्यो । नेपाली, संस्कृत, असमिया, हिन्दी, बंगाली, अङ्ग्रेजी र राजवंशी भाषाको उहाँमा राम्रो ज्ञान थियो । यी सबै-सबै भाषामा साहित्यिक दखल पनि थियो । साथै, विभिन्न भाषामा किताबदेखि फुट्कर लेख पनि प्रकाशित भएका छन् उहाँका । उहाँलाई उत्तर बंगाल विश्वविद्यालय पश्चिम बंगालका अरु केही विश्वविद्यालयका साथै डुवर्स क्षेत्रका विभिन्न भाषा साहित्यका भेला सम्मेलनमा ठूलो आदर साथ निमन्त्रणा हुन्थ्यो । यति धेरै विभिन्न भाषा साहित्यको क्षेत्रमा ज्ञानको भण्डार भए तापनि चहकपनको कमी या त राजनैतिक संलग्नताको कमीले नेपाली साहित्यको ठूलो पर्दामा आक्कलझुक्कल मात्रै देखिनु हुन्थ्यो, भनिन्छ ।

अन्त्यमा, महामना उहाँमा भावपूर्ण श्रद्धाञ्जलि... ।

*काँकरभिट्टा, झापा*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका जेठान हुनुहुन्छ)*



किशोर पौडेल

# दाजुप्रति श्रद्धाञ्जलि

साल २००६ असार ५ गते, आइतबारका दिनमा शोणितपुरको बटियामारी भन्ने ठाउँमा पिता टीकाराम उपाध्यायको ज्येष्ठ पुत्रका रूपमा मेरा दाजु द्रोणकुमार उपाध्याय पौडेलको जन्म भएको थियो । दाजु सानै उमेरदेखि अति चतुर स्वभावको हुनुहुन्थ्यो । दाजुले घर छेउको प्रा.वि. स्कूलमा कक्षा- १ देखि ३ सम्म र बेगटी नि.मा.वि.मा कक्षा- ४ देखि ६ सम्म अध्ययन गरी पिताजीसँग मारासिंकारी गाउँमा केही वर्ष बसेर फेरि उदालगुडी आउनुभयो । पिताजी उदालगुडी सांगवेद संस्कृत विद्यालयमा पढाउन थाल्नुभयो र दाजुलाई उदालगुडी हाइस्कूलमा कक्षा- ७ मा नाम लेखिदिनु भयो । दाजुले त्यहींबाट एस.एल.सी.पास गरेर सन् १९६७ मा दरङ्ग कलेजमा नाम लेखी आई.ए. पढ्न आरम्भ गर्नुभयो ।

सन् १९७० मा बी.ए. पास गरी एम.ए. अध्ययन गर्नका लागि नेपाल आउनुभएर काठमाडौंको त्रिभुवन विश्वविद्यालयमा १९७१ देखि पढाइ शुरु गरी सन् १९७३ मा एम.ए. पास गरेपछि दाजु फेरि असम फर्किनुभयो र आफैंले पढेको उदालगुडी हाइस्कूलमा सन् १९७४ मा शिक्षक हुनुभयो । म त्यतिबेला त्यही स्कूलमा कक्षा- ८ मा थिएँ । म सानो उमेरदेखि दाजुसँग बसेकोले गर्दा मलाई दाजुले अति माया गर्नु हुन्थ्यो । दाजु र म सधैं एकैसाथ स्कूल जाने-आउने गर्थ्यौं । कहीं जानुपरेमा पनि दाजु-भाइ सँगै जाने गरेका थियौं ।

यस बीचमा पिताजीलाई पनि ठूलो रोग देखा पऱ्यो । त्यतिबेलै दिदीको विवाहको पनि निर्णय भयो भने पिताजीलाई भेलोर लानुपर्ने भयो र भानिजदाजुको छोरा कमलको साथ लगाई पिताजीलाई भेलोर लगियो । यता दिदीको विवाह पनि असार महिनामा टुंगो लाग्यो, उता भेलोरबाट पिताजी सिकिस्त भएको भतिजा कमलले खबर गरेपछि दाजु भोलिपल्ट नै भेलोरतर्फ जानु पर्नाले घरमा दिदीको विवाहको सबै काम भानिज दाजु र मामालाई जिम्मा दिएर भेलोर जानुभयो ।

गएको एक महिनापछि पिताजीलाई उपचार सम्भव नभएर घरमै हामी सेवा गर्न बाध्य भएर दाजु र म एक-एक दिन पालो गरी स्कूल जाने क्रम शुरु भयो ।

केही दिनपछि गमिरीबाट दिदी-भिनाजु पनि आउनुभयो । त्यसपछि पिताजी र दाजु पनि दिदीको विवाहमा सामेल नभएका कारण गोडा धुने कार्यक्रम भयो । केही दिनपछि नै दशैं शुरु भयो र दशमीका दिन हामी सबैले पिताजीका हातबाट टीका ग्रहण गऱ्यौं । पछि, पिताजीलाई बिमारले धेरै साह्रो पार्न थाल्दा द्वादशीका दिन सन् १९७५ मा बेलुका ५ बजे पिताजीको देहान्त भयो र राति ७ बजे नै दाहसंस्कार भयो । भोलिपल्टबाट दशकर्म कार्य शुरु भयो । घरमा हामी आमा, दाजु, म र बहिनी उषा भयौं ।

त्यसपछि २०३५ सालमा दाजुको विवाह सोलङ्ग निवासी गणेश खनालकी जेष्ठ सुपुत्री मीरादेवीसँग भयो । २०३६ सालमा एक पुत्रको जन्म भयो र दाजु असमबाट २०३८ सालमा नेपाल आउनुभयो । मेची क्याम्पसमा नेपाली विभागमा पढाउन शुरु गर्नुभयो र त्यसको एक वर्षपछि असम पुगेर हामीलाई पनि अब हामी सबै नेपाल जानुपर्छ भन्नुभयो । असममा आन्दोलन भइरहेको त्यसबेला पनि हामीले ट्रक खोजी राति १२ बजे असमबाट नेपालका लागि हाम्रो यात्रा शुरु भयो । नेपाल आएको केही वर्षपछि बहिनी उषाको पनि विवाह भयो । मेरो पनि विवाह दाजुले नै गरिदिनु भयो र हाम्रो आफ्नो-आफ्नो व्यवहार शुरु भयो ।

केही समयपछि दाजुले हजरबुबाको शालिक हाम्रो जन्मथलो असमको शोणितपुर जिल्लाको बटियामारी भन्ने ठाउँमा राख्ने विचार गरेर दिल्ली जानुभयो । शालिकको निर्माण गर्न लगाएर सन् २००२ मा बटियामारीमा नेपालबाट गंगाधर पौडेलका सन्तानहरू गएर तीन दिनको कार्यक्रम गरी हजुरबुबाको शालिक स्थापना गर्नुभयो । २०७६ साल मंसीर महिनामा दाजु अलिक बिरामी हुनुहुँदा डाक्टरकहाँ गएर देखाउँदा निको नहुने रोग लागेको रहेछ । घरमा होमियोपेथिक र आयुर्वेद औषधि खान शुरु भयो, तर दैवको अगाडि हाम्रो केही लागेन र २०७६ साल माघ १५ गते राति ९ः३० बजे दाजुको निधन भयो ।

मलाई अहिले पनि दाजु घरमै हुनुहुन्छ जस्तो लाग्छ । आज एक वर्ष बित्दा पनि दाजु आउनुहुन्छ कि भन्ने आश लागिरहन्छ । आदरणीय दाजुका बारेमा छोटकरीमा यति मात्र लेखी यिनै शब्दहरू मार्फत दाजुप्रति भावपूर्ण श्रद्धाञ्जलि अर्पण गरें ।

*(लेखक डा.द्रोणकुमार उपाध्यायको भाइ हुनुहुन्छ)*



चन्द्धन पौडेल

# दाजुप्रति श्रद्धाञ्जलि

बिर्सनै नसकिने धेरै कुराहरू रहे । के थाहा थियो र यति छिटै यो वियोग हुनेछ भनेर । प्रातःस्मरणीय दादाले यस समाजमा दिनुभएको योगदान सर्वविदितै छ । विशिष्ट व्यक्तित्व रहनुभएका उहाँले साहित्य, इतिहास, सामाजिक कुसंस्कार, लोकसंस्कृति, समालोचना आदि धेरै राष्ट्रिय-अन्तर्राष्ट्रिय बिधामा योगदान दिनुभएको छ । सधैं सबैलाई राम्रो काममा प्रेरित गरिरहने उहाँको स्वभाव रहेको थियो । टेगोरका कविता अनुवाद गर्न सन् १९८० तिर मलाई प्रेरित गर्नुभएको अझै सम्झना छ । तर मबाट पार लाग्ने कुरै थिएन । धेरै पछि थाहा भयो, उहाँको कविता संग्रह प्रकाशित गर्ने कोशिश जारी नै थियो । अहिले झनै सान्दर्भिक रहेको उहाँलाई मन पर्ने टेगोरको कविता समर्पण गरें –

"आमारो परान जाहा चाई..
तुमि ताई ... तुमि ताई गो ..."

"तिम्रै कारण जगतमा आएँ
हरपल हृदयमा तिमीलाई चाहें ।
तिमी सिवा कहीं कोही रहेन
रही रही तिम्रै गीत यो गाएँ ।
सुख खोजी जहाँ जहाँ जाउ
कदापि नपरोस् भुमरीमा नाउ ।
सम्हालेर हृदयमा तिमीलाई राखें
पाइला-पाइलामा इच्छित पाउ ।
पल-पल यहाँ युग समान छ
विरहमा मुटु डुबिरहन्छ ।
गहभरि आँसु, कसरी हासौं
बढ्दो धडकन प्रष्ट सुनिन्छ ।
हृदय कसैसँग साटिसकेउ भने
फेरि नफर्कने निश्चय हो भने ।
तिम्रै बनुन् अब खुशी जति जम्मै
म त अब लागें, दुःख समेटने ।"

*- भक्तपुर*

*(लेखक डा.द्रोणकुमार उपाध्यायको भाइ हुनुहुन्छ)*



चम्पा बास्कोटा

# स्मृतिका पानामा द्रोण दाजु

लेखनमा मेरो अभ्यास छैन । तर, कहिलेकाहीं जीवनमा यस्तो अवस्था आउँदो रहेछ, जसका लागि लेखन कार्य आवश्यक भइदिंदो रहेछ । हृदयदेखि नै केही पोखुँ-पोखुँ लाग्दो रहेछ । आज म त्यही बिन्दुमा उभिइरहेकी छु । मैले केही न केही लेख्नु नै छ । तर, त्यो लेखन कहाँबाट कसरी शुरु गरूँ, यही द्विविधामा म अलमलिएकी छु, रुमलिएकी छु ।

द्रोण दाजुलाई मैले जाने चिनेदेखि नै ज्यादै निकटस्थ पाएँ । उहाँले सदैव आफ्नो सहोदर बहिनी सरह व्यवहार गरिरहनु भयो जीवनभर । अनि मैले पनि आफ्नै दाजुभाइ सरहको दूरीमा उहाँलाई राखें । दैवको लीला अचम्मको छ, जसले यस लोकमा धेरै समय बाँच्नु पर्ने हो; ऊ बाँच्नै पाउँदैन ! त्यस्तो सहृदयी मान्छे दैवको पनि प्यारो हुँदो रहेछ ।

द्रोण दाजुकी बहिनी (सानिमाकी छोरी) मेरी स्कूलकी साथी थिइन् । उनीबाट मैले दाजुका बारेमा धेरै कुरा सुनेकी थिएँ । तर, प्रत्यक्ष भेट्ने मौका परेको थिएन । मलाई सम्झना छ, २०३८ सालमा चन्द्रगढीमा मैले उहाँलाई देख्ने र भेट्ने अवसर पाएँ । मेरी माइजू नवकुमारी खनालले असमबाट नेपाल आएपछि उहाँलाई हाम्रो डेरामा लिएर आउनुभएको थियो । शायद उहाँ मेची क्याम्पसमा जागिर खाने सिलसिलामा आउँदा यो अवसर परेको थियो । माइजूले उहाँसँग मेरो परिचय गराइदिनु भयो । मैले जुम्ल्याहा हात जोडेर अभिवादन गरें र बस्नलाई आग्रह गरें । कुराकानी हुँदै जाँदा मैले भनें- मेरो साथीको दाजु मात्र होइन, आजदेखि तपाईं मेरो पनि दाजु हो । दाजुले मुसुक्क हाँसेर भन्नुभयो- 'मैले पनि मेरी बहिनी भेटें' ।

दाजु पनि हाम्रै छेउमा डेरा लिएर बस्न थाल्नुभयो । त्यसपछि हाम्रो चिनजान झन् प्रगाढ बन्दै गयो । मैले उहाँलाई जबदेखि जान्न पाएँ, त्यही बेलादेखि नै अभिभावकको रूपमा पाएँ । मेरो नजरमा उहाँ सरल, सहृदयी र सहयोगी

हुनुहुन्थ्यो । नजान्नेलाई सिकाउने, बाटो नदेखेकालाई बाटो देखाउने हुन्थ्यो उहाँ । मेरा श्रीमान् रामनाथ बास्कोटा र द्रोण दाजुको मित्रता घनिष्ट हुन पुग्यो । ज्वाइँ-जेठानको सम्बन्ध भन्दा पनि साथी-साथीको व्यवहार उहाँहरूमा थियो । यतिसम्म कि क्याम्पस जाँदा-आउँदा होस् वा अन्य कतै जानुपरे पनि उहाँहरूको साथ छुट्दैनथ्यो । पछि पनि दुई घरबीच आवतजावत बाक्लै रह्यो । घरमा आउँदा सत्कारस्वरूप दिइएको जस्तोसुकै खानेकुरालाई पनि साह्रै मीठो मानी-मानी खाने बानी थियो । मलाई ज्यादै माया गर्नुहुन्थ्यो । दाजुबाट पाउने जुन स्नेह हुन्छ, त्यो मैले उहाँबाट पाएकी थिएँ । बारीमा फलेका फलफूल र सागसब्जी लिएर आउने अनि बसेर रमाइला गफ गर्ने दाजु ज्वाइँलाई ठट्टा गर्दै भन्नुहुन्थ्यो- 'हाम्री यस्ती कहिल्यै नरिसाउने बहिनी तपाईंलाई दिएका छौं, तपाईं त भाग्यमानी हुनुहुन्छ ।' ज्वाइँ हाँसेर त्यो कुरा स्वीकार गर्नुहुन्थ्यो ।

२०४४ सालमा ज्वाइँको खुट्टा भाँचियो । मेची अस्पताल लगियो । त्यहाँ जँचाएपछि धरान हस्पिटल रिफर गऱ्यो । बेलुकाको चार बजिसकेको थियो । म असमञ्जस परिरहेको बेला दाजुकै साथ पाएर धरान लगियो । चौध दिनको धरान बसाइमा दाजु चार पटक धरान पुगी दुःखमा साथ दिनुभयो । उहाँको त्यो सहयोग म कसरी भुल्न सकुँला र ! बेला-बेलामा घरमा आइरहने, अप्ठ्यारो, असजिलो सोधिरहने; उहाँको निकै आडभरोसा मलाई थियो ।

२०७६ साल भदौमा म बाहिर जानु पर्ने भयो । म हिंड्ने अघिल्लो दिन उहाँ आउनुभयो र भन्नुभयो- 'बहिनी ! म भोलि भाउजूको उपचारका लागि बिराटनगर जाँदैछु । त्यसैले भोलि बिदा गर्न आउन नसक्ने भएकाले आजै आएँ है, राम्ररी जानु, पुगेर फोन गर्नु' भन्दै बिदा हुनुभएको थियो । त्यसपछि पनि बीचबीचमा हाम्रो फोनमा कुराकानी भइरहन्थ्यो । सञ्च-विसञ्चको हालखबर आदानप्रदान भइरहन्थ्यो । मङ्सिर महिनामा मैले अमेरिकाबाटै दाजुलाई फोन गरेकी थिएँ । दाजुले भन्नुभयो- 'बहिनी ! म अलिक बिरामी थिएँ । अस्ति पाथीभरा हस्पिटल गएँ । एक हप्ताको औषधि दिएको छ, त्यो औषधिले धेरै राम्रो गर्दैछ । रिपोर्ट चाहिं आज आउँछ । अहिले त पाथीभरामा राम्रो डाक्टर र नयाँ मेसिन रहेछ । राम्रो चेक भयो ।' यो कुरा सुनेर मलाई खुशी लागेको थियो ।

त्यतिबेला दाजुलाई साधारण बिराम रहेछ, अब निको हुन्छ भनेर म आश्वस्त भएकी थिएँ । तर, पन्ध्र दिनपछि सुनें- दाजु त निकै बिरामी हुनुहुन्छ भनेर । मन मानेन, विचलित भएँ अनि दाजुलाई फेरि फोन गरें । तर, सम्पर्क हुनै सकेन । धेरै

चिन्ता लाग्यो । फट्ट आउन नसकिने टाढाको कुरा ।

शायद उहाँ हिंडडुल गर्न सक्दाकै अवस्थामा होला, हाम्रो घरमा आउनु भएछ र त्यहाँ बस्ने भाइ-बहिनीलाई भन्नुभयो रे... 'घरका मान्छे छैनन् । राम्ररी बस्नु, घरको राम्रो हेरचाह गर्नु ।' त्यसपछि घरको चारैतर्फ घुमेर हेरेर 'बहिनी कहिले आउँछिन् ?' भनेर सोध्नु भएछ । त्यो सुनेर म भावविह्वल बनेकी थिएँ ।

मेरो नेपाल आउने तय भइसकेको थियो । त्यसैले पनि होला, मलाई कहिले चन्द्रगढी पुगेर दाजुलाई 'दाजु' भनेर बोलाउनु जस्तो भयो । तर, विधिको विडम्बना... आफूले भनेको र सोचेको जस्तो नहुँदो रहेछ । हिंड्ने दुई दिन अघि परिवारलाई बज्रपात पारी हामीलाई छाडी परमधाम जानुभएको समाचारले म स्तब्ध बनें । 'मेरो दाजु !' भनेर बोलाउने मेरो धोको अधुरै रह्यो । दाजु... तपाईं जहाँ भएपनि तपाईंको आत्माले शान्ति पाओस्- यही कामना गर्दछु ।

*- मैत्रीटोल, भद्रपुर-१०*

*(लेखक डा.द्रोणकुमार उपाध्यायको बहिनी हुनुहुन्छ)*



# प्यारा भानिज डा. द्रोणकुमारको स्मृतिमा

तारापति उपाध्याय

गतिशील र वैचित्र्यले परिपूर्ण मानिसको जीवनले कहिले सुख र आनन्द दिन्छ भने कहिले दुःख र वेदना पनि दिन्छ। जगत पनि छ परिवर्तनशील। कहिले यसमा अचानक व्यापक परिवर्तन हुन जान्छ र स्वाभाविक रूपले मानिस जातिको सामाजिक जीवनमा ठूलो चोट पर्छ। जीवन-शैली खलबलिन्छ, विशृङ्खलित पार्छ - 'कोरोना' व्याधिले झैं। आत्मीय स्वजन, छर-छिमेक, मित्र, दौंतरी सबैका सबै त्यस्तो हुँदा नजर औ सशरीर सम्पर्क बञ्चित हुन जान्छ। जीवनरसका अभावले छाती चिरिन्छ, हृदय पिरिन्छ, आगो लाग्छ। जीवनको गतिशीलता हराउँछ, ठप्प हुन्छ। चौतर्फ नैराश्य छाउँछ, मानिस हताश हुन्छ।

त्रिभुवन विश्वविद्यालय अन्तर्गत भद्रपुरको मेची बहुमुखी क्याम्पसको नेपाली शिक्षण विभाग, अध्यापक कर्म गर्ने अवसर ग्रहण गरेपछि नै जाँगर साथ अनुसन्धानमूलक भाषा-साहित्यका उत्कर्ष साधनामा एकान्त मनले लागिरहेका (सन् २००८ मा तीन ग्रन्थ 'भाषिक चिन्तन', 'लोकवार्ता : लोककै निम्ति', 'केही साधक : केही साधना' अनि २०१७ मा प्रज्ञा प्रतिष्ठान, काठमाडौंद्वारा प्रकाशित 'लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ') हँसमुखे भान्जा डा. द्रोणकुमार पौडेल हठात् कर्कट रोग जस्तो दुरारोगग्रस्त हुनगए छन्। यो कुरा हामीलाई थाहा भएन। तिनी हताश भएछन्। त्यसैले सम्भवतः त्यस कालमा उदालगुडीबाट प्रकाशित हुने मेरो अभिनन्दन ग्रन्थमा तिनले प्रेरित लेखमा जन्म दिने 'आमापछिकै मामा - मेरा मामा' भन्ने हृदयस्पर्शी मार्मिक शब्दहरू बारबार प्रयोग गरेका छन्। पढ्दै जाँदा नेत्र रसाएर आउँछन्, आँसु टप्कन थाल्छन्।

मानिस कहाँ जन्मन्छ र कहाँ पुगेर मृत्युका कराल ग्रासमा पर्दछ - कसैले जान्दैन। मलाई सारै प्यारो गर्ने हाम्रा छ वटी दिदीमाकी कान्छी हुन्, स्व. भेजमायादेवी। मभन्दा पुगनपुग दुई वर्ष जेठी। नौ-दश वर्षे किशोरी उमेरमै, त्यस युगको सामाजिक चलनअनुसार (बटियामारी निवासी टीकाराम उपाध्याय

शास्त्री नामक विद्वान् (समाज संस्कारक) प्रिय युवासँग बीसौं शताब्दीका पूर्वाद्ध भागमै दिदीको विवाह भएको थियो । पशुपालक नेपाली जाति शिक्षामा सारै पछि परेको थियो । नेपाली गाउँहरूमा संस्कृत विद्यालय खोल्ने, राष्ट्रभाषा हिन्दी, वर्धाका परीक्षा केन्द्रहरू खोल्ने, साथै प्रौढ शिक्षा सञ्चालन गर्ने, दान दिने कर्ममा मित्रहरूसित सधैं व्यस्त रहनु हुन्थ्यो । यस्तैमा, १९जुन १९४९ का शुभ दिनमा बटियामारी गाउँका निज घरमा मातृ गर्भबाट बालक द्रोणकुमार भूमिष्ठ भएका थिए । यसै बीचमा राजा राममोहन रायका नेतृत्वमा भारतव्यापी चालु ' बिधवा विवाह' आन्दोलनको सहयोगी हुँदै (विश्वनाथ, पानपुर, शिङरी गोरुडुबा आदि भ्रमण गरिआएर) सन् १९५४ तिर शास्त्रमा वर्णित 'महाप्रलय'का लागि विश्वशान्तिका निम्ति उदालगुडीमा अनुष्ठित महायज्ञमा सामेल हुँदै त्यहाँ चालु सांगवेद संस्कृत विद्यालय साथै राष्ट्रभाषा हिन्दी, वर्धा परीक्षा केन्द्रको पनि सचिव पदमा नियुक्त भई उदालगुडीमै रहन थाल्नुभयो- भिनाजु टीकाराम शास्त्री । पछि १९६२ देखि उदालगुडीमा खोलिएको एक मात्र हाइस्कूलका हिन्दी शिक्षकको कार्यभार सम्हाल्दै गएर बटियामारीबाट छोरा द्रोण र काखकी कन्या कोका र धर्मपत्नी मेरी कान्छी दिदी भेजमायादेवीलाई लिइआएर सपरिवार उदालगुडीमा रहन थाल्नुभयो । तेजपुर, गोरुडुबातिरै दाजु-भाइ र माता छाडिआएर शिक्षक पदमा नियुक्त हुँदै तुरा शहरकी कन्या विवाह गरी उदालगुडीमै स्थायी रूपमा रहन लागेपछि मैले पनि आड-अडेसो पाएँ, ढुक्क परें । सन् १९७४ का अन्तमा उदालगुडीमा अनुष्ठित अ.भा.ने.भाषा समितिको अधिवेशनका स्वागतकारिणी समितिको मूल सचिव म थिएँ भने भिनाजुले 'धन भण्डार'को पदभार सम्हाल्नु भएको थियो ।

बटियामारी गाउँ समीपको माध्यमिक स्कूलीय शिक्षा छिचोलिसकेका पढालु शिशु द्रोणकुमारलाई लगेर पितृ-मातृले स्थानीय हाइस्कूलमा अनि कन्या कोकालाई प्राइमरी स्कूलमा भर्ती गरिदिए । त्यसै स्कूलबाट द्रोणले सन् १९७६ तिर प्रवेशिकापछि तेजपुर दरङ् कलेजबाट बी.ए. अनि पछि त्रिभुवन विश्वविद्यालयबाट स्नातकोत्तर उपाधि प्राप्त गरेका थिए । पछि उत्तर बङ्ग विश्वविद्यालयबाट डक्टरेट डिग्री पनि हासिल गरे तिनले । शरीरको छायाँ झैं दुर्योग, विपद, सङ्कटक सुयोग हेरी पछि-पछि लम्किरहेको हुन्छ । 'कहिले, कसरी, कुन अवस्थामा कसलाई झम्टन्छ' भन्न कसैले सक्तैन । सन् १९७५ कै प्रारम्भबाट क्रमशः द्रोणका पिताजीलाई रोगले चाप्न थाल्यो । डरलाग्दो रोग रहेछ । उपचारका निम्ति भान्जाले भेल्लोर पुऱ्

याए । अघिबाटै कन्या, कोकाको विवाहको दिन निर्धारित थियो । कन्या-दान दिने फिट्फिटीले पिताजीलाई पिरोलेकोले तीन दिन अघि मात्र भेल्लोरबाट घर ल्याए । घरमा माता भेजमाया आत्तिइरहेकै थिइन् । बिरामीको अवस्था कहालीलाग्दो छँदा बिछ्यौनाबाटै पितृ-मातृले कन्या-दान दिने व्यवस्था भयो । यज्ञस्थलमा चाहिं 'मामा-माइजूले दिंदा हुन्छ' भन्दा हामी दुईले पनि कन्या-दान दिने कर्म गरेका थियौं ।

सन् १९७६ को विजयादशमीको दिन ज्वाइँलाई साथमा लिएर भान्जी कोका टीका थाप्न हाम्रा घर आइन् । सानन्द टीका लगाइदिएर, दक्षिणा अर्पण गर्नासाथ भान्जीले उठेर 'मामा-माइजूलाई' भन्दै कुर्ता-कमीज र साडी हाम्रा हातमा राखिदिइन् । छक्क पर्दै मैले प्रश्न गरें- 'यो किन ?' भान्जी कोकाका नेत्र रसाएर आए । उत्तर दिइन्- 'मलाई तपाईंहरूले कन्यादान दिएको ।' हामी बोल्न सकेनौं ।

सन् १९७६ का प्रारम्भबाटै द्रोणकुमार उदालगुडी हाइस्कूलका शिक्षक पदमा नियुक्त हुँदै निष्ठासाथ शिक्षा दिने कार्यमा लागे । मिष्ठभाषी, जाँगरिलो, मिलनसार व्यक्ति हुनाले केही दिन नबित्तै तिनी छात्र-छात्रा तथा शिक्षक बन्धुहरूका प्रियपात्र हुन गए । त्यस कालमा असम राज्यमा भाषा आन्दोलन संग्रालियो । उदालगुडीमा बोडो भाषा आन्दोलन पनि चालु भएको थियो । 'उदालगुडी साहित्य सभा'को सक्रिय सदस्य बनी सभा पत्रिका सम्पादकको कार्यभार सम्हालेका थिए भाषा-साहित्यानुरागी द्रोणले । सन् १९७७ तिर प्रकाशित पत्रिकामा तिनले 'महाकवि भानुभक्त' शीर्षकमा असमिया भाषामा एक मनोग्राही लेख लेखेका छन् । म थिए उसै साहित्य सभाको कार्यकारी सभापति ।

सन् १९७८ तिर मातृ भेजमायाका पुत्र द्रोणकुमारको विवाह सोलङ निवासी शिक्षक, समाजसेवी गणेशचन्द्र उपाध्याय खनाल (वर्तमान परलोकी) की जेठी कन्या मीरादेवीसित हुन गयो । दुबै मिली गृहस्थी जीवन सुचारु रूपले परिचालित गर्न थाले । सन्तान जन्मन लागे ।

विपदले छाडेन, पुनः झम्टियो भान्जाको घरपरिवारलाई । बीच-बीचमा सर्दी, खोकी र श्वास-प्रश्वासका बिमारले चापिरहने मातृ भेजमाया हाम्री प्यारी कान्छी दिदी, अचानक स्वर्गीय भइन् । अब पितृ-मातृहीन भान्जा द्रोण, टुहुरा हुन गए । चिन्ता बढ्यो । त्यस कालमा स्कूलबाट मासिक बेतन प्राप्त हुन्थ्यो मात्र रु. ४५।- । घरगृहस्थी चालुराख्ने कसरी ?

बीसौं शताब्दीका अस्सीको दशक प्रारम्भ भएको मात्र थियो, शायद ।

नेपालको मेची बहुमुखी क्याम्पस, भद्रपुरमा प्राध्यापकको पद खाली भएको खबर निज आत्मीय स्वजनबाट आयो । पत्र दर्शाउँदै द्रोणले मलाई सोधे- 'मामा म के गरौं ?'

पत्र हेरेर मैले चिन्ता गरें, 'दाजु-भाइ, आत्मीय स्वजन तेजपुरतिरै छाडिआएको मैले यहाँ कति समस्या भेल्न परिरहेछ । परेका बखतमा कसैले मद्दत गर्दैन । त्यसमाथि म छु सारै रोगी - टी. बी. ले भम्टिरहन्छ । फेरि भान्जालाई यहाँ नेपाली प्राध्यापकको पद प्राप्त हुन पनि त सारो छ ।' अनि उत्तर दिएँ- 'भान्जा ! तिम्रा आफन्तहरू सबै उतै छन् । मेचीमै पनि छन्, दुई काका, भाइहरू । प्राध्यापकको पद प्राप्त हुन्छ भने यहाँ आई.ए.का पदमा भुलिरहने किन ? जानु नै वेश होला ।'

भान्जा लगत्तै मेची पुगे । साक्षात्कारमा उत्तीर्ण हुँदै प्राध्यापकको पद प्राप्त गरी फर्किए । साथसाथै यहाँको घर-बारी बिक्री गरी बिदा लिई गएर पूर्वी नेपालका स्थायी बासिन्दा हुन गए । दुलही मीरादेवीले पनि त्यहाँको कन्या हाइस्कूलमा शिक्षिकाको पदमा काम गरी उन्नति हुँदै प्रधान शिक्षिका कार्यभार सम्हालिरहेकी छन् । पुत्र-कन्याहरूलाई सु-उच्च शिक्षित पारी, पति-पत्नी दुबैले जीवन सफल पारी, हठात् द्रोणकुमार पार्थिव जगतबाट बिदा हुनगए । तिनका आत्माले स्वर्गमा शान्ति पाओस् । ओम् शान्ति !

*- उदालगुडी, असम, भारत ।*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका मामा हुनुहुन्छ)*



राजा
(थानेश्वर खनाल)

# डा. द्रोणकुमार पौडेल हाम्रा आदर्श भिनाजु

सधैं सकारात्मक चिन्तन र सात्विक जीवनशैलीले आफ्नो जीवनलाई अघि बढाउने, सबैको हित चाहने असम शोणितपुर (पुरानो दर) जिल्ला अन्तर्गत ओदालगुडी निवासी डा. द्रोणकुमार उपाध्याय पौडेलज्यूको २०३८ साल फागुन २७ गते हाम्री ठूलीदिदी मीरादेवी खनालसँग शुभविवाह सम्पन्न भएर असम-नौगावँ जिल्ला अन्तर्गत सोलङ गावँ निवासी हाम्रो खनाल परिवारका ज्वाइँ/भिनाजुको सम्बन्ध जोडिनु हामी खनाल परिवारका लागि ठूलो खुशीको कुरो हो। विवाहपश्चात् उहाँ सधैं हाम्रो प्रेरणाको स्रोत हुनुहुन्थ्यो र उहाँको रूपान्तरण हाम्रा लागि एउटा अपुरणीय क्षति भएको छ। उहाँलाई सम्झँदै उहाँप्रति यो श्रद्धाञ्जलि प्रस्तुत गरें।

१) आदरणीय भिनाजु आफ्नो वचनअनुसारको कार्यमा दृढ हुनुहुन्थ्यो।

२) उहाँको सधैं अध्ययन गर्ने र लेख्ने बानी थियो।

३) म जागिरे सूत्रले असम-डिब्रुगढ जिल्लाको नामरुप उद्योग नगरीमा बस्दथें। भिनाजु माघे संक्रान्तिको अवसरमा त्यहाँ पुगेको बेला असम ढेकियाजुली निवासी हाम्रा आदरणीय ज्वाइँ श्रीमान् सागर उपाध्याय सापकोटा, कान्छी बैनी विद्यादेवी सापकोटा, ठूली दिदी मीरादेवी पौडेल र सहधर्मिणी दीपादेवी खनाल सबै जनाको भिनाजुका साथमा अरुणाचल प्रदेशस्थित परशुराम कुण्ड जाने मौका मिल्यो। यसरी सबै परशुराम कुण्ड पुगेर कुण्डमा स्नान गरी हामीले जोगाड गरी लगेका दाल, चामल, सब्जी, दाउरा आदि गाडीबाट झारेर ब्रम्हपुत्र नदीको किनारामा रमाइलो परिवेशमा पकाएर खाएको हिजो-अस्ति जस्तो लाग्छ।

परशुराम कुण्डबाट फर्किएर नामरुपमा दुई दिनका लागि भिनाजु बस्नु भए तापनि मसँग उपलब्ध भएका विशिष्ट असमिया साहित्यिक श्रीमान् होमेन बरगोहाजि, चन्द्रप्रसाद राइकिया, भारतका पूर्वराष्ट्रपति ए.पी.जे.अब्दुल कलामहरूका

पुस्तकहरू पढ्नु मात्रै होइन; एउटा रातो कलम लिएर उहाँहरूका उल्लेखयोग्य उक्तिहरूलाई रेखांकित गरी पढाइ गर्ने बानी देख्दा हामी प्रभावित भएका थियौं ।

४) भिनाजु धेरै भाषा जस्तै नेपाली, असमिया, बंगाली, हिन्दी, संस्कृत र अंग्रेजी भाषाको ज्ञाता हुनुहुन्थ्यो । आफ्नो मातृभाषा नेपालीमा कुराकानी गर्दा हाम्रो भएको गल्तीलाई त्यतिखेरै सुधारिदिने उहाँको बानी थियो ।

| | | | | |
|---|---|---|---|---|
| जस्तै : | भुल भएछ | लाई | गल्ती भएछ | |
| | मुसुरि टाङ्नु | लाई | झुल टाङ्नु | |
| | चौकीमा बस्नु | लाई | कुर्सीमा बस्नु | |
| | बात मार्दा | लाई | कुरा गर्दा... | इत्यादि । |

५) मन्दिर अथवा घरमा पूजा, होम आदिमा पण्डितजीहरूले गरेको मन्त्रोच्चारणमा भएका गल्तीलाई उहाँले उल्लेख गरेर गहन अध्ययन गर्नु पर्ने कुरामा जोड दिनुहुन्थ्यो । नभए मन्दिरहरूमा उपस्थित हुनुभएका भक्तगणहरूले पनि अशुद्ध उच्चारण सुन्दासुन्दै त्यही सत्य मानेर अभ्यस्त हुनु हुनेछ भन्ने उहाँको भनाइ थियो । उहाँ "अशुद्धं अनुच्चारणीयम्"मा जोड दिनुहुन्थ्यो ।

असमको नौगावँ जिल्लाको कलियाबरमा याहाँ भन्ने गोर्खाली/नेपाली जनताको भाषिक, सांस्कृतिक विकास र आइलाग्ने विभिन्न समस्याहरू समाधानको खोज गर्नका लागि एउटा अराजनैतिक संगठन "कलियानर भानु समिति" १९७२ सन्मा गठन भएर आजको मितिसम्म पहिला-पहिला वर्षेनी र अहिले दुई वर्षे गरेर भव्य रूपमा २९ आषाढको दिन भानु जयन्ती र अरु समयमा बेग्लाबेग्लै कार्यक्रमहरू अनुष्ठित गरी आइराखेको छ ।

विशेषगरी १९८८ सन्को २९ आषाढका दिन आयोजित भानु जयन्तीमा भिनाजुलाई प्रमुख वक्ताको रूपमा निम्त्याइएको हुँदा उहाँले भानु जयन्तीमा उपस्थित भई भानुभक्त कसरी नेपाली जनजिब्रोमा प्रिय हुनुभयो र उहाँद्वारा रचित रामायणले जनजनको हृदयस्पर्श गर्न सक्षम भयो भनेर गरेको सविस्तार वर्णनले उपस्थित महानुभावहरू उपकृत हुनुभएको थियो । यहाँ उल्लेख गर्न चाहन्छु- हाम्रा भानिज श्रीमान् यशवन्त पौडेल प्रायः नौ वर्ष उमेरको भए तापनि त्यो सभामा उपस्थित भई आदिकवि भानुभक्तद्वारा रचित कविताहरू पाठ गरी दिंदा सबै जनाले प्रशंसा गरेर समितिद्वारा एउटा फूलबुट्टे गाम्छा (असमको संस्कृति र सम्मानको प्रतीक) ले सम्बधर्ना जनाइदिएका थिए ।

कलियावर भानु समितिले प्रकाशन गरेको समितिका प्रतिष्ठापक सभापति

प्रयात गणेशचन्द्र उपाध्याय खनालज्यूको स्मृतिग्रन्थ "स्थिनधी" को सम्पादकको जिम्मेदारी भिनाजु डा. द्रोणकुमार उपाध्याय पौडेलज्यूलाई समितिले दिएको हुँदा यसलाई सहर्ष स्वीकार गर्दै नेपालदेखि असमको कलियावर आएर सो दायित्व सकुशल सम्मन्न गर्नुभएको थियो । २०१९ सन्मा क.भा.स.ले प्रकाशन गरेको मुखपत्र "आलोक" मा पनि उहाँले आफ्नो शुभेच्छा वाणी पठाउनुभएको थियो । उहाँ यो समितिको हितचिन्तक हुनुहुन्थ्यो । कलियावर भानु समिति उहाँप्रति सदैव आभारी रहने छ ।

६) भिनाजु शाकाहारी हुनुहुन्थ्यो । बाह्र वर्षसम्म उहाँले दूध, दही, घिउ, क्रीम अर्थात् दुग्धजन्य वस्तुहरूको वर्जना गर्नुभएको थियो । बारम्बार यस विषयमा जान्न खोज्दा पनि हामीलाई भन्नु भएन । अन्त्यमा, बिरामी भएको बखतमा ठूली भान्जी योगिता र ठूली दिदी लगायत सबै जनाले धेरै जोड गरेको हुनाले स्वास्थ्यलाई ध्यानमा राख्दै आफ्नो मनको विरुद्ध भए पनि दूध, दही, घिउको सेवन गर्न शुरु गर्नुभयो ।

७) भिनाजु अहिंसाको पुजारी हुनुहुन्थ्यो । हाम्रो घर (असमको नौगावँ-सोलङ) मा आएको बेला उहाँले धेरै खेप राति सुत्दा झुलभित्र पसेको मच्छर नमारेर हामीलाई धपाउन अर्थात् झुलबाट निकालिदिन भन्नु हुन्थ्यो । यस्ता सबै प्राणीलाई दया गर्ने व्यक्तिले समाजमा धेरै कम्ती नै हुन्छन् ।

८) भिनाजु आमा र पिताजी (ससुराबा-सासुआमा) लाई धेरै श्रद्धाभक्ति गर्नुहुन्थ्यो । आमा र पिताजीको बोलीचाली, आचारव्यवहार, दिनचर्या सबै थोक भिनाजुलाई साह्रै मन पर्थ्यो र दुबै जनालाई भिनाजुको दृष्टिमा महापुरुषको श्रेणीमा राखेको दिदीसँग घर चन्द्रगढीमा भएको कुराकानीबाट जान्न पाएँ ।

९) भिनाजु कर्मका पुजारी हुनुहुन्थ्यो । कर्म नै धर्म हो भन्ने उहाँको मत थियो । त्यसैले हामी सबैलाई आ-आफ्नो कर्म निष्ठापूर्वक सञ्चालन गर्ने बानीमा अभ्यस्त रहन हामीलाई अर्ति दिनुहुन्थ्यो ।

१०) भिनाजुले दिदीलाई धेरै माया गरेको हामी देख्थ्यौं । दिदी-भिनाजु दुबै शिक्षक भएको हुनाले पाकघरमा पकाई बनाई लगायत सबै काममा दिदीलाई सहायता गर्न भिनाजु सदा तत्पर हुनुहुन्थ्यो । त्यसैले दिदीलाई पनि आफ्नो कर्त्तव्यमा समयमा उपस्थित हुन कहिल्यै अप्ठ्यारो परेन जस्तो लाग्छ ।

११) भिनाजु रिसाउनु हुन्न थियो । यसको अर्थ यो होइन कि, भिनाजुलाई रिस उठ्दैन थियो । कहिलेकाहीं भिनाजुले रिसाएको हामीले देखेका छौं । जस्तैः

मितव्ययी भइएन भने, चाहिंदो भन्दा धेरै सामान क्रय गरियो भने, समयमा आफ्नो काम सम्पादन भएन भने, आफ्नो दायित्व र कर्त्तव्यलाई अवहेलना गरियो भने ।

१२) भिनाजुको मन नपरेको कुरा मनमा नराखी त्यही क्षण भन्ने बानी थियो । शायद भविष्यत् सुधारको लागि भन्नुभएको होला ।

१३) असमको सोलडमा आउँदा पनि भिनाजु साला, साली, भदा, भदैहरू सबै ज्येष्ठ एवम् कनिष्ठहरूको दिनचर्याको ख्याल राख्नु हुन्थ्यो र सबैको उत्तरणका लागि आवश्यक सुझाव दिइरहनु हुन्थ्यो । उहाँले हामी सबैलाई औधि माया गर्नुहुन्थ्यो ।

१४) भिनाजु समयानुवर्ती हुनुहुन्थ्यो । भिनाजुको सधैं प्रातः भ्रमण गर्ने बानी थियो । म पनि धेरै पटक चन्द्रगढी भिनाजुकोमा गएर बसेको छु । एक दिनको कुरा हो - भिनाजु बिहानै ३ः३० बजे प्रातः भ्रमणमा निस्कनुभयो । भोलिपल्टदेखि बिहान ३ः३० बजेको ठाउँमा ८ः३० बजे प्रातः भ्रमणमा जान भिनाजुलाई भनें । त्यसो भए म पनि भिनाजुसँग प्रातः भ्रमणमा जान सक्ने थिएँ । तर, भिनाजुले आफ्नो समयसारणीलाई परिवर्तन गर्नु भएन । मैले बिहान १ घण्टा अघि नै ओछ्यानबाट उठेर भिनाजुसँग प्रातः भ्रमणमा निस्किएँ । दुई दिन भ्रमणमा गएपछि मैले भिनाजुको साथ लिन सकिन । किनभने बिहान ३ः३० बजे मेरा आँखा उघ्रिएका हुँदैनथे । मेरो प्रातः भ्रमण त्यहीं समाप्त भए पनि भिनाजुबाट हाम्रो जीवन नै समय हो भन्ने सिख भेट्टाएँ ।

१५) भिनाजु वेद र वैदिक रीति-नीतिलाई अपनाउनु हुन्थ्यो । पूजा, श्राद्ध, होम आदि वैदिक विधिले गर्नु हुन्थ्यो ।

१६) भिनाजु कुनै पनि नशाजातीय वस्तु ग्रहण गर्नु हुन्नथ्यो ।

१७) भिनाजु ठूला विद्वानहरूसँग वार्तालाप गर्न धेरै रुचाउनु हुन्थ्यो । उहाँको असम आएर यहाँका ठूला-ठूला सत्राधिकारहरूसँग भेट गरेर वार्तालाप गर्ने इच्छा थियो । तर, चाँजो मिलाउँदा मिलाउँदै उहाँ परमधाम जानु भएकाले त्यो काम अधुरै रह्यो ।

१८) भिनाजुको अन्तिम असम भ्रमण : भिनाजु भ्रमण गर्न र सभा समितिहरूमा उपस्थित हुन रुचि राख्नु हुन्थ्यो । भरसक निमन्त्रित सभाहरूमा उपस्थित हुने प्रयास गर्नु हुन्थ्यो ।

असममा ब्राह्मणहरूको एउटा ठूलो संगठन छ- 'असम ब्राम्हण समाज' । असम ब्राम्हण समाजले सन् २०१९ को १४, १५ र १६ जुनमा असमको गोलाघाटमा नवम् द्विवार्षिक अधिवेशनको आयोजना गरेको थियो । सो अधिवेशनमा नेपालबाट मुख्य अतिथिको रूपमा भिनाजुलाई निम्त्याइएको थियो ।

उहाँले त्यो निमन्त्रणलाई सहर्ष स्वीकार गर्दै असम आएर अधिवेशनमा दिनुभएको भाषण उल्लेखयोग्य छ। भाषणमा उहाँले मुख्यतः भारत-नेपाल मैत्री र दुबै देशको बोल्ने भाषा अलग्गै भए तापनि सविस्तार वर्णन गर्नुभयो । साथै, नेपालमा भएका दर्शनीय स्थानहरूको छोटकरीमा वर्णन दिंदै एकपटक भए पनि र पवित्र स्थानहरूको दर्शन गर्न सबैलाई निमन्त्रणा गर्नुभयो । उहाँले आफ्नो भाषण पहिला वैदिक मन्त्रले शुरुवात गरेर पछि असमिया भाषामा शुद्ध रूपले दिएको हुनाले विशेषगरी सभामा उपस्थित असमिया ब्राह्मण भक्तहरू दंग परेर जोडदारले दिएको करध्वनिले सभागृहको चारैदिशा गुञ्जायमान भएको थियो ।

उक्त अधिवेशनमा मेरो साथै हाम्रा ढेकियाजुली निवासी कान्छा ज्वाइँ श्रीमान् हिमसागर उपाध्यायज्यूको भिनाजुसँग उपस्थित हुने मौका भेट्टाएकाले र अधिवेशनका उद्योक्ताहरूको आतिथ्यमा हामी पनि कृतार्थ भएका थियौं। भिनाजु गोलाधार अधिवेशनबाट फर्किएर एक दिन सोलङ बसेर भोलिपल्ट गौहाटी हुँदै नेपाल फर्कनुभयो । नियतिको परिहास हामीलाई थाहै थिएन, भिनाजुको यो अन्तिम असम यात्रा हो भनेर !

भिनाजुबाट हामीले हाम्रो जीवनमा धेरै कुरा जान्यौं, सिक्यौं; तर धेरै कुरा उहाँबाट जान्न बाँकी नै रह्यो। भिनाजुसँग नेपालका दर्शनीय पर्यटन क्षेत्रहरू डुल्ने आशा पनि अधुरै रह्यो। पछि ती ठाउँहरूमा गए तापनि भिनाजुले जसरी ती ठाउँहरूको महत्वलाई सम्झाइदिने दोस्रो व्यक्ति उहाँको समकक्ष हुन्छ जस्तो मलाई लाग्दैन ।

असमबाट चन्द्रगढी जाँदा पनि हामी जाने बस पुग्नुभन्दा अघि बस बिसौनीमा हामीलाई स्वागत गर्न उभिरहनु हुन्थ्यो। असम फर्किने बेलामा पनि हामीलाई बसमा चढाएर मात्र भिनाजुको घर फर्कने बानी थियो। हाटबजार जाँदा पनि हामीलाई के-केमा रुचि छ किनेर छिटो दिदीलाई पकाउन दिएको दृश्य अझै आलो छ। हामीलाई धेरै माया गर्ने भिनाजुका यी कुराहरू सम्झदा आँखाबाट स्वतः आँसु आउँछन् ।

भिनाजुको भेषभूषा ऋषिको जस्तो नभए तापनि उहाँ एक जना ऋषितुल्य व्यक्ति हुनुहुन्थ्यो। हामी खनाल परिवारका लागि उहाँ आदर्श ज्वाइँ/भिनाजु र पथप्रदर्शक भएर सधैं हाम्रो मानसपटलमा रहनु हुनेछ। उहाँको बैकुष्ठ प्राप्ति र आत्माको चिरशान्तिको कामना गर्दछौं ।

*- सोलङ, नौगावँ (असम)*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका सालो हुनुहुन्छ)*



# द्रोणपुष्प : अन्तिम श्रद्धाञ्जलि

दिव्य भूर्तेल

धराधामबाट बिदा भइसकेको आफ्नो प्रियजनलाई हामी लोक-परम्परा शिष्टाचार, धार्मिक विधि-विधान अनुसार कुनै न कुनै प्रकारले 'दिवंगतको परलोकमा चिरशान्ति प्राप्ति वा सायुज्य मुक्ति होस्' भन्ने कामना गर्दै यथायोग्य कर्त्तव्यहरू पालन गर्दछौं । यसरी कसैप्रति किंवा व्यक्ति विशेषप्रतिको स्मरणलाई लौकिक शिष्टाचार, धार्मिक पद्धतिबाहेक व्यक्तिको वंश परम्परा, नाता, ताँता आदि सम्पूर्ण सम्बन्धसहित निजको गार्हस्थ जीवनमा उपलब्ध पुरुषार्थ र त्यसबाट समाज र राष्ट्रमा पुग्न गएको योगदानको चर्चा परिचर्चा गर्दै भाषा साहित्य समाजसेवा जस्ता विविध आयामको गुण कीर्तिसहित तस्वीरहरू संग्रह गरेर एक ठाउँमा राख्छौं र त्यो हाम्रो 'स्मरण' स्थूल रूप लिएर व्यक्तिको वाङ्मय मूर्तिको रूपमा परिणत हुन्छ र स्मारिका हुन पुग्छ । स्मारिका स्त्रीलिङ्गी शब्द भएकाले यसको गर्भगृहमा जीवनोपयोगी अर्थपूर्ण सामग्रीहरूले स्थान लिएको हुनुपर्ने स्वाभाविक हुन जान्छ । तर, यस्तो स्मारिकाभित्र उपर्युक्त भूमिकामा आफू पूर्णरूपमा उपयुक्त हुन नसक्ने भएकाले संक्षिप्त स्मरणबाट मात्र हाम्रा प्रियजन द्रोणकुमार उपाध्याय पौडेलप्रति श्रद्धासुमन अर्पण गर्न चाहन्छु ।

२०४०/४१ सालतिर टिम्बर कर्पोरेशनको भद्रपुर डिपो इन्चार्ज भएका बेला उहाँलाई लिएर मेरा साडुभाइ कृष्ण पौडेल चिरान काठ खरीदका लागि डिपो जानुभएको थियो । दाजुलाई काठ चाहियो, यस्तै के भन्नुभयो । सामान्य नमस्ते गरेर मैले निवेदनमा तोक लगाई सकभर चाँडो उपलब्ध हुने व्यवस्थाका लागि भन्ने अह्राउने ठाउँ र व्यक्तिलाई आदेश गरें । पहिलो भेट उहाँसँग त्यसैबेला भएको हो । त्यसपछि यदाकदा भेट हुने, हेल्लो, नमस्ते यस्तै औपचारिकता हुन्थ्यो । यताका समयमा एक दिन चन्द्रगढी हाटमा भेट भयो । कुनै घरपरिवारको आन्तरिक मनमुटावका कारण घरपरिवारमा मन फाट्ने र यसले स्थायी रूपमा

दुःखपूर्ण प्रभाव पार्ने जस्ता कुराहरू भए । मलाई मध्यस्थताको आग्रह गर्नुभयो । 'केही समय पर्खेर हेरौं, यस्ता विषय आफैं सुल्भिन्छन्' यसरी मैले उहाँलाई आश्वस्त पारें । पछि त्यो समस्या सुल्झ्यो पनि र उहाँको मप्रति अभ्र विश्वस्तता बढ्न गएको अनुभव गरें ।

भद्रपुर नगरपालिकामा ने.का. सम्बन्धी एउटा कार्यक्रममा वक्ताका रूपमा उहाँ आमन्त्रित हुनुहुन्थ्यो । राजनैतिक विचार सिद्धान्तमा आधारित त्यस कार्यक्रममा रुसोको विषयमा बोल्दै बीचमा व्यङ्ग्यात्मक रूपमा पछिल्ला वक्ता तथा मुख्य अतिथि कृष्णप्रसाद सिटौलातिर फर्कदै कार्यक्रम ढिलो भएको, आफू श्रमजीवी मानिस भएकाले समयलाई ध्यान दिनु नै पर्ने कुरा व्यक्त गर्दै आफ्नो मन्तव्य टुङ्ग्याउनु भयो र क्याम्पसतिरै फर्कने क्रममा ' व्यस्तताका बाबजुद आइदिनुभयो, धन्यवाद' मैले भनें । उहाँले समयलाई ध्यान दिनुपर्छ भन्दै हात हल्लाउँदै फिर्नुभयो ।

क्याम्पसको स्तरवृद्धि साथै प्राध्यापकको दरबन्दी पनि १०० को हाराहारीमा पुगिसकेको अवस्थामा सँगसँगै पचिय, सम्पर्क हुने सम्भावना कमै हुन्छ । वैचारिक दृष्टिले संघ-संस्थामा आवद्ध व्यक्तिहरूसँग कार्य विशेषता अनुरूप भेटघाट हुने स्वाभाविक नै थियो । उहाँसँग सम्मानजनक र हाइहल्लोको सम्बोधन र सम्बन्ध थियो । यसबेलासम्म मैले उहाँको पुर्ख्यौली थलोको जानकारी पाएको थिएँ । उहाँ दिङ्ला गढीगाउँको प्रसिद्ध पौडेल परिवारको सन्तान हुनुहुन्थ्यो भने पंक्तिकार केउरानी पानी गाउँको बासिन्दाको सन्तान थियो । उहाँ गुरु महाराज आबाल ब्रह्मचारी षडानन्दको टोल छिमेकी हुनुहुन्थ्यो, आफू डेढ किलोमिटर तलबाट किताब बोकेर उकालो हिंड्दै गुरुगाउँ जानुपर्ने । प्रसङ्गले एकै ठाउँको पुर्ख्यौली थलोको कारण हामी अलिक नजिक भयौं । घरपरिवारबीच चिनाजानी र आवतजावत भने थिएन ।

२०६० सालमा देवकोटा स्मृति भवन, भद्रपुरबाट महाकवि लक्ष्मीप्रसाद देवकोटाको ९५ औं पुण्य जन्म जयन्तीका अवसरमा 'महाकवि देवकोटा स्मारिका' प्रकाशन गर्ने निर्णय अनुरूप पृथ्वीबिक्रम राईको संयोजकत्वमा लेखलेखादी संकलन भई प्रायशः छनौट भएका रचनाहरूलाई कम्प्युटर टाइप गराउने जिम्मेवारी पंक्तिकारलाई थियो । असमेली कवि छविलाल खतिवडाको 'देवकोटा' महाकाव्यका विषयमा महाकवि स्वयम् महाकाव्य बनेको देवकोटा महाकाव्य शीर्षकको उहाँको लेख कम्प्युटर टाइप शुद्धाशुद्धिको बेला दुई-तीन

हरफ ध्यानपूर्वक हेर्नुपर्‍यो । नेपालको भूमिभन्दा शयौंकोश टाढा बस्ने असमेली कवि छविलाल खतिवडाको दृष्टि आकर्षित हुन पुगेको छ । यसमा देशज स्रष्टाहरू भनेर केही नकारात्मक टिप्पणी थियो । यसले उहाँको पेशागत जीवनमा पनि असर पर्न सक्ने र उत्तरोत्तर उन्नतिमा समेत बिघ्न पुर्‍याउन सक्छ भन्ने मलाई लाग्यो । १८ वर्ष लागिसक्यो शब्दहरू बिर्सियो । तर, सम्पादकीय अधिकार प्रयोग गर्दै उहाँका ती नकारात्मक उद्गारहरू हटाएर मात्र देशज स्रष्टाहरू निराश हुनुपर्ने केही छैन, भनेर पूर्ण विराम दिएँ । मलाई लाग्यो- आदरणीय छविलालजीको काव्यात्मक प्रतिमाप्रतिको विशेष श्रद्धाका कारण उत्पन्न भावावेश मात्र हो । उहाँप्रति गरिने श्रद्धाका कारण अरु होचिनु पर्ने न्यायसङ्गत प्रस्तुति लागेन, यति थियो । ठीक समयमा देवकोटा जयन्तीमा स्मारिका विमोचन हुन सकेन, केही विलम्ब भयो ।

देवकोटा स्मृति भवनको आयोजनामा २०६० साल माघ २६ गते सोमबार नेपाल सामुदायिक भवनको सभाहलमा प्रमुख अतिथि दान खालिङबाट विमोचन भई स्मारिकाको सामग्री संयोजन र स्तरको मूल्याङ्कन गर्दै वक्ताका रूपमा उहाँले राम्रो टिप्पणी गर्नुभयो । आफ्नो लेखमा भएका केही शब्दहरू काटछाँट गरिएको गुनासो पनि गर्नुभयो । उहाँलाई मैले यसरी शब्दहरू हटाएको हुँ भनेपछि शुभेच्छुकले यसो पनि गरेको ठीकै हो, तर ... भनेर हाँस्नुभयो, केही भन्नुभएन ।

गृहस्थीहरूका लागि छोरा-छोरीको बिहे, दान सम्पन्न गर्नु ठूलो कर्त्तव्य पूरा गर्नु हुन जान्छ । छोरा-छोरी दुबै पक्षबाट माता-पिताको परीक्षाको घडी र वर-बधूको वैवाहिक जीवनको मंगलमय भविष्यको रेखा भेटिने अवस्था हो । यो बेला कुटुम्ब छनौटमा धैर्य, गम्भीर भएर निर्णय गर्न सक्ने क्षमता आफैंमा हुनु अति उत्तम हुन जान्छ । आफ्नो पनि छोराको वैवाहिक कार्य सम्पन्नताको लागि आफ्नो संस्कार, धर्म परम्परा नाता ताँताले रुचाएको कुटुम्बको खोजीमा थियौं । योग्य वरका लागि कन्या पक्षबाट सम्पर्क गर्ने क्रमहरू थिए नै । आफू समान चालचलन र व्यवहार भएका एक-दुई परिवारमा हामी केन्द्रित थियौं, निर्णय हुन सकेको थिएन । मलाई ज्योतिषप्रति पूर्ण विश्वास थियो । यस अघि छोराका विषयमा भनेका सबै कुराहरू क्रमशः फलदायी भएर आएका थिए । मंसिरमा विहे गर्नु पर्नेछ, एकपटक ज्योतिष परामर्श गर्नै पर्‍यो भनेर चिना गोजीमा राखेर चन्द्रगढीतिर लागें । आदरणीय रघुनाथ रिमालसँग भेट भयो । कल्भर्टको बस्ने ठाउँमा बसेर मैले आफ्नो समस्या बताएँ । उहाँले चिना टिपोट हेर्नुभयो । “घरको

उत्तर तर्फ, टाढा जानु पर्दैन । लगन नजिकै छ । ज्वाइँ भन्ने नाता लगाएको वा ज्वाइँ-चेलाले दशैंमा टीका लगाउँदा 'फलानाको छोरी बिहे गर्दा कसो होला भनेर' आएको प्रश्नबाट कुरा अगाडि बढेर त्यही नै घरको कन्यासँग विवाह हुन्छ" भनेर उहाँले सहजीकरण गर्नुभयो । त्यति भनेपछि भाग्यवादीले भर पर्नैपर्छ, परें ।

आश्विन शुक्ल १६ गते विजयादशमीका दिन सपरिवार यदुनाथ पौडेलजीले आमासँग टीका आशीर्वाद थाप्ने सिलसिलामा "साँच्ची पंकजको लागि हाम्रो द्रोण सरको छोरी हेरेर विवाह प्रसङ्ग अगाडि बढाउँदा के कस्तो हुन्छ ?" भनेर मलाई यसरी प्रश्न गर्नुभयो ! द्रोण सरकी छोरी छोरालाई विवाह गरौं न भनेर मेरा मित्र तुलसी शर्मा ढकालकी पत्नी रेणुका ढकालले लगभग ६ महिना अगाडि नै कुरा गर्नु भएथ्यो । यसकारणले पनि म मनमनै हाँसे । ज्योतिषको गणना ठीकसँग आइरहेथ्यो । मैले भनें- "हुन्छ, किन हुँदैन, केटाकेटी देखाउने व्यवस्था गरौं । कुनै प्रकारको बिग्रह उत्पन्न भएन भने कार्य सिद्धि हुन्छ ।" यसरी कुरा टुंगियो ।

द्वादशीका दिन श्राद्ध परेकाले राम्रो चाँजोपाँजो मिल्न नसकी सन्तुष्टि नहुँदा केटालाई पुनः काठमाण्डौमा केटी हेर्ने व्यवस्था भई कुरा अगाडि बढ्यो । यस बीचमा तपाईंहरू पनि केटी हेर्नुहोस् भन्ने आग्रह यदुजीले गर्नुभएथ्यो । केटाकेटीको हेराहेर भएर छोराले उचित निर्णय सुनाए । हामी कुरा छिन्ने तर्फ लाग्छौं । केटीको सुशीलता मात्र चाहिन्छ । वैवाहिक चर्चा परिचर्चा यसरी चल्थ्यो र आश्विन महिनाभित्रै कुरा छिन्ने भनेर २८ गते केटाको पिता, बडाबा चण्डीप्रसाद, दाइ रुद्र भुर्तेल, काका शम्भु प्र., पं.रघुनाथ रिमाल, शारदा सानीमा, सानोबुबा, कृष्ण पौडेल र यदु पौडेल समेत भई विवाह गर्ने कुरा छिनियो । मेरी माताजी अस्वस्थ्य जस्तो हुनुहुन्थ्यो, कुरा छिनेको बारे उहाँलाई सुनाउँदा अत्यन्त खुशी हुनुभयो ।

८/१० वर्ष अगाडि माईधार कमलनयन आश्रमका हालका महन्त स्वामी श्री केशवाचार्यकी पत्नी श्रीमती सीताजीले दाइ द्रोण सरकहाँ केही सन्देश पठाएको पुऱ्याउन जाँदा घरमा एक्लै भए पनि मलाई चिया नपिई जानु हुँदैन भनेर चिया पकाएर खुवाउनुभयो भनेर बारबार खुशी व्यक्त गर्नुभयो । त्यसै दिन साँझमा डाक्टर हृषीकेश उपाध्याय आएर मैले विवाहको कुरा छिनेको सुनेपछि 'अत्यन्त राम्रो, म साह्रै खुशी भएँ आमा' भनेर केही क्षण असल कुराकानी गरेर फिर्नुभयो । ७ दिन अघि टीकाटाला गरी मंसिर २७ गते बुधबार पौष कृष्ण अष्टमी उप्रान्त नवमी डिसेम्बर १३, २००६ का दिन जेठी छोरी योगितासँग छोरा पंकजको शुभविवाह सम्पन्न भयो र हाम्रो परिवार एक अर्काको नातातातामा गाँसियो ।

विवाहको कुरा छिनेका दिन कुरैकुरामा हामीहरू पारिवारिक रूपबाट सम्बन्धी भयौं ! भनेर उहाँले व्यक्त गरेको आत्मीय उद्गार अहिले पनि भरखरको बातचीत जस्तो लाग्छ । वैवाहिक सन्दर्भमा छोरा वा छोरीका सम्बन्धले सम्बन्धी वा सम+धी ज्ञान विद्वताको समस्तरता । म उमेरले मात्र जेठो, उहाँ मेरा आदरणीय गुरु ।

भाषिक अनुसन्धान वा नेपाली लोकव्यवहारका सम्पूर्ण कर्मसँग जोडिएका शब्द उक्तिहरूका विषयमा कुरैकुरामा चर्चा गर्ने गर्नुहुन्थ्यो । सम्भवतः यसै सिलसिलामा २०६५ साल मंसिर १४ गते डा.हृषीकेश उपाध्यायले लोकार्पण गर्नुभएको 'लोकवार्ता लोककै चर्चा' नामक पुस्तकमा सम्बन्धी श्री दिव्य भुर्तेलज्यूमा विजया शुभकामना सहित भनेर उपहार दिनुभएको छ भने 'भाषिक चिन्तन' नामक पुस्तकमा सम्धीज्यू श्री दिव्य भुर्तेलमा भनेर उपहार दिनुभएको छ । यो किताब राधिका रायाबाट लोकार्पण भएको हो भने महाकवि देवकोटाको शतवार्षिकी समारोह अन्तर्गत लेखनाथ वाचनालयको आयोजना र घनश्याम स्मृति प्रतिष्ठानको प्रायोजन थियो । यसरी भाषालाई केलाएर सम्बन्धी भएर सम्धी भएको प्रष्ट्याउन खोजिएको जस्तो लाग्यो । हितैषी मित्रस्वरूप परमआदरणीय सम्धीज्यूको अब स्मरण र श्रद्धा मात्र रहन गएको छ । एउटा उत्साही लगनशील सच्चरित्र, कर्त्तव्यनिष्ठ व्यक्तिको जीवनमा पनि नैराश्यजन्य सोचको संक्रमण हुँदो रहेछ । उहाँको जीवनमा समेत त्यस्तो भएको आभास पाइयो र त्यसको प्रतिविम्ब स्वरूप बेलाबखत गरिएका उद्गारहरूबाट थाहा पाइन्थ्यो । प्रायशः एउटा किताब लेखिसकेर मर्ने विचार छ, यता ७६ सालको शुरुतिर यसरी भन्ने गर्नुहुन्थ्यो । किताब लेख्न सकिन्छ, निराशाजनक उद्गार व्यक्त गर्नु उचित हुँदैन । यसरी कुरा हुन्थ्यो । २०७६ साल उहाँका लागि दैव विपरीत हुने वर्ष भएर आएछ । बैशाखदेखि यता उहाँमा यदाकदा कुण्ठा उत्पन्न भएको भान हुन्थ्यो भने कार्तिक मंसिरदेखि रोगबाट ग्रसित हुने सम्भावनाको आभास पाइसक्नु भएको रहेछ जस्तो लाग्छ । रोगबाट निको हुने सम्भाव्यता भन्दा बाहिर गएर रोग देखापर्नु भनेको यो नै पार्थिव शरीरलाई यो जगतमा रोकेर राख्न नसकिने सत्य संकेत हो । जगत छोडेर जानै पर्ने यस परम सत्यलाई स्वीकार गरे भैं २०७६ साल माघ १४ गते माघ शुक्ल चौथी उप्रान्त पञ्चमी तिथि बुधबार तदनुसार २९ जनवरी २०२० राति ९:३० बजे उहाँको अन्तिम ढुकढुकी बन्द भयो ।

भाषिका क्षेत्रमा केही वर्ष व्यस्त रहेर चाहेजस्तो उपलब्धि हुनु र जीवन टुंगिएको हुनु... यस्तो भएको भए उहाँले अन्तिम घडीमा पुस्तक लेखनको

अर्को उद्देश्य लिइराख्नु पर्ने थिएन होला । अझै केही वर्ष अगाडि बढ्ने गतिरोध उत्पन्न नभएको भए हामी कतै डुल्न जान्थ्यौं होला । सम्धीसँग डुल्ने तीर्थ आदि पर्यटकीय क्षेत्र भ्रमणको हाम्रो चाहना बीचैमा टुंगिने थिएन होला । यस्ता धेरै अपूरा अल्झाहरू, कर्त्तव्यका अनगिन्ती समस्याहरू जीवनका अनेकौं तीतामीठाहरू बिर्सेर जानै पर्ने रहेछ नै । यस्तो असामयिकताबाट उत्पन्न पीडालाई सबैले आत्मवत् सम्झन सकौं । हामी सम्धी, सम्धिनी सुभद्रा भूर्तेल, ज्वाइँ-छोरी पंकज योगिता, नातिहरू आदित्य, दुर्लभ परम् आदरणीय सम्धीज्यू पिता, जयापिता, मावली जीबाको सायुज्य मुक्तिको कामना गर्दछौं । अस्तु ...

*भद्रपुर-७, झापा*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका जेठी छोरी तर्फका सम्धी एवम् साहित्कार हुनुहुन्छ)*



दुर्लभ भूर्तेल

# मेरो प्यारो जिबा

मेरो मामाघरको पिता (हजुरबा) द्रोण पौडेल अहिले हुनुहुन्न । मलाइ धेरै माया गर्नुहुन्थ्यो । मलाई 'मेरो कान्छो नाति ज्ञानी छ' भन्नुहुन्थ्यो । 'धेरै पढ्नु मेरो नाति ! म पढ्ने मान्छेलाई धेरै मन पराउँछु' भन्नुहुन्थ्यो । अब म पनि पिताले भनेको कुरा सम्झिएर धेरै पढ्न-लेख्न थालेको छु ।

पिताले 'तिमीहरूले मलाई जिबा भन्नू' भन्नुहुन्थ्यो । म जिबालाई धेरै सम्झिन्छु । जिबा मेरो घरमा आउँदा बिस्कुट, चक्लेट, केरा, सुन्तला लिएर आउनुहुन्थ्यो । जिबाले 'म मेरा नातिहरूलाई दुई-तीन दिन हेर्न खेलाउन पाइन भने न्याम्रो लाग्छ' भन्नुहुन्थ्यो । म जिबाको काँधमाथि चढ्थें । मलाई बुई बोक्नुहुन्थ्यो । हामीसँग केरम पनि खेल्नुहुन्थ्यो । जिबाले भन्नुहुन्थ्यो- 'मेरो कान्छो नाति पछि पढेर ठूलो मान्छे बन्नेछ ।'

जिबा... हजुरले सम्झेजस्तो म पनि राम्रो पढ्ने कोशिश गरेर असल र ज्ञानी मान्छे बन्ने छु ।

*- भद्रपुर- ७*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका जेठी छोरी तर्फका कान्छो नाति हुनुहुन्छ)*



नीरू खतिवडा

# हाम्रो प्यारो दाजु द्रोण

हाम्रो पौडेल खानदानकै जेठो छोरो द्रोण दाजु हुनुहुन्थ्यो । हाम्रा बुबाहरू सात भाइ, दिदीहरू कति हुनुहुन्थ्यो, थाहा भएन । सबै बुबाहरू असममा हुन्थ्यो । हाम्रो दाजु माइलो बुबाको जेठो छोरो हुनुहुन्थ्यो । म चाहिं साइँलो बुबाकी माइली छोरी हुँ ।

हाम्रो बुबा पहिले नै नेपाल आउनुभएर यहीं घरजम गरेर बस्नुभयो । हाम्रो द्रोण दाजु सारै मिजासिलो, हाँसिरहने, जिस्किइरहनुपर्ने अनि मलाई धेरै माया गर्नुहुन्थ्यो । बुबाहरू मध्येको जेठो बुबाको सन्तान असममा, माहिलो बुबाको स्वर्गे भएपछि असम छोडेर नेपाल आउनुभयो जस्तो लाग्छ । म सानै थिए, असम देखेको छुइन भन्दा पनि हजुरबुबा गंगाधर पौडेलको शालिक अनावरण गर्न हामी सबै पौडेल परिवारहरू सँगै गएका थियौं । दाजुले मलाई बाटोमा जिस्काउँदै रमाइलो गर्दै हामीलाई असम पुऱ्याउनु भएको थियो । दाजुसँग मेरो भेट पहिलोपटक मेरो विवाहमा आउँदा भएको थियो । योभन्दा पहिले भेट भएको मलाई याद छैन । एक दिनको कुरा हो, मेरो विवाह भएपछि, मेरो घर बरगाछी आउनुभएको थियो । म त दाजुलाई देख्नेबित्तिकै रुन थालें । त्यहाँदेखिन् मलाई भेट्ने बित्तिकै मामाले मलाई 'रून्ची' भन्नुहुन्थ्यो ।

हामीबीच नरहे पनि हाम्रा दाजु अमर हुनुहुन्छ, दाजुका कृति अमर छन् । दाजु हुनुहुन्न भन्दा पत्याउनै गाह्रो भएको छ । आज पनि दाजु हुनुहुन्छ जस्तो लाग्छ । मेरा माइतीको छोरा-छोरीमध्ये सबैभन्दा जेठो दाजु घरको एउटा खम्बा गुमाएका छौं हामीले । २०७६ सालको माघ १५ गते दाजु बिरामी हुनुहुन्छ भनेर हामी पनि बिहानै चन्द्रगढी गयौं । जाने संयोग त हामीलाई दाजुको मुख हेर्न जुरेको रहेछ । हामी शान्ता दिदीकोमा खाना खाएर दाजुकोमा गयौं । त्यही अन्तिम दिन रहेछ दाजुलाई हेर्न । दाजुले टुलुटुलु हेर्नुभयो, आँखाभरि आँसु पारेर ज्वाइँलाई नमस्कार गर्नुभयो । म सम्झिन पनि सक्तिन । हामीले दाजुलाई छोडेर बिराटनगर घर आयौं । त्यस दिन राति सबैलाई छोडेर सधैंका लागि गोलोक धाम जानुभयो । दाजुको आत्माले शान्ति पाओस् । सात जन्म पनि हामी दाजु-बहिनी भएर बस्न पाऊँ । गोलोकमा बास होस् मेरो दाजुको ।

*बरगाछी, बिराटनगर*

*(लेखक डा.द्रोणकुमार उपाध्यायकी बहिनी हुनुहुन्छ)*



पंकज भूर्तेल

# सदास्मरणीय व्यक्तित्व

शालीन, भद्र, मिलनसार र विद्वान् व्यक्तित्व डा. द्रोणकुमार उपाध्याय पौडेल मेरो कर्मपिता हुनुहुन्थ्यो । उहाँसँग जोडिएका थुप्रै घटना र विषयहरू छन् । सबै समेट्दा एउटा ठूलो ग्रन्थ नै बन्छ । एउटै लेखमा मैले सबै अटाउन सक्ने कुरै भएन । तथापि मैले देखेका र बुझेका केही कुराहरू यहाँ प्रस्तुत गरेको छु ।

**प्रथम भेट**

द्रोण सर भन्ने नाम सुनेको, तर देख-भेट भएको थिएन । मेची क्याम्पसमा अध्यापन गराउने प्राध्यापकहरूमध्ये पीएचडी गर्नेहरू औंलामा गन्न सकिने हुनुहुन्छ । तिनैमध्येका एक द्रोण सर पनि हुनुहुन्थ्यो । मुख्यगरी यही रूपमा नै मैले उहाँको बारेमा सुनेको थिएँ । चन्द्रगढी मैत्री टोलमा रहेको उहाँको घरमा म २०६३ सालको दशैं बिदामा घर (भद्रपुर) आएका बखत पहिलो पटक पुगें । त्यहाँ जानुको उद्देश्य कन्यार्थ थियो । उहाँको ज्येष्ठ सुपुत्रीसँग मेरो विवाहको कुरो चलेको रहेछ र कन्या हेर्न मलाई त्यहाँ लगिएको रहेछ । हुन त त्यस दिनको अघिल्लो दिन नै मेरो छिमेकको नातेदारकोमा उहाँलाई देखेको थिएँ । उहाँ पनि मलाई हेर्न आउनुभएको रहेछ । तर, उहाँलाई उहाँकै घरमा यस प्रयोजनमा भेट्नु आफैमा एक अविस्मरणीय क्षण रह्यो ।

**ज्ञानको भण्डार द्रोण सर**

प्रकारान्तरले उहाँको ज्येष्ठ सुपुत्री योगिता मेरो जीवनसंगिनी बनिन् । द्रोण सरसँग मेरो पारिवारिक नाता गाँसियो र उहाँ द्रोण सरबाट मेरो ससुरा बन्नुभयो । उहाँका एक छोरा र दुई छोरीहरूले उहाँलाई पिता भनेर सम्बोधन गर्ने भएकोले उहाँ मेरो पनि पिता नै हुनुभयो । मैले पनि पिता नै भनेर सम्बोधन गर्न थालें ।

पारिवारिक नाता गाँसिएपछि उहाँसँगको भेटघाट स्वाभाविक रूपमा बाक्लियो । मैले उहाँलाई नजिकबाट चिन्ने, बुझ्ने मौका पाएँ । उहाँसँग भेट हुँदा प्रायः सधैं केही न केही ज्ञानगुणका कुरो नै सिक्ने अवसर पाइन्थ्यो । मैले पनि उहाँसँग धेरै कुरोहरू सिक्ने मौका पाएँ । मान्छेका साना-साना कुराहरूमा ध्यान दिने उहाँको बानी अत्यन्तै उदाहरणीय थियो । उदाहरणका लागि, कुनै दुई व्यक्तिहरू बीच परिचय गराउँदा पनि सामान्य परिचय मात्र नभई सम्बन्धित व्यक्तिको पृष्ठभूमि, जीवनका संघर्ष वा रमाइला पक्षहरू, उहाँसँगको आफ्नो हिमचिमका कुराहरू समेत व्याख्या गरी उसको पूरै व्यक्तित्वकै परिचय गराइदिनुहुन्थ्यो । मलाई यो औधि मन पर्‍यो र मैले पनि परिचय गराउने यो फर्मुला प्रयोग गर्न थालें । धेरै अवस्थामा यसले वातावरणलाई निकै सहज बनाउँदो रहेछ । मेरो जागिरको क्रममा पनि यो फर्मुलाले काम गरेको छ । परिचयको कार्यक्रमबाटै कतिपय असहज वातावरण सहजतातिर गई वार्ता तथा विवादहरू समाधानमा गएका प्रशस्त घटनाहरू छन् ।

उहाँसँग भेट भएपछि थाहा भयो कि उहाँ माछा-मासु मात्र होइन, दूध र दूधले बनेका परिकारहरू पनि खानुहुँदो रहेनछ । यस्तो व्यक्तिलाई भेगन (Vegan) भनिंदो रहेछ । मलाई चाहिं यो सबै थाहा थिएन । दूध र दुग्धजन्य परिकार नखाने मान्छेहरू हुन्छन् भन्ने मैले सुनेको त के कल्पना पनि नगरेको कुरो थियो । कसरी सम्भव हुन्छ होला ? के चाहिं खानुहुन्छ होला उहाँले भन्ने मलाई लागिरह्यो । घरका मान्छेलाई पनि उहाँलाई के खुवाउने भन्ने तनाव । वास्तवमा यो निकै गाह्रो र धैर्यताको विषय पनि हो । दृढसंकल्प यसको पहिलो शर्त हो । मैले पनि उहाँबाट प्रभावित भएर पछि एक पटक दूध र दूधबाट बनेका परिकार नखाने विचार गरें । तर, बीस- पच्चीस दिनभन्दा बढी आफूलाई यसमा टिकाउन सकिन । अनि आफैले महसूस गरें कि यसमा कति धैर्य, दृढनिश्चय र प्रण आवश्यक रहेछ भन्ने । त्यसपछि पिताप्रतिको मेरो श्रद्धा अझ बढेर गयो । उहाँको दृढ इच्छाशक्ति र धैर्यलाई प्रणाम गर्दछु ।

उहाँ आर्य समाजी हुनुहुन्थ्यो । आर्य समाजको पद्धतिमाथि विश्वास गर्नुहुन्थ्यो । मूर्ति पूजामा खासै विश्वास थिएन उहाँमा । जन्मदेखि मृत्युसम्मका सम्पूर्ण कार्यहरू वैदिक मन्त्रबाट होम गर्दै गर्नुपर्छ भन्ने आर्य समाजको परम्परामा उहाँको आस्था थियो । वेद मात्र हाम्रो धार्मिक ग्रन्थ हो, पुराणहरू त फिक्शन मात्र हुन भन्ने धारणा थियो उहाँको । तर, उहाँले आफ्नो यो धारणा आफ्ना घरपरिवार र आफन्तहरूमा थोपर्नु भएन । तसर्थ उहाँको घरमा वैदिक विधि र सनातन विधि

दुबै विधि बरोबर प्रचलनमा छ । उहाँको छोराको बिहे वैदिक विधिबाट भएको थियो । विवाहमा उपस्थित सबैले यो विधि मन पराए र प्रशंसा गरे । मैले पनि दुई-चारपटक वैदिक पद्धतिको कार्यक्रमहरूमा सहभागी हुने मौका पाएको छु र यसबाट धेरै प्रभावित पनि छु । मूर्ति पूजाबाट मात्र देउता भेटिँदैनन् भन्नेमा म पनि विश्वस्त छु ।

उहाँबाट प्रभावित भएको अर्को एक चिज छ । उहाँको भाषा ज्ञान । उहाँलाई नेपाली, संस्कृत, अंग्रेजी, हिन्दी, असमिया, राजवंशी, बंगाली- यी सात भाषा राम्रोसँग लेख्न, बोल्न आउँथ्यो । यस बाहेक मैथिली, भोजपुरी जस्ता भाषाहरूको पनि सामान्य जानकारी थियो । एस्परेन्तो भाषामा पनि उहाँ रुचि राख्नुहुन्थ्यो, तर मैले उहाँले एस्परेन्तो भाषामा कुरो गरेको चाहिं सुनिन । तर अचम्म लाग्छ, कुनै मान्छे यति धेरै भाषामा पोख्त कसरी हुनसक्ला ! भाषाप्रति रुचि, चासो र लगनशीलता भयो भने असम्भव केही छैन जस्तो लाग्छ । मलाई घरि-घरि लाग्थ्यो कि यति धेरै भाषाको ज्ञान भएको व्यक्तिले नेपाली भाषाको सट्टामा राजवंशी भाषामा विद्यावारिधि गर्नुभएको भए राम्रो हुने थियो कि ? किनकि नेपालीमा पीएचडी त धेरैले गर्नुभएको छ । तर, राजवंशी भाषामा त सम्भवतः कसैले छैन होला । यो विषयमा उहाँसँग कुरो हुँदा उहाँले पीएचडी थेसिसको लागि सुपरभाइजर नपाएर भन्ने जवाफ दिनुभएको थियो । भारतका विभिन्न विश्वविद्यालय तथा धार्मिक भाषिक संघ संस्थाबाट प्रवचन तथा कार्यपत्र प्रस्तुतिका लागि उहाँलाई बोलाउँथे । जहाँ जानुहुन्थ्यो, आफ्नो ज्ञानको छाप छोडेर आउनु हुन्थ्यो । तर दुःख लाग्छ, आफ्नै नेपाल राज्यले भने उहाँको यो विद्वताबाट केही लिन सकेन ।

उहाँ अन्धविश्वासमा विश्वास गर्नु हुन्नथ्यो । उदाहरणका लागिः बिरालोले बाटो काट्ने, निश्चित साइत हेरेर घरबाट निस्किने, फलानो दिन फलानो काम गर्न नहुने आदि जस्ता कुराहरू अन्धविश्वास मात्र हुन् र समाजको प्रगतिको बाधक हुन् भन्नु हुन्थ्यो । साथै, कतिपय कर्मकाण्डहरू, गरुड पुराण जस्ता पुराणहरूमा उहाँको पटक्कै विश्वास थिएन । हरेक विषय र विश्वासलाई आध्यात्मक र वैज्ञानिक दुबै पक्षबाट विचार गर्नुपर्छ र आफूलाई सही लागेको विषय मात्र विश्वास गरेर गर्नुपर्छ भन्नुहुन्थ्यो । उहाँले यस सम्बन्धमा विभिन्न पत्रपत्रिकाहरूमा तर्कसंगत लेखहरू प्रकाशित गर्नुभएको छ । उहाँका लेखहरू कोरा तर्कका आधारमा मात्र होइन, अपितु विभिन्न आध्यात्मिक, धार्मिक र वैज्ञानिक तथ्यहरू समेतको आधारमा लेखिएका छन् । उहाँको यो भनाइ र सिद्धान्तले मलाई पनि धेरै प्रभावित गरेको

छ । मैले पनि शनैःशनैः आफूले विश्वास गर्दै आएका अन्धविश्वासहरू छोड्दै आएको छु ।

उहाँसँगै धेरै ठाउँहरू घुम्न जान पाइयो । पारिवारिक भेटघाट होस् वा मात्र घुमघामका लागि होस्, उहाँ हामीसँग जान रुचाउनु हुन्थ्यो । हामी पनि कम्फर्टेबल महसूस गर्थ्यौं । उहाँको साथमा भारतको असम, मेघालय तथा नेपालको सोलुखुम्बु समेत पुगियो । झापाका स्थानीय ठाउँहरू त त्यसै पनि गई नै हालिन्थ्यो । जहाँ गए पनि त्यहाँको भूगोल र इतिहासको विषयमा उहाँलाई ज्ञान हुने तथा थाहा नभएको विषय बुझ्न चाहने उहाँको बानी थियो । पहिलो पटक उहाँसँग असम जाँदा हरेक ठाउँमा उहाँका साथीभाइ आफन्तहरूले उहाँलाई गर्ने स्वागत र उहाँप्रति व्यक्त गर्ने सम्मानले म अत्यन्तै प्रभावित हुन्थें - अचम्म पनि लाग्थ्यो ! उहाँको मृदुभाषी स्वभाव, सबैप्रति आदर तथा सम्मान गर्ने बानी, सबैको ख्याल गर्ने प्रवृत्तिका कारण उहाँ साथीभाइ इष्टमित्रहरू सबैको केन्द्रविन्दु हुनुहुन्थ्यो । वास्तवमा घर ससुराली तथा मावली सबैतिरका आफन्तहरूको रानो नै हुनुहुन्थ्यो- उहाँ । पिता असमदेखि काठमाण्डौसम्म फैलिएका सम्पूर्ण आफन्त तथा इष्टमित्रहरू बीचको सेतुको रूपमा रहनुभएको थियो । अब यो रिक्तता पूर्ति हुन गाह्रो छ ।

**अन्तिम दिनहरू**

२०७६ सालको दशैंमा पिताका छोरा र छोरीतिरका बुहारी ज्वाइँहरू तथा नाति-नातिनाहरू हामी सबै मोरङ्ग जिल्लामा रहनुहुने धेरै आफन्तहरूकोमा टीका लगाउन गयौं । दुई वटा गाडीमा हामी अटाएर बिराटनगर तथा रतुवामाई नगरपालिका क्षेत्रमा रहनुहुने विभिन्न नातेदारहरूकोमा गएका थियौं । उहाँकै प्रस्तावमा हामी गएका थियौं । उहाँका छोरा-छोरीहरूको विवाह भएको यतिका वर्ष बितेको थियो, तर किन यसैपालि उहाँले जाउँ भनेर भन्नुभयो ?- त्यतिखेर ख्यालै भएन; यो त उहाँको अन्तिम दशैं रहेछ र पो !

त्यसबेला उहाँ निकै दुब्लाइसक्नु भएको थियो । हृष्टपुष्ट शरीर क्षीण हुँदै गएको थियो । दशैं लगत्तै उहाँ स्वास्थ्य जाँच गर्न बिराटनगर नोबेल हस्पिटल जानुभयो । चिकित्सकहरूले केही परीक्षणहरू पश्चात् ग्यास्टिक भएको भनी ग्याष्टिकको औषधि चलाए । तर, १५-२० दिनसम्म औषधि सेवन गर्दा पनि उहाँको स्वास्थ्यमा सुधार हुन नसकेपछि उहाँकी जेठी छोरी योगिताले भद्रपुरस्थित ओमसाई पाथीभरा हस्पताल लगिन् । त्यहाँ चिकित्सकहरूले विभिन्न जाँचहरू

गरे, दोहोऱ्याइ-दोहोऱ्याइकन जाँचहरू भए र अन्ततोगत्वा डाक्टर कपुरी दाजुभाइले उहाँलाई प्यान्क्रियाजको क्यान्सर भएको पत्तो लगाई सो क्यान्सर लिवरसम्म फैलिएको र संक्रमण अन्तिम स्टेजमा पुगेको हो भन्ने निष्कर्ष निकाल्दै भक्तपुर वा चितवन जाने सल्लाह दिए । उहाँलाई तुरुन्त काठमाण्डौ लगियो । भक्तपुर क्यान्सर अस्पतालले थप जाँच गरायो र डाक्टर कपुरी दाजुभाइकै शंकालाई सही ठहऱ्यायो ।

अब उपचार शुरु गर्नुपर्ने भयो । उपचारका लागि तीन वटा पद्धति रहेछन्- केमोथेरापी, रेडिएशन तथा अपरेशन । उहाँको अवस्था रेडिएशन र अपरेशनका लागि उपयुक्त थिएन । तसर्थ केमोथेरापी गर्नुपर्ने भयो । तर, केमोबाट उहाँलाई सन्चो हुन्छ भन्नेमा चिकित्सकहरू पनि विश्वस्त हुन सक्नुभएन । के गर्ने भन्ने सम्बन्धमा हामीले नेपालका यस रोगका धेरै विशेषज्ञ चिकित्सक तथा विदेशमा रहनुभएका आफन्तहरूलाई समेत रिपोर्ट पठाएर त्यताका चिकित्सकहरूसँग पनि राय लियौं । यसैबीच कसरी हो, उहाँले पनि आफ्नो रोगको बारेमा थाहा पाउनुभएछ । उहाँले पनि केमो लिन मान्नु भएन । तर, उपचार त गर्नु नै थियो । कसरी गर्ने ?

केमो, रेडिएशन र अप्रेशन तीनै विधि प्रयोग गर्न नसकिने भएपछि उहाँलाई भारत लखनउको होमियोपेथिक डाक्टरकोमा लाने निर्णय भयो र २०७६ मंसिरमा उहाँलाई लखनउ लगियो । उहाँसँगै उहाँको कान्छी बहिनी उषा र छोरा यशवन्तले लिएर जानुभयो । लखनउमा डाक्टरले औषधि दिनुका साथै राम्रो काउन्सिलिङ पनि गरेछन् क्यारे, उहाँ एकदम फ्रेस भएर फर्किनुभयो । हामी पनि खुशी भयौं । तर, त्यो खुशी धेरै दिन टिकेन । लखनउबाट फर्केको तेस्रो हप्तादेखि फेरि अप्ठेरो महसूस गर्नुभयो । लखनउको दबाई खाएको करीब एक महिनाजति भएको थियो । एक दिन निकै साह्रो पाऱ्यो । एकदमै दुख्यो भन्नुभयो । अनि उहाँले नै भारत राजस्थानमा रहेको नवग्रह आश्रममा जाने इच्छा व्यक्त गरेपछि हामीले उहाँलाई लिएर गयौं । त्यहाँसम्म पुग्न कठिन त थियो, तर हामीले लग्यौं । उहाँ, आमा, योगिता र म चार जना जाने भयौं । सधैं उहाँसँग घुम्न जाँदा निकै उत्साह, उमंग र खुशी हुन्थ्यौं भने यसपटक भने हामी दुःखी र केही आशावादी थियौं ।

यहाँबाट सिधै राजस्थान नपुगिने भएकोले हाम्रो यात्राको योजना यसप्रकार थियो- प्लेनमा बाग्डोगराबाट गुवाहाटी, गुवाहाटीबाट जयपुर, जयपुरमा एक रात बसेर भोलिपल्ट रेलमा भिलवाडा भन्ने स्थान, त्यहाँ एक रात बसेर नवग्रह आश्रम

पुग्नेगरी टिकट गरियो । गुवाहाटीमा सात घण्टाको ट्रान्जिट थियो, त्यसैले त्यहाँ एयरपोर्ट बाहिर एउटा लजमा आराम गर्ने योजना थियो । गुवाहाटीको लजमा उहाँलाई भेट्न असमको टाढा टाढाबाट करीब ४-५ घण्टाको बाटो तय गरेर आफन्तहरू आउनुभएको थियो । उहाँहरूलाई देखेर पिता निकै खुशी हुनुभएको थियो । अन्ततोगत्वा हामी नवग्रह आश्रम भिलवाडा पुग्यौं । त्यहाँ सामान्य काउन्सिलिङपछि औषधि प्रदान गरियो । त्यो लिएर हामी दिल्लीतर्फ प्रस्थान गर्‍यौं । रेलमा हामी सँगैको बोगीमा एक युवक पनि थिए । गफका क्रममा पिताले ऊ सँग करीब चार-पाँच मिनेट गफ गर्नुभयो । तर, त्यो छोटो बातचितमै ऊ यति प्रभावित भएछ कि छुट्ने बेलामा पिताको चरण स्पर्श गरेर गयो !

दिल्ली आएपछि प्लेनको टिकट नपाएकोले दुई रात दिल्ली बस्नु पर्‍यो । दिल्ली नजिक हरियाणामा नयाँ ठूलो क्यान्सर अस्पताल खुलेको रहेछ । पितालाई त्यहाँ एकपटक लाने कि भनेर काठमाण्डौबाट उहाँका छोरा यशवन्त दाजुले फोन गर्नुभो । पितालाई सुनायौं, तर उहाँले कहीं जान्न भन्नुभयो । राजस्थानबाट उहाँलाई सिधै रामदेवको आश्रम हरिद्वार पनि लाने प्रयास गरेका थियौं, तर टिकट नपाएकोले लान सकिएन । दिल्ली आएपछि जाने कि भन्ने कुरो पनि भयो । तर, उहाँ निकै शिथिल भइसक्नुभएको थियो । त्यसैले त्यता पनि गइएन र सिधै झापा घर आयौं । यस बीचमा उहाँलाई नदुखोस् भनेर पेनकिलर ख्वाइरहेकै थियौं । तर, दिल्लीबाट फर्केपछि उहाँको दुखाइ पनि बढिरह्यो र झन्-झन् कमजोर हुँदै जानुभयो । २०७६ माघ १० गतेदेखि उहाँ ओच्छ्यानबाट उठ्न नसक्ने हुनुभयो । अन्ततः २०७६ माघ १५ गते हाम्रो परिवारको दियो निभ्यो, उहाँले हामी सबैलाई छोडेर जानुभयो ।

**केही इच्छाहरू अधुरै रहे**

भनिन्छ, मृत्यु अन्तिम सत्य हो । जो जन्मिन्छ, एक दिन मर्नै पर्छ । तर, मानिस मर्नका लागि मात्र जन्मेको भने हैन । जन्म र मृत्युका बीचमा मानिस बाँचेको हुन्छ, उसले कर्म गरेको हुन्छ, विभिन्न इच्छा आकांक्षाहरू राखेको हुन्छ । आफ्ना सम्पूर्ण इच्छाहरू पूरा भएर मर्ने भाग्यमानी मानिस कमै हुन्छन् । अधिकांशको मृत्युको दिनसम्म अधुरा इच्छाहरू रहिरहेका हुन्छन् । तर, ती इच्छा नितान्त निजी स्वार्थसँग सम्बन्धित छन् कि बृहद् सामाजिक हितमा केन्द्रित छन् भन्ने महत्वपूर्ण हुन्छ । हाम्रा पिता पनि अधुरा इच्छाहरू लिएरै जानुभयो । उहाँसँगको संसर्गमा

मैले बुझेको उहाँको एक इच्छा folklorists (लोकवार्ता) सम्बन्धी सिद्धान्तहरू सम्बन्धी पुस्तक निकाल्ने थियो ।

उहाँले नेपाली लोकसाहित्य (Folklore) मा पीएचडी गर्नुभएको थियो । Folklore सँग सम्बन्धित धेरै पुस्तकहरू उहाँले अध्ययन गर्नुभएको थियो । तर, folklore सँग सम्बन्धित सैद्धान्तिक विषयहरू समेटिएका पुस्तकहरू कम छन् र नेपाली भाषामा त छँदै छैनन् । प्रायः सबै अमेरिकन र बृटिश लेखकहरूका मात्र छन्, तर नेपालमा उपलब्ध छैनन् भनेर उहाँले मलाई भन्नुभएको थियो । उहाँलाई folkloristic सम्बन्धी एउटा गहकिलो पुस्तक लेख्ने इच्छा थियो । त्यसका लागि reference materials को आवश्यकता थियो । यस सम्बन्धी सन्दर्भ सामग्रीहरू नपाइने वा कम पाइने भएकोले इन्टरनेटबाट अनलाइन मगाउने प्रयास पनि गरियो । तर, नेपालमा अनलाइन डेलिभरी कसरी गराउने, हामीले भेउ पाएनौं । यही बेला केही दिनका लागि म र मेरी श्रीमती बेलायत गयौं । त्यहाँ पनि मेनचेस्टर शहरमा खोज्ने प्रयास गऱ्यौं, तर त्यो किताब पाइएन । बूक स्टोरमा सोध्दा अनलाइन मगाउनुपर्छ यस्ता किताबहरू भनेर जवाफ दिए । तसर्थ उहाँलाई folkloristic सम्बन्धी पुस्तक ल्याइदिन सकिएन । तैपनि उहाँले इन्टरनेटबाट खोज्दै तथा अन्य उपलब्ध सन्दर्भ सामग्रीको आधारमा लेख्न थाल्नुभयो । तर, दुर्भाग्य... दुई सय पृष्ठ टाइप गरेपछि कम्प्युटरको गडबडीले सबै डिलिट भयो । पहिलो २०-२२ पेज मात्र रिकभर भयो । त्यस दिन उहाँ निकै निराश हुनुभएको थियो । यदि यसरी डिलिट नभएको भए शायद पुस्तक तयार हुने थियो होला ।

उहाँले बंगाली भाषामा लेखिएको 'प्राचीन गीता' नामक ग्रन्थको नेपालीमा अनुवाद गर्नुभएको थियो । उहाँका अनुसार, हाम्रो धार्मिक ग्रन्थ गीतामा अहिले भएका १००८ श्लोक शुरुमा थिएनन् । जब पहिले गीता ग्रन्थ तयार गरियो, त्यसबखत थोरै श्लोकहरू थिए । समयक्रममा यसमा श्लोकहरू थप गर्दै गइयो र अहिलेको स्वरूपमा भगवत् गीता तयार भयो । यही प्राचीन गीता पनि उहाँले नेपाली भाषामा प्रकाशन गर्ने इच्छा व्यक्त गर्नुभएको थियो । उहाँको पाण्डुलिपिबाट टाइप गरी पुस्तिकाको रूपमा तयार गऱ्यौं, तर विविध कारणले प्रकाशन गर्न सकिएन । यसलाई उहाँको प्रथम वार्षिकीका दिनमा प्रकाशन गर्ने लक्ष्य लिएका छौं ।

पिता लोकसाहित्य तथा लोकवार्तामा अभिरुचि राख्ने भएकोले उहाँलाई धेरै जातजातिका विषयमा थाहा थियो । पूर्वी नेपालका जातजाति तथा पूर्वोत्तर

भारतका विभिन्न जातजातिहरूको बारेमा उहाँलाई विशेष जानकारी थियो । उहाँसँग पूर्वोत्तर भारतका असम मेघालय मणिपुर लगायतका राज्यहरू भ्रमण गर्ने इच्छा थियो । विशेषतः नेपाली भाषीहरू कसरी बसेका रहेछन् र स्थानीय जनजातिहरूसँग कसरी मिलेर बसेका रहेछन् भनेर हेर्ने निकै इच्छा थियो, जुन पूरा हुन सकेन ।

पिता एक सिद्धान्तवादी व्यक्ति हुनुहुन्थ्यो । धार्मिक, सामाजिक विषयमा उहाँसँग धेरै कुराहरू सिक्न बाँकी नै थियो । जीवनका सम्बन्धमा उहाँको दृष्टकोण तथा सिद्धान्तहरू मैले बल्ल बुझ्दै थिएँ । उहाँसँग अरु धेरै विषयहरूमा अन्तरक्रिया गर्ने इच्छा थियो । तर, समयभन्दा निकै अगाडि उहाँले हामी सबैलाई छोडेर जानुभयो ।

अलबिदा पिता ! हामी पनि आउने त्यहीं नै हो । फेरि भेट भइ नै हाल्नेछ हाम्रो । तबसम्म सुखका साथ रहनुहोला । हार्दिक श्रद्धाञ्जलि छ ।

*- गायत्री मन्दिर टोल, भद्रपुर ७ (झापा)*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका जेठो ज्वाइँ हुनुहुन्छ)*



परिना चापागाई

# सरस्वतीका वरद्पुत्र 'पिता'

सरस्वतीका वरद्पुत्र 'पिता' सरस्वती पूजाकै दिन आफूसँग सुपुत्रकासाथ विवाहको कुरा छिन्नका लागि चलनचल्ती अनुसार जनै-सुपारी गर्न आउँदा मेरो पहिलो भेट भएको थियो । हँसिलो अनुहार र बोलिरहनुपर्ने पिता त्यो दिन जनै सुपारीको कार्यक्रम सकिना साथ एक्लै मलाई भेटी उहाँको छोराले मलाई पढाउन, पाल्न नसकेमा म नै मेरो पेन्सनले पाल्छु, पढाउँछु; ढुक्क भएर मेरो घरमा आऊ भनी सम्झाएको आजसम्म पनि मेरो मानसपटलबाट हटेको छैन ।

विवाहपश्चात् म र श्रीमान् काठमाडौं बस्दा मेरो पढाइ बारे चिन्ता लिइराख्नु हुन्थ्यो । म त्यो बेला स्नातकोत्तर द्वितीय वर्ष अध्ययनरत थिएँ र प्रत्येक बिहान बुबा-छोराबीच बिहान ४ बजे गफ हुने गर्थ्यो । प्रत्येक पटक चासोस्वरूप बुहारी उठिन् कि उठिनन् ? उठेर के कतिबेर पढ्ने गर्छिन् ?-भनेर श्रीमान्लाई सोधिरहँदा आशा अनुरूप नभएकोले डराउँथे, अगाडि पर्दिन थिएँ । म डराएको देखेर श्रीमान् हाँस्नुहुन्थ्यो । मेरो श्रीमान् म गर्भवती भएको केही महिनामै जापान जाने हुनुभयो । त्यही कारणले म जान पाइन र (काठमाडौंमै माइती घरमा) जापानिज भाषाको कक्षा र प्रसूतिका लागि नियमित जाँचको क्रममा माइती घरमा नै बस्ने गर्थें । त्यो बेला (खासै आवश्यकता नभएको र जापानबाट पनि पठाउनु भएको अवगत हुँदाहुँदै ) पनि मेरो खाता नं. मागिकन हाम्रो कर्त्तव्य र अधिकार भएकोले भन्दै छोराको भूमिकाको मतलब नराखी पैसा पठाउने गर्नुहुन्थ्यो ।

पिताले सधैं नै पढेका र पढ्ने इच्छा भएकाहरूलाई एकदमै इज्जत र उत्प्रेरित गर्ने गर्नुभएको पाएँ । एउटा सानो उदाहरण : हाम्रो घरमा हालसम्म पनि मलाई घरको काममा सघाउन आउने सहयोगी बहिनी सावित्रीको उदाहरण दिएर सबैलाई उत्प्रेरित गर्दै भन्ने गर्नुहुन्थ्यो । उसले आफ्नी छोरीलाई इंग्लिश बोर्डिङ स्कूलमा पढाउने खर्चका लागि मात्र भए पनि दुई वटा घरमा काम सघाउँछिन् र एक दिन आफ्नो श्रीमान्लाई सर्पले डसेका कारणबाट उत्पन्न खर्चले भएको आर्थिक

उथलपुथलले छोरीलाई १/२ महिना पढाउन गाह्रो भएको गुनासो पिताले सुनेपछि उनको छोरीको १/२ महिनाको मासिक शुल्कको जिम्मेवारी आफैले लिने आश्वासन दिई सो दायित्व बहन गर्न चुक्नु भएन ।

विवाहपश्चात् कहिले काठमाडौं र कहिले जापान बसाइले पितासँगको सामीप्यतामै पाएकी नातिनी 'याश्ना'कमै मात्र हजुरबुबासँग रौसिन्थिन् । जब म अर्को नानीको प्रसूति आदि कारणले छोरीलाई छोडी काठमाडौं बस्ने भएँ, त्यो बेला नातिनी-हजुरबुबाको सम्बन्ध प्रगाढ हुन पाएछ । फलस्वरूप पिता आफ्नो उपचारको क्रममा पहिलोपटक काठमाडौं आउँदा नातिनीको प्रशंसायोग्य लीला र तर्कहरूको बयान गर्दा नथाक्ने र भावविह्वल हुँदै सुनाउने गर्नुहुन्थ्यो ।

बिरामी शुरु भएपछि मैले पितालाई एकदमै खुशी देखेको भनेको जब मैले पिताको काखमा आफ्नो नाति (पुत्र तर्फको) राखेको थिएँ । त्यो मैले दिएको अन्तिम अनमोल उपहार भएछ । तर, त्यो खुशी लामो टिक्न सकेन । नातिलाई काखमा पाएको करीब १ महिना नपुग्दै गाह्रो हुन थालिसकेको थियो र नाति २ महिना ४ दिनको हुँदा पिता परमधाम गमन गर्नुभयो ।

एक दिन बिमारले अति गाह्रो हुँदै गर्दा एक्कासी मेरो (सुत्केरी) कोठामा बोल्दै आउनुभयो । त्यो बेला म एक महिनाको सुत्केरी थिएँ । ओछ्यानबाट जुरुक्क उठ्न नसक्ने अवस्थामा थिएँ । सम्बोधनका साथ 'ए पिता आउनु भएछ' मात्र भनें । पिता मलाई हेर्दै ग्लानीभावले मलाई त्यस्तो राम्रो गर्न/गराउन नसकेकोले अर्को जन्ममा चाहिं मेरो छोरी भएर जन्मनु है भनेर जानुभयो । त्यो किन भन्नुभयो, आजसम्म पनि अन्योलमा छु ।

पिताको रहर बुहारीले पनि केही गरेको हेर्ने थियो । त्यो कुरा कुनै न कुनै रूपमा भनिरहनु हुन्थ्यो । लाचारभावले म टार्ने उत्तर दिने गर्थे । 'बुहारीले नगरे पनि नातिनीले गरेर देखाउँछिन् नि ।' पिताले नदेखे पनि त्यो पिताको आशा अनुरूपको परिना कहिले बन्न पाउँला ?

बाह्य समाजका लागि पिता जे जस्तो भए पनि मेरा लागि भने महाभारतको एउटा सानो अंशको रूपमा 'मौकामा हीरा फोर्नुपर्छ' भन्ने सानो कथा पढेको थिएँ । त्यो कथाको कुवेर पात्रको रूपमा मैले पितालाई पाएँ । अन्त्यमा 'सादा जीवन, उच्च विचार'को सही र जल्दोबल्दो उदाहरण हुनुहुन्थ्यो- पिता । उहाँमा सश्रद्धा नमन !

*-मैत्री टोल, चन्द्रगढी (भद्रपुर- १०)*

*(लेखक डा.द्रोणकुमार उपाध्यायकी पुत्रबधू हुनुहुन्छ)*



डा. पुष्पलाल होमागाई

# द्रोण भिनाजुको सम्झनामा

सामाजिक र सांस्कृतिक एकरूपता साथै खुल्ला सीमाको कारणले नेपालबाट भारत जाने र पुनः त्यहाँबाट समयक्रममा आफ्नै देशमा बसाइँ सरी आउने कार्य नेपालीहरूका लागि परापूर्वकालदेखि चलिआएको हो । यही क्रममा गंगाधर पौडेल पनि भोजपुर, दिङ्लाबाट भारतको पूर्वी प्रान्त असमको दरंग जिल्ला, बटियामारीमा बसाइँ सरेका थिए । उहाँ संस्कृत भाषाका पारखी साथै शास्त्री भएका कारणले आजभन्दा करीब ७० वर्ष पहिले बटियामारीमा संस्कृत अध्ययनका लागि संस्कृत महाविद्यालय (टोल) को स्थापना गरेका थिए । उनका छोरा टीकाराम पौडेलले पनि संस्कृतमा शास्त्री गरेका थिए। वि.सं. २००६ असार ५ गते बुबा टीकाराम पौडेल र आमा भेजमायाका

एक मात्र छोराको रूपमा हालको शोणितपुर जिल्ला, बिहाली बटियामारीमा द्रोणकुमार पौडेलको जन्म भयो । कक्षा- ७ सम्मको पढाइ बटियामारीमै भएको र पछि बुबाको जागिरको सिलसिलामा असमको उदालगुडी सर्नु भएकोले त्यहींबाट एस.एल.सी. गर्नुभयो । सन १९६८ मा आई.ए. र सन् १९७१ मा दरंग कलेज, तेजपुर, गुवाहाटी विश्वविद्यालयबाट बी.ए. गर्नुभयो । नेपाली भाषालाई भारतको संविधानको आठौं सूचीमा (MIL - Mother Indian Language का रूपमा) समावेश भएपछि त्यहाँका नेपालीभाषी विद्यार्थी भएको विद्यालयमा नेपाली माध्यममा पढ्न पाइन्छ । द्रोण पौडेलको सानैदेखि असममा जन्मिइ-हुर्केर पनि नेपाली भाषाप्रतिको अगाध लगावको कारणले कलेजमा नियमित पढाइ नभए पनि बी.ए.मा नेपाली भाषा मेजर विषयको रूपमा अध्ययन गर्नुभएको थियो । सोही कारणले त्रिभुवन विश्वविद्यालय काठमाण्डौबाट सन् १९७३ मा नेपाली विषयमा स्नातकोत्तर गर्नुभएको थियो ।

एम.ए. गरिसकेपछि पुनः असमको उच्च माध्यमिक विद्यालयमा अध्यापन

गर्नुभएको थियो । २०३४ साल फाल्गुन २७ गते मेरी सानीआमा-बुवाको जेष्ठ सुपुत्री मीरा खनालसित विवाह गर्नुभयो । नेपाली साहित्यका आजीवन साधक द्रोण भिनाजुसँगको पारिवारिक सम्बन्ध भएपछि पहिलो भेट चन्द्रगढीको मैत्री टोलमा २०४० सालतिर भएको थियो । त्यसपछिका सबैजसो भेटमा लोकसाहित्य र लोकसंस्कृतिका सारथिका रूपमा सधैं समर्पित भएर अध्ययन-अध्यापन तथा लेखन कार्यमा बिताएको पाउने गरेको थिएँ । असमिया, बंगाली, हिन्दी, नेपाली, संस्कृत र अंग्रेजी लगायत भाषाका ज्ञाता हुनुहुन्थ्यो । यी सबै भाषाहरूमा उहाँको कमल चल्थ्यो । वि.सं. २०४८ देखि २०४९ सम्म पद्मकन्या क्याम्पस, बागबजार काठमाण्डौमा पनि अध्यापन गर्नुभयो । अध्यापनको क्रममा मेची बहुमुखी क्याम्पसमा नेपाली विभागको विभागीय प्रमुख भई धेरै वर्षसम्म सेवा गर्नुभयो । वि.सं. २०४२ देखि २ वर्षका लागि शैक्षिक प्रशासन हेर्न सहायक क्याम्पस-प्रमुख भई आफ्नो कार्यकुशलता देखाउन सफल हुनुभएको देखिन्छ । वि.सं. २०३८ देखि २०६९ सालसम्म लामो अवधि मेची बहुमुखी क्याम्पस, भद्रपुरमा अध्यापन गरी त्यहींबाट अवकाश प्राप्त गर्नुभएको थियो ।

उहाँले वि.सं. २०६१ मा उत्तरबङ्ग विश्वविद्यालय, पश्चिम बङ्गाल (भारत) बाट नेपाली सवाई विधामा विद्यावारिधि गर्नुभयो । उत्तरबङ्ग विश्वविद्यालयका नेपाली विभागमा प्रा.डा. भीमकान्त उपाध्यायलाई द्रोण सरको अध्ययनसित जोड्ने गरिन्छ ।

आफन्त, इष्टमित्र, छरछिमेकका विवाह, ब्रतबन्ध लगायतका सामाजिक एवम् सांस्कृतिक कार्यक्रममा उहाँको उपस्थिति अग्रणी र अविच्छिन्न रूपमा भएको मैले देखेको छु । उहाँ शुद्ध शाकाहारी भएको तथा मेरो खानपानसित मिलेको थियो । साथै, मेची क्याम्पसमा १२ वर्षसम्म सँगै अध्यापन गरेकोले भिनाजुप्रतिको आत्मीय सम्बन्ध अटुट रहेको थियो । आज पनि ती सम्झनाहरूले उहाँ यो संसारमा हुनुहुन्न जस्तो लाग्दैन ।

उहाँका प्रकाशित कृति आठ वटा क्रमशः नवमी, राजवंशी परिचय, आदर्श नेपाली व्याकरण, भाषिक चिन्तन, केही साधक : केही साधना, लोकवार्ता : लोककै चर्चा, लोकवार्ता सिद्धान्त : नेपाली सन्दर्भ, सवाई काव्यको सैद्धान्तिक चिनारी, भारतीय नेपाली साहित्यको ऐतिहासिक रूपरेखा (साहित्य इतिहास) हुन् । साथै, उहाँको विभिन्न राष्ट्रिय तथा अन्तर्राष्ट्रिय पत्रपत्रिकाहरूमा नेपाली, हिन्दी, असमिया र अंग्रेजी भाषामा लेख-रचना प्रकाशित भएका छन् ।

उहाँ समाजसित धेरै नै घुलमिल भएको पाइन्छ । २०४८ सालमा भिनाजुसित काठमाण्डौमा भेटघाट भई घट्टेकुलो, डिल्लीबजार, पुतलीसडक हिंड्दै जाँदा बाटामा विभिन्न व्यक्तिहरूसित चिनजान र बोलेको देख्दा, उहाँ झापा बसे पनि मोरङ, झापा, सुनसरी र काठमाण्डौ आदि ठाउँमा बस्नेहरूसँगको हाई-हेल्लोको सम्बन्धले मिलनसार बहुमुखी व्यक्तित्वका रूपमा परिचित हुनुहुन्थ्यो ।

कहिलेकाहीं दूरभाषमा कुरा गर्दा मेची क्याम्पसमा अध्यापन गर्दा होस् वा अवकाश प्राप्त भएपछि होस्; भाषासेवीका रूपमा उहाँले नेपाल र भारतका विभिन्न ठाउँमा सेमिनार, गोष्ठी आदिमा भाग लिएर आएको जवाफ आउँथ्यो । भ्रमण शिक्षाको अभिन्न अंग हो भन्ने मान्यता राख्ने उहाँको व्यावहारिक जीवनले देखाउँछ । उहाँको नेतृत्वमा क्याम्पसका विद्यार्थीलाई लिएर भारतको विभिन्न ठाउँमा शैक्षिक भ्रमण गराउनुभएको कुरा ताजै छ । अतिरिक्त क्रियाकलापमा उहाँले देखाएको सक्रियतामा क्याम्पसमा विभिन्न हाजिर-जवाफ प्रतियोगिता हुने गर्थ्यो ।

घरमा जाँदा जहिले पनि भिनाजुका हातमा कपी-कलम र छेउमा ल्यापटप साथमा भएकोले उहाँको अटुट अध्ययनशीलता झल्किन्थ्यो । भिनाजुसँगको अन्तिम भेट २०७६ सालको विजयादशमीका दिन निजी निवासमा भएको थियो । उहाँको स्वास्थ्य स्थितिबारे बुझ्दा, 'दिपुले अन्तिम रिपोर्ट भन्या छैन, तर मेरो स्वास्थ्यमा सुधार हुन गाह्रो हुन्छ होला' भन्नुभयो । त्यसको ४ महिनापछि माघ १५ गते दुःखद खबर सुनियो । उहाँका आदर्शबाट प्रभावित भएर आफ्ना १३ दिने दाजुभाइहरूले मृत्यु संस्कारको १० औं पूण्यतिथिमा सूर्तीजन्य लागू पदार्थ सदाका लागि त्याग्ने दृढसंकल्प गरेका छन् ।

सादा जीवन, उच्च विचारका हिमायती उहाँ समाजका लोकप्रिय व्यक्तित्वका रूपमा परिचित हुनहुन्थ्यो । आफ्ना कृति, उपदेश, संस्कार, सभ्यता र व्यक्तित्व आदिका माध्यमले उहाँ हामीमाझ फैलिएर बाँचिरहनु भएको छ । भिनाजुका यी सबै कार्यहरूले उहाँको अमरत्व प्राप्त भइरहने छ भन्ने विश्वासका साथ उहाँको आत्माले चिरशान्ति सहित बैकुण्ठवास गरोस् भनी श्री पशुपतिनाथमा प्रार्थना गर्दछु ।

*(लेखक डा.द्रोणकुमार उपाध्यायका परिवार निकट हुनुहुन्छ)*



बलराम पौडेल

# द्रोण दाजु

मैले सन् १९७७ मा उदालगुढी हाइस्कूल, असमबाट हाइस्कूलको अन्तिम परीक्षा दिंदा द्रोणकुमार पौडेल सोही विद्यालयमा अध्यापन गर्नु हुँदोरहेछ। उसबेला उहाँसँग मेरो खासै चिनजान थिएन। त्यसको दुई वर्षपछि म नेपाल आएँ। नेपालमा कर्मथलो बनाएको भद्रपुरमा मेरो बसोबास थियो। सोही बखत सम्भवतः वि.सं.२०४० तिर द्रोण पौडेल असमबाट आएर चन्द्रगढीमा बसोबास गरेको थाहा पाएँ। मलाई प्रष्ट थाहा छैन, सोही समयको अन्तरालमा मेरो सामान्य भेटघाट र चिनजान भयो। स्वभावैले असमबाट भन्नासाथ हामीमा को, कहाँबाट भन्ने उत्सुकता जाग्ने गर्दछ र द्रोण दाजु त्यस मानेमा अझ बढी चासो र सद् भाव राख्ने व्यक्तिको रूपमा जान्दछु। त्यसपछि हाम्रो भेटघाट पातलो नै रह्यो।

रोजगारीको सिलसिलामा वि.सं. २०४८ मा म चन्द्रगढी कृषि विकास बैंकमा पदस्थापन भएपछि दाजुसँगको सामीप्यता बढ्यो अनि अझ बढी घुलमिल भयो। हुन त दाजुको र मेरो असमको थातथलो त्यति धेरै टाढा थिएन, यद्यपि मेरो उमेर अनि अध्ययनको कारणले सबैतिरको घुमफिर र चिनजान हुन सकेन। तर, जब म उहाँको नजिक भएँ, तब मेरो आफ्नो घर बन्यो- द्रोण पौडेलको घर। नजिकबाट जान्नेहरूका लागि द्रोण दाजुले सरल, सरस, विद्वान्, उच्च विचारको व्यक्तित्वका रूपमा आफूलाई चिनाउन सफल हुनुभयो। मेची बहुमुखी क्याम्पसको प्राध्यापक रहँदासम्म यति भद्र अनि सरल स्वभावको व्यक्तित्व मैले शायदै देखेको हुँला। यो पहिचान समाजभित्र, कलेजभित्र त थियो नै; साथै पारिवारिक र पौडेल समाजले पनि उहाँलाई एक उच्च आदर्शवान व्यक्तिको रूपमा लिएको मैले पाएको छु।

चन्द्रगढीमा रहँदा मैले नेपाली विषयमा स्नातकोत्तर गर्ने अभिलाषा उहाँ समक्ष राखें। दाजु नेपाली विषयकै प्राध्यापक भएको हुनाले मलाई सहज होला भन्ने मेरो भित्री चाहना थियो। मेरो विचारमा उहाँको सहमति भयो।

मलाई उहाँले पछि उत्तरबंग विश्वविद्यालयमा नाम दर्ता गर्न सल्लाह दिनुभयो । त्यतिमात्र कहाँ हो र, मलाई उक्त विश्वविद्यालयका नेपाली विभागका प्रमुख भीमकान्त उपाध्यायको घरमा समेत पुऱ्याउनु भएर अध्ययनका लागि सहजीकरण गर्नुभयो । वि.सं. २०२८/२९ तिर त्रिभुवन विश्वविद्यालमा नेपाली विषयमा उहाँको अध्ययन गर्दाका धेरै पुस्तक अनि तत्सम्बन्धी नोटहरू उपलब्ध गराएर दाजुले मलाई आभारी बनाउनुभएको छ । भद्रपुर क्याम्पसमा प्राध्यापन गर्दाका दाजुका धेरै विषयहरू यस स्मारिकामा आउने नै छन् ।

पारिवारिक रूपमा मेरो घनिष्टता करीब २७/२८ वर्षसम्म भयो र अहिले पनि भाउजू तथा भतिजा-भतिजीहरूसँग मेरो उत्तिकै सामीप्यता छ, रहनेछ । यसरी घनिष्टता र पारिवारिक सम्बन्धले पछि पौडेल वंशको वंशावली प्रकाशन गर्ने क्रममा अझ वढी पारिवारिक सम्बन्ध नजिक रहेको खुलासा भयो । त्यो थियो, हामी दुबैको पुर्ख्यौली बिर्ता भोजपुरको दिङला रहेछ । त्यस ठाउँको कटहरे भन्ने बिर्ता नै हामीहरूको पुर्ख्यौली बिर्ता थियो । मेरा पिताजीले भन्नु भएकोले मलाई त्यो ठाउँ थाहा थियो । पछि हेर्दै-कोर्दै जाँदा एउटै बिर्ताका पौडेल भनेपछि अझ बढी भावनात्मक सम्बन्धले तान्यो । यसरी उदालगुडी, असमको सम्बन्ध पछि आएर भोजपुर, दिङलामा टुंगिनुलाई कसरी वर्णन गर्न सक्छु होला र ! यसरी द्रोण दाजुको स्मरण लेखिरहँदा मलाई कता-कता भावनामा बहकिएर नमीठो र अमिलो भएर आउने गर्दछ । यो पारिवारिक सम्बन्धलाई उहाँले हाँक्ने समय अझ धेरै थियो । यो लीलामय संसारबाट यति चाँडै बिदा लिनु होला भन्ने मलाई कदापि लागेको थिएन ।

पछिल्लो समयमा मैले बिर्तामोडबाट काठमाडौंका लागि स्थानान्तरण गर्दैगर्दा दाजुले नमीठो मान्नु भएको थियो । काठमाडौंमा आउँदा-जाँदा मेरो भेटघाट भई नै रहन्थ्यो । म झापा जानुपर्दा चन्द्रगढीमा उहाँलाई भेटघाट नगरी जान्न थिएँ । २०७६ सालको असोज महिनामा मैले फिलिपिन्स जाने अवसर पाएँ । सोही सिलसिलामा चन्द्रगढी जाने काम पर्दा दाजुसँगको भेटघाट नै मेरो अन्तिम उठबस हुन गयो । त्यसबखत मलाई दाजुको घरमा दुई रात सँगै बस्ने मौका मिल्यो । धेरै व्यावहारिक कुरा, जीवनका भोगाइ र पछि हुनसक्ने सम्भावनाका गफगाफ भएको थियो । त्यो सम्झँदै गर्दा दाजुको घरमा अझै भेटघाट होला जस्तो लागिरहन्छ ।

एकाबिहानै उठ्ने अनि केही समय व्यायाम र प्राणायाम उहाँको नित्यकर्म थियो । बौद्धिक वर्गको संगत रहेकोले अन्तिम समयसम्म उहाँको अध्ययन निरन्तर

चलिरहेको बुझेको थिएँ । असमिया, बङ्गाली, भोजपुरी, हिन्दी, अंग्रेजी भाषाका ज्ञाता द्रोण दाजुको भाषिक विद्वताका कारण भारतका धेरै स्थानहरूको भ्रमण र सामाजिक पहिचानले सम्मानित समेत रहनुभयो । लोकसाहित्यमा विद्यावारिधि हासिल गर्नु र विभिन्न भाषाको ज्ञानका कारण उहाँलाई भारतका विभिन्न समुदायले विभिन्न कार्यक्रममा प्रमुख अतिथिको रूपमा निमन्त्रणा गरेको मैले पाएको छु ।

उठबस पातलो भए पनि हामी बीच दूरभाषामा कुराकानी भई नै रहन्थ्यो । पछिल्लो समय मैले दाजुलाई काठमाडौं बसोबास गर्न सुझाएको थिएँ । अन्तिम पटक भेटघाट हुँदा तन्दुरुस्त दाजु भेट भएको एक-आध महिनाभित्रै सञ्चो नभएको खबरले मलाई नरमाइलो लागिरह्यो । यसरी सम्झँदै गर्दा उहाँले 'बलराम ! एकपटक मलाई सुभाष भाइकोमा जान मन छ' भन्नुभएको थियो । सुभाष दाजु मेरो सहोदर जेठो दाजुको बसोबास बंगाइगावँ, असम हो । द्रोण दाजुको प्रस्तावलाई मैले स्वीकार गर्दै केही वर्ष अघि बंगाइगावँ, असम पुऱ्याएको पनि थिएँ । बन्धुबान्धवहरूप्रति उहाँको अति नै प्रेमभाव रहन्थ्यो । भेटघाटमा सबैको सोधीखोजी गर्ने उहाँको स्वभाव थियो । यसले अझ बढी मानिसलाई सामीप्यता राख्दथ्यो । यो द्रोण दाजुको अर्को गुण थियो ।

मैले नजिकबाट जानेको दाजुका विषयमा अझ बढी जानकार व्यक्तित्व धेरै रहनु भएकोले योभन्दा बढी लेखिरहनु उपयुक्त नहोला । यद्यपि द्रोणकुमार उपाध्याय असमको बटियामारीदेखि त्रिभुवन विश्वविद्यालय हुँदै चद्रगढीको बसोबाससम्मका यात्रामा उहाँको बारेमा लिपिबद्ध गरिनुपर्ने धेरै विषयहरू होलान् । मैले थाहा पाएसम्म पछिल्लोपटक कुनै कृति/रचना प्रकाशनको लागि तयारीमा हुनुहुन्थ्यो । त्यसतर्फ हामीले ध्यान दिई पूर्ण गराउन सके उहाँप्रतिको सच्चा श्रद्धासुमन हुने थियो । मलाई द्रोण दाजुले आफ्नो अन्तिम पटकको मेसेन्जर सूचनामा "म इलाजका सिलसिलामा ५ दिनदेखि काठमाडौंमा छु" भनी लेख्नुभएको महिनाभित्रै मेरो अन्तःस्करणमा रहनु हुने दाजुलाई सदाका लागि बिदा गर्नु पर्दा भावविह्वल छु ।

*- खाँदबारी, संखुवासभा*

*हाल : महालक्ष्मी- ४ (ललितपुर)*

*(लेखक डा. द्रोणकुमार उपाध्यायका परिवार निकट हुनुहुन्छ)*



मीनाक्षी

# सम्झनामा फुपाजु

उक्तमस्ति यतः परिवर्तिनी संसारे मृतः को वा न जायते ! मृत्यु प्रकृतेः प्राकृतिक क्रमः अस्ति । तस्मात् न कोऽपि अन्यथा जायते । २०१८ वर्षे अस्माकं परिवारस्य द्वौ आधारौ पितामह-पितामह्यौ च दिवंगतौ । तस्मात् दुःखात् यदा परिवारः प्रभूयमान आसीत् तदैव अस्माकं गृहस्य ज्येष्ठ-श्रेष्ठ मम 'फुपाज्यू' इति दिवंगतः २०२० वर्षे । परिवारस्य कृते तु एतत् बृहती क्षति अस्ति एवञ्च व्यक्तिगतरूपेण मम कारणे अपि । अधुना यदा विद्यावारिधेः समये तस्य निर्देशनस्य महती आवश्यकता आसीत् तदैव सः संसारमेतत् त्यक्त्वा अगच्छत् । फुपाज्यू मम जीवने किदृशी प्रेरणा आसीत् तत् शब्देन वा लेखनेन व्यक्तं कर्तुं न शक्नोमि । अधुना अहं संस्कृतविषये देहली-प्रदेशस्थित जवाहरलाल नेहरु विश्वविद्यालये विद्यावारिधि कृते शोधछात्रा अस्मि । एतावत् पर्यन्तं पठनार्थं यत् प्रेरणा मया प्राप्यते तत् फुपाज्यूतः अधिकैव आसीत् तदपि विशेषतया संस्कृतविषयं नीत्वा । सः अपि संस्कृतपारंगतः नेपालीभाषा मर्मज्ञः ज्ञानी विद्वाञ्च आसीत् । सः सदैव उत्साह वर्धनं करोति स्म । मया सार्धं तस्य व्यवहारः एकः friend philosopher guide इति च आसीत् । अध्ययनविषयं विहाय अपि सः परिवारः, व्यक्तिः, समाजः, विचारः, संगठनम् इति सर्वेषां विषये बहु सरलतया वार्तालापं करोति स्म । मम मनसि किमस्ति, अहं किं चिंतयामि, किमपि विषये मम विचारः किमस्ति इति यदाकदा आवां मिलावः स्म वार्तालापः जायते एव ।

फुपाज्योः नाम डा. द्रोणकुमार पौडेलः इति । भारतवर्षस्य असमप्रदेशस्य अविभक्त-शोणितपुर जनपदस्य बटियामारी इति स्थाने सः जन्मम् अलभत् । तत्पश्चात् ओदालगुरी नामके स्थाने कानिचित् वर्षाणि सः वासमकरोत् । पुनश्च नेपालदेशे गत्वा झापा जनपदे एव तस्य स्थायी निवासम् अभवत् । तत्रैव मेची क्याम्पस मध्ये सः प्राध्यापकतः अवसरं गृहीत्वा अनेकानि पुस्तकानि अलिखत् ।

मम फुपू अपि तत्र एकस्मिन् विद्यालये शिक्षिका रूपेण कार्यमकरोत् प्रधानाध्यापिका भूत्वा सा अवसरं च अगृह्णत् । तेषां त्रयः संतानाः । मम/अस्माकं ज्येष्ठ भ्राता यशवंत नाम्ना, योगिता यवनिका च द्वौ भगिन्यौ । अधुना ते सर्वेः तत्रैव नेपालदेशे एव निवासन्ति ।

फुपाज्योः बैकुंठगमनेन सत्यमेव सम्पूर्ण परिवाराय कृते रिक्तता आनयति । न तु केवलं परिवारः, अपितु समाजे साहित्य जगति अपि एका बहु बृहती अपूरणीय क्षति च अभवत् । तस्य ज्ञानात् तस्य प्रदत्तः शिक्षातः तस्य मार्गदर्शनस्य यत् किञ्चित् अपि यदि वयं अनुकरणं कर्तुं पारयामः तर्हि तदेव तं प्रति अस्माकं पक्षतः श्रद्धा सुमनेन सहितेन मनःपूर्वकः श्रद्धाञ्जलिज्ञापनं भवति ।

।।। ॐ शांतिः ।।।

# सम्झनामा फुपाजु

वासांसि जीर्णानि यथा विहाय
नवानि गृह्णाति नरोऽपराणि ।
तथा शरीराणि विहाय जीर्णा
न्यन्यानि संयाति नवानि देहि ।।

(मीनाक्षी)

*अनुवाद :* **डा.भीम खतिवडा**

भनिएको छ कि “परिवर्तिनि संसारे मृतः को वा न जायते !“ अर्थात् परिवर्तनशील दुनियाँमा कस्को मृत्यु हुँदैन र !

मृत्यु प्रकृतिको स्वाभाविक क्रम हो, त्यसैले मृत्युबाट कोही पनि उम्कन सक्दैन । सन् २०१८ मा हाम्रो परिवारका आधार बनेका हजुरआमा र हजुरबुबा खस्नुभयो । त्यही पीडामा हाम्रो परिवार चुर्लुम्म डुबिरहेकै बखतमा हाम्रो परिवारकै

ज्येष्ठ(श्रेष्ठ फुपाजुको पनि सन् २०२० मा दुःखद निधन भयो । परिवारका लागि त यो ठूलो क्षति छँदैथियो, व्यक्तिगतरूपमा मेरा लागि पनि । जब मेरो विद्यावारिधि अनुसन्धानको समय आयो, उहाँको प्रेरणा र निर्देशनको ठूलो आवश्यकता थियो, त्यहीबेला उहाँले यो संसार नै छाडेर जानुभयो । फुपाजु

मेरा जीवनमा कस्तो प्रेरणाको स्रोत हुनुहुन्थ्यो त्यो कुरा यहाँ शब्दमा वर्णन गरेर अभिव्यक्त गर्न सक्दिनँ। अहिले म दिल्लीस्थित जवाहरलाल नेहरू विश्वविद्यालयकी संस्कृत विषयमा विद्यावारिधि तहकी शोधार्थी बनेकी छु। यहाँसम्म अध्ययनका लागि अझ विशेष गरेर संस्कृत विषय लिएर अध्ययन गर्नका लागि जुन प्रेरणा फुपाजुबाट पाएकी छु, त्यो अविस्मरणीय नै छ। उहाँ स्वयं संस्कृत र नेपाली दुबै भाषाका मर्मज्ञ, विद्वान् हुनुहुन्थ्यो। उहाँ सधैँ हाम्रो उत्साह बढाइदिनुहुन्थ्यो। मसँगको उहाँको व्यवहार एउटा असल साथी र एउटा दार्शनिक निर्देशकजस्तै थियो। अध्ययनको विषयका अतिरिक्त पनि उहाँ परिवार, व्यक्ति, समाज, विचार, संगठन आदि सबै विषयमा अत्यन्त सरलताका साथ कुराकानी गर्नुहुन्थ्यो । मेरा मनमा के छ, म के सोच्छु, कुनै पनि विषयमा मेरो विचार केकस्तो छ भन्नेबारे हाम्रो यदाकदा हुने भेटघाटमा कुरा भइरहन्थ्यो।

फुपाजुको नाम डा० द्रोणकुमार पौडेल हो। भारतको असम प्रान्तको शोणितपुर जिल्लाको बट्यामारी भन्ने ठाउँमा उहाँको जन्म भएको थियो। उहाँ ओदालगुरडी भन्ने ठाउँमा पनि केही वर्ष बस्नुभयो। त्यपछि चाहिँ नेपाल जानुभयो र नेपालको झापा जिल्लामा उहाँको स्थायी बसोबास भयो। झापाकै भद्रपुरमा रहेको मेची बहुमुखी क्याम्पसमा लामो समयसम्म प्राध्यापन गर्नुभयो। प्राध्यापनकै दौरान उहाँले भाषा,साहित्य र संस्कृतिसम्बद्ध धेरै पुस्तकहरू पनि लेख्नुभयो।

मेरी फुपूले पनि त्यहीँको एउटा विद्यालयमा शिक्षिका भएर काम गर्नुभयो। अध्यापनकै क्रममा उहाँले विद्यालयमा प्रधानाध्यापिका भएर सेवा गर्ने सुअवसर पनि पाउनुभयो। मेरा फूपू(फुपाजुका तीनजना छोराछोरी छन्। जेठा छोरा यशवन्त हुन् भने योगिता र यवनिका दुइवटी दिदीबहिनी हुन्। अहिले उनीहरू सबै नेपालमा नै बसोबास गरिरहेका छन्।

फुपाजुको दुःखद निधनले सम्पूर्ण परिवारमा रिक्तता र शून्यता छाएको छ। अझ परिवार मात्र नभएर सिङ्गो समाजमा, त्यसमा पनि साहित्य जगत्मा त कहिल्यै पूर्ति हुन नसक्ने खालको क्षति हुन पुगेको छ। उहाँले दिएको ज्ञान र शिक्षाको मार्गदर्शनलाई हामीले अआफ्नो जीवनमा थोरै भए पनि अनुकरण गर्न सक्यौँ भने त्यही नै उहाँप्रतिको हामी सबैको हार्दिक र सच्चा श्रद्धाञ्जली हुने छ।

।।। ॐ शान्तिः ।।।

*(लेखक डा.द्रोणकुमार उपाध्यायकी भदै साली हुनुहुन्छ)*



यशवन्त पौडेल

# पिताजीका दैनिकी/बानीहरू

पिताजीको सम्पूर्ण व्यक्तित्व बुझ्नलाई उहाँको बिहान उठेदेखि राती सुत्ने बेलासम्मको चर्या के कस्तो थिया ? दैनन्दिन के-के गर्नुहुन्थ्यो भन्ने जानकारी यहाँ चर्चा गर्न चाहें ।

१. **नित्यकर्म** : बिहान सबेरै उठ्नका लागि प्रायःजसो बेलुकी साढे आठ या ढिलोमा नौ बजे शान्त वातावरणमा सुत्नै पर्ने, बिहानको ३ः३० बजे उठेर जुत्ता, टर्चलाइट, एउटा सानो लौरो लिएर प्रातःकालीन हिंडाइ (Morning Walk) ४-५ कि.मि. पूरा गरेर ५ः०० बजे घर छिर्नु हुन्थ्यो । मैले थाहा पाउँदादेखि नै पिता यो नित्यकर्म थियो । यो यात्रामा धेरै वर्षसम्म उहाँलाई साथ दिने रामनाथ बासकोटा, गोविन्द चापागाईं र कहिलेकाहीं अरूसँग गफ गर्दै जानुहुन्थ्यो । त्यसैले परिवारमा छिमेक, टोल, गाउँको खबर सबैभन्दा पहिले र धेरै पितालाई नै थाहा हुन्थ्यो; जुन सान्दर्भिकता र अनुकूलता अनुसार हामी सबैलाई सुनाउनुहुन्थ्यो । यो Morning Walk को दूरी भने घरबाट देवनियाँ खोलाको पुल तथा गार्मेन्ट फ्याक्ट्री भन्दा अझै तल भए पनि एक्लै हिंड्दा अझै सुरक्षित मार्ग (Route) प्रयोग गर्नु हुन्थ्यो । पछि आएर भने आफ्नो लेखनलाई सहयोग पुग्ने चिन्तन गर्न एक्लै हिंड्न मन पराउन थाल्नुभयो ।

प्रातःकालीन हिंडाइपछि, गएको १५-१६ वर्ष यता पतञ्जलीको प्रथम शिविर गरिसकेपछि क्यान्सर हुनु अघिसम्म नियमित थियो । विशेषगरी ३ वटा व्यायाम कपालभाती, अनुलोमविलोम, उदगीत पूर्ण रूपले गर्नुहुन्थ्यो । तर, १५-१६ वर्ष अघिसम्म चाहिं व्यायाम र आसनहरू मलाई थाहा भएसम्म ४०-४१ वर्षदेखि पिताको योगाभ्यास चरमोत्कर्षमा थियो ।

यसपछि पसिना सुक्ने बित्तिकै स्नान गर्ने र भित्री लुगाहरू तुरुन्तै आफ्नै हातले धुनु पर्ने र सुकाएर मात्र उहाँ पूजापाठ शुरु गर्नु हुन्थ्यो । जप गर्दाको मन्त्रोच्चारण

छिटो-छिटो गर्नु भए पनि स्पष्ट भएकोले हामीलाई पनि याद हुने गर्थ्यो ।

२. **खाजा** : जपपछि तुरुन्तै गुलियोरहित विभिन्न आयुर्वेदिक खुराकहरू हालेर चिया जस्तो बनाएर खाने बानी थियो । यसका साथै भुटेको चिउरा धोएर चिनी नहाली खाने गर्नुहुन्थ्यो । यसपछि ल्यापटप लिएर कुनै गर्नुपर्ने खास काम भए गर्ने, नत्र पहिले-पहिले पुस्तक लिएर र पछिल्लो समयमा चाहिं ल्यापटप लिएर कुनै अनुसन्धानमूलक/खोजमूलक काम गर्नु हुन्थ्यो ।

३. **खाना पकाउने** : पिता भान्सा पसेको दिन सबैले मिठो गरी सदा रमाएर खान्थ्यौं ।

एकपटक २०५३ सालको तिहारको कुरा हो । आमा मामाघर जानुभएको थियो । त्यस दिन पिताले बनाउनुभएको तरकारी यति पिरो भयो कि हामीले खान नसकेर लुकाएर फाल्नु परेको थियो ।

भान्सामा सबै सामानहरू आ-आफ्नो ठाउँमा र त्यसलाई राम्रोसँग बिर्को लगाई वा ननासिने गरी राख्नुपर्छ भन्नु हुन्थ्यो । भान्साघरका मात्र सबै औजार र सामानहरू मिलाएर भेटिनेगरी, देखिनेगरी, छुट्टिनेगरी नाम लेखेर राख्ने बानी हामीलाई सानैदेखि सिकाए पनि उहाँले भनेजस्तो गर्न सकिन्नथ्यो ।

४ **लतहरू (अम्मल)** : पिताले स्वयम् स्वीकारेको चुरोट र खैनीका लतहरू त्रि.वि. विश्वविद्यालय पढ्दाका बेलामा भने थियो । मैले जान्दा चाहिं पान पसलवाट सधैं पान खाँदै क्याम्पस जानु हुन्थ्यो । पछि, त्यो पनि छोडेर घरकै पान-सुपारीमा बानी बसाउनुभयो । त्यो पनि ३/४ वर्ष टिक्न सकेन ।

जसरी प्रत्येक दशैं या नव वर्षमा कुनै न कुनै नराम्रा बानीहरू/अम्मलहरू त्याग गर्दै आउनुभएको थियो, त्यसरी नै आफूलाई ठीक लागेको बानी चाहिं शुरु गर्न भने कुनै बेर लाग्दैनथ्यो ।

पत्रिका पढ्ने, गहकिला पुस्तक अध्ययन गरिरहने, टीभीमा समाचार हेर्ने र पछिल्लो समय टीभी.का आरोप-प्रत्यारोप लगाउने बहस जस्ता कार्यक्रमहरू शुरुका वर्षहरूमा रमाइलो माने पनि पछिल्लो ५/७ वर्ष पटक्कै मन पराउनु हुन्नथियो । विदेशी टीभी च्यानलहरूबाट नियमित रूपमा प्रसारण हुने Big Boss बिग बोस जस्ता कार्यक्रमको भने ठूलो विरोधी नै हुनुहुन्थ्यो । उहाँलाई यस्ता कार्यक्रमले नराम्रो मानसिकता सिर्जना हुनाले मानव सभ्यतामाथिकै हमलाको रूपमा बुझाउने चेष्टा गर्नु हुन्थ्यो ।

५. **सफा सुग्घर** : उहाँलाई बस्ने, खाने र लगाउने सबै स्वच्छ र सफा

चाहिन्थ्यो । सेतो लुगामा पहेंलो नदेखिओस् भनी टिनोपाल, नीर लगाउनु हुन्थ्यो । लुगामा सधैं आइरन लगाउनु हुन्थ्यो । खानापछि सधैं सफा गरेकै हुनुपर्थ्यो । आफ्नो निजी सवारीसाधन साइकल, मोटरसाइकल सफा गरिरहनु हुन्थ्यो, टिलिक्क पारेर चलाउनु हुन्थ्यो । कपालमा प्रायः नरिवल या तोरीको तेल लगाउनु हुन्थ्यो । कपाल फुलेपछि कहिले पनि कालो लगाउन मन पराउनु भएन ।

बीचमा केही समय फोहोर सैलुन र त्यसले प्रयोग गर्ने तौलियाका कारणबाट दिक्क भई ऐना हेरी आफ्नो कपाल आफैं काट्ने गर्नुहुन्थ्यो । तर, त्यो लामो समय टिकेन । पछि-पछि कपाल काट्न जाँदा बेरिने तौलिया र बर्कोजस्तो कपडा आफै साथमा लिएर जाने गर्नु हुन्थ्यो ।

६. **मनमा कुरा लुकाएर नराख्ने** : पिता घरबाहिर जस्तो प्रष्ट वक्ता हुनुहुन्थ्यो, घरभित्र पनि प्रष्ट नै हुनुहुन्थ्यो । घरव्यवहारमा कसैको राम्रो/नराम्रो जे देख्यो, त्यही भनिदिनु हुन्थ्यो । कसैलाई बंग्याएर भुक्याएर कुरा गर्न मन नपराउने । जे लागेको र देखेको छ, त्यो उसकै अघि भनिदिनाले छिमेक, आफन्त, नातगोता समेत चिढिने हुन् कि भन्ने डर हामीलाई हुन्थ्यो ।

७. **दयाभाव/करुणाभाव** : कुनै पनि रोगी, गरीब, असहाय, दुःखीप्रति अत्यन्तै सहानुभूति राख्ने पिता आफूले सकेको दिन पाउँदा बडो प्रफुल्लित हुने गर्नु हुन्थ्यो ।

८. **पिताले रोएको** : उषा दिदीको बिहेको बखत बिराटनगरको पिताका साइँला काका पुण्यप्रसाद हजुरबुवाको अवस्थालाई फुपूहरूको विवाहपश्चात् रुने पिता गएको दशकमा आमालाई सम्झेर घरमा सबैले सुनीने गरी रुनुहुन्थ्यो । के भयो भनी हेर्न जाँदा आमाको फोटो हेरी के 'आमाऽऽऽ आमाऽऽऽ' गर्दै विलाप गरेको मात्र देख्थ्यो ।

९. **रिसाएको बेला** : हाम्रो घरमा दुबै जना फुपूहरू र पितामा समेत रिस उठेको बेला जिब्रो बाहिर ल्याएर टोक्ने बानी थियो । जिब्रो टोकेको देख्यो कि हाम्रो सातो नै जान्थ्यो ।

**सीपहरू**

भाषा-साहित्य र अन्यबाहेक क्षमता एवम सीपहरू पिताका विलक्षण प्रतिभाहरू कुनै पर्गेल्न सक्ने व्यक्तित्वले देखेका थिए होलान; तर परिवारमा रहेर पितामा हामीले धेरै दक्षताहरू देख्न पाउनु हाम्रा लागि सौभाग्यको कुरा भयो । जसलाई

सम्झदै जाने प्रयास गर्ने छु । जहाँ हेऱ्यो त्यतै जाने देखेर हामीलाई अरुका पिता पनि त्यस्तै हुन्छन् जस्तो लाग्थ्यो या सामान्य नै लाग्थ्यो । आज आफै बुबातिर हेर्दा र सम्झँदा उदेक लागेको छ ।

**कला र संगीत** : संगीत तर्फ लाग्दा गीत गाउने विभिन्न भाषाका जस्तैः असमिज, बंगाली, नेपाली, हिन्दी विभिन्न लोकझ्याउरे सबै खालका गीत सम्झन पर्दा रवीन्द्रनाथले लेखेको गीत पनि मिठो गाउने/गुन्गुनाउँदो गरी गाएको, सवै हिन्दी गायक रफी, किशोर, लता, उषा, भूपेन हजारिका, अरुणा लामा, नारायण गोपाल आदि हुँदाहुँदै नेपालीका दुई देशभक्ति गीतहरू आफैंले तुरुन्तै लेख्नुभएको थियो । 'एक्लो भएँ भयो' र 'मातृभूमि पितृभूमि' भन्ने गीत रचना मात्र हैन, लय पनि उहाँकै छ आजसम्म पनि ।

त्यसैगरी, वाद्यवादनतिर चैं पितालाई कतै पञ्चेबाजा बजाएको देखेर मैले सानोमा मलाई पनि किन्न लगाएको थिएँ । पिताजीले आफ्नो किशोरावस्थामा संघको एउटा कार्यक्रममा साह्रै मिठोगरी बाँसुरी बजाएको कुरा आज पनि किशोर काका भन्नुहुन्छ । त्यसैगरी, कान्छी फुपूले जान्दाखेरि पिता संगीत-शिक्षक पनि हुने गर्नुहुन्थ्यो रे ! काठमाण्डौबाट एम.ए. गरी फर्किसकेपछि भजनहरू नेपालीमै गाउनु पर्छ भनेर दुर्गा उपासनाको आरती नेपालीमा अनुवाद भएपछि आजसम्म पनि पौडेल बन्धुको दुर्गा पूजामा त्यही नै प्रयोग हुँदै आएको छ । गहिरो संगीतले कुनै पनि व्यक्तिलाई रमाउन र निराशाबाट निकाली जीवनमा प्राण भर्ने काम गर्छ ।

**शारीरिक दक्षता** : पिता खेलकुदमा पनि धेरै खेल कुशलतापूर्वक खेल्न जान्ने । नयाँ भन्ने खेलहरू- टेबलटेनिस, ब्याटमिन्टन, flying Soccer (Disc) मात्र हैन, हामीलाई प्रज्ञा एकेडेमी स्कूलमा पी.टी. समेत सिकाउनु हुन्थ्यो । एकपटक मावल जाँदा स्नानका लागि ब्रम्हपुत्रमा जाँदा डल्फिन जस्तो पौडेको देखेर मैले पनि हाम फालेको थिएँ । सामग्री बिनाका खेलहरू जस्तैः खो आदि धेरै खेलहरूको उहाँलाई ज्ञान थियो । म पनि सानो हुँदा कपिलदेवको टेस्ट क्रिकेट हेर्न पितासँगै चूडामणि रेग्मी सरको घरमा जाने गरेको मलाई राम्रो याद छ ।

मोटो शरीरको भए पनि हलासन, चक्रआसन, मयौर आसान सबै खालका व्यायामपूर्ण योगहरू चालीस-पचास मिनेटसम्म लगाएर गर्नु हुन्थ्यो । पिताले आफ्नो किशोरावस्थामा NCC ट्रेनिंगमा धेरै कुराहरू र भारतकै रा.स्व.सं.को O.T.C. तालिममा भाग लिएर धेरै शारीरिक ज्ञान, सीप, प्रदर्शन गर्न सक्ने र गराउन सक्ने क्षमता हासिल गर्नुभएको मैले पाएँ ।

**घरायसी काम** : 'आफू त किसानको छोरो, म त यस्तै पहिरन लगाउँछु । तँ त प्राध्यापकको छोरा, राम्रो लुगा लगाउनू' भन्नु हुन्थ्यो । त्यसो भन्दा मलाई पेच पर्नु स्वाभाविक नै थियो । मलाई तँ धनी भइस्, म गरीबको छोरा, मलाई यस्तै ठीक छ र सुहाउँछ भनेजस्तो लाग्थ्यो । उहाँले भन्न चाहिं म किसानको छोरा भनेर आफूलाई खेती-किसानी जुगाड घरायसी सम्पूर्ण कुरा थाहा भएको संकेतमूलक सन्देश दिंदै मलाई चैं सिक है भन्न खोज्नुभएको रहेछ । उहाँको घरायसी काम पनि समय तालिका (Schedule) अनुसार हुन्थ्यो । जुन समयमा गर्नु पर्ने हो, त्यो समय मात्र गर्ने उहाँको रुटिनजस्तै थियो । साधन/औजारहरूको हिफाजत र सही ठाउँमा भेट्नेगरी राख्नु पर्ने कडा अनुशासन थियो ।

*(लेखक डा.द्रोणकुमार उपाध्यायका सुपुत्र हुनुहुन्छ हुनुहुन्छ)*



यवनिका पौडेल

# कान्छी छोरीको सम्झनामा पिता

*पिता स्वर्गः पिता धर्मः पिता हिः परमं तपः !*
*पितरि प्रितिमापन्ने सर्वाः प्रीयन्ति देवताः !!*

मैले थाहा पाउँदादेखि नै पिताको बिहान सबेरै उठ्ने बानी थियो । उठेर मर्निङ-वाकमा

जानुहुन्थ्यो । जानुभन्दा अगाडि हामीलाई उठाएर पढ्न भन्नुहुन्थ्यो, पिता गएपछि हामी बाहिरबाट ढोका खोल्दा आग्लो बज्नेगरी ढोका लगाउँथ्यौं, जसले गर्दा हामी पिता आएको चाल पाएर ब्युझिन्थौं र गाली खानबाट बच्थ्यौं । पिताले कराएर मन्त्र उच्चारण गर्दै पूजा गर्नुहुन्थ्यो, त्यसबाट नै हामीले मन्त्र कण्ठ पार्ने मौका पाएका थियौं ।

त्यसैगरी, चाडपर्वमध्ये तीजमा सानो छँदा दिदीलाई समोसा अनि मलाई जुलेबी मन पर्ने हुँदा

हामीलाई त्यही ल्याइदिनु हुन्थ्यो र हामी रमाएर खान्थ्यौं । माछा-मासु नचल्ने हुँदा प्रायः क्रीम ल्याउनु हुन्थ्यो । त्यो पनि हामीलाई असाध्यै मन पर्ने हुँदा खुब रमाएर खान्थ्यौं । यसरी खाएको देख्दा ठट्यौली पारामा 'ए ! धेरै नखाओ न । तिमीहरू धेरै मोटायौ भने बिहे कसरी गर्ने' भन्नुहुन्थ्यो । अनि हामी सबै जना हाँस्थ्यौं ।

धेरैअघि बिहान खाना खाइसकेपछि पानमा चुना लगाएर म, दिदी र पिता बसेर खान्थ्यौं र हामी चाहिं मुख रातो भयो कि भएन भनेर घरि-घरि ऐना हेर्थ्यौं । त्यो चुना हालेको पान, तामुल हाम्रा लागि ठूलो पापाझैं हुन्थ्यो । पछि, पिताले आफ्नो जन्मदिन पारेर सुपारी खान छोड्नुभयो । हामीले 'पिता ! सुपारी खान किन छोड्नुभयो' भनेर सोध्दा 'छोरी ! म हरेक जन्मदिनको दिन मेरा नराम्रा कुरा

छोड्दै जान्छु, विस्तारै अन्तिममा संसार छोडेर जानुपर्छ' भनेर उत्तर पाउँदा म निःशब्द भएँ ।

धेरै पुस्तक पढ्न, रोचक जानकारी हेर्न अनि ठूला-ठूला व्यक्तिको अन्तर्वार्ता हेर्न रुचाउने मेरो पिताले कहाँ के पढ्नुभयो वा सुन्नुभयो, मलाई राम्रोसँग याद छैन । तर, दूध लगायत दूधबाट बनेका सम्पूर्ण कुराहरू खान छोड्नुभयो । केही वर्ष अघि आमा र पिता दुबै जना धेरै बिरामी हुनुभयो र तंग्रिनका लागि बडो करबल गर्दा बल्ल औषधिका रूपमा सबैको आग्रहमा पिताले दूध खान थाल्नुभयो, त्यसपछि हामी सबै ढुक्क नै थियौं ।

२०७६ सालको कुरा हो । दशैंको द्वादशीमा पर्ने हजुरबुबाको श्राद्ध सकिएपछि पिताले हजुरबुवाले गर्नुभएका उदाहरणीय कामहरू सुनाउनुभयो । पिताबाट ती कुरा सुन्दा इतिहास वा कथाभन्दा कम चाखलाग्दो थिएन । अन्त्यमा पिताले फेरि दूध खान छोड्ने कुरा गर्नुभयो । गर्भदेखि नै माछा-मासु नपरेको शरीरमा दूध खान थालेर ढुक्क भएका हामीमा अब बुढेसकाललाग्दो उमेरमा दूध पनि खान छोडेपछि के खाने होला भन्ने कुराले चिन्ता भयो । पितालाई धेरै सम्झायौं । आमाको वास्ता राखेर पितालाई धेरै कुरा भन्यौं । तर, पिताले मान्नु भएन । हामी सबै जना दुःखी भयौं । भोलिपल्ट उठ्न अलि ढिला भयो । उठ्दा पिताले चिया पिइरहनु भएको थियो । कुन चिया खानुभयो भनेर हेर्दा दूध चिया खानुभएको रहेछ ! त्यो देख्दा हामीलाई धेरै खुशी लाग्यो अनि मैले 'धन्यवाद पिता !' भनें ।

पिता सधैं बिहान उठेपछि एउटै रुटिन अनुसार चल्नुहुन्थ्यो । आमालाई बिहान पूजा गर्न अलि समय लाग्ने भएको हुनाले आफै चिया बनाएर खानुहुन्थ्यो । कसैले चिया बनाएर देला भनेर कुर्नु हुँदैनथ्यो । घरमा कोही आफन्त, साथीभाई आउँदा बडो खुशी भएर बितेका कुरा सम्झाइ-सम्झाइ रमाइलो वातावरण बनाउनु हुन्थ्यो । सरल जीवन जिउन मन पराउने पितामा समय अनुसार आफूलाई परिवर्तन गर्नसक्ने खुबी पनि थियो । कुरा गर्दा त्यो उज्यालो अनुहारमा तेज सजिलैसँग देख्न पाइन्थ्यो । त्यसमाथि हाँस्दा ती मिलेका दाँत अति नै सुहाउँथ्यो ।

पितालाई कहीं जानु पर्दा आफूलाई चाहिने सम्पूर्ण कुराहरू बोकेर व्यवस्थित भएर हिंड्नुहुन्थ्यो । कहिले कहाँ, कहिले कहाँ पुग्ने हो, क-कसलाई भेट्ने हो, कहिले फर्किने हो- सबै अगाडि नै योजना बनाए अनुसार गर्नुहुन्थ्यो र बाहिरबाट आएपछि सबै कुरा बेलिविस्तार लगाएर बडो रमाइलो पाराले भन्नुहुन्थ्यो । विवाहपछि भने जागिर अनि काठमाडौंको बसाइले मलाई पिता-आमासँगको

भेटलाई पातलो बनाइदिएको थियो । कान्छी छोरी हुने सौभाग्य पाए पनि माया गर्न र पाउन टाढाटाढै मनबाट नै हुन्थ्यो ।

आज हामीमाझ पिताको भौतिक काया नभए पनि पिताले हामीलाई हाम्रो जीवनमा काम लाग्ने धेरै अनमोल कुराहरू सिकाएर जानुभएको छ, जसले हामीलाई भाग्यमानी महसूस गराउनुका साथै पिता हामीहरूमाझ नै हुनुहुन्छ भन्ने भान हुन्छ । अन्त्यमा, श्रद्धेय पिताको पुण्य आत्माले चिर शान्तिका साथ बैकुण्ठमा बास गरोस् र यो जन्ममा मात्र नभएर हरेक जन्ममा म पिताकै छोरी भएर जन्मिन पाउँ भनी भगवानसंग प्रार्थना गर्दछु ।

*- सामाखुसी, काठमाण्डौ*

*(लेखक डा.द्रोणकुमार उपाध्यायकी कान्छी छोरी हुनुहुन्छ)*



याश्ना पौडेल

# जिबा

**मौखिक अन्तर्वार्ताका आधारमा :**

मेरो कक्षा दुईको नेपाली किताबमा महाकवि लक्ष्मीप्रसाद देवकोटाको 'पाप लाग्छ' भन्ने कविता पढेर उनीबारे अझै जान्न-बुझ्न खोज्दा उनको जीवनमा पनि जिउँदो भन्दा मृत्युपछि सम्मान भएको पाएँ । मेरो जिबाको बारेमा पनि मैले धेरै पछि मात्र राम्रो मान्छे हुनुहुँदो रहेछ भनेर थाहा पाएँ ।

मलाई जिबाले जहिले पनि चकलेट, चाउचाउ जस्ता बाहिरको चिज नखाऊ, मोबाइल हेर्दै खाना नखाऊ भन्दै भनिरहने, सम्झाइरहने गर्नुहुन्थ्यो । त्यो बेला मलाई पिता राम्रो लाग्दैन थियो । तर, पिता बितेपछि मैले पिताले भन्नुभएका सबै कुराहरू मेरै लागि रहेछन् भन्ने थाहा पाउँदै गएकी छु ।

जिबालाई मैले 'पिता' भनेर बोलाउँदा 'म तेरो बाबाको पो पिता हो त, तँ मलाई जिबा भन्' भन्ने गर्नुहुन्थ्यो । शुरु-शुरुमा मलाई नातिनी भने पनि पछि-पछि भने 'मुनुनातिनी' भनेर बोलाउने गर्नुहुन्थ्यो । मेरो लागि आफ्नै हालते नेपाली अक्षरहरू लेखेर ठूलो भित्तामा झुण्ड्याउने गरी चार्ट पेपर नै बनाइदिनुभएको अहिलेसम्म पनि छ ।

जिबा मलाई लिन स्कूल आउँदा सधैं लठ्ठी साथमा लिएर आउने गर्नुहुन्थ्यो । जिबालाई त्यो लठ्ठीबारे प्रश्न गर्दा 'तलाई कुट्न नि' भन्नु हुन्थ्यो । एक दिन आमासँगै मलाई लिन आउँदा जिबाको हातमा लठ्ठी नदेखेर मैले सोधें- 'जिबा ! खै त लठ्ठी ?' पिताको जवाफ आमालाई देखाउँदै आयो- 'यिनै हुन् मेरी लठ्ठी !'

एकपटक म बिरामी पर्दा 'जिबा ! हजुर डाक्टर है, मलाई चेक गर्नु न, के भएको हो ?' भन्दा जिबाले हाँस्दै उत्तर दिनुभयो- 'म बिरामी जाँच्ने डाक्टर हैन त ।' पछि थाहा पाएँ, जिबा त नेपाली विषयको डाक्टर पो हुनुहुँदो रहेछ ।

घरमा होहल्ला गर्दै म खेल्ने गर्थें । जिबा बिरामी हुँदा पनि म धेरै हल्ला गर्थें । जिबालाई सारै झर्को लागेर होला, मसँग रिसाउने गर्नुहुन्थ्यो । त्यो बेला मेरो मामुले 'तँ हल्ला गर्दै गर् न, जिबा ठीक भएपछि आफ्नो बारेमा किताब लेख्दा नातिनीले सधैं दुःख दिन्थी भनेर लेख्नु हुन्छ, अनि त्यो पढेर सबैले नातिनी चैं कस्ती फटाई रहिछ भन्छन्' भन्नुभयो । त्यसपछि म ज्ञानी हुँदै गए, जसको २/४ दिनमा नै जिबा बित्नुभयो । त्यो देखेर मलाई साह्रै नराम्रो लागेको थियो ।

अहिले मलाई जिबा जस्तै देखिने एउटा 'रोबोट' बनाउन मन लागेको छ । अरु बेला म जिबालाई बिर्सिन्छु, तर सधैं मासिक श्राद्ध (तिथि) को दिन म लुकेर उहाँलाई सम्झेर रुने गर्छु ।

*(लेखक डा.द्रोणकुमार उपाध्यायकी छोराकी छोरी (नातिनी) हुनुहुन्छ)*



योगिता पौडेल भूर्तेल

# मेरो पिता

हामीले बुबालाई 'पिता' भनेर सम्बोधन गरेको सुन्दा साथीहरू के भन्या होलान् भनेर छक्क पर्थे । तर, पछि-पछि सबैले हाम्रो पितालाई पिता नै भन्न थाले । हाम्रो लागि यो शब्द 'पिता' नै सबै भन्दा प्यारो लाग्न थाल्यो । यति प्यारो कि त्यसको बयान गर्न कुनै पनि शब्दले भ्याउँदैन ।

सानैदेखि पिताले हामीलाई जहिल्यै पनि राम्रा-राम्रा कुराहरू मात्र सिकाउनु हुन्थ्यो । विशेषगरी पढ्ने कुरोमा धेरै जोड दिनु हुन्थ्यो । आमा-पिता दुबै जना जागिरे हुनुभएकोले स्कूल जान हरेक दिन हतार-हतार हुन्थ्यो । खानपिन सकेर सधैं हतारमै स्कूल जानुपर्थ्यो । त्यसैले हामीलाई शनिबार पनि चाड आएजस्तै हुन्थ्यो । हामी हरेक शनिबार र बिदाको दिन मीठा-मीठा परिकारहरू बनाएर खान्थ्यौं । पिता अलिक मिठासे स्वभावको हुनुहुन्थ्यो र पकाउनको शौखिन पनि । हामी दुबै बाबु- छोरी मिलेर पकाउँथ्यौं । हामी मूलतः शाकाहारी भएको हुँदा, शाकाहारी परिकार नै बनाउँथ्यौं । विशेषगरी बैगुन फ्राई, परवल फ्राई, आलु फ्राई, प्याजी आदि हाम्रो भान्सामा पाक्दथ्यो । त्यसैले होला, आजसम्म पनि मलाई यी पकवानहरू असाध्यै मीठो लाग्छ । नमीठो लाग्छ त केवल मेरो प्यारो पिताको अनुपस्थिति ।

नयाँ वर्ष होस् या जन्मदिन होस्, त्यस दिन एउटा नराम्रो बानी छोडेर नयाँ राम्रो बानी लिनुपर्छ भन्नु हुन्थ्यो र गर्न पनि लगाउनु हुन्थ्यो । हामी सानो हुँदा कुनै-कुनै दिन हामी मिटिङ्ग पनि बस्ने गर्थ्यौं । त्यस मिटिङ्गमा कसले के-के गर्ने भन्ने योजना बनाइन्थ्यो र त्यस अनुरूप नै गरिन्थ्यो पनि । राम्रो काम गरेमा वा पढाइमा राम्रो अंक ल्याएमा पुरस्कार पनि पाइन्थ्यो । त्यसबेला Geometry Box, Pencil, Pen पाउनु नै हाम्रा लागि ठूलो कुरो हुन्थ्यो । पिता कुनै पनि कुराको पूर्ण उपयोग गर्नुपर्छ भन्नु हुन्थ्यो; चाहे त्यो खानेकुरा, टूथपेष्ट, चप्पल,

पेन, पेन्सिल नै किन नहोस् ।

पिता हामीलाई पढाउनु पनि हुन्थ्यो । उहाँले पढाउँदा कहिल्यै अल्छी लाग्दैनथ्यो । बेला-बेलामा हँसाएर कक्षालाई उत्प्रेरित गर्नु हुन्थ्यो । सबैका छोरा-छोरीले राम्रो शिक्षा पाउन् भनेर प्रज्ञा एकेडेमी, पूर्वाञ्चल उच्च मावि जस्ता शैक्षिक संस्थाहरूको शुरुवात पनि उहाँ लगायत अन्य आदरणीय व्यक्तिहरूको पहलमा भएको थियो ।

भारतको असम राज्यमा जन्मेर त्यहीं शिक्षा हासिल गर्नुभएकोले असमप्रतिको लगाव अत्यन्तै धेरै थियो पितामा । असमको कुरा गर्दा उहाँ अत्यन्तै खुशी हुनुहुन्थ्यो, अझ असमबाट कोही आफन्त आए भने त झन् कुरै नगरौ, खुशीको त सिमै रहँदैनथ्यो । त्यसमाथि झन् असम नै जानुपर्‍यो भने त भूइँमा खुट्टै रहँदैनथ्यो । केही गोप्य कुरो गर्नुपर्‍यो भने आमा-पिता असमिया भाषामा कुरा गर्नु हुन्थ्यो; हामी चाहिं अड्कल मात्र काट्थ्यौं ।

पितालाई हरेक कुराहरू आउँथ्यो । हामीले होश सम्हालेदेखि नै उहाँको पढाउने काम त छँदै थियो । त्यसबाहेक अन्य कामहरू पनि उहाँ गर्नुहुन्थ्यो । मीठो खाना बनाउनु हुन्थ्यो भने गाई स्याहार्ने, दानापानी दिने कामका साथै हल्का इन्जिनीयरिङ्गको काम पनि निप्टयाउनु हुन्थ्यो । Plumbing, Carpenting जस्ता कामहरू पनि अलि-अलि सबै जान्नु हुन्थ्यो र आफैं गर्नु हुन्थ्यो । स-साना कामका लागि बाहिरी व्यक्ति चाहिंदैनथ्यो । पिता गीत पनि निकै मीठो गाउनु हुन्थ्यो । मलाई अचम्म लाग्थ्यो… एउटै मान्छेलाई यति धेरै कुराहरू कसरी आउँछ भनेर । नागपञ्चमीमा नाग बनाउन होस् वा जनै पूर्णिमाको लागि जनै बनाउन होस् या अन्य काम; उहाँले सजिलै गरेको अझै याद आउँछ ।

नेपाली भाषा उहाँको सबैभन्दा प्रिय थियो । भजन-कीर्तनहरू पनि नेपालीमै गाउन आग्रह गर्नु हुन्थ्यो । अन्तिममा भन्ने जयकार पनि 'माताकी जय'. भन्ने ठाउँमा 'माताको जय !' भन्नुपर्छ भन्नु हुन्थ्यो । आरती पनि गाउन नेपालीमै उल्था गरेर दिनुहुन्थ्यो, हामी त्यही गाउँथ्यौं । अनि हामी पनि सधैं 'भगवानकी जय' होइन, '…भगवानको जय !…' भन्थ्यौं ।

पितालाई पढ्न र लेख्न धेरै मन पर्थ्यो । उहाँले धेरै किताबहरू पनि लेख्नुभएको छ । पीएचडी गर्दा झन् धेरै नै लेख्नु हुन्थ्यो । Mistake हुन्थ्यो, Correction गर्दै फेरि लेख्नु हुन्थ्यो । यस्तो कति हो कति पटक हुन्थ्यो, तर उहाँले कहिल्यै दिक्क मान्नु भएन । Retired life मा पनि कहिल्यै खाली बस्नु भएन, हरेक

दिन केही न केही लेखिरहनु हुन्थ्यो । आमा स्कूलबाट आउने समय भएपछि चिया बसाउनु हुन्थ्यो । आमा घर आएर Fresh भइसक्दा चिया पाकिसक्थ्यो अनि दुबै जना सँगै चिया पिउनु हुन्थ्यो । आमा आएर चिया पकाएर दिनुहुन्छ भनेर पर्खेको मलाई थाहा नै छैन ।

उहाँहरू बीच सबै कुरा शेयर हुन्थ्यो, गफ हुन्थ्यो, कति रमाइलो हुन्थ्यो त्यो बेला । काममा कहिल्यै बाँडफाँड हुँदैनथ्यो । सबै काम मिलेर गरिन्थ्यो, तर कुनै सामान चलाएर ठीक ठाउँमा राखेन भने चैं सातो नै लिनु हुन्थ्यो । त्यही गुण म मा पनि आएको छ कि जस्तो लाग्छ, कहिलेकाहीं त !

पिता नेपाली, हिन्दी, अंग्रेजी, संस्कृत, असमिया, बंगाली र राजवंशी भाषा फरर बोलिदिनु हुन्थ्यो । हामीलाई अचम्म लाग्थ्यो, कसरी यति धेरै भाषा आएको होला ! केटाकेटी होस् कि बुढाबुढी, जोसँग पनि उहाँको कुरा मिल्थ्यो; सुन्नेहरू पनि मख्ख परेर सुन्थे ।

हरेक सामानहरू जतन गरेर राख्ने उहाँको बानी थियो । त्यसैले होला, अझै पनि हाम्रोमा धेरै पुराना वस्तुहरू पनि चालू अवस्थामै देख्न पाइन्छ । बजारबाट सामान किन्दा ल्याइने प्लास्टिकको झोला समेत उहाँले पट्याएर ओछ्यानमुनि राख्न लगाउनु हुन्थ्यो ताकि चाहिएको बखत तुरुन्त पाइयोस् भनेर । कहीं कतै गोष्ठी मिटिङ्ग सभामा गएर आउनुभयो भने त्यहाँको कुरो सुनाइहाल्नु हुन्थ्यो । त्यो बेला उहाँको अनुहारमा सन्तुष्टिको चमक स्पष्ट देखिन्थ्यो । अनि उहाँको कुरो सुन्न पाउँदा हामीलाई पनि अत्यन्तै हर्ष लाग्थ्यो । खै दैवलाई किन मञ्जुर भएन हाम्रो यो खुशी ? आखिर लगेरै छाड्यो !

एकपटक मैले काठमाण्डौबाट आउँदा मेनका गान्धीद्वारा सम्पादित 'अहा जिन्दगी' नामक मासिक पत्रिकामा दूध चाहिं शाकाहारीले खाने चिज होइन भनी लेखिएको भेटें र त्यो पढ्न पितालाई ल्याइदिएँ । त्यसमा लेखिएको कुराले पिताको मन यसरी छोयो कि यो दूध त ननभेज रहेछ, अब म यो खान्न भनेर चट्टै छोडिदिनुभयो । दूध मात्र होइन, दूधबाट बनेका हरेक परिकार नै नखाने हुनुभयो । शुद्ध शाकाहारी हाम्रो घरमा अब दूधको लाटलुट पनि चल्न छोड्यो । मैले त यसरी चट्टै छोड्नुहोला भन्ने त सोचेकी पनि थिइन । त्यो लेखले उहाँमा यति परिवर्तन ल्याउँछ भनेर कल्पना पनि गरेकी थिइन । उफ्फ... के गरें नि मैले त्यो पत्रिका ल्याइदिएर भनेर पछि एकदमै दिक्क लाग्यो । कतिभन्दा पनि खान मान्नु भएन । हामीलाई 'एउटा सब्जी मात्र खान्न भनेर बुझ न' भन्नु हुन्थ्यो ।

हामीले पनि जबर्जस्ती गर्ने कुरै आएन र उहाँको आफ्नो इच्छा हो भनेर चित्त बुझायौं । लगभग १२-१३ वर्ष उहाँले lacto product छुनु पनि भएन । पछि, एकपटक निकै बिरामी परेर धेरै कमजोर हुनुभएपछि हामीले कर गरेर जबर्जस्ती नै दूध खुवायौं । औषधिको रूपमा भन्दै बल्ल खानुभयो, तर रुँदै... ! त्यो दिन हामीलाई पनि निकै नरमाइलो लाग्यो । तर के गर्नु, ख्वाउनै पर्ने भएको थियो । माछा मासु अण्डा नखाने हामी जस्ता शाकाहारीलाई एउटै दूधकै त सहारा हो ।

कति रमाइलोसँग बित्थे हाम्रा दिनहरू । अझै कत्ति कुराहरू सिक्न बाँकी नै थिए । कति कुरा आफै गर्नुछ भन्नु हुन्थ्यो । बल्ल त नाति देख्नुभएको थियो । उसँग खेल्न त बाँकी नै थियो । हरेक पटक चन्द्रगढीको घर जाँदा पितालाई त्यही खाटमा laptop मा बसेर केही लेखिरहेको भेट्छु होला भन्ने आश लाग्छ । त्यो हँसिलो अनुहार । म पुग्ने बित्तिकै छोरी आई भनेर गफ गर्न laptop थन्क्याएर बस्नु हुन्थ्यो, नयाँ लेख-रचना छन् भने सुनाइहाल्नु हुन्थ्यो । म पनि मख्ख पर्दै सुनिरहन्थें । यो कुरा म सधैं miss गरिरहनेछु पिता ! अहिले पनि त्यहाँ जाँदा, त्यो घर सम्झँदा, पिता मलाई केही कुरा सुनाउन बसिरहनु भएको होला जस्तै भान हुन्छ, त्यो हँसिलो अनुहार त्यहाँ देख्न पाउँछु कि ? भन्ने आशमा...। तर, त्यहाँ पुग्दा केवल बोलुँला जस्तै गरी बसेका हँसिला तस्वीरहरू मात्र हुन्छन् । हाम्रो पौडेल परिवारको एक अमूल्य गहना हुनुहुन्थ्यो मेरो पिता...सबै सकियो ! अब 'पिता' शब्द केवल शब्दमै सीमित रह्यो । पिता...! सधैं मेरो हृदयमा रहिरहनु हुनेछ । Always miss you PITA।

मिठो बोली, मिठो हँसाइ, अनुहार साह्रै हँसिलो
आँट दह्रो, मिलेका दाँत, जिउ थियो कसिलो
असमबाट नेपाल आई, पीएच डी पनि गरी
हृष्टपुष्ट जिउ, खाना मात्र शुद्ध शाकाहारी ॥

शिक्षामा जोड दिने राम्रो थियो बानी
सधै भन्नुहुन्थ्यो पढ्नुपर्छ हुनलाई ज्ञानी
उमेर बढ्दै गए पनि छोड्नु हुन्न पढ्न
शिक्षा नै हो एक सहारा सधैँ अघि बढ्न ॥

धेरै कुरा सिकाउन, सधैँ अघि सर्नुहुन्थ्यो
हँसाएरै रमाइलो गरी, घरै उज्यालो पार्नुहुन्थ्यो
नाति भर्खर जन्मेको, खेलाउन बाँकी नै थियो
भर्खरै छाएको खुसी, रमाउन पनि बाँकी नै थियो ॥

दैव पनि रहेछ साह्रै निष्ठुरी
आखिर लगिछाड्यो बेलै नभई कालले घेरी
के नै बिगार्नु भएको थियो र कसैको
कालले पनि हेरेन कुनै गुण उहाँको ॥

मेरो प्यारो पिता रहिरहनु हुनेछ मेरो हृदयमा
बिताउने छु सधैं पिता हजुरको यादको सहारामा
केही गरे पनि पूरा हुन सक्दैन मेरो जीवनको यो कमी
धेरै धेरै माया छ पिता हजुरलाई
हजुर जहाँ भए पनि, जहाँ भए पनि ॥

*- भद्रपुर- ७, झापा*

*(लेखक डा.द्रोणकुमार उपाध्यायकी जेठी छोरी हुनुहुन्छ)*



**राजबाबु पाण्डे**

# सम्धीको स्मृतिमा

२००६ सालमा भारतको असम राज्य अन्तर्गत शोणितपुर जिल्लामा जन्मनु भई शिक्षित-दीक्षित भएर नेपालको झापा जिल्लालाई कर्मथलो बनाउने क्रममा ३२ वर्षसम्म मेची बहुमुखी क्याम्पसमा अध्यापनकार्यमा संलग्न रही २०७६ साल माघ १५ गते ७१ वर्षमा दिवंगत हुनुभएका सम्धी द्रोणकुमार पौडेलप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दै यो छोटो कविताबाट श्रद्धा-सुमन ः

नेपालको पूर्वमा रहेको असम माहाँ
एक मानवको जन्म भएको २००६ सालमाहाँ
स्व. प्रा. डा. हजुर द्रोणजीमा
हार्दिक हार्दिक श्रद्धाञ्जलि यो वार्षिकीमा

झापा जिल्लाको भद्रपुर माहाँ
चम्की एक एक तारा उहाँमा
स्व. प्रा. डा. हजुर द्रोणजीमा
हार्दिक हार्दिक श्रद्धाञ्जलि यो वार्षिकीमा

जीवनभरि ज्ञानको दियो भइरहेको
अखण्ड दीप जलाई प्रकाश छरिरहेको
स्व.प्रा. डा. हजुर द्रोणजीमा
हार्दिक हार्दिक श्रद्धाञ्जलि यो वार्षिकीमा

हजारौं हजार छात्र-छात्राहरूमा
शिक्षा दिई प्रशिक्षित गर्‍यौ सबैमा
स्व. प्रा. डा. हजुर द्रोणजीमा
हार्दिक हार्दिक श्रद्धाञ्जलि यो वार्षिकीमा

२०७६ साल माघको १५ माहाँ
पर्नुपर्‍यो त्यो यमदूतको छलपासो माहाँ
स्व. प्रा. डा. हजुर द्रोणजीमा
हार्दिक हार्दिक श्रद्धाञ्जलि यो वार्षिकीमा

भौतिक शरीर आज सामु नरहेपनि
हजारौं हजार श्रद्धा सुमन अर्पण भयोनि
स्व. प्रा. डा. हजुर द्रोणजीमा
हार्दिक हार्दिक श्रद्धाञ्जलि यो वार्षिकीमा

यमलोकबाट परलोक गएपनि
ज्योतिको पुञ्ज बनी रहिरहे अनि
स्व. प्रा. डा. हजुर द्रोणजीमा
हार्दिक हार्दिक श्रद्धाञ्जलि यो वार्षिकीमा

साहित्यकार शिक्षाविद् द्रोण कुमारको
सधैं सधैं स्मरण भइरहनेछ प्रेरणाको
स्व. प्रा. डा. हजुर द्रोणजीमा
हार्दिक हार्दिक श्रद्धाञ्जलि यो वार्षिकीमा ।

*- सामाखुसी, काठमाण्डौ*

*(लेखक डा.द्रोणकुमार उपाध्यायकी कान्छी छोरी तर्फका सम्धी हुनुहुन्छ)*



# पितापछिको काका : दोडा काका

रेवतीरमण सापकोटा

भारी मन छ। तर, केही लेख्नुपर्ने बाध्यताले घच्घच्याएपछि यी हरफहरू लेखें।

हामी सबै आफन्तको अभिभावक, पिताको माहिलो मामा स्व. टीकाराम शास्त्रीका पुत्र डा. द्रोणकुमार उपाध्याय (पौडेल), नेपाली भाषा-साहित्यको अन्यतम दुर्लभ मणि अहिले हामीबीच हुनुहुन्न- यो शाश्वत सत्यलाई मनले धेरै दिनसम्म मान्न खोजेन, यो मन धेरै दिनसम्म छट्पटायो, दुखेको दुख्यै भयो। तर, 'सत्य कटु हुनसक्छ' भन्ने कुरालाई नश्वर देहले, मन-मस्तिष्कले मान्दो रहेछ।

असमको संस्कृतिभित्र एउटा स्थान ओदालगढीमा पल्दै बढ्दै उहाँले आफ्नो शिक्षा आर्जन गर्नुभयो। ओदालगढीमै उहाँलाई हजुरबा टीकाराम शास्त्रीले पढाउने गरेको हाइस्कूलमा अध्यापन थाल्नु भयो। विवाह पनि त्यतै भयो, तिनताक सन्तान पनि यतै जन्मिए। पछि हजुरबाको स्वर्गवास भएपछि काका नेपाल गएर चन्द्रगढीमा स्थायी रूपले बसोबास गर्न लाग्नुभयो। सानैदेखि सँगै बस्नुभएको भाइ हाम्रो प्यारो किशोर काकालाई पनि साथै लिएर जानुभयो। हामीलाई काकाहरू गएपछि ठूलो शून्यताले केही दिन छोप्यो, यस्तो हुनु स्वाभाविकै थियो।

काका भद्रपुरस्थित मेची क्याम्पसको प्राध्यापकमा नियुक्त भएपछि यता आउँदा एकपटक हाम्रो पितासँग 'यत्रा जना छोरा छन्, यसले अंग्रेजीमा एम.ए. गरेको छ, नेपालमा जागिर पाइहाल्छ, लिएर जान्छु' भन्नु पनि भयो। पिता हाम्रो पनि काकाले भनेपछि धेरै मान्नु हुन्थ्यो। पिताले काकालाई मेरो भन्नु केही छैन, ऊ (म) गए पनि आपत्ति छैन- भन्नुभएथ्यो, १९९२-९३ तिर।

अलि पछि काकाले बोलाइहाल्नु भयो : एकपल्ट पुगेर आउनु पर्‍यो भनेर म पनि एकपल्ट चन्द्रगढी पुगें। त्यो बेला काका धेरै खुशी हुनु भयो। भोलिपल्टै मलाई आफू पढाउने क्याम्पसमा लिएर जानु भयो र क्याम्पसको उपाध्यक्ष (सहायक क्याम्पस प्रमुख)सित भेट गराउनु भयो। इच्छा गर्दा भोलिपल्टैदेखि

पढाउन सकिने कुरो भएपछि मलाई कस्तो-कस्तो अनुभव हुन थाल्यो ।

मलाई अलिक अप्ठ्यारो लाग्नुको कारण चाहिं ओदालगुढीमै मेरो उच्चस्तरीय सरकारी जागिर भइसकेको थियो । मासिक तलब पनि निक्कै राम्रो थियो । म द्विविधामा परें र घर पुगेर आउँछु भनें । काकालाई चाहिं केही नभनी बिहानै चन्द्रगढीबाट निस्किएँ । त्यस दिन बेलुकी नै ओदालगुढी आइपुगें । त्यो समयपछि धेरै वर्ष म गइन । काकाले यहाँ आएको बेला मलाई गाली पनि गर्नुभयो । मैले काकाको गालीलाई नै आशीर्वाद मानें ।.

हामी सानो छँदा काकाकै घरमा धेरै बस्ने गर्थ्यौं । कक्षा- ८ मा हुँदा काकासितै बस्नु परेको थियो । सानो छँदा हामी भूराहरू द्रोण काका भन्न नजानेर 'दोडा काका' भन्थ्यौं । काका हाम्रा निम्ति पितापछिको अभिभावक हुनाले उहाँका परामर्श बरोबर लिने गर्थ्यौं ।

काकाले त्रिभुवन विश्वविद्यालयबाट नेपालीमा स्नातकोत्तर गरेको धेरै वर्षपछि उत्तर बङ्गाल विश्वविद्यालयबाट विद्यावारिधि प्राप्त गर्नुभयो । यसै क्रममा उहाँले धेरै शिक्षा सम्बन्धी पुस्तक, मामाश्री तारापति उपाध्यायसित मिलेर उच्चस्तरीय नेपाली व्याकरण पनि प्रकाशित गर्नुभयो । यस बाहेक भारतका विश्वविद्यालय र महाविद्यालय (हरियाणा)मा समेत विशेष व्यक्तित्वको रूपमा निमन्त्रित भई अतिरिक्त अतिथिका रूपमा उहाँले आसन ग्रहण गर्नुभएको थियो ।

मेरो लागि खुशीको कुरो के भने, काकाले मेरो पहिलो कथा संग्रह 'बोर्डर'को स्तरीय भूमिका लेखिदिएर मलाई साहित्य जगतमा ताते गर्न प्रेरणा दिनुभएको थियो । काका बिरामी परेको कुरा सुनेपछि नै म र ठूलदाज्यू श्री कमलचन्द्र उपाध्याय एकपटक चन्द्रगढी पुग्यौं । हामी पुगेको दुई दिनपछि मात्र काका राजस्थानबाट घर फर्कनुभयो । त्यो बेलुकी प्रायः एक घण्टा काकासित बसेको बेला हामीलाई भेटेर खुशीका दुई थोपा आँसु झार्नुभएको स्मृति सधैं सजीव रहनेछ । काकासित हाम्रो अन्तिम भेटघाट त्यही रहेछ ।

यस्ता विद्वान् आफन्तजनको रोगजनित वियोगले हामी सबैलाई मर्माहत पारेको छ भने नेपाल लगायत भारतमा पनि नेपाली साहित्य जगतमा ठूलो क्षति पुऱ्याएको छ ।

काका जहाँ हुनुहुन्छ, त्यहाँ उहाँको आत्माले चिरशान्ति पाओस् । ॐ शान्ति !

*- ओदालगढी, असम (भारत)*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका परिवार निकट हुनुहुन्छ)*



लक्ष्मी खतिवडा होमागाई

# प्रिय भिनाजु

द्रोणकुमार पौडेलज्यूसँग मेरो पहिलो भेट २०४६ सालतिर भएको हो । उहाँसँग मेरो पारिवारिक सम्बन्ध रहेको छ। मेरो सासू र उहाँको सासू (मेरो सानीआमा सासू) दिदी-बहिनी हुनुभएका कारणले उहाँ मेरो भिनाजु हुनुहुन्थ्यो। भारत, असमबाट नेपाल आउनुभएको उहाँका भाइ (ठूलीआमा सासूको छोरा) सँग मेरो विवाह भएको हो । मेची क्याम्पसमा नेपाली विषयको अध्यापन गरिरहनु भएका भिनाजुसँग पहिलो भेट हुँदा नै उहाँको सरल व्यवहार, सादापन, अध्ययनशीलता र साहित्यप्रेमबाट म प्रभावित भएकी थिएँ ।

भिनाजु प्राध्यापनरत् रहेकै मेची क्याम्पस-भद्रपुरमा मेरा श्रीमान् पनि सोही पेशामा संलग्न हुनुहुन्थ्यो। हाम्रो बसाइ भद्रपुरमा हुँदा दिदी-भिनाजु एवम् परिवारसँग ज्यादै नजिक हुने अवसर प्राप्त भयो। भिनाजुले हामीलाई आफ्नो परिवार सरह सहयोग, स्नेह र ममता दिनुभएको थियो। हाम्रो घरको परिवारका धेरै सदस्य असममा नै रहनु भएकोले घरको अभिभावक सरह उहाँले हामीलाई मार्गदर्शन गर्नुभएको थियो ।

अध्यापनको क्रममा केही समय भिनाजुको काठमाडौं बसाइ भएको थियो । त्यस समयमा भिनाजु र भान्जा सँगै बस्नु हुन्थ्यो। हामी पनि काठमाडौंको घट्टेकुलोमा अध्ययन गर्दै, जागिर गर्दै छोराहरू हुर्काउँदै थियौं। त्यस बेलामा भिनाजुले हामीलाई आफ्नो कर्त्तव्यमा दृढतासाथ लाग्न हौसला प्रदान गर्नुहुन्थ्यो । उहाँ माछा-मासु नखाने भएकोले सादा खानपानमा रमाउनु हुन्थ्यो। हामी पनि त्यस्तै खानपान रुचाउने हुनाले भिनाजुसँग भेटघाट हुँदा हामी परिवार नै रमाइलो महसूस गर्थ्यौं ।

मेरो माइती झापा जिल्लाको तत्कालीन शिवगञ्ज गा.वि.स.को वडा नं- ८ (हालः शिवसताक्षी गाउँपालिका) मा पर्दथ्यो। शिवगञ्ज गाविस घर भई सो

समयमा भद्रपुरमा बसोबास गर्ने हामी ३ जना लक्ष्मी नाम भएका महिला थियौं । शिवगञ्जका ३ लक्ष्मीहरूमध्ये एक जना म, एक जना लक्ष्मी सुवेदी पौडेल र एक जना लक्ष्मी सापकोटा हुनुहुन्थ्यो । शिवगञ्जका लक्ष्मी सबै एकसेएक छौ भनेर उच्च तहमा जानका लागि भिनाजुले हामी सबैलाई मेहनत गर्न प्रेरणा दिइरहनु हुन्थ्यो ।

अत्यन्त इमान्दार, सरल स्वभाव, सबैप्रति स्नेहभाव राख्ने र सबैको उन्नति होस् भन्ने चाहना राख्ने उहाँ साहित्यानुरागी हुनुहुन्थ्यो । भारतको उत्तरबंग विश्वविद्यालयबाट विद्यावारिधि गर्नुभएका श्रद्धेय भिनाजु त्रिभुवन विश्वविद्यालयको नियमित अध्यापनबाट अवकाश भइसकेपछि पनि नेपाली साहित्यलाई समुन्नत बनाउन आफ्ना कृतिहरू पस्किरहनु भएको थियो ।

डा.द्रोणकुमार पौडेलले नेपाली साहित्यका विभिन्न विधाका कृतिहरू सिर्जना गरी नेपाली साहित्यलाई धनी बनाउनुभएको छ । नवमी, राजवंशी परिचय : जाति, भाषा र साहित्य, आदर्श नेपाली व्याकरण, भाषिक चिन्तन, केही साधक : केही साधना, लोकवार्ता : लोककै चर्चा तथा सवाई काव्यको सैद्धान्तिक परिचय आदि उहाँका महत्वपूर्ण कृतिहरू हुन् । साहित्यका कुनै पनि विधा सरल छैनन्, त्यसमा पनि खोजमूलक साहित्य झन सरल छैन । तयार गर्न धेरै समय र श्रम खर्चनु पर्ने हुन्छ र दरिलो प्रतिबद्धताको आवश्यकता पर्छ । उहाँले त्यस्ता गहकिला कृतिहरू सिर्जना गरी नेपाली साहित्य भण्डारलाई हस्तान्तरण गर्नुभएको छ ।

समाजमा केही गरेर देखाउनुपर्छ भन्ने दृढ अठोट र त्यो पनि अरुका लागि अनुकरणीय होस् भन्ने उहाँको चाहना 'केही साधक : केही साधना' नामक कृतिमा रहेको देखिन्छ । उक्त कृतिमा उहाँले भन्नुभएको छ- 'वास्तवमा आफ्ना भावी सन्ततिहरूलाई शुभ अवसर वा मौकाहरूमा क्षणस्थायी, क्षणभंगुर भौतिक वस्तु उपहार दिएर भुल्याउनु भन्दा जीवनभर काम लाग्ने जीवनपथका हर पहलमा सम्भिझइरहने आत्मिक, हार्दिक एवम् बौद्धिक उपहार दिनुपर्छ । मानिसले सयौं वर्षदेखि असाध्य साधना गर्दै हात पारेका संस्कृति, चिन्तन, एवम् उच्च नैतिक विचारहरू समाजप्रतिका जिम्मेवारीहरू, आफ्ना सामु रहेका कुराहरूलाई हेर्ने सुल्झेका सम्यक दृष्टि, पिता-माता, गुरु, राष्ट्रलाई अनुभव गरिरहने जीवन्तता, ईश्वरप्रति आस्था आदि सबै कुरा पुरानो पिंढीले नयाँ पिंढीलाई हार्दिकताका साथ जिम्मा लगाउनु पर्दछ । नत्र त आजको बर्बर हृदयहीन देशभक्तिहीन राष्ट्रियता एवम् संस्कृतिशून्य आत्मकेन्द्रित आयातीत सभ्यताका संक्रामक व्याधिबाट

आफ्नो संस्कृतिलाई बचाउन गाह्रो छ । त्यसो गर्न सकिएन भने अन्यत्रको अनुकृत अन्योलपूर्ण जीवनशैलीले हाम्रा सन्ततिहरू ग्रसित हुनेछन्, अस्तित्वविहीन हुनेछन् र हाम्रो र हाम्रा पुर्खाहरूको अस्तित्व तिनीहरूबाटै मेटिनेछ ।' यसबाट उहाँले आफ्ना भावी सन्ततिलाई दिन चाहनुभएको उपहार र कल्पना गरेको समाजको अवस्था स्पष्ट हुन्छ ।

आफ्ना छोरा-छोरीलाई उच्च शिक्षा-दीक्षा दिई स्वावलम्बी र योग्य नागरिक बनाउन सफल उहाँ आफ्नो वंशमा समेत सबैको प्रिय हुनुहुन्थ्यो । आफ्ना सम्बन्धितका विवाह, ब्रतबन्ध, पूजापाठ तथा मृत्यु संस्कारमा पुगी सबैसँग सुमधुर सम्बन्ध कायम राख्नुभएको थियो । उहाँले पढाएका विद्यार्थीहरू अहिले प्रशासन, व्यापार, उद्योग, सेवा तथा राजनीतिमा नेपालभित्र मात्र नभई अन्तर्राष्ट्रिय जगतमा पुगेका छन् ।

एक नाविक (भाउ चलाउने) ले कैयन व्यक्तिलाई नदी तारेर पठाउँछन्, नाउ चढ्ने व्यक्तिहरू आ-आफ्ना गन्तव्यमा पुग्छन् भने नाविक झन सीपयुक्त बन्दै जान्छ । यसैगरी, भिनाजु अनुभव अध्ययन अध्यापनबाट खारिनु भई राष्ट्रका विभिन्न क्षेत्रमा सेवा पुऱ्याउन सक्ने अब्बल बनिसक्नु भएको थियो । राष्ट्रका लागि अझै योगदान दिन लागिरहेको अवस्थामा घातक रोग क्यान्सरबाट पीडित भई छोटो समयमा नै हठात् मृत्यु वरण गर्नुपऱ्यो । सधैं मुसुक्क हाँसेर बोल्ने भिनाजु अब स्मृतिमा मात्र रहनुभएको छ । अहिले पनि म भिनाजुले मुसुक्क हाँसेर 'के छ लक्ष्मी तिमीहरूको खबर ?' भनेका दृश्य झल्झली देखिरहेको हुन्छु । आदर्श पति, पिता, उत्कृष्ट साहित्य सर्जक, शिक्षक तथा समाजसेवकलाई हामीले गुमाएका छौं; तथापि उहाँ हामीमाझ सदा अमर रहिरहनु हुनेछ । श्रद्धाञ्जलि...

*- सूर्यविनायक- ९ (भक्तपुर)*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका परिवार निकट हुनुहुन्छ)*



लोकनाथ उपाध्याय

# मेरो परिचयको परिधिभित्रका द्रोण पौडेलजी

(मेरो यो छोटो लेखा द्रोण पौड्यालजीको जीवनको पूर्वार्ध काल अर्थात् असममा बसोबास गरिरहेको समय र पारिवारिक सम्पर्कको घेराभित्र मात्र सीमित छ । उहाँको शैक्षिक, सामाजिक साथै साहित्यिक सङ्लग्नता विज्ञजनको लेखाहरूमा हामीले पढ्न पाउने आशा राखेका छौं । हाम्रो लेखामा मूलतः अंग्रेजीको सन् तारिखको प्रयोग गरिएको छ किनकि यस मुलुकमा वि. सं. को मिति र महिनाको प्रचलन चल्ती छैन ।)

१९५० को दशकका अन्तिम वर्षमा बटियामारी, असममा जन्म लिएका द्रोण पौडेल मेरो सानिमाको भतिजो भएकाले सोझै दाजुभाइको सम्पर्कमा बाँधिएका थियौ । समयको अग्रगति सँगै उहाँको मेरी फुपुकी छोरी मीरा (हाम्रो लागी माया)बहिनी संग वैवाहिक सम्पर्क जोएिकोले उहाँ हाम्रा ज्वाइँ बन्नु भयो । हामी अझ ओर तानियौ, अरु बढी भेटघाट हुन लाग्यो । शायद आफ्नु व्यक्तिगत जीवनलाई अघि बढाउने तत्परतामा सामंजस्य रहेकोले होला । धेरै आत्मीय पनि हुन सकेका थियौं । भेट भएको अवसरहरुमा सामाजिक रीति, नीति, समसामयिक समस्याहरूमा, खुशीको माहौलमा घण्टौं बिताउने गर्दथ्यौं । तर समय र कालको गति धेरै निष्ठुरी हुँदो रहेछ, जसलाई जुन बेला,जसरी झिकेर लानुपर्छ त्यस चक्रले क्षमा गर्दो रहेनछ। आज उहाँ अतीत हुन लाग्नुभयो। अंग्रेज कवि longfelowss को शब्दमा भन्ने हो भने let the dead past burry it,s dead भन्न सकिने  तर हामी दुबै सम्बन्धको घेराभित्र पनि बाँधिएको हौं । त्यसैले उनको अभिव्यक्तिमा ढुक्क पर्न सकौंला र ?

द्रोणजीको परिवार शिक्षाप्रेमी साथै शिक्षा साधक थियो । उहाँका हजुरबा पण्डित गंगाधर पौडेलजीले १९०२ सन् मै आफ्नो अञ्चल बटियामारीमा एउटा शिव मन्दिरको अनुष्ठानिक सुरुवात गर्नु भएको थियो । उक्त मन्दिरलाई आधार मानेर १९२४ सन्‌बाट त्यहाँ एउटा संस्कृत शिक्षाको केन्द्र बनाइएको थियो । संस्कृत

टोलका रुपमा चलेको उक्त विद्यालय 'सांगवेद विद्यालय' नामकरणले समयमा सरकारीकरण भएको थियो । प्रथम अवस्थामा पण्डित पं गंगाधर पौड्यालज्यूले नै उक्त टोलमा पाठदान कार्य चलाउनु भएको थियो । पछि नक्सलबाडीबाट विशेश्वर भागवती नाम गरेका एकजना शिक्षक पनि नियोग गरी पाठदान कार्य सुपरिचालना हुन लागेको थियो । सरकारीकरण पश्चात् अरु नयाँ-नयाँ शिक्षकहरुको पनि नियुक्ति हुन लागेका थिए । सांगवेद विद्यालयको प्रसङ्ग यसैकारण मैले यहाँ उल्लेख गरेको छु कि यसै विद्यालयका प्रधानाचार्य स्व.दिनमणि शास्त्रीज्यूले 'कृति शिक्षक' रुपमा राष्ट्रिय पुरस्कार प्राप्त गरी यस अञ्चलका साथै उल्लेखित विद्यालयको नाम उचाइमा पुर्याउनुभएको थियो ।

द्रोणजीको बाबा टिकाराम शास्त्री ज्यू स्थायी जागिर लिएर एकै जिल्लाको उदालगुडीमा बसोबास गर्न लागेपछि उहाँलेपनि माध्यमिक स्तरको पढाइ बटियायामारिमै समाप्त गरी उदालगुडी कै बासिन्दाका रुपमा स्कुल र कलेजको पढाइ सम्पूर्ण गर्नुभएको थियो । स्नातकोत्तर डिग्री उहाँले त्रिभुवन विश्वविद्यालयबाट प्राप्त गर्नुभएको हो । शिक्षा प्रदान गर्नु द्रोणजीको वंशागत पेशा भएकालेनैं होला उहाँ नेपाल पुगी चन्द्रगढी स्थित मेची क्याम्पसमा आफ्नै मनोवांछित पेशामा संलग्न रहनुभयो । आमरन नेपालकै बासिन्दा बनेपछि साहित्य चर्चाको विस्तृत मैदान पाएरै होला उहाँले यथेष्ट नाम, यस बटुल्न सक्षम हुनु भएको थियो । उहाँको यस प्रकारको सङ्लग्नतामा हामी पनि गौरवान्वित छौं । व्यक्तिगत रूपमा द्रोणजी एकजना स्पष्टवादी र हँसिला व्यक्ति हुनुहुन्थ्यो । छोटो समयमै कसैसँग स्मरणीय सम्पर्क स्थापना गर्न सक्ने उहाँको एउटा वैशिष्ट्य जस्तो मलाई लाग्दछ । एकजना असमिया कवि, मञ्च अभिनेता र राजनैतिक व्यक्तिको रुपमा पनि परिचय राख्ने लक्षधर चौधरीज्यूले बाक्लै भन्ने गर्नुहुन्थ्यो-

'जीवन गढिबा हांहिरे
चकुलोरे नहय
जीवन (समय)जुखिबा बन्धुरे
बयषरे नहय ।'
नेपालीमा भन्ने हो भने

जीवन सजाउनु हाँसोले
आशुले होइन
जीवन (समय) जोख्नु साथी संगीले

उमेरले होइन । उहाँ सायद त्यही सिखनीको अनुगामी हुनुहुन्थ्यो ।

छात्र अवस्थादेखि ओछ्यान परेको दिन सम्म सदासर्वदा मैले यसै रुपमा द्रोणजीलाई भेटेको थिएँ । हाम्रो स्वभावमा एकरूपता भएकाले होला । सबैसँगको उहाँको व्यवहार मैले भेटे सरहको थियो र थिएन् म ठहर गर्न सक्तिनँ । मेरो मूल्याङ्कन मेरो आफ्नो धारणा हो । सबैको मूल्याङ्कन आ-आफ्नो अनुभवको समष्टि होला ।

उहाँको नेपाली, असमिया, हिन्दी, अंग्रेजी, संस्कृत, बोडो, राजवंशी लगायत ७/८ वटा भाषामा बोल्न लेख्न सक्ने प्रतिभा थियो । २०१२ सन्मा साङ्गवेद विद्यालयको नवनिर्मित भवनअघि आफ्ना हजुरबुवा पण्डित गंगाधर पौडेलजीको मार्बल पत्थरको मुर्ति स्थापना गरी उहाँको स्मृति अटुट पार्दै शिक्षा प्रसारको क्षेत्रमा उहाँका परिवारको अवदानलाई पनि स्मरणीय पार्नु भएको छ ।

उहाँको पारिवारिक जीवन मेरो लेखाको आलोच्य विषय होइन । किनकि मानिसको परिवारिक जीवन विभिन्न अपूर्णता ले पूर्ण रहन्छ, तुलनात्मक असन्तुष्टि सबकोईकै हुन्छ । त्यसको आधारमा कसैलाई मूल्याङ्कन गर्नु अनुचित होला जस्तो मलाई लाग्दछ ।

द्रोण ज्वाइँ संग गतवर्ष अर्थात् २०२० सन्को २४ फेब्रुवरीमा चन्द्रगढी स्थित उहाँको स्व-गृहमा मेरो अन्तिम भेट भएको थियो । दूरारोग्य व्याधीमा पीडित भई प्राय असहाय अनुभव गरिसक्नुभएको उहाँ घरको पछिल्लोपटीको बरांडामा घाममा सुती रहनुभएको र छेउमा आफ्नो जेठान थानेश्वर(राजा) खनाल बसिरहेका थिए । उहाँकै भुइँ ओछ्यानको सिरानीनेर 'ज्वाई नमस्ते' भन्दै म पनि बसें । उहाँले मात्र 'भारत नेपाल मैत्री' भन्नुभयो । तेस्तो अवस्था र स्थितिमा उहाँले ती तीनवटा शब्द किन उच्चारण गर्नु भयो मैले बुझ्न सकिन । सोधीन पनि । मनमनै चिन्ता गरें दुई छिमेकी राष्ट्रबीच रहेको मधुर सम्पर्क साथै हामीमा बाँधिएको सम्पर्कले आज हामी यसरी भेट हुँदै छौं भन्न खोजे जस्तो लागो । सधैँ जोसिला र रमाइला गफ गर्ने मानिस नचिताएको यस्तो स्थितिमा देखि आफुलाई पनि अधिक बोल्ने भावना जागरुक भएन । मेरी श्रीमती सहित चारै जना एकछिन चुपचाप बसिरह्यौं ।

*मिलनपुर, बरगां (असम) दूराभाष- ०९१-८६३८०७७८०५*

*(लेखक डा.द्रोणकुमार उपाध्यायको जेठान हुनुका साथै*

*विहाली कलेज बडगाङका भूतपूर्व प्रिन्सिपल हुनुहुन्छ)*



विद्यादेवी सापकोटा

# मेरा आदर्श श्रद्धाष्पद भिनाजु

मेरा आदर्श व्यक्ति मेरा श्रद्धेय भिनाजु हाम्रा परिवारका कनिष्ठजन सबैको चरित्र गठन, कार्यप्रणाली सञ्चालन आदि इत्यादिका सच्चा मार्गदर्शक हुनुहुन्थ्यो । हाम्रा कदम साथ कदम चाल्दै, उत्साह बढाउँदै, हाम्रो जीवनको गतिधारालाई स्वर्गतुल्य बनाउन उहाँको देन अतुलनीय र अनन्य छ । उहाँबाट हामीले अञ्जुलीभरि माया, आशीर्वाद पाई उहाँकै मार्गदर्शनमा धावमान हाम्रो जीवन गतिको धारा उहाँको वियोगपछि नै डोरी चुँडिएर आकाशमा दिशारहित भएको गुड्डीजस्तै भयो र सुपरिकल्पित चलमान गति स्तब्ध भयो ! 'आयो टप्प टिप्यो लग्यो मिति पुग्यो, टारेर टर्दैन त्यो' भन्ने उक्तिको मर्म थाहा भए पनि मनलाई सम्झाउन सारै नै अप्ठ्यारो ! तर, आज त्यही अदृश्य कालले उहाँलाई टपक्क टिपेर हामीबाट सदाकालका लागि खोसिलग्यो । दुःख लागेको मनोव्यथा देखाउन सकिँदैन, परेकालाई मात्र थाहा हुँदोरहेछ ।

आफू भलो त जगत भलो भन्ने कुरामा भिनाजु सधैं विश्वास राख्नु हुन्थ्यो । उहाँबाट सिकेका कुराहरू आज आफ्नो जीवनमा चरितार्थ गर्न पाएका छौं । जीवनरेखा क्षणभंगुर हो भने यस जगतमा कुनै जीवको जीवनचक्र स्थायी छैन र यो कुरा सर्वजन विदित छ । आज उहाँको अनुपस्थितिमा केही हराएको, केही गुमाएको अनि जिन्दगी नै छहारीबिहीन भएको भान हुन्छ ! यद्यपि परमात्मामा विलीन उहाँको आत्माको चिर शान्तिको प्रार्थना गर्दछु । हजुर तपाईं जहाँ पनि हुनुहुन्छ, जुन रूपमा पनि हुनुहुन्छ- हामीमाथि सदा कृपादृष्टिको वर्षा गरिरहनु भनी प्रार्थना !

ॐ शान्ति शान्ति शान्ति ।

*३० डिसेम्बर २०२०*

*- ढेकियाजुली, शोणितपुर, असम*

*(लेखक डा.द्रोणकुमार उपाध्यायकी साली हुनुहुन्छ)*



सङ्गीता लुइँटेल

# श्रद्धेय काकामा शब्द श्रद्धाञ्जलि

मैले काकालाई सानै हुँदादेखि नै चिनेकी थिएँ। काका असमबाट नेपाल आएपछि मेची क्याम्पसमा पढाउन थाल्नुभएको रहेछ। उहाँको मेरा पिताजीसँग अति नै घनिष्टता थियो। द्रोण काकाका बुबाले मेरा पिताजीलाई पढाउनु भएको अरे, त्यसैले पिताजीले 'गुरुभाइ' भन्ने गर्नुहुन्थ्यो। हामी पनि उहाँलाई काका भन्थ्यौं। 'म त पौडेल हुँ, तँ लुइँटेल, मलाई किन काका भनिस् ?' भनेर जिस्क्याउनु हुन्थ्यो। काका असाध्यै हँसमुख, मिजासिलो प्रकृतिको हुनुहुन्थ्यो।

काका हाम्रो घरमा आउँदा काकाको मोटोघाटो शरीर देखेर मेरी हजुरआमाले 'उहाँ चैं को ? मारवाडी हो ?' भनेर सोध्नुहुन्थ्यो अनि सबैको हाँसोको फोहोरा नै छुट्थ्यो। आमाले पनि काका हाम्रो घरमा आउँदा असाध्यै प्रेमले मीठो-मसिनो पकाएर खुवाउनु हुन्थ्यो। खानापछि पान र तामुल खाने संस्कृति चाहिं असमको अरे ! पिताजी र काका असमिया भाषामा नै कुराकानी गर्नुहुन्थ्यो। भाषा नबुझे पनि हामी रमाइलो मानेर सुन्थ्यौं। हाम्रो दुबै परिवारको सुमधुर सम्बन्ध थियो। मलाई पनि चन्द्रगढीमा मेरो एक जना काका हुनुहुन्छ जस्तो लाग्थ्यो।

२०४५ सालमा म मेची क्याम्पसमा पढ्न जाँदा नयाँ ठाउँ, कहिले घर नछाडेकी मलाई काकाको ठूलो सहारा भयो। डेरा खोज्नेदेखि अरु धेरै सहयोग गरेर काकाले एउटा अभिभावकको भूमिका निर्वाह गर्नुभएको थियो। क्याम्पसमा कक्षा कोठाभित्र पनि काकालाई देख्दा मन खुशी हुन्थ्यो। काका (द्रोण सर)ले हामीलाई नेपाली पढाउनु हुन्थ्यो। द्रोण काकाबाट मलाई नेपाली पठनपाठनमा निकै सहयोग मिलेको थियो। आज मलाई एक असल गुरु, अभिभावक गुमाएको आभाष भएको छ।

मेरो कर्मघर पनि चन्द्रगढी नै भएको हुँदा काकासँग बारम्बार भेटघाट भइरहन्थ्यो। अन्तिम पटक मैले काकालाई २०७६ सालको मंसीरमा भेटेकी थिएँ। यही भेट नै काकासँगको अन्तिम भेट रहेछ। ईश्वरको खटन होला, हाम्रो

हातमा केही पनि हुँदो रहेनछ। मेरा पिता रोहिणीविलास लुइँटेलको २०७५ साल पुस ३ गते निधन भएपछि उहाँको 'स्मृतिग्रन्थ' निकाल्ने सिलसिलामा म काकालाई भेट्न गएकी थिएँ। त्यसबेला मलाई काकाले धेरै प्रेरणा र हौसला दिनुभएको थियो। तर, पुगनपुग एक महिनापछि माघमा काकाको पनि निधन हुनपुग्यो। यो दुःखद घटनाले मलाई निकै मर्माहत बनायो। आज काका र मेरा पिताजी दुबै जना यो संसारमा हुनुहुन्न। तर, उहाँहरूको स्मृति हाम्रो मानसपटलमा ताजा नै भएर रहेको छ। हुन त शास्त्रले पनि भनेको छ-

*'जातस्य हि ध्रुवो मृत्यु र्ध्रुवं, जन्म मृतस्य च।*
*तस्माद् परिहार्यै य न त्वं शोपिनुमर्हसि ॥'*

जन्मपछि मृत्यु अनिवार्य छ। यो चिरन्तन सत्य हो। त्यसैले शोक गर्नु निरर्थक छ। यो पञ्च महाभूतले बनेको शरीर नाशवान् रहेछ। तर, दिव्य आत्मा (चेतन) ननासिने, आगोले नपोल्ने, पानीले नभिज्ने, हावाले नसुकाउने रहेछ। यो अजर र अमर हुँदोरहेछ। भौतिक शरीर नासिएर गए पनि आफ्ना कृति र यशहरू यसै धरामा ररिरहँदा रहेछन्। हामी सन्ततिहरूले यो कुरा भुल्नु हुँदैन। अन्त्यमा, हाम्रा पितृ, अग्रजहरूलाई शब्द श्रद्धाञ्जलि चढाएकी छु। इति !

*- भक्तपुर*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका परिवार निकट हुनुहुन्छ)*



सभ्यता पौडेल

# आदरणीय द्रोण दादाप्रति...

कसले चिन्न सक्छ र !
त्यो मानिसभित्रको भावना
कसले जान्न सक्छ र !
के थियो उहाँको चाहना !

हर्ष उल्लासको साथमा
ज्ञानको ज्योति फैलाइरहने
कूलमर्यादा बन्धुबान्धव
सबैलाई डोहोऱ्याएर हिँड्ने

यस्तो आदरणीय सदा स्मरणीय
हाम्रो दादाहजुरको सदा
कीर्ति फैलिरहोस्
यही छ कामना यही छ कामना !

*- वृन्दावन (उत्तर प्रदेश)*

*(लेखक डा.द्रोणकुमार उपाध्यायकी बहिनी हुनुहुन्छ)*



सविता घिमिरे

# मेरो सम्झनामा द्रोण दाजु

श्रद्धेय हाम्रा पिता पुण्यप्रसाद पौडेलका सात दाजु-भाइका सन्तानहरूमध्ये द्रोण दाजु सबभन्दा जेठो सुपुत्र हुनुहुन्थ्यो। पढाइमा पनि उहाँ निष्ठ हुनुभयो। असमबाट नेपालीमा एम.ए. गर्न बिराटनगर आई काठमाण्डौ जाँदा-आउँदा हाम्रो बिराटनगरको घरमा रहँदा, बस्दा हाम्रो बाक्लो भेट हुन्थ्यो। दाजु सबैसँग रमाइलो गर्नुहुन्थ्यो। बिहान सबेरै उठेर हामी सुतिरहेकालाई उठाउनु हुन्थ्यो, अनि लाइनमा उभ्याएर दुई वटा मन्त्र (श्लोक) पाठ गर्न सिकाउनु हुन्थ्यो–

*१ हात हेर्ने मन्त्र : ॐ कराग्रे बसते लक्ष्मी करमध्ये सरस्वती।*
*करमूले स्थितो गौरी प्रभाते कर दर्शनम्॥*
*२ उठेर भूमिमा पाउ राख्ने मन्त्र : ॐ समुद्र बसने देवी पर्वतस्तन मण्डले।*
*विष्णु पत्नी नमस्तुभ्यम् पादस्पर्शम् क्षमस्व मे॥*

...दाजुले सिकाएका यी २ मन्त्र उसबेलादेखि नै कण्ठस्थ छ।

दाजु काठमाडौं बिहानको बस (४:३० बजे) बिराटनगरबाट चढ्नु हुन्थ्यो। म बिहानै उठेर दाजुका लागि रोटी-तरकारी पकाइदिन्थें। थोरै खाएर बाटाको लागि लग्नु हुन्थ्यो।

शकुन दिदी र म चन्द्रगढी गएका बखत शान्ति दिदीसँगै दाजुलाई भेट्न गएका थियौं। हँसीमजाक गर्दै गफ चल्दैथियो। वातावरण रमाइलो पार्न म क्यारिकेचर गर्न थालें, सबै हाँस्यौं। दाजु हाँस्दाहाँस्दै लोटपोट हुनुभयो, आँखा राता भए, सर्किएजस्तै भयो; आपद नै पऱ्यो हामीलाई। केही छिनपछि ठीक भयो। त्यसबेलादेखि दाजुलाई धेरै हँसाउन नहुने ठान्यौं हामीले। तर, दाजु हामीलाई हँसाइरहनु हुन्थ्यो। सँगै नहुँदा पनि मलाई दाजुको झल्झली सम्झना आइरहन्थ्यो।

गत वर्ष दाजु अस्वस्थ हुनुभो, हामी सपरिवार दाजुलाई भेट्न गयौं । औषधोपचार चलिरहेको थियो । लखनऊबाट दाजु, उषा र यशवन्त भर्खरै फर्केर जानु भाको थियो । दाजु हामीसँग मज्जाले बोल्नुभो, रमाइलो भलाकुसारी भयो । छोरी प्रकृतिलाई भाञ्जी के छ ?- भन्नुभयो । मसँग केही ठट्टापछि 'सविताले म पढ्न काठमाण्डौ जाँदा बिहानै पकाएर खुवाएको रोटी-तरकारी कहिल्यै बिर्सन्न' भन्नुभयो । त्यसपछि ज्वाइँ-जेठानको साहित्यिक सम्बाद भयो, के लेख्दैछु पनि भन्नुभयो । साँझ पर्न लाग्दा हामी बिदा मागी इनरुवा घर फर्कियौं ।

एक हप्ता जति पछि सरस्वती पूजाका दिन सरस्वती पुत्र दाजु भगवानको प्यारो हुनुभयो, हुनहार दैव नटार । हामी स्तब्ध भयौं, हतार-हतार बस चढेर चन्द्रगढी पुग्यौं । बिराटनगरबाट नीरू दिदी, भिनाजु, सरिता, सुनिता र गोपाल पनि सँगसँगै जस्तो पुगे । भाउजू, उषा, यशवन्त सबै …… दाजुको शवयात्रा शुरु भयो । हामी पनि शवयात्रामा सामेल भई घाट पुग्यौं । दाहसंस्कारपछि भाउजू, उषा, यशवन्तलाई सान्त्वना दिँदै भारी र दुःखी मन लिएर घर फर्क्यौं ।

हार्दिक श्रद्धासुमन, प्यारो जेठो दाजुप्रति !

*इनरुवा*

*(लेखक डा.द्रोणकुमार उपाध्यायकी बहिनी हुनुहुन्छ)*



सुरेश चापागाई

# श्रद्धेय सम्धीज्यूको सम्झनामा

जीवनमा धेरै बाँचेर आफ्नो समाज मात्र नभएर सार देशकै बारेमा सोच्न सक्ने र यही समाजको लागि राम्रो राम्रो कामहरू गरेर देखाउनु पर्छ भनेर अगाडी बढी अत्यन्तै धेरै योगदान पुऱ्याउने उहाँ नेपाली समाजका एक बुद्धिमान, सफल, कुशल मानव र हुनुपर्ने सम्पूर्ण प्रतिभा भएका व्यक्ति भन्न पछि नपरौला ।

दोर्ण पौडेल नाताले भन्नुपर्दा मेरो जेठी छोरी परीना चापागाईको ससूरा अर्थात मेरो सम्दीज्यू, उहाँलाई पहिलो पल्ट छोरीकै विवाहको टिकाटालोमा भेटेर चीन्जान भएको थियो । उहाँको त्यो हसिलो अनुहार र बोलेका दुइचार शब्दमा मैले छोरीको भविश्य त्यो घरमा सुन्दर र उज्वल देखें । उहाँको घर झापा चन्द्रगढी जहाँ म जागीरको शिलशिलामा पहिले नै २/४ बर्ष बसेको थिए । मलाई त्यो ठाउँ राम्रै नै लाग्थ्यो र आउने जाने क्रममा सोई ठाउँ अथवा मेरा नातामा काका पर्नेको घर छोरीकै घर आमून्य सामून्य थियो झनै खुसी भए । छोरीको माइतीनी केही मात्रामा टाडा नहुने आवास गरे । धेरै खुसी थियौं सारै रमाईलो मान्छे हुनुहुन्थ्यो । भगवानलाईनी राम्रो र असल व्यक्ति चाहिदो रहेछ । उहाँको निधनले साह्रै दुखित छौं ।

विश्वासै नलाग्ने त्यो रोग जसले अन्तिम चरणमा पुराई सकेको रैछ । जती उपचार गरेनी निको भएनछ र अल्पआयूमै निधन भयो । उहाँ शिक्षामा नी नीकै अगाडी एज्म सम्मको अध्यान हाँसील गर्नु भएको थियो । पूर्वको मेची क्याम्पसका चीफ भएर लामो समयसम्म शिक्षा दिनुभएको थियो । म शुरुमा सम्धीज्यूको घर झापा जाँदा घरको पत्तो नलाग्दा त्यहाँ उपस्थिती जसलेपनि घर सोध्दा बनाइदिने गर्नुहुन्थ्यो सो सबैको प्रिय हुनुहुन्थ्यो ।

आठ बर्षको छोटो समय चीनजान भएपनि सयौं बर्ष चीनेको जस्तो व्यवहार थियो सम्दीज्यूको । विधिको विधान बुझिनसक्नु रैछ, भगवानलाई पनि सामाजिक

जीवनको असल मानिस नै चाहिदो रहेछ । जीवनमा सुख, शान्ति र आनन्द प्राप्त गर्नका लागि धन, एश्वर्य भएर मात्र पुग्दैन त्यसका लागि पारिवारिक सुख, आनन्द र मिठो बोली जोहोस हुनुपर्छ भन्नुहुन्थ्यो ।

पौडेल समाज सेवाका निकै भद्रभलादिमी व्यक्तित्व मेरो सम्धीज्यू संगको अन्तिम भेट उहाँको सालाभाइको घर गठाघरमा भएको थियो, त्यतिखेर उहाँलाई हेर्दा अझै जोस जाँगर भएको देख्थे तर त्यो सम्भव भएन नीकै दुखी छु । हामी मात्र होइन सारा समाजले असजीलो परिस्थितिमा पुगेको अनुभव भएको छ । सबैको घर गाउँ इष्टमित्र छरछिमेक वरपर सबैतिर पुगेर भलाकुसारी गरी तीतो मिठो रमाउने हसाउने हास्ने सामान्य परिवेशमा भिज्ने एउटा व्यक्तित्व अहिले पनि हाम्रो मानसपटलमा जीवन्त हुनुहुन्छ । उहाँ हो आदरणीय सम्धीज्यू ।

लेख्नत धेरै मन थियो, उहाँको बारेमा लेखेर सकिदैन रैछ राम्रा असल सामाजिक व्यक्तित्वको त्यसैगरी स्वर्गीय सम्दीज्यू दोर्ण पौडेलको अभाव हामी सबैलाई छदैछ । तथापी उहाँको कम समाज सेवा ज्यूँदो रहनेछ । उहाँको इच्छा चाहनालाई उचित गराउन उहाँको छोरा बुहारी अर्थात मेरा छोरी ज्वाईंमा जावस यती भन्दै उहाँको आत्माले बैकुण्ठमा बास गरोस भन्दै हार्दिक समवेदना प्रकट गर्दछौं । हरे कृष्ण, राधे राधे !!!

*(लेखक डा.द्रोणकुमार उपाध्यायका सम्धी हुनुहुन्छ)*



सुबोध पाण्डे

# पिताको स्मृतिमा

यवनिकासँगको साइनो पिता-आमाले दिएको कन्यादानबाट शुरु भएको नाता मेरो लागि राम्रो, आनन्द र गर्वको छ । वास्तवमा पिता सबैका प्रिय र आदरणीय व्यक्तित्व हुनुहुन्थ्यो । उहाँको उपस्थितिमा हरेक व्यक्तिले केही नौलो ज्ञान र जानकारी पाएका हुन्थे । पिता र हामीहरूको एजथकष्अर्बा भेट कि हामीहरू झापा गएको बेलामा कि त उहाँ काठमाडौं आउनुभएको बेलामा हुन्थ्यो । पितासँग यवनिका दैनिकजसो मेसेन्जरमा आबद्ध भएकाले सबैको हालखबर र कुराकानी दैनिकजस्तो थाहा हुन्थ्यो । बेला-बेला 'ज्वाइँसँग कुरा गरौं न छोरी' भन्नुहुन्थ्यो र पितासँग कुराकानी गरिन्थ्यो । पिता अलि छिटो बोल्नुहुन्थ्यो । म कतिपय कुरा अनुमान मात्र गर्थें । पिताले हाम्रो परिवारका सबै सदस्यहरूको हालखबर पनि सोध्नु हुन्थ्यो र ममीको स्वास्थ्यलाई बुझेर होला, सुगर र प्रेसरका बारेमा पनि सोधिरहनु हुन्थ्यो ।

म विवाह अघि पूर्वीतिर गएको थिइन । विवाहपछि यवनिकासँग पहिलो पटक ससुराली जाँदा त्यहाँ साह्रै रमाइलो लाग्यो, पिता र दाइ (यशवन्त) सँग धेरै ठाउँ घुम्ने मौका मिल्यो । तराईको सम्मपरेको भाग र चिया बगान देख्दा साह्रै रमाइलो लागेको थियो । विवाह भएको वर्षदिनदेखि नै म, यवनिका र बाबु हामी तीन जना नै दशैंमा घरको टीका लगाइसकेपछि पिता-आमाको हातबाट टीका थाप्न झापाको चन्द्रगढी जान्थ्यौं । तीन-चार दिनको बसाइ एकदम रमाइलो हुन्थ्यो । पिता छोरी यवनिकासँग त झन रमाइलोसँग कुरा गर्नुहुन्थ्यो । म ससुराली जाँदा धेरै ठाउँ घुम्न गएको छु । मलाई पिताले हरेक ठाउँ र नातालाई स्पष्ट तरिकाले चिनाउनु हुन्थ्यो ।

आफ्नो ठाउँमा पिताको ठूलो सम्मान थियो । एक समय पितासँग प्रज्ञा प्रतिष्ठान गएको थिएँ । त्यहाँ कुलपति, उपकुलपति र नेपाली विभागका प्रमुखसँग भेट भएको थियो । त्यस समय मलाई थाहा भयो कि ती सज्जनवृन्दबाट

पनि पिता सम्मानित हुनुहुन्थ्यो । उहाँहरूको आग्रहमा नै पिताको एउटा किताब लोकवार्ता प्रज्ञा प्रतिष्ठानबाट प्रकाशन भएको थियो । पिता लगायत प्राज्ञिक व्यक्तित्वहरूसँगको भेटले मेरो जीवनमा सकारात्मक ऊर्जा ल्याउँथ्यो । ज्ञानको भण्डार भएर होला, पितालाई बौद्धिक व्यक्तित्वहरूबाट हरेक ठाउँमा सम्मान मिलेको देखिन्थ्यो ।

एक समय पितासँग इण्डियाको यात्रामा विभिन्न ठाउँहरू सोलाब, तेजपुर, गुवाहाटी, अरुणाञ्चल प्रदेश, बनारस र लखनउ कानपुरसम्म घुम्न गएका थियौं । हजुरबुबाको चौरासीमा पितासँग असम जाने मौका पनि जुरेको थियो । पितासँग मैले केही हप्ता कानपुर (इण्डिया) को एउटा अन्तर्राष्ट्रिय सम्मेलन अर्न्तगतको एउटा शिविरमा उपस्थित भएको थिएँ, जुन ज्ञानले सामान्य जीवन तर उपलब्धिपूर्ण जीवनको व्याख्या गरेको थियो । त्यस कार्यक्रमको मुख्य आयोजकले पनि पितालाई सम्मान गरेका थिए र पिताले बोलाउनुभयो भने म नेपाल आएर उक्त कार्यक्रममा सहभागी हुन्छु भन्ने कुरा पनि गर्नुभएको थियो ।

पिता कतै पनि यात्रा गर्नु अघि हरेक कुराको प्रबन्ध पहिले नै गर्ने र गर्न लगाउने गर्नु हुन्थ्यो, जसले यात्रालाई धेरै सहज बनाउँथ्यो । अगाडि नै त्यस ठाउँका बारेमा छलफल गर्ने पिताको बानी थियो । पिताले कहिल्यै पनि बाहिरको खानेकुरा खानु हुँदैनथ्यो, घरबाटै प्रबन्ध गर्नु हुन्थ्यो । तर, हामीलाई भने बाहिरको खानलाई छुट दिनु हुन्थ्यो । पितासँग बिताएको ती दिन मेरो जीवनमा सधैं स्मृतिमा रहिरहने छ ।

पिता मेरो ढुक्क लाग्ने अभिभावक हुनुहुन्थ्यो । पिताको दैनिकी विचार, वर्तमान र भविष्यलाई सरल एवम् उत्कृष्ट तवरले आनन्दपूर्वक बिताउन जान्ने र बितेको समयका कुरालाई सुनाएर प्रेरणादायक ज्ञान दिन सक्ने थियो । जीवनमा समस्यामा परेकाहरूका लागि उचित सल्लाह सहयोग गर्न सक्ने क्षमताका उहाँ जस्तो अभिभावकका सन्तानहरूले सुखको अनुभव गर्नु कुनै नौलो कुरा भएन । हरेक दिन पिताले उत्साह र उमंगले बिताएको मेरो मानसपटलमा अझै ताजा छ । त्यो उत्साहमय जीवन एक्कासी रोगले समाप्त बनाइदियो । पितालाई गुमाउँदा आजकल ठूलो पीडा हुन्छ । तथापि जीवन सुख र दुःखको संगम हो । यो जीवन सबैले एक न एक दिन सबैले छोडेर जानुपर्ने हुन्छ भन्ने तितो यथार्थलाई बुझेर हामी सबैले मन सम्हालेर बसेका छौं । पिताको आत्माको सधैं वैकुण्ठबास होस् ।

*- सामाखुसी, काठमाडौं- २६*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका कान्छा ज्वाइँ हुनुहुन्छ)*



सुयश पाण्डे

# In the memory of my wonderful grandfather!!

My maternal home. Our wonderful family. A family that has written a legacy. A golden heart stopped beating and those hardworking hands went on rest forever. This broke my heart.

My grandfather has left me with memories, happiness, and has taught me norms and values about life and living. I am always inspired by his work and his contribution to the field of education. He was the backbone of the family. We were always happy while we used to be with him. I would always look upon his upbringing and we are forever in debt.

The memories bring back him. They are always fresh and I always smile when I think of him. My grandfather was always there to pick us up whenever we traveled to Jhapa. We used to play with his belly and shared our big laughter. I still remember the day; I traveled to Jhapa by myself on board. I was happy to see my grandfather and my brother Aaditya over there. It was a relief for me. Perhaps, due to some reason, I was unable to open the door. Meanwhile, they told me that they were leaving. Oh god!! How can they leave? I was stressed and scared. What will I do? How can I find a way out? But to my surprise, when the door opens, they were still there standing and waiting for me, so that we could go home together. Oh god, he loved me so much. It was a prank but he was trying to teach me not to panic in difficult situations.

My grandfather always used to bring Buniya home just to delight me; knowing that it was my favorite. We used to travel

by bike and see different places together. He used to ask me to try different dishes and experience something new. Traveling to Solukhumbu with Pita was so much fun and also playing with that cold snow with pita was to fun to. A greater experience indeed. He loved to have conversation with me in english.

I still couldn’t believe that pita is not with us. It gives me pain and sorrow. Sometimes I think the world is so cruel. But then I remember my pita was a strong human being. So kind and humble. My pita taught me to never argue and to speak less. He always says to focus on what we do so that we could reach success. I miss my pita. He will always be on our minds and memory. May his soul rest in peace. We will always love him and cherish all the memories he has passed upon us. The last words said by pita to me we're" speakless, don't argue , be positive . I will always  follow these in my life.

*Thank you.*

*(लेखक डा.द्रोणकुमार उपाध्यायका नाति हुनुहुन्छ)*



शान्ता अधिकारी

# मेरो भाइ

बुबाहरू सात जना दाजु-भाइ हुनुहुन्थ्यो । बुबाहरूको बाल्यकाल असम बिहालीको बटियामारीमा बितेको थियो । भाइ द्रोण माइला ठूलोबुबाको छोरा र म साइँलीकी छोरी हुँ । आमाहरू पनि दाजु-भाइका छोरीहरू भएकोले हाम्रो मामाघर पनि एउटै हो । पढाइको सिलसिलामा मेरो बुबाले सानै उमेरमा असम छोड्नुभयो र यता-उता भौतारिँदै नेपालको बिराटनगरमा आफ्नो स्थायी थलो बनाउनुभयो । अरु सबै बुबाहरू असममै हुनुहुन्छ भन्ने मात्र हामीलाई थाहा थियो । त्यसपछि असमसँगको सम्बन्ध एक किसिमले तोडिएझैं नै भयो ।

२०२० सालको कुरो हो, मेरो विवाह भरखरै मात्र भएको थियो । बुबाहरू सबै जना हजुरबुबाको नाउँमा पुराण लगाउन जाने हुँदा हामी दुवैले पनि जाने मौका पायौं । भाइसँग मेरो पहिलो भेट त्यतिबेलै भएको थियो । भाइ द्रोण त्यतिबेला १४-१५ वर्षको थियो । १५-२० दिनपछि हामी नेपाल फर्कियौं । त्यसपछि त १-२ पल्ट मात्र भेट भयो होला । पठनपाठन सबै असममै भए पनि नेपालीबाट एम.ए. गर्ने मौका उसले काठमाडौंबाट पायो, त्यतिबेला फेरि हाम्रो भेट भयो । उसको विवाह भई छोरा-छोरी भए ।

ठूलो बुबाको पनि स्वर्गवास भयो । ठूली आमा पनि ब्रह्मलीन हुनुभयो । अरु बुबाहरू (चार जना बुबाहरू) पनि एक-एक गर्दै नेपालतिरै आएपछि भाइले के विचार गर्‌यो कुन्नि, उसले नेपाल आउने निधो गऱ्यो । नेपालमा कान्छा काकाकोमा आएर यता-उता काम खोज्दैगर्दा के खोज्छस् काना, आँखो भनेझैं मेची क्याम्पसमा प्राध्यापकको जिम्मेवारी पायो । अलिक दिन काकाकैमा बसेर आफ्नो ड्युटी गर्दागर्दै डेरा खोजी असमबाट परिवार ल्याई आफ्नो स्थायी थलो चन्द्रगढी नै बनायो । अब चैं हामी दिदी-भाइको घनिष्टता झांगिदै साथीको रूपमा परिणत भयो । आफ्नो दुःख-सुखका हरेक कुरा एकअर्कामा साटासाट गर्ने क्रममा

हरेक कुराको सल्लाह म भाइसँग लिन्थें । यस्ता तिता-मिठा कतिपय कुराहरू छन्, जो यस कागजमा लेखेर मेरो हृदयमा लागेको घाउलाई खोतल्न चाहन्न ।

भिनाजु चैं र भाइलाई खुब ख्यालठट्टा गर्नु पर्थ्यो । कहिलेकाहीं ठट्टा गर्दागर्दै झगडा नै होला जस्तो हुन्थ्यो । मिलाउन मलाई हम्मे-हम्मे पर्थ्यो । पछि, भाइ बिरामी भएपछि म सधैं एक पल्ट हेर्न जान्थें । अरु त के गर्न सक्थें र, सान्त्वना दिएर आउँथे । त्यो दिन पनि बिराटनगरबाट बैनी-ज्वाइँ आउनुभएको थियो । खाना खाएर उहाँहरूलाई लिएर म घर गए । भाइलाई घाममा निकाल्न लागेको रहेछ भदा यशवन्तले । मेरो आवाज सुनेर होला कि, 'मेरी दिदी खोइ' भनेर भाइले मलाई खोज्यो । भाइको त्यो एउटा शब्द (मेरी दिदी खोइ) सम्भिmंदा अहिले पनि मेरा आँखा रसाउँछन् । के थाहा, त्यो तिम्रो अन्तिम दिन रहेछ ।

राति किशोर भाइले फोन गऱ्यो- 'दिदी ! दादाले हामीलाई छाडेर गयो ।' निशब्द भए, बोली फुटेन, राति नै गएँ । के गर्नु ? दिउसो भाइसँग बोलेर गएकी, राति त्यो अवस्थामा देख्ता मूकदर्शक झैं भाइलाई एकोहोरो हेरिरहें । मानौं... मेरा आँखाले भनिरहेका थिए, भाइ ! यति चाँडो हामीलाई छोडेर गयौ । अब मैले कोसँग आफ्ना दुःख-सुख शेयर गर्नु ? कोसँग सल्लाह गर्नु ?

भाइ ! तिमीले हामीलाई छाडेर गए पनि यो धर्तीमा तिम्रो जति मान र प्रतिष्ठा थियो, स्वर्गमा पनि त्यति नै मान र प्रतिष्ठा तिमीलाई मिलोस् । तिमी पौडेल परिवारका तारा थियौ, तारा भएर नै आकाशमा सधैं चम्किराख मेरो भाइ !

*चन्द्रगढी (भद्रपुर- १०) झापा*

*(लेखक डा.द्रोणकुमार उपाध्यायकी दिदी हुनुहुन्छ)*



हिमसागर उपाध्याय

# महान आत्माप्रति श्रद्धासुमन

*न जायते मृयते वा कदाचित्नाय भूतो भावि ता वा न भूयः*
*अजो नित्यः शाश्वतोऽयं पुराणोः न हन्यते हन्यमाने शरीर ।*

*–श्रीमद्भागवद् गीता*

शरीर अनित्य र विनासशील छ भने आत्मा अजर, अमर र अविनाशी छ । यो न मर्छ, न जन्मन्छ । त्यसैले शोक व्यर्थ छ !

असमको सोलङ नामको गाउँको प्रतिष्ठित खनाल परिवारसँग मेरो नाता जोडिने क्रममै श्रद्धेय द्रोणकुमार पौडेलसँग मेरो परिचयले पूर्णता पाएको थियो । उहाँको त्यतिखेरको हँस्यौली अझै मेरो सम्झनामा आलै छ, 'तपाईंलाई यहाँ स्वागत छ' भन्दै पहिलोपल्ट ससुरालीमा जिस्कँदै स्वागत गर्नुभएको ।

खनाल परिवारका दुइटी दुहितामा उहाँ जेठो ज्वाइँ भने म कान्छो । द्रोणकुमार पौडेलज्यूका बारेमा मलाई त्यतिखेर थाहा नै थियो र परिचय विनिमय गर्न मेरो मन लालायित थियो । हाम्रो बीचमा जोडिएको यो नयाँ सम्पर्कले उहाँसँग घनिष्ट हुने मलाई एक अपूर्व अवसर प्रदान गऱ्यो । हाम्रो बीचको पारिवारिक सम्बन्धमा उहाँका पिता स्वर्गीय टीकाराम शास्त्री र मेरा पिता स्वर्गीय गंगा उपाध्याय सापकोटा परममित्र हुनुहुन्थ्यो । दाजुको हाम्रा पितासँग भेट हुने मुहूर्तहरू सधैं नै आत्मीयताले भरपुर हुन्थे ।

दाजु द्रोणकुमार पौडेलको (यसउप्रान्त लेखाइमा उहाँलाई 'दाजु' भनी लेख्छु) साहित्य र भाषापट्टिको गहिरो लगाव र प्रेम, 'बसुधैव कुटुम्बकम्' भाव, आफ्नो धर्मप्रति सचेतनता, कर्म सजगता, मृदु बोलिचाली, सबैसँग मेलमिलाप बढाउने मन, सबैलाई अन्तरले चाहना गर्ने र परेका बेलामा सबैलाई सघाउ पुऱ्याउने भावना, अतीतका साना-साना कुराहरू नबिर्सिने, सबैलाई यथायोग्य सन्मान दिने, देशप्रेमी मनले भारत होस् अथवा नेपाललाई श्रद्धा गर्ने, विरल असामान्य

व्यक्तित्वका अधिकारी हुनुहुन्थ्यो । नेपाल र भारतभित्रका आफन्तहरूमा सुमधुर सम्पर्क बढाउने र राख्नेहरूमा मेरा अवलोकनमा उहाँ पहिलो दर्जाका व्यक्ति हुनुहुन्थो ।

जुलाई २०१९ मा असम ब्राह्मण समाजको गोलाघाट अधिवेशनको साधारणसभामा उहाँले मुख्य अतिथिका रूपमा पहिला नेपालीमा र पछि असमिया भाषामा गरेको भाषण अविस्मरणीय छ । नेपाल र भारतका बीचको भौगोलिक सीमालाई नाघेर स्थापित भएको ऐतिहासिक र सांस्कृतिक सुमधुर सम्पर्कका विषयमा उहाँले दिएको परिभाषा र लेखाजोखा सभामा भएका सबैले अन्तरले सराहना गरेका थिए । उहाँले आफ्नो भाषणमा नेपालको ऐतिहासिक भास्कर्य र सौन्दर्यको चित्रण दिएर सबै ईच्छुकजनलाई यसको रसास्वादन गर्न नेपाल आउने निम्तो दिँदै चाहिएका खण्डमा नेपालमा सघाउ पनि पुऱ्याउने आश्वासन दिनुभएको थियो । असमबाट त्यसपछि नै एउटा उच्चस्तरीय टोली नेपाल जाने तरखर गर्दागर्दै दाजु बिमारी हुनाले त्यो सफल हुन सकेन । दाजुको त्यो सपना सपनामै रह्यो !

दाजुको जन्म, बाल्यकाल, शिक्षा यहाँ असममै भए तापनि पछि बसोबासो र उच्च शिक्षा नेपालमा हुनाले उहाँ कार्यमा दुईतिरकै मानिस हुनुहुन्थ्यो । उता र यताको सम्पर्कका बारेमा उहाँ भन्नु हुन्थ्यो- 'मेरो हंस चाहिं उहाँ छ भने वंश चाहिं यहाँ' । यतातिर हुँदा दाजु यहाँको राष्ट्रियकृत ब्यांकमा अफिसरको नोकरीमा हुनुहुन्थ्यो । स्वाधीन रूपले बस्ने मनस्थिति र भाषा-साहित्यको प्रेमको लगावले उहाँले छिट्टै नै नोकरीबाट राजीनामा दिएर आफ्नो मन पर्ने कार्य भाषा-साहित्यको साधना र शिक्षक पेशालाई अपनाउनु भयो ।

साँच्चै नै दाजुसँगका मेरा जीवनका प्रत्येक पल नै मेरा लागि स्वर्णिम अनुभूति हुन् । उहाँ यता आउँदा हामी दुई भाइ उहाँले तोकेअनुसार यताउता डुलिहिंड्दा उहाँको मानिसहरूसँगको वार्तालाप, व्यवहार अत्यन्त कौतुहलले म नियालेर रसास्वादन गर्थें र पछिका दिनहरूमा यी सबै अभिज्ञता मेरा लागि मार्गदर्शक भएका थिए ।

दाजुका सोचहरू सधैं मलाई योगात्मक लाग्थे । उहाँको ज्ञानको परिसर नेपाली भाषा-साहित्यमा मात्रै सीमित नभएर लोकसंस्कृति, संस्कृत भाषा र साहित्य, कविता, विज्ञान, राजनीति र अरु धेरै ज्ञानबर्द्धक विषयहरूमा विस्तृत हुन्थ्यो !

नेपाली अथवा असमिया दुबै भाषामा अगाध दखल हुने दाजुको, बंगाली

भाषा ज्ञानमा पनि परिपक्वता थियो । बंगाली भाषा र साहित्य साधकले उहाँको ज्ञानलाई अनुधावन गरी, बंगाली साहित्यका सेमिनारहरू भारतमा होस् अथवा बांग्लादेशका, निकै ठाउँमा निम्त्याउने गर्थे र निम्तो स्वीकार्दै उहाँ उपस्थित भएर नेपाली र बंगाली भाषाको योगात्मक मिलनगाथा पर्गेल्नु हुन्थ्यो ।

दाजुसँग हामीले अति चाँडो नै बिछोडिनु परेको हामी सबैका लागि अत्यन्त दुर्भाग्यको कुरा हो । उहाँको अवर्तमानमा भविष्यत्का लागि रचेका हाम्रा भौतिक चिन्तन र स्वर्णिम परियोजनाहरू वास्तविक हुन पाएनन् । मानिसको उमेर वर्षले नतौलिएर कर्मराजीले तौलनु हो भने दाजुले आफ्नो छोटो जीवन अवधिमा हामी सबैलाई जे जस्तो सक्नुभयो- मार्गदर्शन गर्नुभयो, त्यो विशाल छ ! हामी मार्गच्यूत नभई उहाँले देखाएको बाटो पैल्याउँदै जाऔं, वाञ्छित लक्ष्य अवश्य नै पाउने छौं ।

अब हाम्रा बीचमा उहाँ पार्थिव शरीरका साथ नभए पनि अमर पुनीत आत्माको हिसाबले उहाँले सधैं नै हामीलाई मार्गदर्शन गर्नु हुनेछ। उहाँको पुण्यात्माको वैकुण्ठमा बास होस् ।

ॐ शान्ति शान्ति शान्ति !

*- ढेकियाजुली, असम*

*(लेखक डा. द्रोणकुमार उपाध्याय साढुभाइ हुनुहुन्छ)*



ज्ञानमणि पौडेल

# अलबिदा पिताश्री

टाढिनु त निश्चित थियो एक दिन
तिमीले हतार गर्‍यौ
विकल्प केही थिएन
सत्य, यो देह केही हैन
एक चिम्टी खरानी हो
हाँसो र रोदन / सत्य र भ्रम बीचको
क्षणिक कहानी हो !

यो आकाश अनि धर्तीलाई जोड्ने
क्षितिजलाई सोध्न मन छ
जोडेर नाता तोड्दै सपना
छुट्टाएर किन लैजान्छ ?
तिम्रो बिदाइ गर्न बाध्य बनाइएका मनहरू
तिम्रो आगमनको प्रतिक्षामा
घरको ढोका खोली
बार्दलीमा प्रतीक्षारत छन्
तिम्रो अस्त कहिले नहोस् !!

आज फेरि अर्को धरोहरको अस्त
अलबिदा पिताश्री प्राध्यापक (मेची क्याम्पस, भद्रपुर)
डा. द्रोणकुमार पौडेल ।

*(लेखक डा. द्रोणकुमार उपाध्यायका परिवार निकट हुनुहुन्छ)*



आनन्दप्रसाद घिमिरे

# गुरु डा.द्रोणकुमार पौडेलप्रति श्रद्धाञ्जलि

नेपाली अनि बङ्गला, असमियाँ त्यो राजवंशी उता
हिन्दी, संस्कृत, मैथिली सकलमा राखेर आफ्नो बुता ।
अङ्ग्रेजी अझ भव्यतासँग जडी पढ्ने र लेख्ने वली,
ज्ञानी, पण्डित, पुख्खली म गुरुमा अर्पन्छु श्रद्धाञ्जली ।।
१

ध्यानी, विज्ञ र सभ्य पार्न बलले ती छात्रछात्राकन,
आफ्नो देश सजाउने मन गरी संयुक्त अध्यापन ।
गर्ने पुस्तक ती प्रकाशित खटी साहित्य सेवा अति,
पार्ने व्यक्ति र गाउँ उन्नत सदा पाऊन् उनी सद्गति ।।
२

धेरै छन् गुरुदत्त पुस्तक यहाँ बन्ने कडा गर्वित,
लेखेका नवमी र व्याकरण ती प्रज्ञा तिखार्ने नित ।
'सिङ्गो वंश चिनारी' कर्म सबमा लेखेर छापी दिए,
'केही साधक केही साधन' निकै उत्कृष्ट भाषा थिए ।।
३

भाषाको अति उन्नति प्रणयले त्यो 'लोकचर्चा' गरी,
नेपाली क्षमता बढाउन दिए जो दिव्य वाणी भरी ।
गर्दै राष्ट्रिय, अन्तराष्ट्रिय सभा ती उच्च सम्मेलन,
भर्थे भूति तथापि रुन्छु उनको अल्प्यो यहीँ जीवन ।।
४

'विद्वान् सक्रिय हुन्' भनेर गुरुले सम्मान पाए अनि,
सच्चा सभ्य भई सदा सकलको अज्ञान नासे पनि ।
नानी भै गुरुजी रहे नयनका त्यो काल आई वली,
झम्टी टप्प टिपी लगेछ, म रुँदै अर्पन्छु श्रद्धाञ्जली ॥

५

'नेपाली कुलमूलका गुरु' भनी सम्मान गर्थें अति,
हिंड्दैथें गुरुका नवीन पथमा ऐले भयो यो खती ।
मेरा कान दुखे सुनेर गुरुजी स्वर्गीय बन्दा ढली,
आत्मा शान्त बनोस् भनेर गुरुको अर्पन्छु श्रद्धाञ्जली ॥

६

टीकाराम र भेजका सुत मनीषी लोक उन्नायक,
त्यो ठूलो मुहुडा शरीर बलियो प्रज्ञा-प्रभादायक ।
बाँच्दै सत्तरी वर्ष पूर्ण गुरुजी धर्ती उज्यालो बली,
श्रद्धा अर्पण गर्छु स्वीकृत गरून् बैकुण्ठ जाँदा चली ॥

७

नेपाली जनमा गरेर मनले शिक्षा, सदाचार यो,
विद्वत्ता, धन, उन्नति, प्रखरता सद्भावनाको दियो(
बाली जानु भयो उँभोतिर छिटै आदर्श राखी वली,
आत्मा शान्त बनोस् भनेर गुरुमा अर्पन्छु श्रद्धाञ्जलि ॥

८

छोराछोरी र नातिनी घरतिरै छाडेर टाढा गयौ,
पत्नीले परिवारले जति दिए छोडेर माया गयौ ।
आफ्नो धर्म, समाज, संगति सबै छोड्नै लगाई वली,
झम्टी झट्ट लगेछ, भाव बलले अर्पन्छु श्रद्धाञ्जलि ॥

९

हामी इष्ट र मित्र, सन्तति यहाँ छोडी उहाँ जानु भो,
खान्छौं खाद्य खटेर माथि गुरुले पाएर के खानु भो ?
लाग्ला प्यास र भोक शोक कहिले आलस्य बन्दै ढली,
ती सारा अब पूर्ण पार्न बलले अर्पन्छु श्रद्धाञ्जलि ॥

१०

हाम्रो भाव छ सुम्पने मन अरू छैनन् वहाँ गैदिने,
वा धेरै सुख दुःख भो खबर यो आउन्न कैल्यै दिने ।
जे जे छन् सुखदुःख ती सब उही छेल्दिन्छ जैल्यै वली,
होस् शान्ति, सुख होस् निरामय तनू अर्पन्छ श्रद्धाञ्जलि ॥

११

गुरु निधन भएको रात रातो गराई,
वरपर नर रुन्थे दीन बन्थे डराई ।
हृदय अति छिया भो यो सुनेदेखि मैले,
कलम-जल चढाई रुन्छु सूरि क्रमैले ॥

१२

अनि कति जन आई भोलि सोला चलाए,
मृत शवकन राखी अग्नि बाली जलाए ।
तन अधिक जलेथ्यो जीवले छोडिएको,
अमल जल चढाएँ डाह भागोस् भएको ॥

१३

सुखसँग गुरुआत्मा मार्गमा चल्न पाओस्,
दुख सकल हटाओस् दूतबाटै रमाओस् ।
असमल जल पाई मार्गमा शान्ति आओस्,
तनुजकन शुभाशीर्वाद बाँडी रमाओस् ॥

१४

*भ.न.पा.-७, इलुवाबारी*

*(लेखक छन्दोबद्ध कवि हुनुहुन्छ)*



कमला खनाल कोइराला

# श्रद्धासुमन द्रोण गुरूप्रति

आएँ क्याम्पस पढ्न भनी, तिमीलाई पाएँ गुरु,
तिम्रो छत्रछायामा रही गरेँ पढाइ सुरु ।
जहिले हेऱ्यो उज्यालो मुहार, मुस्कान छर्थ्यौ तिमी,
के थिएन ? मथिङ्गलमा ज्ञानको सागर तिमी ।।

१

विद्यार्थीका प्यारा तिमी सधैँ प्रिय बन्थ्यौ
घेर्थे वरिपरि तिमीलाई तिमी मियो बन्थ्यौँ ।
मुहार बल्थ्यो झलमल्ल ज्ञानको त्यो चमकले,
बाँड्थ्यौ ज्ञान, बाल्थ्यौ ज्योति हेर्थ्यौ ती नयनले ।।

२

तिम्रो भौतिक शरीर यहाँ छैन भन्ने सुनेँ जब,
झ्याप्पै छोपो अँध्यारोले सबै बत्ती निभे तब ।
हो भने नि देख्या छैन पत्याऊँ आज के गरी ?
काप्यो होला धर्ती थरथर तिम्रो शरीर लड्दाखेरि ।।

३

दुःखी हुन्छन् परिवार त सबका प्यारा जनले छोड्दा,
तर आज रोयो धरा तिमीले आफ्नो बाटो मोड्दा ।
योग्यता र अनुभवका गाथा आज कति कहुँ,
सारा तिम्रा कृति पढ्दै, अब हामी यहाँ रहुँ ।।

४

पदक, सम्मान, पुरस्कार अभिनन्दन कति,
बढेन कहिल्यै तिम्रो अहम् मनको कुनामा रति ।
साहित्यिक वाङ्मयले तिमीलाई अमर पाऱ्यो,
बाँच्यौ तिमी सदा यहाँ ठाउँ मात्र साऱ्यो ॥

५

साहित्यको शिखरलाई चुली पार्न कस्सियौ,
थाहा नपाई सबका मनमा तिमी सहज पस्यौ ।
अब बस हरेक मनमा तिमी रमाई रमाई,
श्रद्धा सुमन अर्पण गर्छु पुष्प गुच्छा चढाई ॥

६

*भद्रपुर-१०, सरस्वतीचोक (झापा)*

*(लेखक छन्दोबद्ध कवि हुनुहुन्छ)*



कोमलप्रसाद पोखरेल

# डा.द्रोणमा शब्द पुष्पाञ्जलि !

अत्रिका पुत्र आत्रेय ऋषि हुन् द्रोण(पूर्वज,
ब्रह्माका पुत्र हुन् अत्रि, नेत्रबाट समुद्भव ।
ऋग्वेदका मन्त्रद्रष्टा धेरै ऋषि प्रसिद्ध छन्,
पाँचौ मण्डलका द्रष्टा यिनै अत्रि महर्षि हुन् ।

यस मण्डललाई नै भन्छन् आत्रेय मण्डल,
सतासी सूक्तले व्याप्त छ यो पञ्चम मण्डल ।
अग्नि इन्द्र मरुत् विश्वेदेव औ  सवितादिको,
स्तुतिका साथमा कर्म व्याख्या छ इन्द्र अग्निको ।

अत्रिको, अनसूयाको भयो उद्वाह, जन्मिए
दुर्वासा, दत्त औ सोम प्रतापी बहुतै थिए ।
यिनकै वंशमा एक पौडेल उपनामक(
द्रोणबारे यहाँ चञ्चूप्रवेश गर्छ लेखक ।

भोजमाया तथा टीकारामका पुत्र रूपमा
नेत्र शून्य तथा शून्य कृत्तिका विक्रमाब्दमा ।
असमको बियालीमा पदार्पण भए यिनी ।
ठूलो भई गरे ब्याहा मीरा नाम सुहासिनी ।

गुवाहाटी विश्वविद्यालयबाट स्वचालित,
सुरुदेखि पढी पास भएछन् द्रोण स्नातक ।
नेपालीमा कलाचार्य त्रिविबाट भएपछि,
डक्टरेट भए पास बंग उत्तरमा यिनी ।

द्रोणबाट उठ्यो नाम डा.द्रोण भन्दथ्यौं सबै,
खुनखोट ठ्याम्म भेट्न सकिँदैन थियो कतै
मिजासिला, निश्छल औ सत्यवादी स्वभाव हो,
मसिनो स्वरमा बोल्नु द्रोणको पहिचान हो ।

आफ्नो आचारमा जो छ सो पुजिन्छ सधैंभरि,
अत्रिका पुत्र आत्रेय महर्षि पुजिएसरी ।
आचार वंशको जस्तै रहेको दृष्टिगोचर
हुन्थ्यो द्रोण उपाध्याय मित्रका भित्रबाहिर ।

नेपाली मातृभाषा हो दोस्रो असमियाँ भयो,
तथा संस्कृत अंग्रेजी राजवंशी छँदै छ यो ।
हिन्दी र बङ्गला जस्ता भाषाज्ञाता थिए उनी,
झापा नै शून्य पारेर त्यागे देह सुटुक्क नै !

मेची क्याम्पस झापाको हो कलेज पुरातन,
धेरै वर्ष गरे राम्रो प्राध्यापन प्रशिक्षण ।
नेपालीको विभागीय अध्यक्ष पदमा रही
चलाए द्रोणले कार्यकाल तीन खुसी भई ।

मेरा भाइ सगोत्रीय द्रोणको संझना गरी
थोरै भए पनि श्रद्धा अन्तर्हृदयमा भरी ।
पितृको शक्ति पाएका द्रोणले यो पढून् अब,
भन्दै यो शब्दको पुष्प गर्छ अर्पण कोमल ।

*कनपा ३, सुरुङ्गा (झापा)*

*(लेखक प्रसिद्ध कवि, समालोचक तथा हास्यव्यङ्ग्यकार हुनुहुन्छ)*



पवित्रा घिमिरे

# डा. द्रोणकुमार गुरुमा श्रद्धासुमन

द्रोण सरलाई सम्झनुपर्दा २०७६ सालको जेठ ९ र १० गतेलाई सम्झन्छु। साहित्य, कला, संगीत प्रतिष्ठान-इलामले आयोजना गरेको २ दिने गोष्ठीमा दुई महान् व्यक्तित्वहरू होम सुवेदी सर र द्रोणकुमार पौडेल सरले म सहित इलामका नेपाली शिक्षकहरूलाई ट्रेनिङ दिनुभएको थियो। अत्यन्तै थोरै समयमा अत्यन्तै धेरै ज्ञानरूपी सुधाको पान गर्न पाएका थियौं त्यसबेला। हाम्रो आशा थियो, पछिका कुनै समयमा उहाँहरूबाट ज्ञानगुनका कुरा सिक्न अझ राम्रो अवसर मिल्नेछ। तर, त्यो कुरा आश-आशमै निराशामा परिणत भयो। एक वर्ष बित्दा नबित्दै द्रोण सरको निधनको खबरले हामीलाई मर्माहत बनाएको छ। होम सरसँग मात्रै भेटेर भए पनि एकपटक त्यस्तै प्रकारको भेट गर्न मिल्नेछ भन्ने आशामा छु। मैले त्यतिबेला लेखेर वाचन गरेको यो कविता जस्ताकोतस्तै :

श्रद्धेय द्रोण गुरु

कैले जन्म दिँदै सुरम्य मनको आनन्द लुट्ने सदा
कैले मृत्यु विडम्बना छ विधिको कस्तो विचित्रै कला
मोती झैं छ टलक्क त्यो धवलता देखिन्छ यो जिन्दगी
स्वाट्टै झर्छ बिलाउँदै जमिनमा गैजान्छ यो अल्पिई

जानै पर्छ अवश्य नै जन्मको मृत्यु पिछा गर्छ त्यो
छोड्नै पर्छ शरीर मान ममता वैलिन्छ औ झर्छ त्यो
दोषी छन् करुणा दया मनुजका यी देखिएका घर
मात्रै कीर्ति र कर्म बस्छ जगमा मीठा नमीठा फल

जन्मेको पनि मिल्छ सार्थक कहाँ मिल्ने त थोरै भए
लाग्छन् उन्नतिमा समाजप्रतिको उद्धार गर्दै गए ।
यस्तै सुर्य भएर छाउनुभयो हाम्रो अँध्यारो हरी
कैयौंका दिल माझ्नुभो किरण भैं त्यो ज्ञानपुञ्जै छरी

माझ्नैथ्यो अझ ज्ञानचक्षु दिलका जालो र मैलो सबै
छर्नैथ्यो अझ अन्धकार बीचमा त्यो ज्ञानपुञ्जै सबै
पढ्नेछन् यश कीर्ति राष्ट्र सबले जीवन्त पानाहरू
ज्यूँदो घाम भएर राज सबमा हे द्रोण हाम्रा गुरु ॥

माली हुँदै ज्ञानको

पत्री झाडु सफा गरेर मनको जालो अँध्यारो कुरो
आँखीझ्याल सफा गरी किरणको बाल्यौ सलेदो बडो
हाम्रा आलपमा सफा उदय भो शङ्का गयो दूर भो
जान्छौ ढुक्क समाजमा सहजले माली हुँदै ज्ञानको

आफ्नै निम्ति इलामले रस चुसी त्यो पुञ्ज विद्वानको
यस्को ज्ञान छ साथमा हजुरको छर्लङ्ग छिद्रा भयो
हाम्रा अन्तर माझ्नुभो किरणको त्यो पुञ्ज नै छर्कियौ
जान्छौ ढुक्क समाजमा सहजले माली हुँदै ज्ञानको

आभारी अब बन्दछौ सबकुरा राखी सुदा पानका
हाम्रो द्रोण र होम सज्जन गुरु गर्दैछु श्रद्धा सदा
सम्झी फर्कनुहोस् न केवल दियौ माया र सद्भाव यो
जान्छौ ढुक्क समाजमा सहजले माली हुँदै ज्ञानको

प्यासी छौं अझ तृप्त छैन मनमा आजै खन्याऊ घडा
प्याला प्यून अवश्य मिल्छ पछि न मिल्ला कुनै कालमा
पायौं आज यहाँ भयो जति कुरो अत्यन्त राम्रो भयो
जान्छौ ढुक्क समाजमा सहजले माली हुँदै ज्ञानको ।

*-बरबोटे, इलाम*

*(लेखक कवि हुनुहुन्छ)*



भानुभक्त कुभिण्डेली

# शिखर पुरुष द्रोण गुरु

लेखैँ सर्जक द्रोणका विषयमा थोरैँ बुझैँ जे जति ।
धेरै छन् उनका अमूल्य रचना खोजेर भेटौँ कति ?
टीकाराम थिए पिता र जननी श्री भेजमाया हुँदा ।
मीरा साथ रहिन् सँगै लगनको बाँधेर गाँठो सदा ॥
॥१॥
छोरी उत्तम योगिता, यवनीका जिम्मा भए ज्वाइँका ।
छोरा छन् यशवन्त साथ परिना श्रद्धेय श्री द्रोणका ॥
गर्दै शिक्षण ज्योति बाल्न मनले रोजेर बाटो गयौ ।
झापा उर्वर दिव्य ठाउँ सबमा खोजेर माटो गयौ ॥
॥२॥
मेचीको पनि गेह भो चहकिलो बाँडेर विद्या त्यहाँ ।
त्यस्तै ज्ञान दिए कुनै समयमा श्री पद्मकन्या महाँ ।
मेचीमा गुरु द्रोणको समयमा सत्ज्ञान पाएँ कति ।
साह्रै धन्य भएँ म ज्ञान बटुली अज्ञानको ओखती ॥
॥३॥
तिम्रो काम सदैव ज्योति घरमा बाल्ने थियो बालियो ।
निन्द्राका तटमा जहाँ जति थिए आँखा सबै खोलियो ॥
भाषाका नव रङ्ग खोज्न दरिलो विज्ञान जो चाहिने ।
त्यो अन्वेषणको अथाह ढिकुटी श्री द्रोणमा पाइने ॥
॥४॥
खम्बा भाषिकका धरोहर सधैँ हौ द्रोण पक्कै तिमी ।
नेपाली इतिहासका शिखरमा छौ द्रोण पक्कै तिमी ॥

तिम्रा हुन् अनमोल रत्न रचना सत्कामका खोज ती ।
उल्था भाषिक ज्ञानको कति गऱ्यौ ? मूर्धन्य हे द्रोणजी ॥
॥५॥
नेपाली अनि बङ्गला, असमियाँ त्यो राजवंशी सबै ।
अङ्ग्रेजी पनि ज्ञान संस्कृतसँगै हिन्दी थियौ पोख्त नै ॥
लेख्यौ फुट्कर ती र व्याकरणका खोजी गरी साधना ।
धेरै छन् सहलेखनी कलमका बाँकी समालोचना ॥
॥६॥
भाषाका अनि जातिका विषयमा तिम्रो चल्यो लेखनी ।
भाषा, लोकविधा अनेक कृतिका हौ ज्ञान सञ्जीवनी ॥
भै संस्थापक ठाउँ ठाउँ गतिला संस्था उठायौ कति ।
राम्रो खोज कला अदम्य क्षमता तिम्रो थियो द्रोणजी ॥
॥७॥
पायौ मान तथा विभूषणहरू गर्दै नयाँ चिन्तन ।
नेपाली परिवेशका र मुखका लेखी सवाई धुन ॥
द्रोणाचार्य बनेर अर्जुनहरू पाऱ्यौ तयारी सधैँ ।
शिक्षाको नव ज्योतिको किरणले ज्योत्स्ना फिँजायौ सधैँ ॥
॥८॥
भाषाका नव खोज चिन्तन कडा गर्दै सदा रम्दथ्यौ ।
झापा सुन्दर ठाउँमा र कहिले असममा पुग्दथ्यौ ॥
हेर्दा शान्त सुरम्य द्रोण जहिले शालीन व्यक्तित्व ती ।
साँच्चै मान्य बडा रहे समयका विद्वान् भला पात्र ती ॥
॥९॥
हो छैहत्तर साल माघ महिना श्रीपञ्चमीको दिन ।
ठ्याक्कै पन्ध्र गते बिदा हुन गयौ हे द्रोण छिट्टै किन ?
तिम्रो देन अमूल्य रत्न गहना छौँ सम्झिने झल्झली ।
सारा भक्ति जगाउँदै हृदयले अर्पन्छु श्रद्धाञ्जली ॥
॥१०॥

*भद्रपुर न.पा.- १०, झापा (मो. ९८४२६२३३३६)*

*(लेखक छन्दका पारखी हुनुहुन्छ)*



भोजराज सापकोटा

# श्रद्धाञ्जलि

निस्तब्धतापूर्ण परिवेशपछि
स्मृतिको झ्यालबाट
जब अधुनालुप्त वर्तमान र अतीतलाई नियाल्छु
स्मृतिको पन्नामा झल्कन्छ
छातीभरि आशा बोकी
जनसेवाको र जातीयताको चिन्तनले
अग्रसर भइरहेका आफन्तका बीच
हजुरको हँसिलो र खँदिलो प्रतिच्छवि ।

जीवनका अनेकौं उकाली र ओह्रालीहरूलाई
सरलताले र आफ्नोपनले अँगालो हाली
परिवारको सुखलाई पनि त्यहीं मिसाई
संसारलाई बौद्धिकताको पथ देखाउने
मेरो आफन्तको प्रतिच्छवि ।

हजुर अभिभावक, कुलको मर्यादा पुरुषोत्तम
हजुर आदर्श पिता, अनुकरणीय गुरु
भाषा-साहित्य-व्याकरणको ज्ञाता
विद्यावारिधि, छिमेकको सकल भ्राता
हजुर मेरो आफन्तजनको हँसिलो प्रतिच्छवि ।



मञ्जु सत्याल

# दाजुको सम्झना

अम्बे-आमा श्रीहरि विष्णुलाई,
ढोगी बस्छु शारदे मातालाई ।
मेरो माइती द्रोण पौडेलका लागि,
दुइचार शब्द "कोरूँ" लाग्यो मलाई ॥

जन्म स्थानै हो उदालगुडीमा,
खेल्यौ हुर्क्यौ साथी भाइ सँगैमा ।
शिक्षा दीक्षा बाबाको हातबाट,
राम्रो संस्कार पायौ है आमाबाट ॥

हाम्रा जिजु श्री विलास वंशबाट,
गंगाधरको नातिको नामबाट ।
टीकाराम औ भेजमायाको गर्भबाट,
जन्म लियौ यस धरातलमा आज ॥

गंगाधरले ठूलो सङ्घर्ष गर्दै,
खोल्नु भयो पाठशाला गएरै ।
संस्कृत पाठ वेद विद्या सिकाई,
बटियामारी नामको कीर्ति फिंजाई ॥

बाबा आफैं शस्त्री पासै भएर,
उदालगुडी बस्नुभयो गएर ।
"विश्वशान्ति" पाठशाला बनाई,
साक्षर पार्न नाम दिनु भो रमाई ॥
उच्च शिक्षा देश विदेश गएर,
पि.एच.डीको डिग्री हासिल गरेर ।

अध्ययन गर्दै अध्यापनै गराई,
शिक्षा दान दिनुभो है सबैलाई ॥

विवाह बन्धनमा गाँसिई घर गृहस्थी,
रूप, गुण, शीलको भित्रिइन् गृहलक्ष्मी ।
उदालगुडीबाट चन्द्रगडीमा,
स्थायी बसोबास भो नै त्यसैमा ॥

छोराछोरी जन्मिए यस धरामा,
विद्या-बुद्धि रूपै शीलै गुणैमा ।
छोरा छोरी बैनी नाति, बुहारी,
शिक्षा दीक्षामा कोही छैनन् पछाडि ॥

आत्मादेखि खुसीभै हाँसी बोल्थ्यै,
आफ्ना बन्धु देख्ता हर्षित हुन्थ्यौ ।
ठूला साना आफ्ना मान्यजनैमा,
मिठो बोली बोल्दथ्यौ है सबैमा ॥

पाँच छ भाषाको ज्ञान थियो तिमीमा,
प्रष्ट वक्ता भै गनिन्थ्यौ सबैमा ।
साहित्यिक औ काव्य लेखन विधामा,
चिन्तन गर्दै बित्दथ्यो लेखनैमा ॥

मान्यजनका पाउमा शिर झुकाई,
अन्तरात्मादेखि ढोग्थ्यौ रमाई ।
तिम्रो स्थान रिक्त भो नै सधैँ नै,
केवल तिम्रो याद मात्रै रह्यो नि ॥

विश्व हिन्दू धर्म प्रचार गर्दै,
सम्मेलनमा भाग लिन्थ्यौ गएरै ।
वेद शास्त्र कर्म काण्डका साथै,
श्राद्ध, तर्पणको ज्ञानथ्यो तिम्रा साथै ॥

*रङ्गेली, मोरङ*

*(लेखक कवि तथा गीतकार हुनुहुन्छ)*



महेन्द्र 'दूरगामी' भट्टराई

# द्रोण सर ! शब्द श्रद्धाञ्जली

उज्याला हँसिला मिठा वचनका भाषा थियो सुन्दर
बोलीमा रस राग भाव गहिरो माधुर्यका सागर ।
आँखामा नविझाउँने हृदयका सच्चा थियौ सज्जन
भाषारत्न थियौ सुयोग्य गुरुजी विद्या दियौ पावन ।।

नेपाली मनमा सदैव रहने विद्वान वक्ता थियौ
छाडीसाथ सँगी र सज्जन सवै बाटो उताको लियौ ।
लेखी काव्य सुधा अनेक रचना साहित्य संसारमा
आफ्नो नाम सधै सुकर्म पथमा सद्ज्ञान उद्धारमा ।।

फैलाई सुविचार सार सबमा विद्वानका साथमा
यौटा वृक्ष थियौ अमुल्य फलका नेपालका काखमा ।
अस्तायो नभमा बिहान नहुँदै त्यो जिन्दगीको कला
छुट्यो साथ सदा वियोग सहने यो दैवको फैसला ।।

तिम्रो उच्च विचार भाव गहिरो आदर्श सादा पन
रित्तै हात गयौ सुकर्म सब यो  छाडेर सारा धन ।
अर्को जन्महुँदा धरातल यही नेपालमा आउँनू
बाँकी कर्म सबै रचेर रसिला सङ्गीतमा गाउँनू ।

यौटा फूल यहाँ चटक्क चुँडियो रित्तै भयो बाटिका
राम्रो बोट थियो सदैव सुरिलो दाना फलेका मिठा ।
भाषा शुद्ध थियो मिठास रचना सादा थियो जीवन
बोली शिष्ट थियो समाज सबका साँच्चै थियौ पावन ।।

छाड्यौ साथ सबै जहान घरका साथी र सङ्गी पनि
छाड्यौ देह अनन्तको स'महिमा त्यो दिव्यता रोशनी ।
छाड्यौ सम्पति खेत आँगन सबै छाड्यौ चितामा जली
लाखौँ हात उठाउँदै सुमनले अर्पन्छु श्रद्धाञ्जली ।।

*भद्रपुर-७, झापा*

*(लेखक छन्दोबद्ध कवि हुनुहुन्छ)*



रामचन्द्र ढाहाल

# डा.द्रोणकुमार पौडेलमा श्रद्धासुमन !

श्रीमती भेजमाया र टीकाराम यिनै दुई,
भारतीय भूमिभित्र बस्थे असममा गई ।
पौडेल थरका शुद्ध नेपाली ब्राह्मणै हुँदा,
प्रवासी भै बसेकाथे समस्याहरूले छुँदा ॥

तिनै दम्पतीका पुत्र द्रोणकुमार हुन् यिनी,
विद्यावारिधि आदिका अनेकौँ डिग्रीका धनी ।
प्रवासबाट फर्केर बस्थे चन्द्रगढी महाँ,
थिए शिक्षण सेवामा घुम्थे देश जहाँ तहाँ ॥

सात भाषा सबै बुझ्थे नेपाली हिन्दी, सँस्कृत
अङ्ग्रेजी मुख्य थे पेसा शिक्षणमा थिए रत ।
साहित्य क्षेत्रमा राम्रा राम्रा कृति अनेकन,
रचेका छन् निकै ख्याती, हर्ने पाठकका मन ॥

पदक मानसम्मान पुरस्काराभिनन्दन,
अनेकौँ प्राप्त छन् बढ्दै जान्थ्यो इज्जत हर्दम ।
यस्ता ती गुणवान् ज्ञानीलाई छोडेन मृत्युले,
उनी हामीहरुलाई छाडी स्वर्गतिरै गए ॥

थिए भेजमाया, टीकाराम भन्ने,
यिनै जन्म दाता स्थिति थ्यो नगण्य
उतैको भूमिमा थिए जन्मिएका
उतैबाट सम्पूर्ण शिक्षा लिएका ॥

सबैलाई सद्भावना त्यो दिएर
गयौ कालको पासले बेरिएर
तिमी राख्दथ्यौ योग्यतामा विवेक
तिमी द्रोणलाई छ श्रद्धा अनेक ॥

*चन्द्रगढी ।*

*(लेखक कवि हुनुहुन्थ्यो । हाल दिवंगत हुनुभयो)*



विरही अधिकारी

# शब्द श्रद्धाञ्जलि

बहुजातजाति पृथक सँस्कृतिको
गरे उत्खनन् स्वास्थ्य संस्कार हाम्रो
यी श्रष्टा र द्रष्टा थिए विज्ञ ताज
टुट्यो भत्कियो ज्ञानको पुञ्ज आज ।

कुना कन्दराका बटुलेर गाथा
थिए सिर्जनामा प्रतिबद्ध भाका
उठ्यो वैलियो वन्दभो शब्दचित्र
निभ्यो दीप वल्दै थियो धप्प धप्प ।

सधैं गर्जिए वेथितिका विरुद्ध
थिए लोक साहित्यमा सर्वश्रेष्ठ
कठै टुङ्गियो दृष्टिमा छैन जोडी
प्रिय मित्र एक्लै गयौ साथ छोडी ।

थियो ध्यान अध्यात्म वेदादि ज्ञान
सदाचार सद्ज्ञानका यी मुहान
कलाले कुँदेका इतिहास ज्यूँदो
युगौंयुग भेटिन्न ज्योति सुनौलो ।

प्रिय मित्र टाढा गयौ फर्किँदैनौ
सभाबीच कैले पनि भेटिँदैनौ
स्मृति मात्र घाउ बनी चस्किँदैछ
दिँदैछु म श्रद्धाञ्जिली शब्द-पुष्प ।

गरे दान शिक्षा र सद्चेतनाको
गलत् कर्म कैल्यै गरेनन् कसैको
गुरु द्रोण साँच्चै थिए स्पष्ट वक्ता
थियो सोच सङ्लो सुकर्मी शसक्त ।

म देख्छु सबै शून्य भो यत्रतत्र
जल्यो स्निग्ध बत्ती सरको शरीर
विधिको कठै क्रूर कालो विधान
स्मृति मात्र बोकी तिमीमा सलाम

*चन्द्रगढी*

*(लेखक प्रखर गद्यकवि तथा साहित्यकार हुनुहुन्छ)*



कृष्ण सुवेदी 'निराकार'

# डा.द्रोणकुमार उपाध्यायबारे वरिष्ठ साहित्यकार चूडामणि रेग्मीसँगको अन्तरवार्ता

डा.द्रोणकुमार उपाध्याय पौडेलको स्मृतिग्रन्थ प्रकाशनको सन्दर्भमा झर्रोवादी आन्दोलनका अभियन्ता एवम् भाषाविद्, वरिष्ठ साहित्यकार चूडामणि रेग्मीज्यूसँग सम्पादक कृष्ण सुवेदी 'निराकार'ले गर्नुभएको अन्तरङ्ग कुराकानीको सारसंक्षेप -

प्रश्न- सर ! नमस्कार । सन्चै हुनुहुन्छ ?

उत्तर- नमस्कार ! सन्चै छु, ठिकै छ ।

प्रश्न- डा. द्रोणकुमा उपाध्यायको स्मृतिग्रन्थ प्रकासनको क्रममा छौं हामी, सर ! तपाईं द्रोण सरलाई कहिलेदेखि चिन्नुहुन्छ ?

उत्तर- उहाँ जहिलेदेखि मेची क्याम्पसमा आउनुभयो, त्यसैवेलादेखि मैले चिनेको हो ।

प्रश्न- तपाईं पनि मेची क्याम्पसमा पढाउनु हुन्थ्यो, द्रोण सर पनि मेची क्याम्पसमा नै पढाउनु हुन्थ्यो । तपाईंहरू दुबै नेपाली विषय पढाउनु हुन्थ्यो । धेरै कुरामा सहकार्य भयो होला । उहाँको स्वभाव र व्यवहारका बारेमा केही बताइदिनु हुन्छ कि ?

उत्तर- उहाँ मिलनसार हुनुहुन्थ्यो, हाँसी-हाँसी बोल्नु हुन्थ्यो । त्यति हुँदाहुँदै पनि गम्भीर स्वभावको हुनुहुन्थ्यो । अध्ययनशील हुनुहुन्थ्यो ।

प्रश्न- भाषा साहित्यमा उहाँको देन कस्तो छ ? सरले कसरी मूल्यांकन गर्नुभएको छ ?

उत्तर- असममा जन्मे-हुर्केको हुनाले असमिया भाषा त जान्नुहुने नै भयो । अङ्ग्रेजी, संस्कृत, बङ्गाली, हिन्दी, राजवंशी भाषा लगायत नेपाली बाहेक नै छ वटा भाषा जान्नु हुन्थ्यो । भाषा-साहित्यको एउटा योद्धा हुनुहुन्थ्यो । यस क्षेत्रमा उहाँको अभाव धेरै खड्किएको छ ।

प्रश्न- उहाँको योगदानबाट नेपाली भाषा-साहित्यले पाएका राम्रा पक्ष र गुमाएका पक्षहरू के-के हुनसक्छन् ?



उत्तर- उहाँ अचानक बिरामी भएर लड्नुभयो घरमा । नेपाली साहित्यको ठूलै हस्ती गुमाउनु पर्दा भाषा साहित्यमा ठूलै क्षति पुग्यो, । उहाँ र हामीहरू जस्तै मिलेर नै नेपाली भाषाको उन्नति भएको हो । उहाँको अभावमा भाषा-साहित्य क्षेत्रमा हामीले धेरै कुरा गुमाउन बाध्य भएका छौं । राम्रा पक्ष ता जुहीको समयमा नेपाल आउनुभएको हो । युगज्ञानको पालामा आउनु भएन । जुहीको पचास अङ्क, चूडामणि रेग्मी पूर्वाञ्चलका मोतिराम विशेषांकमा, सुसेली लगायत धेरै अङ्कमा उहाँका रचनाहरू छापिएका छन् । यी वाहेक पनि धेरै पत्र-पत्रिकामा उहाँका लेख रचनाहरु छापिएकाछन्, यही नै नेपाली साहित्यले पाएको राम्रो पक्ष हो । उहाँलाई गुमाउनु पर्दा नेपाली साहित्यमा ठूलो क्षति पुगेको छ ।

प्रश्न- जुहीमा पनि उहाँका धेरै लेख-रचनाहरू छापिएका छन् । द्रोण सरको भाषा र लेखनको शैलीगत प्रवृत्ति कस्तो पाउनुभएको छ ?

उत्तर- त्यस विषयमा मैले अध्ययन गर्दा उहाँ अगाडि व्यवहारमा के कसो हो जस्तो लागेको मान्छे, लेखनमा विशेष प्रकारको हुनुहुन्थ्यो । कुनै पनि लेख लेख्दा लेखको गरिमाभित्र रहेर लेख्नु हुन्थ्यो । कुनै-कुनै कुरामा उहाँले मेरो विरोध गरेजस्तो लागे तापनि लेखाइमा त्यस्तो हुँदैनथियो । जुन कुरा लेख्न आँट्या छ, पहिले शब्द, शब्दबाट पद, अनि पदावली, वाक्य, अनुच्छेदबाट लेख तयार हुन्छ । यस्तो लेख्ने क्षमता र कौशल भएको हुनुहुन्थ्यो द्रोण सर । उहाँ हिन्दू

संस्कृतिमा बढी झुकाव भएको भए पनि लेखनीमा त्यस्तो थिएन । मैले ‘शिवोहम’ लेखेपछि मलाई पनि शिव भनेको चूडामणि सर हो भनेर लेख्नुभएको छ । उहाँ बुझेर, गहिरिएर लेख्नु हुन्थ्यो । उहाँले राजवंशी जातिको राम्रो चित्रण गर्नुभएको छ । गजवाष्टक १०८ मा होम सुवेदी र द्रोण सरले सम्पादन गर्नुभयो । द्रोण सरले जुही-८,३४,३६,४५,४६,५०,६० लगायतका थुप्रै अङ्कमा लेख-रचनाहरु कतै समीक्षा, कतै समालोचना, कतै व्यक्तित्व परिचय र थुप्रै विशेषाङ्कहरुमा पनि लेखहरु पनि लेख्नुभएको छ । सुसेली, जनमत, यथार्थ कुरा, झापाली श्रष्टा परिचय, अन्य धार्मिक पत्रिकाहरु लगायत धेरै पत्र-पत्रिकामा लेख-रचनाहरु प्रकाशित भएकाछन् ।

प्रश्न- द्रोणसरका कृतिहरुमध्ये कुन कृति बढी लोकप्रिय ठान्नु भएको छ ?

उत्तर - प्रज्ञा प्रतिष्ठानले छापेको लोकसाहित्यिक कृति राम्रो छ । समीक्षा, समालोचना पनि राम्रा छन् ।

प्रश्न- डा.द्रोणकुमार उपाध्याय हामी बीच रहनु भएन । तथापि उहाँको योगदानलाई जीवन्त राख्न परिवारजन लगायत समाजले कस्तो भूमिका निर्वाह गर्नुपर्छ ?

उत्तर- मैले त आफैंले आफ्नो चूडामणि ग्रन्थ निकालें । अब उहाँका लागि चाहिं उहाँद्वारा लिखित सामग्रीहरू संकलन गरेर योजनाबद्ध ढंगले कृतिको रूप दिनुपर्छ । खर्च गर्नु परेपछि अलि खर्च बढाएर योजनाबद्ध ढंगले उहाँका भूमिकाहरू कति छन् ? कविताहरू कति छन् ? लेख-रचनाहरू कति छन्, सम्पादनहरू कति छन् ? यति पाताको किताब निकाल्ने र का-को लेखकलाई के-के विषयमा लेख्न दिने ?- भन्ने विषयमा योजना बनाएर जिम्मेवारी दिने, ताकि विषयवस्तु नदोहोरियोस् । यसरी उहाँको कृति प्रकाशन गरेर पनि उहाँलाई जीवन्त राख्न सकिन्छ ।

प्रश्न- स्मृतिग्रन्थका सम्पादकमण्डललाई केही सुझाव छ कि ?

उत्तर- म बुझ्दैछु, तपाईंहरूले सबैतिर स्थलगत रूपमा खोज-अनुसन्धान गरेर सामग्रीहरू बटुलेर नौलो ढंगले स्मृतिग्रन्थ निकाल्न खोजिरहनु भएको छ । उहाँका छोरा-छोरीहरू पनि योग्य हुनुहुन्छ, राम्रो हुनुहुन्छ । नातागोता पनि असल हुनुहुन्छ । हाम्रो द्रोण सरलाई हामीले यसरी नै जीवन्त राख्नुपर्छ । शुभकामना दिन्छु । र, अन्तमा द्रोणसर प्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु ।

प्रश्न - धन्यवाद सर ! यो अमूल्य समयका लागि हार्दिक आभार व्यक्त गर्दछु ।



खगिन्द्र खुसी

# द्रोण सरसँग अन्तिम रेडियोवार्ता

सबैमा जन्म भूमिको स्नेह हुन्छ बराबर
जसमा छैन त्यो स्नेह मान्छे होइन जनावर
त्यसैले बेगटी मेरो स्मृतिमा लाग्छ पावन
सम्झँदा दिलमा खिल्छन् दिव्य पुष्प हजारन् ।

यी चार लाइनमा पनि माथिका दुई लाइन चाहिं विशेष म वाचन गरिरहन्छु । चन्द्रगढीका प्रायः सबै कार्यक्रममा उहाँसँग मेरो भेट हुन्थ्यो । कहिलेकाहीं नजिकैका साहित्यिक यात्राहरूमा पनि साहित्यिक समूहमा सँगसँगै जाने-आउने हुन्थ्यो । लेखनाथ पुस्तकालयको शुक्रबारे भेलामा प्रायः उहाँ बोल्नु हुन्थ्यो । जीवन दर्शनका कुरा गर्नु हुन्थ्यो । हामीले कविता वाचन गर्दा शुद्ध अशुद्ध छुट्याएर सचेत गराउनु हुन्थ्यो । मैले 'चमेली बैंशको गन्ध' गीत भन्दा 'ध' तिमी कति प्रष्ट भन्छौ भन्नुभयो । मैले 'भुवा' गजल वाचन गर्दा 'बुवा' बुझ्नु भएछ । वाचन गरिसकेपछि स्पष्टीकरण दिंदा हाँस्नुभएको थियो 'मैले बुवा बुझें' भनेर । एकपटक प्रवचनकै क्रममा उहाँले 'मान्छेले २५ वर्षसम्म जति कुरा सिक्छ, त्यही कुरा नै जीवनभर लागू गरिरहन्छ' भन्नुभयो । म बाइस वर्षकी थिएँ त्यसबेला । त्यसपछि पच्चीस वर्षकी हुञ्जेलसम्म मनमा राखेर राम्रो कुराको खोजी गरिरहें । आजभोलि तीनै कुरा लागू गरिरहेकी छु (भनौं) यसरी लगभग बाह्र वर्षसम्म उहाँको संगतमा रहेकी मैले दुई-चार पटक अन्तर्वार्ता पनि लिएकी छु ।

नागरिक एफ.एम.मा कार्यक्रम चलाएको समयको मध्यतिरको एउटा साँझ म डा.द्रोणकुमार उपाध्यायको निवासमा पुगेकी थिएँ, रेडियोको कार्यक्रम उत्पादनका लागि । उक्त विषयमा केन्द्रित भएर उहाँको निवासमा पुगेको त्यो पहिलो पटक चाहिं थिएन । त्यसभन्दा अघि, अलि अघि नै कञ्चनजंघा एफ.एम.को कार्यक्रम 'छन्दको तरंग' साहित्य सन्देशका लागि आइसकेकी थिएँ । ती कार्यक्रमका लागि



लिएको अन्तर्वार्ता त अहिले मसँग छैन, तर पछिल्लो पटक लिएको अन्तर्वार्ता मसँग पनि रहेकोले यो महत्वपूर्ण समयमा त्यस अन्तर्वार्तालाई लिपिबद्ध गर्नु अनिवार्य सम्झेर अक्षरहरूमा उतार्दैछु ।

म- द्रोणकुमार उपाध्यायज्यू ! तपाईंलाई साहित्य साँझमा स्वागत छ ।

द्रोण उपाध्याय- धन्यवाद !

म- आज साहित्य साँझमा विशेष गरेर छन्दसँग सम्बन्धित भएर कुरा गर्न लागिरहेकी छु तपाईंसँग । वर्तमान अवस्थामा नेपाली छन्द साहित्य कसरी अगाडि बढिरहेको छ ? यसको बारेमा केही भनिदिनु न ।

द्रोण उपाध्याय- वर्तमान अवस्थामा नेपाली साहित्यमा छन्द साहित्य प्रवाहमान नै छ । तर, केही अड्चनहरू आएका छन् । किनभनेदेखि नयाँ जमाना आयो, बाहिरको नयाँ प्रभाव आयो, विदेशी छायाँ आयो, त्यसकारणले हाम्रा छन्दहरू केही रुष्ठ भएका छन् । यसलाई चलाउने मान्छे भएनन्, चलाइरहेन भने डढ्छ, फत्किन्छ बिग्रन्छ । भात दाल तर्कारी पनि त्यस्तै हो । सबैतिर एउटै कुरा हो । हतियारलाई पनि उद्याइनरहेदेखि बिग्रन्छ । त्यस्तै, हाम्रा चलाउने मान्छे कम्ती छन्, तर छँदैछैन भनेको होइन, छन्, चलाइरहनु भएको छ, प्रगति छ, अबरुद्ध भएको छैन । तर, माध्यमिक कालमा जुन व्यापक प्रयोग हुन्थ्यो, त्यो खालको छैन, त्यसकारणले । गद्य प्रबन्धहरू आजभोलिका मान्छेहरूले धेर रुचाउँछन् । पारखीहरूले मात्रै जानेका हुन्छन्, कविताको मोह । त्यसैले छन्दलाई जान्ने मान्छेले चलाइरहेका छन्, नजान्नेले छोडेका छन् ।

म- कतिपय लेख्न खोज्नेहरू हुनुहुन्छ, लेख्न खोज्नुहुन्छ । तर छन्दको नियम, व्याकरण आउँदैन, उहाँहरूलाई सिकाउनका लागि कस्ता उपायहरू हामीले अपनाउन सक्छौं ?

द्रोण उपाध्याय- हेर्नुस्, छन्दका साथसाथ धेरै कुराहरू हाम्रा छोडिए । हामीले जब प्राथमिक विद्यालयमा पढ्दाखेरि लोकलय लोकगीत लोकछन्द छोड्यौं नि... त्यहींबाट छोड्ने क्रम शुरु भयो । त्यसकारणले विद्यालयमा नसिकाएका कारणले गर्दाखेरि छन्दमा मान्छेको चाहनै भएन । यस्तो मिठो चिज हामीलाई प्राप्त भएको छ । हामीलाई संस्कृतबाट होस्, आफ्ना लोकछन्दबाट होस्; धेरै हामीलाई प्राप्त भएको छ, तर चलाउँदै चलाउँदैनौं हामी । त्यसकारणले आजका नयाँ पुस्तामा पुऱ्याउन गाह्रो परिरहेको छ । तर, अब पाठ्यपुस्तकबाटै थाल्नुपर्छ यो । सभा सेमिनारमा भन्दा मान्छे कम्ती प्रभावित हुन्छन् । पाठ्यपुस्तकबाट थाल्यो भने उनीहरू सानैदेखि छन्दमा कविता लेख्न थाल्छन् । राम्रो हुँदोरहेछ, गाउन सकिंदो रहेछ, लय तान्न सकिंदोरहेछ । सबै कुरा छन्दमै आधारित रहेछन् । बेछन्दी कुरा त केही हुँदोरहेनछ भन्ने उनीहरूले थाहा पाउँछन् । अब हामीले प्राइमरी स्कूलबाटै छन्दको थालनी गर्नुपर्छ । छन्द मात्र होइन, जुनसुकै कुरा पनि प्राथमिक कक्षाबाट शुरु गर्नुपर्छ । स्पोर्ट, म्युजिक... ।

म- द्रोण सर नेपाली साहित्य लगायत भारतका नेपाली भाषीहरूसँग पनि सम्बन्धित हुनुहुन्छ, भारतीय नेपाली समाजसँग सम्बन्धित हुनुहुन्छ । भारतमा नेपाली छन्दप्रतिको मोह, छन्द लेखनको कार्य कस्तो चलिरहेको छ ?

द्रोण उपाध्याय- हेर्नुस्... सवाई छन्दमा पहिला यो असमतिर, बंगालतिर, मणिपुरतिरका सवाईहरू लेखिएका छन् । सवाई भनेको लोक छन्द हो । पछि-पछि गएर माध्यमिक कालमा फेरि असमतिर पनि पत्र-पत्रिका निस्किए, ती पत्र-पत्रिकामा छन्दकै कविताहरू लेखिए । यद्यपि त्यहाँ गद्य कविताका लागि चेष्टा छैन भन्ने कुरा होइन, बीचमा आएर हाम्रो यहाँ जब छन्दको प्रचलन धेरै बढ्न गयो, त्यहाँका कविहरूले पनि छन्दलाई निकै अघि बढाएका छन् । र, मलाई लाग्छ- त्यतालाई बिर्सिएर हामीले यताकोलाई मात्रै मूल्यांकन गऱ्यौं भनेदेखि अलिकति कमी हुन्छ हामीलाई । वहाँको विकास अलिकति वैराग प्रकारले हुन्छ । वहाँ असमिया, बंगाली र अरू-अरू भाषाहरू छन्; ती साहित्यबाट पनि अलिकति ज्ञान लिएका हुन्छन् । त्यतापट्टि पनि अलिकति गएको हुन्छ । हाम्रो धेरै संस्कृतबाट प्रभावित छन्द हो । रवीन्द्रनाथले लेखेको बंगाली छन्दमा

पनि संस्कृतको लय छैन । अरूको असमिया, हिन्दीमा पनि छैन । हाम्रो चाहिं संस्कृतबाट प्रभावित भएको हुनाले वहाँको नेपालीभाषी अन्य भाषाको छन्दबाट पनि प्रभावित भएका कारणले अलि गाह्रो रहेछ भन्छु म चाहिं ।

म - प्राथमिक कालमा भानुभक्तीय रामायणले गर्दा समाज नै छन्दमय थियो र बीचमा छन्दको प्रभाव न्यून रह्यो भन्ने कुरा आयो । फेरि अहिले नयाँ पुस्ताहरू पनि यसबाट प्रभावित छन् र यसलाई संगीतबद्ध गरेर अगाडि काम भइरहेको छ, यसलाई हेर्दा अब फेरि त्यो प्राथमिक कालको जस्तै छन्दको अवस्था बनाउन सकिन्छ कि सकिंदैन होला ?

द्रोण उपाध्याय- छन्द भनेको अलिकति खिप्ती गर्ने चिज हो, खिप्ती नगरिकन लेख्ने कविहरू पनि हुन्छन् । देवकोटालाई त्यो खोला खहरे जस्तो गरेर उहाँ चाहिं, जे आयो मैले लेखिदिएँ भन्नुहुन्छ, र छन्दमा पनि मिलेरै आएको हुन्छ । तर, अन्यका लागि जुन छ, त्यो चाहिं खिप्ती गरेरै लेख्नु पर्छ । शास्त्रीय गुरुहरूले पनि अलिकति खिप्ती गर्ने, तिकडमबाजी गर्ने, विभिन्न अर्थ भएका दुई अर्थ, तीन अर्थ लाग्ने शब्दहरू प्रयोग गर्ने गरेर पनि अलिकति मिठो बनाउन खोज्नुहुन्छ । त्यसकारणले आएका छन् अहिलेका कविहरू, धेरै चाख लागेर धेरै धेरै कविहरू भएका छन् । बडा राम्रो मिठो र नयाँ  विम्ब हालेर उहाँहरूले लेख्नुभएको छ र मरेको छैन । यसलाई ज्यूँदाउनु पनि पर्दैन, अलिकति मलजल गर्नुपर्ने मात्रै हो ।

म- कुराकानीको अन्तिममा आइपुगेका छौं हामी, अन्तिममा छन्द सिक्न मन गर्ने; तर छन्द नजान्नेहरूका लागि के भन्नु हुन्छ ?

द्रोण उपाध्याय- छन्द त शास्त्रीय नियमहरू जान्नु पर्ने हुन्छ, त्यसकारणले पढ्नै पर्ने हुन्छ उहाँहरूले । धेरै सिकारु मान्छे मसँग पनि आउनुहुन्छ । मैले धेरैलाई तपाईं फलानो ठाउँमा जानोस्, छन्दको राम्रो विद्वान् हुनुहुन्छ भनेर पठाएकाहरू पछि राम्रो छन्दको विद्वान् भएर पनि आउनुभएको छ । छन्द चाहिं घोट्ने चिज हो घरमा, आफूलेले जति माझ्न सक्यो जति चाहिं सफा गर्न सक्यो, छन्द त्यति चम्किन्छ । छन्दले साहित्यलाई चमत्कार बनाउँछ । त्यसकारणले साधारण मान्छेले छन्दमा लेख्दाखेरि अलि प्रयत्न गरेर, छन्दका पुस्तकहरू पढेर लेख्नुपर्छ ।

म- हवस् त द्रोण सर ! तपाईंले आफ्नो अमूल्य समय कार्यक्रम साहित्य साँझका लागि दिनुभएको छ, तपाईंलाई धेरै-धेरै धन्यवाद !

द्रोण उपाध्याय- तपाईंलाई पनि धन्यवाद ! मलाई खोज्दै-खोज्दै आउनुभयो र दुई-चार वटा कुरा भए (हाँस्दै) गफै त गरियो नि, होइन ? ठिक छ, राम्रो छ, धन्यवाद ।



खगिन्द्र खुसी

# मीरा गुरूआमासँगको कुराकानी

बहुभाषी, विद्वान् व्यक्तित्व प्रा.डा.द्रोणकुमार उपाध्यायको गत वर्ष (२०७६/१०/१५का दिन) असामयिक निधन भयो । यस घटनाले भाषा तथा साहित्य क्षेत्र स्तब्ध छ। विशेषगरी डा.द्रोणकुमार उपाध्याय सरको परिवार अभिभावकविहीन भएको छ। ४२ वर्षसम्म हरेक सुख-दुःखमा साथी बनेर बाँचेका आफ्ना जीवनसाथीको वियोगमा विक्षिप्त बनेर एक्लो अनि कठिन यात्रा गरिरहनुभएकी उहाँकी जीवनसंगिनी मीरादेवी पौडेलको यसबेलाको अवस्था सबैले अनुमान लगाउन सकिन्छ। आँसुसरिको वैधव्य जीवन बाँचिरहनुभएकी मीरा गुरुआमासँग यसबेला द्रोण सर सम्बन्धी नै प्रश्न गर्नु भनेको, आलो घाउमा नुन-चुक छर्नु जस्तै हो । तर पनि डा.द्रोणकुमार उपाध्याय स्मृतिग्रन्थ प्रकाशनका लागि यस विषयमै कुराकानी गर्नु अनिवार्य हुन्छ । त्यसैले उहाँको निवासमा पुगेर मैले उहाँसँग गरेको कुराकानी जस्ताको त्यस्तै –

**प्रश्न : तपाईं हाल चन्द्रगढी (भद्रपुर– १०) मा बसोबास गरिरहनुभएको छ। तर तपाईं भारतको असम प्रान्तमा जन्मनुभएको भन्नेसम्म थाहा छ मलाई, असमको कुन ठाउँमा जन्मनुभयो ?**

गुरुआमा : म पहिला एउटा श्लोक भन्छु ल-

‘ओ३म् विश्वानी देव सवितर्दुरितानी परा सुव ।

यद् भद्रं तन्न आ सुव ।।१।।

**प्रश्न : के भनेको छ यो श्लोकले ?**

गुरुआमा : यो श्लोकले सबैको कल्याण होस्, राम्रो होस्, सबै दुःखहरू नाश हुन्... भनेको छ ।



**प्रश्न : तपाईं संस्कृत भाषाको संगतमा हुनुहुन्छ। धेरै श्लोकहरू जान्नु हुन्छ, तर किन यही श्लोक छान्नु भयो ? के छ यसमा त्यस्तो ?**

गुरुआमा : यो चाहिँ सबैतिरबाट श्रेष्ठ छ। सरले पनि कार्यक्रमहरूमा बोल्नुभन्दा पहिला प्रायः यही श्लोक वाचन गर्नुहुन्थ्यो । मैले पनि उहाँलाई नै फलो गर्दै जाँदाखेरि उपयुक्त रहेछ भन्ने बुझेर वाचन गरेकी हुँ ।

**प्रश्न : तपाईंको बालापन कसरी बित्यो ?**

गुरुआमा : मेरो बालापन... ठुलोपरिवार थियो । हजुरबा-हजुरआमा-काका-बडाबा, केटाकेटी । हामी खेतीकिसानी र पशुपालन गर्थ्यौं, सबैतिर भ्याउने म जेठी छोरी थिएँ ।

**प्रश्न : असमको कुन ठाउँमा हुनुहुन्थ्यो ?**

गुरुआमा : असमको नौगाउँ जिल्लाको सोलङ भन्ने गाउँमा ।

**प्रश्न : के थरीकी छोरी तपाईं ?**

गुरुआमा : खनालकी छोरी ।

**प्रश्न : के–कस्ता कामहरू गर्नुभयो बालापनमा ?**

गुरुआमा : धर्मकर्ममा आस्था राख्ने, पूजापाठ गर्ने हाम्रो परिवार थियो, त्यसैले

सानोमा चाहिँ बाती बाल्ने डिउटी थियो मेरो । मेरी आमा पनि शिक्षितै भएको हुनाले उहाँकै लालनपालनमा भएकाले होला, एकचोटि भनेपछि फेरि भनिरहनु पर्दैन थियो । आमाले काम गर्दै हामीलाई पनि सिकाउनु हुन्थ्यो । भाइ-बहिनी धेरै भएकाले मैले सानैदेखि नै परिवारमा सघाउ पुऱ्याउनुपर्छ, घरका कामहरू गर्नुपर्छ भन्ने जिम्मेवारी महसूस गरें । सानोमा हजुरआमासँग सुत्थें । राति सुत्ने बेला हजुरआमाले पहाडको गीत गाउनुहुन्थ्यो- 'लेकचरी ब्याँसी...' भन्ने । नातिनीले बिहान उठेर घर बढार्नु हुँदैन, लुगा धुनु हुँदैन भन्नुहुन्थ्यो । मेरो चाहिँ बिहान उठेर पढ्ने चलन थियो । तर, बिहान पढ्नु हुँदैन, घाँटी सुक्छ भन्नुहुन्थ्यो । म सबै रट्थें, नदी खोलाहरूको नाम सबै रट्नु पर्थ्यो । बुबा शिक्षक हुनुहुन्थ्यो । चाँडै स्कूल जानुपर्थ्यो, आठ बजे नै । आमाले घरका सबै काम सम्हाल्नु पर्थ्यो ।

**प्रश्न : घर बाहिरका कामहरू चाहिँ के–के गर्नुपर्थ्यो ?**

गुरुआमा : घर बाहिरको काममा घाँस काट्ने, खेत रोप्ने, धान काट्ने सबै गरें । वहाँको बाह्र पूरा भन्छौं, यहाँको बाह्र बिघा जग्गा थियो । ढिकी-जाँतोको काम सबै गर्थें, सानामा हामीले घान पनि लायौं, आमाले ढिकीमा धान कुट्नुहुन्थ्यो, उज्यालो हुँदाखेरि हामीले एक मसिनो पारिसकेका हुन्थ्यौं । त्यतिबेला बिहानको स्कूल लाग्थ्यो । त्यति गरेर चिया-खाजा खाएर स्कूल जान्थ्यौं । म चार-पाँच कक्षामा पढ्दादेखि मात्रै ढिकी कुट्ने चलन छुट्यो ।

**प्रश्न : कति वर्षसम्म माइतमा बस्नुभयो ?**

गुरुआमा : तेइस वर्षमा बिहे भएको हो । तेइस वर्षसम्म माइतमा बसें । कलेज पढ्न चाहिँ म चार वर्ष होस्टेलमा बसें, घरबाट निकै टाढा थियो । ब्रह्मपुत्र पारि, विश्वनाथ चाराली भन्ने ठाउँमा पढेकी ।

**प्रश्न : घरदेखि भ्याउनेगरी चाहिँ कुन कक्षासम्म पढ्नु भयो ?**

गुरुआमा : दश कक्षासम्म चाहिँ घरबाट धाएर पढें । हामी छ जना दाजु-भाइ, दुई दिदी-बहिनी । हामी दिदी-बहिनी चाहिँ विहानभरि घरभित्रको कामधन्दा सबै सकेर मात्रै कहिलेकाहीं त यहाँ (हात देखाउँदै) कालो पनि लागेको हुन्थ्यो (हाँस्दै) । त्यति भएर पनि मेरो स्कूलमा पढाइ पनि राम्रो थियो । फस्ट, सेकेण्ड, थर्डसम्म हुन्थें । सेभेनदेखि एटमा जाँदा चाहिँ हजुरआमा बिरामी भएर थर्ड

भएँ । दश कक्षासम्म एउटै स्कूल पढें, सोलङ हाइस्कूल । त्यसमा फोर, फाइभ, सिक्ससम्म हिन्दी, सेभेनदेखि संस्कृत पढेको । एसएलसीसम्म हन्ड्रेड नम्बरको संस्कृत पढेको ।

**प्रश्न : नेपाली पढ्नु परेन** ?

गुरुआमा : अहँ, नेपाली कहीं पढ्नु परेन, एकैचोटि कलेजमा गएर मात्रै आफ्नै इच्छाले मात्रै नेपाली लिएको । फेरि त्यतिबेला नेपाली शिक्षक हामी पाउँदैनथ्यौं । नोट पाइन्थ्यो, कसै-कसैबाट नोट लिएर सारेर त्यही पढ्थ्यौं । जोग्राफी, हिस्ट्री, इकोनोमिक्स पढ्थ्यौं । मेजर चाहिँ नेपाली लिएको, नेपाली जतिले । विवाह गर्दा चाहिँ बी.ए.को फाइनल एक्जाम दिन बाँकी थियो ।

बिहे गर्नका लागि उहाँ सर जाँदाखेरि चाहिँ म पढ्दै थिएँ । के गर्छेस् भन्नुभयो घरमा । जाँच आइसक्या थियो । त्यहाँ बिहे गरेपछि नपढ्ने, नपढाउने चलन थियो । त्यसैले अरुथोक जेसुकै होस्, मैले पढ्न चाहिँ पाउनुपर्छ भन्ने प्रस्ताव राखें । त्यसबेला बुबा बिरामी हुनुहुन्थ्यो, नभए त म बोल्ने थिएँ । भाइबहिनीहरू पनि धेरै, मैले पनि आफ्नो कर्त्तव्य पूरा गर्नुपर्छ भनेर विवाहको लागि हुन्छ भनें । बी.एड. चाहिँ पछि यता आएर गरें ।

**प्रश्न : विवाहको लागि तपाईंलाई माग्नका लागि सरसँग अरु पनि आएका थिए कि सर एक्लै आउनु भयो** ?

गुरुआमा : यस्तो भयो... सरको साथी मेरो छिमेकी हुनुहुन्थ्यो । चन्द्र शर्मा भन्ने । आमाले उहाँसँग 'छोरीको पनि बिहे गर्नुपर्छ' भन्नुभयो । उनले मेरो साथी छन् उदालगुढीतिर, गर्दा हुन्छ भनेपछि कुरा अगाडि बढ्यो । पहिला मेरा मामा-ससुरा आउनुभयो, उहाँ आइसकेपछि मेरो बुबा जानुभयो बुझ्न अनि बुबाले हुन्छ भनेर आएपछि उहाँ हेर्न आउनुभयो ।

**प्रश्न : अनि हेर्न आउँदा तपाईंले पनि राख्नुभयो होला नि त प्रस्ताव, पढ्न पाउनु पर्छ भन्ने** ?

गुरुआमा : (उत्साहित हुँदै) त्यतिखेर अचम्म भएको छ ! उहाँ हेर्न भनेर आउनुभयो राति आठ बजे । म पढ्दै थिएँ उहाँ आइपुग्दा । मलाई त ढुकढुकै भयो, पढ्न पाउँदिन भनेर डर थियो, अर्थोकले होइन (हाँस्दै) । चिया लैजा

भने अब राति... मैले चिया लगें, राखिदिएर हिडें, मेरो मुख देखेनन् क्यार । भोलिपल्ट बिहान 'होइन केटी त राम्रो देखेको छैन' भन्नुभयो । अनि कृष्ण सञ्जेल साथी थिए, उहाँसँग फेरि बिहान जानुभयो । त्यतिखेर पनि चिया लगेर राखिदिएँ, म बोलिन । (हाँस्दै) अलि लाटोपन जस्तो पनि देखिन्छ अब त्यतिखेरको समयमा पढे-लेखेको मान्छे भएर पनि नबोल्नु भनेको ! त्यसपछि कुरोसुरो छिनेर यस दिन भन्ने पक्का भएपछि, मैले पनि राम्रोसँग देख्न पाएको थिइन अनि हेर्नुपर्‍यो भनेर पर्दा यसो उघारेर हेरेको । उहाँ पनि त्यतिबेलै मतिरै फर्किनुभयो । (मज्जाले हाँस्दै)

**प्रश्न : रमाइलो भएछ ।**

गुरुआमा : त्यहाँ चाहिँ देखादेख भयो ।

**प्रश्न : देखादेख मात्रै भयो**... ?

गुरुआमा : उहाँ हाँस्नुभयो, बोलचाल चाहिँ भएन ।

**प्रश्न : त्यतिखेर तपाईंलाई कस्तो लाग्यो उहाँलाई देख्दाखेरि** ?

गुरुआमा : अब कस्तो-कस्तो । बुबा बिरामी हुनुहुन्थ्यो, उहाँको बारेमा भाइले आमासँग गफ गरेको चाहिँ सुनेको थिएँ । सानो परिवार, बुबा हुनुहुन्न, आमा हुनुहुन्छ, दुई जना दिदी-बहिनी, उहाँ टिचर हुनुहन्छ, माछा-मासु खाँदैनन् भन्ने ।

**प्रश्न : तपाईं कति सालको हो खासमा** ?

गुरुआमा : २०११ साल असोज आठ गते ।

**प्रश्न** : (**आश्चर्यचकित हुँदै**) **असोज आठ गतेकी तपाईं** ?! **म पनि असोज आठ गतेकी** !!

गुरुआमा : त्यही आठ गतेको भएर यस्तो भएको होला कि जस्तो लाग्यो मलाई । हिजो पनि त्यही सोचिरहें, अब पाँच वर्ष बाँचिदिनु भएको भए कस्तो हुन्थ्यो ।

**प्रश्न : किन, आठ गते जन्मिंदा के हुन्छ र** ?

गुरुआमा : आठ, निचो स्थानमा बसेको हुनाले अलिकति यो परिपूर्ण हुन दिएन ।

**प्रश्न** : **२००६ सालको सर हुनुहुन्थ्यो भनेपछि तपाईंभन्दा पाँच वर्ष जेठो हुनुहुँदो रहेछ, होइन त** ?

गुरुआमा : पाँच वर्ष पुगेर छ वर्ष लागेको थियो ।

**प्रश्न** : **बिहे भएको मिति चाहिँ कुन हो** ?

गुरुआमा : बिहे २०३४ साल फागुन २७ गते भएको हो ।

**प्रश्न** : (**झन् आश्चर्य मान्दै**) **के भन्नुहुन्छ हौ** ! (**हाँस्दै**)

गुरुआमा : किन ?

**प्रश्न** : **हाम्रो पनि फागुन २७ मै बिहे भएको** (**दुबै जनाको ठुलोहाँसो छुट्छ एकैछिन**), **तपाईंको र मेरो चाहिँ जन्म दिन पनि मिलेछ, बिहेको दिन पनि मिलेछ ठ्याक्कै** !

गुरुआमा : नागरिकतामा त तेह्र साल मंसीर बीस गतेको छ, यो जन्मदिन त बिर्सिसकेकी थिएँ, हिजो चिना हेर्दा पो थाहा पाएँ । यो जन्मदिन चाहिँ कसैलाई थाहा छैन ।

**प्रश्न** : **बिहे गर्दाको त्यस्तो केही घटना छ बिर्सनै नसक्ने खालको** ?

गुरुआमा : छ एउटा घटना । त्यस दिन उदालगुढीबाट बेहुलो लिएर ल्याउँदाखेरि रौता भन्ने ठाउँमा आइपुग्दा गाडी बिग्रिएछ । त्यहाँबाट तेजपुरको गणेशघाटबाट नाउमा चढेर ब्रह्मपुत्र नदी तर्दै आएछन् । नाउमा आउँदा आउँदै हावा लागेछ । छाल उठ्छ ब्रह्मपुत्रमा कहिलेकाहीं । हिंडिरहेकालाई चाहिँ डर हुँदैन, कहिल्यै नहिंडेकाहरू त आत्तिन्छन् नि... नाउ पल्टाउने जस्तो डर भएछ, सबै जन्तीहरू नाउमै सन्तोषीमाताको भजन गाउँदै-गाउँदै आयौं भन्दै आएका थिए । रातिको बिहे थियो, किन जन्ती आएनन्, ढिलो गरे भनेर घरमा हाहाकार जस्तै भएछ, फोनको चलन थिएन त्यतिबेला... । घटना त ठूलै हो नि, धेरै रातिमात्रै आइपुग्नुभयो । विवाह भएर भोलिपल्ट विहान पनि नाउबाटै आयौं, केही पनि भएन ।

**प्रश्न** : **ब्रह्मपुत्रले त गाउँतिर पसेर बिगार पनि त गर्थ्यो नि, होइन** ?

गुरुआमा : कति त नाउ तर्दा पनि डुब्छन् । कहिले नदी पस्थ्यो गाउँतिर । अहिले त बाँध बाँधेको छ, पस्तैन, ढुक्क छ ।

**प्रश्न** : **बेहुली भएर घर आइपुगेपछि, बेहुली भएर भित्रिंदाखेरिको कुरा सम्झिनु न ।**

गुरुआमा : यहाँको जस्तो थिएन, म भित्रिंदा सबै उभिएर ट्वाल्ल परेर हेरिरहेका थिए । आफैं सक्सक् लाग्यो र दरीसरी ओछ्याएर बस्नुस् भनें । सबै आफ्ना-आफ्ना धुनतिर लागे, मलाई त छोडे नि एक्लै अब, साथी त कोही थिएन । सरले पनि बुबा नभएकोले, आमा पनि बिरामी भएकोले बेहुलो भए पनि सबैथोक आफैं गर्नुभएको । (सम्झिँदै) ए... अनि बेहुली अन्माउनुभन्दा अगाडि आमा बिरामी भएको कारणले 'बेहुली पनि भित्र्याउन पाउँछन् कि पाउँदैनन्' भनेर (जिरिङ्ग भयो भन्दै हातका नारी हेर्दै) सरकी मितआमाले भन्नुभयो, मेरो हंशले ठाउँ छोड्यो । त्यसोभए अब के गर्ने भने ? अब पढाइ बर्बाद हुनेभयो भन्दै एकछिन माथिल्लो तलामा गएर किताब सबै थन्क्याएका थिए, झिकेर झोलामा हालें । मलाई बिहेको त रमाइलै थिएन नि । अरुले 'बिहे हुँदा पनि त्यसलाई चाहिँ किताबैको फिक्री छ' भने त्यसबेला त बोल्ने कुरो आएन । जति गरे पनि छोरी हुँदा जस्तो हुँदैन भनेर बुद्धि पुऱ्याएर किताब लिएरै आएकी थिएँ ।

**प्रश्न** : **पहिलोचोटि सरसँग कतिखेर बोल्नुभयो तपाईं** ?

गुरुआमा : आउँदाखेरि बाटामा वर आएपछि 'चिया खाने ?' भनेर सोध्नुभयो ।

**प्रश्न** : **नाउमै कि नाउ कटेपछि** ?

गुरुआमा : होइन कटेपछि, धेरै वर आइसकेपछि...बोलचाल छैन ! (दुबै जनाको ठुलोहाँसो छुट्छ) त्यहाँ 'चिया खाने ?' भन्नुभयो । त्यही हो बोलेको ।

**प्रश्न** : **काम चाहिँ कहिले गर्न थाल्नुभयो घरमा** ?

गुरुआमा : भोलिपल्टदेखि नै उठेर चुलोचौको गरें, बहुभत्तेर भनेर 'लु यता छुनुपर्छ' भने । अब गरिराखेकालाई...गाह्रो भएन, आमा पनि बिरामी । सानी नन्द सानै हुनुहुन्थ्यो, सात-आठ वर्षकी । अर्की बहिनी अलि सोझी हुनुहुन्थ्यो । घरको मुख्य गर्ने नै कोही नभएपछि त अब सबै गर्नु परो नि । तर, मामाससुरा, माइजूसासूले धेरै टेवा दिनुहुन्थ्यो । तारापति उपाध्याय हुनुहुन्छ नि ! उहाँहरू नै ।

**प्रश्न** : **सरले घरभित्रको काम सबै गर्नुहुन्थ्यो** ?

गुरुआमा : गर्नुहुन्थ्यो, पर्दा सबै गर्नुहुन्थ्यो । किशोर भाइ हुनुहुन्थ्यो । बहिनीले लोटाई पोती गर्ने, दाजु-भाइ (किशोर भाइ र उहाँ) धन्दाहरू गर्ने । आमालाई काम लाउनु हुन्नथ्यो । हामी पनि लाउँदैनथ्यौं आमालाई । अब आमा माछा-मासु

नखाने, लसुन-प्याज नखाने, अरुले पकाएको पनि खानु नभएपछि आफैं पकाएर खानुपर्‍यो नि त । तर, म त खान्थें लसुन-प्याज र माछा-मासु पनि । खाएको हो मैले, पछि छोडेको, त्यस्तो धेरै खाने पनि थिइन, खाउँ कि नखाउँ हुँदै खाएकी थिएँ, होस्टेलमा पनि खाइन । कुकुरको मासु भन्ने हल्ला गरे, दिग्मिग लागेर खाइन । नानी हुने बेलामा चाहिँ खान मन लाग्यो । तर, घरमा त खाइन मैले; माइत गएका बेला मात्र खाएँ ।

**प्रश्न :** (**हाँस्तै**) **सरहरूलाई थाहा दिएर कि नदिई खानुभयो ?**

गुरुआमा : थाहा दिएरै खाएँ । नखा त भन्नुभयो, तर म चालीस वर्ष हुञ्जेल खान्छु अनि छोड्छु भनेकी थिएँ, नभन्दै चालीस वर्षसम्म खाएँ अनि छोडें ।

**प्रश्न : विवाह गरेको कति वर्षपछि आमा हुनुभयो ?**

गुरुआमा : बिहे गरेको अर्को वर्ष, पहिलो सन्तानको रूपमा छोरो यशवन्त जन्मिएको थियो । छोरो जन्मिएको अढाई वर्ष हुँदाखेरि आमा बित्नुभयो ।

**प्रश्न : त्यसबेला सरको पेशा–व्यवसाय के थियो ?**

गुरुआमा : स्कूल थियो, पढाउनुहुन्थ्यो । तलब कति थियो सुन्नुहुन्छ ? (हाँस्तै) एक सौ पचहत्तर !

**प्रश्न : त्यो एक सौ पचहत्तरले के–के किन्नु हुन्थ्यो ?**

गुरुआमा : सस्तो थियो, गाउँतिरबाट सागसब्जीहरू हालिदिन्थे, धान किन्नु पर्दैनथ्यो, चामल बेच्न पुग्थ्यो, ठुलोस्रोत भनेको त्यही थियो । बुबाको प्रभाव एकदम राम्रो थियो । बुबा टीकाराम शास्त्री माया गर्न पनि जान्ने, व्यवहार पनि राम्रो, सबैले मानेको । तलब पछि-पछि बढ्दै गयो, बढेपनि त्यसले त नधान्ने । तैपनि कसो-कसो व्यवहार चल्थ्यो । अब जोहो गरेर जग्गा किन्ने भन्ने थिएन । आमालाई बुबाको पेन्सन आइरहेको थियो, आठ सय जति आउँथ्यो होला...। हाम्रो हजुरबुबा गंगाधर पौडेलले पनि त्यहाँको नेपाली समाजलाई शिक्षित बनाउनका लागि धेरै योगदान दिनुभएको थियो । विश्वशान्ति सांगवेद पाठशाला खोल्नुभएको थियो- नेपालीहरूले पढ्न पाउन् भनेर ।

**प्रश्न : असमतिर चाहिँ बुबाहरू कहिले जानुभएको रहेछ ?**

गुरुआमा : बुबा होइन हजुरबुबाहरू चाहिँ । गंगाधर पौडेल चाहिँ नेपालदेखि उता जानुभएको रहेछ । त्यो बेलामा हजुरबुबा असम गएर, असममियाहरूका बीचमा त्यस्तो स्कूल स्वीकृत गराएर पाठशाला खोल्नु त धेरै ठुलोकुरा हो नि । बुबाले भन्दा हजुरबुबाले धेरै गर्नुभएको हो, बुबा चाहिँ किताबतिर धेर लाग्नुभयो, तर इच्छा चाहिँ धेरै थियो उहाँको पनि ।

**प्रश्न : आमा (सासू)ले कस्तो व्यवहार गर्नुहुन्थ्यो तपाईंलाई ?**

गुरुआमा : आमाले त सबैथोक छोड्दिनुभएको थियो गर् भनेर । अब नियम नीतिमा चाहिँ कट्टर, घर लिपपोत गर्नुपर्ने, लिपेन भने यस्तो हुँदैन भन्ने, संस्कारतिर चाहिँ कडा हुनहुन्थ्यो । आमा कडा भएको हुनाले म पनि खारिएर आएँ, त्यस्तै गर्ने बानी बस्यो । चोखोनितो गर्ने, पूजापाठ गर्ने, बिहे गरेपछि चाहिँ सधैं जप गर्ने, पूजा गर्ने, बिरामी भएर उठ्नै नसक्ने हुँदा र सुत्केरीमादेखि बाहेक ननुहाइकन खाएको थाहा छैन । संस्कारका धेरै बानी त माइतदेखि नै बसेको थियो ।

**प्रश्न : छोरो जन्मिंदाको माहोल कस्तो थियो, सम्झिनु न...।**

गुरुआमा : कस्तो हुनु र, खुशी हुनुभयो होला सबै जना । पाती (फूलपाती) लगाइदिने चलन थियो, सबै जनाले हामीलाई पाती लगाइदिएर शुभकामना दिनुभयो खुशियालीमा । २०३५/१/४ गते, हस्पिटलमा जन्मिएको, नर्सहरू सबै साथी थिए । जन्मिनेबित्तिकै खोक्यो अनि उनीहरूले नेपाली भनेर 'गुन्द्रुक खान आइस् !' भने ।

**प्रश्न : सबै छोरा-छोरी उतै हुँदा जन्मिएका कि ?**

गुरुआमा : होइन, छोरोपछि ठूली छोरी जन्मिएकी, २०३८ सालमा ठूली छोरी जन्मिएको ठीक्क वर्षदिनमा यता आएको । सर चाहिँ पहिला नै यता आइसक्नुभएको थियो ।

**प्रश्न : त्यता त्यस्तो राम्रो छाप बनाइसकेको परिवार सबै छाडेर यता चाहिँ कसरी आउनुभयो ? किन आउनुभयो ?**

गुरुआमा : २०३७ सालमा आमा खसेपछि हामी त एक्लो भयौं नि त । म त झन् ठुलोजहानमा बसेकी । हामीलाई त कहा जाउँ, कसो गरौं जस्तो भयो,

दाजु-भाइहरू पनि कोही भएनन् । तलब पनि थोरै, आफूले रुचाएको विषय नेपाली, त्यो पनि पढाउन नपाउने हुनुभयो उहाँले । अनि मेरो भानिज जेठाजु कमल सापकोटाको बुबा आइरहनु हुन्थ्यो, उहाँको अनुहार र ससुराको अनुहार पनि मिल्थ्यो । उहाँ गीत गाउनुहुन्थ्यो रमाइलो गर्नुहुन्थ्यो । रमाइलो रमाइलोमा लु जाउँ भन्नुभयो, उहाँले पनि जाउँ भने जाउँ भन्नुभयो, आइहाल्नु भयो । यता आएपछि जेठाजु चाहिँ गइहाल्नु भयो । यता घनश्याम खनाल हुनुहुन्थ्यो, सानाबा भन्नुहुन्थ्यो, आमाको बरखी बार्नुभएको थियो, बाहिर गएर खानु भएन मोति पौडेल काका यहीं हुनुहुन्थ्यो त्यहीं बस्नुभयो । घनश्याम खनालले नै मेची बहुमुखी क्याम्पसमा लगाइदिनु भयो ।

**प्रश्न : अनि उहाँ यता आएको बेला के माध्यमबाट कुराकानी हुन्थ्यो तपाईंहरूको ?**

गुरुआमा : चिठी थियो, हप्ता-हप्ता दिनमा चिठी यताबाट पठाउनु हुन्थ्यो...।

**प्रश्न : के लेख्नु हुन्थ्यो चिठीमा ?**

गुरुआमा : के लेख्नु र, डियर भनेर लेख्थ्यौं (हाँस्तै) दुबै जना डियर नै लेख्थ्यौं ।

**प्रश्न : सरले तपाईंलाई माया गरेर बोलाउने नाम केही थियो कि ?**

गुरुआमा : थिएन, यसै 'ए, यता हेर त, यता सुन त' भन्नु हुन्थ्यो । तिमी भन्नु हुन्थ्यो । उहाँको माया भित्र हुन्थ्यो, बाहिर देखावटी हुँदैनथ्यो ।

**प्रश्न : उहाँ खुशी हुनुभएको छ भन्ने कुरा कसरी थाहा पाउनु हुन्थ्यो ?**

गुरुआमा : अनुहारको र रङ नै फरक हुन्छ नि, उज्यालो हुन्छ नि अनुहार । तर, अघिपछि पनि कहिल्यै उहाँको अनुहार अँध्यारो भएन । फुर्तिलो, बोलिरहने, चूप लागेर नबस्ने, यताउता हिंडिरहने, अलि सिरियस हुने भनेको त बरु मैं हुँ (हाँस्तै) धेरै रिसाउनु हुन्नथियो, भौतिक कुरालाई एकदमै त्याग गर्नुहुन्थ्यो । पहिला वहाँ (असम)देखि आउँदा पनि मैले भाँडाकुँडा लिएर जाउँ भन्दा, उहाँले केही लिएर जानु पर्दैन । बरु कोलाका पातमा खाउँला भन्नुभयो । यही विषयमा रिसाउनुभएको थियो । यो घर पनि मैले धेरै बलले बनाएको । किन चाहियो घर भन्नुहुन्थ्यो, बरु पढ्ने, ज्ञान बढाउने, खान-लाउन पुगे भइहाल्यो भन्नुहुन्थ्यो ।

देखावटी कुरामा उहाँको मन कहिल्यै गएन, थोरै कुरामा चल्नुपर्छ भन्नुहुन्थ्यो । कहिलेकाहीं हतारमा भान्साका बट्टाहरूमा बिर्को लगाउन पनि बिर्सन्थें । त्यस्ता कुरामा चाहिँ रिसाउनु हुन्थ्यो, भान्साका सबै कुरा टिपटप राख्नुपर्छ भन्नुहुन्थ्यो । उहाँले पनि तीन दिन पकाउँदा एकदम सफा गरेर पकाउनु हुन्थ्यो, चट्ट पारेर मीठो पकाउनु हुन्थ्यो ।

**प्रश्न : छोरा-छोरीसँग चाहिँ रिसाउनु भयो कि भएन ?**

गुरुआमा : एकपल्ट छोरालाई चाहिँ हिर्काउनु भएको छ । पढ्दापढ्दै निदाएछ अनि हिर्काउनु भयो ।  छोरीहरूलाई हिर्काएको थाहा छैन, छोरा-छोरीले नपढ्दा रिसाउनु हुन्थ्यो । एकपटक गाई पालेका थियौं, म भित्रै व्यस्त हुन्थें, उहाँले घाँस-पराल गर्नुपऱ्यो । त्यसबेला हात हेर्दै 'यो मेरा हात पराल बोक्ने होइन, लेखपढ गर्ने हो ।' भन्नुभयो । यो अरु-अरु कामले मेरो पढ्ने-लेख्ने समय बर्बाद भयो' भन्नुहुन्थ्यो । पुराण भन्ने पण्डितहरूलाई, पुरोहितहरूलाई पनि रोकेर यसरी अशुद्ध पढ्नु हुँदैन भनेर शुद्ध पढ्न अनुरोध गर्नुहुन्थ्यो । पण्डितहरू पनि छक्क पर्थे । यस्तैमा एक दिन मैले 'तपाईं किन पुराण भन्नुहुन्न, सबै कुरा जान्नु हुन्छ, शुद्धता पनि छ, तपाईंले पुराण भन्नुभयो भने त माहोल जमाउनु हुन्छ त !' भन्दा उहाँले 'पुराण भनेर के गर्नु र, यहाँ त खोजी, अनुसन्धान पो गर्नु छ त, पुराण भनेर तिनै हावादारी कुरामा कुदेर हुन्छ ?' भन्नु भयो ।  कहीं-कहीं निम्तो मान्न मात्रै जानुहुन्थ्यो ।

... हाम्रो गफ कहिल्यै भएन, एउटा एकातिर काम गऱ्यो, अर्को अर्कातिर । खाली हात कोही नबस्ने । कहिलेकाहीं पानी परेको बेला चाहिँ सँगै बस्थ्यौं (हाँस्दै) पानी पर्दा सुत्न मजा लाग्छ भन्नुहुन्थ्यो । उहाँ नसुतेको बेलामा चाहिँ बसेर गफ गर्थ्यौं । दुई वर्ष अगाडि यसरी नै बसिरहेको बेलामा 'हेर अब तिमी र म कोही न कोही एक्लो हुने बेला आयो, यो कुरा निश्चित छ, कसैले टारेर टर्न सक्दैन, सँगै पनि जान सकिँदैन' भन्नु भयो । मैले 'खाली त्यस्ता कुरा गर्नुहुन्छ, अझै कति बाँचेर के-के गरौंला भन्ने छ ! त्यसो नभन्नु न, मलाई त नराम्रो लागेर आयो' भनें । 'होइन यो कुरो निश्चित छ' भन्नुभयो । 'तपाईंभन्दा म अघि जान्छु, हेर्नु न' पनि भनें । 'होइन, होइन । त्यो एकपल्ट हुन्छ, तिमी गयौ भने मलाई गाह्रो हुन्छ, तिमी त परिवारसँग मिलेर बस्न सक्छ्यौ । म त सन्यासी भएर हिंड्छु भन्नुभयो । अन्तिममा चाहिँ यदि केहीकथम् तिमीभन्दा पहिला म गएँछु भने नौ दिन चाहिँ होम लगाइदेऊ है !' (भक्कानिँदै) भन्नुभयो । मैले 'म कसरी

गर्नु, म त्यस्तोमा हुन्छु, कोही भेटिँदैन मान्छे, न हिंड्न सक्छु' भन्दा 'अँ... त्यो कस्तो परिस्थिति पर्छ, के पर्छ, तिमीले दुःख पाउँछ्यौ म गएँ भने (भक्कानिँदै) भन्नुभयो । (आँसु पुछ्दै)

**प्रश्न** : **हो, उहाँ वैदिक विधिमा हुनुहुन्थ्यो भन्ने कुरो मलाई पनि थाहा छ... अनि उहाँ बितेपछि होम गरिदिनु भयो** ?

गुरुआमा : गऱ्यौं, तीन दिन चार दिन गऱ्यौं, नौ दिन चाहिँ गर्न सकेनौं । समवेदना लिएर आउनेहरूसँग बोल्नु पऱ्यो । समय दिन सकिएन । अनि कमलाकान्त गुरुले, यसलाई स्थगित राखिदिनु, दश दिनका दिन कि एघार बाह्र दिनका दिन गर्नु, अनि तेह्र दिनका दिन गर्नु भन्नुभयो । त्यही भएर स्थगित राखियो । दाहसंस्कार पनि वैदिकले नै भयो नि त । मैले त केही सोच्न सकेकी थिइन । हरि घिमिरे आएर 'गुरुआमा यस्तो गरौं, यसरी गरौं' भन्नुभयो । मैले पनि त्यही खोजिरहेकी थिएँ, मलाई त अहिले होशै छैन भनें । उहाँले 'एकदम राम्रो, कति घिउ चाहिन्छ, घिउले भने घिउले गर्नु, कति के लाग्छ, त्यो खर्चका लागि टेन्सन् नगर्नु' भन्नुभयो । (आँसु पुछ्दै)

**प्रश्न : दाहसंस्कारका बेला विवाद पनि भयो भन्ने सुनेकी थिएँ** !

गुरुआमा : हो, यो रुढिवादी कुरो कहाँबाट आयो ? भने । कसैलाई यस विधिबारे थाहा नै थिएन । धेरैले विरोध गरे, तर भरे गरिसकेपछि चाहिँ 'ए, राम्रो रहेछ' भन्ने कुरा आयो ।

**प्रश्न** : **तपाईं पनि जागिरे, उहाँ पनि जागिरे । दुबै जना हिंड्ने हुँदा नानी ससाना हुँदा गाह्रो भएन** ?

गुरुआमा : गाह्रो भयो नि । ऊ त्यहाँ (भित्रतिर देखाउँदै) एउटा घडी राखेकी थिएँ । पन्ध्र मिनेट छिटो पारेकी थिएँ समय, एकदम टाइम टेबलमा चल्थ्यौं । समयमा खाना खायो, समयमै धन्दा गऱ्यो, कहिल्यै जुठाभाँडा राखिएन । बिहानको बेलुका, बेलुकाको बिहान धन्दा कहिल्यै गरिएन । म बिरामी भएँ भने उहाँले आफैं मोल्नु हुन्थ्यो । जुठोले डाँडा-भाटा गन्छ, लक्ष्मी आउन्नन् भनेर । गाह्रो थियो, चाबी उहाँसँग एउटा, मसँग एउटा हुन्थ्यो । छ महिना चाहिँ मलाई सानी छोरीका लागि गाह्रो भयो । तर पछि स्कूल हालेपछि दाजु-दिदीले सँगै लिएर जान थालेपछि चाहिँ अलि सहज भयो । त्यो भन्दा अगाडि त म पनि पढाउन स्कूल

जान थालेकी थिइन । चालीस सालमा लोकसेवा दिएँ, रिजल्ट निस्किएन । अनि बयालीस सालमा अन्तर्वार्ता भयो, अनि त्रिचालीस सालमा चाहिँ नियुक्ति दियो ।

**प्रश्न : तपाईंलाई लोकसेवाका लागि उतैको पढाइ पर्याप्त भयो कि यता आएर फेरि पढ्नुभयो ?**

गुरुआमा : मेरो उता नेपाली २०० अंकभारको मात्रै थियो, ५०० को चाहिन्छ भनेर मैले नर्थबंगालबाट ३०० अंकको नेपाली फेरि पढें । ठूली छोरी हुँदा मैले संस्कृतको मध्यमा दिएँ, त्यो भन्दा अरु चाहिँ भ्याइन ।

**प्रश्न : पोस्टिङ चाहिँ घरपायकमै परेको थियो कि..?**

गुरुआमा : अँ... यहीं कलवलगुडी । यहीं सुरुदेखि नै ढुक्कै । शिक्षक सेवा आयोग पास गर्दाको पनि कहानी छ- कहिले रेडियो सुन्नु ? अन्तर्वार्तामा उनीहरूले सोधेको सबै प्रश्नको उत्तर आएन । उनीहरूले 'ज्ञानं, भारं क्रिया बिना' भने । म पनि अलि रातिपिरी भएँछु क्यार 'हेर्नुस, मैले लिखित पास गरेकी छु, तपाईंले चाहनुभयो भने दिन सक्नुहुन्छ, तपाईंले चाहनु भएन भने दिनु हुन्न ! भनेर आएँ । सरले चिनेकै मान्छे थिए अन्तर्वार्ता लिनेहरू । पछि ती बाहिर आएर, 'होइन, बुढाबुढी झगडा गरेछन् कि क्या हो ? गुरुआमा त साह्रै राँकिएर पो आउनुभएको थियो त !' भन्थे अरे (हाँस्दै) ।

**प्रश्न : उहाँ माछा-मासु नखाने, दूध पनि नखाने निरामिष हुनुहुन्थ्यो, होइन ?**

गुरुआमा : जसरी रगत आउँछ, त्यसरी नै दूध पनि आउँछ भन्ने कुरो लेखिएको थियो एउटा पत्रिकामा, उहाँलाई सत्य लाग्यो, चित्त बुझ्यो त्यो कुरा, त्यसलगत्तै खान छाड्नुभयो । वास्तवमा प्रक्रिया फरक हुन्छ । पछाडि तीन महिना बिरामी हुनुभयो, निको हुँदैन, एकदमै कमजोर भइसक्नुभयो, दूध बिना अरु तागतिलो खुवाउने कुरा पनि केही छैन । मैले खुवाउन जोड गरें सकिन अनि छोरी आई, जेठी छोरीले खुवाई । तर, खाने बेलामा आँसु झार्नुभयो, दुःख मानेर खानुभयो ।

**प्रश्न : सरका क्याम्पसमा कहिले समस्या हुन्थे होला, कहिले राम्रा काम पनि हुन्थे होला, तपाईंलाई भन्नु हुन्थ्यो कि हुन्नथ्यो ?**

गुरुआमा : रुटिङ बनाउन चाहिँ म सघाउथें । मैले स्कूलमा पनि बनाउनु पर्थ्यो,

त्यही अनुभवले टिचरहरूलाई कुन घण्टी कसरी मिलाउने भन्ने कुरा मिलाउन चाहिँ म सघाउथें । धेरै चाहिँ भन्नु हुन्नथ्यो, छानेर मात्रै सुनाउनु हुन्थ्यो ।

**प्रश्न : उहाँ छिटो बोल्नुहुन्थ्यो, तपाईंलाई बुझ्नलाई गाह्रो परेन ?**

गुरुआमा : परेन, पहिला-पहिला हेन्डराइटिङ बुझ्न गाह्रो पऱ्यो, पछि बुझ्न थालें ।

**प्रश्न : सरलाई मृत्युसम्म पुऱ्याउने रोग लागेको चाहिँ कहिले थाहा पाउनुभयो ?**

गुरुआमा : दशैं-तिहार पछाडि । उहाँ बित्नुभन्दा दुई-तीन महिना अगाडि भद्रपुरमा कपुरी डाक्टरले पाँच दिनसम्म उपचार गऱ्यो, गरेपछि थाहा भयो, उसैले पत्तो लगायो र पत्ता लागेकै दिन भोलिपल्टको प्लेनको टिकट गरिहालिछ छोरीले । त्यही रोग पत्ता लागेको बेला मैले भनें- 'तपाईं एकदम कमजोर हुनुभयो, दूध चाहिँ अलि खाने गर्नु' । त्यस्तो धेरै दुख्ने पनि हुँदैन थियो । ग्याँसको जस्तै लक्षण थियो, ग्याँसकै दबाई पनि खाइरहनु भएको थियो । पहिला नै कुरा भएको थियो । यदि त्यही बिमार हो भने म एलोपेथी उपचार गर्दिन भन्नुभएको थियो । त्यही दिन त सरलाई र मलाई पनि थाहा दिएकै थिएन । वहाँ पुगेपछि मात्रै थाहा भयो । वहाँ पुगेर बायोप्सी गरेपछि दुख्छ, दुख्यो भन्नुभयो, अरु केही कुरा हुन पाएन । त्यसपछि रातारात छोरीहरूले फोन गरेर लखनऊ लाने कुरा भयो । उहाँले एलोपेथी नगर्ने, यसले त झन् मलाई तड्पाउँछ भन्नुभयो । उहाँले धेरै बिरामीलाई भेल्लोर लगेर औषधि गरेकोले कस्तो हुन्छ भन्ने थाहा थियो नि त, उहाँको बुबालाई पनि यही समस्या भएको, काकाहरूलाई पनि यस्तै भएको, अगाडि नै भन्नुहुन्थ्यो 'मलाई पनि त्यस्तै हुन्छ' । बहिनीको नन्दलाई पनि यस्तै भएको र उहाँले नै लिएर जानुभएको । काठमाण्डौमा दुई दिन बस्यौं, त्यसपछि राजस्थान लग्यौं, आयुर्वेदिक औषधि गर्न । वहाँ लगेपछि बाटो लामो भएर पनि होला, धेरै गल्नुभयो । वहाँ लगेपछि दश हजारको दबाई लेखिदियो । आउँदा पनि राम्ररी बोल्दै नै आउनुभएको ।

**प्रश्न : के कारणले चाहिँ ठीक भएन त ?**

गुरुआमा : किड्नीमा पनि समस्या थियो, लिवरमा पनि थियो, ती दुइटा चाहिँ निको भयो । तर, शरीर दुर्बल भयो, दबाई कडा भएर हो जस्तो लाग्छ मेरो विचारमा ।

**प्रश्न : त्यतातिर (होमियोपेथिक, आयुर्वेदिक) नगएर एलोपेथिकतिरै जाँदा ठीक हुन्थ्यो कि भन्ने लाग्दैन ?**

गुरुआमा : त्यो निको हुने नै थिएन, बरु हुन्थ्यो भने होमियोपेथिकले नै हुन्थ्यो । उसले ग्यारेन्टी नै दिएको थियो, एउटा डोज खाएर अब नथप्ने भनेको थियो । समय चाहिँ लाग्छ एक वर्ष, तँ जस्तो थिइस् पहिला, त्यस्तै हुन्छस् भनेर पठाएको थियो, आउँदाखेरि फ्रेश हुनुहुन्थ्यो ।

मलाई विश्वासै थिएन यस्तो हुन्छ भन्ने, छोरालाई पनि त्यही थियो ।

**प्रश्न : अब हस्पिटलले बिदा दिएर आएपछि चाहिँ सरले के भन्नुभयो ?**

गुरुआमा : केही भन्नु भएन । लास्ट दिन चाहिँ बुहारीतिर हेरेर आमालाई राम्रो गर्नु भन्नुभएको होला (भक्कानिँदै) छोरा-छोरीलाई हेर्दै अलि राम्रो गर्नु भनेको बुझें मैले । रामरी चल्नु, दुःख नगर्नु (रुँदै) भन्नुहुन्थ्यो । अध्यात्मतिर लाग्नु, मायामोहमा नफस्नु, शान्ति मिल्छ, संसार झुटो हो भन्नुहुन्थ्यो ।

**प्रश्न : एक वर्ष भयो तपाईंको एक्लो जीवन सुरु भएको...**

गुरुआमा : (रुँदै) श्रीमान् भएजस्तो हुँदैन, सबैथोक भए पनि...

**प्रश्न : धेरै लामो उहाँसँगको बसाइ, सँगसँगै जीवन बँचाइमा उहाँबाट पाएका ज्ञानका कुराले, उहाँबाट पाएका चेतनाका कुराले यो एक्लो समय बाँच्नका लागि केही राहत दिएका छन् कि छैनन् ?**

गुरुआमा : (आँसु पुछ्दै) धेरै भयो, उहाँले मलाई यो काम चाहिँ नगर है भन्नुभयो भने मेरो काम कहिल्यै हुँदैनथ्यो । उहाँले व्यवहारमा धेरै ज्ञानका कुरा गर्नु हुन्थ्यो । म 'आ.. तपाईं भन्नुहुन्छ नि, खै अरु केही भन्दैनन् त ' भन्थें । तर, बुझ्दैजाँदा उहाँले जे-जे भन्नु हुन्थ्यो, यी पुराणतिर प्रवचनतिर सबै त्यही कुरा गरिरहेका हुन्छन् । उहाँको जति ज्ञान थियो, त्यो सबै कोपिला भएर बस्यो, फक्रिन चाहिँ पाएन । देशमा हामी जस्तो समान बौद्धिक स्तर भएका व्यक्तित्वहरूले एउटा साझा बसोबास गर्ने थलो बनाउनु पर्छ, असहायहरूका लागि, बृद्ध-बृद्धाहरूका लागि साझा थलो बनाउनुपर्छ भन्नु हुन्थ्यो । क्याम्पसका सरहरूसँग भनिरहनु हुन्थ्यो । 'अब हामीसँग इच्छा मात्रै छ, पैसा छैन' म यसै भन्थें ।

...छोरो जापानमा थियो, त्यतिबेलै (द्रोण सर बिरामी भएको थाहा पाएपछि) मैले छोरोलाई पनि बोलाएँ, तँ वहाँ जतिसुकै कमा, तर तँ यहाँ आइस् भने तैंले

कमाएको एक लाखभन्दा बढी हुन्छ हाम्रा लागि, त्यो सन्तुष्टि हामी पाउछौं भनें । ऊ पनि तुरुन्तै आई हाल्यो नि ! बुबा पनि उसैको कुरा सोध्नुहुन्थ्यो खाली, जागिर छोडेर आयो कि बिदा लिएर आयो ?- भन्नु हुन्थ्यो । बिदा लिएर आएको छ, तपाईं निको भएपछि जान्छ भन्थें, उहाँलाई बुहारी जागिरमा लागोस् भन्ने थियो । हाम्रो धेरैतिर डुल्ने पनि योजना तयार भएको थियो, नेपाल र भारतका धेरै ठाउँमा डुलेर तीर्थ धर्म होइन, अनुभव बटुल्ने योजना थियो ।

**प्रश्न : उहाँको स्मृतिग्रन्थ निस्किँदैछ, यो बेलामा साहित्य, भाषा, शिक्षाका क्षेत्रले उहाँलाई कसरी हेरिरहेको छ, यो हेराइमा तपाईं सन्तुष्ट हुनुहुन्छ कि हुनुहुन्न ? कसरी हेरिदियोस् भन्ने छ ?**

गुरुआमा : उहाँ हुँदैखेरि चाहिँ हेर्नुपर्थ्यो, उहाँलाई सबैले साथ दिएको थियो भने भाषा र साहित्यका क्षेत्रमा धेरै कुरा निकाल्न सकिन्थ्यो । किनभने उहाँ देश बाहिरका सेमिनार र सभाहरूमा जाँदाखेरि जति मान-सम्मान पाउनुभयो, त्यो सबै उहाँको भाषणबाट प्रभावित भएर । उहाँको कुरा सुनेर धेरैले आएर खुट्टा ढोगे, म छक्क परें ! यति धेरै भाषाको ज्ञान थियो, जति धेरै भाषा जान्यो, त्यति धेरै ज्ञान तान्न सकिन्छ, नेपाली भाषाको मात्रै पढेर भनेजति ज्ञान तान्न सकिँदैन रहेछ । उहाँमा संस्कृतको, नेपालीको, अंग्रेजीको, बंगालीको, हिन्दीको, मैथिलीको... यति धेरै भाषाको ज्ञान छ । यति धेरै पहिलाको कुरा पर्गेलेर निचोड निकाल्ने यस्तो मान्छे नचिनेकै हो जस्तो लाग्छ, बाँच्दैखेरि उहाँले यो सम्मान भएको भए राम्रो हुन्थ्यो । उहाँको धेरै डुल्ने, घुम्ने अनुसन्धान गर्ने, लेख्ने योजना थियो... अन्तिममा चाहिँ ब्राह्मण समाजको भेलामा गोलाघाट जानुभयो ... ।

**प्रश्न : उहाँ बितेपछि उहाँलाई अमर राख्ने एउटा महत्वपूर्ण कार्य गर्दै हुनुहुन्छ। उहाँको स्मृतिग्रन्थ निकालेर । उहाँ बितेको वर्ष दिनकै दिन यो स्मृतिग्रन्थ निस्कँदैछ। यसरी यस्तो ग्रन्थ निकाल्नुपर्छ भन्ने सोच चाहिँ कसरी आयो ?**

गुरुआमा : गरौंला भन्ने त थियो । तर, मेरो ठूलोभाइ र ज्वाइँहरू हुनुहुन्थ्यो, कामकै बेलामा, असमदेखि आएका उनीहरूले घरिघरि आइरहन पाइँदैन भनेर, हामी हुँदै यस कार्यको सुरुवात गरिहालौं भनेर यसरी सुरुवात गरियो । तर, बीचमा लकडाउन सुरु भयो, यसले धेरै असर पार्‍यो ।

**प्रश्न : उहाँ बितेपछि कसरी सम्झनुहुन्छ उहाँलाई ?**

गुरुआमा : हर कुरामा आउँछ नि, बिर्सेकै छैन कसरी सम्झनु ? म उहाँलाई सम्झँदै हवन गर्छु, दैनिक उहाँको नाममा हवन गर्छु, दश महिना निरन्तर हवन गरें, त्यसपछि घरपेन्टिङको कामका कारणले चाहिँ लथालिंग भयो र गुरुले साप्ताहिक राख्नु भन्नुभयो । अहिले चाहिँ शनिबार शनिबार ग्वालीमा राखेर भएपनि गरिरहेका छौं । उहाँको इच्छा पनि यही थियो । अहिले जुम माध्यमबाट पनि वैदिकको प्रवचन भईहेको छ, विश्वव्यापी रूपमा । यस विधिमा मूर्ति हुँदैन, होम गरिन्छ वनस्पतिहरूको । उहाँ बितेपछि धेरै गाह्रो भयो, भन्न त भन्नुहुन्थ्यो- ६ महिनासम्म चाहिँ साह्रै गाह्रो हुन्छ, त्यसपछि चाहिँ अलि-अलि पातलिँदै जान्छ भनेर । तर, दश महिनासम्म चाहिँ मैले साह्रै घात गरें । (रुँदै) त्यहाँबाट चाहिँ प्रवचन पनि सुनें, हुनेरहेन रहेछ, यस्तै गरेर त के गर्नु जिन्दगी ? मैले पनि त बाँचेर केही गर्नु पर्छ, मैले बाँच्नु भनेको छोरा-छोरीलाई आड हुनु हो, होइन ? मैले मुर्ख्याइँ गर्नु हुँदैन, अब नहुनु भइहाल्यो । तर, छ महिनासम्म चाहिँ मलाई फर्किएर आउनुहुन्छ भन्ने थियो । जानुभएको छ सेमिनारमा, फर्केर आउनुहुन्छ भन्ने लाग्थ्यो, मानसिकता नै त्यस्तै भइरह्‌यो । कहाँ-कहाँ गएर आउनु हुन्थ्यो । म त बारीमै हुन्थें, कहाँ छौ ? खै कहाँ छौ भन्दै आउनु हुन्थ्यो, त्यसरी नै आउनुहुन्छ जस्तै लाग्थ्यो । जति बुझे पनि यस्तो बेलामा मन बुझाउन सकिंदो रहेनछ ।

**प्रश्न : तेइस वर्षको उमेरदेखि पचपन्न वर्षको उमेरसम्म सँगसँगै भएको कारणले यति गाह्रो भएको हो**...

गुरुआमा : हो, मेरो साथी नै उहाँ हुनुहुन्थ्यो । सब्जी किन्न जाँदा पनि, बजार र अरु जहाँ गए पनि दुई जना जान्थ्यौं । म सम्झिन्थें त्यतिबेला पनि, यस्तरी हामी सँगै हिंड्छौं, कोही दिन हामी दुईमध्ये एकलाई केही भयो भने गाह्रो हुन्छ भन्ने सम्झन्थें । अरु कोही साथी बनाएकी थिइन, मैले बजार जानलाई ।

**प्रश्न : हुन्छ गुरुआमा ! लगभग डेढ घण्टा कुराकानी भए । मैले यति नै प्रश्नहरू गरें, अब तपाईलाई केही छुटेको जस्तो लाग्छ भने भन्नुहोला है... ।**

गुरुआमा : एक अब अन्तर्राष्ट्रिय क्षेत्रमा गएर नेपालमा यस्तो पनि व्यक्तित्व रहेछन् भन्ने चिनाउनु भयो, सबै भाषाबाट स्पीच दिनुभयो । एसिया र विश्वका साहित्यकारहरूसँग पनि उहाँको सिधा सम्पर्क थियो । हामीलाई समयले साथ

दिएन, नभए तिनीहरूसँग पनि उहाँ सम्बन्धी लेख माग्न सकिन्थ्यो ।... अब पाँच वर्ष मात्रै बाँचिदिनु भएको भए धेरै कुरा गर्न सक्नुहुन्थ्यो । एउटा अत्यन्तै महत्वपूर्ण किताब, त्यो नेपालमा थिएन रे, त्यो लेख्दालेख्दै उडिदियो कम्प्युटरबाट, साह्रै दुःख मान्नुभयो त्यो बेला ।... उहाँमा यो खालको सोच आउनु एउटा सरस्वतीकै वरदान हो जस्तो लाग्छ । सिधा व्यवहार गर्ने, देखावटी र आफ्नो बढाइँचढाइ गर्न नजान्ने...। उहाँ सानामा बुबा पढाउन जाँदा सँगै जानुहुन्थ्यो अरे, बुबाले विद्यार्थीलाई पढाएको हेर्दाहेर्दै पछि गएर आफैंले विद्यार्थीहरूलाई पढाइदिन सक्ने हुनुभयो अरे ।

**प्रश्न : हुन्छ गुरुआमा, नमस्कार । यो समयका लागि धन्यवाद ।**

गुरुआमा : हवस् त, यहाँहरूलाई पनि धेरै-धेरै धन्यवाद !



तारा विविध

# द्रोणकुमार उपाध्याय पौडेलबारे मत-अभिमत र अन्तर्वार्ताका प्रसंगहरू

स्व.द्रोणकुमार उपाध्याय पौडेल एक नितान्त कर्मठ व्यक्तित्व हुनुहुन्थ्यो । भारतको असम राज्यमा जन्मेर नेपाललाई कर्मथलो बनाउनु हुने उहाँ पेशाले प्राध्यापक हुनुहुन्थ्यो । लगभग ३१ वर्ष मेची बहुमुखी क्याम्पस, भद्रपुरमा प्राध्यापन गर्नुहुने उहाँले नेपाली भाषा साहित्यका क्षेत्रमा मात्र होइन कि समाजका धार्मिक एवम् सांस्कृतिक गतिविधितर्फ पनि त्यत्तिकै सक्रिय रहेर योगदान दिनुभएको देखिन्छ । समयका हरपललाई उपयोग गर्ने उहाँको प्रवृत्ति देखिन्थ्यो । जीवनमा सधैं सजग र सक्रिय रहिरहेकै अवस्थामा उमेरले सत्तरी पुग्दा नपुग्दै गत वर्ष २०७६ साल माघमा उहाँको देहावसान हुनपुग्यो । देहावसानपछि परिवारजनको सल्लाह र सहमति अनुसार स्मृतिग्रन्थ निकाल्ने कुरा पक्का भयो । स्व.द्रोणका जीवनका अनेकौं पाटा र पक्षहरूबारे लेख-रचनाहरू आउलान्; तर यहाँ चाहिँ अर्थात यस लेखनमा चाहिँ विभिन्न सन्दर्भ र प्रसंगहरूमा डा.द्रोणकुमार उपाध्याय पौडेलसँग प्रत्यक्ष व्यवहारमा नै जोडिन आएका अन्तरंग पाटोतर्फ चिहाउने चेष्टा गरिएको छ ।

यहाँ प्रतिपादन भएका तथ्यगत कुराहरू अनौपचारिक कुराकानीमा आधारित रहेका छन् । मैले अर्थात यस लेखका पङ्क्तिकार जस-जससँग सम्पर्क राखी कुराकानी गरें, ती सबैको तिथिमिति समेत दिने काम गरेको छु ।

**क) मत-अभिमतसँग सम्बद्ध व्यक्तित्वहरू-**

*१) श्री गोविन्दविनोद चापागाईं :* कुरा २०७७ साल असार ८ गतेको हो, जुन दिन मैले स्व.द्रोणबारे श्री गोविन्दविनोद चापागाईंसँग बसेर कुराकानी गरें । श्री गोविन्दविनोद चापागाईं स्व.द्रोणको करेसो जोडिएका छिमेकी हुनुहुन्छ एकातिर भने अर्कोतिर सधैंको प्रातःकालीन भ्रमणको सहयात्री हुनुहुन्छ । हरेक दिन ४५-५० मिनेटको सँगसँगैको हिंडाइपछि मात्र उहाँहरूको वास्तविक जीवनयात्रा बाहिरी दुनियासँग सुरु हुन्थ्यो । त्यसैले मेरो मत अभिमतको श्रृङ्खला श्री गोविन्दविनोद चापागाईंबाट सुरु गरेको हुँ ।

मैले सर्वप्रथम उहाँलाई तपाईंहरूको यसप्रकारको प्रगाढ मित्रताको सुरुवात


गोविन्द विनोद चापागाईं

कहिले कसरी भयो भनी प्रश्न गरें । प्रतिउत्तरमा चापागाईंजी भन्नुहुन्छ- '२०२६ सालमा जब म भोजपुर दिङ्लाबाट पढ्न भनी काठमाण्डौ कीर्तिपुरमा नेपाली विभागमा एम.ए.मा भर्ना भएँ, त्यहाँ द्रोणजी पनि भारतको असमबाट स्कलर विद्यार्थीका रूपमा भर्ना हुनुभएको रहेछ र हाम्रो चिनजान हुन गयो । तर, मैले पहिलो वर्ष पढी सक्दा नसक्दै सरकारी नोकरीका लागि लोकसेवा पास गरें र जागिरतिर लागें । मेरो दोस्रो वर्षको नियमित पढाइ टुट्यो, फलस्वरूप अब द्रोणजी र मेरो बाटो फरक भयो । म जागिरे हुँदै देशका विभिन्न जिल्ला र अञ्चल चहार्दै रहन थालें; उता द्रोणजी आफ्नो पढाइलाई पूरा गरेर पुनः असम फर्कनुभयो । यो समय थियो- वि.सं.२०२७ तिरको । त्यसपछि एकैचोटि जब म जागिरकै क्रममा २०३९ सालमा झापा आएँ । त्यसबेला मैले मेरो भोजपुर दिङ्लाको बसोबास छोडेर झापा चन्द्रगढीमा बसाइँ ल्याएको थिएँ । र, म जहाँ बसाइँ सरी आएको थिएँ, मित्र द्रोणजी पनि त्यहीं अस्थायी बसोबास गर्दै हुनु हुँदोरहेछ । मेची बहुमुखी क्याम्पसमा प्राध्यापन पेशामा संलग्न रहेका कारणले उहाँ असम छोडी यतैको स्थायी बासिन्दा हुने क्रममा हुनु हुँदोरहेछ । उहाँको डेराको बसाइ देखेपछि मैले नै 'लु अब जग्गा लिएर घर बनाउनु पर्छ' भनेर ढिपी गर्न थालें । त्यत्तिकैमा मेरै घर छेउमै तीन कठ्ठा जस्तो जमीनको टुक्रा फेला पर्‍यो । त्यहीमध्येबाट केही लिएर उहाँले घर बनाउनुभयो । यसो हुँदा सधैं निकटस्थ छिमेकी भएर बस्ने अवसर मिल्यो ।

द्रोणजीसँग मेरा धेरै सुख दुःखका कुराहरू छन्, जुन यहाँ बताएर पूरा हुँदैनन् । २०४० सालमा म निकै लामो समयसम्म बिरामी परें । नेपालका ठूला भनाउँदा अस्पताल जति सबै ठाउँमा गएर जचाएँ, तर बिमार नै पत्ता लाग्न सकेन । अन्त्यमा द्रोणजीले नै मलाई भेलोर लिएर जानुभयो र त्यहाँ मेरो रोग पत्ता लाग्यो र त्यहींको उपचारबाट म निको समेत भएँ ।

द्रोणजी प्राध्यापन पेशाबाट निवृत्त भएको केही समयपछिदेखि अलिक फरक रूपमा प्रस्तुत हुन थाल्नुभएको थियो । जीवनमा अब धेरै बाँच्नु छैन भनेर बारबार भनिराख्नु हुन्थ्यो । उहाँका यस्ता कुराले मेरो मनमा कता-कता चिसो पस्थ्यो । यस्तैमा एकपटक उहाँमा क्यान्सरको शङ्का रहेको डाक्टरी रिपोर्ट आएछ, त्यो

बेला उहाँ धेरै दुःखी देखिनुभयो । तर, फेरि केही समयपछि अर्को ठाउँको डाक्टरी परीक्षणमा त्यस्तो क्यान्सरको लक्षण फेला परेन भन्दा फेरि उहाँ अघोर रमाएर म समक्ष देखा पर्नुभयो । तर, उहाँको ओठको रमणीय त्यो हाँसो आखिर केही दिनभित्रै हरायो र क्यान्सरले नै देहत्याग गरायो ।

द्रोणजी परम्परागत कर्मकाण्डको विरोध गर्नु हुन्थ्यो, तापनि उहाँ नास्तिक हुनुहुन्थेन । भगवानप्रतिको असीम भक्तिभाव उहाँको विशेषता नै थियो ।

मेरो जीवनमा यति लामो पवित्र मित्रता कोही अरुसँग हुन पाएको सम्झना छैन । द्रोणजीसँग जुन दिनबाट मित्रताको थालनी भयो, त्यस यता बीचमा परिस्थितिले केही वर्ष यताउता भए पनि पछि फेरि संयोगले एकै ठाउँमा ल्याइपुऱ्यायो । सधैं एकनासले पवित्र गंगा नदी बगे झैं हाम्रो मित्रता अगाडि बढ्दै रह्यो । मेरो सारा घरपरिवारले उहाँलाई हृदयदेखि नै मान्ने गरेको थियो वा छ। उहाँप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु ।

श्री गोविन्दजीकी धर्मपत्नीले पनि सुरुदेखि अन्त्यसम्म नै हाम्रो कुराकानीमा सामेल हुँदै गोविन्दविनोदजीका कुराहरूमाथि थप प्रकाश पार्दै र समर्थन जनाउँदै जानुभएको थियो ।

*२) श्रीमती लक्ष्मी पोखरेल :* यसै वर्षको मंसीर २ गते श्रीमती लक्ष्मी पोखरेल दिदीसँग मैले स्व.द्रोणबारे सवा घण्टा लामो कुराकानी गरें। श्रीमती लक्ष्मी पोखरेल पूर्वशिक्षिका हुनुहुन्छ। जीवनको धेरै कालसम्म शिक्षण पेशा अंगाल्नु हुने उहाँ स्व.द्रोणकुमार उपाध्यायकी नाताले भाउजू समेत पर्नु हुँदोरहेछ। लक्ष्मी पोखरेलजीको आफ्नो घर सुरुमा अर्थात वि.सं.२०४५ पूर्व भारतको असममा रहेछ। त्यसपछि उहाँ नेपाल आई बसोबास गर्न थालेको बुझिन्छ। स्व.द्रोणजीको उहाँकै फुपू-सासूकी छोरी मीरा खनालसँग विवाह हुँदा सर्वप्रथम बेहुलो भएर आउँदा लक्ष्मीजीले पहिलो पटक स्व.द्रोणलाई देख्नुभएको बताउनु भयो। यो कुरा सन् १९८० तिरको हुनुपर्छ भन्ने उहाँलाई लाग्छ। त्यो समयमा देखे बाहेक लगभग २०-२५ वर्षसम्म बीचमा त्यस्तो देखभेट भएन। जब २०४५ सालमा म असमबाट बसाइँ सरेर झापाको चन्द्रगढी आएँ, त्यसबखत पो यहाँ त वहीं असमको ओदालगुढीका हाम्रा साइनाले ज्वाइँ द्रोणजीलाई



**लक्ष्मी पोखरेल**

बल्ल देख्न पुगें, साह्रै रमाइलो अनुभूति भयो ।

उहाँ र हाम्रो चन्द्रगढीको बसोबास दूरीको हिसाबले धेरै छोटो भएकोले बाक्लै भेटघाट र आउजाउको क्रमले सधैं निरन्तरता पाएको थियो । उहाँ प्रायः नै आइरहने । असमबाट नेपाल आएपछि म त्यत्तिकै घरगृहस्थीकै धन्दामा अल्मलिंदै थिएँ । उहाँले नै तपाईंले शिक्षण पेशा भए पनि गर्नुपर्छ भनेर भनिरहनु भयो । उमेर अलिक ढल्किसकेको हुँदा मलाई उहाँका कुरामा त्यति दिलचस्पी थिएन, तर उहाँले धेरै जोड गर्नुभयो । त्यत्तिकैमा शिक्षा कार्यालयकै एक कर्मचारी हाम्रो घरमा डेरा गरी बस्न थाले । उनले शिक्षण पेशा गर्न सल्लाह र आवश्यक सहयोग पनि पुऱ्याए । नभन्दै मैले शिक्षणका लागि अन्तर्वार्ता दिंदा पास पनि भएँ । आज म शिक्षण पेशाबाट निवृत्त समेत भइसकेकी छु । तर, स्व.द्रोण र ती शिक्षाका कर्मचारीको सहयोग र सद्भावलाई बिर्सन सकिराखेकी छैन ।

द्रोणजी, जसलाई साइनोको कारणले ज्वाइँ भन्ने गर्दथें, सँग धर्म-संस्कृति इत्यादिका बारेमा बेला-बेला चर्चा परिचर्चा पनि हुने गर्दथ्यो । म साइबाबालाई मान्ने मान्छे, त्यसो हुँदा उहाँलाई पनि साइभक्तिका लागि बेला-बेला कुरा राख्थें । तर, किन हो... मेरा कुरामा उहाँले उस्तो चासो राख्नुभएको पाइन । अँ... बेला-बेला हाम्रो साइबाबा सम्बन्धी प्रवचनहरूमा उहाँले पनि प्रवचन भने दिनुभएको छ ।

अन्त्यमा, स्व.द्रोणजी साह्रै रसिलो र फरासिलो मान्छे । उहाँको निधन साह्रै दुःखद लाग्छ । जो कोहीसँग पनि हेलमेल राख्ने र सहयोगको भावना भएको उहाँको व्यक्तित्व सदा स्मरणीय छ भन्ने मलाई लाग्छ ।

*३) रुक्मादेवी पौडेल :* आमासँग बेला-बेला गरेको कुराकानीको संगालो हो, यो लेख । एकै दिनका कुरा होइनन् । स्व.द्रोणकुमार उपाध्याय पौडेलबारे मत-अभिमत लिने क्रममा मैले आफ्नै आमासँग पनि बेला-बेला स्व.द्रोणबारे जिज्ञासा राखें किनकि आमाले उहाँलाई औधि मान्ने गर्नुहुन्थ्यो । मैले आमालाई प्रश्न गरें- 'आमा ! तपाईं स्व.द्रोणलाई साह्रै मान्नुहुन्छ, किन होला ?' प्रतिउत्तरमा उहाँले भन्नुभयो- 'हेर् छोरा ! जसले परेका बेला हेर्छ, हामीले तिनैलाई मान्नुपर्छ । परेका बेला चाहिँ मुन्टो बटारेर अन्तै हेर्ने अनि अघिपछि लोलोपोतो घस्नेलाई नमान्दा पनि हुन्छ । मैले द्रोणलाई उपकारी मान्छेमा गनेको छु, त्यसैले मान्छु । तँ भन्



रुक्मादेवी पौडेल

न, २०४० सालमा बहिनीको विवाह हुने खेरमा नान्यमुखी श्राद्ध गर्ने कोही नहुँदा उहाँले नै 'लौ म गर्छु, बन्धु भएको के काम त' भनेर अघि सर्नुभयो र उक्त कार्य सम्पन्न गर्नुभयो । त्यति मात्रै होइन, जहिल्यै पनि हाम्रोमा असजिलो अप्ठेरो पर्दा मद्दत गर्न अघि सर्ने उहाँ नै हुनुहुन्थ्यो । उहाँ पछिल्लो पटक बिरामी परेर ओछ्यान पर्नुभएकै बेला यता म पनि अकस्मात लडेर अशक्त परें । यो खबर सुन्नेबित्तिकै आफैं अशक्त हुँदा पनि उहाँ मलाई हेर्न सकि-नसकी पनि आउनुभयो । त्यो अवाई आखिर उहाँको अन्तिम अवाई रहेछ । त्यसको महिना दिन नपुग्दै उहाँ बित्नुभयो ।' आमाका यी प्रतिउत्तर एक्कैसासमा भनेजस्तो गरी आयो । अझ उहाँ भन्दै हुनुहुन्थ्यो- 'द्रोणको गुन र उपकार बारे लेखो लाएर साध्य छैन बाबै !'

*४) मणिराम नेउपाने :* स्व.द्रोणकुमार उपाध्यायका सम्बन्धमा आफ्ना धारणा राख्नका लागि २०७० साल असार १४ मा पूर्वसरकारी कर्मचारी श्री मणिराम नेउपानेजीसँग अनुरोध गरें । मणिरामजी अहिले हर सामाजिक सत् कर्मका गतिविधिमा सक्रिय रहेर समय व्यतीत गर्दै हुनुहुन्छ । आम जनसमुदायमा उहाँको छवि साँच्चिकै स्वच्छ रहेको जोकोहीले अनुभव गरेको वर्तमान छ । एक समय अर्थात २०५१ सालतिर द्रोण सर र मणिरामजी चन्द्रगढीको लेखनाथ पुस्तकालयको कार्यसमितिमा हुनुहुन्थ्यो । द्रोणजी सभापति पदमा र मणिरामजी सहसचिव पदमा ।



**मणिराम नेउपाने**

उसबेलाका सन्दर्भमा स्व.द्रोणबारे मणिरामजी भन्नुहुन्छ- 'हुन त द्रोणजीलाई मैले उहाँ चन्द्रगढी बसोबास गर्दैदेखि जान्दै आएको हुँ । तर, निकटता भने लेखनाथ पुस्तकालयमा एउटै कार्यसमितिमा रहँदादेखि भएको हो । उहाँ अत्यन्त सज्जन र हर्दै मिलनसार मान्छे हुनुहुन्थ्यो । पुस्तकालयका हर समस्याहरूमा सबैसँग राय सल्लाहका साथ चल्ने र समस्याको सहज किसिमले हल गर्ने उहाँको विशेषता थियो । पुस्तकालयपछि यता केन्द्रमोड चन्द्रगढीको 'दुर्गामाता उपासना' भन्ने धार्मिक संस्थासँग पनि हामी सम्बद्ध रह्यौं । यस संस्थालाई पनि उहाँले थालनीदेखि नै सकेसम्म साथ-सहयोग दिनुभयो । धेरै ठूला विद्वान भएर पनि द्रोणजी आम सर्वसाधारणसँग उसरी नै घुलमिल हुने क्षमताको । मैले सधैं तारिफ गरें उहाँको । उहाँको अल्पआयुले समाजलाई घाटा भएको छ भन्ने मलाई लागेको छ ।'

*५) प्रा.खगेन्द्र प्रसाईंको स्व.द्रोणबारे अभिमत :* २०७७ सालको पुस महिनाको एक बिहान म स्व.द्रोणबारे केही तथ्यहरू प्राप्त गर्न प्राध्यापक खगेन्द्र प्रसाईंज्यूको घरमा पुगें । बिर्तामोड अन्तर्गत बिर्ताबजारको उत्तर-पश्चिम मार्गको एउटा सुन्दर टोलमा उहाँको निवास रहेछ । बिहान ८ बजेको समय थियो, त्यसबेला खासगरी लेखपढ अध्ययन अनुसन्धान गर्न नै तल्लीन हुने उहाँको दैनिकी रहेको मैले बुझें । भर्खरै प्रसाईं वंशावली प्रकाशन गरिसकेर अब चाहिँ आत्मजीवनी लेख्न लाग्नुभएको रहेछ । प्रसाईं परम्परालाई छोड्दै एकदमै आधुनिक प्रविधि अपनाएर अगाडि बढ्नुभएको पाइयो । प्रा.खगेन्द्र आफू स्वयम् इतिहासविद् भएका कारणले वंशावली लेखनमा प्राप्त तथ्यहरूलाई प्रामाणिकतामा पुष्टि भए मात्र समावेश गर्ने गर्नुभएको रहेछ । त्यो वंशावली देखेपछि वास्तवमा वंशावलीको औचित्य र महत्वको बोध गरें मैले । आफूबाट सम्पादन भएको त्यस ग्रन्थमा उहाँले भाषिक पक्षतर्फ पनि सूक्ष्मदृष्टि राख्दै वंशावलीलाई सुन्दर बनाउन सक्नु भएको पाइयो ।

प्राध्यापक पेशाबाट निवृत्त भएपछि त उहाँ झन् सिर्जना, रचना र निर्माणमा लागेको पाउँदा अब छिट्टै निवृत्त हुन लागेको मलाई भित्रैबाट सत्कर्मप्रतिको अवलोकनपछि मैले आफू त्यहाँ पुग्नुको कारण बताएँ । स्व.द्रोणबारे स्मृतिग्रन्थ निस्कँदै छ भन्ने थाहा पाएपछि त्यस कार्यलाई मुक्तकण्ठले उहाँले प्रशंसा गर्नुभयो । आफूले स्व. द्रोणको देहावसान भएको दुई महिनापछि मात्र थाहा पाउन सकेकोमा चाहिँ असीम दुःख लागेको बताउनुभयो । म कुनै प्रश्नावली आदि लिएर त्यहाँ पुगेको थिइन, केवल उहाँलाई यतिमात्र सोधें कि 'तपाईं स्व.द्रोणलाई कसरी सम्झनु हुन्छ ?' यसको प्रतिउत्तर उहाँले यसरी प्रस्तुत गर्दै जानुभयो-


**प्रा.खगेन्द्र प्रसाईं**

'वि.सं.२०४४ मङ्सीर १४ बाट म मेची बहुमुखी क्याम्पस, भद्रपुरमा प्रवेश गरेको हुँ र त्यसैबेलादेखि मैले उहाँलाई जान्दै आएको हुँ। त्यसपूर्व उहाँसँग चिनजान नै थिएन । घनश्याम सर, चूडामणि रेग्मी सरहरूसँग चाहिँ अगाडिदेखि नै चिनजान थियो । २०४६ साल पूर्वसम्म त स्व.द्रोण जीसँग उस्तो गहिरो आत्मीयता पनि थिएन, तर त्यसपछि भने उहाँको व्यक्तित्वबाट म क्रमशः प्रभावित बन्दै गएँ । प्राध्यापक संघमा उठ्ने कतिपय विवाद (त्यसबेला प्रजातान्त्रिक प्राध्यापक र प्रगतिशील प्राध्यापकबीच बेला-बेला चर्को विवादहरू उठ्थे) मा उहाँले सफल

सहजकर्ताको भूमिका खेलेर विवादलाई मत्थर वा साम्य बनाउनु हुन्थ्यो । एकपटक २०४६ सालको जनआन्दोलनछेक प्राध्यापक संघको चुनावमा मैले सभापतिमा उठ्ने विचार गरें, किनकि पञ्चायततन्त्रको विरुद्धमा उभिनका लागि लरतरो मान्छे सभापति भए काम काट्तैनथ्यो । तर, यस कुरालाई प्रजातान्त्रिक पक्षधर साथीहरूले सहमति जनाएनन् र उनीहरूले पनि आफ्नो तर्फबाट सभापति उम्मेदवार उठाउने नै भए । त्यसबेला खगेन्द्र प्रसाईं नै आजको समयको आवश्यक व्यक्ति हो र सभापति पदमा उहाँलाई नै प्रजातान्त्रिक तर्फका साथीहरूले समर्थन गर्नुपर्दछ भनेर त्यस तर्फका साथीहरूलाई मनाउनुभयो । फलस्वरूप म सभापतिमा निर्वाचित पनि हुन पुगें । जनआन्दोलनताक नै प्राध्यापक संघको सभापति थिएँ । जनआन्दोलनमा हामी प्राध्यापकहरूको भूमिका महत्वपूर्ण रह्यो । जुन सबै समक्ष जगजाहेर पनि छ । त्यही बेला हो, मैले द्रोणजीलाई वास्तवमा नजिकबाट चिनेको वा नियालेको ।

२०४६ सालको जनआन्दोलनपछि म क्याम्पस-प्रमुख हुन पुगें । त्यसबेला समाचारको सुलभता आजजस्तो थिएन । हाम्रा घर-घरमा फोनसम्म पनि नभएको स्थिति थियो । त्यसले गर्दा क्याम्पसमा फोन प्रयोगका सम्बन्धमा समस्या आयो । फोनमा ट्रंक हुने, हजारौंको बिल उठ्ने; तर कस-कसले फोन प्रयोग गरेको हो- त्यसको रेकर्ड नहुने ! अब यो जथाभावी फोन गर्ने परिपाटीलाई व्यवस्थित गर्ने योजनामा म लागें । फोनमा लगबूक राखें । फोन गर्नेको सारा रेकर्ड त्यहाँ मेन्टेन गर्ने क्रम सुरु भयो । यसले गर्दा म चारैतिरबाट आलोचनाको शिकार बन्न थालें । प्राध्यापक भेला नै बोलाएर त्यसबारे व्यापक छलफल चलाइयो । त्यहाँ मैले यो एउटा थिति बसाल्न खोजेको मात्र हुँ, कसैलाई दुःख दिने अभिप्रायका साथ यसो गराएको होइन भन्दा पनि धर पाइएन । त्यही क्रममा द्रोणजीले ‘सभ्य मुलुकमा थितिअनुसार काम हुन्छ । हाम्रोमा पनि फोन पारदर्शिता कायम गर्न, दुरुपयोग रोक्न क्याम्पस-चिफले यो अभियान चलाउनु भएको हो । साथीहरू... हामी सबैले यो थितिमा चल्दै राम्रो हुन्छ’ भनेर विरोधमा उत्रिएका साथीहरूलाई सम्झाउनुभयो । नभन्दै त्यसपछि निरन्तर फोनमा लगबूक भरेर मात्र फोन गर्ने परम्परा कायम भयो । द्रोणजीलाई म यस मानेमा एक जायज र न्यायोचित कुरामा पक्षमा उभिने मान्छेका रूपमा मान्दछु ।

साथै, द्रोणजी सहयोगी र मिलनसार व्यक्ति हुनुहुन्थ्यो । म क्याम्पस-प्रमुख भएर रहँदा भाषिक समस्या परेका बेला उहाँबाट सहयोग लिने गर्दथें । भाषिक क्षमता उहाँमा अद्भूत थियो भन्नु पर्दछ । नेपाली लगायत अङ्ग्रेजी, संस्कृत, बंगाली, हिन्दी, राजवंशी बाहेक पनि कतिपय स्थानीय भाषामा उहाँको दख्खल थियो ।

क्याम्पसबाट सेवा निवृत्त भएपछि मेरो भद्रपुर जाउ-आउको मेलोमा विश्राम लाग्यो । तैपनि कुनै बेला भदपुर गएको बेलामा म भरसक द्रोणजीकोमा पस्ने नै गर्दथें । उहाँको देहावसानले वास्तवमा हाम्रो समाजमा ठुलोक्षति भएको मैले ठानेको छु । उहाँको आत्माको चिर शान्तिको कामना गर्दछु ।'

**ख) अन्तर्वार्ता खण्ड**

नेपाल पत्रकार महासंघका पूर्वमहासचिव : हाल कञ्चनजंघा एफ.एम.का प्रबन्ध निर्देशक तथा अनवरत रूपमा सामाजिक चेतनाका अभियन्ता श्री चन्द्र भण्डारीसँग यस पङ्तिकारले २०७७ साल मंसीर २९ गते दिनको ११ बजे स्व.द्रोणकुमार उपाध्यायको स्मृतिग्रन्थ प्रकाशनका सन्दर्भमा एवम् उहाँको व्यक्तित्व सम्बन्धमा लिएको अन्तर्वार्ता यहाँ पाठक समक्ष राखिएको छ ।



**चन्द्र भण्डारी**

**प्रश्न : द्रोणकुमार उपाध्यायको देहावसानपछि चन्द्रगढीबाट उहाँका सम्बन्धमा एउटा स्मृतिग्रन्थ प्रकाशन गर्ने कार्य अगाडि बढेको छ, यसलाई तपाईंले कसरी हेर्नुभएको छ ?**

**उत्तर** : यो ज्यादै राम्रो कुरा हो । २०५१ सालमा हामीले पनि स्व.द्रोणाचार्य क्षेत्रीको स्मृतिग्रन्थ निकालेका थियौं । उक्त स्मृतिग्रन्थ प्रकाशन भए यता अरु धेरै स्मृतिग्रन्थहरू निस्किरहेका छन् । स्मृतिग्रन्थले व्यक्तित्वको इतिहासलाई सुरक्षित राख्न मद्दत गर्दछ । व्यक्तिले रचेका महत्वपूर्ण उपलब्धिहरूलाई समाजमा सधैं ज्यूँकात्यूँ राख्न स्मृतिग्रन्थले महत्वपूर्ण भूमिका खेल्दछ । अझ म त भन्दछु, समाजमा आफ्नो हैसियत अनुसार योगदान पुऱ्याउने एउटा श्रमिक वा किसान नै किन नहोस्; उसको पनि सधैं स्मरण गर्न समाजले स्मृतिग्रन्थ निकाल्नु राम्रो हुन्छ । अँ, स्मृतिग्रन्थ सत्य वा यथार्थको धरातलमा उभिएको चाहिँ हुनै पर्छ, नत्र झुटको दस्तावेज बन्न जान्छ । उता, भारतको असमतिर व्यक्तिको देहावसान भएको एकदमै थोरै दिनभित्रमा पनि गहकिलो स्मृतिग्रन्थ निस्कने चलन मैले देखेको छु ।

**प्रश्न : स्मृतिग्रन्थजस्तै गरी अहिले जोकोहीले आत्मवृत्तान्त लेख्ने गरेको पाइँदैछ, यस सम्बन्धमा तपाईंको राय के छ ?**

**उत्तर** : आत्मवृत्तान्त पनि साह्रै नै महत्वपूर्ण विधा हो जस्तो लाग्छ मलाई ।

कतिपय महान व्यक्तित्वहरूले आत्मवृत्तान्त लेखेका छैनन्, जुन साह्रै खट्कँदो पक्ष हो । आत्मवृत्तान्तले पनि इतिहासलाई मजबुत बनाउने हो । हरेकको जीवनमा समाजपयोगी घटनाहरू भएका हुन्छन्, जसले लोकलाई मार्गनिर्देशन गर्न सक्छ । तर, ती कुराहरू व्यक्तिको अवसानपछि हराएर गयो भने समाज वा राष्ट्रले महत्वपूर्ण कुरा गुमाउन जान्छ । रह्यो कुरा, आत्मवृत्तान्तमा सत्यनिष्ठाको प्रश्न । आत्मवृत्तान्त सत्य र एकदमै सत्य हुनु चाहिँ जरुरी छ ।

**प्रश्न : अब रह्यो स्व.द्रोणबारे तपाईंसँग केही जिज्ञासा राख्ने कुरा । द्रोणजीलाई तपाई कहिलेदेखि जान्नु हुन्छ ?**

**उत्तर** : २०३८ सालतिर म मेची बहुमुखी क्याम्पसमा स्नातक तहमा अध्ययनरत थिएँ । त्यो बेला उहाँ हामीलाई नेपाली पढाउनु हुन्थ्यो । कक्षाकोठामा हामी गुरु-चेला थियौं, तर कक्षा बाहिर उहाँ साथीजस्तो मिजासिलो रसिलो रूपमा व्यवहार गर्नुहुन्थ्यो ।

**प्रश्न : स्व.द्रोणको कुन पक्षसँग तपाई बढी प्रभावित हुनुहुन्छ ?**

**उत्तर** : उहाँको सत्यवादी जीवनशैलीसँग म बढी प्रभावित रहें । जस्तो कि एउटा कुरा भनौं- भारतका विभिन्न ठाउँबाट आफ्नो देश मातृभूमि नेपाल सम्झेर आएका हुन्छन् । तिनलाई परिचयका क्रममा तपाईं कहाँबाट यस ठाउँमा आउनुभएको भनेर सोधेमा भरसक यतै कतै कुनै ठाउँ बताउँछन् र प्रश्नको उत्तर दिएर पन्सन्छन् । तर, द्रोण सरमा कहिल्यै त्यस्तो पाइएन । उहाँ म असमबाट आएको हुँ, उहीं जन्मेर पछि यता बसोबास गर्न थालेको हुँ भन्ने गर्नुहुन्थ्यो । उहाँको यो सच्चाईसँग म भित्रैबाट प्रभावित रहेको छु ।

**प्रश्न : उहाँका अन्य केही विशेषताहरू पनि छन् कि ?**

**उत्तर** : अँ, एउटा कुरा चाहिँ भन्नै पर्छ, त्यो के भने उहाँ वाम विचारधाराको पङ्तिमा हुनुहुन्थ्यो । तापनि त्यसरी प्रत्यक्ष रूपमा चाहिँ देखिन चाहनु हुन्नथ्यो । यो कुरा स्वाभाविक नै मान्नुपर्छ, किनकि प्राज्ञिक व्यक्तित्वहरू त्यसरी राजनैतिक खेमामा प्रत्यक्ष भूमिकामा कमै मात्रामा प्रकट हुने हुन्छन् ।

**प्रश्न : अन्त्यमा केही थप भन्नु छ कि ?**

**उत्तर** : स्मृतिग्रन्थ ओजपूर्ण निस्कियोस्, यही मेरो हार्दिक शुभकामना छ । धन्यवाद !


मनकुमार डाँगी

*मनकुमार डाँगी :* झापा जिल्ला, साविक चन्द्रगढी गा.वि.स.को वडा नं-.७ निवासी श्री द्रोणकुमार पौडेल हाल भद्रपुर वडा नं- १० घर भई साविक चन्द्रगढी गाउँ परिषद्‌बाट स्थानीय स्वायत्त शासन ऐन- २०५५ र स्थानीय स्वायत्त शासन नियमावली- २०५६ अनुसार गाउँ विकास समितिमा कर्मचारी पदपूर्ति समिति गठनका लागि व्यवस्था भएबमोजिम कुनै राजनैतिक दलको सदस्यता नलिएको प्रतिष्ठित स्थानीय नेपाली नागरिकमध्येबाट सम्बन्धित गाउँ परिषद्‌ले निर्णय गरी तोकिएको व्यक्ति पदपूर्ति समितिको अध्यक्ष रहने व्यवस्था अनुरुप चन्द्रगढी गाउँ विकास समितिको परिषद् को निर्णय अनुसार श्री द्रोणकुमार पौडेल अध्यक्ष र सदस्य श्री टेकबहादुर खड् का (काजी) जि.वि.स.झापाबाट प्रतिनिधि र गा.वि.स.सचिव श्री सन्तोषकुमार दाहाल समेतको पदपूर्ति समिति गठन भई २०५९ सालमा रिक्त रहेको खरिदार पदको लागि विज्ञापन प्रकाशित भई आवेदन दिई लिखित तथा अन्तर्वार्ता भई म खरिदार पदमा नियुक्त भई हाल भद्रपुर नगरपालिका वडा नं-.१० को वडा सचिवको जिम्मेवारी पाई हालसम्म कार्यरत रहेको छु। परीक्षालाई मर्यादित र निष्पक्ष रूपमा सम्पन्न गरी अन्तर्वार्ताको समयमा उहाँले सोध्नुभएको प्रश्न आज पनि सान्दर्भिक छ। 'तपाईं नियुक्त हुनुभयो भने सेवाग्राहीहरूलाई कसरी सरल, सुलभ तरिकाले सेवा दिन सक्नु हुन्छ ?' जस्ता सरल, तर मार्मिक प्रश्न सम्झेर अहिले पनि म भावुक हुन्छु। अब द्रोण सर हामी बीच हुनुहुन्न। उहाँप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु।

*भद्रपुर-९ (झापा)*

*नवकुमारी खनाल :* यो जगतमा जन्मनु नै मृत्युको कारण हो। जो जन्मन्छ त्यो अवश्य नै मर्दछ। यो ध्रुवसत्यलाई जान्दाजान्दै पनि हामी वियोग वेदनामा अविभूत हुन्छौं। त्यसैगरी, आज हामी डा. द्रोणकुमार पौडेलका वियोगले मर्माहत र अविभूत भएका छौं। उनी एक विद्वान, शौम्य र व्यवहार कुशल व्यक्ति थिए। उनको जन्म एक विद्वान र नैष्टिक परिवारमा भएको थियो।

स्व. डा. द्रोणकुमार पौडेलका हजुरबुवा स्व.पं. गंगाधर पौडेल संस्कृतका


मनकुमार डाँगी

एक विदग्ध पण्डित हुनुहुन्थ्यो । भारतमा अंग्रेजको शासनकालमा नै भोजपुरबाट उहाँ असम पसेर असमको तेजपुर (वर्तमान शोणीतपुर) बटियामारी भन्ने गाँउमा वसोवास गर्न थाल्नु भएछ । उहाँ समाज सुधारक, विद्वान र शिक्षाप्रेमी भएकाले त्यस समाजमा गन्नेमान्ने र सबैको सन्माननीय व्यक्ति हुनुहुँदोरहेछ । उहाँलाई संस्कृत शिक्षाको श्री वृद्धिबाट समाज सुधार गर्ने उत्साह जागेर आफ्नै आँगनमा एउटा संस्कृत पाठशाला स्थापना गर्नु भएछ । आफैं गुरु भएर त्यस पाठशालामा गाँउ घरका विद्यार्थी भेला पारेर शिक्षादान कार्यक्रमको शुरुवात उहाँले गर्नु भएछ । पछि उहाँको स्वर्गारोहण भयो तर त्यो संस्कृत पाठशाला अद्यावधी छँदैछ । आफ्ना परिवार र समाजको सहयोग जुटाएर त्यस विद्यालयको जिर्णोद्धार गरी त्यहाँ हजुरबुबाको शालीक स्थापना गर्ने काम द्रोणबाबु मार्फत सम्पन्न भएको कुरा मलाई थाहा छ ।

डा. द्रोण कुमार पौडेल अध्ययनशील स्वाभावका धनी थिए । संस्कृत भाषाको राम्रो ज्ञान भएकाले त्यसको महत्व र गम्भीरतालाई उनले राम्ररी हृदयङ्गम गरेका थिए । संस्कृत भाषा हाम्रो जननी भाषा भएकाले यसको जगेर्ना गर्नुपर्ने सम्बन्धमा र हिन्दू धर्मका राम्रा पक्षहरुका सम्बन्धमा वकालत र बहस गर्न मन पराउँथे उनी । असमका पिछडिएका बोडो समुदायको विषयमा शोधपत्र प्रस्तुत गरेर त्यो सम्प्रदायबाट पनि उनले ठूलो सम्मान आर्जन गरेका थिए । प्रातः स्मरणीय स्व. घनश्याम खनालका नाममा खडा गरिएको संस्था घनश्याम खनाल मेमोरियल फाउण्डेशनका उपाध्यक्ष भएर निभाएको महत्वपूर्ण भूमिकालाई पनि म यहाँ स्मरण गर्न चाहँन्छु ।

मेरी जेठी दिदीका माहिला देवर स्वर्गीय टीकाराम शास्त्रीका सुपुत्र द्रोण कुमारले गुवाहाटी विश्वविद्यालयबाट बि.ए. र त्रिभूवन विश्वविद्यालयबाट एम.ए र नर्थ बंगाल युनिभर्सिटीबाट पीएच.डी, डिग्री हासिल गरेका हुन् । उनी मेची बहुमुखी क्याम्पसका नेपाली विभागका वरिष्ट प्राध्यापक भएर लामो समय सेवा गरी उमेरका हदले पेशा निवृत्त भएका थिए । जीवनका अन्तिम घडीसम्म पनि क्रियाशील रहेका उनी पारिवारिक चिन्ताबाट मुक्त थिए र अबको बाँकी जीवन सुखमय चालले बिताउने योजनामा थिए तर दैवको खेल अर्कै रहेछ ।

घनश्याम मेमोरियल फाउण्डेशन अन्तर्गत डा. राजीव खनालको सक्रियतामा जापानी सहयोगी बन्धुबाट झापा जिल्लामा विद्यालय भवन निर्माण भएको सर्व विदितै छ। विपन्न वर्गका विद्यार्थीहरुलाई लक्षित गरी विद्यालय भवन निर्माण गर्ने कार्यक्रम अनुरुप निर्मीत भवनको हस्तान्तरण कार्यक्रममा जान हामी द्रोण बाबुको घरमा लिन गयौं। उनलाई गाडी चढ्न अलि गाह्रो भयो र सहयोग गर्नु परेको थियो तर कार्यक्रम सकुशल सम्पन्न गरी हामी फिरेका थियौं। त्यसको दुई दिन पछि इलाजका लागि द्रोण लखनौ गएर तुरन्तै फर्केको कुरा मलाई थाह भयो र म भेट्न गएँ। उनलाई तेल मालिस गरिँदै रहेछ, उनले मलाई सानिमा भनेर अलि ठूलै स्वरमा बोलाए। मैले तिमीलाई सञ्चो नभएको भन्ने सुनेर भेट्न आएँ भने। तर, त्यसपछि कुनै शब्द बोलिएन, म एक घण्टा जति बसेर घर फर्किएँ। त्यसको केही दिन पछि नै एका बिहानै रेडियोबाट उनको दुःखद् निधनको खबर सुनेर म मर्माहत भएँ। हतार हतार अटोरिक्सा चढेर म उनको घर पुगेँ, उनको निष्प्राण शरीर तुलसीका मोठका छेउमा सुताइएको थियो, मेरा मुखबाट एक्कासी निस्कियो- द्रोण तिम्रो सदा वैकुण्ठमै वास होस्।

*(लेखक नवकुमारी खनाल घनश्याम खनाल स्मृति प्रतिष्ठानको अध्यक्ष एवम् शिक्षासेवी हुनुहुन्छ)*

# डा. द्रोणकुमार उपाध्यायका बारेमा डा. भीमकान्तसँगको कुराकानी

डा.द्रोणकुमार उपाध्याय स्मृतिग्रन्थ प्रकाशनार्थ सम्पादकमण्डलका हामी (खगिन्द्रा खुशी, तारा विविध, देवीचरण भण्डारी, कृष्ण सुवेदी 'निराकार' तथा परिवारबाट गुरुआमा मीरादेवी पौड्याल, छोरी योगिता पौडेल तथा भाइ किशोर पौडेल) सिलिगुडी, माटिगाढास्थित डा.भीमकान्त उपाध्यायको निवासमा पुग्यौं। डा.द्रोणकुमार उपाध्यायले सवाई विषयमा विद्यावारिधि डा.भीमकान्त उपाध्यायको शोध निर्देशनमा गर्नुभएको थियो र उहाँको स्मृतिग्रन्थ प्रकाशन हुनै लाग्दा डा.भीमकान्त उपाध्यायसँग हामी सम्पादक परिवार उहाँको निवास माटिगाढामा पुगेरै उहाँसँग अन्तर्वार्ता लिएका छौं -

खगिन्द्रा खुशी : नमस्कार सर, स्वागत छ तपाईंलाई ।

डा.भीमकान्त : नमस्कार, ठीक छ ।

खगिन्द्रा खुशी : सन्चै हुनुहुन्छ नि ?

डा.भीमकान्त : सन्च पनि राम्रो त छैन, घाँटिको बिमार छ, अरु पनि केके छन् ।

खगिन्द्रा खुशी : हामी चाहिँ आज द्रोण सरसँग सम्बन्धित कुराकानी गर्न आएका हौं ।

डा.भीमकान्त : सुन्नु बहिनी ! पहिला म कतिपय कुरा भन्छु, तर रेकर्डहरू केही पनि छैन। मुखले जे आयो त्यही भन्छु, पहिलाका धेरै कुरा सम्झन सक्दिन ।

खगिन्द्रा खुशी : जति सम्झनु हुन्छ त्यति भने हुन्छ। डा.द्रोणकुमार उपाध्यायलाई कहिलेदेखि चिन्नुहुन्छ ?

डा.भीमकान्त : चिन्न ता अब खासगरी काठमाण्डौमा पढ्दाखेरि भेट भएको, कति सालमा भन्ने चाहिँ अब हेर्नुपर्छ ।

तारा विविध : त्यसो हुँदा तेत्तीस, चौतीस सालतिरको कुरा हुनुपर्छ ।

डा.भीमकान्त : के हो, त्यसै भन्न सक्तिन म । मैले एम्.ए. पास गरेको सन् १९७२ मा होला, उहाँसँग भेट भएको पार्ट- टु मा पढ्दाखेरि हो ।

तारा विविध : मलाई के लाग्यो भने डा.द्रोणकुमार उपाध्याय पौडेलका बारेमा


पत्नीका साथमा डा. भीमकान्त उपाध्याय ।

उहाँका एक जना साथीसँग अन्तर्वार्ता लिंदाखेरि उहाँले २०३४ सालमा म र द्रोणजी एउटै क्लासमा थियौं भनेर भन्नुभएको छ । भनेपछि सरको द्रोण सरसँग भेट भएको २०३४ साल हुनुपर्छ जस्तो मलाई लाग्यो ।

डा.भीमकान्त : कसले भन्नुभयो ?

तारा विविध : गोविन्दविनोद चापागाईं भन्ने द्रोण सरको छिमेकी हुनुहुन्छ, उहाँले भन्नुभएको ।

किशोर पौडेल : एकतीस सालको कुरा हो दाजु, सन् १९७१ सालको कुरा हो । २०३० सालमा दादाले बी.ए. पास गरेको हो अनि २०३१ सालमा आएर दादाले एम.ए.जोइन् गरेको हो ।

डा.भीमकान्त : त्यो चाहिँ मान्छु म । उसले जोइन् गर्दाखेरि म पार्ट- टु मा थिएँ । यस्तै होला है...अनि उहाँको घर चाहिँ उदालगुढी रहेछ । सुनेको हो, पुगेको थिइन । उहाँ युनिभर्सिटीमै हुनुहुन्थ्यो, केही कागजपत्र मसित थिए । त्यो क्रममा म गइरछु एक-दुई दिन । बृहस्पति उपाध्याय सिङ्ग्रीका हुनुहुन्थ्यो, उहाँ र द्रोणजीका पिताजी टीकाराम शास्त्रीसँग भेट भएको हो, त्योभन्दा बढी म केही पनि जान्दिनँ ।

किशोर पौडेल : त्यो भनेको सन् १९७४ सालमा हो, १९७५ सालमा दादाले उदालगुढी हायर सेकेन्डरीमा पढाउन सुरु गरेको ।

तारा विविध : भनेपछि १९७१ मा दाजुहरूको चिनजान भयो, त्यसपछि निरन्तरता रहिरह्यो ?

डा.भीमकान्त : निरन्तरता भन्ने पनि... आजको दुनियाँ हो, फ्याट्ट भन्न गाह्रो पर्छ । आइजाई भइरहन्थ्यो । पीएचडी.गर्दा चाहिँ हो, सवाईमा पीएचडी गरेको चाहिँ हो । पीएचडीको पूरा शीर्षकचाहिँ मैले बिर्सें ।

खगिन्द्रा खुशी : घनिष्टता कतिको थियो ?

डा.भीमकान्त : एकदमै थियो, तँ तँ र म म हुन्थ्यो, धेरै आत्मीयता थियो । उहाँ दाजु पनि भन्नुहुन्थ्यो, सर पनि भन्नुहुन्थ्यो, म पनि सर पनि भन्थें, भाइ पनि भन्थें ।

तारा विविध : पीएच.डी.को कुरा आयो, म त्यसैलाई जोडेर भन्छु... सवाई काव्यमा सरको निर्देशकत्वमा उहाँले पीएच.डी. गर्नुभयो । अब सवाई काव्यमा पीएच.डी. गर्दा उपयुक्त हुन्छ भनेर उहाँले विषय लिएर आउनु भएको हो कि, तपाईंले विषय दिनुभएको हो ?

डा.भीमकान्त : मैले लहरी काव्यमा गरेको थिएँ, उहाँले म सवाई काव्यमा गर्नुपर्‍यो भन्नुभयो, ल गर्नु भनें ।

तारा विविध : अनि द्रोण सरले पीएच.डी. गरिरहँदा र सरले गाइड गरिरहँदा, द्रोण सरको बलेंसी जोडिएको छिमेकी चाहिँ म पनि थिएँ, त्यतिखेर उहाँ कहिलेकाहीं के भन्नुहुन्थ्यो भनेदेखि 'होइन, यो पीएच.डी. साह्रै गाह्रो रहेछ हौ, जे लेखेर गयो काटिदिइहाल्नु हुन्छ (सबैको गलल हाँसो गुन्जिन्छ) म त नसक्ने भएँ अब के गर्नु ? पनि भन्नुहुन्थ्यो । त्यो पीएच.डी.को सन्दर्भमा चाहिँ कहिलेकाहीं अप्ठ्यारो परेको हो ?

डा.भीमकान्त : त्यो त हुन्छै हुन्छ, सबैलाई हुन्छ । हुन्छ भनेर गर्‍यो भरे कहाँ के मिलेको हुँदैन, अलिकति तलमाथि हुन्छै हुन्छ । काटकुट संशोधन भइहाल्छ ।

डा.भीमकान्तकी श्रीमती : ए सानिमा सबै काटिदिनुभयो उहाँले त हेर्नुहोस् त... भन्नुहुन्थ्यो मलाई । (फेरि सबैको हाँसो गुन्जियो) (खगिन्द्रा खुशीलाई हेर्दै) अलि मिलाएर गर्नुहोस् है !

खगिन्द्रा खुशी : हुन्छ हुन्छ, मिलाएर राख्छौं ।

तारा विविध : त्यसरी सवाई काव्यमा उहाँले अब नेपाली साहित्यमा, शोध अनुसन्धानको क्षेत्रमा ठुलो काम गर्नुभयो, सरको पनि योगदान त्यहाँ रह्यो र त्यो शोध ग्रन्थको मूल्याङ्कन चाहिँ कुन स्तरमा रह्यो । त्यहाँ लेख्न दिएको मैले होइन ? .....

केही थाहा छैन बिर्सिसकें मैले, सवाई काव्यको लहरी सवाई र लोकसाहित्य हो, त्यसको महत्व आफ्नै छ, त्यसकारण कति के भयो भन्न सक्तिनँ म ।

तारा विविध : त्यसपछि उहाँले धेरै लोकसाहित्य सम्बन्धी ग्रन्थहरू लेख्नुभयो, ती लेख्दाखेरि पनि सरसँग छलफल, विवेचना, आपसी परामर्श भए कि भएनन् ?

डा.भीमकान्त : भए होलान्, त्यो मलाई थाहा छैन ।

कृष्ण सुवेदी निराकार : द्रोण सरले सवाई काव्य लेखेर सरलाई पटक-पटक देखाउँदा सरको अनुभूति चाहिँ कस्तो रह्यो ?

डा.भीमकान्त : राम्रो छ, राम्रो छ। (तारा विविधतिर हेर्दै) ए सम्झें... तपाईंले अघि भनेको कुरा : सवाई लहरीहरू पुराना कुराहरू हुन् । यिनको रेकर्ड भेटिँदैनन्, उत्खनन् गर्नुपर्छ । मैले गरें तुलसीबहादुर क्षेत्रीसँग । उहाँले मसँग गरे पनि काठमाण्डौमा त्रिपाठी सर को-कोसँग सल्लाह लिनुभयो, के-के गर्नुभयो, मिलाउनुभयो । ज्ञान असीम छ । त्यसलाई सीमामा राख्न सकिँदैन ।

कृष्ण सुवेदी निराकार : सरले त्रिपाठी सरको पनि कुरा गर्नुभयो, उहाँको लीलबहादुर क्षेत्री, तुलसी दिवस, वासुदेव त्रिपाठी, घनश्याम नेपाल सरसँग संगत थियो । सरको विचारमा उहाँको लेखनशैली चाहिँ कोसँग बढी प्रभाव परेको देख्नुभयो तपाईंले ?

डा.भीमकान्त : त्यो चाहिँ भन्न गाह्रो छ । तैपनि हामीले पढेको ठाउँमा त्रिपाठी सर, बन्धु सरहरूको प्रभाव बढी छ ।

खगिन्द्रा खुशी : नेपालतिरको साहित्य क्षेत्रसँग सम्बन्ध जोड्नका लागि उहाँले भूमिका खेल्नुभयो कि, उहाँको आवश्यकता परेन तपाईंलाई ?

डा.भीमकान्त : हेर्नुस्, कतिपय त म बिर्सन्छु । तर, प्रभाव त छ उहाँको ।

देवीचरण भण्डारी : द्रोण सरसँग मेरो २०५२ सालबाट चिनजान भयो, त्यतिबेला भेट्दा पनि उहाँ साथीभाइ जस्तो व्यवहार गर्ने, एकदम मिलनसार, गुरु भए पनि साथीभाइ जस्तो व्यवहार गर्नुहुन्थ्यो । पढ्दाखेरि उहाँका अरु साथीभाइहरूसँग चाहिँ कस्तो व्यवहार हुन्थ्यो ?

डा.भीमकान्त : खै... अब मैले जान्दा त राम्रै थियो साथीभाइहरूसँग ।

तारा विविध : द्रोण सर बितेपछि, नेपाली तथा भारतीय नेपाली साहित्य र भाषा क्षेत्रका लब्धप्रतिष्ठित व्यक्तित्व, जनसमुदाय, गाउँसमाजको सल्लाह अनुसार यो स्मृतिग्रन्थ निकाल्ने प्रयत्नमा लागिएको छ । यो स्मृतिग्रन्थको औचित्य के देख्नुभएको छ ?

डा.भीमकान्त : हेर्नुस्, स्मृतिग्रन्थ भनेको के हो ? स्मृति भनेको चिनु, सम्भिmनु । स्मृतिका पुराना कुराहरूलाई राख्नु त राम्रो हो नि त, राम्रो हो ।

तारा विविध : मैले द्रोण सर सम्बन्धी केही व्यक्तित्वहरूसँग कुराकानी गरेको छु । उहाँ सीमान्तकृत क्षेत्रमा हुनुहुन्थ्यो । उहाँ बसेभन्दा पूर्व सिंगो भारत छ र पश्चिममा सिंगो नेपालमा छ । त्यहाँ बसेर उहाँले एउटा सेतुको काम गर्नुभएको छ । कहिले असममा गएर, कहिले बंगालमा गएर, कहिले सिक्किममा, कहिले भुटानमा गएर नेपाली भाषा-साहित्य आदिको र यता नेपालतर्फको पनि प्रतिनिधित्व गरेर एउटा सेतुको काम गर्नुभएको छ भने यसमा तपाईं सहमत हुनुहुन्छ ?

डा.भीमकान्त : यो भाषा, साहित्य, संस्कृति भन्ने चिज नि राजनीति र भूगोलले सीमित गर्न सक्तैन । त्यसो हुनाले उहाँले पनि उहाँ बस्नुभयो, यहाँ पनि आउनुभयो । त्यसो हुनाले यो मूल्यांकन चाहिँ ठीक रह्यो ।

तारा विविध : अब मुक्तिजीलाई पनि यहीं जोड्न चाहन्छु । यो विषयमा मुक्तिजी के भन्नुहुन्छ ?

मुक्ति उपाध्याय बराल : अन्तर्राष्ट्रिय नेपाली सांस्कृतिक सम्मेलन भएको थियो गमिरीमा, दाजु पनि जानुभएको थियो । पछिल्लोपटक बटियामारीमा चाहिँ असम नाट्य सम्मेलनले तीन दिनको नाट्य अधिवेशन गरेको थियो । द्रोण दाजुलाई पनि बोलाएको थियो त्यहाँ । द्रोण सरका हजुरबुबाहरूले त त्यहाँ पाठशाला खोल्नुका साथै धेरै सामाजिक कामहरू गर्नुभएको, चर्तिकला नै गर्नुभएको अनि त्यहाँ द्रोण दाइले यस्तो चिज प्रस्तुत गर्नुभएको थियो- हरिनारायण, विद्याभूषणका सत्र वटा नाटकका पाण्डुलिपिहरू, कोही च्यातिएका पनि थिए, उहाँले एक-एक गरी नाम निकालेर देखाउनुभयो । अनि ती पाण्डुलिपिहरू चाहिँ असम नाट्य सम्मेलनले यसलाई हामी संरक्षण गरेर राख्छौं भनेर भनेका थिए । द्रोण दाइले पनि संरक्षण राम्रो प्रकारले गर्ने हो भने म दिन्छु । तर, यो कुरा मलाई विश्सास हुनुपर्‍यो कि यो संरक्षण भयो भनेर भन्नुभयो । त्यतिबेलाका ती नाटकहरू गरेका कुराहरू, ऐतिहासिक कुराहरू पनि उहाँले गर्नुहुन्थ्यो । विशेष कुरो के भनेदेखि उहाँले त्यतिबेला त्यो बटियामारीको अधिवेशनमा एउटा सारै मीठो कविता भन्नुभएको थियो ।

खगिन्द्रा खुशी : यो हो ? 'सबैमा जन्मभूमिको स्नेह हुन्छ बराबर, जसमा छैन त्यो स्नेह, मान्छे होइन जनावर' त्यो कविताको सुरुवात चाहिँ यही हो कि जस्तो लाग्यो ।

मुक्ति उपाध्याय : हुनसक्छ, अनि पछि मैले असम नेपाली नाट्य सम्मेलनका

सचिवलाई सोध्या थिएँ, ती नाटकहरू के गर्नुभयो- द्रोण दाजुले दिनुभएको भनेको त, हामीलाई दिनुभएको छैन, पछि विचार गरौंला, सुरक्षित प्रकारले यसलाई काम गर्नुपर्छ भनेर लिएर जानुभयो भनेर भन्दैथिए मसित ।

कृष्ण सुवेदी निराकार : द्रोण सर सेवानिवृत्त भएपछि पनि सरसँग धेरै सम्पर्कमा आउनुभा'छ । विभिन्न युनिभर्सिटीमा, लोकसाहित्यका कार्यक्रमहरूमा पनि जानुभा'छ । सर पनि कतिपय कार्यक्रममा सँगै जानुभाथ्यो होला, यात्रामा द्रोण सरको भूमिका कस्तो रहन्थ्यो ? बताइदिनुहुन्थ्यो कि ?

डा.भीमकान्त : मेरो चाहिँ बानी यस्तो छ, म यस्तो ठाउँमा जन्मिएको कि, मेरो ती संघ-संस्थाहरूमा एकदम कम्ती भेटघाट हुन्थ्यो, उहाँको सबैसँग सम्बन्ध राम्रो छ, मीठो कुरा गर्नुहुन्छ, हाँस्नुहुन्छ, एकदम खुलस्त । मसँग ता ए... तँ तँ चल्थ्यो नि ।

तारा विविध : एकछिन रोकें सर ! तँ तँ म म चलिरहँदा चाहिँ सरले थेसिसमा अलि पेल्नुभएको हो कि के हो ? (सबैको गलल हाँसो छुट्छ)

मीरा गुरुआमा : त्यही कहिल्यै भएन भन्नुभएर म आफैं आएर 'सानाबा भएन यो, कहिले सक्नु यसरी, गाह्रो हुन्छ' भन्दा 'होइन, यस्तो हुन्छ' भन्नुहुन्थ्यो ।

खगिन्द्रा खुशी : उमेर कति फरक छ ?

डा.भीमकान्त : ८ वर्ष ।

मुक्ति बराल : यात्रा गर्दा बडो मजाले हँसाउने, यो गर्ने त्यो गर्ने, चूप लागेर नबस्ने, कोही चूप लागेर बसेको छ भने 'के हो ओए' किन चूप लागेर बसेको ? भन्ने । पहिला देखि नै उहाँको एउटा फूर्तिलोपना थियो ।

डा.भीमकान्त : संसार यस्तै हो, आत्मीयता रहिरहोस् । उहाँको अब आत्माले शान्ति पाओस्, घरका सबै जना आनन्दमा बस्नु, अब के गर्नु ?

किशोर पौडेल : काठमाण्डौबाट पोखरा हिंडेर आएको पनि याद छ ?

डा.भीमकान्त : थाहा छैन मलाई ।

किशोर पौडेल : दादा र तपाईं अनि कुलप्रसाद दाइ, ढेकियाचुलीको । त्यतिखेर काठमाण्डौबाट हिंडेर पोखरा पनि आउनुभएको थियो । के भएर हो, हिंडेर आएको कुरा द्रोण दादाले गर्नुहुन्थ्यो । भीम सर र दादा ।

कृष्ण सुवेदी निराकार : द्रोण सरका धेरै पाटाहरू छन्- साहित्यिक, शैक्षिक, अनुसन्धान । यी पाटाहरूमध्ये सरलाई लागेको चाहिँ उहाँको सफल पाटो के जस्तो लाग्छ ?

डा.भीमकान्त : त्यो बडा गाह्रो हुन्छ। एकदम घनिष्टता पनि थियो, तर भेटघाट कम्ती हुन्थ्यो। साहित्यप्रति रुचि थियो, अनुसन्धानमा पनि रुचि राख्नुभएको, धर्मप्रति उहाँ अर्कै विचार राख्नुहुन्थ्यो । म यहाँ पाञ्चायन पूजा गर्थें, उहाँ पाञ्चायन पूजा गर्नुहुँदो रहेनछ। तर, असलमा उहाँको मन स्पष्ट थियो, जे भएपनि स्पष्टसँग भन्नुहुन्थ्यो ।

खगिन्द्रा खुशी : काठमाण्डौमा रहँदा चाहिँ कस्ताखालका कार्यक्रमहरूमा सहभागी हुनुहुन्थ्यो तपाईंहरू ?

डा.भीमकान्त : काठमाण्डौमा त पढाइ बढी हुन्थ्यो, एकाडेमीहरूमा भेला हुन्थौं, साहित्य सम्बन्धी कार्यक्रमहरूमा बहुत जान्थ्यौं ।

मुक्ति उपाध्याय : मैले एउटा कुरा सम्भें, हरि गजुरेलको लेख एउटा काहीं पढेको थिएँ। त्यतिबेला उहाँले लेख्नुभएको थियो : बेलुका-बेलुका चाहिँ असमबाट जानेहरूको गोष्ठीजस्तै बस्थ्यो अरे ।

खगिन्द्रा खुशी : असमबाट आउनुभएका विद्यार्थीहरूको स्तर र नेपालमै नेपाली पढेकाहरूको स्तर मिल्दैनथियो अरे भन्ने कुरा मैले सुनेकी थिएँ, यस्ता कुराहरूमा मतभेद भएन कहिले पनि ?

डा.भीमकान्त : असमिया पढे तापनि संस्कारले गर्दाखेरि असमिया र नेपालीमा त्यति फरक पर्दैन । म पनि ता असमिया माध्यमबाट पढेको हुँ, एकैचोटि बी.ए.मा एउटा विषय नेपाली लिएर पढेको ।

खगिन्द्रा खुशी : तपाईं पनि असममै पढेर जानुभएको, द्रोण सर पनि असममै पढेर जानुभएको । तपाईंहरूको असममै हुँदा चाहिं भेटघाट भएन ?

डा.भीमकान्त : भएन उता हुँदा ।

खगिन्द्रा खुशी : हामीले यो स्मृतिग्रन्थ निकाल्ने प्रयत्न गरेका छौं, कस्तो होस् भन्ने चाहनुहुन्छ यो स्मृतिग्रन्थ ? के सल्लाह दिनुहुन्छ ?

डा.भीमकान्त : भगवानले मंगल गरुन्, स्मरणीय रहोस्, राम्रा कुराहरू हुन् त्यसमा, त्यसबाट चाहिँ नयाँ पिँढीले नयाँ कुरा सिकोस् ।

खगिन्द्रा खुशी : हुन्छ सर ! यो अत्यन्तै महत्वपूर्ण समय हामीलाई दिनुभयो । यो समयमा अत्यन्तै महत्वपूर्ण कुराहरू हामीले लिएका छौं। यसका लागि हार्दिक आभार व्यक्त गर्दछौं ।

डा.भीमकान्त : तपाईंहरू आउनुभयो, यसमा म पनि खुशी छु। आत्मीयता रहिरहोस्, मनमुटाव नहोस्, तर्क-वितर्क भए पनि आत्मीयता रहिरहनुपर्छ। धन्यवाद !

# डा.द्रोणकुमार उपाध्यायका बारेमा दीपक कुमारसितको अन्तर्वार्ता



*अन्तर्वार्ताकार :* **खगिन्द्रा खुशी**

*अनुवाद :* **मुक्तिप्रसाद उपाध्याय**

यो अन्तर्वार्ता स्मृतिग्रन्थ प्रकाशनार्थ हामी द्रोण सरका अभिन्न मित्र दीपककुमार रायकहाँ गयौं । नेपाली भाषा बोल्न नजान्ने उहाँले बंगला भाषा, हिन्दी र अङ्ग्रेजी भाषामा अन्तर्वार्ता दिनुभयो । उहाँसँगको सो अन्तर्वार्तालाई नेपालीमा अनुवाद बहुआयामिक व्यक्तित्व मुक्तिप्रसाद उपाध्यायले गर्नुभयो । अन्तर्वार्ताको स्वरूप यस्तो थियो–

खगिन्द्रा- नमस्कार ! म खगिन्द्रा खुशी। डा.द्रोणकुमार उपाध्यायको स्मृतिग्रन्थका लागि तथ्य-सामग्री संकलन गर्दै जाँदा प्रकाशन समिति र सम्पादक मण्डलीका सदस्यहरू आज उत्तरबंगाल विश्वविद्यालय, सिलिगुडीमा राजगञ्ज विश्वविद्यालयका आर्टस, कमर्श र कानून फेकल्टीका डीन डा.दीपकुमार रायज्यूसित भेट गर्ने मौका पाएका छौं । उहाँसितको सम्पर्कमा रहेर द्रोण सरले भाषिक, सांस्कृतिक लगायत अन्य विविध विषयमा काम गर्नु भएकोले द्रोण सरकै सन्दर्भमा उहाँसँग केही कुराकानी–

खगिन्द्रा- नमस्कार सर ! हजुरले डा. द्रोणकुमारज्यूलाई कहिलेदेखि चिन्नुभएको हो ?

दीपक- उहाँसित मेरो सम्पर्क भएको झण्डै बीस वर्ष भयो । द्रोणकुमारजीसित

मिलेर हामीले लिंगुइस्टिक, सांस्कृतिक स्टडिजका साथै अनुवाद शिक्षणका धेरै कार्यहरूको थालनी गरिसकेका थियौं । उहाँ दक्षिण-पूर्वी एसियाका एक जना महत्वपूर्ण व्यक्तित्व हुनुहुन्छ । किनभने उहाँ नेपाली, अंग्रेजी, संस्कृत, हिन्दी, असमिया, बंगला, राजवंशी आदि उत्तर-पूर्व एसियासित सम्बन्धित धेरै भाषाका ज्ञाता हुनुहुन्थ्यो । उहाँ केवल नेपालीको मात्रै विद्वान हुनुहुन्नथ्यो । असमिया, बंगला, राजवंशी आदि भाषा-साहित्यका पनि उत्तिकै विद्वान हुनुहुन्थ्यो ।

द्रोणजी एक जना अचम्मको प्रतिभा भएको व्यक्तित्व हुनुहुन्थ्यो । उहाँ शिक्षा क्षेत्रको मात्रै नभएर अन्य विभिन्न क्षेत्रको जानकारी राख्ने गजबको प्रतिभा भएको मानिस हुनुहुन्थ्यो । नेपाल र भारतसितको भाषिक, साहित्यिक र सांस्कृतिक र मानवीय एकता विषयलाई लिएर सुमधुर सम्बन्ध कायम गराउन उहाँको महत्वपूर्ण भूमिका रहेको थियो । त्यस्ता ज्ञानी मानिस संसारमा अति नै विरलै पाइन्छन् । उहाँको अस्वस्थताको खबरले हामी सबै मित्रमण्डली मर्माहत भएका थियौं । उहाँको सुस्वास्थ्यका लागि हामी निरन्तर भगवानसित प्रार्थना गर्थ्यौं । उहाँ एक जना सफल र अनुभवी अनुवादक हुनुहुन्थ्यो । असमिया, बंगला, राजवंशी आदि भाषाबाट नेपालीमा अनि नेपालीबाट असमिया, बंगला, राजवंशी आदि भाषामा अति सजिलै उहाँले अनुवाद गर्नुहुन्थ्यो । उहाँले रवीन्द्रनाथ ठाकुरका कविता पनि नेपालीमा सुन्दर अनुवाद गर्नुभएको छ ।

असममा पनि हामीले सँगै धेरै काम गरेका थियौं । विभिन्न भाषाभाषी र मिश्रित संस्कृतिले परिपूर्ण विशाल असमको लोकसंस्कृतिमाथि उहाँले गरेको काम अभूतपूर्व मान्नुपर्छ । नलबारी केवल नलबारी होइन, बरपेटा अपर असम आदिका असमिया ज्ञानीजन मानिसले द्रोणकुमारको महत्वपूर्ण आवश्यकता रहेको कुरा राम्ररी बुझेका थिए । उहाँको मृत्युपछि हामीले त्यस्तो कुनै मानिस भेट्न सकेका छैनौं, जसले हाम्रो बीचमा अर्थात् भनौं नेपाल-भारतबीच द्रोणकुमारको जस्तो साँघुको काम गर्न सक्छ । केवल असम साहित्य सभा होइन; राजवंशी साहित्य सभा, बड़ो साहित्य सभा, राभा साहित्य सभा साथै हाम्रो उत्तर बंगालमा भएका विभिन्न भाषा-साहित्यले एकजना असल व्यक्ति गुमाएको छ । म पश्चिम बंगाल सरकारको राजवंशी भाषा अकादेमीसित सम्बन्धित छु । हामीले उहाँलाई राजवंशी भाषा साहित्यमाथि काम गर्न बोलाएका थियौं । त्यतिबेला उहाँले एउटा अति विशेष र गहकिलो कार्यपत्र पनि प्रस्तुत गर्नु भएको थियो । उहाँले राजवंशी भाषा-साहित्यमा निकै महत्वपूर्ण काम गर्नुभएको छ । नेपाली, असमिया,

बंगला, राजवंशी आदि भाषा-साहित्यमा उहाँले अपूर्व देन दिनुभएको छ। यसरी अन्तर्राष्ट्रिय रूपमा रहेको उहाँको व्यक्तित्व हाम्रा लागि अपूरणीय भएको छ। यस्तो मानिस फेरि हामीले शायदै पाउँछौं।

खगिन्द्रा- द्रोणकुमार उपाध्याय तपाईंहरूसित काँधमा काँध मिलाएर वा भनौं तपाईंहरू द्रोणकुमार उपाध्यायसित सँगै काम गर्नसक्ने योग्य हुनुहुन्छ भन्ने कहिलेदेखि र कसरी अनुभव गर्नुभयो ?

दीपक- अँ... असलमा के कुरा भने, हामीले जब असमियाबाट बंगला, बंगलाबाट असमिया वा भनौं नेपाली, असमिया, बंगला, राजवंशी आदि भाषामा एकअर्काका बहुमूल्य विभिन्न कृति अनुवाद गर्ने काम थालेका थियौं; त्यतिबेला हामीले उहाँको सोच र आईक्यू गजबको थियो भन्ने बुझेका थियौं। किनभने, क्रोनोलजिकल, मोर्फोलजिकल र एटिमोलजिकल एनालाइसिस गर्ने उहाँको क्षमता अपूर्व थियो। उहाँ अति नै गुणी र ज्ञानी लेखक र पाठक पनि हुनुहुन्थ्यो। भारतमा अनगन्ती भाषाभाषीका मानिस छन्। नेपाली, बंगला, राजवंशी, असमिया, धिमाल, हिन्दी आदि कति हो कति।

खगिन्द्रा- द्रोण सरसित रहँदा बस्दा, काम गर्दा तपाईंलाई कहिल्यै नेपाली सिक्नुपर्छ भन्ने लागेन ?

दीपक- मन त लागेको थियो। अलि-अलि बुझ्छु पनि। तर, खोइ नेपाली भाषा सिक्न मलाई त्यति जुरेन नै भन्नुपर्छ। जे होस्, द्रोणजी हाम्रो परिवारको सदस्य हुनुहुन्थ्यो भन्नुपर्छ। आज उहाँकी श्रीमती मीरा बाइदेउ (दिदी) ले मेरो घरमा पाइला छेकेर पुण्य बनाइदिनु भएको छ। उहाँलाई धेरै-धेरै धन्यवाद छ। भाषा र जातिको भिन्नताभन्दा धेरै माथिको थियो हाम्रो सम्बन्ध। उहाँको वियोगले हाम्रो मर्म धेरै दुःखेको छ। उहाँको दिवंगत आत्माले चिरशान्ति पाओस् भन्ने कामना गर्दछौं।

खगिन्द्रा- हामीले उहाँको स्मरणमा निकाल्न लागेको स्मृतिग्रन्थका बारेमा तपाईं के भन्नुहुन्छ ? त्यस पुस्तकमा के कस्ता विषयहरू समावेश गर्नु उचित होला ?

दीपक- उहाँको बारेमा निस्कन लागेको स्मृतिग्रन्थ एउटै भाषामा मात्रै सीमित नराखेर विशेषगरी विभिन्न भाषामा उहाँबारे लेखिएका सामग्री भए राम्रो होला भन्छु म। नेपाली सहित बंगला, असमिया, राजवंशी आदि विभिन्न भाषामा सो स्मृतिग्रन्थ निर्माण गर्न सके राम्रो हुने थियो। त्यसोहुँदा धेरै गहकिलो हुने थियो

अनि उहाँबारे सबै भाषाभाषीका मान्छेले पढ्न र जान्न सक्ने थिए ।

खगिन्द्रा- भारत र नेपाल बाहेक अन्य कुनै देशको भ्रमण गर्नुभएको छ ?

दीपक- गएको छु, भुटान । भुटानसित मेरो राम्रो सम्बन्ध छ । त्यहाँका उच्च शिक्षा विभागका डा. उपाध्याय साथै हाम्रा डा.द्रोण उपाध्याय दुबै मेरा आत्मीय मित्र हुन् । हामीले धेरैपल्ट साथमा काम गरेका छौं । शैक्षिक काम मात्रै होइन, अनुवाद र भाषिक कार्य आदिमा पनि धेरै सक्रिय भएर काम गरेका थियौं ।

खगिन्द्रा- द्रोण सरको जीवनबाट तपाईंले भाषा-साहित्यको क्षेत्रमा के कस्तो अनुभव लिनुभएको छ ?

दीपक- अति नै नजिकको सम्बन्धमा बाँधिएका थियौं । अर्थात्, नेपाल र भारतसित मात्रै होइन; भुटान, बंगलादेश, म्यानमार आदि दक्षिण-पूर्वी एसियाका विभिन्न संस्कृतिसित नै राम्रो सम्बन्ध रहेको थियो । एकपल्ट सिलिगुड़ी र जलपाइगुडीमा बहुभाषिक गोष्ठी भएको थियो । त्यस गोष्ठीमा डा. द्रोणकुमार उपाध्यायले एउटा अति नै उपयोगी सेमिनार पेपर प्रस्तुत गर्नुभएको थियो, जसबाट दक्षिण-पूर्वी एसियाको भाषा र संस्कृतिको राम्रो प्रतिफलन भएको थियो र त्यो महत्वपूर्ण बनेको थियो ।

खगिन्द्रा- तपाईंको जीवन यात्रामा विभिन्न भाषाको ज्ञान भएका द्रोण सर जस्तो व्यक्ति तपाईंलाई फेरि प्राप्त होला कि नहोला, के कस्तो विचार पोख्नु हुन्छ ?

दीपक- छैन, छैन । त्यस्तो व्यक्ति छैन । उहाँ नै एक जना हुनुहुन्थ्यो । उहाँजस्तो व्यक्ति अर्को छैन । नेपाल र भारतका विभिन्न भाषा र संस्कृतिबारे अध्ययन र ज्ञान राख्ने उहाँ बाहेक अर्को देखेको छुइन । यो कुरा हामी सबै साहित्यिक मित्रहरूले मात्रै होइन, हाम्रो परिवारले पनि अनुभव गरेको कुरा हो ।

खगिन्द्रा- के तपाईं द्रोण सरको घरमा पनि पुग्नुभएको छ ?

दीपक- किन नजानु ? गएको छु । उहाँको घरमा खाना खाएको छु, बसेको छु । उहाँको र मेरो घर अलग थिएन, एउटै थियो ।

खगिन्द्रा- धन्यवाद छ तपाईंलाई । हामीलाई यसरी तपाईंको महत्वपूर्ण समय दिनुभयो । द्रोण सर बारे धेरै जानकारीहरू खुलस्त पारिदिनुभयो ।

दीपक- यसरी मलाई सम्भिmएर आइदिनुभएकोमा धन्यवाद छ तपाईंहरूलाई पनि । विशेषगरी बाइदेउलाई ।

खगिन्द्रा- हवस् त, अहिलेलाई छुटौं, धन्यवाद !

दीपक- धन्यवाद । नमस्कार !

# डा.द्रोणकुमार उपाध्यायका बारेमा छविलाल उपाध्यायसँगको कुराकानी



द्रोण सरका बारेमा स्थलगत अनुसन्धान गर्ने क्रममा हामी सम्पादक परिवार असमको ढिकियाजुली पुग्यौं, जहाँ भाषा-साहित्यसँग खेल्दै जीवनका ८५ औं वर्ष बिताइरहनु भएका अग्रज स्रष्टा छविलाल उपाध्यायसँग भेट भयो। उहाँकै निवासमा पुगेर हामीले यसरी द्रोण सरका बारेमा बुझ्न खोज्यौं–

खगिन्द्रा खुशी- बुबा नमस्कार ! सुन्नुहुन्छ नि यतिको आवाज ?

छबिलाल उपाध्याय- नमस्कार, सुन्दछु अलि-अलि त, स्पष्ट चाहिं हुँदैन।

खगिन्द्रा खुशी- द्रोण सरलाई कहिलेदेखि चिन्नु हुन्छ ?

छविलाल उपाध्याय- द्रोणलाई सन् १९४४-४५ देखि म जान्दछु, बोकेको हो मैले सानामा।

खगिन्द्रा खुशी- सानामा कस्तो थियो उहाँको स्वभाव ?

छविलाल उपाध्याय- ठीकै हो हामी जस्तै, त्यस्तो चकचके पनि होइन । बालखकालमा जुन स्वभाव हुन्छ, त्यस्तै हो।

खगिन्द्रा खुशी- पढाइ कस्तो थियो द्रोण सरको ?

छविलाल उपाध्याय- पहिला-पहिला त मध्यम नै थियो, पछि-पछि चाहिं खारिँदै-खारिँदै तिखारिँदै गयो। उहाँ शान्त, शिष्ट नै हो प्रायः। आमा बिरामी

सधैंभरि, उहाँले बहुत कष्ट दुःख गरेर पढेको । ...त्यो बटियामारीको घरमा म पनि बसेको थिएँ, उहाँको हजुरबुबा गंगाधर । गंगाधरले बनाएको पाठशाला । त्यतिबेला मैले पनि वहीं बसेर पढेको हुँ, सन् सन्ताउन्नमा व्याकरणको परीक्षा दिएर म नेपालतिर पसें र उतै दुई-चार वर्ष हल्लिएँ । त्यसपछि आएर म कतातिर, केमा लागें, उहाँ पनि पढाइमा लाग्नुभयो । त्यही भएर उहाँको विवाहको कुरा चाहिं मलाई थाहा भएन ।

खगिन्द्रा खुशी- हजुरबादेखि ख्याति कमाएर बसेको ठाउँ छोडेर द्रोण सर किन नेपाल जानुभयो होला ? के भन्नुहुन्छ ?

छविलाल उपाध्याय- काठमाण्डौबाट पढाइ सकेर आएपछि मेची क्याम्पसमा जागिर मिल्यो, त्यही सिलसिलामा नै गएको हुनुपर्छ, अरु केही कारण हो जस्तो लाग्दैन । उहाँलाई उता जाँदा ठीक भयो कि यता ठीक हुन्थ्यो भन्ने आ-आफ्नो बुझाइ हो । भाग्यको कुरा पनि हो, कसैलाई कता ठीक हुन्छ, कसैलाई कता राम्रो हुन्छ । कर्ममा जे लेखिएको छ, त्यही हुन्छ ।

खगिन्द्रा खुशी- उहाँले भाषा र साहित्यमा दिएको योगदानलाई यता (असमतिर)को समाजले कसरी मूल्यांकन गरेको छ ?

छविलाल उपाध्याय- उहाँको भाषामा राम्रो दख्खल थियो । असमिया साहित्यमा, समाजमा पनि उहाँ पूजनीय हुनुहुन्छ । उहाँको अध्ययन र लिखत राम्रो छ । मेरा जति पनि कृतिहरू छन्, उहाँकहाँ पुगेका छन्, उहाँका पनि सबै कृतिहरू मसँग आएका छन् ।

खगिन्द्रा खुशी- उहाँका कृतिहरूमध्ये एकदम विशिष्ट श्रेणीको कृति भनेर चाहिं तपाईं कुन कृतिलाई मान्नु हुन्छ ?

छविलाल उपाध्याय- उहाँका सबै समीक्षात्मक छन् । पछाडि लेखेको एउटा राजवंशी भाषामा गवेषणा गरेर लेखेको उत्कृष्ट कृति हो । प्रायःजसो नेपाली लेखाइमा हिन्दी, फारसी समान रूपमा प्रयोग गरेर लेख्छन् । तर, उहाँले चाहिं मिसाउनु हुन्न; भाषामा शुद्धता ल्याउनुभएको छ,।

खगिन्द्रा खुशी- उहाँ नेपाल गएको यतिका वर्ष भयो । तर पनि उहाँलाई यता (असम) को समाजले उत्तिकै माया गरिरहेको छ । किन, के छ यसको कारण ?

छविलाल उपाध्याय- त्यो उहाँको विद्वताले हो । अर्को कुरा, समाजमा मिल्ने उहाँको गुणले पनि हो । म ठूलो हुँ भन्ने घमण्ड उहाँमा थिएन । सबै भाषाका सबैलाई आफ्नै दाजु-भाइ जत्तिकै मान्ने उहाँको साह्रै राम्रो बानी रह्यो ।

तपाईंहरूलाई चाहिं कस्तो लाग्छ कुन्नि !

खगिन्द्रा खुशी- हामीलाई जति लागेको छ, त्यो चाहिं अलि कम भयो कि भनेर तपाईंहरूसँग बुझ्न आएको नि (हाँस्दै) ।

छविलाल उपाध्याय- हाम्रो दुर्भाग्य हो, भाषा-साहित्यमा गहिरो अध्ययन, अनुसन्धान गर्नुभएका उहाँले यो अवस्थासम्म धेरै-धेरै गहिरामा पसेर धेरै-धेरै गवेषणात्मक लेखहरू लेखिसक्नुभएको थियो । उहाँको हठात् निधन हुन्छ भन्ने सोच्या पनि थिएन । उहाँ बडो सहृदयी मान्छे हुनुहुन्थ्यो । एकपल्ट यहाँ ससुराला आउँदाखेरि उहाँले सुन्नु भएछ- म बिरामी भएको । कुदेर यहाँ आउनुभयो । त्यतिबेला उहाँ पनि बिरामी नै हुनुहुँदो रहेछ । तर, मलाई भन्नु भएन । त्यतिबेला म बिरामी भएको देखेर आँखाबाट आँसु झारेर गएको मान्छे, एकैचोटि बित्यो अरे भनेर सुन्दाखेरि झसंगै भएँ । मैले त बिरामी भएको थाहै पाइन । मलाई साह्रै नै मान्ने मान्छे । उहाँ यदि बाँच्नुभएको भए नेपाली साहित्यिक गतिविधि निकै माथि पुग्ने थियो होला भन्ने म मान्दछु । सबै भाषा सिक्नमा उहाँ बहुत रुचि राख्ने, जहाँ बोलाए पनि पुग्ने । उहाँका यस्ता राम्रा गुणहरू हाम्रा नयाँ पुस्ताले अनुकरण गर्नुपर्छ ।

कृष्ण निराकार- आयामेली भाषा छ, लीला लेखन, झर्रो आन्दोलन भयो । यीमध्ये उहाँको लेखनशैली चाहिं कतातिर ढल्केको पाउनुभयो ?

छविलाल उपाध्याय- आयामेली र लीला लेखन मैले अध्ययन गरिन । इन्द्रबहादुर, धरावासीहरूले चलाए, के हो त्यो म जान्दिन । केलाई आयामेली भन्छ, केलाई लीला लेखन भन्छ- म जान्दिन । डायस्पोरा पनि केलाई भन्छन्, त्यो पनि म जान्दिन । यी भाषा आन्दोलनहरू लेख्नका लागि आवश्यक छैनन्, लेख्ने मान्छे लेखिरहने हो । विश्वभरिका भाषा नेपालीमा मिसाउँछन् । त्यो पनि गलत हो । त्यसो गर्दा नेपाली भाषा चाहिं कहाँ पुग्छ ? नेपाली भाषाको अस्तित्व रहन्छ ? आफ्ना शब्द छन् भने अर्कोको भर नपर्नु । मेरा लेखनमा पनि सकेसम्म मैले प्रयोग गरिरहेकै छु । बोलाइमा हठात् आइगएछ भने पनि लेखाइमा चाहिं आफ्नो भाषामा मात्रै लेख्नुपर्छ । महाकवि लक्ष्मीप्रसाद देवकोटाको भाषामा पनि शुद्धता छैन, कवि शिरोमणि लेखनाथ पौड्याल र राष्ट्रकवि माधवप्रसाद घिमिरेको भाषामा मात्रै शुद्धता छ ।

खगिन्द्रा खुशी- असमका साहित्यकारहरूको लेखाइ चाहिं कस्तो छ त ?

छविलाल उपाध्याय- असममा त झन् बर्बाद छ, यहाँ शुद्ध साहित्य लेखिएकै

छैन । तर, अहिले मभन्दा साना केही भाइ-बहिनीहरूले पनि यस कुरालाई अनुकरण गरिरहेका छन् । हामी त जन्मँदैखेरि गाईको दूध खाँदैनौं, सिक्नुपर्छ हामीहरूले । यहाँका असमियासँग नङ र मासुको सम्बन्ध छ । मातृभाषा नै भएको छ यो भाषा पनि । कक्षामा पढ्न पाइँदैन । एकैचोटि माथिल्लो तहमा गएर एउटा विषय नेपाली पढ्न पाइन्छ । त्यसो भएकोले पनि शुद्धता हुँदैन ।

खगिन्द्रा खुशी- सानो कक्षादेखि नै नेपाली विषय पढ्न पाउनु पर्छ भन्ने माग राख्नु भएन ?

छविलाल खतिवडा- धुमधाम भएको हो, नेपाली भाषा पढ्न पाउनु पर्छ भनेर डम्बरसिंह गुरुङ आएर यहाँ आवाज उठाएको हो । गोर्खा नेपाली भाषा पनि स्थापना गरिहेरे, भएन, चलेन । हामीले अनिवार्य असमिया पढ्नैपर्छ, उपाय छैन नभए । नोकरीको पनि कुरा आउँछ, त्यसैले असमिया नपढी त नोकरी पनि पाइएन, त्यसका लागि पनि असमिया पढ्नै पऱ्यो ।

देवीचरण भण्डारी- द्रोण सरको कस्तो खालको व्यक्तित्व थियो ?

छविलाल उपाध्याय- व्यक्तित्व त राम्रो थियो । तपाईंहरू नै छेउमा हुनुहुन्छ, तपाईंहरूलाई नै थाहा छ नि ।... तपाईंहरू जुन काम गर्दै हुनुहुन्छ, त्यो महान काम गर्दै हुनुहुन्छ । आजसम्म धेरै काम नै देखिए, तर यसरी अध्ययन गर्न आएका थिएनन् । तपाईंहरूले जे गर्नुभयो, राम्रो छ । अझै राम्रो होस् । धन्यवाद छ ।

कृष्ण निराकार- हामी द्रोण सरलाई स्मृतिग्रन्थ निकालेर जीवन्त राख्न खोजिरहेका छौं । यता असमतिर पनि भाषा-साहित्यमा उहाँको ठूलो योगदान छ, अब योभन्दा राम्रोगरी उहाँलाई जीवन्त राख्नका लागि के गर्दा असल हुन्छ ? सल्लाह दिनुस् न ।

छविलाल उपाध्याय- यो त समन्वयको साँघु जस्तो भयो । उहाँको यहाँको जन्म, उताको कर्म भयो । यस विषयमा समन्वय गर्न आउनु हुन्छ भन्ने लागेको छ ।

खगिन्द्रा खुशी- हुन्छ बुबा ! यो महत्वपूर्ण समय र महत्वपूर्ण विचारका लागि धन्यवाद दिंदै बिदा माग्छौं ।

छविलाल उपाध्याय- बहुत बहुत धन्यवाद, बोली सुन्न पाइयो, राम्रो लाग्यो । धन्यवाद !

# डा.द्रोणकुमार उपाध्यायका बारेमा विनोद खनालसँगको कुराकानी



डा.द्रोणकुमार उपाध्याय जन्मिएको माटोमा पुगेर, उहाँले माया गाँसेको माटोको सुगन्ध लिंदै, यही माटोमा बसेर असम मात्र नभएर समग्र नेपाली साहित्य, नाट्य कला क्षेत्रसँग मितेरी गाँस्दै, असमिया नेपाली साहित्य, कला र नाटकसँग खेल्नेहरूका लागि दह्रिलो आधार बन्न सफल, असम सरकारबाट कलाश्री उपाधि प्राप्त गर्न सफल, कलाकार पेन्सन प्राप्त गर्न सफल। आफ्नो पूर्ण जीवन नै साहित्य कला र नाट्य क्षेत्रमा समर्पित गर्न सफल व्यक्तित्व विनोद खनालसँग २०७७/१०/१६ गते, बिहान उहाँकै निवास असम बिहाली, बटियामारीमा डा.द्रोणकुमार उपाध्याय स्मृतिग्रन्थ प्रकाशन समितिबाट (प्रधान सम्पादक खगिन्द्रा खुशी, सम्पादकद्वय कृष्ण सुवेदी निराकार र देवीचरण भण्डारीले प्रकाशक परिवारका योगिता पौडेल भूर्तेल तथा किशोर पौडेलको सहयोगमा लिएको) डा.द्रोणकुमार उपाध्याय सम्बन्धित कुराकानी–

खुशी- स्वागत छ हजुरलाई।

विनोद खनाल- नमस्कार ! तपाईंहरू डा.द्रोणकुमार उपाध्याय उपाध्यायको स्मृतिग्रन्थ प्रकाशनका खातिर आउनुभएका यहाँहरू सबैमा म न्यानो स्वागत गर्छु।

खुशी- द्रोण सरसँग सम्बन्धित कुराकानी हुनेछ यो बसाइमा... डा.द्रोणकुमार उपाध्यायलाई कहिलेदेखि कसरी चिन्नुहुन्छ ?

विनोल खनाल- हजुर द्रोणकुमार उपाध्यायको परिवारलाई नचिन्ने हो भने असममा बस्ने कुनै पनि नेपाली अथवा गोर्खाको परिचय नै हुन्न। अत्यन्तै प्रतिष्ठित एउटा परिवार, जसले समाजमा साहित्य, संस्कृति, नाट्यकला सबै विधामा अतुलनीय योगदान छोडेको छ। उहाँको जुन परिवार थियो, गंगाधर उपाध्याय एक प्रतिष्ठित सामाजिक कार्यकर्तासँगै शिक्षाविद् । उहाँले यहाँ सांगवेद पाठशालाको स्थापना गर्नुभएको हो । लगभग एक सय पच्चीस वर्ष पुग्नै लागेको सर्वेश्वर देवालय पनि उहाँहरूले खोल्नुभएको हो । भगवानलाई कसरी सम्झिने ? कीर्तन कसरी गर्ने भनेर द्रोण सरका काइँला काका हरिप्रसाद उपाध्यायको नाममै हरिनाम संकीर्तन मण्डली अहिलेसम्म पनि चलिरहेको छ। यहाँको ज्यूँदो साक्षीको रूपमा सांगवेद पाठशाला छ भने यहाँको जुन नाट्यशाला छ, त्यो उत्तरपूर्वी भारतमै पहिलो नाटक भएको जगा हो। जहाँ चन्द्रोप्रबोद्धय १९१९ सन्‌मा भएको थियो, त्यो रंगमञ्चको रंगकर्मीका रूपमा पनि उहाँहरूको सम्पूर्ण परिवार नै हुनुहुन्थ्यो; सबै दाजुभाइ। अहिले पनि उहाँहरूको सक्रिय भूमिका रहेको छ। अनि त्यही उहाँको प्रेरणा पाएर, उहाँहरूकै सान्निध्य भेटेर एउटा रंगकर्मी, सांस्कृतिककर्मी, कला क्षेत्रमा र नाट्य क्षेत्रमा अहिले पनि रहिरहने म विनोद खनाल हुँ । (हार्दिकता सहित हात जोड्दै)

खुशी- त्यसबेला देखाइएका नाटकले एउटा मनोरञ्जन प्रदान गऱ्यो, त्यसका अलावा यो समाजलाई अगाडि बढाउन के कस्तो भूमिका खेले त्यसबेलाका नाटकहरूले ?

विनोद खनाल- योगदान त विशाल छ। मलाई उहाँले लगभग-लगभग पच्चीस तीस वटा त नाटकका पाण्डुलिपि देखाउनुभएको थियो, त्यसबेला मञ्चन गरिएका लिखित नाटकहरूको। शायद हाम्रो अरूतिर काहीं नभएको असम नेपाली नाट्य सम्मेलन छ, नेपालमा पनि यो खालको संस्था छैन होला। नेपाली नाट्य सम्मेलन नेपालमा छैन। तर हामीले यहाँ राखेका छौं, म त्यसको एक जना सक्रिय कर्मी हुँ, उपाध्यक्ष पनि हुँ। त्यसको अधिवेशनमा उहाँलाई यहाँ बोलाएका थियौं हामीले, उहाँ आउनुभएको थियो । त्यसबेला नै हामीलाई ती पुराना पाण्डुलिपि देखाउनुभएको थियो । उहाँका पिताजी टीकाराम उपाध्याय पनि एक जना रंगकर्मी हुनुहुन्थ्यो । नाटक लेखनमा साह्रै पारंगत हुनुहुन्थ्यो, पारदर्शी

हुनुहुन्थ्यो र उहाँहरूकै नेतृत्वमा नाटकहरू हुन्थे । नाटकहरू त्यहीं राखिन्थ्यो र फेरि निकालिन्थ्यो अनि दशैंको दुर्गाउत्सवमा, सरस्वती पूजा इत्यादिमा देखाइन्थ्यो ।

खुशी- अहिलेका सिनेमाहरू आइसकेपछि नेपालतिर चाहिँ नाटक मञ्चन गर्ने परम्परामा बाधा पुग्यो, अहिले केही नाट्य समूहहरू लागिरहेका भए पनि एकताका पूर्णतया हराएकै जस्तो भएको हो । तर, यहाँ चाहिँ निरन्तर रूपमा चलिरहेकै रहेछ । के कारणले यस्तो भयो ?

विनोद खनाल- कुरा यस्तो छ हेर्नुस् । नाटक भनेको प्रत्यक्ष रूपले कलाकारहरूसँग दर्शकहरूको सम्पर्क हुने विधा हो । अब सिनेमामा क्यामराको अगाडि नाटक गर्नुपर्ने हुन्छ, तर सशक्त माध्यम नाटकलाई मानिन्छ । 'काव्येसु नाटकम् रम्यम्' काव्यमा सर्वश्रेष्ठ मानिएको नाटक, नाटकलाई पञ्चम वेद पनि भनिन्छ । नाटक भनेको समाजमा भएको विकृति, विसंगतिहरूलाई प्रत्यक्ष रूपले छर्लंग दर्शाउन सक्ने एउटा माध्यम हो अनि असममा यहाँ एमेचर एउटा ग्रुप छ (जो पेशादारी ग्रुप होइन, व्यावसायिक रूपले गर्दैन; त्यसलाई एमेचर भनिन्छ) अनि पेशागत रूपमा गरिने घुमन्ते टोली, भ्राम्यमा नाट्य टोली यहाँ छ । जुन घुमन्ते नाट्य टोलीमा मैले लगभग पच्चीस वर्ष काम गरें । रंगकर्मी, नाट्यकर्मी, नाटककार, गीतिनाटक लेख्ने, नृत्य सिकाउने इत्यादि धेरै कार्यमा रहेकोले नाटकलाई यहाँ साह्रै रुचाउँछन् । यहाँ भावना हुनेगर्छ ।

महापुरुष श्रीमन्त शंकरदेवले पाँच सय वर्ष अगाडि नै भगवानका लीलाको कीर्तन भावनाको रूपले गर्नुहुन्थ्यो, त्यो अहिले पनि यहाँ गरिन्छ । यहाँ नाटकको करीब-करीब साठी वटाभन्दा बढी घुमन्ते टोली छन्, जसका आठ-दश ट्रक सामान छन् । हामीले लालीगुराँस भनेर खोलेका थियौं, जो नेपालमा पनि धेरै चल्यो । हामीले पाँच-छ ट्रक सामान र डेढ सय कलाकार लिएर गएर नारायणघाटसम्म प्रदर्शन गरेका हौं । त्यसबेला हामीलाई धेरै सहयोग गर्नुभएको हो- डा.द्रोणकुमार उपाध्याय दादाले । घरमा पनि लिएर जानुभएको हो । उहाँका भाइ किशोर उपाध्याय (किशोर पौडेलतिर संकेत गर्दै) त मसित छायाँ जस्तो भएर घुम्नुभएको थियो । म यो ठाउँमा आएको आठ वर्ष भयो, यहाँ आइकन पनि दादा मेरो घरमा तीन पटक आउनुभयो । शायदै यही गाउँका व्यक्तिहरू आइपुगेका छन्, तर उहाँ मलाई त्यति रुचाउनु हुन्थ्यो ।

अब फेरि द्रोणकुमार उपाध्यायसँगको प्रसंगमा जान्छु । द्रोणकुमार उपाध्याय मैले सानोमा देखेको एउटा शुद्ध सुडोल गोलो अनुहारको, गम्भीर व्यक्तित्व भएको

व्यक्ति हुनुहुन्थ्यो । जो उषा बहिनीको दाजु हुनुहुन्थ्यो । उषा मेरी साथी । त्यो पुरानो घर, अहिले जहाँ खाजा खाएर आउनुभयो, त्यही घर थियो उहाँहरूको । त्यहाँ हामी सानामा भाँडाकुटी खेल्थ्यौं । दादा पनि हामीले खेलेको ठाउँमा बीच-बीचमा आइरहनुहुन्थ्यो । पछि, उहाँहरूका पिता नोकरीको क्रममा उदालगुढी जानुभयो । पितासँगै उहाँहरू पनि जानुभयो । त्यही बेलाको सम्झनामा उहाँले पछि एउटा कविता लेख्नुभएको थियो 'मेरो प्यारो बेगटी' । त्यो कविता उहाँले लेखिसकेपछि सुन्दर तरिकाले मलाई सुनाउनुभएको थियो । त्यसको भावार्थ बहुत राम्रो थियो । हामीले एउटा पत्रिकामा प्रकाशित पनि गऱ्यौं ।

मलाई लाग्छ, म जतिसम्म जान्दछु असमको बटियामारी भेगको पहिलो डक्टर पनि डक्टर द्रोणकुमार उपाध्याय नै हो । विशेषगरी मेरो जीवनमा उहाँको ठूलो भूमिका छ। हामी अत्यन्तै गरीब परिवारबाट, सर्वहारा परिवारका थियौं- ब्रह्मपुत्रको चपेटामा परेको, गढलागि भएर सबै लगिसकेपछि। मेरा पिताजी पुरोहित हुनुहुन्थ्यो । दादाले भन्नुहुन्थ्यो- 'तेरो पितालाई पनि बोलाएर कहिलेकाहीं हाम्रो धार्मिक कार्यहरू सम्पन्न हुन्थ्यो ।' तेरी दिदी डल्ली (टीकामाया हो नाम) र म सँगै पढेको ।' त्यसो त उहाँले नेपाल जाँदा मलाई धेरै ठाउँका कार्यक्रमहरूमा सम्मान पनि दिलाउनुभएको थियो । एकचोटि म नेपाल गएको बेला आचार्य खेमराज केशवशरणजीको कार्यक्रममा थिएँ, बिर्तामोडमा । आचार्य खेमराज गुरुजी पनि यहीं जन्मिनुभएको हो गमिरीमा । यस ठाउँमा धेरै शिक्षित व्यक्तिहरू भएको हुनाले उहाँ धेरै आइरहनुहुन्थ्यो यहाँ । म मृदंग बजाउँथें, त्यतिबेला म ढोलक बजाइरहेको थिएँ, हठात् मेरो आँखा भक्तजन बसेठाउँमा पऱ्यो, देखें बीचमा द्रोणकुमार उपाध्याय सुनेर बसिरहनुभएको छ । उहाँ कथामा मग्न हुनुहुन्थ्यो । मतिर कति बेला हेर्नुहुन्छ भनेर प्रतीक्षामा थिएँ । एकचोटि हाम्रो आँखा जुध्यो । मैले परैबाट नमस्कार गरें । उहाँले प्रतिनमस्कार गर्नुभयो ।

त्यसपछि भेट्न आएर 'ए तँ पनि आएको रैछस्, मलाई खुशी लाग्यो । तँ त राम्रो बजाउँदो रहेछस् हौ, नाटक मात्र गर्छस् भन्थें, यता पनि पो रैछस् । भजन पनि सुनें' भन्दै खुशी हुनुभयो । त्यसवेला मैले 'दादा ! म पर्सी दिल्ली जाँदैछु' भनें । उहाँले 'अहो...मेरो एउटा काम छ, भोलि म आएर भेट्छु ल' भन्नुभयो र जानुभयो । भोलिपल्ट मलाई आएर भन्नुभयो- 'मैले यो फोटा ल्याएको छु, यो हाम्रो हजुरबाको फोटो, गंगाधर उपाध्यायको फोटो ।' भन्दै एउटा फोटो दिनुभयो । मैले के गर्नलाई भनेर सोधें । 'उहाँको शालिक बनाउन, तैंले दिल्लीमा

दिएर आइज, दिल्लीमा सकिनस् भने तैंले राजस्थानमा लगेर दिनू' भनेर मलाई केही रकम पनि दिनुभयो । मैले लिएर गएँ र उहाँ दिल्लीमा गीता मार्बल्स भन्ने एउटा ठूलो प्रतिष्ठान रहेछ, मार्बलको मूर्तिहरू बनाउने । त्यहाँनेरि मैले गंगाधर उपाध्यायका मूर्ति बनाउन दिएपछि बात मराइदिएँ । साइजहरूको कुरा सबै गर्नुभयो उहाँले र बनाइदिए । बनाएपछि लिन जाँदा पनि मलाई बोलाउनुभयो र 'लु हिंड जौं' भन्नुभयो । छ-सात महिनापछि हामी दुबै गयौं । त्यतिबेला ट्रेनमा मैले धेरै बात मारेको थिएँ उहाँसँग ।

उहाँ भन्नुहुन्थ्यो- 'मैले क, ख सिकेको स्कूल तेरो मावलको हजुरबा धनपति भण्डारीले बनाएको स्कूल हो ।' म गाई तहलाउन जान्थें, त्यसबेला मैले सुनेको थिएँ... 'धनपति भण्डारी र उहाँकी धर्मपत्नी स्कूलका भित्ताहरू माटोले लिप्दै भन्नुहुन्थ्यो "हामी त अशिक्षित भयौं, मेरा प्रजन्महरू शिक्षाले भरिपूर्ण हुन् भनेर यो अनुष्ठान बनाएको र लिपपोत गरेको" भनेर श्रीमतीलाई अर्ती-उपदेश दिने गरेको कुरा उहाँले मलाई भन्नु हुन्थ्यो । मैले सोधेको थिएँ- 'तपाईं हुँदा हाम्रो गाउँ कस्तो थियो ?' उहाँले मलाई भन्नुभयो- 'मेरो घरदेखि दक्षिण-पश्चिमपट्टिको कुनोतिर एउटा गाउँ थियो, त्यहाँ मेरा धेरै साथीहरू थिए, त्यो गाउँ कालक्रममा ब्रह्मपुत्रको गढा लागेर ब्रह्मपुत्रमा विलिन भयो, बेहाल भयो र ती साथीहरू बसाइँ सरेर विभिन्न स्थानमा गए ।'

द्रोण दादा साँच्चै नै धेरै मप्रति आकर्षित हुनुहुन्थ्यो, के कारण हो- म जान्दिन । शायद कला क्षेत्रमा म रहेकोले होला । एकचोटि म नेपाल गएको थिएँ, काठमाण्डौ जान भनेर । मेरो प्लेनको टिकट दादाले या किशोरले गरेको थियो । बुद्ध एयरबाट काठमाण्डौ जान भनेर एयरपोर्टमा पुगेको, एकाएक प्लेन क्यान्सेल भयो । सबै छक्क पऱ्यौं । त्यतिखेरबाटै प्रजातन्त्रको मुमेन्ट शुरु भएको थियो । हेर्दाहेर्दै आर्मी नै आर्मी भए र तपाईंहरू जानुहोस् भने । त्यतिबेला म दादाको घरमा दुई दिन बसें । झन् भन्दा झन् परिस्थिति बिग्रियो, म प्रोग्राममा जान सकिन ।

...दादा एक मेधावी हुनुहुन्थ्यो, र त मेची बहुमुखी क्यापसमा यहाँबाट गएर पनि जागिर पाउनुभयो । दादाको अर्को राम्रो काम भनेको राजवंशी भाषाको अनुसन्धानमूलक कृति प्रकाशन गर्नु हो । त्यो राजवंशीहरूको भााषाको लिपि र यहाँका असमियाहरूको लिपि एउटै लिपि हो । त्यही कारणले उहाँले त्यो पुस्तक लेख्नुभएको हो ।

एकचोटि म काठमाण्डौ जाँदै थिएँ, काँकरभिट्टा पुगेर म काठमाण्डौ गएको भनें। उहाँले 'किन गएको भन् न त' भन्नुभयो। मैले 'मलाई क्यामराको रहर लागेको छ, त्यही किन्न हिंडेको' भने। उहाँले हाँसेर भन्नुभयो- 'तँ किताब किन् न, किताब किनिस् भने ज्ञान बढ्छ' भन्नुभयो। त्यहाँदेखि गएर मैले काठमाण्डौमा भा.रु.चालीस हजारको किताब किनें र दादालाई वहींबाट फोन गरें, मैले पुस्तक किनें भनेर। उहाँ बहुत खुशी हुनुभयो। मसँग अहिले तीन-चार रुपैयाका पुस्तक नै होलान्, अठ्ठाइस् सय जति लोपोन्मुख लोकसंस्कृतिहरूको संग्रहालय छ। यो हेरेर उहाँले एकदम ठूलो कुरा हो यो, भन्नुहुन्थ्यो। सक्छस् भने यी सबै कुराको बारेमा एक-एक गर्दै लेख भन्नुहुन्थ्यो। त्यो चाहिं गर्न सकेको छुइन। त्यो संग्रहालयमा छ सय प्रजातिका अर्किट (सुनाखरी) जातका फूलहरू छन्। यस्ता काममा पनि हौसला दिइरहनु हुन्थ्यो।

कृष्ण निराकार- उहाँका विभिन्न पुस्तकहरू छन्। तीमध्ये उत्कृष्ट पुस्तकको नाम लिनुपर्दा कुन पुस्तकको नाम लिनुहुन्छ ?

विनोद खनाल- सबै उत्कृष्ट छन्, छान्न मिल्दैन। तर, एउटा कुरा चाहिं, उहाँ छन्द अत्यन्तै मन पराउनु हुन्थ्यो, बग्नु हुन्थ्यो छन्दमा। 'मेरो प्यारो बेगटी' लेख्नुभएको छ, त्यो साह्रै राम्रो छ।

देवीचरण - तपाईंले उहाँको लवाइ-खवाइ, रहनसहन, बानी व्यवहार सबै थाहा पाएको मान्छे हुनुहुन्छ, समग्रमा उहाँ कुन खालको मान्छे हुनुहुन्थ्यो ?

विनोद खनाल- अत्यन्तै सरल। दादा भन्नुहुन्थ्यो, 'जति धेरै मान-सम्मान पायो, त्यति धेरै सरल बन्नु पर्छ'। एकदमै सानोभन्दा सानो मान्छे भएर बाँच्नुपर्छ भन्नुहुन्थ्यो। साह्रै सहयोगी। एकपटक मैले एकजना गुवाहाटीका असमिया मूलका आँखाका बिरामी, जो नेपाली बोल्न जान्नु हुन्न, उहाँका धर्मपत्नीका दुई वटै आँखा बिग्रिएछन्। मैले उहाँलाई द्रोण दादाको साथमा नेपाल पठाइदिएँ। दादाले त्यसबेला साह्रै सहयोग गर्नु भएछ, ती आइमाईलाई देख्ने बनाएर पठाउनु भएछ। पछि दादा खसेपछि, पछि ती मान्छेहरूलाई मैले खबर गरें 'दादा बित्नुभयो' भनेर। उनीहरू दुई जना नै रुनुभयो र भन्नुभयो- 'त्यस्ता उपकारी व्यक्ति भेटिंदैन।'

एकपटक उहाँहरू यहाँ आउनुभएको थियो, भागवत् गर्न भन्दै (भावुक हुँदै), जतिबेला मेरो फूसको घर थियो। (आँसु पुछ्दै) त्यतिबेला (रुँदै) मेरो एकदमै अवस्था थिएन। त्यसबेला मैले भनें- (हिक्कहिक्क गर्दै) 'दादा तपाईंहरू मेरो घरमा गएर खाना खानुपर्छ'। दादाले 'हुन्छ नि, जान्छु' भन्नुभयो। कसरी के गर्छस्

भन्नुभयो । किशोरजी पनि हुनुहुन्थ्यो । ‘म गर्छु भनें, मैले व्यवस्था गरें । गएर सबै जनाले भूइँमै बसेर मेरो त्यस्तो सानो कुटीमा खाना खानुभयो । र, भन्नुभयो- ‘ मान्छेको मन ठूलो चाहिन्छ’ (आँसु पुछ्दै) एकछिन आँसु पुछ्दै मौन बसेपछि । उहाँहरूले ‘बटियामारीमा हामीलाई यस्तो सम्मान गर्ने तँ होस्’ भन्नुहुन्थ्यो । त्यो अवस्थामा मलाई देखेको उहाँहरूले दुनियाँमा मलाई यो अवस्थामा देख्दा कोही खुशी हुन्थ्यो भनें त्यो हो, द्रोणकुमार उपाध्याय ।

मैले मेरो कलाकारिताको बलले उहाँहरूको आशीर्वाद लिएँ । यतिको सफल भएँ । यश नाम कीर्ति पाएँ । मलाई उहाँका बारेमा लेख्ने कुरा गर्नुहुन्छ, तर कलमै चलेन मेरो । धेरै भावकु भएँ म । धेरै कुरा रहे भन्नलाई । उहाँ त मेरो जीवनको स्रष्टा, द्रष्टा सबै हुनुहुन्थ्यो । उहाँले मसँग भएका नाटकका पाण्डुलिपि तैंले राख भन्नुहुन्थ्यो । कुनै दिन ती पनि ल्याउने छु, ती त घरमा राखेर कसैले देख्नेछैनन् । त्यस संग्रहालयमा राख्न पाएँ भने विश्वले देख्नेछ । मलाई इच्छा छ, दादाको एउटा ठूलो फोटो पनि त्यहाँ राख्नेछु ।

खुशी- यति धेरै उहाँका पिता-पुर्खादेखिको छाप हुँदाहुँदै पनि यो माटोलाई छाडेर उहाँ किन नेपालतिर जानुभयो होला ?

विनोद खनाल- उहाँलाई एउटा फराकिलो जगा चाहिएको थियो, जसरी हरिभक्त कटुवाललाई फराकिलो ठाउँ चाहिएको थियो, जसरी अन्य स्रष्टाहरू जो ठाउँ खोज्दै नेपाल पस्नुभयो; त्यस्तै उहाँ पनि भाषा, साहित्यका लागि उहाँसँग भएको ज्ञान प्रयोग गर्ने फराकिलो ठाउँ खोज्दै नेपाल जानुभयो । जानुभयो, तर यहाँको माटोलाई माया मारेर होइन । यो माटोमा पनि उहाँको उत्तिकै माया रहिरह्यो । धेरै छन् यसरी यो माटोबाट गएका; तर उहाँ जसरी माटोलाई सम्झने अरू भएनन् । वसुधैव कुटुम्बकम्बाट सिञ्चित हुनुहुन्थ्यो । एकपटक मैले उहाँलाई एउटा कविता सुनाएँ । उहाँले धेरै मन पराएर स्याब्बास् भन्दै ढाडमा थप्थपाउनु भयो । त्यो गीत यस्तो थियो-

मान्छे हेर कहाँ पुग्यो छोइसक्यो जून  
भो भो नगाऊ अब पराईको गुन  
नुनको सोझो गर्दागर्दै धेरै बग्यो खुन (मादल बजाउँदै)  
ताम्रपत्र वीरचक्र लाग्नथाल्यो घुन

असम सिकिम दार्जिलिङ भाग्सु देहरादुन
सगरमाथा कञ्चनजंघा हाम्रो मुटु हुन्
मुटमुटु जोडे यहाँ माया जोडिन्छ
पाखुरामा पाखुरी जोडे चट्टान फोरिन्छ
तपाईं हामी मिल्यौं भने ढुंगो पनि सुन
भो भो ...
मान्छे हेर कहाँ पुग्यो ... ॥

खुशी- धन्यवाद छ। कुरैकरामा धेरै भावुक बनाउनुभयो, आँशु पनि झर्‍यो र अहिले आफैंले यति रमाइलो गीत गाएर हामीलाई रमाइलो पनि गराउनुभयो। अब कुराकानीको अन्तिम क्षणमा आइपुग्यौं। यो महत्वपूर्ण समयको लागि हार्दिक आभार व्यक्त गर्दछौं।

विनोद खनाल- धन्यवाद ! एकपटक द्रोण दादाले भन्नुहुन्थ्यो- 'तेरो मन फराकिलो छ, तेरो व्यवस्था अत्यन्तै राम्रो हुनेछ' भनेर। आज सबै कुरा राम्रो भएर आएको छ। धन्यवाद छ, यसरी मेरा आदरणीय द्रोणकुमार उपाध्याय सम्बन्धी खोज-अनुसन्धानका लागि आउनुभयो। सम्पादक र प्रकाशक परिवारमा हार्दिक धन्यवाद छ।

# डा.द्रोणकुमार उपाध्यायका बारेमा कुलप्रसाद शर्मासँगको कुराकानी



डा.द्रोणकुमार उपाध्याय स्मृतिग्रन्थको सम्पादक परिवारका हामी (खगिन्द्रा खुशी, देवीचरण भण्डारी, कृष्ण सुवेदी 'निराकार') द्रोण सरका बारेमा बुझ्न असमका विभिन्न भागहरूमा घुम्ने क्रममा ढिकियाजुलीमा बसोबास गर्नु हुने द्रोण सरका अभिन्न मित्र कुलप्रसाद शर्माका निवासमा पुग्यौं र उहाँसँग यसरी द्रोण सरसँग सम्बन्धित विभिन्न जिज्ञासाहरू राख्यौं-

खगिन्द्रा खुशी- नमस्कार !

कुलप्रसाद शर्मा- नमस्कार !

खगिन्द्रा खुशी- तपाईं द्रोण सरको कुन उमेरको साथी हुनुहुन्छ ?

कुलप्रसाद शर्मा - म त बाल्यकालदेखिकै उहाँको साथी हुँ । तर, कुरो के भयो भने उहाँको पढाइको सिलसिलामा चाहि. बी.ए.पास गरुञ्जेली मेरो भाइसँग भएको हो । परिवारसँग एकदमै राम्रो चिनजान । त्यस पछाडि के भयो भने सन् सत्तरीमा मैले बी.ए.पास गरें, एकहत्तरमा उहाँले पास गर्नुभयो अनि एकहत्तरमा हामी पढ्न भनेर यहाँबाट निस्क्यौं । तर, पढ्ने सिलसिला पहिले नै गएर मैले नेपालमा शिक्षा मन्त्रीसँग भेट गरी स्कलरशिपको व्यवस्था मिलाइसकेको थिएँ । त्यसपछि यहाँबाट म, द्रोणकुमार र सदानन्द खनाल गयौं । हामीभन्दा पहिला हरि गजुरेल पढ्दै हुनुहुन्थ्यो । तर, उहाँहरूले स्कलरशिपको व्यवस्था गराउन सक्नुभएको थिएन । मैले नै असमबाट जाने जति सबैलाई स्कलरशिपको व्यवस्था मिलाइदिएको । शिक्षा मन्त्री नरेन्द्र प्रधान हुनुहुन्थ्यो । पहिला उदालगुढीकै हुनुहुन्थ्यो उहाँ ।

खगिन्द्रा खुशी- कस्तो भयो उहाँसँगको बसाइ ?

कुलप्रसाद शर्मा- हामी एउटै होस्टलको एक नम्बर, दुई नम्बर कोठामा बस्थ्यौं । त्यस्तै सिलसिला भएर पछि मलाई चाहिं भी.सी.ले प्रिफेक्ट बनाउनुभयो । त्यसपछि मलाई तल अर्को ठूलो रूममा सिफ्ट गर्नुभयो । तर, हाम्रो सम्पर्क सिफ्ट भएन । हामी पढ्दै गयौं । हामी अप्ठ्यारोमा पनि पर्दै गयौं । हामी यता जम्मा दुई-तीन वटा किताब पढेर गएका बी.ए.मा । त्यहाँ त समुद्रमा पसेजस्तै भयो हामीलाई । कतिपय साथीहरूले त्यस्तै खालका कुराहरू गर्थे । तर, हामीले च्यालेन्जका रूपमा लियौं । हामी त्यहाँ पुगेको दुई-तीन महिनामा नै एउटा राम्रो खालको सम्बन्ध भयो, दामोदर शमशेर जंगबहादुर राणासँग । त्यसबेला उहाँ गृहमन्त्री हुनुहुन्थ्यो । हरेक दिन साँझ परेपछि उहाँसँग बसेर गफ नगरी नहुने भयो, भेट नहुँदा फोन गरिहाल्नु हुन्छ !

त्यसरी हामी पढ्दै गयौं, जब सेकेण्ड इयरमा पुग्यौं, उहाँले हामीलाई एउटा अफर दिनुभयो । 'तपाईंहरू नेपाल दर्शन गर्न चाहनुहुन्छ ?' भन्नुभयो । द्रोण र मलाई मात्रै । असार २८/२९ गते, कुन दिन थियो । हामीले उहाँलाई गएर भेट गर्‍यौं । उहाँले तपाईंहरूलाई के-के सुबिधा चाहिन्छ भनेर सोध्नुभयो । हामीले भन्यौं- 'अब हजुरले जे-जे सुविधा दिनुहुन्छ, त्यही नै चाहन्छौं, अब यत्रो अवसर दिनुभएको छ । अरु के सुविधा मागौं ?' त्यसपछि उहाँले हामी जाने ठाउँ जति छन्, त्यहाँका अञ्चलाधीशहरूका नाममा चिठी बनाइदिनु भयो । त्यसपछि हामी गयौं ।

जाँदा वर्षाद्को बेला परेकोले अलिकति अप्ठ्यारो पनि पर्‍यो । पछि पूर्वाञ्चल भ्रमण गर्दा कोशी नदीको छेउमा बाटो अप्ठ्यारो छ भनेर पनि संकेत त पाएका थियौं । माथिबाट लडेर यही कोठाजत्रो ढुंगो आयो । हामी दुई जना मात्रै यसरी (दुई वटा हात तल-माथि पारेर जोड्दै) गइरहेका छौं । मानो टुंगिएको छैन भने त कसै गरे पनि मान्छे मर्दैन नि ! त्यो ढुंगोले हामी उभिएकोदेखि चार हात बाटो छोडेर निस्कियो । अरू सबै बाटो लग्यो । तल कोशीमा झर्‍यो । हामी थर्थरी काम्दै बस्यौं । त्यहाँबाट जसैतसै पल्लापट्टि गएर बस पक्रिएर गयौं ।

हामी कहाँ-कहाँ जाने भनेर पहिला नै तोकिदिएको थियो । हामी त्यही ठाउँहरूमा गयौं । ती ठाउँहरूमा हाम्रो राम्ररी स्वागत पनि भयो । खाने, बस्नेको व्यवस्था काहीं हामीले आफ्नो खर्च गर्नु परेन । हामी घुम्दै-घुम्दै पोखरा पुग्यौं । त्यहाँका सबै ठाउँहरू उहाँहरूले नै देखाउनुभयो । त्यहाँका एस.पी., अञ्चलाधीशहरूकै गाडीमा हामीलाई घुमाए, त्योभन्दा सुबिधा पाउने ठाउँ नै छैन । लुम्बिनी पनि पुग्यौं । त्यसपछि चाहिं बाढी-पहिरोले गर्दा हामीले अरुतिर

जान पाएनौं । प्रशासनले पनि अब हामी सुरक्षा दिन सक्दैनौं भन्यो । त्यसपछि हामी रक्सौल आयौं । पन्ध्र दिनको बिदा थियो । त्यो समय त पूरा गर्नु पऱ्यो । त्यसपछि हामी असम आयौं । आएर घुमेका ठाउँहरूको सबै रिपोर्ट बनाएर फर्कियौं । पछि यता आएको पनि सबै खर्च पायौं ।

खुशी- त्यो घुमाइको प्रतिफल चाहिं के रह्यो ?

कुलप्रसाद शर्मा- हामीले संस्मरण लेख्यौं । के-के रह्यो रह्यो नि, आजको कुरा होइन, २०२८ सालको कुरा हो । त्यसपछि हाम्रो परीक्षा आयो । त्यहाँ त हामीलाई ठेस लागेको थियो, तिमीहरू असमदेखि आएका, के पढ्छौ र भनेका थिए । त्यही भएर हामीले लाइब्रेरी छाडेनौं । धेरै अध्ययन गऱ्यौं । हामी दुई जनामै प्रतिस्पर्धा भयो । अरु त कता गए-गए । परीक्षा आयो । परीक्षामा पैंतालीस नम्बरको प्रश्न लेख्दालेख्दै म फेन्ट भएर लडेंछु । त्यसपछि चूडामणि बन्धुले मलाई झ्याप्पै बोकेर लानु भएछ । ब्यूँझदा हस्पिटलमा थिएँ । ब्यूँझने बित्तिकै 'सर मेरो परीक्षा' भनें । सरले चिन्ता गर्नु पर्दैन भन्नुभयो । त्यति गरेर पनि पछि द्रोण फस्ट भयो, म सेकेण्ड भएँ ।

अर्को घटना छ । दामोदर शमशेर जबराले- 'आयोग लड्नु पर्दैन, उपसचिवको नोकरी म तपाईंहरूलाई दिन्छु' भने । तर, हामीले स्वीकार गर्न सकेनौं । हामीले नेपाली भाषा पढेर यतै आएर नेपाली भाषाको सेवा गर्नेछौं भनेर असमिया जनतालाई वचन दिएका छौं भनेर । बिदाइ लिएर गएको दिन पनि दामोदर शमशेर जबरालाई भेट्न भनेर गयौं । हामी जाँदा खाजासामल लिएर झण्डै एक किलोमिटर जति लामो लाइन लागेको थियो । हामी सरासर गएर 'भित्र जान्छौं' भनेर पालेलाई भन्यौं । उसले लाइनमा आउनु, यत्रो लाइन छ, उहाँलाई भेट्न मिल्दैन- भन्यो । हामीले अरु केही गर्नु पर्दैन, यी दुइटा नाम लगेर उहाँको टेबलमा राखिदिनु, भइहाल्छ भनेर नाम लेखेर पठायौं । उसले त्यो लग्यो र त्यत्रो लाइनमा उभिएका मान्छेहरूलाई छाडेर हामीलाई बोलाएर एक घण्टा दश मिनेट गफ गर्नुभयो । यता आउने सबै व्यवस्था मिलाइदिएर र 'तपाईंहरूलाई कुनै क्षेत्रमा असुविधा परेछ भने मलाई खबर गर्नु' पनि भन्नुभयो ।

एकपटक हामी भीमकान्त, सदानन्द, म, हरि गजुरेल र द्रोण माधवप्रसाद घिमिरेलाई भेट्न गयौं । त्यसबेला मैले उहाँलाई 'गुरु माटाको नेपाल (हत्केलाले सानो आकार बनाउँदै) यत्रो-यत्रो होला । तर, मुटुको नेपाल अत्यन्तै विशाल छ है' भनेको थिएँ । पछि, उहाँले त्यही शीर्षकमा एकदम लामो लेख लेख्नुभयो ।... द्रोणको सम्बन्ध यति गहिरो थियो नि, उसका आफन्त मेरा आफन्त, मेरा आफन्त

उसका आफन्त । आफ्नै दाजु-भाइ, दिदी-बहिनी जस्तो हुन्थ्यो । एकअर्काका दिदी-बहिनीसँग तिहारको टीका लगाउने गर्थ्यौं ।

नेपाल अधिराज्यभरिमा कसैले पनि बहत्तर सालको भूइँचालाको बारेमा काव्य लेखेको जस्तो लाग्दैन, तर मैले लेखेको थिएँ । त्यसको भूमिका द्रोणजीले लेखिदिनुभएको थियो । त्यो काव्य प्रज्ञा प्रतिष्ठानका कुलपति गंगाप्रसाद उप्रेतीले म एकेडेमीबाट छापिदिन्छु भनेर लानुभएको थियो । तर, छापिदिनु भएन । टीभी, समाचारमा हेरेको-सुनेको भरमा लेखेको हुँ । एक सय बीस पेज जतिको काव्य लेखें त्यो, तर उहाँले छापिदिनु भएन । म तपाईंहरूसित पनि यो अर्थमा अनुरोध गर्छु कि, मेरा अभिन्न मित्र द्रोणजीले मेरा लागि लेखिदिनुभएको अन्तिम भूमिका पनि थियो । हजुरहरूले गंगाजीलाई कन्भिन्स गराइदिन सक्नुभयो भने एकदम राम्रो हुनेछ । त्यसको पाण्डुलिपि पनि उहाँकै हातमा छ । गंगाजी पनि एकप्रकारका हाम्रा साथी नै हुनुहुन्छ ।

द्रोणजी बितेको सात दिनको दिन हामी (मिसेस् र म) उहाँको घरमा पुग्यौं । आँखाको अप्रेशन गरेको मान्छेले त्यहाँ बसेर पनि के पो गर्नु र ? प्रत्येक वर्ष म उता गएपिछे म त्यहाँ पुग्दथें । तर, त्यो बेला चाहिं अब... छातीमा ढुंगो राखेर गएको थिएँ । (छातीमा हात राख्दै, भक्कानो फोरेर रुँदै) यस्तो भयो ! ती भुराभुरी र आमालाई पनि हेर्न सकिन मैले । यति साह्रो मिलेको साथी आजसम्म मैले कसैलाई पनि बनाएको छैन..., हेर्नुहोस्, खपिनक्नुको एउटा दुःख परेको थियो । उहाँको निधनबाट घरकालाई त पीर पऱ्यो नै । तर, यहाँका अरु साहित्यकारहरूलाई मलाई जति पीर परेन, मलाई त्यति ठूलो पीर पऱ्यो ।

उहाँ बितेको अघिल्लो वर्ष फोनमा बात भयो, उहाँ काठमाण्डौ जाँदै हुनुहुन्थ्यो । म उहाँलाई भेट्न भनेर घरतिर आउँदै गर्दा 'म हिंडे काठमाण्डौतिर, फेरि भेटौंला' भन्नुभयो । तर, त्यो फेरि भेट्ने दिन कहिल्यै आएन ।

लेखनको सबैभन्दा राम्रो पाटो भनेको खोजमूलक साहित्य अत्यन्तै राम्रो पाटो हो । द्रोणजीलाई जीवन्त राख्नलाई जम्मै असमियाहरूको उत्तिकै महत्वपूर्ण भूमिका रहन्छ । अझ यस स्मृतिग्रन्थमा मेरो एउटा उच्च भूमिका हुनुपर्थ्यो । तर, मैले गर्न सकिन; त्यसको लागि म अत्यन्तै दुःखी छु । पहिल्यै मैले एउटा कथा लेखें । त्यो हेरेर यो भएन, यो भएन, भनेर सिकाउने मान्छे हो ऊ ।

खुशी- हुन्छ त गुरु ! आफ्ना आत्मीय मित्रका लागि यति समय दिनुभयो, विचारहरू राखिदिनुभयो । यसको लागि हार्दिक आभार व्यक्त गर्दछौं ।

कुलप्रसाद शर्मा- हुन्छ, तपाईंहरूलाई ्पनि धन्यवाद !

# डा. द्रोणकुमार उपाध्यायका भाइ रामकृष्ण उपाध्यायसँगको कुराकानी



डा.द्रोणकुमार उपाध्याय पौडेलको स्मृतिग्रन्थ प्रकाशन गर्ने क्रममा हामी सम्पादक परिवारका तीन जना प्रधान सम्पादक- खगिन्द्रा खुशी, सम्पादकद्वय कृष्ण सुवेदी निराकार र देवीचरण भण्डारी सहित प्रकाशक परिवारबाट- योगिता पौडेल भूर्तेल तथा किशोर पौडेल सहित २०७७/१०/१५ देखि १९ गतेसम्म भारत असमको विभिन्न स्थानको भ्रमण गर्‍यौं । सबैभन्दा पहिला २०७७/१०/१६ गतेका दिन हामी बिहाली, बटियामारीमा रहेका द्रोण सरका दुई भाइहरू रामचन्द्र तथा दुर्गा उपाध्यायका निवासमा पुग्यौं र उहाँहरूसँग अन्तर्वार्ताका माध्यमबाट द्रोण सरसँग सम्बन्धित विभिन्न कुराहरू जान्ने प्रयास गर्‍यौं । अन्तर्वार्तामा विशेषगरी भाइ रामचन्द्र उपाध्याय तथा भाइ दुर्गा उपाध्यायका छोरा (द्रोण सरका भतिज) कृष्ण पौडेल सहभागी हुनुहुन्थ्यो भने परिवारका सबै सदस्यहरू वरिपरि वसेर उहाँका कुराहरूलाई समर्थन गर्ने तथा सच्याउनेमा साथ दिइरहेका थिए । अन्तर्वार्ता क्रममा प्रश्न सोध्ने काम म खगिन्द्रा खुशीले गरे तापनि बीच-बीचमा सम्पादकद्वयले पनि प्रश्नहरू थप्दै जानुभयो । कुराकानी जस्ताको त्यस्तै –

खुशी- नमस्कार ! स्वागत छ तपाईंलाई ।

रामकृष्ण- नमस्कार ! म हाम्रो गंगाधर पौडेल परिवारको सात जना छोराहरूमध्ये जेठा छोराको जेठो छोरो हुँ । द्रोण दादा माहिला छोराको छोरो हुनुहुन्छ ।

खुशी- तपाईं जन्मेदेखि नै द्रोण सर सँगसँगै हुनुहुन्छ नि ?

रामकृष्ण- हामी सँगसँगै हुर्केका, वल्लो घर पल्लो घर भएर हामी खेलकुद, कुटापिटा, मारपिटा गर्ने, कुस्ती गर्ने, दौडिने गर्थ्यौं बचपनमा । डण्डी-बियो भन्थ्यौं, अहिलेको जमानाको क्रिकेट हो त्यो, खेल्थ्यौं । हाम्रो ब्रतबन्ध पनि यही जगामा एकै दिन सँगै भएको हो ।

खुशी- स्वभाव कस्तो थियो द्रोण सरको ?

रामकृष्ण- स्वभाव अत्यन्त राम्रो, राम्रो प्रवृत्तिको मान्छे हुनुहुन्थ्यो ।

कृष्ण निराकार- द्रोण सर कति वर्षको उमेरमा, कुन स्कूलमा प्रवेश गर्नुभयो ?

रामकृष्ण- हाम्रो दाजुको र मेरो सँगै नै स्कूलमा एड्मिशन भएको हो, रौमारी प्राथमिक विद्यालयमा । धेरै टाढा होइन, यही ठाउँमा थियो । सन् १९५६/५७ सालतिर, त्यसवेला हामी ६/७ वर्षका थियौं । त्यो समयमा खरबाँसबाट निर्मित थियो स्कूल, पछि हावापानीले लडाएको हुनाले आफ्नै बारीमा ल्याएर, अलि दिन ग्वालीमा पनि पढाएको मलाई सम्झना छ ।

त्यतिबेला द्रोण दाजुका बुबा-आमा अथवा मेरा काका-काकी जोरै सकुशल हुनुहुन्थ्यो ।

खुशी- अलिकति पहिलाको कुरा कोट्याउन खोजें, यहाँ तपाईंका पुर्खाहरू चाहिं कसरी र कहिले यस ठाउँमा आउनुभएको रहेछ ?

रामकृष्ण- नेपालको पूर्व भोजपुर दिङ्लाबाट आउनुभएको हो । हाम्री कुप्रीआमा पुण्यमाता पौडेलले हाम्रा हजुरबा गंगाधरलाई सात वर्षको उमेरमा यहाँ लिएर आउनुभएको । त्यसको ठूलो एउटा तात्पर्य छ । पुण्यमाताका श्रीमान् हाम्रा कुप्राबा तीर्थ यात्रा गर्न भनेर निक्लिएर दुई-चार वर्ष हराउनुभयो । साना-साना बालख केटाकेटी, गंगाधर पौडेल र उहाँकी दिदी पालनपोषण गर्दै बसेकी पुण्यमाता पौडेलले घरमा झगडा भएर आफ्ना बुढामान्छेलाई खोज्दै छोरा-छोरी सहित, काँशी वृन्दावन सबैतिर डुल्नुभयो । कसैले 'अरुणाचल प्रदेशको पर्शुराम अनि कामाक्षतिर जानुभएछ' भनिदिएछन् । त्यो बेला रेल सेवा पनि थिएन, सडकको सुबिधा पनि थिएन, जहाजबाट उहाँ आउनुभयो । आउँदा-आउँदै बिहाली आइपुगेपछि उहाँको पोको चोरी भएपछि बेखर्ची भएर बटियामारीमा एक

जना कालु भट्टराई नामका ब्यक्तिको घरमा आश्रय लिनुभएछ र त्यही घरमा भान्से बसेर आफ्ना छोरा-छोरी पाल्नुभएछ। अलि वर्ष पालेपछि छोरी ठूली भइन्। काशीनाथ खनाल नामका एक जना पण्डितले ती छोरीलाई विवाह गर्नुभएछ।

गंगाधर उपाध्याय चाहिं गाई चराउनु हुन्थ्यो। साधुहरूको वृन्दावन हरिद्वारबाट पर्शुराम जाँदा-आउँदाको आवागमन हुन्थ्यो। त्यही क्रममा एक दिन साधुहरू त्यहीं बस्नुभयो। गंगाधर पौडेल हाम्रो हजुरबासँग चिनापर्ची भयो। र, तिनै साधुहरूले बहक्याएर गंगाधर हजुरबालाई लिएर पर्शुराम जानुभएछ। पर्शुरामबाट फर्किएर सिधै काँशी गयातिर लिएर गएछन्। वहीं पाँच-सात वर्ष बसेपछि, संस्कृतको शिक्षा, वेद उपनिषद्हरू पढ्नुभयो र शास्त्री हुनुभयो। उहाँकी आमा यहाँ बिरामी हुनुभयो, सधैं यहाँ रुन थाल्नुभएछ। (...एकछिन  पछि) म आफैं भावुक हुँदैछु। (रुँदै...) सम्हालिंदै।

त्यसपछि उहाँले आश्रय लिएर बसेको भट्टराई बालाई अनुनयविनय गर्नु भएछ र भट्टराई बा नि बनारस, गयातिर गएर हाम्रा हजुरबालाई खोज्नु भएछ। बनारसमा धेरै साधुहरूका बीचमा उहाँलाई भेट्नु भएपछि उहाँका साथीभाइहरूलाई भनसुन गरेर, फकाएर, 'तेरो बिहे गरिदिन्छु' भनेर लिएर आउनु भएछ। यहाँ आएर केही समयपछि आमा बित्नुभयो। यहाँ आएर बिहे पनि गरेर पाँच-सात वर्ष कति बस्नुभयो। बसेर यहाँ यो (अगाडि देखाउँदै) शिव मन्दिर बनाउनुभयो, पाठशाला बनाउनुभयो। संस्कृत टोल स्थापना गरेर आफैं अध्यापन गर्न थाल्नुभयो।

खुशी- यहाँ यो (अगाडि देखाउँदै) मन्दिर उहाँले आजभन्दा एक सय वर्ष अगाडि स्थापना गर्नुभएको रहेछ। आजसम्म पनि निरन्तर चलिरहेको छ मन्दिर ? अनि स्थानीय सरकारले यसलाई कसरी हेरिरहेको छ ?

रामकृष्ण- यस क्षेत्रका बाहुन सम्प्रदायका मान्छेहरूको धर्मको धरोहर हो भनेर स्वीकृत प्राप्त, यसलाई एउटा कमिटीले सञ्चालन गर्छ। मन्दिरको नाममा पन्ध्र-सोह्र बिघा जग्गा छ, त्यसको उब्जनीबाट यहाँको पूजारीको भरथेग हुन्छ। अब यो मन्दिर स्थापना भएको एक सय उन्नाइस वर्षपछि असम सरकारले पनि यसलाई एउटा तीर्थस्थान भनेर मान्यता दिएर भारतीय रुपैयाँ दश लाख अनुदान दिएको छ। त्यो दश लाख अनुदान मलाई प्रेसिडेन्टका रूपमा लिएर कार्यान्वयन गर्न एउटा कमिटी बनाइएको छ। अब यसले काम गर्छ। यो रुपैयाँले पहिला त बाउन्ड्री वाल, यज्ञशाला, विवाह भवन तथा ट्वाइलेट बनाइन्छ। पुरानो संस्कृत घरलाई उन्नत गरेर त्यसलाई नै बनाउने भन्ने कुरा छ।

कृष्ण निराकार- यस मन्दिरमा द्रोण सरको चाहिं कस्तो योगदान थियो ?

रामकृष्ण- द्रोण उपाध्याय एम.बी..स्कूल पास गरेर यहाँबाट उदालगुडी जानुभयो ।

खुशी- के कारणले यो ठाउँ छाड्नुभयो त उहाँको परिवारले ?

रामकृष्ण- जीवन जीविकाको लागि नै हो, उहाँका बुबाहरू वहाँ जानुभएको । सन् १९७० देखि चाहिं यहाँबाट पूर्णतया बसाइँ जानुभयो । त्यसबेला उहाँले यसलाई प्रत्यक्ष केही गर्न नपाए पनि उहाँ यहाँ आएपिछे यो मन्दिरमा प्रणाम गर्ने, ढोग्ने गर्नुहुन्थ्यो ।

देवीचरण भण्डारी- तपाईंहरूको बाल्यकाल सँगसँगै बितेको रहेछ । राम्रा कुरा त सबैलाई थाहा हुन्छ, नराम्रो कुरा अलि घनिष्टलाई मात्र थाहा हुन्छ । के थिए उहाँका नराम्रा पक्षहरू ?

रामकृष्ण- हुन त अहिले बहत्तर वर्षको उमेरमा सबै कुरा सम्झिँदैन । तर, मैले जानेसम्म झगडाप्रति उहाँको दिलचस्पी थिएन । यसै चर्काचर्की भए पनि उहाँको मेलमिलापको गुण ठूलो थियो । अरुलाई बिझाउने, नराम्रो गर्ने बानीबाट उहाँ सदैव टाढा हुनुहुन्थ्यो ।

देवीचरण भण्डारी- पढाइमा उहाँको स्तर कस्तो थियो ?

रामकृष्ण- तेजस्वी हुनुहुन्थ्यो । उहाँको घरमा आफ्ना पिताजी नै शास्त्री हुनुहुन्थ्यो; वेद, लघु सिद्धान्त कौमुदी, गीता शास्त्रहरूका ज्ञाता हुनुहुन्थ्यो । घरको माहोल नै अध्ययनको थियो । त्यही भएर पनि उहाँको पढाइ अत्यन्त तेजिलो थियो ।

खुशी- बालापनमा सँगै पढेका दामलेहरू पनि द्रोण सर जस्ता विद्वान हुन सके कि सकेनन् ?

रामकृष्ण- दाताराम दुलाल, सीताराम शर्मा लुइँटेल, विष्णुलाल भँडारी, जानकीदेवी भँडारी, तुलसी भँडारी लगायत हुनुहुन्थ्यो । अभिभावक दायित्वशील हुनाले पनि उहाँलाई आफ्नो पढाइ पूरा गर्ने अवसर मिल्यो र यी साथीहरू भन्दा अगाडि नै हुनुभयो ।

खुशी- अघिको पाटो छुट्यो...गंगाधरको विवाहपछि चाहिं उहाँले यहाँ समाजमा के-के गर्नुभयो त ?

रामकृष्ण- त्यो समयमा संस्कृत मात्रै होइन, कुनै पनि शिक्षा प्राप्त गर्ने आधार नै थिएन । त्यसबेला उहाँले संस्कृत टोल खोल्नुभयो, पाठशाला, मन्दिर

खोल्नुभयो, आफैं अध्यापन गर्न थाल्नुभयो; सात-आठ वर्षपछि फेरि भाग्नुभयो । जहाजमा चढेर कलकत्ताबाट फेरि वृन्दावन जानुभयो । त्यसपछि फेरि भट्टराई बाले खोजेर भेट्नुभयो । अनि 'लौ जाऊँ, घरमा केटाकेटीहरू छन्' भन्दा 'जान्न' भन्नु भएछ । अनि 'किन जाँदैनस् ? भनेर सोध्दा 'भयो, बुढी काली छ अनि' भन्नु भएछ (वरिपरिका सबैको एकैसाथ हाँसो छुट्यो) । (हाँस्दै) अनि गोरी बिहे गरिदिन्छु भनेर फकाई फुस्लाई गर्दाखेरि उहाँ फुरुक्क परेर आउनु भएछ । (हाँस्दै) आएर अनि फेरि अनि अर्की विवाह गराइदिएपछि ढुक्कले बस्नुभयो । दुई गुणका सात भाइ छोरा, नौ-दश बहिनी जति छोरी, दुई घर पारेर उहाँको जीवन जीविका चल्यो । हामी काली पट्टिका हौं (हाँस्दै, किशोर पौडेलतिर देखाउँदै) किशोर चाहिं गोरीपट्टिका (सबै गलल हाँसियो) 'तर हाम्रो गोरी र कालीपट्टिका भन्ने, दुई गुण मात्रै होइन, दाजु-भाइका भन्ने कुरा पनि कहिल्यै छुट्टिएन । 'अर्को कुरा, अहिलेसम्म पनि हाम्रो आमापछिको भाउजू भनेर भाउजूको गोडा ढोग्ने चलन छ'- किशोर पौडेलले स्पष्टीकरण दिनुभयो । त्यसपछि यही समाजमा बसेर काम गर्दै, सबैको हाइ-हाइ भएर काम गर्दै जाँदा सन् १८३५ मा उहाँको दुरारोग्यले निधन भयो । हाम्रा काकाहरू, दाजु-भाइहरूमा धेरै नै दुरारोग्यले बित्नुभएको छ । द्रोण दाजु पनि यही रोगले जानुभयो । यो रोग त वंशगत जान्छ जस्तो लाग्न थाल्यो ।

खुशी- धन्यवाद ! द्रोण सर सम्बन्धी यी महत्वपूर्ण विविध जनाकारीका लागि हार्दिक आभार व्यक्त गर्दछौं ।

रामकृष्ण- हुन्छ, धन्यवाद !



देवीचरण भण्डारी

# डा. द्रोण पौडेल र हाम्रो असम यात्रा

वि.स. २०७७-१०-१५ गते। शहीद दिवसको अघिल्लो दिन। गणतान्त्रिक सरकारले माघ १६ गतेको शहीद दिवसमा दिइँदै आएको सार्वजनिक बिदा कटौती गरेकाले शहीद दिवस माघ १६ गते सार्वजनिक बिदा हुँदैन। थाहा छैन, शहीदप्रति मान गरेको हो वा अपमान। जे होस्, हामी यतिबेला ३-४ दिनको यात्रामा छौं। कृष्ण सुवेदी 'निराकार', किशोर पौडेल, योगिता पौडेल भूर्तेल, खगिन्द्रा खुशी र म छौं यात्रामा। साथमा पंकज भूर्तेल पनि हुनुहुन्छ। पंकज भूर्तेल नेपाल सरकारका उपसचिव। नाताले डा. द्रोणकुमार पौडेलका जेठा ज्वाइँ। हामीलाई काँकरभिट्टासम्म छोड्न आउनुभएको।

प्रसंग डा. द्रोणकुमार उपाध्याय पौडेलको स्मृतिग्रन्थको हो। उहाँको जन्मस्थान असममा बाल्यकाल बिताएको, शिक्षा-दीक्षा लिएको र उहाँका आफन्तहरू रहेको स्थान बिहाली, बटियामारी, उदालगुडी, तेजपुर, ढेकियाजुली हुँदै सोलङ लगायतका स्थानमा पुगेर उहाँका बारेमा विस्तृत सोधीखोजी गर्ने र अहिलेसम्म सार्वजनिक नभएका, हुन नसकेका विभिन्न पाटाहरूलाई स्मृतिग्रन्थमा लिपिबद्ध गर्ने एकमात्र उद्देश्य हो हाम्रो। बिहान ८ बजे चन्द्रगढीबाट शुरु हुन्छ हाम्रो यात्रा। ८:१५ बजेको थियो होला, म मेरै घर अगाडिबाट गाडी चढ्दा। पुहातुबारी नजिक पुगेपछि मैले काँकरभिट्टा निवासी प्राज्ञसभा सदस्य सुभद्रा अर्याललाई फोन गरें। उहाँसँग इण्डियन सिमकार्डको कुरा गरेको थिएँ। 'हुन्छ, मेरै सिमकार्ड लिएर जानु' भन्नुभएको थियो सुभद्राजीले। त्यसो त मैले एउटा सिमकार्डको व्यवस्था गरिसकेको थिएँ। तर पनि यात्रा दलका अरू साथीहरूलाई पनि आवश्यक पर्छ भन्ने ठानेर सुभद्राजीसँग अर्को सिमकार्ड मागेको थिएँ।

काँकरभिट्टास्थित मेची होटलमा पुगेर टिकट लियौं। डा. द्रोण पौडेलका भाइ किशोरजीले टिकटको व्यवस्थापन गर्नुभएको थियो र उहाँ हाम्रो यात्रा टोलीको पथप्रदर्शक र सहजकर्ता पनि; भद्र र शालीन व्यक्तित्व। निराकारजीले त्यहाँबाट फेरि सुभद्राजीलाई फोन गर्नुभयो। देवकोटा पार्कको गेटमा आउनु भनेकाले हामी सिटीरिक्सा चढेर त्यस तर्फ लाग्यौं। हातमा खादा बोकेर देवकोटा पार्ककै गेटमा



उभिनु भएको रहेछ सुभद्राजी । हामीलाई खादाद्वारा सम्मान गर्दै यात्रा सफलताको शुभकामना पनि दिनुभयो । हामीसँगै हामीलाई छोड्न उहाँ मेची पुलसम्मै जानुभयो ।

मेची पुलमा पुलको लम्बाई बराबरको मान्छेको लामो ताँती ! बिहानको ९:३० बजिसकेको छ । पारिपट्टि भारततिर जान भारतीय सीमा सुरक्षा बलको निगाहामा मात्र पाइने । कम सास्ती छैन नेपाली नागरिकलाई भारतीय नाकामा । सीमा सुरक्षा बलका भारतीय सुरक्षाकर्मीको हप्कीदप्की, अभद्र र अशोभनीय व्यवहारको जति वयान गरे पनि कमै हुन्छ । निरीह बनेर उनीहरूको आज्ञापालक हुनमा नै नेपाली नागरिकहरूको कल्याण छ । त्यसका लागि लाइनमा बसेर पालो पर्खनु बाहेक अर्को विकल्प पनि छैन । लाइनमा बसेर पालो पर्खने हो भने घटीमा डेढ घण्टा लाग्ने सम्भावना थियो । तर, सुभद्राजीको सहयोगले भारत तर्फको गेट खुल्नासाथ हामी छिर्‍यौं भारत तर्फ । हामीलाई बिदाइ गरेर सुभद्राजी फर्कनुभयो । सुभद्राजीको सद्भाव र सहयोग नपाएको भए शायद हाम्रो बस पनि छुट्थ्यो । कोरोनाको कहरले शुरुका दिनहरूमा भारत तर्फबाट नेपाल आउने र उता जाने नागरिकहरूका लागि निःशुल्क भोजन गराउने कार्यमा र उनीहरूको उद्धार कार्यमा प्रहरी प्रशासनसँग समन्वय गरेर महत्वपूर्ण भूमिका निभाएकै कारण सुभद्राजीप्रति वारिपारिकै सुरक्षाकर्मीले विश्वास गरेको हुनुपर्छ । जे भए पनि उहाँको यो साथ र सहयोगप्रति हामी आभारी छौं । सो सहयोगका लागि यात्रा दलका हामी पाँचै जनाका तर्फबाट सुभद्राजीलाई धेरै-धेरै धन्यवाद छ ।

असमका लागि सिलिगुडीबाट बस चढ्नु पर्ने थियो हामीले । पानीटंकीबाट ट्याक्सीले हामीलाई सिलिगुडी बसपार्क पुर्‍याउँदा ११ बजिसकेको थियो । पानीटंकीबाट ट्याक्सीमा गुडिरहँदा मैले भने मेरो देशको, मेरो गाउँ-घर र शहरको बाटाघाटाहरू सम्झिएँ । मुटु चसक्क भयो । किन मेरो देशमा यति सुन्दर बाटाघाटाहरू बन्दैनन् ? बनेका पनि किन साँघुरा र गुणस्तरहीन हुन्छन् ? यति सुन्दर देशमा जन्मिएका

हामी नेपाली, तर सधैंको गरीबी र पछौटेपनले किन कहिल्यै छोड्दैन ? मैले गर्व गर्न लायक, हामी नेपालीले गर्व गर्न लायक यो देशमा एउटा राजनेता पनि जन्मन नसकेकोमा आफैंलाई धिक्कार्न मन लाग्छ । केवल पद, प्रतिष्ठा, कुर्सी र व्यक्तिगत स्वार्थका लागि मात्रै शकुनी बनिरहने परिपाटीबाट कहिले मुक्त हुने हुन् मेरो देशका नेताहरू ?– यक्ष प्रश्न तेर्सिन्छ मेरो सामुन्ने । तर, नाजवाफ बन्छु म ।

प्रसंग फेरि यात्राकै । भोकले पेटमा मुसा कुदिरहेको थियो । बसपार्क यति फोहोर र दुर्गन्धित थियो कि खुट्टा राख्न पनि मनले मानिरहेको थिएन । हामीले बोकेका झोलाहरू पनि त्यहाँ राख्न घिन लाग्यो । झोला बोकेरै खाना खान होटलको खोजीमा लाग्यौं । शहरभित्र पनि गाउँ हुँदोरहेछ । बत्तीको मुनि अँध्यारो । हो, त्यस्तै भयो, त्यस्तै देखियो त्यहाँ । हुन त नेपालमा पनि ठाउँ-ठाउँमा कुना काप्चामा यस्ता ठाउँहरू होलान्, म नपुगेको र मैले नदेखेको पनि हुन सक्छ । तर, जहाँसम्म मलाई थाहा छ, कमसेकम आजसम्म यति साह्रो दुर्गन्धित र फोहोर स्थान चाहिं मैले देखेको थिएन र छैन पनि । खाना खानैपर्छ भन्ने मानसिकताले मात्र खाइयो त्यहाँको होटलमा । कृष्णजी र मैले मात्र खाना खायौं । बाँकी साथीहरूले चिया र घरबाटै ल्याएका खानेकुरा खानुभयो ।

दुई बजे मात्र बस गुड्यो त्यहाँबाट असमको लागि । ट्रेनमा जस्तै सुतेर जान मिल्ने स्लिपर सिट भएको बस रहेछ । बसको छतमा टन्न सामान लोड भएको । बसभित्र ६०-७० जना यात्री । त्यसभन्दा तल पनि सामानले भरिएको । नेपालमा मात्रै होला, यसरी बसको छतमाथि बसको ढाडै बांगिनेगरी सामान राख्ने चलन जस्तो लाग्थ्यो, हैन रहेछ । नेपालमा भन्दा पनि धेरै देखियो भारतमा । तर, राजमार्ग भने लोभलाग्दो । कतै चार लेनको, कतै छ लेनको भने कतै आठ लेनको हाइवे । बाटो राम्रो भएकाले दुर्घटनाको जोखिम न्यून हुने । नेपालका राजमार्ग र हाइवे जस्ता साँगुरा र खाल्डाखुल्डी हुने हो भने त शायद यात्रा जोखिमपूर्ण नै हुन्थ्यो होला । त्यहाँका राजमार्गहरूमा घटीमा पनि ७-८ इञ्चको मोटो पीच । लामो समयसम्म पीच नभत्किने गुणस्तरयुक्त सडक । खगिन्द्राजी र योगिता बहिनीको स्लिपर सिट भएकाले निकै सहज भयो उहाँहरूलाई बसभित्र रात बिताउन । म र निराकारजी एक ठाउँमा र किशोरजी भने एक्लै पर्नुभो । तर, किशोरजीसँगै अर्को सिटमा बसेको साथी भने उर्लाबारीतिरका मिलनसार रहेछन् । नेपाली नै भएकाले कुराकानी गर्न सहज भएछ । सञ्जीव श्रेष्ठ उनको नाम । मोबाइलमा नेट नचलेर हैरान भएको बेला उनै मित्रले नेट चल्ने बनाइदिएका थिए । मेरो मोबाइलबाट पर्सनल हटपटबाट तीन जनाको मोबाइलमा नेट कनेक्ट भएपछि भने हामीलाई अनलाइन सम्पर्क गर्न सहज भएको थियो ।

दुई बजे गुडेको बस एकैचोटि तीन घण्टापछि मात्र लघुशंकाका लागि रोकियो ।

त्यसपछि करीब सात बजेको थियो होला, खाना खानका लागि बस रोकियो । मलाई यस्तो लाग्यो, लामो दूरीमा चल्ने सवारीसाधन चलाउने बसका स्टाफहरूले पानी नै पिउँदा रहेनछन् । दुई-तीन घण्टासम्म पनि लघुशंका गर्न गाडी नरोक्नुले मलाई यस्तो सोच्न बाध्य बनायो । हामी नेपालीको त्यसमा पनि विशेष रूपमा झापालीको छिन-छिनमा चिया पिउने आदत । निराकाजीले बसको ड्राइभरलाई १० मिनेटको लागि चिया पिउन कतै राम्रो होटलमा रोकिदिन गरेको अनुरोध उसले ठाडै अस्वीकार गरिदियो । लामो दूरी भएकाले समय टाइट छ । यसरी चियाको लागि गाडी रोक्न सक्दिन । तपाईंलाई एक कप चियाको चिन्ता छ, मलाई भने बसभित्रका यात्रीलाई निर्दिष्ट समयभित्र गन्तव्यमा पुऱ्याउनु छ भनेर जवाफ दियो । मैले मनमनै विचार गरें, बस स्टाफले बिहान १०-११ बजेतिर खाना खाएका थिए होलान्, भोक लाग्ने बेला त भएकै हो, ती पनि मान्छे हुन्, भोक त तिनीहरूलाई पनि लाग्दो हो । तर, कामप्रतिको लगनशीलता र इमान्दारीले नै होला; निराकाजीको अनुरोध ड्राइभरले अस्वीकार गरेको । १५-२० मिनेटपछि हामी चढेको बस अघि बढ्यो ।

हाम्रो गन्तव्य थियो, डा. द्रोणकुमार उपाध्यायको जन्मघर बटियामारी पुग्ने । पहिले असम राज्यको दरङ जिल्ला, पछि शोणितपुर र हाल विश्नाथ जिल्लामा पर्दोरहेछ बटियामारी । बटियामारीको पुरानो नाउँ  बेगटी रहेको र बेगटीबाट बटियामारी भएको जानकारी प्राप्त भयो हामीलाई । बिहान ६:४५ बजेको थियो, हामी बसबाट उत्रँदा । हामी बसबाट उत्रिएको स्थानको नाम बेदिति रहेछ । त्यहाँबाट एउटा मारुती भ्यान लिएर हामी लाग्यौं बटियामारी तर्फ । बेदितिबाट हाम्रो गन्तव्यको दूरी ७ कि.मि. रहेछ । सो दूरी पार गरेपछि हामी पुग्यौं,  हाम्रो गन्तव्यस्थल । डा. द्रोणकुमार उपाध्याय जन्मी, हुर्की, बढी, पढेको घरमा । डा. द्रोणका भाइहरू (जेठाका सन्तान) रामकृष्ण र दुर्गाप्रसादको घरमा पुग्यौं हामी । दुबै जनाको घर सँगसँगै टाँसिएको भन्दा पनि हुने । हामीले दुर्गाजीको घरमा झोलाझ्याम्टा बिसायौं । हाम्रो आगमनको व्यग्र प्रतिक्षामा हुनु हुँदोरहेछ उहाँहरू । हामी आउने बाटातिरै उहाँहरूको अपलक नजर रहेछ । हामी पुग्नेबित्तिकै उहाँहरूको आँखामा एक किसिमको चमक र मुहारमा खुशीको आभाष सजिलै अनुभूत गऱ्यौं हामीले । नित्यकर्म र नुहाइधुवाई गरिसकेपछि हामीमा ताजगी अनुभव भयो । रातभरि बसको यात्राले थकित हाम्रो शरीरले केही आराम महसूस गऱ्यो । रामकृष्णजीको सुपुत्र गुवाहाटीमा जागिरको क्रममा जानुभएको रहेछ । दुर्गाजीको सुपुत्र कृष्ण भने घरैमा भएकाले भेट भयो र त्यहाँ रहुञ्जेल उहाँले हामीलाई ठूलो सहयोग गर्नुभयो । महाभारतको लडाइँमा भगवान श्रीकृष्णले अर्जुनलाई सहयोग गरेजस्तै । चिया-खाजा खाएर हामीलाई कृष्ण पौडेलले विनोद खनालको निवासतिर आफ्नै कारमा आफै ड्राइभ गर्दै लिएर जानुभयो । विनोद खनाल नाताले कृष्णजीको काका-ससुरा हुनु हुँदोरहेछ । उहाँ डा. द्रोणको साथी ।

डा. द्रोणलाई आदर्श मान्ने । विनोद खनालको नाम मैले कञ्चनजंघा एफ. एम. बिर्तामोड, झापाबाट प्रसारित कार्यक्रम ‘सिमाना पारि’ मा सुनेको हुँ जस्तो लाग्छ ,जुन कार्यक्रम प्रबन्ध-निर्देशक चन्द्र भण्डारीले सञ्चालन गर्ने गर्नुहुन्छ । आज प्रत्यक्ष भेट्ने अवसर मिलेको छ । निकै उत्सुक र खुशी पनि भएको छु म । विनोद खनालको बैठक कोठामा पुग्नेबित्तिकै मेरा नयनहरू कोठाको चारैतिर दौडिए । कोठाको भित्ता र खाट तथा टेबलहरूमा सजाएर राखेका सम्मान-पत्र, कदर-पत्र र उपहारका रूपमा प्राप्त भएका सामग्रीहरूले पनि हामीलाई स्वागत गरेझैं लाग्यो । र, अप्रत्यक्ष रूपमा समाजका लागि तिमीहरूले पनि असल कर्म गर्नु पर्छ है भनेर प्रेरित गरिरहे झैं लाग्यो । त्यसो त हाम्रो देशमा पनि अभिनन्दन-पत्र, सम्मान-पत्र, कदर-पत्र, प्रशंसा-पत्र तथा उपहार प्राप्त गर्ने व्यक्तित्वहरूको खाँचो छैन । त्यस्ता विशिष्ट व्यक्तित्वहरूप्रति मेरो सदैव आदर छ ।

विनोद खनाल एक नाट्यकर्मी । साहित्यिक स्रष्टा पनि हुनु हुँदोरहेछ । सेता दाह्री, हँसिलो मुहार, प्रभावशाली व्यक्तित्वका धनी । नाटककार, दर्जनौं नाटकमा निर्देशन गरिसकेका कुशल निर्देशक र सफल अभिनयकर्ता पनि । काठमाण्डौ लगायत नेपालका विभिन्न शहरहरूमा पनि उहाँद्वारा लिखित, निर्देशित र अभिनित नाटक मञ्चन भइसकेको जानकारी पायौं हामीले उहाँबाट । डा. द्रोण उपाध्यायका दाहिने हातको रूपमा रहनुभएको रहेछ, डा. द्रोण त्यहाँ रहँदासम्म । असम राज्यबाट कलाकर्मीको रूपमा पेन्सन प्राप्त गर्ने व्यक्तित्व । आफूले प्राप्त गरेका सम्मान-पत्रहरू र उपहारहरू घरमा व्यवस्थित र सुरक्षित हुन नसक्ने सम्भावना भएकाले आफैंले स्थापना गरेको संग्रहालयलाई हस्तान्तरण गर्ने जानकारी गराउनुभयो खनालले ।

डा. द्रोणकुमार उपाध्याय स्मृतिग्रन्थ प्रकाशन समितिकी प्रधान सम्पादक खगिन्द्रा खुशीले उहाँसँग अन्तर्वार्ता लिन शुरु गर्नुभयो । बीच-बीचमा निराकारजी र मैले पनि उहाँसँग डा. द्रोण पौडेलका बारेमा थप जिज्ञासा राख्यौं । उहाँ त डा. द्रोण उपाध्यायलाई सम्झिएर भक्कानिएर रून पो थाल्नुभयो ! हामीले उहाँलाई सम्झाउने कोशिश गर्‍यौं । तर, उहाँलाई सम्झाउन हम्मे-हम्मे नै पर्‍यो हामीलाई । वातावरण निकै भावुक बन्यो । हाम्रा आँखाबाट पनि थाहै नपाई आँसु झरिसकेका थिए । बल्ल-बल्ल सम्हालियौं हामी । डा.द्रोणका अरु दुई जना साथीहरू लेखनाथ गुरागाईं र सीताराम लुइँटेल पनि आइपुग्नुभो । हामीले उहाँहरूसँग पनि कुराकानी गर्‍यौं । त्यसै दिन विनोद खनाल नेपाल तर्फ जाने दिन परेकाले हतार-हतारमा उहाँसँग बिदा हुनु पर्‍यो हामीले । हिंड्ने बेलामा केही थान पुस्तक र उहाँप्रतिको सप्रेम उपहार लिएर फर्कियौं हामी ।

त्यसपछि फर्किएर दुर्गाप्रसादकै निवासमा आयौं हामी र बिहानको भोजन गर्‍यौं । भोजनपश्चात् दुर्गाप्रसाद र रामकृष्ण दुबै जनासँग कुराकानी गर्‍यौं । डा.द्रोणको

बाल्यकालका गतिविधि, आनीबानी, स्वभाव र व्यवहार आदिका बारेमा जिज्ञासा राख्यौं हामीले । उहाँहरू भक्कानिनु भयो । डा.द्रोणको अभावमा एक्लो भएको, अभिभावकविहीन भएको महसूस गरेको भन्दै आँखाभरि आँसु टिलपिल पारेर द्रवीभूत भएर उहाँहरू रुनु भयो । हामी पनि भावविह्वल भयौं । साँच्चै नै डा.द्रोणले पौडेल परिवारलाई वटबृक्ष भएर शीतल छहारी दिनुभएको रहेछ, ओत लाग्ने फराकिलो छानो बन्नुभएको रहेछ भन्ने कुराको अनुभूति भयो हामीलाई पनि । उहाँहरूसँग कुराकानी सकेपछि हामी डा.द्रोण जन्मिएकै स्थान, जहाँ अहिले चियाखेती थियो, तर्फ लिएर जानुभयो- अहिले घर भएको स्थानदेखि थोरै पश्चिम-दक्षिण । द्रोण पौडेल जन्मिएको स्थानको माटो अञ्जुलीमा उठाएर बोक्नुभयो, डा. द्रोणका भाइ दुर्गाप्रसादले । हामीले यो दृश्यलाई क्यामेरामा कैद गऱ्यौं, जुन स्थान हाल ब्रम्हपुत्र नदीको जोखिममा रहेछ ।

घरै छेउमा भएको १३० वर्ष पुरानो शिव मन्दिरको दर्शन गऱ्यौं र डा.द्रोण पौडेलकै पहल र सक्रियतामा निर्माण भएको उहाँका हजुरबुबा गंगाधर पौडेलको शालिक भएठाउँ पुग्यौं । गंगाधर पौडेलले नेपाली भाषा, साहित्य र सामाजिक रूपान्तरणमा महत्वपूर्ण योगदान गर्नुभएको रहेछ । बटियामारीमा उहाँप्रति ठूलो सम्मान र श्रद्धा रहेछ । हामीले श्रद्धाले शिर झुकायौं र पुष्पार्पण गऱ्यौं । त्यहाँबाट हामी डा.द्रोण पढेको नि.मा.वि.स्कूल (बेगटी एम.बी. स्कूल) गयौं । त्यहाँको परिवेश र स्कूलको भौतिक अवस्थाको बारेमा जानकारी लियौं । निराकारजीले त्यस स्कूलको चौकिदारलाई मासिक तलब-भत्ता कति हुन्छ भनेर सोध्नुभयो । ४० हजार रुपियाँ हुन्छ भनेको सुनेर निराकारजी त चकित पर्नु नै भयो, हामी पनि छक्कै पऱ्यौं ! कठै... हाम्रो देश र बिचरा हाम्रा देशका हामी जस्ता निरीह शिक्षक/कर्मचारी ! कहिले आउला त्यो दिन... जब शिक्षक, कर्मचारी, प्रहरी, नेपाली सेनाको मासिक पारिश्रमिकले सुविधाजनक ढंगले भरणपोषण हुन सक्छ । मासिक पारिश्रमिकले आधारभूत आवश्यकता पूरा नभएपछि भ्रष्टाचार बढ्नुलाई अनौठो नमाने पनि हुने भएको छ । यहाँ त शाखा अधिकृतको मासिक तलब स्केल केवल ३५,९९० छ ! कत्रो वैभिन्नय त ?

फेरि हामी त्यहाँबाट डा.द्रोण पढेको प्रा. वि.स्कूल (गौमारी प्रा.वि.) अवलोकन गर्न त्यस तर्फ लाग्यौं । डा.द्रोण बसेको डेस्क-बेञ्च अहिलेसम्म पनि सहीसलामत रहेछन् । त्यहाँ विद्यार्थीहरूलाई राज्यले निःशुल्क खाना र नास्ताको व्यवस्था गर्नुका साथै वर्षमा दुई जोडी पोशाक (शर्ट, प्यान्ट र स्वीटर) दिंदो रहेछ । स्कूलको अवलोकन सकेर हामी तिराप गौतमको निवासमा गयौं । त्यहाँ डा.द्रोणलाई नजिकैबाट चिन्नुहुने नाताले दिदी पर्नुहुने पुकुली दिदीसँग संक्षिप्त कुराकानी गऱ्यौं, द्रोण पौडेलका बारेमा केही नयाँ कुरा जान्ने उत्सुकता राख्यौं र केही जानकारी

पनि प्राप्त गऱ्यौं । हल्का चिया-खाजा खाएर पुकुली दिदीको घरसँगै जोडिएको नजिकका छिमेकी तुलसी निरौलाको आँगनमा गयौं । भेष्ट र हाफप्यान्ट पहिरनमा खुट्टामा चप्पल लगाएका, हँसिलो मुहार भएका, मानौं कुनै सिरियलमा अभिनय गर्न तम्तयार भएका जस्तो लाग्ने व्यक्तित्वका धनी तुलसी निरौला । हामीलाई उहाँको करेसाबारी देखाउनुभयो । ग्याँठकोभी, फूलकोभी, बन्दाकोभी टनाटन लगाउनुभएको रहेछ । ग्याँठकोभी चिनाउँदै उहाँले एउटा ग्याँठकोभी काटेर तासतुस पारेर एक-एक टुक्रा खान दिनुभो । निकै स्वादिलो र मीठो लाग्यो काँचै पनि ! पान तामुल पनि खान दिनुभो । असममा पान तामुलले स्वागत गर्ने त चलन नै रहेछ । चियालाई चा भन्ने गरिंदो रहेछ । उहाँलाई धन्यवाद ज्ञापन गरेर हामी त्यहाँबाट नजिकै ब्रम्हपुत्र नदीको दृश्य हेर्न त्यस तर्फ लाग्यौं ।

झमक्कै साँझ परेर आफ्नो-विरानो नचिनिने भइसकेको थियो । गुवाहाटीतिरबाट ब्रम्हपुत्र नदी आएको रहेछ । शायद सन् १९६२-६३ ताका ब्रम्हपुत्रको बाढी पसेर त्यहाँको ठूलो बस्ती नै बगाएर उठिबास लगाएको भन्ने जानकारी प्राप्त भयो हामीलाई । ब्रम्हपुत्र नदीकै डरले त्यस आसपासमा छत ढलान गरेको र दुई तले घर निर्माण गर्दा रहेनछन् । टिनको छानो र एकतले घर मात्र देखियो त्यहाँ । हामीले नजिकैबाट ब्रम्हपुत्र नदीलाई हेर्न र पानी छुन भने सकेनौं । लगभग एक किलोमिटर टाढा थियो नदी । बगरको डिलमाथिबाट मात्र नियाल्यौं र फर्कियौं घर तर्फ ।

भोलिपल्ट बिहान ५:४५ बजे हामी सोलङ तर्फ लाग्यौं । हामीलाई कृष्ण भाइले आफ्नै गाडीमा बस चढ्ने स्थानसम्म पुऱ्याइदिनु भयो । मिसन चाराली भन्ने स्थानबाट करीब ५ कि.मि. दक्षिण सोलङ भन्ने स्थानमा डा.द्रोण पौडेलको ससुराली घर अर्थात् उहाँकी जीवनसंगिनी मीरा खनाल पौडेलको माइतीघर । मिसन चारालीमा हामीलाई लिन मीरा दिदीका बहिनी र ज्वाइँ दुबै जना आफ्नै गाडी लिएर आउनुभएको थियो । हामी पाँचै जना त्यो गाडीमा नअटने भएकाले योगिता बहिनी र मीरा दिदीकी बहिनी (सानिमा र छोरी) अटोरिक्सामा चढ्नुभयो । ३.४ कि.मि. लामो ब्रम्हपुत्र नदीको पुल पार गर्दै हामी अघि बढ्यौं । पुलको बीच भागमा पुगेपछि हामीले फोटो खिच्ने इच्छा गऱ्यौं । योगिताका सानो बुबा हिमराज सापकोटाले गाडी रोकिदिनु भयो । पुलमा सवारीसाधन रोक्न नपाइने नियम रहेछ । हामीले कत्ति पनि ढिला नगरी एक-दुई स्नेप फोटो खिच्यौं र हतार-हतार गाडीमा चढ्यौं । मीरा दिदीको माइत पुग्दा बिहानको १० बजिसकेको थियो । अगाडि नै सूचना भएकाले हाम्रा लागि खाना बनिसकेको थियो ।

हामीले त्यहाँ मीरा दिदीका भाइ (थानेश्वर खनाल 'राजा'), बुहारी दीपादेवी र त्यस क्षेत्रमा समाजसेवीको रूपमा चिनिनुभएकी पूर्वमन्त्री नेपाली कांग्रेसका नेता योगप्रसाद आचार्यकी भतिजी विद्यादेवी घिमिरेसँग पनि डा.द्रोणका बारेमा सोधीखोजी

गऱ्यौं । स्मृतिग्रन्थकी प्रधान सम्पादक खगिन्द्रा खुशी, सदस्य निराकारजी र मैले द्रोण पौडेलका बारेमा विभिन्न कोणबाट जिज्ञासा राख्यौं । साँच्चै भावुक र गम्भीर अवस्थाको सिर्जना भयो । त्यहाँ मात्र हैन, हामी जहाँ-जहाँ गयौं र जस-जसलाई डा.द्रोणका बारेमा सोध्यौं, जो पनि नरोएको र भावुक नबनेको अवस्था रहेन । स्वाभाविक रूपमा हामी पनि भावुक हुन्थ्यौं र हाम्रा नयनहरू पनि रसाएका हुन्थे । खाना खाएर हामी उदालगुडीतिर लाग्यौं । त्यतिबेला भने हामीसँग दुई वटा गाडी थिए । उदालगुडीबाट कमलचन्द सापकोटा पनि गाडी लिएर आउनुभएको थियो ।

हामी उदालगुडी पुग्नु अघि सिधै बन्दरगुडी तर्फ लाग्यौं । जहाँ कमलचन्द्रकी आमालाई भेटेर सश्रद्धा शिर झुकाएर आशीर्वाद माग्यौं । उहाँसँग पनि डा.द्रोणका बारेमा केही कुरा सोध्यौं । 'मैले सानामा खेलाएको, बोकेको र हुर्काएको हो द्रोणलाई । साह्रै असल मान्छे थियो । मलाई असाध्यै माया गर्थ्यो । अब कहिल्यै नआउनेगरी गएछ' भन्दै रुन थाल्नुभयो । उहाँ रुनु भएपछि हामीलाई पनि सम्हालिन निक्कै मुश्किल पऱ्यो । भिडियो खिच्तै गर्नुभएकी योगिता बहिनी मोबाइल अरुलाई दिएर बाहिर निस्कनुभयो, रुँदै । बल्लतल्ल सम्हालिएर कुरा गर्न थाल्नुभयो आमा । त्यहाँ पनि चिया-खाजा खाएर निस्कियौं र लाग्यौं- उदालगुडी तर्फ । उदालगुडीमा हामी द्रोण पौडेलले कक्षा- ७ देखि १० सम्म पढेको उदालगुडी हायर सेकेण्डरी स्कूल पुग्यौं । स्कूलका प्रिन्सिपल तथा साहित्यकार पुष्पधर शर्मासँग स्कूलमै अन्तर्वार्ता लियौं । स्कूलको पनि अवलोकनपछि हामी डा.द्रोणका मामा तारापति उपाध्यायको निवासमा पुग्यौं । उहाँसँग पनि केहीबेर डा.द्रोणका बारेमा कुराकानी भए । उहाँको निवासमा रहेको पुस्तकालय कक्ष पनि अवलोकन गऱ्यौं । त्यहाँ प्रायः प्रत्येक प्राज्ञ व्यक्तिको घरमा छुट्टै पुस्तकालय कोठा र मनग्गे पुस्तकहरू । शायद त्यताको विशेषता नै होला भन्ने ठान्यौं हामीले ।

त्यहाँबाट हामी द्रोण पौडेल पढ्न बस्ताको घर हेर्न गयौं । उहाँ बसेको कोठा हेऱ्यौं । अहिले पनि उक्त कोठो खासै परिवर्तन नभएको जानकारी दिनुभो हामीलाई पुष्पधर शर्माले । त्यसपछि भने हामी पुष्पधर ज्यूकै घर तर्फ लाग्यौं । उहाँका वयोबृद्ध पिताजी कान निकै कम सुन्ने, तर मजाले कुरा गर्ने । उहासँग पनि डा.द्रोणका बारेमा कुराकानी गऱ्यौं । उहाँ एकपल्ट हराउनु भएको रहेछ, पछि द्रोण पौडेलले नै भेटेर ल्याउनुभएको प्रसंग पनि आयो त्यहाँ ! त्यसपछि हामी रेवतीरमण सापकोटाको निवास पुग्यौं । उहाँसँग मेरो सामाजिक सञ्जाल फेसबूकमा मात्र भेट भएको हो, प्रत्यक्ष भेट हुने अवसर मिल्यो हामी दुबैलाई । त्यहाँ केहीबेरको बसाइमा चिया-नास्ता खाएर असमी जातिका माणिकचन्द्र शर्मा (डा.द्रोणसँगै स्कूलमा पढाउने सहकर्मी शिक्षक)को घर पुगेर उहाँसँग अन्तर्वार्ता लियौं । खुशीजीले नेपालीमा सोधेको प्रश्नको उत्तर असमी भाषामा दिनुभयो, माणिकजीले । त्यहाँ दोभाषेको

भूमिका पुष्पधर शर्माले निर्वाह गरिदिनुभयो । अब भने हामी हाम्रो वासस्थान हिमसागरं-विद्यादेवी सापकोटाको निवासमा आइपुग्यौं । बेलुकाको खानपिन पश्चात् विश्राम गऱ्यौं । हामी भोलिपल्ट अर्थात् १८ गते बिहान चन्द्रप्रसाद उपाध्याय रेग्मीको घरमा गयौं । डा.द्रोण मास्टर पढ्दाका सहपाठी कुलप्रसाद शर्मा सेढाईंलाई भेट्न उहाँको निवास पनि पुग्यौं । उहाँसँग लामै कुराकानी भए । बृहस्पति उपाध्याय शर्मासँग पनि भेट्ने हाम्रो उत्कट इच्छा चाहिं उहाँ घरमा नभएकाले अधुरै रह्यो । त्यहाँबाट हामी छविलाल खतिवडाको निवास पुग्यौं । उहाँसँग मेरो सम्पर्क फेसबूकमा मात्र भएको हो, तर उहाँले मलाई देख्नेबित्तिकै 'देवीचरण भण्डारी हैन ?' भनी सोध्नुभयो । निराकारजीको त घरमै पुग्नुभएको रहेछ उहाँ २-४ वर्ष अघि । उहाँसँग पनि द्रोण सरको बारेमा कुराकानी भए । खगिन्द्रा खुशीले कञ्चनजंघा एफ.एम.का लागि अन्तर्वार्ता पनि लिनुभएको रहेछ । छविलाल खतिवडाले हामी पाँचै जनालाई उहाँले लेखेका कृति 'पढिदिनुहोला है' भन्दै उपहार दिनुभयो । असमको गमछा समेत हामीलाई ओढाइदिनु भयो । र, डा.द्रोणका बारेमा खोज-अनुसन्धान गर्न गएका हामी सम्पादकमण्डलको कार्यक्रम पनि त्यहीं समाप्त भयो ।

अझै पनि त्यहाँका धेरै व्यक्तित्वहरूसँग चाहँदाचाहँदै पनि हामीले भेट गर्न सकेनौं र उहाँहरूका विचार लिन सकेनौं । यद्यपि हामीलाई निकै असहज लागिरहेको छ । समयाभावले गर्दा बाध्य थियौं हामी । हामी असममा जहाँ र ज-जसको घरमा पुग्यौं, त्यहाँ-त्यहाँ न्यानो माया र आतिथ्य पायौं । तत्पश्चात् हामी २०७७-१०-१८ गते नेपाल तर्फ फर्किन उदालगुडीबाट २:३० बजेको बस चढेर १९ गते बिहान सिलिगुडी आइपुग्यौं । त्यहाँबाट ट्याक्सी चढेर पानीटंकी आयौं । यसपटक पानीटंकीमा भने हामीलाई निकै सहज भयो नेपाल आउन ।

वास्तवमा डा.द्रोणकुमार पौडेलको व्यक्तित्व के रहेछ, उहाँले असममा कस्तो योगदान गर्नुभएको रहेछ भन्ने कुरा असमका विभिन्न स्थानमा हामीले भेटेका र कुराकानी गरेका घरगृहस्थदेखि विशिष्ट विद्वान व्यक्तित्वहरूको भनाइ र मूल्यांकन गराइबाट थाहा भयो । नेपाली, असमी, अंग्रेजी, हिन्दी, संस्कृत, बंगला र राजवंशी भाषाका ज्ञाता डा.द्रोण दक्षिण-पूर्वी एसियाकै प्रखर व्यक्तित्व हुनु हुँदोरहेछ भन्दा अतिशयोक्ति हुँदैन । यस्ता विद्वान व्यक्तित्वको खोजी गर्न हामी सम्पादकमण्डललाई विश्वास गरी अभिभारा सुम्पने पौडेल परिवारलाई सम्पादकमण्डलको तर्फबाट धन्यवाद छ ।

*डा.द्रोणकुमार उपाध्यायको स्मृतिग्रन्थ प्रकाशन गर्ने क्रममा सम्पादक मण्डलका सदस्यहरुमध्ये प्रधान सम्पादक खगिन्द्रा खुसी, सम्पादकद्वय कृष्ण सुवेदी ‘निराकार’ र देवीचरण भण्डारीका साथै प्रकाशन समितिको तर्फबाट किशोर पौडेल, योगिता भुर्तेलसहितको समूह स्थलगत अध्ययन र भ्रमणको क्रममा डा.द्रोणकुमार उपाध्यायको बाल्यकालको पृष्ठभूमि खोतल्ने सिलसिलामा मिति २०७७ माघ १५ देखि १९ गतेसम्मको भ्रमणका क्रममा विभिन्न महानुभावहरुबाट प्राप्त विचारहरुको सार संक्षेप जस्ताको तस्तै प्रस्तुत गर्ने जमर्को गरिएको छ ।*

## १

“असम आउँदा द्रोण दाजु सबभन्दा पहिले मलाई नै भेट्नु हुन्थ्यो । दाजुलाई ढोगेपछि हामी दुःख-सुखका वार्तालाप गर्थ्यौं ।



दुर्गाप्रसाद पौडेल

सन् १९७९ मा नव दिदीले द्रोण दाजुलाई नेपाल लिएर जानुभयो । द्रोण दाजुका बुबाले पनि नेपालमा जागिर पाइन्छ भने जा भनेर पठाउनुभयो । केही दिन नव दिदीकै घरमा बसेर पछि माटो जोडेर उतै घरजम गर्नुभयो । दाजुले उतै नेपालतिरै बसे पनि यहाँको पनि हाम्रो अभिभावक उहाँ नै हुनुहुन्थ्यो । यहाँ आउँदा- ‘यसो गर, उसो गर’ भन्दै सल्लाह दिनुहुन्थ्यो ।

(भावुक हुँदै) द्रोण दाजुले यति छिट्टै हामीलाई छोडेर जानुहोला जस्तो लागेको थिएन । दाजुको अभावमा हामी टुहुरा जस्तै भएका छौं । दाजुको आत्माले शान्ति पाओस् ! दाजुलाई हार्दिक श्रद्धाञ्जलि अर्पण गर्छु ।”

*(यो विचार २०७७/१०/१६ गते बटियामारी असमस्थित डा.द्रोणकुमार उपाध्यायका काकाका छोरा (भाइ) दुर्गाप्रसाद पौडेलसँगको प्रत्यक्ष कुराकानीका क्रममा सम्पादक मण्डलले लिइएको हो)*

## २



कृष्ण पौडेल

“मेरो बडिपिता द्रोणकुमार व्यक्ति मात्र नभएर एउटा अनुष्ठान हो, संस्था हो । उहाँ असममा थोरै बसे पनि विशिष्ट छाप छोडेर जानुभयो । उहाँले नेपाल र असममा पारिवारिक मेलमिलाप र साहित्यिक क्षेत्रमा सेतुको काम

गर्नुभयो । उहाँ बटियामारी क्षेत्रकै पहिलो विद्यावारिधि गर्ने व्यक्ति हो । आफ्नो व्यक्तित्व बनाउन सफल हुनुभयो । उहाँ भौतिक रूपमा हामी बीच नरहे पनि हाम्रो मन-मुटुमा सधैं जीवित रहनु हुनेछ ।"

*(यो विचार २०७७/१०/१६ गते बटियामारी असममा सानै उमेरमा समाजमा प्रतिष्ठित सफल व्यक्तिका रूपमा परिचित युवा व्यक्तित्व एवम् उदीयमान कवि कृष्ण पौडेल (डा.द्रोणकुमार उपाध्यायको भतिज) सँग प्रत्यक्ष कुराकानी स्थलगत अध्ययनका क्रममा सम्पादक मण्डलले लिइएको)*

## ३

"म नेपाली अक्षर लेख्न जान्दैनथें । द्रोणले नै मलाई देवनागरी लिपि लेख्न सिकायो । उसका बाबु शिक्षक भएकाले उसलाई छिटो आउँथ्यो । मलाई धुले पाटीमा लेख्न लगाएर सिकाउँथ्यो । हामी अच्युतम्, केशवम्, रामनारायण जस्ता भजन पनि गाउँथ्यौं ।



**लेखनाथ गुरागाई**

बाल्यकालमा हामी लुकीडुम लगायतका खेलहरू खेल्थ्यौं, बयर खान्थ्यौं । कालिपोके टिपेर खान्थ्यौं । द्रोण बटियामारी आउँदा मसँग भेट नगरी कहिल्यै जाँदैनथ्यो ।

द्रोणको स्वभाव अचम्मको थियो। दाल, घिउ मन पराउँथे । सब्जी धेरै मन पराउँथे । क्वाप्लक्कै खान्थे । मीठो सब्जी छ भने कराहीमै हालेर खाने । मोती काकाले यी साह्रै मिल्छन् भन्नु हुन्थ्यो, नेपाल गएका बेला । हामी यतै बस्यौं, द्रोण पढाइ र जागिरकै कारण नेपालतिर बसे । हामीलाई पनि उनले नेपालतिरै तान्न बल गरेका हुन्; तर व्यवहारले गर्दा हामी जान सकेनौं ।

द्रोणको अविस्मरणीय क्षण सम्झँदा- मलाई अंग्रेजीको ध्यचम :भबलष्लन आउँदैन थियो। द्रोणले नै सिकाई दिन्थे। अर्को दिन गुरुले च्बत को अर्थ सोध्नुभो, मैले द्रोणलाई संकेत गरें । उनले 'डुहुरे' भन भनेर सिकाए, मैले 'टुहुरे' भनें, गुरु रिसाउनुभयो ! पछि द्रोणले 'मुसो' भने ! यो क्षण म कहिल्यै बिर्सन्न ।

सबै साथीहरूमध्ये द्रोण साह्रै मिलनसार थिए । बरू रामकृष्ण पौडेल हामीसँग त्यति मिल्दैनथ्यो । द्रोण सबैसँग दया राख्ने मिलनसार थियो । उनको आत्माले शान्ति पाओस्- यही कामना गर्छु ।"

*– बटियामारी, असम*

*(यो विचार डा.द्रोणकुमार उपाध्यायका बालसखा श्री लेखनाथ गुरागाईंसँग स्थलगत अध्ययनको क्रममा लिइएको हो)*

## ४


**प्रेम उपाध्याय घिमिरे**

"म द्रोणको सान्दाजु हुँ । म पौडेलको भानिज पनि हुँ । म र द्रोण चार कक्षादेखि सँगै पढेका हौं । द्रोणलाई बेल, तित्री साह्रै मन पर्थ्यो । ऊ सानैदेखि बलियो र मोटोघाटो थियो । म चैं अलिक पातलो थिएँ, ऐले पनि यस्तै छु । हामी लाम्चो 'निमु' टिफिनमा खाजा खान्थ्यौं । कहिलेकाहीं होक्से पनि खान्थ्यौं । खेल्दा गन्दा-गुदी खेल्थ्यौं हिलोमा ।

स्कूलबाट आएपछि हामी पौडी खेल्न जान्थ्यौं, 'छुर' भन्ने खेल खेल्थ्यौं । साह्रै असल थिए द्रोण, हामीलाई छाडेर चाँडै गए, उनको आत्माले शान्ति पाओस् भनी कामना गर्दछु ।" द्रोण बटियामारी आउँदा मेरो माताजीसँग भेट नगरी जाँदैनथ्यो । पछि, उनीहरूको परिवारले हजुरबुबाको शालिक स्थापना गरे, संस्कृत पाठशालामा । तर, त्यो शालिक अहिले सुरक्षित छैन । त्यो शालिकको सुरक्षा गर्न आवश्यक छ । परिवारले पनि त्यहाँ ध्यान पुऱ्याए राम्रो हुन्थ्यो ।

अन्त्यमा, द्रोणको आत्माले शान्ति पाओस् । म द्रोणलाइ हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु ।"

*बटियामारी, असम*

*(यो विचार डा.द्रोण उपाध्यायका बाल्यकालका साथी प्रेम उपाध्यायसँग स्थलगत अध्ययनको क्रममा लिइएको हो)*

## ५


**सीताराम लुइँटेल**

"स्कूलबाट आएपछि द्रोण सहित हामी पौडी खेल्न जान्थ्यौं, 'छुर' भन्ने खेल खेल्थ्यौं । पढाइमा तेजिला थिए द्रोण । हामीलाई नआएका कुरा सिकाइदिन्थे । उनले हामीलाई चाँडै छाडेर गए । साह्रै दुःख लाग्यो ।"

*वटियामारी, असम*

*(यो विचार डा.द्रोण उपाध्यायका बाल्यकालका साथी सिताराम लुइँटेलसँग स्थलगत अध्ययनको क्रममा लिइएको हो)*

## ६

"द्रोण सरको र मेरो उमेरमा त्यस्तै ६-७ वर्षको फरक छ । सानामा अनु र म 'कुटामारा' पनि गर्थ्यौं । दाइले चुक्र्याईं गरिराख्थ्यो ।


कनकलता आचार्य

घरमा सोल्लर पकाउँदा आमाले घिउ हालेर पकाइदिनु हुन्थ्यो । द्रोण दाइलाई सोल्लर बहुत मन पर्थ्यो अनि कराही नै सोहोरेर खान्थ्यो । हामी साह्रै मिल्थ्यौं पनि, झगडा पनि गर्थ्यौं । ऊ पढाइमा जान्ने थियो । मलाई पढाउँदा नजान्दा कान पनि बटार्थ्यो । हामी 'ल्याङ्-ल्याङ् हुप्पा' भन्ने खेल खेल्थ्यौं ।

मेरो विवाहमा दाइ घरमा थिएन । बुबालाई लिएर बेङ्लोर गएको थियो । पिता निक्कै बिरामी हुनुहुन्थ्यो । मामाहरूले विवाह गरिदिनु भयो । पछि, पिताजी मेरो विवाहमा उपस्थित हुन नपाएर घरमा आएपछि रुनु भयो । द्रोण दाइले पिताजीलाई बुझाउनै सकेन । दादा पनि रुन थाल्यो । उदालगुडीमा मेरो विवाह भयो ।

दाजु विरामी भएर राजस्थान गएर आएपछि हामी हेर्न नेपाल गयौं । त्यसको एक महिनापछि दादाको निधन भएछ । मलाई थाहा दिएनन् । म चन्द्रगढी पुगेपछि मात्र थाहा पाएँ कि दादाको घरमा सेतो पण्डाल देखेपछि मात्र मैले शंका गरें कि, मेरो दादा छैन, अब दादा बितेछ भनेर । त्यसपछि हाम्रो रुवाबासी भयो । मन भुल्याउनु पर्ने बाध्यता थियो ।

दादाको आत्माले शान्ति पाओस्, मेरो प्यारो दादालाई हार्दिक श्रद्धाञ्जलि ।

*(यो विचार डा.द्रोण उपाध्यायकी बहिनी कनकलता (कोकिला) आचार्यसँग बटियामारी, असममा स्थलगत अध्ययनको क्रममा सम्पादक मण्डलले लिएको हो)*

## ७


देवराज उपाध्याय

"द्रोणकुमार उपाध्यायलाई म काका भन्ने गर्थें । उहाँमा नेपाली, संस्कृत, हिन्दी, असमिया, अंग्रेजी भाषाको समेत राम्रो ज्ञान थियो । राम्रोसँग यी भाषाहरू बोल्नु हुन्थ्यो ।

यहाँ मिलनसार स्वभावको हुनुहुन्थ्यो । जस्तो उमेर समूहको व्यक्तिसँग पनि सजिलै घुलमिल हुने उहाँको स्वभाव थियो । उहाँ विद्वान व्यक्तित्व हुनुहुन्थ्यो । अहिले हामी बीच नरहनुभएका उहाँप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु ।"

*कार्यकारी अध्यक्ष*

*नेपाली साहित्य सभा, शोणितपुर (असम)*

*(यो विचार- नेपाली साहित्य सभा, शोणितपुर (असम)का कार्यकारी अध्यक्ष देवराज उपाध्याय सँग स्थलगत अध्ययनको क्रममा सम्पादक मण्डलले लिएको हो ।)*

## ८


हिमसागर उपाध्याय

"द्रोण दाजु नाताले मेरो साढुदाजु भए पनि उहाँ मेरो सहोदर दाजु जस्तै हुनुहुन्थ्यो । उहाँले मेरो विवाहकै दिन भन्नुभएको एउटा कुरा सधैं मेरो मनमा आइरहन्छ । जब म बेहुलो भएर खनाल परिवारको घरमा पुगें, द्रोण दाजुले ' यहाँ खनालको घरमा कामै मात्र लाउँछन् । अब तिमीलाई पनि काम लगाउँछन्' भनेर रमाइलो ठट्टा गर्नुभएको थियो ।

द्रोण दाजु असमको ढेकियाजुली आउनु भएपछि उहाँले मलाई जहाँ-जहाँ जाउँ भन्नुहुन्थ्यो, म त्यहाँ पुऱ्याइदिन्थें । सँगै जान्थें, तर म केही बोल्दैनथें, चूप लागिरहन्थें र कुरा सुनिरहन्थें । उहाँ आफू नेपाल गए पनि म यहीं असममै छु भन्नुहुन्थ्यो । उहाँ जे कुरामा पनि साह्रै मेहनत गर्नु हुन्थ्यो । उहाँलाई साहित्य साधना गर्ने इच्छा रहेछ, बैंकको जागिर छाडेर उहाँ शिक्षण जस्तो बौद्धिक पेशामा लाग्नुभएको रहेछ पछि मात्र थाहा भयो ।

एकपटक असमको गोलाघाटमा ठूलो ब्राम्हण सभा थियो। त्यहाँ द्रोण दाजुलाई चिफगेष्टका रूपमा बोलाइएको थियो। जब कार्यक्रम शुरु भयो, 'नेपालबाट आउँदै हुनुहुन्छ- द्रोणकुमार उपाध्याय' भन्दा धेरैले नाक खुम्च्याएका थिए । तर, जब द्रोण दाजु बोल्न थाल्नुभयो र नेपाली, हिन्दी, अंग्रेजी, असमिया र संस्कृत समेत मिसाएर छ-सातवटा भाषामा सारगर्भित मन्तव्य दिनुभयो, तब सबै भावुक भए । त्यहाँ तालीको गडगडाहट भयो । त्यो क्षण सम्झँदा अहिले पनि म भावुक हुन्छु (रुँदै) पछि सबैले उहाँसँग बसेर फोटो उठाए, सबै खुसी भए, उहाँलाई ठूलो सम्मान भयो ।

द्रोण दाजुको निधनले हामी धेरैलाई आफ्नो अभिभावक नै गुमेको अनुभूति भइरहेको छ । उहाँका आत्माले शान्ति प्राप्त गरोस्- यही कामना गर्दै उहाँप्रति भावपूर्ण श्रद्धाञ्जलि व्यक्त गर्दछु ।"

*ढेकियाजुली, असम*

*(यो विचार डा.द्रोणकुमार उपाध्यायका साढुभाइ एवम् समाजसेवी श्री हिमसागर उपाध्यायसँग उहाँकै निवास ढेकियाजुली, असममा स्थलगत अध्ययनको क्रममा सम्पवदक मण्डलले लिइएको हो)*

## ९

"हाम्रो द्रोण भिनाजु साह्रै रमाइलो हुनुहुन्थ्यो, उहाँ साह्रै चलाख पनि हुनुहुन्थ्यो । एउटा रमाइलो प्रसंग-जब जिनाजु विवाहको कुरा छिन्न हाम्रो घरमा आउनुभयो, हुने वाला भिनाजु र बुवाहरु तल गफ गरिरहनु भएको थियो । दिदी र म हामी दुई दिदी-बहिनीले भिनाजुलाई सिंढी माथिबाट चियाएर हेऱ्यौं, कस्तो हुनु हुन्छ भनेर । तर, भिनाजुले हामीलाई देख्नु भएन । जब कुराकानी सकियो, बिहेको पक्कापक्की भयो र उहाँ जान लाग्नुभयो; तब भिनाजुले जानी-जानी एउटा रुमाल भूइँमा झार्नुभयो । हामी पछाडि उभिरहेका थियौं । अनि 'ए... रुमाल झऱ्यो भनेपछि हुनेवाला भिनाजुले पछाडि फर्केर हामीलाई पिलिक्क हेर्नुभयो र दिदीलाई देख्नुभयो । त्यो क्षण साह्रै रमाइलो थियो ।


विद्याढेवी उपाध्याय

द्रोण भिनाजु सामाजिक परिवर्तनको पक्षधर हुनुहुन्थ्यो । उहाँले हाम्रो पिताजीको निधनमा नयाँ काम गर्नुभयो । त्यसबेला असममा महिलाहरूले मलामी जाने चलन थिएन । महिलाहरू मलामी जानु हुँदैन भन्थे; तर भिनाजुले हामी सबैलाई मलामी लिएर जानुभयो । केही हुँदैन, जानु हुन्छ भनेर परम्परा परिवर्तन गरिदिनुभयो । जसले गर्दा हामी छोरीहरूले पनि दाजु-भाइ सरह बुबालाई 'देहाग्नि' दिन पायौं । छोराहरूले जति नै अधिकार हामी छोरीहरूले पनि पायौं ।

त्यसैगरी भिनाजुले क्रियापुत्रीले सेतो चप्पल लगाउनु हुन्छ भनेर चप्पल किनेर ल्याइदिनुभयो र हामीलाई लगाउन दिनुभयो । उस समयमा यस्तो संस्कारमा परिवर्तन ल्याउनुमा भिनाजुको ठूलो देन छ । यो श्रेय द्रोण भिनाजुलाई नै जान्छ ।

हामी नेपाल जाँदा भिनाजु साह्रै खुशी हुनुहुन्थ्यो । मलाई त झन् जिस्काउँदै 'अब मेरी साली आइन्, अब मलाई के को चिन्ता' भनेर ठट्टा गर्नु हुन्थ्यो । उहाँ सधैं हा हा हा ! गर्दै हाँस्दै हिंड्नु हुन्थ्यो । त्यो क्षण म अहिले पनि झल्झली सम्झिरहेको छु । -आँसु पुछ्दै)

द्रोण भिनाजुमा ज्ञानको भण्डार थियो । साहित्यमा धेरै रुचि थियो । यस्तो भिनाजुलाई गुमाउनु पर्दा हामी सबै मर्माहत भएका छौं । एक हप्ता अघि भिनाजुलाई हेरेर फर्किएका थियौं, त्यसपछि कहिल्यै भेट हुन सकेन । (आँसु पुछ्दै) भिनाजुको निधनले दिदीलाई ठूलो चोट पुगेको छ । बहिनीको नाताले मात्र नभएर म मेरी दिदीको बालसखा पनि हुँ । अबका दिनमा भिनाजुका सबै कृतिहरूलाई संरक्षण गर्ने, उहाँका अप्रकाशित लेख-रचनाहरूलाई प्रकाशन गर्ने, तीर्थ-ब्रत गर्ने, असम-नेपाल आउदै-जाँदै गर्दा समय पनि वित्छ र मन पनि शान्त

हुन्छ । यसरी समय विताउनु गर्नु पर्छ दिदीले भन्ने ठानेको छु । म दिदीलाई सामाजिक सेवामा लाग्नुहोस्, भिनाजुको कीर्ति राख्ने अझै योजना बनाउनुहोस् भन्ने सुझाव दिन चाहन्छु । हामीले के सहयोग गर्नुपर्छ, हामी तयार छौं भन्छु ।”

*(यो विचार डा.द्रोणकुमार उपाध्यायकी साली विद्यादेवी उपाध्याय सापकोटासँग स्थलगत अध्ययनको क्रममा उहाँकै निवास ढेकियाजुली, असममा लिएका हौं । उहाँ एक असल र कुशल गृहिणी हुनुहुन्छ ।)*

## १०



**थानेश्वर खनाल (राजा)**

द्रोण भिनाजुसँग दिदीको विवाह भएपछि मात्र चिनजान भयो । द्रोण भिनाजु हाम्रो परिवारको आदर्श भिनाजु हुनुहुन्थ्यो । हामीले सानो गल्ती गर्दा पनि त्यस्तो त्रुटी सच्च्याइदिनु हुन्थ्यो । हाम्रो पढाइका बारेमा हामीलाई सधैं असल सल्लाह दिनुहुन्थ्यो । हामीले लेखेका कापीहरू पढ्नु हुन्थ्यो र गल्ती छ भने रातो मसीले इन्डिकेट गर्नुहुन्थ्यो । आमा-बुबापछिको हाम्रो तेस्रो अभिभावक भनेकै हाम्रो ठूलो भिनाजु हुनुहुन्थ्यो ।

भिनाजुको बानी साह्रै असल थियो । उहाँ हाम्रो मित्रजस्तै पनि हुनुहुन्थ्यो । राजनीतिका कुरा त्यति मन नपराउने उहाँ साहित्यिक कार्यक्रमहरू बढी मन पराउनु हुन्थ्यो । यहाँ आउँदा भानु समितिमा पनि सम्पर्क गर्नु हुन्थ्यो । एकपटक निर्दिष्ट रूपमा उपस्थित हुनुभयो, भानु जयन्तीमा । त्यसबेला भानिज यशवन्त पनि आउनुभयो र रामायण पनि वाचन गर्नुभयो । त्यो वाचन सबैले मन पराए ।

द्रोण भिनाजु नेपाली भाषाकै कारण नेपाल जानुभएको हुनुपर्छ । उहाँले नेपाल र भारतमा साहित्यको धेरै सेवा गर्नुभयो । अझै सेवा गर्ने उहाँको इच्छा हुँदाहुँदै पनि भ्याउनु भएन । उहाँको निधनप्रति हामी साह्रै भावविह्वल छौं । हाम्रा यस्ता अभिभावकलाई गुमाउनु पर्दा हामी मर्माहत छौं । उहाँप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु ।

## ११

द्रोण सरलाई काठमाण्डौमा एम.ए.पढ्दादेखि नै चिन्थें। मेरो विवाहपछि उहाँ मेरो काका पर्नुहुन्थ्यो। तर, दिदी-भाइको जस्तो घनिष्ट सम्बन्ध थियो। द्रोण काकालाई नेपाल चन्द्रगढीमा त्यहाँका समाजले सम्मान गरेको देख्दा 'नमस्ते सर, नमस्ते सर !' भनेर धेरैले सम्मान गरेको देख्दा मैले उहाँ नेपालमा पनि ठूलो मान्छे हुनु हुँदोरहेछ भन्ने बुझें। मलाई त्यो क्षण साह्रै आनन्द लागेको थियो।


बीनादेवी घिमिरे

द्रोण काकाले यहाँ असममा पनि आएर सामाजिक क्रान्ति गराउनुभयो। महिलाले पनि मलामी जानुहुन्छ भनेर नयाँ संस्कारको थालनी गराउनुभयो। यसैगरी, क्रियापुत्रीले सेतो चप्पल लगाउनु हुन्छ भनेर लगाउन शुरुवात गरिदिनुभयो। मेरो विचारमा उहाँ समाज परिवर्तनकारी अगुवा हुनुहुन्थ्यो। अन्तिममा उहाँले आफ्नो बिमार लुकाउनुभयो। उहाँ अझै बाँचेको भए नेपाली भाषा-साहित्यमा धेरै उन्नति हुन्थ्यो। हामी बीच हुनुहुन्न अब उहाँ। आदरणीय काकाप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु।

## १२

मेरो दाजु डा.द्रोणकुमार सहज र सरल स्वभावको धनी हुनुहुन्थ्यो। साहित्य लेखन क्षेत्रमा विशेष दक्षता भएको, निर्णय क्षमतामा दखल भएको, हाम्रो पारिवारिक रूपमा मियोको रूपमा हुनुहुन्थ्यो।


श्याम पौडेल

उहाँको कमी हामीमा सदैव खड्किरहेको छ। उहाँप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दछु।

*(यो विचार पशुपति अन्नपूर्ण आश्रम, बिराटनगर- १ का अध्यक्ष श्री श्याम पौडेलज्यूसँग लिइएको हो)*

*२०७७/१०/२८*



यशवन्त पौडेल

# पितासँगका सम्झनाका केही झिल्काहरू र सबैमा आभार तथा कृतज्ञता

सानोमा हामीले गर्ने गरेको 'पिता'को सम्बोधन अनौठो लाग्ने भएकाले साना-ठूला सबैले जिस्क्याउने गर्थे । मलाई अरुका बुबा र मेरा पितामा केही फरक नै लाग्थ्यो । कडा अनुशासनमा बस्नुपर्ने, सोको पालनामा कुनै चुक भए या कुनै गल्ती दोहोरिए गाली खाइन्थ्यो र अलिक ठूलो नै गल्ती गरिएछ भने चाहिं खुबै पिटाइ खाने गरिन्थ्यो ।

उमेर बढ्दै जाँदा विस्तारै-विस्तारै पिताले घरको हरेक निर्णयमा भाग लिन लगाएर एउटा गुरुको समेत भूमिका निर्वाह गर्नु हुन्थ्यो । यसरी क्रमशः पिताले आफ्नो अभिभावकीय भूमिकालाई बृहत् र गहन तुल्याउँदै लानुभएको अनुभव हुन्थ्यो । तर अझै यो कुरामा मेरो छोरो जन्मिएपछि मैले आफूलाई बुबाको भूमिकामा उभ्याएर हेर्दा, मेरो पिता कडा आवरणभित्र भएको नयाँ न्यानो कोमलहृदयी व्यक्ति भन्ने महसूस गरेको थिएँ । यसरी पिताजको जीवनको उत्तरार्द्धमा 'पिता' शब्दले बोकेको थप ठूलो अर्थ बुझ्न पाएको थिएँ ।

पितासँग बिताएका धेरै रमाइला पलहरू छन् । म धेरै सानो हुँदाको कुरा हो । मेची क्याम्पसमा धेरै प्रतियोगितात्मक कार्यक्रमहरू भइरहन्थे । पिताले त्यस्ता कार्यक्रममा आफू जाँदा मलाई पनि साइकलमा लिएर जाने गर्नु हुन्थ्यो । म पनि पिताको अगाडि साइकलको डन्डीमा बनाइएको सिटमा बसेर रमाइ-रमाइ क्याम्पस जान्थें । बीच बाटोमा पर्ने लेखनाथ चोकको गुम्तीमा २ प्याकेट चकलेट किनेर 'धेरै नखानु है, यो त क्याम्पसका लागि हो नि' भनेर दिनुहुन्थ्यो । क्याम्पस पुग्दा नपुग्दा १ प्याकेट चकलेट चाहिं आधा भइसकेको हुन्थ्यो । क्याम्पसको प्रतियोगितामा दर्शकहरूमध्ये जसले हात उठाएर उत्तर मिलाउँछ, त्यो दर्शकलाई सान्त्वना पुरस्कारस्वरूप दिइने चकलेट रहेछ । कुनै दर्शकले उत्तर मिलाएमा यो चकलेट पुरस्कार दिनलाई मलाई निर्देशन हुन्थ्यो । प्रत्येक पटक म दुई वटा चकलेट प्याकेटबाट निकाल्थें, एउटा चाहिं पुरस्कार पाउनेलाई दिन्थें र तत्कालै अर्को चाहिं आफैं क्वाप्प खान्थें । यो देखेर प्रत्येक पटक त्यस हलका सबैजसो विद्यार्थीहरू हाँसेको म पाउँथें !

पितासँग कुनै कुरा सिक्न जानुपर्दैन थियो । मेरो पिताजीमा स्कूलस्तरका पाठ्यक्रमका जुनसुकै विषयको पनि राम्रो ज्ञान भएकाले हामीले पढ्दै गर्दा उहाँ आफैं आएर सिकाउन खोज्नु हुन्थ्यो । नेपाली र अंग्रेजी अक्षर राम्रा हुनुपर्छ भनेर धेरैपटक हामीलाई क ख ग घ र सबैखाले ब द अ म, ठूला कक्षा पुगे पनि लेख्न लगाउनु हुन्थ्यो । मेरो आजको नेपाली अक्षरहरु उहाँकै देन हो । अझ नेपाली विषयको शुद्धाशुद्धिको त कुरै भएन, कुनै पनि फेयर गरी राखिएको पुस्तिका या शिक्षकलाई आजै देखाउनुपर्ने भनी तयार गरिएको गृहकार्यको

पुस्तिकामा रातो मसीले सम्पूर्ण शुद्धाशुद्धि गरिदिनु हुन्थ्यो । यसरी सच्याइएको गृहकार्य शिक्षकलाई देखाउन नमिल्ने भएकाले, हामी भित्रभित्रै रिसाउँदै पुनः गृहकार्य फेयर गर्न थाल्थ्यौं । यो क्रम ठूलो भएपछि पनि रोकिएन । हामीले ठूलो भएपछि पितालाई लेखेका चिठीहरू पनि सबै करेक्सन गरेर प्रत्युत्तरमा संलग्न गरी पुनः फिर्ता पठाउने उहाँको बानी थियो ।

जहाँ, जतिखेर, जहिले पनि, जेसुकै सोधे पनि हुने र त्यसको सजिलो उत्तर पाइने, एउटा इन्साइक्लोपिडियाको रूपमा मात्र नभई एउटा सिंगो चलायमान खुला विश्वविद्यालयको रूपमा हामी हाम्रा पितालाई लिन्थ्यौं ।

अर्कोतर्फ जीवन जिउने तरिकामा भने अनुशासित जीवन, 'समयको पुच्छर अगाडि हुन्छ, पछाडि हुन्न' भनेर यथासमयमा काम सम्पन्न गर्ने तरिका, मेहनत गरी थालिएको कामको जग बलियो हुन्छ, आदि इत्यादि कुरा गरेर सधैं प्रेरित गर्नुहुन्थ्यो । यसरी हाम्रा लागि 'पिता'ले औपचारिक शिक्षक र आदर्श गुरु दुबैको भूमिका समान रूपमा निर्वाह गर्नुभएकोले हामीले जीवनका पल-पलमा आवश्यक धेरै असल कुराहरू सिक्न र तद्नुरुप बानी बसालेका पनि थियौं र हामी आजीवन पिताको पथानुशरण गरिरहेका छौं र गरिरहने छौं ।

बिहान सबेरै उठ्ने, मितव्ययी र सादा जीवन, स्वस्थकर खाना र सफासुग्घर रहने मात्र हैन; हाम्रो जीवनयापनले गर्दा हुने अर्को प्राणी र अरू कसैमा पर्नसक्ने दुःख या असरलाई पनि आफू पनि नियाल्ने र हामीलाई पनि नियाल्न सिकाउने गर्नुहुन्थ्यो । यसरी सिकाउँदा कतै हाम्रा पिताजीले ऋषिको पुनर्जन्म पाउनुभएको त हैन ! जस्तो समेत लाग्दथ्यो ।

पिता जहिले पनि आफ्ना पिताजी र माताजीलाई ऋषितुल्य नै मान्नु हुन्थ्यो । पिता जहिले पनि श्राद्ध र वैदिक होम सकिएपछि हजुरबुबा-हजुरआमाको या उहाँसँग सम्बन्धित धेरै प्रेरक-असल कुराहरू याद गर्ने र परिवारका सबैलाई सुनाउने गर्नु हुन्थ्यो । यही सुनाउने क्रममा कहिलेकाहीं भावविह्वल भएर रुनु समेत हुन्थ्यो ।

मेरा लागि पिताका अन्तिम क्षण अत्यन्तै भयानक, अकल्पनीय, आफ्ना आँखैअघि महाभूकम्प गएसरह अनुभव भएको थियो । क्यान्सर अन्तिम चरणमा भए पनि थालिएको चिकित्सा, गरिरहेको औषधिमुलो र हेरचाहप्रतिको अगाध विश्वासले पिता यति चाँडै दिवंगत हुनुहुन्छ भन्ने शंका नै हामीलाई थिएन । तर, पिताले हामी सबैलाई अकस्मात नै छोडेर महानिर्वाण लिनुभयो । पितासँग सिक्नुपर्ने कति हो कति, अगणित विषयहरूमध्ये सानो अंश पनि शायद सिकिसकेको थिएनौं, हाम्रा यावत रहर र इच्छा अधुरै रहे । यो विस्मातको घाउ सम्भवतः आजीवन बिसेक हुने छैन, बल्झिई नै रहनेछ ।

यस्ता श्रद्धेय पिताको निधनप्रति भावविह्वल हुँदै हार्दिक श्रद्धाञ्जलि अर्पण गर्नु सिवाय हामी के नै गर्छ सक्छौं र ! तथापि, यो सानो भए पनि पिताजीका कृतिहरुलाई समाजमा अर्पण गर्न 'डा.द्रोणकुमार उपाध्याय स्मृतिग्रन्थ' प्रकाशन गर्ने जमर्को गरेका छौं । प्रकाशनका क्रममा आफ्ना अमूल्य समय दिनुभई अहोरात्र खट्नुहुने सम्पादक मण्डलका सम्पूर्ण परिवार, सल्लाहकारज्यूहरु, प्रकाशन समिति, लेख रचना दिनुहुने महानुभावहरु, आफन्त, इष्टमित्र, छरछिमेक, नाता, कुटुम्ब लगायत प्रत्यक्ष-परोक्ष रुपमा सहयोग पुऱ्याउनुहुने सम्पूर्ण महानुभावहरुमा हार्दिक नमनसहित कृतज्ञता अर्पण गर्दै आभार व्यक्त गर्दछु ।

**द्रोण सरका प्रतिनिधि फुटकर रचनाहरू**

# शिक्षाव्रती टीकाराम शास्त्रीज्यूको सम्झनामा

*मूल :* **द्रोणकुमार उपाध्याय** (**असमिया**)
*अनुवाद :* **पुष्पधर शर्मा** (**नेपाली**)
*प्राचार्य :* **ओदालगुडी उच्चतर माध्यमिक विद्यालय**

स जातो येन जातेन याति वंश समुन्नतिम्
परिवर्तिनी संसारे मृतः को वा न जायते ॥

जलविम्बसम क्षणस्थायी मानव जीवनको जन्म र मृत्युको बीचका विभिन्न घटनावली यस बृहत् पृथ्वीका छातीमा घटेका क्षुद्र घटनाका रूपमा निज शक्ति र सामर्थ्यले जे जति न्यूनतम कार्य गरेर जान्छन्, समयको आघातले त्यसलाई विनष्ट पार्न सक्तैन । मेरा पितृदेव स्वर्गीय टीकाराम उपाध्याय शास्त्री आज यस संसारमा हुनुहुन्न । तर, उहाँले आफ्नो जीवनभरिको साधनाले जे अवदान दिएर जानुभएको छ, विशेषगरी संस्कृत शिक्षाका क्षेत्रमा जे गरेर जानुभएको छ; त्यो उहाँलाई जनमानसमा जीवन्त राख्नका लागि सक्षम छ ।

मेरा पितृदेवको जन्म विक्रम सम्वत् १९७२ (१९१५ सन्) चैत महिनाको शुक्ल चतुर्दशी मङ्गलबारका दिन दरङ जिल्लाको बिहाली मौजाको बटियामारी गाउँमा भएको थियो । उहाँका बुबा स्वर्गीय गङ्गाधर उपाध्याय (मेरा हजुरबुबा) एक जना संस्कृत पण्डित हुनुहुन्थ्यो । महामान्य मदनमोहन मालवीयज्यू काशी हिन्दू विश्वविद्यालय निर्माणका लागि दान सङ्ग्रह गर्ने उद्देश्यले असम आउँदा मेरा हजुरबुबाले उहाँलाई त्यस कार्यमा सहयोग गर्नुभएको थियो । मालवीयज्यूले उहाँलाई संस्कृत विद्यालय संस्थापनका लागि प्रेरणा दिनुभएको थियो । हजुरबुबाले आफ्नो घर-जमीन बेचेर दान दिएर जीर्णोद्धार गरेको शिवालय एउटाको छेवैमा बटियामारी गाउँमा सन् १९२० मा साङ्गवेद नामको एउटा संस्कृत विद्यालयको स्थापना गर्नुभएको थियो ।

प्रारम्भमा ब्रह्मपुत्रको तीरमा रहेको नेपाली ब्राह्मणहरूको बसोबासो भएको मेरो पितृदेवको जन्मथलो बटियामारीस्थित प्राथमिक विद्यालयमा सम्भवतः त्यस समयको व्यवस्थाअनुसार बङ्ला माध्यममा उहाँ (पितृदेव)ले शिक्षाको थालनी गर्नुभएको थियो ।

प्राथमिक विद्यालयको शिक्षा समाप्त गरेर बिहाली माध्यमिक असमिया स्कूल (हाल उच्चतर माध्यमिक विद्यालय)मा अध्ययन गर्नुभयो । त्यस समयमा छेउछाउमा कुनै उच्च माध्यमिक विद्यालय नभएकाले विद्यालयको शिक्षा उहाँको त्यहीं टुँगियो । तर, पितृदेवको संस्कृत शिक्षाप्रतिको आग्रह देखेर हजुरबुबाले सानो उमेरमै उहाँलाई संस्कृत शिक्षा लिने व्यवस्था गरिदिनु भयो । 'अमरकोष' र 'संस्कृत व्याकरण'का जटिल पाठहरू उहाँले छोटो समयमा नै कण्ठस्थ गरिसक्नुभएको थियो । आफ्नो छोराको स्मृतिशक्ति तथा दक्षता देखेर हजुरबुबाले उहाँलाई बिहालीका संस्कृताचार्य गुणनाथ उपाध्यायकामा संस्कृत शिक्षा लिन पठाइदिनु भयो । संस्कृत शिक्षाप्रति रहेको उहाँको आग्रह तथा गुरुबाट प्राप्त प्रेरणाले गर्दा उहाँ गुवाहाटीस्थित मुनिकुलाश्रम पुग्नुभयो । त्यहाँ पितृदेवका सहपाठी हाल शिडरी टोलका अध्यक्ष बृहस्पति उपाध्याय पनि सँगै जानुभएको थियो । दुई साथीले चार सेर जति चामल, खर्चका लागि चार आना पैसा र एक-एकोटा लालटेन साथमा लिएर गएका थिए । तर, बाटैमा चामल चाहिं बेचेर भारी हलुंगो पारेका थिए ।

तर, उहाँहरूले बाटामा संस्कृतका विद्यार्थीका रूपमा गाउँतिर गएर पाती पढ्दै दान पनि प्राप्त गरेका थिए । भुरबन्धा जहाजघाटमा जहाज चढेर उहाँहरू गुवाहाटीको मुनिकुलाश्रम पुगी त्यहाँको वैदिक चतुष्पाठीमा शिक्षा प्रारम्भ गर्नुभयो । संस्कृत आद्य परीक्षामा उहाँहरू दुबै जनाले कृतित्व प्रदर्शन गरी चार रुपियाँको छात्रवृत्ति प्राप्त गर्नुएको रहेछ । त्यो समयमा एक जना मानिसलाई महिनाभरि चल्न दुई रुपियाँ भए मनग्गे पुग्थ्यो । रहल दुई रुपियाँले उहाँहरूले काशी र इलाहाबाददेखि केही पुस्तक मगाएर पढ्न लाग्नुभयो । व्याकरणको मध्यमा र वेदको मध्यमा पनि उहाँहरू राम्रोसँग उत्तीर्ण हुनुभयो । अन्त्यमा उपाधि आयो । व्याकरणको उपाधि उत्तीर्ण हुनलाई साधारण शिक्षार्थीलाई दुई सालको समय लाग्दथ्यो । तर, मेरा पितृदेवले कर्तृपक्षको अनुमति लिएर एकै सालमा परीक्षा दिएर उत्तीर्ण पनि हुनुभयो । यस्तो प्रखर बुद्धिसम्पन्न भएकाले त्यहाँका विद्यार्थीहरूले ईर्ष्या गरे पनि गुरुहरूले भने धेरै माया गर्दथे । त्यसै समयमा विद्यालयका अध्यक्ष महोदयलाई चम्पारण स्टेटका महाराजाले बोलाई पठाएकामा उहाँले जानुपर्ने भयो ।

तर, गुरुदेवले बिदाका बेलामा पितृदेव र उहाँका आत्मीय मित्र बृहस्पति उपाध्यायलाई बोलाएर भन्नुभएको थियो रे- 'तुम लोग दो मित्र असम में फस्ट हो जाओ । चिन्ता मत करो ।' त्यो कुरा दुबै मित्रले अक्षरशः पालन गर्नुभएको थियो ।

त्यसपछि उहाँहरू अध्ययनका निम्ति काशी जानुभयो । वृन्दावनमा गुरुका सान्निध्यका रहेर श्रीमद्भागवत अध्ययन गर्न लाग्नुभयो । त्यहाँ पितृदेवले वैष्णव धर्ममा शरण (दीक्षा) लिनुभयो । तर 'कालस्य कुटिला गति' भनेजस्तै पितृदेव पनि जटिल

रोगले पीडित हुनुभयो। रामकृष्ण सेवाश्रममा उहाँको चिकित्सा चलेछ। असमका चारजना सहपाठीले उहाँलाई धेरै सघाएछन्। तर पनि भग्न स्वास्थ्यका कारण उहाँ घर फर्किएर आउनुभएछ। यतिमै शिक्षा टुंग्याएर हजुरबुबाले स्थापना गरेको टोलमै अध्यापन प्रारम्भ गर्नुभएछ। स्वास्थ्यमा केही सुधार भएकाले पण्डित नन्दलाल वशिष्ठकी कान्छी छोरी सुश्री वेदमाया देवीसित विवाह गरेर सांसारिक जीवनको थालनी गर्नुभएछ।

त्यसपछि पितृदेवले संस्कृत शिक्षाको प्रचार र प्रसार कार्यमा आफूलाई संलग्न गर्नुभयो। पितृदेवको प्रयासमा हजुरबुबाद्वारा स्थापित विद्यालयले धेरै उन्नति गऱ्यो। छेउछाउका मात्र नभएर बाहिरबाट पनि शिक्षार्थीहरू आउन लागे। मन्दिरको शंख-घण्टाको ध्वनिले गाउँ नै गुञ्जायमान पाऱ्यो। समग्र गाउँ नै आर्यहरूको गौरवमण्डित लीलाभूमिमा परिवर्तित भयो। वेद, व्याकरण, काव्य, पातञ्जल, पराशर दर्शनको अध्ययन अध्यापन पूर्णरूपमा चल्न लाग्यो। समग्र गाउँ नै एउटा 'गुरुकुल आश्रम'मा परिवर्तित भयो।

सन् १९४२ को स्वतन्त्रता सङ्ग्राममा पितृदेवले पनि अंश ग्रहण गर्नुभयो। उहाँ वानर सेनामा भर्ना हुनुभयो र तेजपुरबाट विप्लवीहरूका चिठी-पत्र आदि ल्याउने-लाने काम गुप्तरूपले गर्न लाग्नुभयो। गुप्त कार्यका लागि कुनै निषिद्ध स्थानमा पुग्नुपर्दा पथद्रष्टाको कार्य उहाँले नै गर्नुहुन्थ्यो। असमलाई ग्रुपिङबाट बचाउन उहाँले सन् १९४४ मा 'अखिल भारतीय गोर्खा लीग'को प्रतिनिधित्व गर्नुभएको थियो। यसैगरी, मेरा पितृदेवले आफ्नो मातृभूमिको रक्षाका लागि सेवादान गर्नुभएको थियो।

संस्कृत शिक्षाको प्रचार र प्रसारका लागि उहाँले शिङरी पहाडको टप्पुमा संस्कृत पाठशाला (जो पछि ठेलामाराको गोरुडुबामा स्थानान्तरित भएको थियो) स्थापना गर्नुभयो। तर पछि घरको केही असुविधाले गर्दा शिङरी छोडेर बिहाली नै फर्किनुभयो।

आफ्नो गाउँमा रहेर पितृदेवले समाजको संस्कारमूलक कार्यमा लाग्नुभयो। अझ कंग्रेसको सक्रिय सदस्यका रूपमा लोकलबोर्ड तथा पञ्चायतमा दुई-चार पटक प्रतिद्वन्द्विता पनि गर्नुभयो। नेपाली समाजमा प्रचलित बाल्य विवाह प्रथाका विरोध तथा बिधवा विवाहका पक्षमा एक सामाजिक आन्दोलन खडा भएको थियो। यस कार्यको पनि गुरुदायित्व सम्हाल्ने अभिभारा आफूले नै लिनुभएको थियो। यस्ता कार्यहरूका माध्यमले तथा जातीय कंग्रेसका सदस्यका रूपमा रहेकाले उहाँ धेरै मानिसका सम्पर्कमा आउनुभएको थियो। त्यसैले आफ्नो जन्मस्थान तथा अन्य ठाउँहरूमा शिक्षा विस्तार तथा सामाजिक कार्यका लागि घुमी हिंड्नुपर्ने हुन्थ्यो।

ओदालगुडीमा अनुष्ठित 'गायत्री पुरश्चरण गायत्री जप' यज्ञका लागि ख्यातिप्राप्त धार्ममति आचार्यका रूपमा ओदालगुडीका धर्मप्रिय जनताले पितृदेवलाई निमन्त्रण गरेर ल्याए। यो निम्तो स्वीकार गर्दै ओदालगुडी आएर मृत्युपर्यन्त उहाँ ओदालगुडीमै बस्नुभयो।

जनताको सहयोगमा ओदालगुडीको त्यो पवित्र यज्ञ स्थापनामा 'विश्वशान्ति मन्दिर' तथा 'विश्वशान्ति विद्यालय'को स्थापना गरेर यहाँ पनि संस्कृत शिक्षा तथा धार्मिक अनुष्ठानको शैलस्तम्भ स्थापना गर्नुभयो । उहाँले राष्ट्रभाषा शिक्षाको पनि थालनी गराउनुभयो । सन् १९५८ मा पितृदेवले ओदालगुडी हाइस्कूलमा (हाल ओदालगुडी उच्चतर माध्यमिक विद्यालय) शिक्षादान गर्न लाग्नुभयो । सरकारी नोकरी गर्न थाले पनि हिन्दी र संस्कृत शिक्षाको प्रसार कार्य भने चलि नै रह्यो । ओदालगुडी बालिका उच्च माध्यमिक विद्यालय स्थापनाका क्षेत्रमा पनि पितृदेवको विशेष सहयोग रहेको थियो । हरिशिङ्गाको लिसिङ गाउँमा संस्कृत टोल स्थापना गर्ने कार्यमा पनि उहाँले सहयोग पुऱ्याउनु भएको थियो ।

कालका प्रवाहमा संस्कृत शिक्षाको प्रसार सीमित हुने सम्भावना देखेर सरकारले संस्कृत विद्यालयहरूमा प्रचलित शिक्षा पद्धतिलाई हटाएर परिवर्तन ल्याउने उद्देश्यले ' आदर्श संस्कृत टोल' निर्माणको नीति निर्धारण गऱ्यो । बान्दरगुडीमा रहेको 'साङ्गवेद विद्यालय' तथा ओदालगुडीको 'विश्वशान्ति विद्यालय'लाई एकत्रित पारेर 'साङ्गवेद विश्वशान्ति आदर्श संस्कृत टोल' स्थापना भयो । सन् १९६८ मा पितृदेवले ओदालगुडी उच्च माध्यमिक विद्यालयको शिक्षणकार्य छोडेर सो टोलको उपाध्यक्षको पद स्वीकार गर्नुभयो । पितृदेवकै असीम प्रयासले गर्दा संस्कृत शिक्षाको यस अनुष्ठानले क्रमशः प्रगति गर्दै गयो । शिक्षाव्रतीका रूपमा कार्य गर्नु सँगसँगै पितृदेवले सामाजिक सेवाको कार्य पनि गर्नुभयो । उहाँले विभिन्न सभा-समितिहरूमा वक्तव्य राखेर एक जना सुवक्ताका रूपमा आफ्नो परिचय स्थापित गरिसक्नु भएको थियो । उहाँले साहित्य चर्चा पनि गर्नुभयो । संस्कृत, असमिया र नेपाली भाषामा उहाँ निबन्ध लेख्ने गर्नुहुन्थ्यो । त्यसभित्रका केही रचना सामयिक पत्रिकाहरूमा प्रकाशित पनि भएका थिए । संस्कृत, नेपाली र असमिया भाषामा उहाँले नाटक पनि लेख्नुभएको थियो । त्यसभित्रका दुई-तीनोटा अभिनित पनि भएका थिए र दुई एउटा मानिसले लगेर हराइदिए ।

पिताजी एक जना अभिनेता पनि हुनुहुन्थ्यो । उहाँले अभिनय गरेर हाँस्य अभिनेताको रूपमा आफ्नो परिचय दिन सक्षम हुनुभएको थियो ।

वृद्धावस्थामा सबैको मन तीर्थमुखी हुन्छ । तर सधैं सत्पथ, पदाचार, धर्म चर्चाद्वारा भगवत् भक्तिमा तल्लीन रहेका कारणले गर्दा कुनै दिन तीर्थ भ्रमणको इच्छा गर्नुभएन । 'यस्य गौरीश्वरश्चिन्ते तीर्थं भोज परं हि सः' (जसका हृदयमा नै गौरीश्वर निवास गर्नुहुन्छ, उसलाई तीर्थ भ्रमणको प्रयोजन नै कहाँ छ र ?) । आफैंले बनाएका सामाजिक अनुष्ठानहरू नै उहाँका लागि तीर्थ हुन् र समाजका लागि गरिएका कार्यहरू नै परम पवित्र यज्ञ । ओदालगुडीमा ' विश्व हिन्दू परिषद्'को शाखा प्रारम्भ गरेर उहाँले भारतीय चिन्तन, भारतीय दर्शन, आचार-व्यवहार तथा विश्व-भ्रातृत्वका विषयमा विभिन्न धर्ममूलक अनुष्ठानहरूमा संलग्न भई उहाँले

पवित्र तीर्थ स्नानको पुण्य प्राप्त गर्नुभएको थियो ।

यसैगरी जीवनभरिको साधनाद्वारा पिताजीले जनसमाजमा स्वीकृति छोडेर जानुभएको थियो । सन् १९७५ को १६ अक्टोबरका दिन दुरारोग्य केन्सर रोगले पीडित भएर उहाँले आफ्नो नश्वर देह त्याग गरेर स्वर्गगामी हुनुभयो ।

विश्ववरेण्य पण्डित डा. बसूसँग एकपटक मैले भेट गर्ने मौका पाएको थिएँ । त्यसबेला उहाँले भनेका कुराहरू मैले अझ बिर्सिएको छुइन । उहाँले भन्नुभएको थियो- 'म गुवाहाटीमा छँदा टीकाराम र बृहस्पति नामका दुई जना विलक्षण विद्यार्थी अध्ययन गर्दथे । उनै टीकारामका तिमी छोरा हौ भने तिमीले भन्नैपर्छ- संस्कृतका विद्यार्थीका रूपमा र यसको प्रसारका लागि उहाँले जुन परिश्रम गर्नुभएको थियो, त्यसको प्रशंसा गरिनु नै पर्दछ । देश निर्माणका क्षेत्रमा संस्कृत शिक्षाको एक गठनात्मक भूमिका रहेको हुन्छ । जुन मानिसको संस्कृतको सम्यक ज्ञान छैन, उसले भारतको आत्मालाई चिनेको हुँदैन र ऊ सम्पूर्ण रूपले भारतीय बन्न सक्तैन ।' यसबाट के बुझ्न सकिन्छ भने, मेरा पितृदेव एक जना महान कर्मका निम्ति प्रेरित देशभक्त मानिस हुनुहुन्थ्यो ।

मेरा जन्मदाता, पथद्रष्टा, शिक्षासेवी, आदर्शका प्रतीक परम आराध्य पितृदेवका स्मृतिमा यो स्मृति अर्घ्य अर्पण गरें ।

*(यो लेख सन् १९८०-८१ मा ओदालगुडी (असम) भारतबाट प्रकाशित असम साहित्य सभाको ओदालगुडी शाखाको 'ओदालगुडी साहित्य सभा पत्रिका'को चौथो अङ्कमा स्वर्गीय डा. द्रोणकुमार उपाध्यायज्यूले आफ्ना बुबाका स्मृतिमा असमिया भाषामा लेखेको लेखको नेपाली अनुवाद हो । त्यस पत्रिकाको सम्पादक हुनुहुन्थ्यो- ओदालगुडीका द्रोणकुमार उपाध्यायज्यूकै सहकर्मी सहशिक्षक जतीन्द्रनाथ बायन)*

# सम्झनामा बेगटी

*– डा. द्रोणकुमार उपाध्याय*

सयौं हजारौं वर्ष बगी बगर् बसाउने, तटीय अनन्त मन रमाउने ।
अगम्यब्रह्मपुत्रको किनारमा रमाइलो छ, रम्य बेगटी फरासिलो घमाइलो ॥(१)

न डर छ डाकुको त्यहाँ न ता धुतार पुग्दछन्, अचम्म ! ढुक्क गाउँले किवाड खोली सुत्तछन् ।
किसान खेती गर्दछन् धरित्री अन्न भर्दछिन्, हुने सधैं हराभरा पयोधरा वसुन्धरा ॥(२)

न ठाउँबाट देखिने न जालझेल नै हुने, न ताकतै छ शत्रुता छ मित्रता जतातता ।
अनन्य स्नेह चाहना अटूट भातृ भावना अदम्य प्रेम भर्दिने प्रदीप्त दीप्त चाहना ॥(३)

यसै सुरम्य गाउँमा म जन्मिएँ म हुर्किएँ, अमूल्य आर्य संस्कृति सिकें अनि ठूलो भएँ ।
पढेर भानुभक्त ती बुझें हिमाली संस्कृति, प्रवास नै भए पनि नेपालीपन सिकें त्यहीं ॥(४)

अहा ! त्यहाँ कती कती सुस्निग्ध फूल फुल्दथे, रमाउँथे मधूकरी मधुरिमा बटुल्दथे ।
थिएन रत्ती कालिमा थियो ललीत लालिमा, मिलिन्दझैं म डुल्दथें सुरम्य आलीआलीमा ॥(५)

मुसुक्क मुस्कुराउँथिन् मधुस्मिता वसुन्धरा, धरित्री शश्यशालिनी छचल्किने हरीतिमा ।
प्रसादमा वयेलिने नवीन धान्यबल्लरी प्रमत्त नृत्य गर्दथे उठी घरी नुही घरी ॥(६)

सबेर भो अबेर भो भनी चरा कराउँथे, किशोर पढ्न उठ्दथे किसान खेत लाग्दथे ।
पूजा गरी पूजारीले प्रभाती रंग फुक्दथे, बुढाबुढी भने नमन् घरै बसेर गर्दथे ॥(७)

बिहान भो सबै जना मिलेर पाठ घोक्दथ्यौं, उठेर ब्रह्मपुत्र गै नुहाई मात्र फिर्दथ्यौं ।
फिरेर झट्ट ती गुरु समीप ढोगी बस्तथ्यौं, मुखाग्र गाई पाठ पुनःनवीन पाठ माग्दथ्यौं ॥ (८)

प्रसिद्ध सांगवेदमा किशोर बालबालिका, पुराण वेद पढ्दथे रमाउँथे कराउँथे ।
कुटील भेदभावको न नाम गन्ध पाइने, सबै जना मिलीजुली पकाउने स्वयम् लिने ॥ (९)

हरेक छात्रछात्रामा गुरु निगाह पुग्दथ्यो, गुरु र शिष्यबीचमा प्रगाढ स्नेह फुल्दथ्यो ।
गुरु स्वयम् पिता सरी सचेत दृष्टि राख्दथे, अहो समुद्र ज्ञानका ! सबै कुरा ती जान्दथे ॥ (१०)

छ सम्झना अझै कति रमाइलो कुरा कति, दिनै भरी भने पनि हुनेछ त्यो अलिकति ।
तसर्थ आज यत्तिमै म लेखनी बिसाउँछु, प्रसंगले मिल्यो भने पुनः पनि सुनाउँछु ॥

सबैमा जन्मभूमिको स्नेह हुन्छ बराबर, जसमा छैन त्यो स्नेह मान्छे हैन जनावर ॥
त्यसैले बेगटी मेरो स्मृतिमा लाग्छ पावन, सम्झँदा दिलमा खिल्छन् दिव्यपुष्प हजारन ॥

# निर्माण नौलो गरौं

१

आयो लौ अवसर नयाँ सृजनको उच्चार नौलो गरौं ।
बिसौं ती अधुरा अपूर्ण सपना सन्धान नौलो गरौं ॥
पूर्खाले अघि जे जति गरिदिए आभार मान्ने गरौं ।
नौलो वेष विचार थप नव लिई निर्माण नौलो गरौं ॥

२

गर्छौं खेती किसान हौं यदि भने यस्तो किसानी गरौं ।
भारी अन्न फलाई वेश अब लौ उत्थान यसको गरौं ।
पारी टन्न स्वदेशको ढुकुटी भो उद्धार अरूको गरौं ।
सारा विश्वमहाँ यो देश चिनिने निर्माण नौलो गरौं ॥

३

छन् खोला रसिला तीबाट सजिलै विद्युत पैदा गरौं ।
छन् खोल्सा खहरा अनेक सबमा, नौलो प्रणाली गडौं ॥
कि अझै सजिलो उपाय छ नयाँ लौ सौर उर्जा गरौं ।
सारा देशभरि प्रकाश छरिने निर्माण नौलो गरौ ॥

४

विद्यार्थी यदि हौं भने अब नयाँ भेला भई प्रण गरौं ।
रच्ने वेद पुराणका ऋषि सरी विद्धान्, विदुषी बनौं ॥
जँच्ने विश्वभरि सुउच्च गुणका ज्ञानी प्रतापी बनौं ।
ढिलो भो अब ता उठौं सब छिटो निर्माण नौलो गरौं ॥

५

शिक्षक हौं यदि ता भने मनमहाँ सङ्कल्प यस्तो गरौं ।
एकै बर्षमहा हटोस् तिर्मिर यो आभा उज्यालो भरौं ॥
विश्व श्रेणीमहाँ पुगोस् मुलुक भरे यस्तै नयाँ प्रण गरौं ।
लौ जागौं अब ता सबै जन उठौं निर्माण नौलो गरौं ॥

६

आफैलाई विनम्र यो मुलुकको नेता यदि मान्दछौ ।
दुःखी यी निमुखा दरिद्र जनता आफ्ना नै ठान्दछौं ॥
धेरै दुःख सहे अभागी यिनले उद्धार यिनको गरौं ।
आजैबाट गरौं कसौं कमर लौ निर्माण नौलो गरौं ॥

७

आफ्नो देश बनाउने यदि तिमी व्यापारी ठान्छौ भने ।
हाम्रो देश पनि नहोस् अघि भनी मन भित्र गुन्छौं भने ॥
व्यापक लक्ष लिई दिगो किसिमको वाणिज्य सस्तो गरौं ।
सारा विश्व फुकोस् परेर पदमा निर्माण नौलो गरौं ॥

८

श्रमजीवी श्रमले सजाउँ अब ता भो देश नौलो गरी ।
आफै देश बनाउने श्रम गरी रोजगार सिर्जन गरी ॥
कस्तै दुःख परोस नजाउँ परदेश श्रम बेच्न बाचा गरौं ।
आफ्नो देश उठाउँदै प्रण गरौं निर्माण नौलो गरौं ॥

९

डाक्टर बुद्धिजीवी श्रमिक अनि सबै सञ्चारकर्मीहरू ।
लागौ, लागी परौं अवश्य अव ता उद्योग नौलो गरौं ॥
ल्याएको गणतन्त्र अमूल्य छ बुद्धी यसको सुरक्षा गरौं ।
चुक्छौ नत्र भने सयौं जुनी भरी निर्माण नौलो गरौं ॥

१०

छाडौं तुच्छ घमण्ड उच्च बिचका धाँजा चिरा साँगुरा ।
लागौं उच्च विचार गर्न अब ता निस्कुन नयाँ आँकुरा ॥
गाऔं गीत नयाँ नवीन सुरले आह्वान नौलो गरौं ।
लाऔं प्रीत नयाँ चिरन्तन हुने निर्माण नौलो गरौं ॥

# मातृभूमि पितृभूमि

मातृभूमि पितृभूमि कर्मभू महान्
धर्मभूमि मोक्षभूमि पुण्यभू महान्

जहाँ पशुपति देवको पुण्य धाम छ
विश्वभरमा एकमात्र हिन्दू नाम छ
बुद्ध, जनक जानकीको जन्मभू महान्
धर्मभूमि मोक्षभूमि पुण्यभू महान्
मातृभूमि पितृभूमि कर्मभू महान्

जहाँ राष्ट्रधर्म बचाउन गोरखनाथ आउँछन्
स्वयम्भूले निरन्तरै सचेत दृष्टि राख्दछन्
देवभूमि तपोभूमि दिव्यभू महान्
धर्मभूमि मोक्षभूमि पुण्यभू महान्
मातृभूमि पितृभूमि कर्मभू महान्

जहाँ पृथ्वीनारायण खडा भई एकतामा बाँध्दछन्
अमरसिंह शहीद भई देशको नाम राख्दछन्
बलभद्र वीर भक्ति शुक्र आदि छन् महान्
धर्मभूमि मोक्षभूमि पुण्यभू महान्
मातृभूमि पितृभूमि कर्मभू महान्

# पौरखी भए

एक्लो व्यक्ति हैन म ...
एक्लो भए के भयो, पौरखी भए
पौरखीको भाग्य फेरिदिन्छ दैवले ।

दीप जल्छ राप-ताप, आगोमा जलेर,
फूल फुल्छ शीत-पानी, घाममा डढेर ।
हामी पाँच दीप जले, विश्व जग्मगाउँछ,
हामी पाँच फूल फुले, विश्व मग्मगाउँछ ।
के हुन नसक्ने छ र ? साहसी भए

एउटा दीप अँध्यारोमा जगमगाउन सक्छ ।
एउटा फूल उजाड मगमागाउन सक्छ
हामी खिले फूल हुन्छौं, हामी बले बत्ती
हामी भित्र लुकेको छ, निर्माणको शक्ति
के हुन नसक्ने छ र पौरखी भए
पौरखीका सामू झुक्नुपर्छ विश्वले ।

# डा. द्रोणकुमार उपाध्यायको वंशवृक्ष एवम् पारिवारिक चिनारी

## गंगाधर पौडेल ,

छोराहरु

### जेठो — देवीदत्त/ गंगा देवी

| | |
|---|---|
| **रामकृष्ण /सिता पौडेल** | नविन/पद्मा पौडेल<br>कविता/ कृष्ण भण्डारी<br>सुनिता/ रिकुल खनाल |
| **दुर्गा / भिमा पौडेल** | कृष्ण/ मनिषा पौडेल<br>विनिता/केशव भट्टराई<br>गितान्जली पौडेल |
| **फाल्गुनी /लिला न्यौपाने** | मालती/ कमल भट्टराई<br>केशव/मिना न्यौपाने<br>महानन्द/भवानी न्यौपाने<br>रञ्जु /फनिन्ठद्र दाहाल<br>राजेन /सविता न्यौपाने<br>विद्या /भेषराज.काप:ले<br>विना /खिल काइराला |
| **थानेश्वरी /धर्मानन्द सुवेदी** | विनोद/बविता सुवेदी<br>कविता/राजू खतिवडा<br>विकास /उषा सूवेदी |
| **दिव्या/ कष्ण आर्चाय** | ज्योत्शना /नारायण गौतम<br>स्वरुप /भारती आर्चाय<br>ज्योति/राम गौतम<br>जोगिता /चन्द्रमणी ढकाल |

### माहिलो — टिकाराम/ भोजमाया

| | |
|---|---|
| **द्रोणकुमार /मिरादेवी पौडेल** | यशवन्त/ परिना पौडेल<br>(याश्ना र प्रियान्स)<br>योगिता/ पंकज भुर्तेल<br>यवनिका/ सुबोध पाण्डे |
| **कोकिला/ तुलसी आचार्य** | राजु/रन्जु आचार्य<br>रञ्जन/कमला आचार्य<br>रमेश/चम्पादेवी आचार्य<br>रिजु/सन्तोष दाहाल |
| **उषा/ लेखनाथ निरौला** | उल्लेख/दिक्षा निरौला<br>उल्था निरौला |

### साहिलो — पुन्य प्रसाद/ प्रभा

| | |
|---|---|
| **श्याम/ शुधा पौडेल** | सुदेश/ अनामिका पौडेल<br>शुभ/ सपन अग्रवाल |
| **गोपाल/ सुस्मा पौडेल** | सुरक्षा/ निराजन दाहाल<br>इप्सा पौडेल |
| **शान्ता / कृष्ण अधिकारी** | अनु/ ज्ञानेन्द्र पोखरेल<br>बिभा/ सरोज पोखरेल<br>रिभा/ मेघराज भण्डारी<br>रक्षा/शान्तिराम कोइराला<br>मनिष/सुबि अधिकारी |
| **निर्मला/ पुण्य प्रसाद खतिवडा** | विक्की/ कृष्ण मोहन कोइराला<br>विजित/ रस्मी खतिवडा<br>श्रद्धा/डिल्लीराज उपाध्याय |
| **शकुन/ गणेश खनाल** | रितेश/प्रिती खनाल<br>नितेश/ आरती खनाल<br>नेहा/ रुपक थपलीया |
| **सविता / पुर्षोत्तम घिमिरे** | प्रतिक घिमिर<br>प्रकृति घिमिर |
| **सरिता/ राजकुमार दाहाल** | इहा दाहाल |
| **सुनिता / राम न्यौपाने** | हर्षित न्यौपाने |

### काइलो — हरी प्रसाद /जानुका

| | |
|---|---|
| **राधेश्याम/ गंगा पौडेल** | सुनिता/सुमन निरौला<br>सुमन / अनु पौडेल<br>- स्भानिक पौडेल |
| **किशोर/ शिला पौडेल** | पुजा/पुण्यप्रसाद काफ्ले<br>पुजन पवन आर्चाय |
| **सिता/ केशवाचार्य बास्कोटा** | हरिनारायण/प्रमिला वास्कोटा<br>उद्धव/भावना बास्कोटा<br>देवराज/ लक्ष्मी बास्कोटा |
| **माया/ पुष्करनाथ तिम्सिना** | सकुन्तला/प्रेमराज न्यौपाने<br>सार्दुल तिम्सिना |

### अन्तरे — इन्द्रलाल/ प्रेमकुमारी

| | |
|---|---|
| **मन्जु/ केदार सत्याल** | सुरेन्द्र/विनिता सत्याल<br>सुवास/ इन्दु सत्याल<br>सुमन/ मिठु सत्याल<br>कल्पना/ शेखर बराल |
| **अन्जु/ ज्योति ढकाल** | सन्जु/ रबिन भण्डारी<br>सरोज/ उषा ढकाल<br>रोशन/ प्रतिमा ढकाल |
| **इन्दु/ इन्द्र रिमाल** | संजीव/ सुष्मा रिमाल<br>कुसुम/रवीन कोइराला<br>संगीता /रोशन घिमिरे<br>सृजना/ विशाल दाहाल |
| **विन्दु/ नरेन्द्र गर्तौला** | रेजिता/ गोपाल निरौला<br>घनेन्द्र /दिपिका गर्तौला<br>रन्जु / सुनिल खतिवडा<br>स्मिता/ शरद खतिवडा |
| **अनिल/अनिता /सरितापौडेल** | अनुप/ अन्जु पौडेल<br>अभिषेक/मिमन्सा पौडेल<br>आलिया पौडेल |
| **प्रमिल/ भावना पौडेल** | पृथा पौडेल<br>प्रयास पौडेल |
| **प्रदिप/स्मृती** | प्रत्युश पौडेल |
| **मिन्दु/ नरेश ढुङ्गाना** | मृदु ढुङगाना |

**श्रीविलास पौडेल , पुण्यमाता पौडेल**

**मनरुपा पौडेल , वसन्धुरा पौडेल**

छोरीहरु

**जन्तरे**

निलकण्ठ / दौपदा / यसोदा लक्ष्मी

- **चन्दन / सन्ध्या पौडेल**: अंकुर पौडेल; आश्था / विपिन न्यौपाने
- **लोकेन्द्र / कल्पना पौडेल**: ब्रजिका पौडेल; ब्रज पौडेल

**कान्छा**

मोती / सिता

- **सुनिल / कल्पना पौडेल**: आभास पौडेल; निष्ठा पौडेल
- **अन्जना / सरदराज गौत**: आर्या / प्रशित स्थापित; अन्ना गौतम

**जेठी**

मनमाया / नन्दलाल सापकोटा

- **दुर्गा / कोशिल्या सापकोटा**: कमल / दिपा; भोजराज / नवनिता; नारायण / सिता; रेवतीरमण / रेनुका; दिपेन्द्र / विना
- **टिकाराम / बसुन्धरा सापकोटा**: लक्ष्मीरमण / विष्णुमाया; मुक्तिनाथ / सिता; विद्या / गंगा मिश्र

**माहिली**

रन्धता / तुलाराम काफ्ले

- **दाताराम / शोभा काफ्ले**: सञ्जय / गिता; नवराज / सविता; युवराज / रञ्जु
- **पवित्रा / मित्रलाल घिमिरे**: निर्मल / दिपा; ज्योती / कमल भट्टराई; स्मृति / पेशल पोखरेल

**साहिली**

हिमादेवी / हरीप्रसाद कोइराला

- **शान्ती / अमरनाथ भट्टराई**: महेन्द्रनाथ; राजेन्द्रनाथ; उषादेवी; बैजन्ती; तोर्नवलादेवी

**काइली**

कुन्तीदेवी / मित्रलाल काफ्ले

- **इन्द्र / सरस्वती काफ्ले**: सवनम / राजन आचार्य; विनम / सन्तोष कार्की; विवेक / निकु काफ्ले; सोनम काफ्ले
- **नारायण / लक्ष्मी काफ्ले**: दिक्षा / रमेश लूइटेल; दिपा / विमल खनाल; रुपा काफ्ले; लिना काफ्ले
- **कुषा / देवी न्यौपाने**: गिता न्यौपाने
- **फेसा / यदुनाथ बराल**: विमल बराल; मोहन बराल; लता बराल; तिलक बराल; बसन्त बराल
- **जानुका / सोमदत्त रेग्मी**: शंखर रेग्मी; टंकनाथ रेग्मी; अम्बिका रेग्मी; गोकुल रेग्मी

**अन्तरी**

सरस्वती / काशिनाथ निरौला

- **एकमात्र छोरी**

**कान्छी**

चुडेश्वरी / मेघप्रसाद वास्कोटा

- **देवीप्रसाद वास्कोटा**
- **घनश्याम / सुशिला वास्कोटा**: सजिना वास्कोटा; सलिना वास्कोटा; एलिना वास्कोटा
- **ललित / रिता वास्कोटा**: सुम्नीमा सविन बा; सदिक्षा वास्कोटा; ब्रबिम वास्कोटा
- **सिता / तेजप्रसाद रिजाल**: होमनाथ / बीनु रिज; ललित / ..., रिजाल; खिरोद / प्रिति.रिज
- **तारा / नन्दलाल घिमिरे**: ललित / जानुका घि; बासू घिमिरे; अनु / पल्लभ ढव; मनु घिमिरे
- **आशा / रामशरण रिसाल**: अभिशेक रिसाल
- **दिपा / चन्द्र प्र. भट्टराई**: अश्रु भट्टराई; इशा भट्टराई
- **सुनिता / ऋषिराज गौतम**: शिर्षक गौतम; ऋशब गौतम
- **लिला / हरि दाहाल**: स्पृय दाहाल


ससुराली खाल
सासु/ससूरा
जेठान तथा सालो बुहारीहरु
गणेश चन्द्र/दमयन्ती खनाल
कृष्ण /विना खनाल
रिदिप/उमा खनाल
रञ्जिता/भीम पराजुली
रस्मिता/दिपेन के.सी.
मीरा/द्रोण पौडेल
थानेश्वर/दिपा
सुप्रिया/सुयश भट्टराई
नवराज/सिता खनाल
अंशुमन खनाल
मिनाक्षी खनाल
दुर्गा /होमेश्वरी खनाल
निलाक्षी खनाल
रुपम खनाल
बुद्धी /झरना खनाल
दृदिषा खनाल
दिक्षिता खनाल
विद्यया/हिमसागर सापकोटा
झरना/पंकज अधिकारी
हेमा/संजिव पौडेल
रिदु/संन्जय उपाध्याय
दिपक/हिमा खनाल
अनमोल खनाल
डम्मरु बल्लभ/यशोदा देवी चापागाई
छोराको ससुराली खाल
सम्धी
काईंलो छोरा
शुरेशकुमार /
शारदा चापागाई
पेशल/सुनिता चापागाई
परीना /यशवन्त पौडेल
मेरीना/सुदिप भण्डारी
टिका प्रसाद/
हुमादेवी भुर्तेल
ठुली छोरीको घर तर्फ
सम्धी
कान्छो छोरा
दिव्य /
शुभद्रा भुर्तेल
पंकज/
योगिता भुर्तेल
आदित्य भुर्तेल
दुर्लभ भुर्तेल
हितराज/टुपकुमारी पाण्डे
सानी छोरीको घर तर्फ
सम्धी
जेठो छोरा
राजबाबु/शोभा पाण्डे
सुरज /सपना पाण्डे
रिया पाण्डे
आरुष पाण्डे
रिता पाण्डे/ब्रेड इटिड.
शन्नी र क्लारा
सुबोध/यवनिका पाण्डे
सुयश बाबु पाण्डे
सन्तोष/शीला पाण्डे
पृषा पाण्डे


बाल्य अवस्थामा डा. द्रोणकुमार उपाध्याय।


आमा–बुबा र बहिनीहरुसँग डा. द्रोणकुमार उपाध्याय।


बुबाका साथमा डा. द्रोणकुमार उपाध्याय।


शुभविवाह २०३४ साल फागुन २७ गते।



*विवाह पछि डा.द्रोणकुमार उपाध्याय दम्पत्ति ।*



*भाइ किशोर, बहिनी उषा, श्रीमती मीरा, छोरा यशवन्त र छोरी योगिताका साथमा (२०३८ साल) ।*



*श्रीमतीका साथमा डा. द्रोण उपाध्याय ।*



*बहिनी उषाका साथमा आमा भेजमाया ।*



*दाजुभाइका साथमा सोलङ घुम्न जाँदा ससुरालीमा डा. द्रोणकुमार उपाध्याय परिवार ।*




अन्तरे काका इन्द्रप्रसादको दश दिनको काममा डा. द्रोणकुमार उपाध्यायका साथमा दाजुभाइहरु।



हजुरबुबा पं.गंगाधर उपाध्यायको शालीक स्थापनाको क्रममा बटियामारी असममा डा. द्रोणकुमार उपाध्याय।



दशैंको टीकापछि भाइ-बुहारी किशोर+शीलासँग डा. द्रोणकुमार उपाध्याय दम्पत्ति।



ब्रह्मपुत्रको किनारमा श्राद्ध गर्दै डा. द्रोणकुमार उपाध्याय।



युवा अवस्थामा डा. द्रोणकुमार उपाध्याय।



अन्तरी काकीसँग दशैंमा टीका थाप्नुहुँदै डा. द्रोण।



कान्छा काका-काकीसँग दशैंमा टीका थाप्नुहुँदै डा. द्रोण।



साइँली काकीसँग दशैंमा टीका थाप्नुहुँदै डा. द्रोण।



जेठी बहिनी-ज्वाइँ, जेठी बहिनी र कान्छी बहिनीसँग डा.द्रोणकुमार।



विराटनगरमा दशैंको टीकामा पारिवारिक भेटघाट।



*छोरा, बुहारी, नातिनी र श्रीमतीको साथमा डा.द्रोणकुमार।*



*जेठी छोरी–ज्वाइँ योगिता, पंकज भुर्तेल, नातिहरु र श्रीमतीको साथमा डा.द्रोणकुमार।*



*कान्छी छोरी–ज्वाइँ यवनिका, सुवोध पाण्डे, नाति र श्रीमतीको साथमा डा. द्रोणकुमार।*



*छोरा, छोरी र श्रीमतीको साथमा डा. द्रोणकुमार।*



*अध्ययनका क्रममा कीर्तिपुर कलेजमा डा. द्रोणकुमार उपाध्याय।*



नाति प्रियान्सको साथमा डा. द्रोणकुमार ।



कान्छो नाति प्रियान्स ।



सासू-ससुराका साथमा डा. द्रोणकुमार दम्पत्ति ।



जेठो नाति आदित्यसँग मेची बहुमुखी क्याम्पसबाट सेवा निवृत्त भएको दिन प्रसन्न मुद्रामा डा. द्रोणकुमार उपाध्याय ।



डा. द्रोणकुमार उपाध्याय जन्मिनुभएको स्थानको माटो समाउँदै भाइ रामकृष्ण उपाध्याय । हाल उक्त स्थानमा रहेको घर भत्किसकेको छ ।

## विभिन्न समयमा भ्रमणका क्रममा डा.द्रोणकुमार दम्पत्ति ।













## डा. द्रोणकुमार उपाध्याय स्मृतिग्रन्थ प्रकाशनका लागि भारत असमका विभिन्न स्थानका स्थलगत अध्ययनका तस्वीरहरू (२०७७/१०/१५-१९)



*डा. द्रोण उपाध्यायले कक्षा-६ सम्म अध्ययन गर्नुभएको विद्यालय बटियामारी मजलीया विद्यालय।*



*डा. द्रोण उपाध्यायका हजुरबुबा गंगाधर उपाध्ययले स्थापना गर्नुभएको स्कूल र उहाँको शालीक।*




*डा. द्रोणकुमार उपाध्यायले माध्यमिक तहसम्म अध्ययन गर्नुभएको उदालगुढी हाइस्कूलको कार्यालय (माथि)। उहाँले बसेर अध्ययन गर्नुभएको डेक्स बेञ्च (तल)।*





*डा. द्रोणकुमार उपाध्यायको बाल्यकाल व्यतित गरेको घर।*



*डा. द्रोणकुमार उपाध्याय हजुरबुबा गंगाधर उपाध्ययले स्थापना गर्नुभएको स्कूल र उहाँको शालीकमा सामूहिक तस्वीर।*



*असमका बहुआयामिक व्यक्तित्व विनोद खनालको निवासमा डा.द्रोणकुमार उपाध्याय सम्बन्धी कुराकानी सकेपछि सामूहिक तस्वीर खिचाउँदै सम्पादक तथा प्रकाशक परिवार।*



मेची बहुमुखी क्याम्पसको स्वर्ण महोत्सव अन्तरगत त्रिविका तत्कालीन उपकूलपति श्री हिराबहादुर महर्जनबाट सम्मानपत्र ग्रहण गर्दै डा.द्रोण उपाध्याय।




भोजपुरमा आयोजित लोकवार्ता परिषदद्वारा आयोजित कार्यक्रममा प्रा.डा. चूडामणि बन्धुको हातबाट प्रमाणपत्र ग्रहण गर्दै डा.द्रोण उपाध्याय।



राष्ट्रिय हिन्दू एकता मञ्चको कार्यक्रममा सम्मानपत्र ग्रहण गर्दै डा.द्रोण उपाध्याय।



मेची बहुमुखी क्याम्पसबाट सेवा निवृत्त बिदाइ कार्यक्रममा सहकर्मी श्री अरुणकुमार भट्टराईबाट बिदाइको पुष्पगुच्छा ग्रहण गर्दै डा.द्रोण उपाध्याय।



झापाली साहित्यकारहरुको बीचमा लेखनाथ चोकस्थित कविशिरोमणि लेखनाथ पौडेलको शालीक अगाडि डा.द्रोणकुमार उपाध्याय।



वैदिक समाजका सहभागीहरुसँग डा.द्रोणकुमार उपाध्याय ।





स्वामी विवेकानन्द संस्कृति ज्ञान प्रतियोगितामा सहभागी हुँदै ब्याकुल माहिलासहितका डा.द्रोणकुमार उपाध्याय ।



लेखनाथ पुस्तकालयको सुकबारे भेलामा सहभागी खगिन्द्रा खुसीको रचना श्रवण गर्दै डा.द्रोणकुमार उपाध्याय ।



साहित्यकार झमक घिमिरेसँग डा.द्रोणकुमार उपाध्याय ।




आर्ट अफ लिभिङको शिविरमा डा.द्रोणकुमार उपाध्याय ।



आफ्नै रचनामा मग्न हुँदै डा. उपाध्याय ।




*विभिन्न अन्तर्राष्ट्रिय कार्यक्रममा सहभागिता जनाउनु हुँदै डा. द्रोणकुमार उपाध्याय ।*






*विभिन्न अन्तर्राष्ट्रिय कार्यक्रममा सहभागिता जनाउनु हुँदै डा. द्रोणकुमार उपाध्याय।*






*विभिन्न अन्तर्राष्ट्रिय कार्यक्रममा सहभागिता जनाउनु हुँदै डा. द्रोणकुमार उपाध्याय ।*





# डा.द्रोणकुमार उपाध्यायका केही योग्यताका प्रमाण-पत्र तथा सम्मान-पत्रहरू



त्रिभुवन विश्वविद्यालय

Tribhuban University

DUPLICATE

द्रोण कुमार उपाध्याय विक्रम सम्वत् २०२९ मा भएको वार्षिक परीक्षामा नेपाली विषयहरू लिएर द्वितीय श्रेणीमा उत्तीर्ण भई माष्टर अफ आर्टस् उपाधिको निमित्त योग्य ठहरिएकोले दिनाङ्क २०३४ जेष्ठ २३ मा निजलाई माष्टर अफ आर्टस उपाधि प्रदान गरिएको छ भनी प्रमाणित गरिन्छ ।

*This is to certify that* Drona Kumar Upadhyaya *having been examined in* Nepali *in the* Annual *Examination held in the year* 1973 *and found qualified for the Degree of* **Master of Arts** *and placed in the* Second *Class, the Degree of* **Master of Arts** *has been conferred on him/her on* the 5th June 1977

Kathmandu, Nepal.

Date 26 MAR 2004

Vice-Chancellor



राष्ट्रभाषा प्रचार समिति, वर्धा

राष्ट्रभाषा-कोविद

उपाधिपत्र

श्री द्रोणकुमार उपाध्याय (पिता / पति श्री टीकाराम उपाध्याय) को परीक्षा-क्रमसंख्या ४०६८ केन्द्र ढेकियाजुली से अप्रैल १९७६ में राष्ट्रभाषा-कोविद तीसरी श्रेणीमें उत्तीर्ण होनेके उपलक्ष्यमें

राष्ट्रभाषा-कोविद

उपाधि और उसके प्रमाणमें यह उपाधिपत्र प्रदान किया जाता है।

मन्त्री, राष्ट्रभाषा प्रचार समिति, वर्धा

परीक्षा-मन्त्री, राष्ट्रभाषा प्रचार समिति, वर्धा

तारीख २५। ६।१९७६

University Of North Bengal



*This is to certify that* Drona Kumar Upadhyay *has this day been admitted to the degree of Doctor of Philosophy (Ph. D.) in* Nepali *in the Faculty of* Arts *in recognition of the thesis,* " NEPALI SAWAI KAVYAKO VISHLESHANATMAK MULYANKAN".

Raja Rammohunpur
Darjeeling - 734430

19th February, 2004

Vice-Chancellor



ইউনিয়ন ক্লাব ও লাইব্রেরী এবং দেশ-বিদেশের বিশ্ববিদ্যালয়ের
রবীন্দ্র বিশেষজ্ঞ অধ্যাপক, অধ্যাপিকাগণের সক্রিয় সহযোগিতায়
বিশ্ব বঙ্গ সাহিত্য ও সংস্কৃতি সম্মেলন (রাঁচি শাখা) আয়োজিত
জাতীয় আলোচনাচক্র
রবি প্রণাম
শংসা পত্র

বিশ্ব বঙ্গ সাহিত্য ও সংস্কৃতি সম্মেলন (রাঁচি শাখা) আয়োজিত ২৫, ২৬, ২৭ শে চৈত্র, ১৪১৮ (ইং ৮, ৯, ১০ এপ্রিল ২০১২) তিন দিনের জাতীয় আলোচনাচক্রে অংশগ্রহণের/গবেষণামূলক প্রবন্ধ পাঠের স্বীকৃতি স্বরূপ অধ্যাপক দ্রোণ কুমার উপাধ্যায় কে এই অভিজ্ঞান প্রশস্তি প্রদান করা হল। তাঁর প্রবন্ধের শিরোনাম নেপালি সাহিত্যে রবীন্দ্রনাথ।

অমলেন্দু চক্রবর্তী
(বিভাগীয় প্রধান, বাংলা বিভাগ
গৌহাটি বিশ্ববিদ্যালয়, আসাম)
আলোচনা চক্রের পরিচালক

চিত্তরঞ্জন লাহা
(প্রাক্তন উপাচার্য, রাঁচি বিশ্ববিদ্যালয়)
সভাপতি
বিশ্ব বঙ্গ সাহিত্য ও সংস্কৃতি সম্মেলন,
রাঁচি শাখা



INTERNATIONAL SEMINAR
ON
NEPALI CULTURE—2015

*Organized by*
Seminar Committee of International Seminar on Nepali Culture-2015,
[Milanjyoti Natya Mancha, Village-Gadharia Pathar, P.O.-Gomeri, Dist.-Sonitpur, Assam (India) PIN-784172]
On the Occasion of Silver Jubilee Celebration of
Milanjyoti Utsav Samiti.

Certificate of Participation

*This is to certify that Sri/Smt/Dr.* DRONA KUMAR UPADHYAYA PAUDEL *has attended the International Seminar on Nepali Culture-2015 held on 31st January and 1st February of 2015 as Delegate/Paper Presenter/Chair Person/Resource Person/Observer/Guest on 31st January/1st February, 2015.*

*He/She has Presented Paper entitled* Social and Cultural Transformation in Nepali Culture and Society *in the Seminar.*

(Sri Binod Dabari)
General Secretary
Seminar Committee,
ISNC-2015.

(Dr. Dharani Dhungel)
Working President,
Seminar Committee,
ISNC-2015.

(Sri Deb Kumar Khatiwoda)
Convenor,
Seminar Committee,
ISNC-2015.

(Dr. Purushottam Bhandari)
President,
Seminar Committee,
ISNC-2015.



INTERNATIONAL SEMINAR
on
The Renaissance
Across Continents and Cultures : A Trans-disciplinary Perspectiv
Organised by
Department of English
Samsi College, Samsi, Malda, West Bengal, India - 732139

*This is to certify that Prof./Dr./Mr./Ms.* Drona Kumar Upadhyaya *of* Nepal (T.U.) *participated as Resourse Person/ Invited Speaker/ Chairperson (of a Technical Session)/ ~~Paper Presenter~~/ Delegate in the International seminar on "The Renaissance acros Continents and Cultures : A Trans-disciplinary Perspective" held at Samsi College, Samsi, Malda, West Benga on the 9th day of January 2016. He/She also presented a paper entitled ..........*

Sri Amlan Bhaduri
President
msi College Governing Body

Dr. Narayan Chandra Basunia
Joint Secretary
Seminar Organising Committee

Tapas Kr Barman Barman
Joint Secretary
Seminar Organising Committee

Md. Abdul Wahab
Convenor
Seminar Organising Committee

Dr. Pralay Kanti Ghosh
Teacher-in-Charge & Chairma
Seminar Organising Committe



ESTD 2015
RAIGANJ UNIVERSITY
One-Day International Seminar
On
Philosophy, Religion and Society.
12th March, 2016
*Organised by :*
DEPARTMENT OF PHILOSOPHY

*This is to certify that Prof./Dr./Mr./Smt.* Drona Kumar Upadhyaya *of ..........participated/Chair Session/presented a paper entitled.......... in the one-day International Seminar held on 12th March, 2016*

Dr. Ajoy Kr. Ghosh
Registrar (Officiating)
Raiganj University

Dr. Bhaskar Jha
Head, Dept. of Philosophy &
Convenor, Seminar Organising Committee



Indian Council of Social Science Research

INTERNATIONAL SEMINAR

THIS

CERTIFICATE OF PARTICIPATION

IS CONFERRED TO

*Dr. Drona Kumar Upadhyay*

NEPAL

IN RECOGNITION OF HIS VALUABLE PARTICIPATION AS RESOURCE PERSON IN THE SEMINAR ON

POVERTY BEYOND BORDERS

(Understanding Poverty in the North East India and its Neighbouring Countries)

HELD ON 10TH, 11TH & 12TH FEB. 2016

Organised by : RESEARCH FORUM

Pramathesh Barua College, Gauripur, Assam, India.

(Dr. Akhtarul Islam)
Convenor
Research Forum

(Ghanakanta Das)
Principal P.B. College
&
Chairperson, Research Forum



ONE-DAY INTERNATIONAL SEMINAR

ESTD. - 2015

ON

"INFLUENCE OF SANSKRIT ON INDIAN CULTURE"

11TH MARCH 2016

*Organized by:*

DEPARTMENT OF SANSKRIT

RAIGANJ UNIVERSITY

CERTIFICATE

*This is to certify that Prof./Dr./Mr./Smt* Drona Kumar Upadhyaya *has Chaired a Technical Session during the International Seminar on "Influence of Sanskrit on Indian Culture" organized by Department of Sanskrit, Raiganj University on 11th March 2016 at Raiganj University.*

Vice-Chancellor
Raiganj University

Registrar
Raiganj University(Officiating)

Convener cum
Organizing Secretary



Phone & Fax : 03513 - 165252

SAMSI COLLEGE

ESTD - 1968

Affiliated to the University of Gour Banga

POST - SAMSI • DISTRICT - MALDA • WEST BENGAL • PIN - 732139

Ref.No. Date........................

ATTENDANCE CERTIFICATE

This is to Certify that Dr. Dron Updhaya, Deptt. of Nepali, Trivuban University, Jhapa Campus, Nepal, has attended as the Speaker in the Inter National Seminar organized by the Deptt. of Bengali, Samsi College, Samsi, Malda, West Bengal on "Bangla Bhasa o Sahitye nana charcha" held on date 17th February, 2015.

Dr. Manoje Kumar Bhoje
Dr. Narayan Chandra Basunia
Jnt.Convenor
Seminar Organizing Committee

Dr. Pralay Kanti Ghosh
Chairman
Seminar Organizing Committee



UNIVERSITY OF NORTH BENGAL

DEPARTMENT OF NEPALI

March 15-16, 2012

UGC Sponsored National Seminar on

NEPALI FOLKLORE

Certificate

Certified that ....PROF. DRONA KUMAR UPADHYAYA....

of ....Mechi Campus, Bhadrapur, Nepal.... has attended as Resource Person / contributed a paper / actively participated in the National Seminar on NEPALI FOLKLORE under UGC merged scheme organised by Department of Nepali, University of North Bengal held on March 15 and 16, 2012 at Department of Nepali, NBU.

His/Her title of the paper was ..............................

Sri N.C.Khati
Head
Department of Nepali, NBU

Sri Pushkar Parajuli
Coordinator/Director
National Seminar on Nepali Folklore

# असम नेपाली नाट्य सम्मेलन

(समन्वय संस्कृतिक भावनामा संगठित भारतीय परिवार)

## ASSAM NEPALI NATYA SAMMELAN

*A Dramatic Cultural Unity for Rural Development*

Regd. No.- SPR/240/E/70-2011-2012
H.Q.- TEZPUR, SONITPUR (ASSAM) - 784001

**दोस्रो महाधिवेशन, राज्यिक नाट्य महोत्सव एवं सम्मान समारोह**

पण्डित हरिनारायण विद्याभुषण क्षेत्र, बटियामारी, विहाली, शोणितपुर (असम)

मिति : २९, ३०, ३१ दिसम्बर, २०१३

ASSAM NEPALI NATYA SAMMELAN
Estd. 2002
अनेकतामा एकता

विशिष्ट सेवा सम्मान

सेवामा
श्रीमान/श्रीमती डा. द्रोण उपाध्याय पौड्याल
भद्रपुर, नेपाल

महाशय/महाशया,

असम नेपाली नाट्य सम्मेलनका पक्षमा सांस्कृतिक अभिवादन ग्रहण गर्नुहोला। उत्तर पूर्वाञ्चल असम/भारतीय नेपाली नाटक/ नृत्य/ संगीत/ लेखन/मञ्चन/परिचालना/अभिनय/संगठन/अनुसृजना/ मौलिक सृजना मार्फत आफ्नो परिश्रम र लगनशीलताले विशाल नाट्यक्षेत्रमा हजुरले पुऱ्याउनु भएको अवदानलाई स्वीकृति प्रदान गर्दै, असम नेपाली नाट्य सम्मेलन, सम्मेलनको दोस्रो महाधिवेशन पण्डित हरिनारायण विद्याभुषण क्षेत्रको नाट्यतीर्थमा हजुरलाई ......विशिष्ट सेवा...... सम्मानले सम्मानित गर्न पाउँदा हामी गौरव अनुभव गरि रहेछौं। हाम्रो सम्मान ग्रहण गरि दिनुहोला।

हे महानुभव, हजुरको एकाग्र सृजनशीलता जातिको कलाकृष्टि, संस्कृति प्रति रहेको प्रेम र उत्सर्गित मनोभाव आउने पिँढ़ि र प्रजन्मको निम्ति प्रेरणाको उत्स बनोस। हजुरको सृजनी प्रतिभाले आउँदो दिनहरूमा विश्व दरवारमा हाम्रो शिर उचा पार्नमा अग्रसर रहोस, परमपिता सँग यही प्रार्थना छ।

**हजुरको सुस्वास्थ्य र दीर्घायु कामनाको साथ।**

| | | | | | |
|---|---|---|---|---|---|
| सञ्जय खनाल | बिनोद खनाल | खगेन भराली, सञ्जीव लुइटेल | ज्ञानबहादुर क्षेत्री | मोतिलाल शर्म्मा | पूर्णकुमार शर्म्मा |
| अध्यक्ष | का: अध्यक्ष | मूल सचिवद्वय | अध्यक्ष | का: अध्यक्ष | मूल सचिव |
| स्वागतकारिणी समिति | | | असम नेपाली नाट्य सम्मेलन | | |

इन्दै विन्ति गरुन् झुकेर पदमा त्यो विन्ति मान्दैन त्यो ।।
आयो तप्प टिप्यो लग्यो मिति पुग्यो टारेर टर्दैन त्यो ।।

# हार्दिक श्रद्धाञ्जली

जन्म
वि.सं. २००६।०३।०५

स्वर्गारोहण
वि.सं. २०७६।१०।१५

**स्व. द्रोणकुमार उपाध्याय पौडेल**

## हार्दिक समवेदना

भोजपुर जिल्ला दिङला गढीगाउँ हाल षडानन्द नगरपालिका वडा नं. ७ बाट उच्च शिक्षा हासिल गर्न असम (भारत) को दरंगा जिल्लाको बटियामारिमा जानु भएका पिता टिकाराम शास्त्री पौडेल आमा भोजमाया पौडेलका जेठा छोराका रुपमा २००६ साल असार ५ गते जन्म भई असम नौगाउँ निवासी पिता गणेशचन्द्र खनाल माता दमयन्ता खनालकी जेठी छोरी मिरादेवी खनालसंग २०३४ सालमा विवाह भई १ पुत्र दुई पुत्रीका पिता असममा उच्च अध्ययन गरी पद्मकन्या क्याम्पस काठमाडौंमा अध्यापन पश्यात मेची बहुमुखी क्याम्पस भद्रपुरमा लामो समय अध्यापनको क्रममा सहायक क्याम्पस प्रमुखको जिम्मेवारी वहन गरी सक्नु भएका भाषासेवी, ७ भाषाका ज्ञाता, ७ कृतिका जन्मदाता, लोक साहित्यमा विद्यावारिधि गर्नु भएका, विभिन्न संघ संस्थामा संलग्न यस संस्थाको मनोरथ श्रष्टा साहित्य पुरस्कार-२०७६ बाट सम्मानित भद्रपुर नगरपालिका वार्ड नं. १० मैत्री टोल निवासी डा. द्रोणकुमार उपाध्याय पौडेलको यहि २०७६ साल माघ १५ गते ७१ बर्षको उमेरमा परमधामगमन भएकोमा देवकोटा स्मारक संरक्षण तथा व्यवस्थापन समिति परिवार दुःखित एवम् स्तब्ध भएको छ ।

यस दुःखको घडीमा रहनु हुने पत्नी मिरादेवी पौडेल, छोरा बुहारी यशवन्त+परिना, छोरी ज्वाईंहरु योगिता+पंकज भुर्तेल, भवनिका+सुवोध पाण्डे, नाति नातिनीहरु लगायत इष्टमित्र, कुलकुटुम्ब, छरछिमेकमा पर्न गएको शोकप्रति समवेदना प्रकट गर्दै दिवङ्गत आत्माको चिर शान्तिको कामना सहित भावपूर्ण श्रद्धाञ्जली अर्पण गर्दछौं ।

| | |
|---|---|
| राजु बराल | सन्तोष पोखरेल |
| सचिव | अध्यक्ष |

**देवकोटा स्मारक संरक्षण तथा व्यवस्थापन समिति**
भद्रपुर-९

# कलियाबर भानु समिति

## KALIABOR BHANU SAMITTEE

Auguri, Bengena Ati, Nagaon (Assam)
Regd. No-1086/1987-88 Estd-1972

वासांसि जीर्णानि यथा विहाय
नवानि गृहणाति नरोऽपराणि
तथा शरिराणि विहाय जीर्णान्य-
न्यानि संयाति नवानि देही ॥ २०/०२ गीता

## शोक समवेदना

गत अं 29/01/2020 तारिख (वि.सं. २०७६ माघ १५ गते) बुधवार शिक्षासेवी तथा साहित्यकार डा. द्रोण कुमार उपाध्याय पौडेलज्यूको परलोक प्राप्ति भएको समाचारले असमस्थित कलियाबर भानु समितिका समस्त परिवार वर्ग शोकाकुल भएका छौं । उहाँको निधनले हाम्रो नेपालीभाषा, लोकसाहित्य र संस्कृतिको लागि एक अपूरणीय क्षति भएको छ । उहाँ कलियाबर भानु समितिका एकजना शुभाकांक्षी मात्रै हवैन उहाँले हामीलाई दिनु भएको विभिन्न सहयोग, परामर्श हामी कहिल्यै बिर्सिन सक्ने छैनौं ।

आज अं 02/02/2020 तारिख (वि.सं. २०७६ माघ १९ गते) आइतवार दिउँसो एक बजे कलियाबर भानु भवनमा अनुष्ठित भएको कलियाबर भानु समिति र कलियाबर भानु समिति महिला मञ्चको संयुक्त सभाले उहाँको दिवंगत आत्माको चीरशान्तिका लागि एक मिनिट ईश्वरसंग मौन प्रार्थना गरेर शोक सन्तप्त परिवार वर्गमा समवेदना प्रकट गर्दछ ।

कलियाबर भानु समितिको भएर

| | | |
|---|---|---|
| दिगबीर कार्की | मोहन उपाध्याय | सोमादेवी |
| सभापति | थानेश्वर खनाल | सभानेत्री |
| नर बाहादुर कार्की | संयुक्त सचिव | दमयन्ती देवी |
| कार्यकारी सभापति | | पुनम देवी |
| | | संयुक्त सचिव |
| | | महिला मञ्च |

**कलियाबर भानु समिति**

मिति : 02/02/2020

# वैदिक समाज नेपाल झापा

ओ३म विद्यां चाविद्यां च यस्तद्वेवोभयं सह ।
अविद्यया मृत्युं तीर्त्वा विद्ययामृतमश्नुते ॥
ओ३म वायुरनिलममृतमथेदं भस्मान्तँ शरीरम् ।
ओ३म क्रतो स्मर क्लिवे स्मर कृतं स्मर ॥
ओ३म अग्ने नय सुपथा राय अस्मान्विश्वानी देव वयुनानि विद्वान् ।
युयोध्यस्मज्जुराणमेनो भुयिष्ठां ते नम उक्तिं विद्येम ॥
ओ३म हिरण्ययेन पात्रेण सत्यस्यापिहितं मुखम् ।
योऽसावादित्ये पुरुषः सोऽसावहम् । ओ३म खं व्रहम ॥

जन्मः
वि.सं.२००६/०३/०५

स्वर्गारोहणः
वि.सं.२०७६/१०/१५

## हार्दिक समवेदना

**स्व.डा द्रोणकुमार उपाध्याय पौडेल**

वैदिक समाज झापाका अध्यक्ष भद्रपुर १० चन्द्रगढी मैत्री टोल निवासी शिक्षासेवी तथा साहित्यकार डा. द्रोणकुमार पौडेलको ७१
वर्षको उमेरमा मिति २०७६ साल माघ १५ गते निधन भएकोले हामी स्तब्ध र मर्माहत भएका छौं । यस समाजको स्थापना कालदेखि
आफ्नो शरीरमा रक्त सञ्चार प्रवाह रहुञ्जेलसम्म निरन्तर सामाजिक सुधारका लागि आदिम ग्रन्थ वेद विद्याको अध्ययन तथा अध्यापन
गराइ रहनु भएको अध्यक्ष पौडेलको निधनले संस्थाको मूल खम्बा नै गुमेको अवस्था छ । यो रिक्तता पूर्ति गर्न हामी लाई निकै ठूलो
अभिभारा समेत थपिएको छ । अध्यक्ष पौडेलले समाज सुधारका लागि हामीलाई देखाउनु भएको बाटो निरन्तर अगाडि बढाउन हामी
प्रतिबद्ध रहँदै वैदिक सभ्यताको पालना गरिरहने छौं । वहाँको इच्छा अनुसार मृत्यु संस्कार समेत आदिम् ग्रन्थ वेद विद्याको निर्देशन
अनुसार भइरहेको छ। १६ औं संस्कार मध्ये अन्तिम संस्कारका रूपमा रहेको मृत्यु संस्कारको वैदिक कर्मले वहाँको आत्मा परमात्माको
वासमा पुग्न सक्छ भन्ने विश्वास छ। जन्म जस्तै मृत्यु पनि प्रकृतिको नियम हो। यस नियमलाई हामी सवैले स्वीकार गर्नै पर्ने हुन्छ।

वि सं २००६ साल असार ५ गते स्वर्गीय टिकाराम शास्त्री उपाध्याय पौडेल तथा भेजमायाका कोखबाट जेष्ठ सुपुत्रका रूपमा
भारतको असाम राज्य अर्न्तगत सोनितपुर जिल्लाको वाटियामारीमा जन्मनु भएका अध्यक्ष पौडेलले वि सं २०३४ फाल्गुण २७ गते
आसाम नौगाउं सोलुड निवासी स्वर्गीय गणेशप्रसाद तथा दमयन्ता खनालकी सुपुत्री मिरादेवी खनालसँग वैवाहिक जीवनको शुत्रपात
गर्नुभएको थियो। आफ्नै पिता पुर्खाको माटोमा बसेर सेवा गर्ने इच्छा अनुसार वि सं २०३८ साल देखि त्रि वि अर्न्तगत भद्रपुर स्थित मेची
बहुमुखी क्याम्पसमा नेपाली विषयको प्राध्यापक भइ ३२ वर्ष शिक्षण गरेर सेवा निवृत्त हुनु भयो । यस अवधिमा नेपाली भाषा विभाग
प्रमुख, सहायक क्याम्पस प्रमुख लगायत शैक्षिक प्रशासनिक जिम्मेवारी समेत सफलता पुर्वक निर्वाह गर्नु भएको थियो । उहाँका लोक
साहित्य तथा समालोचनाका विभिन्न पुस्तक तथा प्रसस्तै लेख रचनाहरू समेत प्रकाशित छन्। उहाँले नेपाली मौलिक लोक साहित्यको
अध्येता भएर पहिचान गुम्न लागेका कतिपय जातिका भाषा, साहित्यको उत्थानमा बिर्सनै नसक्ने गुण लगाउनु भएको छ । लोक
साहित्यमा विद्यावारिधि समेत गर्नु भएका उहाँका लोकवार्ता सिद्धान्त र नेपाली सन्दर्भ, आदर्श नेपाली व्याकरण, राजवंशी परिचय, केही
साधक केही साधना जस्ता नेपाली साहित्यका गहकिला पुस्तकहरू प्रकाशन भएका छन् । नेपाली, अंग्रेजी, हिन्दी, बंगाली, असामी,
राजवंशी र संस्कृत भाषाका ज्ञाता समेत रहनु भएका पौडेलको नेपाली माटोको प्रेम अमर छ। उहाँ आर्य सभ्यताको पहिचान वैदिक
विधि अनुशरणमा प्रतिबद्ध हुनु हुन्थ्यो । आदिम् ग्रन्थ वेद विद्याले बताएको यज्ञ कर्ममा विश्वास राख्ने अध्यक्ष पौडेलको आत्मा अमर
रहोस् भन्ने कामना गर्दै हार्दिक श्रद्धाञ्जली अर्पण गर्दछौं।

शोकमा रहनु भएकी अध्यक्ष पौडेलकी धर्मपत्नी मिरा पौडेल छोरा/बुहारी यशवन्त/परिना, छोरी ज्वाई योगिता/पंकज भूर्तेल र
यवनिका/सुवोध पाण्डे लगायत पौडेल परिवारमा शोक सहनको शक्ति प्राप्त होस् भन्ने ईश्वरसँग प्रार्थना गर्दछौं।

पूर्वअध्यक्षहरू :-दाताराम घिमिरे, शालिग्राम आचार्य, संरक्षक- हरिप्रसाद घिमिरे सल्लाहकारहरू :चेतनाथ घिमिरे/उद्धवप्रसाद पराजुली
आचार्य- कमलाकान्त आत्रेय/नित्यानन्द पाठक/नवीन पाठक संचालक समिति सचिवः- द्रोण अधिकारी संचालक कोषाध्यक्ष- हाल
जिल्ला समन्वय समिति उप-प्रमुख - मिना घिमिरे(पराजुली)सदस्यहरू :दिपेन्द्र भट्टराई, प्रशोत्तम कार्की,प्रवीन अधिकारी,अश्विन खनाल

एवम्

**वैदिक समाज नेपाल, झापा, परिवार, भद्रपुर-१०,चन्द्रगढी,झापा**

"श्रद्धाञ्जली
स्व. द्रोण कुमार पौडेललाई"

जन्म :
२००६/०३/०५

मृत्यु :
२०७६/१०/१५

स्व. द्रोण कुमार पौडेल

प्यारा भाई म द्रोणको स्मरणमा अन्त्यन्त विह्वल वनी,
लेख्तै यो समवेदना कठिनले पक्रें अहो ! लेखनी,
हुर्क्यौ बालक कालमा सँग सँगै आसामको राज्यमा ।
तिम्रो जन्म भयो त्यहीं त बटियामारी ठुलो गाउँमा ।।१।।

शिक्षा उच्च लियौ त्यहीं बसि बढ्यौ माता पिता साथमा,
आयौ जागिर निम्ति सम्फि जननी नेपालको कामखा ।
दिङ्ला भोज्पुर बाट वास सरदै शिक्षा लिने हेतुमा ॥
श्रीगङ्गाधर पुग्नु भो बहकिदै आसाम दरं राज्यमा ।।२।।

वाहाकै सुत माइला हुनुभयो शास्त्री टिकारामनै,
भो उन्का सँगमा विवाह विधिले श्री भोजमाया सँगै ।
जन्म्यौ भै पहिला सुसन्तति तिमी आसाम राज्यै महाँ ॥
हाम्रो भेट भयो म मावलतिरै वस्थैं त्यसै ठाउँमा ।।३।।

भै प्राध्यापक काठमाण्डु पहिले श्रीपद्मकन्या महाँ,
पायौ जागिर स्थान अन्तर हुदै आएर मेची महाँ ।
मेची क्याम्पसमा समाहित हुदै प्रा.डा. भई नित्यनै ॥
त्याहीं बाट भयौ निवृत्त सबको सम्मान पाई तिमी ।।४।।

पत्नी योग्य मिरा सुशिक्षितसँगै ज्यादै उज्यालो घर,
छोरा श्रीयशवन्त साथ परिना सेवामहाँ तत्पर ।
छोरीज्वाइँ र नाति नातिनिहरु तिम्रा थिए साथमा ॥
छाडी आज गयौ कता शिव हरे ! एक्लै तिमी स्वर्गमा ।।५।।

यौ यौटा पछुतो मलाइ रहिगो पाईन भेटै हरे !
बाँचुञ्जेल थियौ खुवैप्रियतिमी निष्ठूर भो काल रे ।
यै नै हो विधिको विधान सबको पर्खन्न त्यो कालले ॥
जानेकै छ तथापि यो मन कहाँ थामिन्छ है शोकले ।।६।।

यो शोकाकुलका विपत्ति विचमा थामेर आफ्नो मन,
धैर्यधारण गर्नलाई प्रभुले सामर्थ्यता राखन ।
पत्नी पुत्र समेत बान्धवमहाँ राखुन् दया ईशले ॥
मेरो यो समवेदना छ सबमा श्रद्धा र सत्स्नेहले ।।७।।

यो आत्रेय पवित्र वंश विचमा जन्मेर सामर्थ्यले,
गर्दै पौरख नित्य शिक्षितभई आजन्म सौहार्दले ।
जाउ स्वर्ग पवित्र भै अब तिमी हे ! भाइ ! द्रोण अहो ॥
श्रद्धाको म चढाउँदै सुमन यो श्रद्धाञ्जली दिन्छु यो ।।८।।

प्रस्तोता : मित्रप्रसाद दाहाल,
कनकाई नगरपालिका-३, सुरुङ्गा,
सम्पर्क : ०२३-५५००६६

---

भाका भुल दया क्षमा र ममता सन्तोष जान्दैन त्यो ।
इन्दै विन्ति गरुन् झुकेर पदमा त्यो विन्ति मान्दैन त्यो ।।
थुप्रोमा उधिनी मिठो र नमिठो रोजेर छाड्दैन त्यो ।
आयो तप्प टिप्यो लग्यो मिति पुग्यो टारेर टर्दैन त्यो ।।

हार्दिक श्रद्धाञ्जली

जन्म
वि.सं. २००६।०३।०५

स्वर्गारोहण
वि.सं. २०७६।१०।१५

स्व. द्रोणकुमार उपाध्याय पौडेल

हार्दिक समवेदना

भोजपुर जिल्ला दिङला गढीगाउँ हाल षडानन्द नगरपालिका वडा नं. ७ बाट आफ्ना हराउनु भएका पिताजीको खोजीमा आफ्नी आमालाई साथमै लिएर असम (भारत) दरंगा जिल्लाको बटियामारीमा जानु भएका डा. द्रोणकुमार उपाध्यायका हजुरबुबा पं. गगाधर उपाध्याय पौडेल त्यसपछि नेपाल फर्कनु भएन । असमको शैक्षिक विकासमा वहाँले पुऱ्याउनु भएको योगदानको कदर स्वरुप असम सरकारबाट सम्मानित समेत हुनुभयो । यस्तो शैक्षिक वातावरणमा पिता टिकाराम शास्त्री पौडेल आमा भोजमाया पौडेलका जेठा छोराका रुपमा २००६ साल असार ५ गते जन्मनु भएका डा. द्रोणकुमार उपाध्यायको असम नौगाउँ निवासी पिता गणेशचन्द्र खनाल माता दमयन्ता खनालकी जेठी छोरी मिरादेवी खनालसंग २०३४ सालमा विवाह भई १ पुत्र दुई पुत्रीका पिता असममा उच्च अध्ययन गरी पद्मकन्या क्याम्पस काठमाडौंमा अध्यापन पश्यात मेची बहुमुखी क्याम्पस भद्रपुरमा लामो समय अध्यापनको क्रममा सहायक क्याम्पस प्रमुखको जिम्मेवारी वहन गरी सक्नु भएका भाषासेवी, ७ भाषाका ज्ञाता, ७ कृतिका जन्मदाता, लोक साहित्यमा विद्यावारिधि गर्नु भएका, विभिन्न संघ संस्थामा संलग्न यस पुस्तकालयका पूर्व सभापति भद्रपुर नगरपालिका वार्ड नं. १० मैत्री टोल निवासी डा. द्रोणकुमार उपाध्याय पौडेलको यहि २०७६ साल माघ १५ गते ७१ बर्षको उमेरमा परमधामगमन भएकोमा लेखनाथ पुस्तकालय परिवार दुःखित एवम् स्तब्ध भएको छ ।

यस दुःखको घडीमा रहनु हुने पत्नी मिरादेवी पौडेल, छोरा बुहारी यशवन्त+परिना, छोरी ज्वाईंहरु योगिता+पंकज भुर्तेल, भवनिका+सुवोध पाण्डे, नाति नातिनीहरु लगायत इष्टमित्र, कुलकुटुम्ब, घरछिमेकमा पर्न गएको शोकप्रति समवेदना प्रकट गर्दै दिवङ्गत आत्माको चिर शान्तिको कामना सहित भावपूर्ण श्रद्धाञ्जली अर्पण गर्दछौं ।

हरिकिशोर आचार्य
सचिव

नवराज घिमिरे
अध्यक्ष

एवम्
लेखनाथ पुस्तकालय परिवार

Chitrashala Flex Print Chandragadi, 023-455495

*(विभिन्न संघसंस्थाबाट समवेदना/ सहानुभूति प्रकट भए पनि यहाँ प्रतिनिधिमूलक रुपमा समावेश गरिएको छ)*

